त्रिभुवन विश्वविद्यालय
नेपाल र एशियाली अध्ययन संस्थानको
ऐतिहासिक सामग्री माला–६

# लिच्छविकालका अभिलेख

[अनुवाद, ऐतिहासिक व्याख्यासहित]

ग्रन्थकार–
**धनवज्र वज्राचार्य**

प्रकाशक–
**नेपाल र एशियाली अध्ययन संस्थान**
**त्रिभुवन विश्वविद्यालय**
काठमाडौं नेपाल

प्रकाशक–

नेपाल र एशियाली अध्ययन संस्थान

त्रिभुवन विश्वविद्यालय

कीर्तिपुर

प्रकाशन मिति–२०३० आषाढ

प्रकाशित प्रति–१०००

मूल्य-- 110 00

मुद्रक–

जोरगणेश प्रेस प्रा. लि.

बालाजु औद्योगिक क्षेत्र, काठमाडौं

# विषय-सूची

*प्रस्तावना-*

*वक्तव्य-*

पृष्ठ

पृष्ठ

पृष्ठ

# प्रस्तावना

प्रस्तुत कृति त्रिभुवन विश्वविद्यालय, नेपाल र एशियाली अध्ययन संस्थानसित श्रीधनवज्र वज्राचार्यले गर्नुभएको अनुसन्धान-सम्झौता अन्तर्गत तयार गरिएको रचनाको पहिलो खण्ड हो। यो लिच्छवि-शिलालेखहरूको संगालो आजसम्म प्रकाशित संकलनमा सबैभन्दा ठूलो छ। प्रकाशन मितिसम्म पाइएका सबै शिलालेखहरू यसमा समावेश गरिएका छन्। यस अतिरिक्त यसको नवीनता केवल मूल पाठमा मात्र नभई शिलालेखहरूको अनुवाद, व्याख्या रहनुमा पनि छ। संस्कृत मूलको यथेच्छ मात्रामा अनुवाद नपाइंदा यस भाषाका अनभिज्ञ नेपाली इतिहासकारहरूलाई केही अप्ठ्यारो भइराखेको थियो; जुन अब धेरै मात्रामा कम हुनेछ भन्ने आशा लिइन्छ।

यसको निर्माणमा श्रीधनवज्रको ठूलो परिश्रम परेको छ भन्नु केवल तथ्यलाई स्वीकार्नु मात्र हुन्छ। लिच्छवि इतिहासको खोजी, संशोधन र प्रामाणिक रचना गर्नमा उहाँको जति योगदान अरू विरलै मानिसको होला। यसमा उहाँले धेरै ठाउंमा आफ्नै प्रकाशनको अथवा अरूले गरेको पाठको शुद्धि गर्ने सफल प्रयास गर्नुभएको छ। संस्थानले नेपाली इतिहासमा यस्तो आधारभूत ग्रन्थलाई प्रकाशन गर्न सकेकोमा बडो हर्ष अनुभव गर्दछ। संस्थानलाई यस प्रकाशनको केही अभावहरू अनुभव नभएको पनि होइन। यी शिलालेखहरूको फोटो प्रतिलिपि पनि प्रस्तुत गर्न सकेको भए यसको उपयोगिता चार गुना बढ्थ्यो होला। तर यो ज्यादै खर्चिलो पनि र यस शीपको यहाँका प्रेसहरूमा राम्रो विकास भइनसकेकोले संस्थानले यस दिशामा आँट नगरेको हो।

संस्थानका उद्देश्यहरूमा नेपाल अध्ययनका विभिन्न पक्षहरूमा अनुसन्धान गराउने, अनुसन्धानका नतीजाहरू प्रकाशित गर्ने र त्यसबाट नेपालको सांचो चित्र विश्व समक्ष राख्नु नै मुख्य हुन्। आजसम्म गरिएका प्रकाशनहरू त्यसै ध्येयबाट प्रेरित छन्। निकट भविष्यदेखि इतिहाससम्बन्धी प्रकाशनबाहेक अन्य राजनैतिक, सामाजिक, आर्थिक, भाषिक प्रकाशनहरू पनि निस्कंदै जानेछन्। संस्थानमा आएर अन्वेषण-योजना बनाउने र अन्वेषण गर्ने शिक्षक वा अन्य सबै व्यक्तिहरूलाई यस संस्थान स्वागत गर्दछ।

**डा. प्रयागराज शर्मा**
डीन
ने. ए. अ. सं.

मिति-२०३०।३।१०।१

# वक्तव्य

हाम्रो देशको इतिहासमा लिच्छविकालको विशेष स्थान रहेको छ। जनहितलाई बढी स्थान दिने शासनव्यवस्था, संघट्टित जनजीवन, राम्रो आर्थिक अवस्था, उठेको विद्याको तह, कलाको विकास आदि कुराले गर्दा लिच्छविकाल निकै गौरवमय रहेको छ। अर्को कुरा–नेपाली सभ्यता, संस्कृतिको जग निकै अंशमा यसै वेला कायम भएको हामी पाउँछौं। यस कारण लिच्छविकालको इतिहास हामीले सकभर प्रामाणिक र विस्तृत रूपमा तयार गर्नुपरेको छ।

लिच्छविकालको इतिहास तयार गर्ने मुख्य सामग्री त्यस वेलाका अभिलेखहरू नै हुन्। चीनिया ताङवृत्तान्त आदि र संस्कृतवाङ्मयमा छरिएर रहेका केही फाटफुट सामग्री पनि नपाइने होइन। तर ती थोरै छन्। यसैले मुख्य सामग्री त लिच्छविकालका राजा तथा प्रजाले राखेका अभिलेखहरू नै हुन् भनी मान्नुपरेको छ। त्यस वेलाका अभिलेखहरूमध्ये निकै अभिलेख सनदपत्ररूपका छन्। तिनमा लिच्छविकालका शासकहरूले जनताको हितको लागि गरेका सुधारहरू परेका छन्। यसो हुँदा तात्कालिक कुरा बुझ्न ती अभिलेख ज्यादै उपयोगी छन्।

वंशावलीको रूपमा, माहात्म्यको रूपमा हाम्रो यहाँ उहिले केही अंशमा इतिहास लेखाउने चलन थियो। तर अभिलेख आदि ऐतिहासिक सामग्री केलाएर प्रामाणिक रूपमा इतिहास लेख्ने लेखाउने चलन भने थिएन। उदाहरणार्थ गोपालराजवंशावलीलाई देखाउन सकिन्छ। त्यस वंशावलीमा प्राचीन कालदेखिको संक्षिप्त इतिवृत्त दिने प्रयत्न गरिएको छ। तर अभिलेख आदि ऐतिहासिक सामग्रीको अध्ययन नगरी अनुश्रुतिको भरमा लेखिएको हुँदा गोपालराजवंशावलीको प्राचीन कालसम्बन्धी वर्णन त्यति प्रामाणिक हुन सकेको छैन। पशुपतिनाथ, चांगुनारायण आदि प्रसिद्ध देवस्थलमा सबैले देखिने गरी रहेका लिच्छविकालका शिलालेख मात्र यसो एकचोटि पढी लेखिएको भए पनि लिच्छविकालका निकै कुरा त्यसमा वास्तव रूपमा रहने थिए। प्राचीन लिपि नचिन्हिएर त्यसो भएको होइन। हाम्रो यहां गुप्तलिपिदेखि नेवारी लिपिसम्मको अभ्यास लिपिकर, पण्डितहरूले अस्तिसम्म पनि गर्दै आइरहेका थिए। परन्तु वैज्ञानिक ढङ्गले इतिहास पढ्ने पढाउने पद्धति नभएको हुनाले यस विषयमा हाम्रा पुर्खाहरूको दृष्टि नै गएको थिएन।

यसो हुनाले लिच्छविकालका अभिलेख खोजी पढी त्यस वेलाको इतिहास तयार गर्ने काम शुरू भएको एक शताब्दी पनि पूरा भएको छैन। वि. सं. १९३७ मा भारतका पं. भगवान्लाल इन्द्राजीले नेपाल आई लिच्छविकालका १५ वटा अभिलेख प्रकाश गराए। यही समयदेखि नै यस क्षेत्रमा

खोजीको बाटो खुल्यो । यसको ६ वर्षपछि बिलायतका प्राध्यापक सेसिल बेण्डालले अरू ४ वटा लिच्छविकालका अभिलेख प्रकाश गरे । यसपछि फ्रान्सका प्राध्यापक सिल्भां लेभीले यस क्षेत्रमा निकै महत्त्वपूर्ण काम गरे। वि. सं. १९६५ मा उनले २१ वटा लिच्छविकालका अभिलेख व्याख्यासहित छपाए । यसपछि केही काल यस क्षेत्रमा अन्वेषणकार्य सुस्त रह्यो। तर यस बीच एउटा राम्रो लक्षण देखापऱ्यो। अब नेपाली विद्वान्हरूको दृष्टि यता आकृष्ट हुन थाल्यो। तिनमा ऐ.शि. बाबुराम आचार्य, श्रीगुरु पं.नयराज पन्त प्रमुख हुनुहुन्छ । त्यस वेलाको राजनैतिक अवस्थाले गर्दा नेपाली विद्वान्हरूलाई यस्तो खोजीनीतिमा हात हाल्नु खतरा मोल्नु जस्तै थियो । तर उहांहरू सुरुसुरु सक्दो अन्वेषण, अध्ययन गर्दै अगाडि बढ्नुभयो । विशेष गरेर लिच्छविकालका अभिलेख-हरूको अन्वेषण अध्ययनमा श्रीगुरु पं. नयराज पन्तज्यू अघि बढ्नुभयो र यस विषयको संकलन प्रकाश गर्ने तयारी पनि उहांबाट हुँदै थियो । तर यसका लागि २००७ सालअगाडि कुनै मौका उहांलाई मिलेन ।

वि. सं. २०१० मा योगी नरहरिनाथ, पं. बुद्धिसागर पराजुलीहरूको प्रयासले 'संस्कृत–सन्देश' नामक इतिहासप्रधान मासिक पत्रिका निस्क्यो। यसमा लिच्छविकालका केही अभिलेखहरू प्रकाशित भए । यसै वेलादेखि लिच्छविकालका अभिलेखहरू खोज्ने, चिन्तन मनन गर्ने काम मैले पनि गर्न थालें । यसै ताका (वि. सं. २००९ देखि) श्रीगुरु पं. नयराज पन्तको नेतृत्व र निर्देशनमा इतिहास–संशोधन गर्ने काम म र मेरा साथीहरूले गर्न थाल्यौं । अशुद्धिहरूलाई प्रामाणिक रूपमा शुद्धयाउनुका साथसाथै नयां नयां अभिलेख आदि ऐतिहासिक सामग्रीहरू पत्ता लाउने, पढ्ने आदि काम हुन थाले ।

यसै बीच उता रोमबाट प्राध्यापक जिशेप टुचीको नेतृत्वमा नेपालको इतिहाससम्बन्धी प्रकाशन निस्कन थाले। वि. सं. २०१३ मा डा. रेनिइरो नोलीले 'नेप्लिज् इन्स्क्रिप्शन्ज् इन् गुप्त क्यारेक्टर्ज्' नामले ६२ वटा लिच्छविकालका अभिलेखहरूको मूल पाठ र संक्षिप्त परिचयसहितको एक ग्रन्थ निकाल्नुभयो। पूर्ववर्ती विद्वान्हरूले पढेका पाठ शुद्धयाउने काम र ३९ वटा अप्रकाशित अभिलेख प्रकाशमा ल्याउने सफल प्रयास त्यसमा गरिएको छ । तर नेपाली विद्वान्हरूले छपाइसकेका केही अभिलेखलाई अप्रकाशित भनी भन्ने केही अनुदारता पनि त्यसमा रहेको छ । जे होस्, नोलीको उक्त ग्रन्थ निस्केपछि लिच्छविकालका अभिलेखहरू खोज्ने पढ्ने प्रकाश गर्ने क्षेत्रमा सन्तोषजनक प्रगति हुन थाल्यो । यसपछि वि. सं. २०१५ मा अमेरिकाका टामस ओ. ब्यालिन्जरद्वारा ५ वटा लिच्छविकालका अभिलेखका चित्रप्रतिलिपि छापिए । संशोधनमण्डलमार्फत हामीहरूले 'अभिलेख–संग्रह' 'पूर्णिमा' हरूमा प्रशस्त लिच्छविकालका अभिलेखहरू प्रकाशमा ल्यायौं । लिच्छविकालका राजनैतिक, लौकिक, धार्मिक आदि विविध पक्षलाई लिई पूर्णिमामा मैले लगातार निबन्धहरू प्रकाश गर्न थालें । गौतमवज्र वज्राचार्य पनि यस क्षेत्रमा अघि बढे । साथै यस बीच योगी नरहरिनाथ, श्रीहेमराज शाक्य आदिबाट पनि केही लिच्छविकालका अभिलेख प्रकाशमा आए ।

यता त्रिभुवनविश्वविद्यालयमा 'नेपाल अध्ययन संस्थान' को स्थापना भएपछि यस क्षेत्रमा विश्वविद्यालयले विशेष दृष्टि दिन थाल्यो । नेपालको इतिहास, संस्कृति आदि विविध विषयको अध्ययनको लागि योजना बन्न लागे । नेपाल–उपत्यकाको साथै उपत्यकाबाहिर पनि सर्वेक्षण थालिए । गोरखा, टिस्टुङ्ग चितलाङ्ग आदि ठाउँमा प्रयोगात्मक रूपमा गरिएका सर्वेक्षण उपयोगी रहे । यसबाट उपत्यकाबाहिर पनि लिच्छविकालका अभिलेख केही पाइए । संस्थानले गरेको यस्तै प्रयत्नको परिणामस्वरूप यो ग्रन्थ तयार भई प्रकाशमा आएको छ। भविष्यमा अझ बढी योजनात्मक ढङ्गले नेपालसम्बन्धी अध्ययन गर्नेबारे संस्थान सचेष्ट छ।

छरिएर रहेका लिच्छविकालका अभिलेख पत्ता लाउनु नै पहिले गाह्रो हुन्छ; असुरक्षित अवस्थामा रहेका हुनाले प्रायः खिइएको, खण्डित रूपमा लिच्छवि अभिलेख पाइने हुन्छ; यसो हुनाले पाइएका अभिलेखको पाठ पढ्ने काम त्यतिकै परिश्रमसाध्य हुन्छ; पाठ पढेपछि तिनको अनुवाद गर्ने र ती अभिलेखबाट तात्कालिक इतिहासमा प्रकाश पार्ने काम पनि सजिलो हुँदैन; यसका लागि निकै अध्ययन, चिन्तन मननको आवश्यकता पर्छ । यस ग्रन्थमा मैले अभिलेखहरूको शुद्ध पाठ पढ्नामा, पूर्ववर्ती विद्वान्ले पढ्ने नसकी खाली छोडेको ठाउँ भर्नामा विशेष प्रयास गरेको छु । यसमा मलाई निकै सफलता पनि मिलेको छ । भगवान्लाल, वेण्डाल, लेभीहरूका पाठमा भएका अन्तरलाई नोलीले देखाइसक्नुभएको हुँदा नोलीका पाठमा भएका अन्तरलाई मात्र यसमा 'पाठान्तर' का रूपमा दिइएका छन् । प्रकाशित अभिलेखको पाठ शुद्धयाउनुबाहेक नयां अभिलेख प्राप्त गर्नमा पनि उल्लेखनीय सफलता प्राप्त भएको छ । वि. सं. २०१३ मा नोलीले संकलन छपाउँदा ८२ वटा अभिलेख मात्र पर्न सकेका थिए। अब अभिलेखको संख्या १८० जति पुगेको छ।

अभिलेखको अनुवाद यथार्थ रूपमा होस् भन्ने प्रयास पनि यहां गरिएको छ । संस्कृतसन्देश पूर्णिमा आदिमा प्रकाशित भइसकेका केही अभिलेखका अनुवादचांहि आवश्यक सुधार गरी त्यतैबाट यहां दिइएका छन् । लिच्छविकालका अभिलेखमा धेरै पारिभाषिक शब्दहरू परेका छन्। तिनको शब्दानुवाद मात्रले कुरा खुल्न सक्तैनन्। यसका लागि विशेष व्याख्याको आवश्यकता छ । साथै अभिलेखमा परेका एक एक विषय केलाई तिनबाट तात्कालिक इतिहासमा प्रकाश पार्ने कामको लागि पनि व्याख्याको आवश्यकता छ । यसो हुनाले यसमा ऐतिहासिक व्याख्या पनि समावेश गरेको छु। व्याख्या अनेक रूपमा गर्न सकिन्छ। तर यहां तात्कालिक इतिहासका राजनैतिक, लौकिक,धार्मिक आदि विविध पक्षमा प्रकाश पार्ने उद्देश्यले व्याख्यालाई मैले बेग्लै शैलीमा ढालेको छु। मूल प्रमाण दिई दिई विवेचना गर्ने यो शैली उपयोगी हुनेछ भन्ने मलाई लागेको छ।

सांच्चै भनूं भने मेरो बीस वर्षजतिको अन्वेषण, चिन्तन मननको निष्कर्ष यस ग्रन्थमा परेको छ। विद्वान्हरूबाट यस ग्रन्थको निष्पक्ष रूपमा मूल्याङ्कन हुने नै छ भन्ने मलाई आशा छ।

अन्त्यमा मैले धेरै व्यक्तिप्रति कृतज्ञताज्ञापन गर्नु छ । सर्वप्रथम यस क्षेत्रमा बाटो देखाउने

पं. भगवान्लाल, प्रा. बेण्डाल, प्रा. लेभी. ऐ. शि. बाबुराम आचार्य, श्रीगुरु पं. नयराज पन्त, डा. नोलीप्रति म कृतज्ञ छु। उहांहरूले तयार पारेको बाटोबाट अघि बढी म यहांसम्म पुग्न सकेको हुँ। अनि नयां नयां अभिलेख पत्ता लाउने तथा अरू अनेक किसिमले मलाई मदत गर्ने भतिजा गौतमवज्र वज्राचार्यप्रति म कृतज्ञ छु। साथै श्रीहेमराज शाक्य र ऐश्वर्यधर शर्माले पनि केही नयां अभिलेख मलाई देखाइदिनुभएको छ। अभिलेखहरूको पाठ शुद्ध्याउने काममा श्रीशङ्करमान राजवंशीबाट पनि केही मदत पाएको छु। अतः उहांहरूप्रति पनि म आभारी छु।

शोध, खोजको क्षेत्रमा विश्वविद्यालयले विशिष्ट देन दिन सकोस् भनी चाहनुहुने त्रि.वि.का उपकुलपति डा. त्रैलोक्यनाथ उप्रेतीज्यू, शिक्षाध्यक्ष श्रीसूर्यबहादुर शाक्यज्यूप्रति यस अवसरमा म कृतज्ञताज्ञापन गर्न चाहन्छु। साथै संस्थानका डीन डा. प्रयागराज शर्माज्यूप्रति पनि आभारी छु। यस ग्रन्थलाई बढी उपयोगी बनाउने केही सुझाव उहांबाट पाएथें तथा यस ग्रन्थलाई प्रकाशमा ल्याउने तत्परता पनि उहांबाट भएथ्यो।

यस किसिमको ग्रन्थको आवश्यकता छ भनी महसूस गरी सर्वप्रथम यसबारे कदम उठाइदिनुहुने इतिहासविभागका प्रमुख श्रीमाधवराज पाण्डेज्यूप्रति पनि यस अवसरमा म कृतज्ञता प्रकट गर्दछु। अनेक किताब दिई सहयोग गर्नुभएकोमा डा. जगदीशचन्द्र रेग्मीप्रति धन्यवाद ज्ञापन गर्न चाहन्छु। केही अभिलेखको पाठ शुद्ध्याउन जांदा साथ दिनुभएको श्रीटेकबहादुर श्रेष्ठलाई पनि धन्यवाद छ।

२०३०।३।१०।१

**—धनवज्र वज्राचार्य**

# चाबहिलको अभिलेख

चाबहिलको प्रसिद्ध बुद्धचैत्यको सामुन्ने पश्चिमपट्टि बत्ती बाल्न राखिएका दुइ साना स्तम्भ छन्। तिनमा दायाँतिरको स्तम्भ अड्याउन एउटा ढुङ्गा घोप्ट्याएर राखिएको छ। निहुरेर तलतिर-बाट हेर्दा सो ढुङ्गा कुनै देवमूर्तिको फुटेको कमलाकार आसनको भाग हो भन्ने देखिन्छ। सोही ढुङ्गामा यो अभिलेख कुँदिएको छ।

खण्डित भई आधा जति भाग मात्र बाँकी रहेको हुँदा यो अभिलेख अपूरो छ। यसको अहिले अभिलेख कुँदिएको भाग २३ अङ्गुल लम्बा, ७ अङ्गुल चौडा छ।

'अभिलेख संग्रह' ९ भागको १८ पृष्ठमा संशोधन–मण्डलद्वारा यो छापिएको छ* ।

## मूलपाठ

१. दुर्द्धरैरिन्द्रियैः कृत्स्ना वाह्यते यैरियम्प्रजा
दासवत्तानि सन्धार्य कृपयापरिपीडच ता दानशील...
२. सम्प्राप्यानुत्तरं ज्ञानं प्रजा दुःखात्प्रमोचिता
प्रमोच्य सर्व्वदुःखेभ्यो योसौ शान्तम्पदङ्गतः म...
३. सञ्छिन्द्य सुचिरङ्कालम्भवनम्भवविच्छिदः
किन्नरीजातकाकीर्णन्नानाचित्रविराजितम् श्री...

---

* रामजी तेवारी, देवीप्रसाद भण्डारी, भोलानाथ पौडेल, शङ्करमान राजवंशी, धनवज्र वज्राचार्य गौतमवज्र वज्राचार्य महेशराज पन्त, नयनाथ पौडेलद्वारा 'अभिलेख–संग्रह' सम्पादित भएको हो।

४. चत्वारिंशत्सपञ्चेह यत्र धान्यस्य मानिकाः
वर्षे वर्षेथ जायन्ते क्षेत्रन्तत्तादृशन्ददौ ...
५. भूयः सङ्घस्य भक्तार्थं पूजार्थञ्च महामुनेः
क्षेत्रन्दत्तन्तया यत्र ह्यष्टाविंशतिमानिकाः ...
६. विचित्रं देयधर्म्मम्मे कारयित्वेह यच्छुभम्
स्त्रीभावं हि विराग्याहं पुरुषमत्वमवाप्य च शोककाममया...
७. ...... माघवर्षे काले आषाढशुदिव १० अस्यान्दिवसपूर्व्वा-
याम्भट्टारकमहाराजश्री...

## अनुवाद

कज्याउन गाह्रा जुन इन्द्रियहरूले सारा दुनियाँलाई दबाइराखेका छन्; ती इन्द्रियहरू दासलाई जस्तै कब्जामा राखेर, दुनियाँलाई चाहिं दुःख नदिई, दया गरी दानी…जसले अनुत्तरज्ञान पाई दुनियाँलाई दुःखबाट छुटाए। सबै दुःखबाट छुटाएर जो उनी शान्त पदमा पुगे;……मोक्ष दिने तिनको (भगवान् बुद्धको) किन्नरीजातकका कुरा कुँदिएको, अनेकथरी चित्रले सुहाएको यो चैत्य धेरै कालसम्म कष्ट गरी बनाइएको हो।

वर्षेनी ४५ मानिका धान (कुत) आउने खेत यहाँ गूठी राखिएको छ। फेरि सङ्घलाई भोजन गराउन र महामुनि (भगवान् बुद्ध) को पूजा गर्न अठ्ठाइस मानिका कुत आउने खेत दान दिइयो।

यो अनौठो दान–धर्म गरेर मलाई जो पुण्य भएको छ; त्योद्वारा मैले स्त्रीत्व छोडी पुरुषत्व पाई दुःख–सुखरूपी......

......माघवर्षकालमा, आषाढ शुक्ल दशमीमा। यस दिन भट्टारक (गद्दीनशीन) महाराज श्री......(को विजयराज्यमा)

**व्याख्या—**

**अभिलेखको समय—**

यो अभिलेख खण्डित छ। यसो हुनाले संवत्‌को अङ्क अहिले देखिदैन। भट्टारकमहाराजश्री.. सम्म पुगेपछि फुटेको हुनाले राजाको नाम पनि थाहा पाइँदैन। यस कारण यस अभिलेखलाई कहाँनिर राख्ने भन्ने प्रश्न उठ्तछ। यसको समाधान गर्ने मुख्य आधार यस अभिलेखको लिपि हुन आएको छ।

अहिलेसम्म पाइएका लिच्छविकालका अभिलेखमा संवत्सहितको पहिलो अभिलेख मानदेवको चाँगुको स्तम्भलेख हो । त्यसको लिपि र यसको लिपिको तुलना गरी हेर्दा यो अभिलेख चाँगुको स्तम्भलेखभन्दा अलि पुरानो देखिएको छ * ।

प्रचलित वंशावलीमा राजा वृषदेवको पालामा चाबहिलको चैत्य बनेको हो भन्ने वर्णन परेको छ†। यस अभिलेखमा 'सङ्खिद्य सुचिरङ्कालम्भवनम्भवविच्छिदः = धेरै कालसम्म कष्ट गरीकन चैत्य बनाइएको छ' भन्ने उल्लेख परेको छ। यताबाट निकै ठूलो चैत्य बनाइएको थियो भन्ने संकेत पाइन्छ। यस अभिलेखमा उल्लिखित चैत्य चाबहिलको प्रसिद्ध चैत्य नै हो भन्ने कुरा प्रसङ्ग विचार गर्दा थाहा पाइन्छ ।

यताबाट यो अभिलेख वृषदेवको पालाको हो कि भन्ने मलाई लागेको छ। यसै हुँदा यो अभिलेख यहाँ सबभन्दा माथि राखिएको हो ।

यो अभिलेखको समय–निर्णय गर्ने एउटा आधार अझै बाँकी रहेको छ । यसमा उल्लिखित माघवर्षे काले आषाढशुदिव १०'यस वचनको आधारमा गणना गरी हेर्न सके यसको समय–निर्णय हुने सम्भावना छ। "माघवर्ष काल' आदि लेख्ने चलन मानदेव यता देखिएको छैन। यसबाट पनि यो अभिलेख मानदेवभन्दा केही अघिको हो भन्ने संकेत पाइन्छ ।

## बुद्धस्तुति–

बौद्ध धर्ममा र अरू धर्ममा पनि 'इन्द्रियनिग्रह'को आवश्यकताबारे धेरै चर्चा गरिएको पाइन्छ । ठूलो काम गर्न चाहने पुरुषले पहिले 'इन्द्रियनिग्रह' गर्नुपर्छ आदि उपदेश दिइएको पाइन्छ। यसै भावनाअनुसार यस अभिलेखको उठानमा इन्द्रियलाई वशमा पारी दुनियाँलाई सुख दिई जाने कुनै महासत्त्वको प्रशंसा गरिएको छ । खण्डित हुँदा कुरा अलि स्पष्ट छैन तापनि 'भवविच्छिद्' 'महामुनि' आदि शब्दको प्रयोग यहाँ भएको हुनाले भगवान् बुद्धलाई लक्ष्य गरी स्तुति गरिएको हो भन्ने बुझिन्छ ।

## दासप्रथा–

इन्द्रियनिग्रहको प्रसङ्गमा यहाँ 'दासवत्तानि सन्धार्य' इन्द्रियलाई दास जस्तो बनाएर भन्ने

---

* अभिलेखका प्रतिलिपि परिशिष्ट रूपमा पछि दिइनेछन्।

† "यी राजा (वृषदेवले) यथाकर्मले गरी बनाई मञ्जुबहाल भनी चाबहिल नाम देश बनाया, त्यसै दिनदेखि धंदोचैत्य भनी नाम प्रख्यात हुन भयो।"

(पुरातत्त्वविभागद्वारा प्रकाशित 'भाषावंशावली' को ५६ पृष्ठ)

मध्यकालमा चाबहिल–चैत्य 'धंदोचैत्य' नामले प्रसिद्ध थियो । त्यहांका शिलालेखहरूमा पनि यही नाम दिइएको पाइन्छ ।

उल्लेख परेको छ। यसबाट लिच्छविकालमा 'दासप्रथा' थियो भन्ने कुरा अलि घुमाउरो किसिमबाट थाहा पाइन्छ। नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखमा बीसौं देवदास, देवदासीहरूको उल्लेख आएको छ–

"देवभृत्यानान्दशानामेकतो भुक्तिकाधान्यमानिका १४० दासीनां विंशतीनामेकतो मानिकाशतत्रयं.... देवभृत्यानाम्पुराण १२० दासीनाम्पुराण ८०"

यतिबाहेक लिच्छविकालका अभिलेखमा दाससम्बन्धी अरू उल्लेख पाइंदैन। यसो विचार गर्दा लिच्छविकालमा दासप्रथा प्रचलित थियो तापनि सामान्य रूपमा मात्र थियो; विशेष रूपमा थिएन भन्ने देखिन्छ। ग्रामपाञ्चालीको रूपमा, गोष्ठीको रूपमा संघट्टित भई आवश्यक काम कुरा गर्ने परिपाटी त्यस वेला कायम भएको हुनाले तात्कालिक लौकिक जीवनमा दासहरूको उत्तिको आवश्यकता परेको थिएन। यसै परम्पराअनुसार मल्लकालमा पनि यहाँ दासप्रथा सामान्य रूपमा मात्र रहेको थियो।

## भिक्षुसङ्घ–

बुद्धले आफ्नो धर्म ठीक ठीकसंग चलोस् भनी यसलाई सङ्घको रूपमा चलाएका थिए। यसै हुंदा बौद्ध धर्मानुयायी भिक्षुहरू प्रायः एक्लै रहंदैनथे; केही भिक्षुहरूको जमात मिली सङ्घ खडा गरी रहन्थे। यसै हुँदा विहारैपिच्छे प्रायः एक भिक्षुसङ्घ हुन्थ्यो। अहिलेसम्म पनि बौद्ध–विहारमा एक किसिमको सङ्घ कायमै छ।

यस अभिलेखमा सङ्घको भोजनको लागि केही जग्गा गूठी राखिदिएको कुरा परेको छ। यो सङ्घ चाबहिल–विहारको भिक्षुसङ्घ हो भन्ने देखिन्छ।

उठानका भिक्षुहरू संग्रह गर्दैनथे। दैनिक भिक्षाटनद्वारा नै जीविका चलाउँथे। पछि परिवर्तन भयो। भिक्षुहरूले आफूलाई चाहिने खाना–पानाको केही बन्दोबस्त मिलाउनुपर्ने अवस्था आयो। यसै हुँदा दाताहरूबाट नगद, जिनिस, जग्गाजमीन आदि दान भिक्षुसङ्घले लिन थाल्यो। भारतका अभिलेखहरूमा पनि भिक्षुसङ्घले यसरी जग्गा आदि दान लिन थालेको उल्लेख पाइन्छ। यसले गर्दा भिक्षुसङ्घको अवस्थामा निकै अन्तर ल्यायो।

## 'मानिका'–

यस अभिलेखमा केही 'मानिका' कुत आउने खेत दान दिएको कुरा परेको छ। लिच्छविकालको आर्थिक इतिहाससंग 'मानिका' शब्दको घनिष्ठ सम्बन्ध रहेको छ। यस पारिभाषिक शब्दको अर्थ निश्चित गर्न सके यसबाट लिच्छविकालको आर्थिक कुरा निकै खुल्ने थियो। तर यसको प्रामाणिक अर्थ अझै गर्न सकिएको छैन।

'मानिका' यो शब्दको सादृश्य वर्तमान 'माना' शब्दसंग छ; यसो हुनाले लिच्छविकालमा पनि यसको अर्थ माना भन्ने नै होला भन्ने अनुमान कसैले गरेका छन् । 'खारिक' शब्दले एक खारि (मुरी) बीउ लाग्ने खेत भन्ने बुझाउँछ । 'द्रौणिक' भनेपछि एक द्रोण बीउ लाग्ने खेत भन्ने बुझाउँछ । यसै गरी 'मानिका' शब्दले एक माना बीउ लाग्ने खेत भन्ने बुझाएको होला भन्ने कसैको भनाइ छ । तर अभिलेखहरू केलाई हेर्दा यो कुरा होइन भन्ने देखिन्छ । चाबहिलको यसै अभिलेखबाट पनि उक्त कुरा होइन भन्ने थाहा पाइन्छ । यस अभिलेखमा–

"चत्वारिंशत्सपञ्चेह यत्र धान्यस्य मानिकाः ।
वर्षे वर्षेथ जायन्ते क्षेत्रन्तत्तादृशन्ददौ ।।"

यस्तो उल्लेख परेको छ । यसबाट वर्षेनी ४५ मानिका कुत आउने खेत भिक्षुसङ्घलाई दिइएको थियो भन्ने स्पष्ट छ । अरू अभिलेखबाट पनि यो खुल्छ । उदाहरणार्थ देउपाटनको प्रभुसङ्घको अभिलेखको केही भाग यहाँ उद्धृत गरिन्छ–

"प्रभुकेश्वरस्य क्षेत्राभिलेख्यं यथा प्रङ्प्रिङ्प्रदेशे . . .पञ्चाशतो भूमि ५० पिण्डकं मानिका २२ मैंशिङ्प्रदेशे चत्वारिंशतो भूमि ४० पिण्डकं मानिकाः२० . . . . ."

यहाँ ५० भूमिको २२ मानिका पिण्डक, ४० भूमिको २० मानिका पिण्डक इत्यादि उल्लेख परेको छ । 'पिण्डक' शब्दले कुतलाई बुझाउँथ्यो भन्ने निश्चित छ । यसको चर्चा तल गरिएको छ । यसरी खेत–परिमाण र कुत–परिमाणको भिन्नाभिन्नै उल्लेख भएको हुनाले 'मानिका' शब्द खेतको परिणामलाई बुझाउने शब्द होइन भन्ने स्पष्ट छ ।

अनन्तलिङ्गेश्वरको अभिलेखमा . . 'कुलपतिना देया कार्तिकशुक्लैकादश्याम्मार्गसंस्कारार्थ-न्तण्डुलमानिका ४' भन्ने उल्लेख परेको छ । । ज्ञानेश्वरको अभिलेखमा पनि 'तण्डुलमानिकाद्वयं दातव्यं' भन्ने उल्लेख परेको छ । बाटो सफा पार्न ४ मानिका चामल दिनू, आदि यी उल्लेखबाट 'मानिका' शब्द चामल आदि पदार्थको परिणामलाई बुझाउने शब्द हो भन्ने स्पष्ट थाहा पाइन्छ ।

'मानिका' यो शब्द अलि ठूलै परिमाणलाई बुझाउने शब्द हो । आजभोलिको 'माना' लाई बुझाउने शब्द यो होइन । यो कुरा अभिलेखबाटै थाहा पाइन्छ । जस्तै–

"ततो ग्रामीणैरपि मा राजकोशस्यापचितं भूदिति तत्प्रतिमोचनाय स्वे स्वे ग्रामेधिकरणयोरुभयोः क्षेत्रं दत्तं ग्रामस्य दक्षिणोद्देशे भूमि ४ पिण्डकं शोल्लस्य मा १ कुथेरस्य मा १"

(पार्सिख्यको वसन्तदेवको अभिलेखबाट)

राजकोशलाई हानि नहोस् भनी कुथेर अधिकरणलाई १ मानिका, शोल्ल अधिकरणलाई १ मानिका कुत आउने खेत दिइयो भन्ने उल्लेख यहाँ परेको छ । यदि 'मानिका' शब्द १ मानालाई बुझाउने शब्द भएको भए उपर्युक्त कुरा मिल्ने थिएन । किनभने १ माना धान बढ्नु र घट्नुले राजकोशलाई त्यति असर पर्ने कुरा होइन ।

माथि 'दासप्रथा' प्रकरणमा उद्धृत अनन्तलिङ्गेश्वरको अभिलेखका वाक्यबाट 'मानिका' बारे बुझ्न केही मदत पाइन्छ। त्यहाँ १० देवदासलाई वर्ष दिनसम्म खान जम्मा १४० मानिका धान छुट्याइएको छ तथा २० देवदासीहरूको लागि ३०० मानिका धान छुट्याइएको छ। यसको आधारमा विचार गर्दा 'मानिका' वर्तमान 'मुरी' जतिको परिमाणलाई बुझाउने शब्द हो भन्ने देखिन्छ।

लिच्छविकालपछि पनि मानिका शब्दको प्रचलन थियो। ने. सं. १२५ को निर्भयदेवको पालाको अभिलेखमा 'मानि' शब्दको उल्लेख आएको छ †। यसै गरी अन्त पनि मानिका शब्दको प्रचलन केही भएको पाइन्छ। नेवारी अनुवादसमेत भएका 'मानवधर्मशास्त्र' आदि स्मृति ग्रन्थहरूको छानबीन गर्न सके 'मानिका' शब्दको प्रामाणिक अर्थ खुल्ने सम्भावना छ।

## स्त्रीत्वप्रति हीनता-भावना र किन्नरी जातकको प्रभाव–

लिच्छविकालमा पुरुष र स्त्रीमा भेदभाव गरी विशेष नियम बनेको उल्लेख पाइंदैन। यद्यपि 'त्रिकर'लाई 'स्त्रीकर' मानी आइमाईमाथि लागेको कर यो हो भन्ने सिद्ध गर्ने चेष्टा कसैले गरेका छन्। तर यो सत्य होइन। 'त्रिकर' व्यापक अर्थ राख्ने महत्त्वपूर्ण कर हो भन्ने कुरा अभिलेखबाट स्पष्ट थाहा पाइन्छ। 'भाग' (जग्गाको उब्जनी हेरी ६ भागको एक भाग, आठ भागको एक भाग वा बाह्र भागको एक भागको रूपमा उठाइने पोता) भोग (पाशुपाल्यमा लागेको कर) कर (वाणिज्यमा लागेको कर) यी तीन प्रकारका करलाई 'त्रिकर' भनिएको हो भन्ने कुरा निश्चित जस्तै भइसकेको छ। यस कारण लिच्छविकालमा आइमाईमा कर लागेको थियो भन्ने कुरा सरासर गलत हो।

मालिगाउँको अभिलेखमा विधवा–विवाह गर्ने, पुनर्विवाह गर्ने आइमाईउपर दण्डको रूपमा अलिकता धन लिने कुरा परेको छ। तर यो सामान्य कुरा हो। स्त्रीउपर नियन्त्रण गरेको अथवा उनीहरूलाई दबाएको भाव यताबाट बुझिंदैन। बरु यस अभिलेखबाट त विधवाविवाह, पुनर्विवाह गर्ने कुरालाई कानूनी मान्यता दिई स्वतन्त्रता दिइएको देखिन्छ।

अरू अभिलेखमा पनि स्त्रीउपर भेदभाव गरिएको उल्लेख कतै पाइंदैन।

चाबहिलको यो अभिलेख राख्न लाउने कुनै स्त्री हुन्। कुनै कारणवश यिनीलाई स्त्रीत्वप्रति वैराग्य लागेको भाव यहाँ झल्किएको छ। स्त्रीत्वप्रति विरक्त भएर यिनीले दान–पुण्यको प्रभावले अर्को जुनिमा पुरुष भएर जन्मन पाऊँ भन्ने कामना यस अभिलेखमा व्यक्त गरिएको छ। यो विचित्र कुरो हो। दानधर्म गरेर पुण्य लागोस्, स्वर्गप्राप्ति मोक्षप्राप्ति होस्, धन-सन्तान-आयु–आरोग्यप्राप्ति होस् भनी प्रार्थना गरिएको धेरै पाइन्छ। यस्तो कामना गर्नु सामान्य बुझिने कुरो हो। तर स्त्रीत्व छोडेर पुरुषत्व पाऊँ भन्ने कामना व्यक्त गरिनु अलि अनौठो छ। कुनै कारणवश स्त्रीको रूपमा रहंदा ज्यादै चित्त दुखेको हुँदा यस्तो कामना गरिएको देखिन्छ।

† 'अभिलेख–संग्रह' २ भागको ६ पृष्ठ हेर्नुहोस्।

अर्को कुरा–यो चैत्य बनाउन लाउने स्त्रीमा स्त्रीत्वउपर वैराग्य उत्पन्न हुनामा एक प्रमुख कारण 'जातक' को असर परेको पनि देखिन्छ। यस चैत्यमा किन्नरीजातकका कुरा उत्कीर्ण गएको चर्चा अभिलेखमा परेको छ। स्त्रीहरू कसरी इन्द्रियको दास बनी कामवासनामा भुल्छन् भन्ने कुरा किन्नरीजातकमा देखाइएको छ । विचारार्थ किन्नरीजातकको कथासार यहाँ दिइन्छ–

"उहिले वाराणसीमा कण्डरी भन्ने राजा थिए। उनी सुन्दर थिए। उनकी रानी किन्नरी पनि सुन्दरी थिइन्। राजाको दरबारसंगै एउटा ठूलो रूख थियो । त्यो रूखमुनि एउटा अत्यन्त कुरूप कुप्रो बस्दथ्यो ।

एक दिन रानी किन्नरीले त्यो कुप्रोलाई देखिन्। यसपछि विस्तारै किन्नरीको मन त्यसमा लहसियो। एकदिन राति राजा सुतेपछि किन्नरी सुटुक्क कुप्रोकहाँ पुगिन्। अनि यसै गरी राति सधैं किन्नरी कुप्रोकहाँ जान लागिन्।

एक दिन राजा शहर घुमेर दरबारतिर फर्किरहेका थिए; रूखमुनि बसिरहेको त्यो कुरूप कुप्रोलाई राजाले देखे। अनि भावुक भएर राजाले पुरोहितसंग सोधे–के कुनै स्त्री यस्तो कुरूपसंग लहसिन सक्ली ?। यो सुनेर त्यो कुप्रोको मनमा घमण्ड चढ्यो र उसले रूखतिर लक्ष्य गरेर भन्यो– हे रूखदेवता, के हुन सक्छ ; के हुन सक्दैन। तिमीलाई सब यो थाहा छ। यो सुनेर पुरोहितको मनमा चीसो पस्यो। उनले धेरै विचार गरेर महारानी किन्नरीमाथि शङ्का प्रकट गरे । राजालाई पहिले त कत्ति पनि पत्यार परेन। तैपनि जाँची हेर्ने निधो राजाले गरे। अनि त्यो दिन राति नीद नपरे पनि निदाएको जस्तो गरी राजा पल्टे । अनि रानी किन्नरी सधैंको जस्तै विस्तारै उठी मेवा–मिष्टान्न साथ लिई पटुकाको मदतले झ्यालबाट तल ओर्लिन्। राजा उनको पछि लागे; रूखको आडमा लुकेर हेरिरहे। किन्नरी अलि ढीलो आएको देखी कुप्रोले बेसरी झपाऱ्यो। किन्नरीले शिर निहुराएर माफी मागिन् ।

यस घटनाले राजाको मनमा ज्यादै रिस उठ्यो । रानी किन्नरीलाई मृत्युदण्डको आदेश राजाले दिए। परन्तु पुरोहितले एकान्त पारी राजासंग बिन्ति गरे–प्रायः आइमाईको मन यस्तै हुन्छ। यसैले महारानीलाई मात्र यसमा दोष दिनु हुँदैन। म हजूरलाई आइमाईको चरित्र देखाइदिन्छु; सवारी होस् ।

अनि राजा र पुरोहित वेष बदलेर शहर घुम्न दरबारबाट निस्के। त्यहाँ अनेक स्त्रीको चरित्र देखेर राजा छक्क परे। अनि फर्केर आई राजाले किन्नरीलाई मृत्युदण्ड नदिई देशनिकाला मात्र गरे †।"

यो किन्नरीजातकको प्रभाव उपर्युक्त स्त्रीमा परेको स्पष्ट छ। यसैको प्रभावमा परेर अर्को जुनिमा स्त्री भएर जन्मन नपरोस्, पुरुष भएर जन्मन पाऊँ भन्ने कामना गरिएको हो भन्ने देखिन्छ ।

† आनन्द कौशल्यानयको 'जातक' पञ्चम खण्डको ५१३ पृष्ठको आधारमा यो कथासार दिइएको हो ।

यसबाट लिच्छविकालको समाजमा जातककथाको केही असर परेको थियो भन्ने देखिएको छ।

## यस अभिलेखको महत्त्व–

यो अभिलेखको अन्त्यमा '. . . . . भट्टारकमहाराजश्री . . . .' भन्ने उल्लेख परेको छ। यसबाट तात्कालिक राजाको नामोल्लेख यसमा भएको थियो भन्ने थाहा पाइन्छ। श्रीपछि एक अक्षर मात्र बचेको भए पनि यो अभिलेखको महत्त्व बढी हुने थियो। साथै लिच्छविकालको इतिहासमा यसले नयाँ प्रकाश पार्ने थियो। परन्तु श्रीपछि एक अक्षर पनि बाँकी नरहेको हुनाले यस अभिलेखको महत्त्व त्यति हुन सकेन। लिपिको आधारमा, 'माघवर्षकाल' शब्दको आधारमा समय आँक्नुपर्ने अवस्थामा यो रह्यो। जे होस्, नेपालमा बौद्ध धर्मको इतिहासको दृष्टिले भने यस अभिलेखको महत्त्व कम छैन।

–★–

# चाँगुनारायणस्थानको मानदेवको अभिलेख

चाँगुको नारायणस्थान प्रसिद्ध छ । त्यहाँ नारायणमन्दिरको संगै दाहिनेपट्टि यो अभिलेख कुँदिएको शिलास्तम्भ गाडिराखिएको छ । यो स्तम्भ अडचाउन ठूलो कछुवाको आकारको ढुङ्गा राखिएको छ । यसो हुनाले अभिलेखको सम्पूर्ण भाग अहिले देखिंदैन; केही भाग छोपिएर रहेको छ ।

राजा मानदेवले आफ्नो वर्णन लेखाई चाँगुनारायणको अगाडि गरुडध्वज राख्न लाएका थिए । यस्ता गरुडध्वज जहाँ पनि देवताको सामुन्ने रहेका पाइन्छन् । परन्तु मानदेवले राख्न लाएको यो स्तम्भ भने अहिले चाँगुनारायणको सामुन्ने रहेको छैन । यस स्तम्भलेखको १९ श्लोकसम्म अहिले प्रकाशमा आएको छ । त्यति भागको अध्ययन गरी हेर्दा यो अभिलेख पूर्ण नभएको स्पष्ट थाहा पाइन्छ । यसैले यसमा कुनै रहस्य लुकेको छ भन्ने शङ्का उठ्तछ । यति शङ्का मनमा लिएर चाँगुनारायणको मन्दिरको आसपासमा दृष्टि दियौं भने यसको रहस्य केही खुले जस्तो देखापर्छ । किनभने चाँगुनारायणको ठीक सामुन्ने एउटा स्तम्भलेखको डेढ हात जति भाग देखिन्छ । यस स्तम्भमा अहिले पनि केही अक्षर बाँकी छँदैछन् । यसको लिपि मानदेवको उपर्युक्त स्तम्भलेखको लिपिसंग ठीक मिल्छ । दुवै स्तम्भको मोटाइ चौडाइ आदि नापोमा पनि कत्ति फरक छैन । दुवै ढुङ्गाको जात पनि उही छ । यताबाट यो खण्डित स्तम्भ र अर्को ठूलो स्तम्भ एउटै हो; कुनै उपद्रववश यो दुइ टुक्रा हुन पुगेको देखिन्छ* । यसो हुनाले दुवै स्तम्भलेखलाई यहाँ संगै दिइएको छ ।

---

* यत्रो ढुङ्गे खामो यसरी खण्डित अवस्थामा कसरी पुग्यो होला भन्ने खुल्दुली हुनु स्वाभाविक छ। वि. सं. १४०६ मंसीरमा भएको बङ्गालका सुलतान शमसुद्दीनको आक्रमणले यो स्तम्भ खण्डित पारेको हो कि जस्तो मलाई लाग्छ। शमसुद्दीनको सैन्यले नेपाल–उपत्यकाका प्रायः सबै प्रसिद्ध देवमन्दिर ध्वस्त पारेको थियो । चांगुनारायणको मन्दिर ध्वस्त पारेको वर्णन परेको अभिलेख त पाइएको छैन। तैपनि मानदेवको उक्त गरुडध्वज दुइ टुक्रा भएको, चांगुनारायणको शिरोभाग पछि जीर्णोद्धार गरेको उल्लेख पाइएको तथा नेपालमाहात्म्यमा यस विषयमा एउटा कथा जोडिएको हुनाले उक्त अनुमान गर्ने आधार पाइन्छ ।

स्तम्भका तीन पाटामा यो अभिलेख कुँदिएको छ। पहिलो पाटामा केही अक्षर खण्डित भएका छन्। दोस्रो र तेस्रो पाटामा अङ्कित लेख साबुत छन्। यस स्तम्भलेखको लिपि ठूलठूलो र सुन्दर छ।

यस अभिलेखको धेरैजसो भाग सर्वप्रथम पं. भगवान्लाल इन्द्राजीद्वारा 'इन्स्क्रिप्शन्ज् फ्रम् नेपाल' मा १ संख्याको रूपमा प्रकाशित भएको हो। अनि यसको अलिकता बढी भाग पछी श्रीसिल्-भाँ लेभीले 'नेपाल' तेस्रो भागमा १ संख्याको रूपमा यो छपाएका छन्। योगी नरहरिनाथद्वारा संस्कृत-सन्देश १।६ मा यो छापिएको छ। यसको नेपाली अनुवाद ऐ. शि. बाबुराम आचार्य र श्रीगुरु पं. नयराज पन्तले संस्कृत-सन्देश १।७ मा प्रकाशित गर्नुभएको छ। यस अभिलेखको खण्डित भागको पूर्ति पनि उहाँहरूले नै गर्नुभएको हो। श्रीरेनिइरो नोलीद्वारा 'नेप्लिज् इन्स्क्रिप्शन्ज् इन् गुप्त क्यारेक्टर्ज्' मा पनि यो १ संख्याको रूपमा छापिएको छ।

कछुवाभन्दा मनितिर भुइँमा गाडिएको भाग कुनै तरहले खनेर हेर्न सके यस स्तम्भलेखको अझ बढी भाग प्रकाशमा आउने सम्भावना छ।

## मूलपाठ

(पहिलो पाटोमा)

१. संवत् ३८६ ज्यैष्ठमासे शुक्लपक्षे प्रतिपदि १
२. [रो]हिणीनक्षत्रयुक्ते चन्द्र[म]सि मुहूर्त्ते प्रशस्तेभिजिति
३. [श्री]वत्साङ्कितदीप्तचारुविपु[ल]प्रोद्वृत्तवक्षःस्थलः
४. [श्री]वक्षस्तनपद्मबाहु[रुचिरः] सम्यक्प्रवृद्धोत्सवः
५. [त्रै]लोक्यभ्रमयन्त्रवर्तिवि[विध]व्यासङ्गनित्योव्ययः
६. [दो]लाद्रौ निवसञ्जयत्यनि[मि]षैरभ्यर्च्च्यमानो हरिः [१]
७. [श्रीम]च्चारु[न]यप्रतापविभ[वं्व्यां]यामसंक्षेपकृत्
८. [राजा]भूद् वृषदेव इत्यनु[पमः स]त्यप्रतिज्ञोदयः
९. [यो रेजे] सवितेव दीप्तकिर[णैः] सम्यग्धृतैः स्वैः सुतैः
१०. [वि]द्वद्भिर्ब्बहुगर्व्वितैरचपलैः शू[रै]र्व्विनीतात्मभिः [२]
११. [त]स्याभूत्तनयः समृद्ध[विष]यः सङ्ख्येष्वजेयोरिभिः

१२. [राजा] शङ्करदेव इत्यनुप[मो] दीप्तिप्रदः सत्यधीः
१३. [सो]यं विक्रमदानमानविभ[वै]र्ल्लब्ध्वा यशः पुष्कलम्
१४. [स्वं] संयम्य ररक्ष गामभिमतैर्भृत्यैर्मृगेन्द्रोपमः ३
१५. [त]स्याप्युत्तमधर्म्मकर्म्मयशसः [पुत्रोर्त्थ]विद् धार्म्मिकः
१६. [क]र्म्मज्ञो विनयेप्सुरुत्तमगु[णः श्रीध]र्म्मदेवो नृपः
१७. [ध]र्म्मेणैव कुलक्रमागत[मपान्नेपाल]राज्यं महत्
१८. [स्फी]तीकृत्य नवैर्न्नृपर्षिचरितैः [सम्]भाव्य चेतो नृणाम् ४
१९. [ई]जे स[त्प]शुभिः सुराननु[गुणैः]सम्पन्नमन्त्रर्द्धिभिः
२०. [यज्ञैः कर्म्म]विशुद्धदेहहृदयश्चन्द्रद्युतिः पार्त्थिवः
२१. [प]त्नी तस्य विशुद्धवंशविभवा श्रीराज्यवत्युत्तमा
२२. [प्रा]णा[नाम]भवत्[प्रिया]कुल[गुणै]र्ल्लक्ष्मीरिवाग्र्या हरेः ५
२३. [सत्कर्म्मावि]रतैर्य्यशोंशुभिरिदं व्याभास्य कृत्स्नञ्जगत्
२४. याति स्म त्रिदिवालयं नरपतावुद्यानयात्रामिव
२५. प्रम्लाना ज्वरविह्वलाकुलज[ना ध्या]नैकमन्दा तदा
२६. देवाहारविधिक्रियास्वभिरता तद्विप्रयोगात्पुरा ६

(दोस्रो पाटोमा)

१. देवी राज्यवती तु तस्य नृपतेर्भार्य्याभिधाना सती
२. श्रीरेवानुगता भविष्यति तदा लोकान्तरासङ्गिनी
३. यस्याञ्जात इहानवद्यचरितः श्रीमानदेवो नृपः
४. कान्त्या शारदचन्द्रमा इव जगत्प्रह्लादयन्सर्व्वदा ७
५. प्रत्यागत्य सगद्गदाक्षरमिदन्दीर्घं विनिश्वस्य च
६. प्रेम्ना पुत्रमुवाच साश्रुवदना यातः पिता ते दिवम्
७. हा पुत्रास्तमिते तवाद्य पितरि प्राणैर्वृथा किम्मम
८. राज्यम्पुत्रक कारयाहमनुयाम्यद्यैव भर्त्तुर्ग्गतिम् ८
९. किम्मे भोगविधानविस्तरकृतैराशामयैर्ब्बन्धनैः
१०. मायास्वप्ननिभे समागमविधौ भर्त्त्रा विना जीवितुम्
११. यामीत्येवमवस्थिता खलु तदा दीनात्मना सूनुना

१२. पादौ भक्तिवशान्निपीड्य शिरसा विज्ञापिता यत्नतः ९
१३. किम्भोगैर्म्मम किं हि जीवितसुखैस्त्वद्विप्रयोगे सति
१४. प्राणान्पूर्वमहञ्जहामि परतस्त्वं यास्यसीतो दिवम्
१५. इत्येवम्मुखपङ्कजान्तरगतैर्न्नेत्राम्बुमिश्रैर्द्दढम्
१६. वाक्पाशैर्व्विहगीव पाशवशगा बद्धा ततस्तस्थुषी १०
१७. सत्पुत्रेण सहौर्द्ध्वदेहिकविधिं भर्त्तुः प्रकृत्यात्मना
१८. शीलत्यागदमोपवासनियमैरेकान्तशुद्धाशया
१९. [वि]प्रेभ्योपि च सर्व्वदा प्रददती तत्पुण्यवृद्ध्यै धनम्
२०. तस्थौ तद्धृदया सतीव्रतविधौ साक्षादिवारुन्धती ११
२१. पुत्रोप्यूर्ज्जितसत्त्वविक्रमधृतिः क्षान्तः प्रजावत्सलः
२२. कर्त्ता नैव विकत्थनः स्मितकथः पूर्व्वाभिभाषी सदा
२३. तेजस्वी न च गर्व्वितो न च परां लोकज्ञतान्नाश्रितः
२४. दीनानाथसुहृत्प्रियातिथिजनः प्रत्यर्त्थिनाम्माननुत् १२

(तेस्रो पाटोमा)

१. अस्त्रापास्त्रविधानकौशलगुणैः प्रज्ञातसत्पौरुषः
२. श्रीमच्चारुभुजः प्रमृष्टकनकश्लक्ष्णावदातच्छविः
३. पीनांसो विकचासितोत्पलदलप्रस्पर्द्धमानेक्षणः
४. साक्षात्काम इवाङ्गवान्नरपतिः कान्ताविलासोत्सवः १३
५. यूपैश्चारुभिरुच्छ्रितैर्व्वसुमती पित्रा ममालङ्कृता
६. क्षात्रेणाजिमखाश्रयेण विधिना दीक्षाश्रितोहं स्थितः
७. यात्राम्प्रत्यरिसङ्क्षयाय तरसा गच्छामि पूर्व्वान्दिशम्
८. ये चाज्ञावशवर्तिनो मम नृपाः संस्थापयिष्यामि तान् १४
९. इत्येवञ्जननीमपेतकलुषां राजा प्रणम्योचिवान्
१०. नाम्बानृण्यमहन्तपोभिरमलैः शक्नोमि यातुम्पितुः
११. किन्त्वाप्तेन यथावदस्त्रविधिना तत्पादसंसेवया
१२. यास्यामीति ततोम्बयातिमुदया दत्ताभ्यनुज्ञो नृपः १५

१३. प्रायात्पूर्व्वपथेन तत्र च शठा ये पूर्व्वदेशाश्रयाः
१४. सामन्ताः प्रणिपातबन्धुरशिरःप्रभृष्टमौलिस्रजः
१५. तानाज्ञावशवर्त्तिनो नरपतिः संस्थाप्य तस्मात्पुनः
१६. निर्भीः सिंह इवाकुलोत्कटसटः पश्चाद्भुवज्जग्मिवान् १६
१७. सामन्तस्य च तत्र दुष्टचरितं श्रुत्वा शिरः कम्पयन्
१८. बाहुं हस्तिकरोपमं स शनकैः स्पृष्ट्वाब्रवीद्गर्व्वितम्
१९. आहूतो यदि नैति विक्रमवशादेष्यत्यसौ मे वशम्
२०. किं वाक्यैर्बहुभिर्वृथात्र गदितैः संक्षेपतः कथ्यते १७
२१. अद्यैव प्रिय मातुलोरुविषमक्षोभार्ण्णवस्पर्द्धिनीम्
२२. भीमावर्त्ततरङ्गचञ्चलजलान्त्वङ्गण्डकीमुत्तर
२३. संनद्धैर्व्वरवाजिकुञ्जरशतैरन्वेमि तीर्त्वा नदीम्
२४. त्वत्सेनामिति निश्चयान्नरपतिस्तीर्ण्णप्रतिज्ञस्तदा १८
२५. जित्वा मल्लपुरीन्ततस्तु शनकैरभ्याजगाम स्वकम्
२६. देशम्प्रीतमनास्तदा खलु धनम्प्रादाद् द्विजेभ्योक्षयम्
२७. राज्ञी राज्यवती च साधुमतिना प्रोक्ता दृढं सूनु[ना]
१८. भक्त्याम्ब त्वमपि प्रसन्नहृदया दानम्प्रयच्छ स्व[तः] १९

(अर्को खण्डित स्तम्भको)

१. ... [भट्टा]रकवर्षबन्ध[न...[१]
२. ...... भट्टारकपूजायै...[२]
३. – खकम्प्रिङ् ग्राम[प्रदेशे] मानि ५४ ...[३]
४. .. २० दोम्मान मानि २० ...[४]

---

नोलीको पाठ–१.............ष–
२....................भट्टारक–
३....................मानि ५४
४– दो–न मानि २०

# अनुवाद

संवत् ३८६ ज्येष्ठ शुक्ल प्रतिपदा, रोहिणीनक्षत्रमा चन्द्रमा बसेमा, असल अभिजित् मुहूर्तमा ।

श्रीवत्सको चिह्नले झलमल्ल भएको राम्रो फराकिलो बाटुलो–बाटुलो छाती भएका, राम्रा छाती थुन कमल जस्ता हातले राम्रा भएका, आनन्दस्वरूप भएका, तीनै लोकको कलपुर्जा घुमाउने अनेकन् काममा सधैं लागेका, कहिल्यै नाश नहुने, दोलापर्वतमा (चाँगुमा) बसिरहेका, देवताहरूले पूजा गरिइरहेका विष्णु सबभन्दा ठूला हुनुहुन्छ ॥१॥

राम्रा नीति प्रभाव ऐश्वर्यद्वारा लडाइँ–भिडाइँ कम गर्ने, बोलेको कुरा पुऱ्याउने वृषदेव नाउँ भएका बेजोड राजा हुनुभयो । राम्ररी ऐंचमा राखिएका, विद्वान् खूब फुर्तिला गम्भीर शूरा अनुशासनमा रहने आफ्ना छोराहरूले चहकिला किरणले सूर्यको जस्तै जसको (वृषदेवको) शोभा हुन्थ्यो ॥२॥

उहाँका (वृषदेवका) छोरा, मुलुकको बढिबढाउ गराउने, लडाइँमा शत्रुहरूले जित्न नसकिने तेजिला, साँचो विचार गर्ने शङ्करदेव भन्ने नाउँ भएका बेजोड राजा हुनुभयो । सिंह जस्ता भएका जसले (शङ्करदेवले) पराक्रम दान गौरव ऐश्वर्यद्वारा ठूलो यश कमाएका आफू नियममा रही तहमा रहेका भारदारद्वारा पृथिवीको रक्षा गर्नुभयो ॥३॥

असल धर्म कर्म यश भएका, उहाँका (शङ्करदेवका) पनि छोरा दण्डनीति जान्ने, धर्मात्मा, कर्मकाण्ड जान्ने, अनुशासन मन पराउने, असल गुण भएका श्रीधर्मदेव राजाले राजर्षिहरूका नयाँ चालचलनले मानिसको मनलाई खिचेर कुलको क्रमैसंग आएको ठूलो नेपालराज्यलाई धर्मबमोजिम बढाएर रक्षा गर्नुभयो ॥४॥

कर्म गरी शरीर तथा मन शुद्ध भएका, चन्द्रमा जस्ता उज्याला राजाले (धर्मदेवले) भने जस्तै भएका, मन्त्र र ऐश्वर्य पुगेका, असल पशु भएका यज्ञद्वारा देवताहरूको पूजा गर्नुभयो । चोखो कुलमा जन्मेकी, बडामहारानी श्रीराज्यवती कुलको गुणले गर्दा विष्णुकी लक्ष्मी जस्तै उहाँ राजाकी (धर्मदेवकी) मुख्य प्राणपियारी हुनुभयो ॥५॥

सत्कर्मबाट निरन्तर आइरहेका कीर्तिका किरणले सारा संसारलाई झलमल्ल पारेर बगैंचामा गए झैं राजा (धर्मदेव) स्वर्ग जानुभयो । रानी राज्यवती राजासंग बिछोड हुनुभन्दा पहिले देवताहरूलाई भोजन गराउन लाग्नुभएको थियो । त्यस बेला (राजाको स्वर्गवास भएपछि) पीरले आकुल–व्याकुल भएर रानी लठ्याँस पर्नुभयो । नोकर–चाकर पनि बिलखबन्द परे । रानीको ध्यान नै गडबड भयो ॥६॥

बडामहारानी राज्यवती ता उहाँ राजाकी पत्नी भन्ने नाउँले त्यस बेला भिन्नै लोकमा बसेकी,

पतिव्रता लक्ष्मी नै भएकीले पछि लाग्नुहुनेछ। जसबाट (राज्यवतीबाट) शरद् ऋतुका चन्द्रमा जस्तै संसारलाई आनन्द दिने असल बानीबेहोर भएका श्रीमानदेव हुनुभयो ॥७॥

फर्केर आई लामो सास फेरी गहभरी आँसु लिएर सुंक्क सुंक्क गर्दै उहाँ महारानीले छोरा (मानदेव) लाई माया गर्दै यसो भन्नुभयो–'तिम्रा बुवाको स्वर्गवास भयो, हाइ छोरा ! तिम्रा बुवा स्वर्ग भएपछि सित्तै म बाँचेर के काम ? नानी छोरा ! राज्य गर, म आजै पतिको पछि लाग्छु ॥८॥

भेटघाटको काम सपना जस्तै हुन आएपछि भोगविलासका निमित्त फैलाइएका आशै–आशाका जालका साथमा पतिविना बाँच्न मलाई के काम ? गइहाल्छु। यसरी अकडिएकी महारानीसंग दिक्क भएका छोरा (मानदेव)ले भक्तिले (महारानीका) दुवै पाउमा छाँद हालेर जतनसाथ त्यस वेला विन्ति गर्नुभयो ॥९॥

हजुरसंग बिछोड भएपछि मलाई भोगविलासको के काम ! जिन्दगीका सुखसयलको पो के काम ! म अगाडि प्राण छोड्छु। पछिबाट हजुर स्वर्ग जानुहोला। यसरी कमल जस्ता मुखबाट निस्केका आँसुले भिजेका यस्ता वचनको पासोले खूबसंग कसिदा पासोमा परेकी चरी जस्तै भई (महारानी) रहनुभयो ॥१०॥

सपूत छोरासंग रहेर पतिको काजक्रिया गरी आफू शीलस्वभाव दान इन्द्रियदमन उपवास आदि नियमहरूले चित्तलाई खूबसंग सफा पारेर पतिको पुण्यको बढिबढाउका लागि संधै ब्राह्मणहरूलाई पनि दान दिंदै सतीव्रतमा रही पतिमै तन मन दिएर साक्षात् अरुन्धती जस्तै भई रहनुभयो ११ ॥

छोरा (राजा मानदेव) पनि छातीवार, पराक्रमी, धैर्यवान् सहनशील, दुनियाँमा प्रेम गर्ने, काम गर्ने तर नउड्कने, मुसुक्क हाँसी कुरा गर्ने, सधैं आफैं अघिबाट बोल्ने, तेजिला भए पनि घमण्ड नगर्ने, लोकको व्यवहारलाई ठीक ठीक पहिचान्ने, गरीब र अनाथहरूका मित्र, पाहुनालाई प्यारो गर्ने, शत्रुहरूको घमण्ड तोड्ने, हतियार चलाउने र रोक्ने काममा सिपालु हुनाले सच्चा पराक्रम जाहेर भएका, राम्रा हात भएका, बाना लाएको सुन जस्तै मिहीन सफा वर्ण भएका, पुष्ट काँध भएका, फुलेको नीलकमलको पातको जोडा लाग्दो आँखा भएका, साक्षात् देह धरेका कामदेव जस्ता, सुन्दरीका विलासको उत्सवस्वरूप हुनुभयो ॥१२–१३॥

मेरा बुबाले राम्रा अग्ला मौलाहरूले पृथिवीलाई सिंगार्नुभएथ्यो। लडाइँरूपी यज्ञको आड लिएर क्षत्रीको धर्मबमोजिम दीक्षा लिएर म बसिरहेको छु। पराक्रमैले शत्रुको नाश गर्न पूर्व दिशातिर जान्छु। जो राजाहरू मेरो काबूमा बस्नेछन्, तिनलाई थाम्नेछु ॥१४॥

यी कुरा सुन्नाले पीर हटेकी मुमा (राज्यवती)लाई राजाले ढोगेर भन्नुभयो–मुमा ! शुद्ध तपस्या गरेर म बुवाको अऋणी हुन सक्तिनं। तर उहाँका पाउको सेवा गरेर विधिपूर्वक (उहाँबाट)

सिकेको हतियारको कामले अऋणी हुनेछु। तब अत्यन्त खुशी भएकी मुमाबाट आज्ञा पाएर राजा पूर्वको बाटो लाग्नुभयो। त्यहाँ पुर्बिया सण्ठ रजौटाहरूले दबेर शिर निहुराए। तिनका श्रीपेजका माला भुईंमा खसे। हुकूममा तामेल रहने तिनीहरूलाई थमौती गरी जगर फिजाएको सिंह जस्तै निडर भई राजा पश्चिमतर्फ लाग्नुभयो ॥१५–१६॥

त्यहाँ रजौटाको बदमाशी सुनेर टाउको हल्लाउँदै हात्तीका सूंड जस्ता पाखुरा विस्तारै निमोठ्तै उहाँ (राजा मानदेव) ले घमण्ड गरेर भन्नुभयो–'बोलाउँदा त्यो आउँदैन भने मेरो पराक्रमले तहमा आउला। यहाँ व्यर्थै धेरै कुरा गरेर के काम ? छोट्करीमै भन्छु ॥१७॥

प्यारा मामा ! धेरै अडचाङ–खडचाङ भएर रुमलिएको समुद्रको जोडा लाग्दो, डरलाग्दा भुमरीले र छालले पानी छचाल्ल–ब्याल्ल भएको गण्डकी नदी आजै हजुर तर्नुहोस्। कसिएका सय्यौं असल हात्ती घोडा लिई नदी तरेर म हजुरको फौजको पछि पछि आउनेछु । यस्तो अठोट गरेर राजाले त्यस वेला कबोल पूरा गर्नुभयो ॥१८॥

(राजा मानदेव) मल्लपुरीलाई जितेर त्यहाँबाट विस्तारै आफ्नो देशमा फर्कनुभयो। तब खुशी हुँदै ब्राह्मणहरूलाई अक्षय धन दान गर्नुभयो। असल बुद्धि भएका छोरा (मानदेव) ले बडामहारानी राज्यवतीलाई 'मुमा ! हजुर पनि खुशी मनले भक्तिपूर्वक आफ्नो तर्फबाट पनि दान गर्नुहोस्' भनी बिन्ति चढाउनुभयो ॥१९॥

× × ×

......भट्टारक (चाँगुनारायणको) वर्षबन्धनको लागि......भट्टारकको पूजाको लागि......खकम्प्रिङ ग्राममा ५४ मानिका,..........२० मानिका, दोम्मानमा २० मानिका......(गूठी राख्नुभयो ।)

### व्याख्या–

संवत् तिथिमिति, राजाको नाम आदि सबै प्रमाणले युक्त यो पहिलो अभिलेख हो। तात्कालिक राजनैतिक इतिहास, लौकिक चलन, धार्मिक भावना, विद्याको उन्नति आदि अनेक कुरामा यस अभिलेखले प्रकाश पार्छ। यस कारण लिच्छविकालको इतिहास तयार गर्ने सामग्रीमा यो अभिलेखको विशेष स्थान रहेको छ ।

### मानदेवहरूले व्यवहार गरेको संवत्–

चाँगुको यस स्तम्भलेखमा संवत् ३८६ अङ्कित भएको छ । यसलाई सबभन्दा पहिले पं. भगवान्लालले छपाउँदा यो संवत् 'विक्रम्संवत्' हो भनी मानेका छन्। परन्तु फ्लीट यस संवत्लाई 'गुप्त संवत्' मान्दछन्। विक्रमसवत् र गुप्तसंवत्मा ३७६ वर्षको अन्तर पर्दछ। यसैले फ्लीटको

मतअनुसार मानदेव ३८६ + ३७६ = ७६२ विक्रमसंवत्का हुन आउँछन् । सिल्भाँ लेभीले यस संवत्लाई विक्रमभन्दा १६७ वर्षपछि चलेको 'लिच्छविसंवत्' हो भनी भनेका छन् । यो संवत् वि. सं. १३५ देखि चलेको 'शकसंवत्' हो भन्ने ऐ. शि. बाबुराम आचार्यहरूको मत छ । यसरी ग्रन्थकारैपिच्छे भिन्नाभिन्नै संवत्विषयका कल्पनाले त्यस वेलाको घटनाक्रममा कसरी उल्टो–पुल्टो पर्न गएको होला, सो सोझै अनुमान गर्न सकिन्छ ।

चाँगुको यो स्तम्भलेखदेखि लेलेको शिवदेव + अंशुवर्माको संवत् ५२६ को अभिलेखसम्म यस संवत्को प्रयोग भएको पाइन्छ । अनि अंशुवर्माको बुङमतीको संवत् २९ को अभिलेखदेखि अर्कै संवत् प्रचलित भएको छ । यसरी अंशुवर्माको दुवै संवत्संग सम्बन्ध रहेको छ ।

प्रसिद्ध चीनिया यात्री युआनच्वाङ्गको वर्णनबाट उनी यतातिर आउनुभन्दा केही पहिले अंशुवर्माको मृत्यु भएको थियो भन्ने थाहा पाइन्छ । युआनच्वाङ्गले वि. सं. ६८६ मा भारतयात्रा आरम्भ गरेका र वि. सं. ७०२ मा उनी चीन पुगेका थिए । यताबाट मोटामोटी रूपमा अंशुवर्माको समय निश्चित हुन्छ ।

लिच्छविकालमा प्रचलित दुवै संवत्को दोसाँधमा अंशुवर्मा रहेका हुनाले संवत्को निर्णय गर्दा दुवै संवत्को संतुलन मिलाउनु आवश्यक छ । यस दृष्टिले विचार गर्दा 'सुमतितन्त्र' मा उल्लिखित संवत्बारेका कुरासिबाय अरूका तर्क बाझिएका छन् । यस विषयको विस्तृत चर्चा पछि गरिनेछ । यहाँ संक्षिप्त रूपमा मात्र चर्चा गर्दैछु ।

चाँगुको अभिलेखको यस संवत्लाई भगवान्लालको मतअनुसार विक्रमसंवत् मान्ने हो भने शिवदेव + अंशुवर्माको लेलेको अभिलेख वि.सं. ५२६ को हुने भयो । यसबाट युआनच्वाङ्गले यात्रा थाल्नुभन्दा १६० वर्षअगाडि अंशुवर्मा भए भन्ने देखिन आउने भयो । यसरी 'नेपालका भरखर अघि भएका राजा अंशुवर्मा' भन्ने युआनच्वाङ्गको वर्णनसंग यसको मेल खाँदैन । चाँगुको स्तम्भलेखको लिपि विचार गर्ने हो भने पनि भगवान्लालको मत मिल्न आउँदैन । यस्लाई विक्रमसंवत् मान्दा मानदेव भारतका सम्राट् समुद्रगुप्तका सामानकालिक हुन आउने भए । तर मानदेवको चाँगुको स्तम्भलेखको लिपि समुद्रगुप्तको प्रयागको स्तम्भलेखको लिपिभन्दा अलि पछिको हो भन्ने कुरा तुलना गरी हेर्दा स्पष्ट देखिन्छ ।

फ्लीटले भने जस्तै 'गुप्तसंवत्' मान्ने हो भने त झन् आनको तान फरक पर्छ । फ्लीटको मतअनुसार लेलेको अभिलेख ५२६ + ३७६ = ९०२ वि. सं. को हुन आउने भयो । यसबाट वि. सं. ६८६ मा भातरतिर हिंडेका चीनिया यात्रीले अंशुवर्माबारे भविष्यवाणी गरेको भनी भन्नुपर्ने हुन्छ ।

यसै गरी लेभीको मत पनि मिल्दैन । उनको मतअनुसार लेलेको अभिलेख ५२६ + १६७ = ६९३ वि. सं. को हुन आउँछ । यसको १५ वर्षभन्दा बढी पछिसम्म अंशुवर्मा जीवित थिए भन्ने कुरा अरू अभिलेखबाट थाहा पाइन्छ । त्यसो भए जीवित अंशुवर्मालाई युआनच्वाङ्गले भूतपूर्व भनी

कसरी लेखे ? । यस कारण लेभीको मत पनि ठीक छैन भन्ने स्पष्ट छ ।

सुमतितन्त्रमा उल्लिखित कुरामा भने कतैबाट पनि कुरा बाझिन आएको छैन । यस कारण संवत्को निर्णय 'सुमतितन्त्र' को मतको आधारमा गर्नु उपपत्तिसम्मत देखिएको छ । यसो हुँदा सुमतितन्त्रको आधारमा पहिलो संवत् 'शकशंवत्' र दोस्रो संवत् ४९८ शकसंवत्देखि (वि. सं. ६३३ देखि) उठेको 'मानदेवसंवत्' हो भन्ने सकारी यस ग्रन्थमा समयको उल्लेख गरिएको छ । यसबाट चाँगुको यस स्तम्भलेखको समय ३८६ + १३५ = ५२१ वि. सं. हुन आउँछ ।

## चाँगुनारायण–

लिच्छविकालमा नेपालमा प्रचलित धार्मिक सम्प्रदायमा वैष्णव सम्प्रदाय पनि एक हो । मानदेवभन्दा निकै पहिलेदेखि वैष्णव सम्प्रदाय यहाँ कायम भइसकेको थियो । नेपालका वैष्णव-सम्प्रदायका देवतामा चाँगुनारायणको प्रमुख स्थान रहेको थियो । अंशुवर्माको हाँडिगाउँको अभिलेखमा नेपालका प्रसिद्ध देवताले पाउने भाग नियत गर्दा विशिष्ट देवतामध्ये सबभन्दा पहिले पशुपतिको र अनि 'दोलाशिखरस्वामी = चाँगुनारायण' को उल्लेख आएको छ । यसबाट नेपालका वैष्णव सम्प्रदायका देवतामा चाँगुनारायणको मुख्य स्थान थियो भन्ने थाहा पाइन्छ ।

यस स्तम्भलेखको उठानमा चाँगुनारायणको स्तुति परेको छ । यसो हुनाले चाँगुनारायणको स्थापना मानदेवले नै गरेको देखिन्छ भन्ने भ्रममा कुनै इतिहासकार परेका छन् । परन्तु यहाँको वर्णन र मानदेवका अरू अभिलेखको वर्णन दाँजेर हेर्‍यौं भने उक्त कुरा सत्य होइन भन्ने थाहा पाइन्छ । पशुपति तिलगङ्गापारि र लाजिमपाटमा मानदेवले 'विक्रान्त विष्णुमूर्ति' स्थापना गरेका थिए । त्यहाँ 'आमाको पुण्य बढोस् भनी मैले यी मूर्ति स्थापना गराएको हुँ, भनी मानदेवले स्पष्टसंग लेखाएका छन् । थंतुंरीद्रङ्ङ्मा (बूढानीलकण्ठनजीकै विष्णुपादुकाको फेदीमा) मानदेवले शिवलिङ्ग स्थापना गरेका थिए । त्यहाँ पनि 'यो शिवलिङ्ग मैले स्थापना गरेको हुँ' भनी स्पष्टसंग लेखाइएको छ । यसै गरी चाँगुनारायणको मूर्ति पनि मानदेवले नै स्थापना गरेका भए यो पनि स्पष्टसंग लेखाउँथे । त्यसो नगरी यस स्तम्भलेखमा 'दोलाद्रौ निवसञ्जयत्यनिमिषैरभ्यर्च्यमानो हरिः, भनी वर्णन गरिएको हुनाले मानदेवभन्दा अघि नै यहाँ नारायणस्थापना भइसकेको थियो भन्ने स्पष्ट थाहा पाइन्छ †। आफ्ना सामन्तहरूलाई कज्याई फर्केपछि मानदेवले चाँगुनारायणको पूजा, दानधर्म गरी 'गरुडध्वज' (गरुडसहितको स्तम्भ) मात्र गाड्न लाएका हुन् । विजय गरी फर्केपछि यसरी 'गरुडध्वज' स्थापना गर्ने चलन चलेको थियो ।

चाँगुको नारायणमूर्ति 'गरुडासन' रूपको छ । मल्लकालका अभिलेखहरूमा चाँगुनारायण-लाई 'गरुडनारायण' नै भनिएको पाइन्छ । तर यस स्तम्भलेखमा 'गरुडासन' रूपका विष्णुको

† इतिहास–संशोधनको प्रमाण प्रमेय' का ७३–७४ पृष्ठ हेर्नुहोस् ।

वर्णन परेको छैन । श्रीवत्सचिह्नले राम्रो भव्य जीउ भएका, आनन्दसंग रहेका तीनै लोकको सञ्चालनमा व्यस्त रहेका विष्णुको वर्णन यस स्तम्भलेखमा गरिएको छ ।

## दोलाद्रि–

यस प्रसङ्गमा 'दोलाद्रि' बारे पनि केही चर्चा गर्नुपरेको छ । 'दोला' शब्दको अर्थ 'पिङ' भन्ने हो । नेवारी भाषामा यस ठाउँलाई 'चाँगु' भनिन्छ । गोपालवंशावली र चाँगुनारायणस्थानका अभिलेखमा यस ठाउँलाई 'चँगु' नै भनिएको छ । 'चँगु' शब्दको अर्थ 'पिङ जस्तो डाँडो' भन्ने हो । यसबाट 'दोलाद्रि' को अनुवाद 'चँगु' हो भन्ने देखिन्छ । यसै गरी 'यूपग्राम' को 'यल' 'नवगृह' को 'ग्वलँ' आदि नामकरण भएको देखिएको छ । यसबाट उहिले ठाउँको नाउँ कसरी रहेथ्यो भन्ने बुझ्न केही मदत पाइन्छ । तर यहाँ यस विषयमा बढी विचार गर्नु प्रसङ्गप्राप्त छैन ।

नेपाल–उपत्यकाका प्रसिद्ध देवस्थलहरू प्रायः 'वनदुर्ग' रूपका स्थानमा रहेका देखिन्छन् । स्वयम्भूनाथ, पशुपतिनाथ, आदिनाथ (चोबहारका), वज्रयोगिनी (गुंविहार) आदि देवस्थल 'वनदुर्ग' रूपका थिए । पशुपतिनाथबाहेक उक्त देवताहरू डाँडोमाथि रहेका छन् । यसै गरी चाँगु-नारायण पनि 'वनदुर्ग' रूपकै डाँडामा रहेका छन् । यस्ता वनडाँडामा देवमन्दिर किन रहे भन्ने कुरा विचारणीय छ । यसमा मुख्य कारण सुरक्षा नै रहेको देखिन्छ । प्रसिद्ध देवमन्दिरहरूमा भक्त राजा प्रजाले चढाएका कोष जम्मा हुन्थे । सुरक्षाको प्रबन्ध नगरे ती देवस्व लुटिने डर हुन्थ्यो । यसै हुँदा सुरक्षाको लागि 'वनदुर्ग' रूपका स्थानमा देवताहरू स्थापना गरिएका देखिन्छन् । शहर बस्तीभित्रै रहेका देवस्थलमा पनि सुरक्षाका लागि हतियार संग्रह गरी राखिएको हुन्थ्यो । उदाहर-णार्थ काठमाडौंका सेता मछिन्द्रनाथको मन्दिरलाई देखाउन सकिन्छ । अहिलेसम्म पनि उक्त मन्दिरको बीचको तलाको मूल कोठामा बाण आदि हतियार केही संगृहीत छन् ।

## इतिवृत्त–

यस स्तम्भलेखमा वृषदेवदेखि मानदेवसम्मको राजवंशको वर्णन परेको छ । यसबाट लिच्छवि-कालको अलिकता राजनैतिक इतिहास बुझ्न मदत पाइन्छ । अब यसबारे विचार गर्नुपरेको छ ।

## वृषदेव–

मानदेवको यस स्तम्भलेखमा र द्वितीय जयदेवको पशुपतिको अभिलेखमा पनि वृषदेवको विशेष वर्णन परेको छ । द्वितीय जयदेवको पशुपतिको अभिलेखमा प्रथम जयदेवपछि बीचका १२ राजालाई छोडेर वृषदेवको उल्लेख गरिएको छ । त्यहाँ उनलाई 'राजोत्तम = उत्तम राजा' भनी वर्णन गरिएको छ । लिच्छविकुलको गौरव बढाउने राजाको मात्र द्वितीय जयदेवले वर्णन गराएका छन् । यस प्रसङ्गमा यस कुरामा ध्यान दिनुपर्दछ । यसरी यता मानदेवले पनि वृषदेवदेखि

वर्णन शुरू गराउनु, उता जयदेवले पनि वृषदेवलाई महत्त्व दिनु त्यसै संयोगले मात्र भएको कुरा होइन; यसमा कुनै विशेष कारण छ भन्ने देखिन्छ। यस दृष्टिले विचार गर्दा वृषदेवको राजनैतिक महत्त्व रहेको थियो भन्ने बुझिन्छ। तर यसबारे प्रकाश पार्ने सामग्रीको अभाव नै छ। केही अनुमान भने गर्न सकिन्छ।

भारतमा समुद्रगुप्तले बलियो साम्राज्य खडा गरेपछि त्यसको असर नेपालमा पनि पर्‍यो। यद्यपि त्यस वेला नेपाल गुप्तसामाज्यभित्र पर्दैनथ्यो; प्रत्यन्त (सीमानाको राज्य) रूपमा थियो। तर लिच्छविहरूले आत्मरक्षाको लागि करको रूपमा केही आर्थिक रकम समुद्रगुप्तलाई बुझाउनुपरेको थियो। यस कुराको संकेत समुद्रगुप्तको प्रयागको स्तम्भलेखबाट पाइन्छ ?*। नेपालका शासकहरूको लागि यो 'आपद्' को रूपमा आइपरेको थियो। उनीहरू यस अवस्थाबाट उम्कने मौका खोज्दै थिए। यत्तिकैमा उता भारतमा समुद्रगुप्तको मृत्युपछि केही गडबडी पैदा भयो। यस मौकामा गुप्तहरूको अलिकता प्रभावबाट पनि नेपाल मुक्त भयो र आफ्नो स्वतन्त्रता कायम गर्न समर्थ भयो। समुद्रगुप्तपछि कुनै पनि गुप्त राजाहरूले नेपाललाई 'करद' पारें भनी दावा गर्न नसकेको हुनाले उपर्युक्त कुरा बुझिन्छ। गुप्तसाम्राज्यको उक्त क्षणिक असरबाट पनि नेपाललाई मुक्त पारेको श्रेय: वृषदेवलाई रहेको देखिन्छ। यसै हुँदा मानदेव र द्वितीय जयदेव दुवैले एकै मुखले वृषदेवलाई 'अनुपम (बेजोड) राजा' 'उत्तम राजा' भनी वर्णन गरेको देखिन्छ। भविष्यमा अन्वेषण गर्दै जाँदा यस कुराको पुष्टि प्रामाणिक रूपमा हुने सम्भावना नभएको होइन।

पशुपतिको अभिलेखमा 'सुगतशासनपक्षपाती' भनी वृषदेवको वर्णन गरिएको छ। यसबाट वृषदेवको बौद्धधर्ममा बढी श्रद्धा थियो भन्ने थाहा पाइन्छ। चाँगुको यस स्तम्भलेखमा वृषदेवलाई 'व्यायामसंक्षेपकृत् = लडाइँ–भिडाइँ कम गर्ने' भनी भनिएको छ। यस विशेषणले पनि उपर्युक्त कुरालाई नै लक्ष्य गरेको देखिन्छ। वंशावलीमा पनि स्वयम्भूको चैत्य आदि धेरै बौद्ध चैत्य वृषदेवको पालामा बने भन्ने उल्लेख परेको छ †। यसबाट वृषदेव बौद्धधर्मानुयायी, लडाइँ–भिडाइँ कम

---

* प्रयागको समुद्रगुप्तको अभिलेखमा सीमानाका राज्यहरूको चर्चा यसरी गरिएको छ—

"समतटडवाककामरूपनेपालकर्तृपुरादिप्रत्यन्तनृपतिभिः...सर्व्वकरदानाज्ञाकरणप्रणामागमनपरितोषितप्रचण्डशासनस्य"

(समतट, डवाक, कामरूप, नेपाल, कर्तृपुर आदि सीमानाका राजाहरूले सबै किसिमको कर तिरेर, हुकुममा तामेल रहेर, सलामीमा हाजिर भएर जसको (समुद्रगुप्तको) कडा स्थितिबन्देजको पालना गर्दछन्।)

† "राजा विश्वदेव . . . . तेन कृत सीनगुविहारचैत्यभट्टारिक प्रतिष्ठित सम्पूर्ण कृत"।

(गोपालवंशावली २० पत्रबाट)

(राजा विश्व (वृष) देवले सीनगुंविहार (स्वयम्भू) को चैत्यको प्रतिष्ठा गर्नुभयो।)

यहां गोपालवंशावलीमा वृषदेवलाई विश्वदेव भनिएको छ। गोपालवंशावलीमा राजाका नाममा यस्ता विकृति ठाउँ–ठाउँमा परेका छन्।

वृषदेवको पालामा चाबहिलको चैत्य बन्यो भन्ने वंशावलीको भनाइ माथि उद्धृत गरिसकेको छ।

गर्न चाहने शान्तिप्रिय राजा थिए भन्ने देखिन्छ ।

## शङ्करदेव–

वृषदेवका धेरै छोराहरू थिए; तिनीहरूलाई राम्ररी तालीम दिइएको थियो; तिनीहरू शूर–वीर थिए भन्ने वर्णन यस स्तम्भलेखमा गरिएको छ। ती छोराहरूमा शङ्करदेवचाहिं बाबुको शेषपछि गद्दीमा बसे भनी यहाँ लेखिएको छ । जेठा भएका हुँदा शङ्करदेवले गद्दीमा बस्न पाएका हुन् कि आफ्नो विशेष योग्यताले गर्दा यो पद उनले पाए; त्यो चाहिं यताबाट खुल्दैन । पशुपतिको जयदेवको अभिलेखबाट पनि यसबारे बढी कुरा खुल्दैन । सो अभिलेखमा पनि वृषदेवपछि शङ्करदेव राजा भए भन्ने मात्र लेखिएको छ ।

शङ्करदेवले राम्ररी शासन गरे; यिनको पालामा देश समृद्ध भयो; आफ्नो पराक्रम आदिले गर्दा शङ्करदेवले निकै यश कमाए भन्ने वर्णन यस स्तम्भलेखमा गरिएको छ । यतिबाहेक शङ्करदेव–बारेमा अरू कुरा थाहा पाउन सकिएको छैन ।

## धर्मदेव–

शङ्करदेवपछि उनका छोरा धर्मदेव गद्दीमा बसे; आफ्नो कुलपरम्पराबाट आएको राज्यलाई अझ समृद्ध बनाएर धर्मदेवले पनि राम्ररी शासन चलाए; धर्मदेव धार्मिक प्रकृतिका थिए; यिनले यज्ञयागादि धेरै गरे भन्ने वर्णन यस स्तम्भलेखमा गरिएको छ । साथै धर्मदेव शस्त्रविद्यामा पनि निपुण थिए; छोरा मानदेवलाई खुद धर्मदेवले नै शस्त्रविद्या विधिपूर्वक सिकाएका थिए भन्ने उल्लेख यहाँ परेको छ ।

*राजर्षिचरित*–धर्मदेवको वर्णनको प्रसङ्गमा यहाँ 'राजर्षिचरितद्वारा उनले प्रजाको मन खिंचे' भनी लेखिएको छ । 'राजर्षिचरित' शब्दले कस्तो चरितलाई लक्ष्य गरेको हो, सो बुझ्नुपरेको छ । यस पारिभाषिक शब्दको अर्थ कौटलीय अर्थशास्त्रबाट खुल्दछ । आचार्य कौटल्यले आफ्नो ग्रन्थमा विनयाधिकरणको छैटौं अध्यायको नाम 'राजर्षिवृत्त' दिएका छन् । त्यसमा एक योग्य शासकले गर्नुपर्ने कुराको चर्चा परेको छ । इन्द्रियलाई कब्जामा राख्नु, विद्वान्हरूको सङ्गतले बुद्धि तिखार्नु, जासूसद्वारा सब कुराको जानकारी राख्नु, उद्योग गरिरहनु, ठीक तरीकाले राजाकाज चलाउनु, विनयमा रहनु, लोकको हित हुने र प्रिय हुने काम गर्नु, लोभलालचा परस्त्री आदिमा नफस्नु, धर्म अर्थ काम विषयको सन्तुलन राख्नु, राजमर्यादामा रहनु आदि कुरा 'राजर्षिचरित' भित्र पर्दछन् । एक आदर्श राजाको चरितलाई 'राजर्षिचरित' भनिएको हो भन्ने यताबाट बुझिन्छ । यसरी राजा मानदेवले आफ्ना बाबुलाई 'आदर्श राजा' का रूपमा दर्शाउन खोजेको देखिन्छ ।

*अकस्मात् मृत्यु*–यस स्तम्भलेखको वर्णनअनुसार धर्मदेवको अकस्मात् मृत्यु भएको देखिन्छ। सो मृत्यु कसरी कहाँ भयो, यताबाट खुल्दैन । धर्मदेवकी रानी राज्यवती कुनै देवमन्दिरमा पूजाआजामा व्यस्त थिइन्; त्यतिकैमा धर्मदेवको मृत्यु भयो; नोकरचाकरमा हाहाकार फैलियो;

पूजा–ध्यान छोडी शोकले विह्वल भई रानी राज्यवती फर्किन् । आफ्ना बाबुको मृत्युको खबर मानदेवले आमा राज्यवतीबाट पाए भनी यस स्तम्भलेखमा लेखिएको छ। यसरी धर्मदेवको मृत्यु कसरी भयो भन्ने कुरा यस स्तम्भलेखमा खुलाएर लेखिएको छैन भन्ने स्पष्ट छ। यसमा कुनै रहस्य छ कि भन्ने देखिन्छ। यसै हुँदा पछिका गोपालवंशावली आदिले मानदेवले अज्ञानवश आफ्ना बाबुको वध गरे भन्ने कल्पित कथा जोड्न पुगेका छन्* । जे होस्, धर्मदेवको मृत्यु अकस्मात् भएको थियो भन्ने चाहिं स्पष्ट छ ।

*सतीप्रथा*–यस ताका सती जाने प्रथा चलेको थियो। तर सती जानु अनिवार्यचाहिं थिएन। मानदेवकी आमा राज्यवती, भौमगुप्तकी आमा आभीरी, जयदेवकी आमा वत्सदेवी आदि सती नगएको घटनाबाट हामी यो कुरा थाहा पाउँछौं। विष्णुधर्मोत्तर,नारदस्मृति आदिमा पतिको मृत्युपछि कि सती जानू; कि सतीव्रतमा बस्नू भन्ने वचन पाइन्छ† । लिच्छविकालमा पनि यस्तै धर्मशास्त्र वचनको अनुसरण गरिएको थियो भन्ने यस स्तम्भलेखबाट थाहा पाइन्छ। धर्मदेवको मृत्युपछि रानी राज्यवती सती जान तम्सेकी थिइन् । तर छोरा मानदेवले ज्यादै जोड लाएर आत्महत्या गर्ने धम्की दिएपछि राज्यवती सती गइनन् । अनि राज्यवती सतीव्रतमा रहिन् । 'सतीव्रत' को वर्णन यस स्तम्भमा यसरी गरिएको छ–

> "शीलत्यागदमोपवासनियमैरेकान्तशुद्धाशया
> तस्थौ तद्धृदया सतीव्रतविधौ साक्षादिवारुन्धती ।"

'सतीव्रत' को ठीक यही लक्षण बृहस्पति आदि शास्त्रकारहरूले दिएका छन्। यस्तै शास्त्रवचन§-अनुसार आभारी, वत्सदेवीहरू पनि सती नगएर 'सतीव्रत' मा रहेका थिए। यसरी लिच्छविकालमा सतीप्रथा प्रचलित थियो तापनि अनिवार्य थिएन; सती जाने वा सतीव्रतमा रहने दुवै मार्ग खुला थिए भन्ने थाहा पाइन्छ ।

## मानदेव–

मानदेवको समयमा पुगेपछि लिच्छविकालको इतिहास बढी स्पष्ट र प्रामाणिक हुन थाल्छ । एक स्वतन्त्र शासकमा हुनुपर्ने सबै लक्षण उनमा देखापर्छन्। संवत् तिथिमितिसहित अभिलेखहरू, स्वतन्त्र टक यसै वेलादेखि पाइएका छन्। अब हामी पहिले यस स्तम्भलेखको वर्णनतिर दृष्टि दिऔं।

---

* "श्रीमानदेव वर्ष ४१ तेन अज्ञातेन पिता वधकृत्य। महाघोर पातक कृतेन महारोदमान भ्रमित्वा गुंविहारशिखरे तप कृतम्। तपःप्रभावान्महाचेतमुत्पद्यते प्रतिष्ठितश्च ।।"
(गोपालराजवंशावली २० पत्रबाट)

† "मृते भर्तरि ब्रह्मचर्यं तदन्वारोहणं वा।" (विष्णुधर्मसूत्र २५।१४)

§ 'कृत्यकल्पतरु' मा वृहस्पति, यमका यस विषयका वचन उद्धृत गरिएका छन् ।

सर्वप्रथम मानदेवले आमा राज्यवतीका साथ आफ्ना बाबु धर्मदेवको काजक्रिया विधिपूर्वक गरे। पतिको पुण्य बढोस् भनी राज्यवतीले उपवास बसिन्, ब्राह्मणहरूलाई दान दिइन् ।

*सामन्तदमन–*

यस ताका मूल(केन्द्र)मा कुनै कारणवश कमजोरी पैदा भयो कि अधीनस्थ वर–परका सामन्त राजाहरू स्वतन्त्र हुने चेष्टा गर्दथे। यस्तो अवस्थामा ती सामन्तहरूलाई कज्याउन सकिएन भने राज्यै टुक्रिने सम्भावना हुन्थ्यो। मानदेवले पनि गद्दीमा बस्ने बित्तिकै यस्तै अवस्थाको सामना गर्नुपऱ्यो । धर्मदेवको मृत्यु भएको र मानदेव गद्दीमा बसेको समाचार सुनेपछि वरपरका सामन्त राजाहरू मानदेवको दरबारमा उपस्थित भएनन्। उनीहरूले यस मौकामा स्वतन्त्र हुने चेष्टा गर्न थाले। तर मानदेव कमजोर प्रकृतिका थिएनन्। आवश्यक शास्त्र, शस्त्रसम्बन्धी शिक्षा उनले हासिल गरिसकेका थिए। यसो हुनाले आफ्नो पैतृक राज्य थाम्न उनले ती सामन्तहरूलाई दबाउने निश्चित गरे। यसका लागि चाहिने प्रबन्ध उनले मिलाए। यस संकटको समयमा मानदेवका मामाले* उनलाई पूरा मदत गरे ।

अनि आमाको आज्ञा लिई फौजसाथ मानदेव पहिले पूर्वतिर गए। पूर्वका सामन्तहरूलाई कज्याउन मानदेवलाई गाह्रो भएन। चाँडै नै पूर्वका सामन्तहरूले मानदेवको आधिपत्य स्वीकार गरे। यसो हुनाले उनीहरूलाई मानदेवले पूर्ववत् थामिदिए। चाँगुको यस स्तम्भलेखमा पूर्वका यी सामन्त राजाहरूलाई अलि होच्याएर 'शठ' भनी लेखिएको छ। यसबाट पूर्वदेशका सामन्त राजा-हरू किरात थिए कि भन्ने अनुमान हुन्छ। गोपालवंशावलीकारले किरात राजाहरूको वर्णन गर्दै जाँदा "एते द्वात्रिंस किरातराजाः, तामर्ज्जणकोशकौटटाद्‌भवा येः = यी बत्तीस जना किरात राजाहरू भए; अहिले किरातहरू तामा कोशी र अरुणको बीच भागमा छन्" भनी लेखेका छन्। किरात–हरूलाई हराई लिच्छविहरूले राज्यस्थापना गरेपछि केही किरातहरू पूर्वतिर लागेको संकेत गोपाल-वंशावलीको वर्णनबाट पाइन्छ। तर अरू प्रमाण नपाइएसम्म यस विषयमा निश्चित रूपले भने केही भन्न सकिंदैन।

यसरी पूर्वका सामन्त राजाहरूलाई कज्याएर मानदेव पश्चिमतिर बढे। पूर्वतिरका सामन्त-हरूलाई सजिलैसंग कज्याउन सकेको हुनाले मानदेवको हौसला बढेको थियो। यसै हुँदा 'जगर फिंजाएको सिंह जस्तै निडर भई' मानदेव पश्चिमतिर लागे भनी यस स्तम्भलेखमा भनिएको छ।

---

* मानदेवका मामा को हुन्; थाहा पाउन सकिएको छैन। मल्लपुरीमा आक्रमण गर्दा "प्यारा मामा ! तपाईं आजै गण्डकी तर्नुहोस्। म पनि फौजसाथ नदी तरेर तपाईंको फौजको पछि लाग्नेछु' भनी मानदेवले बोलेका छन्। यसबाट मानदेवका मामाले आफ्नो भिन्नै फौज लिएर आएको स्पष्ट बुझिन्छ। यस कारण मानदेवका मामा पनि भारतका कुनै राजा थिए कि भन्ने देखिन्छ। अर्को कुरा–मानदेवकी आमा राज्यवतीको वर्णनमा उनलाई 'विशुद्धवंशविभवा = चोखो कुलमा जन्मेकी' भनेर लेखिएको छ । यसबाट पनि उपर्युक्त कुराको केही पुष्टि हुन्छ।

तर पश्चिमतिर पूर्वतिरको जस्तो भएन । पश्चिमतिरका सामन्तमा मल्लपुरीका सामन्त राजाले मानदेवको आधिपत्य मान्न मञ्जूर गरेनन्; पहिले त मानदेवले कुराकानी गरी संझौता गर्न उनलाई बोलाइपठाए। तर उनले मानदेवको कुरालाई टेरेनन्। यसैले झोक्किएर युद्धद्वारा नै मल्लपुरीका सामन्तलाई श्रँठचाउने निश्चय मानदेवले गरे। मल्लपुरी गण्डकीपारि थियो। गण्डकी तर्नु सजिलो थिएन। तैपनि मानदेवले आवश्यक प्रबन्ध मिलाई आफ्ना मामाको फौजलाई पहिले गण्डकी तर्न लाई मल्लपुरी घेर्न पठाए। पछि आफू पनि ठूलो फौजसाथ गण्डकी तरी मल्लपुरीमा आक्रमण गर्न पुगे। मल्लपुरीका सामन्त राजाले मानदेवको यस आक्रमणको मुकाबिला गर्न सकेनन्। यसो हुँदा उनले मानदेवको आधिपत्य स्वीकार गर्न विवश हुनुपऱ्यो ।

मानदेवले गण्डकी नदी कसरी तरे। यस विषयमा अलिकता विचार गर्नुपरेको छ। चाँगुको यस स्तम्भलेखको वर्णनअनुसार मानदेवको सेनामा सयौं हात्तीहरू थिए भन्ने थाहा पाइन्छ। पहाडी क्षेत्रमा हात्ती हुन सम्भव छैन, यो वर्णन कविको कल्पना मात्र हो भनी कुनै इतिहासकारले यस कुरामा शङ्का गरेका छन्। तर पहाडी प्रदेशमा हुने एकथरी हात्ती पनि हुन्छन्। नदीको आसपासमा हुने र पहाडी प्रदेशमा हुने गरी हात्ती दुइथरी हुन्छन् भन्ने चर्चा कौटलीय अर्थशास्त्रमा गरिएको छ। जस्तै–

"दन्तमूलपरीणाहद्विगुणं प्रोज्झ्य कल्पयेत् ।
अब्दे द्व्यर्धे नदीजानां पञ्चाब्दे पर्वतौकसाम् ।।" २७।।

(२ अधिकरण ३२ अध्याय)

(नदीको आसपासमा हुने हात्तीको अढाई अढाई वर्षमा तथा पहाडी प्रदेशमा हुने हात्तीको पाँच पाँच वर्षमा फेदको मोटाइको दोबर भाग छोडेर दाँत काट्नू।)

लिच्छविकालका अभिलेखमा हात्तीको उल्लेख अरू ठाउँमा पनि आएको छ। अंशुवर्माको हाँडिगाउँको अभिलेखमा राज्याभिषेक गर्दा सिन्दूरजात्राको लागि राजाले चढ्ने हात्ती विशेष रूपमा राखिन्थ्यो भन्ने उल्लेख परेको छ। थानकोट र बलम्बूको बीचमा अहिलेसम्म 'किर्सिपिंडी' नामक बस्ती छ। लिच्छविकालको अभिलेखमा यस बस्तीलाई 'किचप्रिंचि' भनिएको छ। यो भेकमा हात्ती पालिने हुनाले यो नाम रहेको देखिन्छ। यसैले यस भेकका लिच्छविकालका अभिलेखमा यस भेकको चारकिल्ला खुलाउँदा ठाउँठाउँमा 'हस्तिमार्ग' को उल्लेख आएको छ। उदाहरणार्थ थानकोटको वसन्तदेवको अभिलेखमा उल्लिखित 'अस्य सीमा. . . .यावद्धस्तिमार्गं सम्प्राप्तेति ततोपि च हस्तिमार्ग. . .' यस वाक्यलाई देखाउन सकिन्छ। यसबाट लिच्छविकालमा यतातिर हात्ती पालिन्थे भन्ने संकेत पाइन्छ। नरेन्द्रदेवको पाटन तलेजुचोकको अभिलेखबाट पनि नरेन्द्रदेवको सेनामा हात्ती पनि थिए भन्ने थाहा पाइन्छ। यस कारण मानदेवको सेनामा हात्ती थिए भन्ने वर्णन काल्पनिक होइन भन्ने सिद्ध हुन्छ ।

उहिले खोला तर्ने काममा हात्तीको प्रयोग गरिन्थ्यो। कवि कालिदासले रघुको विजययात्राको वर्णनको प्रसङ्गमा यो कुरा स्पष्ट देखाएका छन्–

"स तीर्त्वा कपिशां सैन्यैर्बद्धद्विरदसेतुभिः ।
उत्कलादर्शितपथः कलिङ्गाभिमुखो ययौ ।।" रघुवंश ४।३८

(ती रघु 'हात्तीको पुल' बाँधी सैन्यसाथ कपिशा नदी तरी उत्कलहरूले बाटो देखाइएका छँदा कलिङ्गतिर लागे ।)

हात्तीको उपयोगिताबारे चर्चा गर्दा कौटल्यले पनि "अकृतमार्गवासतीर्थकर्म = बाटो नभएको ठाउँमा बाटो बनाउनु, वास नभएको ठाउँमा वास बनाउनु, घाट (खोला तर्ने ठाउँ) नभएको ठाउँमा घाट बनाउनु . . . ." आदि काम हात्तीबाट हुन्छन् भनी यस कुराको संकेत गरेका छन् ।

यस कुरामा दृष्टि दिई मानदेवको यस स्तम्भलेखको वर्णन पढ्यौं भने मानदेवले गण्डकी नदी तर्न 'हात्तीको पुल' बाँधेका थिए भन्ने देखिन्छ ।'सन्नद्धैर्वरवाजिकुञ्जरशतैरन्वेभि तीर्त्वा नदीम्' यस वाक्यबाट गण्डकी नदी तर्दा हात्ती साधन बनाइएको थियो भन्ने भाव स्पष्ट झल्कन्छ *।

## मल्लपुरी कता थियो–

मानदेवले विजय गरेको मल्लपुरी कता थियो भन्ने कुरामा केही इतिहासकार अलमलिएका छन् । गण्डकीपारिका मल्लपुरीका आफ्नै सामन्त राजालाई मानदेवले कज्याएका होइनन्, उनले नयाँ नयाँ मुलुक जित्दै गई गोरखपुरका मल्ल राजाहरूलाई जितेका हुन् भन्ने तर्क ती इतिहासकारले उठाएका छन् । यस कारण अब अगाडि बढ्नुभन्दा पहिले यस विषयमा अलिकता विचार गर्नुपरेको छ ।

मानदेवले चाँगुको यस स्तम्भलेखमा आफ्नो कुरा राम्ररी लेखाएर गएका हुनाले यस स्तम्भलेख-बाटै सो कुरा खुल्छ । यहाँको वर्णनअनुसार मानदेवले नयाँ नयाँ मुलुक जिती राज्यविस्तार गर्ने यो यात्रा गरेका थिएनन्; आफ्ना बाबुको अकस्मात् मृत्यु भएपछि सामन्तहरूले स्वतन्त्र हुने चेष्टा गरेका हुँदा आफ्नो पैतृक राज्य थाम्न उनले यो यात्रा गरेका थिए भन्ने स्पष्ट बुझिन्छ । यसै हुँदा पूर्वतिर त मानदेवले कतै लड्नु नै परेन । पश्चिमतिर पनि मल्लपुरीका सामन्तसंग मात्र उनको लडाइँ पऱ्यो । यहाँको वर्णनअनुसार मल्लपुरीका सामन्त 'स्वतन्त्र राजा' थिएनन् भन्ने स्पष्ट थाहा पाइन्छ । यस स्तम्भलेखमा परेको–

"सामन्तस्य च तत्र दुष्टचरितं श्रुत्वा शिरः कम्पयन्
बाहुं हस्तिकरोपमं स शनकैः स्पृष्ट्वाब्रवीद्गर्व्वितम्
आहूतो यदि नैति विक्रमवशादेष्यत्यसौ मे वशम्
किं वाक्यैर्ब्बहुभिर्वृथात्र गदितैः संक्षेपतः कथ्यते "

यस उक्तिबाट मल्लपुरीका सामन्त 'स्वतन्त्र राजा' थिएनन्; मानदेवका पूर्वजको पालादेखि

---

* 'पूर्णिमा' २४ अङ्कका २२३–२६ पृष्ठ हेर्नुहोस् ।

वशवर्ती सामन्त राजा थिए भन्ने सिद्ध हुन्छ । नत्र कुनै पनि स्वतन्त्र राज्यका राजालाई लक्ष्य गरी यस्तो लेखिनु प्रसङ्ग मिल्दो हुने थिएन । स्वतन्त्र राजा भएका भए मानदेवले मेरो आधिपत्य मात्र आऊ भन्दैमा खुरुक्क आउने कुरै थिएन तथा उनी बोलाउँदा आएनन् भनी मानदेव रिसले चूर भएको वर्णन गर्नु एकदम भद्दा कुरा हुने थियो ।

अर्को कुरा–यस वेला गोरखपुरभेकमा मल्लहरूको राज्य कायम थियो भन्ने वा 'मल्लपुरी' नाउँको कुनै प्रदेश त्यहाँ थियो भन्ने कुरा सिद्ध गर्ने कुनै प्रमाण पाइंदैन । गोरखपुरभेकमा बुद्धको समयमा मल्लहरूको संघराज्य थियो । यो कुरा 'महापरिनिव्वाणसुत्त' आदि बौद्ध ग्रन्थबाट थाहा पाइन्छ । तर यो त मानदेवभन्दा हजार वर्ष जति पहिलेको कुरा भयो । मानदेवको समयमा त गोरखपुर सोझै गुप्तसाम्राज्यको अन्तर्गत थियो । समुद्रगुप्तले आर्यावर्त्तका सबै राजालाई उखेलेको छु भनी बोलेका र स्कन्दगुप्तको पालाको गुप्तसंवत् १४१ (वि. सं. ५१७) को अभिलेख गोरखपुर कहावममा पाइएको हुनाले उक्त कुरा सिद्ध हुन्छ । विचारार्थ अब महापरिनिव्वाणसुत्त, प्रयागको स्तम्भलेख र कहावमको अभिलेखको अलिकता अंश यहाँ उद्धृत गरिन्छ–

"गच्छावुसो आनन्द कुसिनारं पविसित्वा कोसिनारकानं मल्लानं आरोचेहिः– परिनिब्बुतो वासेट्ठा, भगवा यस्स दानि कालं मञ्जथा ति . . . तेन खो पन समयेन कोसिनारका मल्ला सन्थागारे सन्निपतिता होन्ति तेनेव करणीयेन । अथ खो आयस्मा आनन्दो येन कोसिनारकानं मल्लानं सन्थागारं तेनुपसङ्कमि । उपसङ्कमित्वा कोसिनारकानं मल्लानं आरोचेसिः–परिनिब्बुतो वासेट्ठा, भगवा यस्स दानि कालं मञ्जथा ति"

(जानुहोस् आनन्द, कुशीनारामा पुगेर वासिष्ठहो ! भगवान्को निर्वाण भयो, अहिले जे गर्नुपर्ने ठहर्छ, सो गर्नुहोस् भनी कुशीनाराका मल्लहरूलाई भन्नुहोस् ।)

त्यस वेला कुनै कार्यवशले कुशीनाराका मल्लहरू सभाभवनमा भेला भएका थिए । जहाँ कुशीनाराका मल्लहरूको सभाभवन थियो, आनन्द त्यहीं पुगे । त्यहाँ पुगेर आनन्दले कुशीनाराका मल्लहरूलाई 'वासिष्ठहो ! भगवान्को निर्वाण भयो, अब गर्नुपर्ने जे ठहर्छ, सो गर्नुहोस्' भनी भने ।)

"रुद्रदेवमतिलनागदत्तचन्द्रवर्म्मगणपतिनागनागसेनाच्युतनन्दिबलवर्म्माद्यनेकार्य्यावर्त्तराज-प्रसभोद्धरणोद्वृत्तप्रभावमहतः" (प्रयागको स्तम्भलेखबाट)

(रुद्रदेव मतिल नागदत्त चन्द्रवर्म्मा गणपतिनाग नागसेन अच्युत नन्दि बलवर्म्मा आदि आर्यावर्त्तका अनेक राजालाई बलपूर्वक उखेल्नाले ठूलो प्रभाव फैलिएका)

"यस्योपस्थानभूमिर्नृ पतिशतशिरःपातवातावधूता
गुप्तानां वंशजस्य प्रविसृतयशसस्तस्य सर्वोत्तमर्द्धेः
राज्ये शक्रोपमस्य क्षितिपशतपतेः स्कन्दगुप्तस्य शान्ते
वर्षे त्रिंशद्दशैकोत्तरकशततमे ज्येष्ठमासि प्रपन्ने ॥
ख्यातेऽस्मिन् ग्रामरत्ने ककुभ इति जनैः साधुसंसर्गपूते ।"

(कहावमको अभिलेखबाट)

[जसको (स्कन्दगुप्तको) सलामी दिने ठाउँ सयौं राजाले टाउको नुहाउँदा चलेको हावाले बढारिन्छ । कीर्ति फैलिएका, धेरै असल ऐश्वर्य भएका, इन्द्र जस्ता उहाँ महाराजाधिराज स्कन्द-गुप्तको शान्ति भएको राज्यमा। गुप्तसंवत् १४१ (वि. सं. ५१७) ज्येष्ठ महीनामा ककुभ (कहावम) भनी प्रख्यात भएको, असल मानिस बस्नाले पवित्र भएको गाउँमा]

मानदेवले ४१ वर्ष जति राज्य गरेका थिए। नयाँ नयाँ मुलुक जित्ने, दिग्विजय गर्ने मानदेवको मनसुवा भएको भए आफ्नो राज्य मजबूत र आफू पनि समर्थ भएपछि उनले विजययात्रा गर्ने थिए। बाबुको मृत्यु भएको लगत्तै आफू राम्ररी समर्थ नहुँदै मामाको सहायता लिनुपर्ने अवस्थामा यात्रा गर्ने थिएनन्। यो पनि यस प्रसङ्गमा विचार गर्नुपर्ने कुरा छ ।

यति सबै कुराबाट मानदेवले नयाँ नयाँ मुलुक जितेका होइनन्; मूल (केन्द्र) मा अलि गडबडी भएको मौका छोपी सामन्तहरूले टाउको उठाउन लागेका हुनाले आफ्नो पुर्ख्यौली राज्य थाम्न आवश्यक भई उनले यो विजययात्रा गरेका थिए भन्ने स्पष्ट हुन्छ* ।

गण्डकीपारि 'मल्लपुरी' कहाँनिर थियो; यो खोजीको विषय रूपमै छ; पत्ता लाग्न सकेको छैन। गण्डकीका सात धारामध्ये कालिगण्डकी बढी प्रसिद्ध छ । कालिगण्डकीका वरिपरिका प्रदेश इतिहासका दृष्टिले महत्त्वपूर्ण पनि छन्। यसो हुनाले यस स्तम्भलेखमा उल्लिखित गण्डकी 'कालि-गण्डकी' हो भन्ने मलाई लाग्छ। अर्को कुरा गोरखामा पाइएका लिच्छविकालका दुइ अभिलेखबाट गोरखाभेकसम्म सोझै केन्द्रैबाटै शासन चल्दथ्यो; त्यहाँ सामन्तराज्य खडा भएको थिएन भन्ने थाहा पाइन्छ । यसबाट पनि मानदेवले तरेको गण्डकी कालिगण्डकी नै हो भन्ने देखिन्छ। यस कारण कालिगण्डकी पारि राम्ररी खोजी गर्न सके 'मल्लपुरी' पत्ता लाग्ने सम्भावना छ।

## गरुडध्वजको स्थापना–

मल्लपुरीका सामन्तलाई कज्याएपछि मानदेव राजधानीमा फर्के। आफू गद्दीमा बस्नेबित्तिकै सामना गर्नुपरेको यो खतरा पार गर्न सकेको हुँदा उनी ज्यादै प्रसन्न थिए। हुन पनि पूर्व पश्चिमका सामन्तलाई कज्याउन नसकेको भए त्यस बेला नेपालराज्य टुक्रिने सम्भावना थियो। यस कारण यस बेला मानदेवलाई हर्ष हुनु स्वाभाविक थियो। यसैले फर्केर आई मानदेवले आफैले पनि दानधर्म गरे, आमा राज्यवतीलाई पनि दान दिलाए। यो स्तम्भलेख खण्डित हुँदा यहाँनिर कुरा अलि स्पष्ट छैन। तर चाँगुनारायणको सामुन्ने रहेको खण्डित स्तम्भबाट नारायणको पूजाको लागि मानदेवले जग्गा गूठी पनि राखिदिएका थिए भन्ने थाहा पाइन्छ। आफ्ना यी सब कुरा लेखाई उनले 'गरुडध्वज' राख्न लाए भन्ने पनि यसबाट थाहा पाइन्छ ।

## नेपालको सीमा–

नेपालराज्य टुक्रिएर अनेक राज्य खडा भएताका लेखिएका ग्रन्थको आधार लिई केही विदेशी

* 'इतिहास–संशोधनको प्रमाण प्रमेय' का २०७–९ पृष्ठ, 'पूर्णिमा' ६ अङ्कका ८६–९६ पृष्ठ, 'पूर्णिमा' ८ अङ्कका ७५–७७ पृष्ठ हेर्नुहोस् ।

इतिहासकारले नेपालराज्य प्राचीन कालदेखि न उपत्यका र आसपासका अलिकता प्रदेशमै सीमित थियो भनी लेखेका छन् । केही नेपाली इतिहासकार पनि यसको पछि लागेका छन् । तर यो सत्य होइन । लिच्छविकालमा नेपाल ठूलो थियो भन्ने कुरा चाँगुको यस स्तम्भलेखबाट थाहा पाइन्छ । धर्मदेवको अकस्मात् मृत्युले गर्दा स्वतन्त्र हुन खोजेका पूर्वतिरका र पश्चिमतिरका सामन्त राजाहरूलाई मानदेवले कज्याएको वर्णन यसमा परेको छ । यसबाट कमसेकम पूर्वतिर कोशी-प्रस्रवणक्षेत्र र पश्चिमतिर गण्डकीप्रस्रवणक्षेत्र त अवश्य नेपालराज्यभित्र पर्दथे भन्ने स्पष्ट देखिन्छ ।

लिच्छविकालको नेपालको सीमाबारेमा समुद्रगुप्तको प्रयागको स्तम्भलेखबाट निकै प्रकाश पर्छ । त्यसमा कुमाउँदेखि पूर्वपट्टि, आसामदेखि पश्चिमपट्टिको भाग 'नेपाल' हो भन्ने उल्लेख परेको छ । माथि वृषदेवको वर्णनको प्रसङ्गमा प्रयागको स्तम्भलेखको सो वाक्य उद्धृत गरिसकेको छ ।

पूर्वतिर दोलखा, मूलकोटसम्म र पश्चिमपट्टि गोरखासम्म लिच्छविकालका अभिलेख पाइएका छन् । राम्ररी खोजी गरिएमा अझ पर पर पनि लिच्छविकालका अभिलेख भेट्टिने सम्भावना छ । पश्चिम बांगलुंगमा मानदेवका 'मानाङ्क' मुद्रा पाइएका छन् । जुम्ला लामाथाडा गुफामा पछिल्लो लिच्छविलिपि कुँदिएका माटाका चैत्य भेट्टिएका छन् । यी प्रमाणबाट पनि लिच्छविकालमा नेपाल ठूलो थियो भन्ने सिद्ध हुन्छ ।

चीनिया यात्री युआनच्वाङ्गको वर्णनबाट पनि नेपालको सीमाबारे प्रकाश पर्छ । "हिमालमा निपोलो (नेपाल) रहेको छ; यसको घेरा ४००० ली जति छ; त्यो देश पर्वत बेंसीहरूको ताँतीले भरिएको छ; त्यसको राजधानीको घेरा २० लीको छ " भनी उनले लेखेका छन् ।

(वाटर्स्को 'युआनच्वाङ्गको भारतयात्रा' दोस्रो भागको ८३–८४ पृष्ठ हेर्नुहोस् ।)

१ ली $\frac{१}{३}$ माइल जतिको हुन्छ । $\frac{२५}{११}$ माइलको १ कोश हुन्छ । यस कारण ४००० लीको ५८६$\frac{२}{३}$ कोश हुने भयो । यसरी लमाइ चौडाइको जम्मा २९३ कोश हुने भयो । यसबाट नेपालको लमाइ २०० कोशभन्दा बढी र चौडाइ १०० कोशभन्दा कम देखिन आउँछ ।

यसै गरी अरू पनि अनेक प्रमाणबाट लिच्छविकालमा नेपाल करीब अहिले जत्तिकै थियो भन्ने थाहा पाइन्छ † ।

## लौकिक अवस्था–

यस स्तम्भलेखबाट लिच्छविकालको लौकिक अवस्थाको पनि अलिकता झलक पाइन्छ । यहाँ मानदेवले 'क्षात्रेणाजिमखाश्रयेण विधिना दीक्षाश्रितोहं स्थितः' भनी आफूलाई गर्वसाथ क्षत्रिय हुँ भनी बोलेका छन् । यहाँ मानदेव र उनकी आमा राज्यवतीले ब्राह्मणहरूलाई दान दिएको कुरा पनि परेको छ । यसले त्यस बेला वर्णव्यवस्था थियो भन्ने दर्शाउँछ ।

---

† 'इतिहास–संशोधनको प्रमाण प्रमेय' का २१–२८ पृष्ठ हेर्नुहोस् ।

तल आउने अरू अभिलेखबाट लिच्छविकालको वर्णव्यवस्थाबारे अझ बढी कुरा थाहा पाइन्छ । लिच्छवि शासकहरूले यहाँ वर्णव्यवस्था अनुसारको समाज खडा गर्ने नीति लिएका थिए। उदाहरणार्थ बलम्बूको अभिलेखलाई देखाउन सकिन्छ। त्यहाँ शिवदेवले आफूलाई 'सम्यग्विरचितसकलवर्णाश्रमव्यवस्थः' भनी लेखेका छन् । यसबाट वर्णव्यवस्था कायम गर्न सकेकोमा लिच्छविहरू गौरव संझन्थे भन्ने थाहा पाइन्छ ।

वर्णव्यवस्था कायम भएको हुनाले लिच्छविकालको समाजमा ब्राह्मणको सन्मानपूर्ण स्थान रहेको थियो। यसैले ग्रामका बासिन्दालाई सम्बोधन गर्दा 'ब्राह्मणपुरस्सरान् ग्रामकुटुम्बिनः समाज्ञापयति' भनी लेखिन्थ्यो ।

राजकाजमा क्षत्रियवर्गको विशेष हात रहेको हुँदा यो वर्ग पनि प्रायः माथिल्लो तहमा थियो। अभिलेखहरूमा राजपुत्र (रजपूत) क्षत्रियहरूको उल्लेख धेरै ठाउँमा आएको छ। शङ्खमूल सिकुबहीको अभिलेखमा राजपुत्र वज्ररथ, उनका गोतिया बभ्रुवर्मा, देशवर्माहरूको उल्लेख परेको छ। बभ्रुवर्मा गणदेवको पालामा दूतकका रूपमा रहेका अधिकारी थिए। देशवर्मा पनि अंशुवर्माको पालामा दूतकका रूपमा देखापरेका छन् । सांगाको अभिलेखमा राजपुत्र विक्रमसेनको उल्लेख आएको छ। उनी सर्वदण्डनायक नामक अधिकारी थिए। देउपाटनको अभिलेखमा राजपुत्र शूरसेन, आदेश्वरको अभिलेखमा राजपुत्र नन्दवर्मा, जिष्णुवर्मा, भीमवर्माहरूको उल्लेख परेको छ। अरू अभिलेखमा पनि यस्ता उल्लेख पाइन्छन् । यसबाट लिच्छविकालमा रजपूत–क्षत्रियहरू निकै थिए र उनीहरू ठूलठूला ओहदामा थिए भन्ने थाहा पाइन्छ।

चीनिया वृत्तान्तमा 'नेपालमा खेतिवालको अनुपातमा व्यापारीको संख्या बढी छ' भन्ने वर्णन परेको छ। यसबाट लिच्छविकालमा वैश्यहरू थिए भन्ने कुरामा शङ्का छैन। टेबहालको अभिलेखमा 'वणिजां सार्थवाहेन गुहमित्रेण' भन्ने उल्लेख परेको छ। यहाँ गुहमित्रले आफूलाई वणिक् (बनियाँ) भनेका हुनाले उनी वैश्य थिए भन्ने देखिन्छ ।

नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखमा हंसगृहद्रङ्गको इलाकामा बस्ने सारा बासिन्दालाई भन्दा 'द्रङ्गसीमाभ्यन्तरस्थानाम्ब्राह्मणप्रमुखानाम्माचाण्डालेभ्यो' भनी लेखिएको छ । यसबाट हंसगृहद्रङ्गमा ब्राह्मणलगायत चाण्डालसम्मको बसोबास थियो भन्ने स्पष्ट थाहा पाइन्छ । शूद्रको एक भेद चाण्डाल हो। यसो हुनाले लिच्छविकालमा यहाँ शूद्रहरू पनि थिए भन्ने कुरामा शङ्का छैन।

प्राचीन कालदेखि यहाँ अनेक जातिको बसोबास हुँदै आएको थियो। यिनमा वर्णव्यवस्थाभन्दा भिन्नै प्रथामा हुर्केका जाति पनि थिए । यसो हुँदा सबै जातलाई चार वर्णभित्र समावेश गरी वर्गीकरण गर्नु गाह्रो थियो। यस कारण आजभोलि 'चारवर्ण छत्तीस जात' भन्ने चलन चले जस्तै लिच्छविकालमा 'चार वर्ण अठाह्र जात' भन्ने प्रथा चलेको देखिन्छ। यो कुरा थानकोटको वसन्तदेवको अभिलेखमा परेको "एतस्मिन्ग्रामे ये प्रविष्टाः प्रविविक्षवश्च ब्राह्मणप्रधानाः साष्टादश प्रकृतयः" यस वाक्यले देखाउँछ ।

अर्को कुरा–लिच्छविकालमा जनतालाई धार्मिक स्वतन्त्रता थियो; आफूलाई श्रद्धा भएको जुनसुकै धार्मिक सम्प्रदायमा जनता लाग्न सक्दथ्यो। तर पेशामा भने जनतालाई यस्तो स्वतन्त्रता थिएन। जनताले आफ्नो जातअनुसारको काम मात्र गर्न पाउँथ्यो। यसो हुनाले 'धर्मसङ्कर' नहोस् भन्ने कुराको देखरेख गर्ने एक विशेष अधिकरण (अड्डा) नै त्यस वेला खडा गरिएको थियो। त्यस अधिकरणको नाउँ हो 'भट्टाधिकरण'। यस विषयको विशेष चर्चा पछि गरिनेछ।

यति कुराबाट लिच्छविकालको लौकिक अवस्थाको अलिकता झलक पाइन्छ।

## व्यक्तित्व र चरित्र–

यस स्तम्भलेखमा र अरू अभिलेखमा मानदेवको निकै वर्णन परेका छन्। उनको प्रशंसा गर्न लेखिएका हुनाले ती वर्णन अतिशयोक्तिपूर्ण छन्। यस्ता वर्णनमा गुणको मात्र चर्चा गरिनु र दोषको उल्लेख नपाइनु पनि स्वाभाविक छ। यस कारण यस्ता वर्णन एकतर्फी हुन्छन्। तैपनि मानदेवको व्यक्तित्व र चरित्रबारे भने यताबाट अलिकता कुरा थाहा पाउन सकिन्छ। यस स्तम्भलेखमा मानदेव 'प्रमृष्टकनकश्लक्ष्णावदातच्छवि = बाना लाएको सुन जस्तै मिहीन सफा वर्ण भएका' थिए भनी लेखिएको छ। लाजिम्पाटको अभिलेखमा पनि 'विशुद्धकाञ्चनवपुः = सफा सुन जस्तो जीउ भएका' भन्ने वर्णन परेको छ। यसबाट मानदेव 'गहुँगोरा' थिए भन्ने देखिन्छ। धेरैजसो अभिलेखमा एकै मुखले मानदेव राम्रा व्यक्ति थिए भनी उनको बयान गरिएको छ। 'पीनांस = पुष्ट काँध' 'चारुभुजः = राम्रा हात' 'विकचासितोत्पलदलप्रस्पर्द्धमानेक्षणः = राम्रा ठूलठूला आँखा' आदि शारीरिक गुण मानदेवमा थिए भनी यस स्तम्भलेखमा लेखिएको छ। मानदेवको भरखर चढ्दो उमेरको चित्रण यस अभिलेखमा परेको छ।

मानदेव अस्त्र–शस्त्र चलाउन सिपालु, लोकव्यवहारमा कुशल, धर्मकर्ममा आस्था राख्ने, शूरा थिए भन्ने पनि यस स्तम्भलेखबाट थाहा पाइन्छ।

## विद्याको उन्नति–

चाँगुको यो स्तम्भलेख ऐतिहासिक दृष्टिले मात्र होइन, विद्वत्ताको दृष्टिले पनि श्रेष्ठ छ। यस स्तम्भलेखका रचयिताको नाउँ थाहा पाउन सकिएको छैन। तर उनी संस्कृतभाषामा राम्ररी दखल भएका, उच्च कविता–शक्ति भएका विद्वान् थिए भन्ने कुरा यस स्तम्भलेखका प्रत्येक श्लोकबाट भने जस्तै झल्कन्छ। यहाँ राज्यवती सती जान लाग्दा आमा–छोराको संवाद कविले बडो हृदयस्पर्शी रूपमा प्रस्तुत गरेका छन्। यसै गरी अरू वर्णनमा पनि कविको विद्वत्ता देखिन्छ। मानदेवका अरू अभिलेखको रचनाशैली पनि सुन्दर र विद्वत्तापूर्ण छ। यसबाट त्यस वेला विद्याको उन्नति भएको थियो; मानदेवको आश्रयमा विद्वान्हरू थिए भन्ने थाहा पाइन्छ।

# लाजिमपाटको मानदेवको पालाको अभिलेख

लाजिमपाटमा धोवीचौरनामक एक थुम्को जस्तो ऐतिहासिक स्थल छ। त्यहाँ मानदेवका पालाका तीन अभिलेख पाइएका छन्। तीमध्ये एउटा अभिलेख यो हो। यो अभिलेख शिवलिङ्गको जलहरीमा कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ५० अङ्गुल लम्बा, ३ अङ्गुल चौडा छ। यहाँ संवत् ३८८ दिइएको छ।

नोलीद्वारा ४ संख्याको रूपमा यो छापिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको यसको प्रतिलिपिको आधारमा अहिले अलि बढी भाग पढ्न सकिएको छ।

## मूलपाठ—

| | |
|---|---|
| १. संवत् ३८८ | शौर्य्येण नीतिसहितेन विजित्य सम्यक् चक्र[१] ... ... ... |
| | ... ... ... (शु) द्धकर्मा[२] |
| २. ज्येष्ठमासे शुक्लदिवा १४ | तस्याज्ञया शुभमतेश्शुभवृद्धिलिङ्गम् भृत्येन[३] भक्तिमहता नरवर्म्मनाम्ना प्रासादसंस्थमनुरूपमिह[४] प्रं(कल्प्य) |
| | ... ... चारुलिङ्गम्[५] |

नोलीका पाठ— १. च— २.... ३..ए. न
४. प्रसादस्य—नुरूप—ह ५....

# अनुवाद

शुद्ध काम गर्ने (जसले)....नीतिसहितको शुन्याइँले.....राम्ररी जितेर (राज्य) गर्नुभयो। असल बुद्धि भएका उहाँको (मानदेवको) आज्ञाले भक्त सेवक नरवर्माले......संवत् ३८८ ज्येष्ठ शुक्ल चतुर्दशीमा कल्याण गर्नामा कारण भएको, मन्दिरसहितको मिल्दो राम्रो लिङ्ग यहाँ स्थापना गरे ।

## व्याख्या–

यो अभिलेखको केही भाग पाप्रो उप्केको हुनाले पढ्न नसकिने भइसकेको छ । अहिले मूल अभिलेखबाट भन्दा पनि केही बढी भाग राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट पढ्न सकिएको छ । यसबाट ३०।४० वर्ष अघिभन्दा अहिले यो अभिलेख बढ्ता फुटिसकेको स्पष्ट छ । यस्ता अभिलेखको सुरक्षाको प्रवन्ध गरिएन भने पछि झन् झन् फुट्तै जाने कुरालाई यसले औंल्याएको छ ।

यस अभिलेखमा संवत् ३८८ रहेको छ । यहाँ राजाको नाम भएको भाग फुटिसकेको छ । संवत् ३८६ देखि ४२७ सम्मका अभिलेखमा राजा मानदेवको उल्लेख पाइने हुनाले यस अभिलेखमा वर्णित राजा मानदेव नै हुन् भन्ने निश्चित छ ।

खाली शौर्य (मूढेबल) ले अरूलाई कज्याउनु उत्तम राजाको लागि शोभा दिने कहलाएको छैन । खाली नीति (दाउपेच) मात्र खेल्नु पनि राम्रो कहलाएको छैन । यस कारण शौर्य र नीति दुवैलाई ठीक ठीक रूपमा मिलाई प्रयोग गर्न सक्नु नै राम्रो हो भनी शास्त्रकारहरूले बोलेको पाइन्छ। कवि कालिदासले पनि यो कुरा यसरी व्यक्त गरेका छन्–

> "कातर्यं केवला नीतिः शौर्यं श्वापदचेष्टितम् ।
> अतः सिद्धिं समेताभ्यामुभाभ्यामन्वियेष सः ।।" रघुवंश १७।४७

यस अभिलेखमा पनि 'शौर्य्येण नीतिसहितेन विजित्य सम्यक्' भनी यही भाव प्रकट गरिएको छ। यसबाट शौर्य र नीतिलाई ठीकसंग प्रयोग गर्नुपर्छ भन्ने नीति मानदेवको पनि रहेको बुझिन्छ ।

राजा मानदेवबाट आज्ञा लिई नरवर्माले शिवलिङ्ग स्थापना गरी यो अभिलेख कुँदाएका हुन् । यहाँ उनले आफूलाई मानदेवका भृत्य भनेका हुनाले नरवर्मा मानदेवको आश्रयमा रहेका कुनै अधिकारी देखिन्छन् ।

नरवर्माले स्थापना गरेको शिवलिङ्ग त अहिले बचेको छ । तर यो शिवलिङ्ग स्थापना गर्न उनले बनाउन लाएको मन्दिर भने अहिले बचेको छैन । यसको भग्नावशेषसम्म पनि अहिले केही पाइएको छैन । नेपाल–उपत्यकामा बराबर ठूल–ठूला भूकम्प आदि भइरहने हुनाले प्राचीन

मन्दिर, दरबार, घरहरू सुरक्षित रहन सकेका छैनन् । यस कारण वास्तुकलासम्बन्धी प्राचीन इतिहास पत्ता लाउने साधन ज्यादै कम पाइन्छन् ।

नेपालमा प्राचीनकालदेखि अविच्छिन्न रूपमा प्रतिष्ठित रहेका लोकप्रिय धर्ममध्ये 'शैव' धर्मको प्रमुख स्थान रहेको छ। यसो हुनाले श्रद्धालु राजा, प्रजाले स्थापना गरेका प्रशस्त शिवलिङ्ग-हरू हाम्रो यहाँ यत्र तत्र छरिएर रहेका पाइन्छन् ।

—★—

[४ संख्या]

# लाजिमपाटको मानदेवको अभिलेख

लाजिमपाट धोबीचौरमा मानदेवले स्थापना गरेको वामनमूर्ति रहेको थियो। त्यस वामनमूर्तिको पादपीठमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ३२ अङ्गुल लम्बा, ३ अङ्गुल चौडा छ। यहां संवत् ३८९ दिइएको छ।

सिल्भाँ लेभीद्वारा २ संख्याको रूपमा यो छापिएको छ। सो अपूर्ण छ। हाल यो वामनमूर्ति राष्ट्रिय संग्रहालयमा राखिएको छ।

## मूलपाठ–

१. ॐसंवत् ३८९मातुः श्रीराज्यवत्या हितकृतमनसः सर्व्वदा पुण्यवृद्धयै
राजा श्रीमानदेवः शुभविमलमतिः पात्रदानाम्बुवर्षी

२. लक्ष्मीवत्कारयित्वा भवनमिह शुभं स्थापयामास सम्यक्
विष्णुं विक्रान्तमूर्त्तिं सुरमुनिमहितं सर्व्वलोकैकनाथम्

वैशाखशुक्लदिव २

# पशुपति तिलगङ्गाको मानदेवको अभिलेख

पशुपति वाग्वतीपारि तिलगङ्गानिर पनि मानदेवले स्थापना गरेको अर्को वामनमूर्ति रहेको छ। त्यसैको पादपीठमा यो अभिलेख कुँदिएको छ।

संस्कृत–सन्देश १।१० मा म र ज्ञानमणि नेपालले यो अभिलेख छपाएका छौं। नोलीद्वारा ३ संख्याको रूपमा पनि यो छापिएको छ।

लाजिमपाटको अभिलेख र तिलगङ्गाको यो अभिलेख उही एउटै हो। कुँदाइमा मात्र अलिकता अन्तर छ। लाजिमपाटको अभिलेखमा उठानमा 'ॐ' पनि छ। यसमा ॐ छैन। लाजिमपाटको अभिलेखमा 'वैशाखशुक्लदिव २' दोस्रो पङ्क्तिको अन्त्यमा दिइएको छ। तिलगङ्गाको यस अभिलेख-मा चाहिं सो तिथिमिति दोस्रो पङ्क्तिको उठानमा दिइएको छ। लाजिमपाटको अभिलेख अलि खिइएको छ। यो चाहिं सफा छ।

उही अभिलेख हुँदा यी दुइ अभिलेखलाई भिन्नाभिन्नै नदिई एउटै मात्र दिइएको भए पनि काम चल्ने थियो। तर यसो गर्दा यी अभिलेखको प्राप्तिसम्बन्धी इतिहास लुप्त हुन जाने तथा दुइ भिन्न ठाउँमा रहेका यी अभिलेखले ती ठाउँको ऐतिहासिकताबारे केही थ्रौंल्याउने हुनाले पनि भिन्नाभिन्नै यहाँ दिइएका हुन्।

## मूलपाठ–

१. संवत्   मातुः श्रीराज्यवत्या हितकृतमनसः सर्व्वदा पुण्यवृद्ध्यै
           राजा श्रीमानदेवः शुभविमलमतिः पात्रदानाम्बुवर्षी
२. वैशाख   लक्ष्मीवत्कारयित्वा भवनमिह शुभं स्थापयामास सम्यक्
शुक्लदिव २   विष्णुं विक्रान्तमूर्त्तिं सुरमुनिमहितं सर्व्वलोकैकनाथम्

## अनुवाद—

संवत् ३८९ वैशाख शुक्ल द्वितीया । असल सफा बुद्धि भएका, सत्पात्रमा पानीसरह दान वर्षा गर्ने राजा श्रीमानदेवले हित गर्ने मन भएकी (आफ्नी) मुमा राज्यवतीको सधैं पुण्यको बढिबढाउ होस् भन्नानिमित्त राम्रो असल मन्दिर बनाउन लगाई देवता र ऋषिहरूले पूजिएका, सारा संसारका एउटै मालिक त्रिविक्रम (वामन) मूर्ति राम्ररी यहाँ स्थापना गर्नुभयो ।

### व्याख्या—

लाजिमपाटमा र तिलगङ्गामा गरी राजा मानदेवले स्थापना गरेका दुइ वामनमूर्ति पाइएका छन् भन्ने कुरा माथि लेखिसकेको छ । यी दुइ विक्रान्त विष्णुमूर्तिमा अलिकता अन्तर छ तापनि प्रायः दुवै उस्तै छन्। दुवै मूर्ति एकै दिन प्रतिष्ठा गरिएका हुन् ।

आमा राज्यवतीको पुण्य बढोस् भन्ने उद्देश्यले यो विक्रान्त मूर्ति स्थापना गरिएको हो भनी यहाँ मानदेवले स्पष्टसंग लेखाएका छन् । तर यस मूर्तिमा अङ्कित विभिन्न कुरालाई लिई कुनै इतिहासकारले विचित्र कल्पना गरेका छन् ।

बलि राजाले अश्वमेध यज्ञ गरी दानधर्म गरिरहेको अवस्थामा वामन रूपले विष्णु आई पछि विक्रान्त रूप लिएको दृश्य यस मूर्तिमा सुन्दर ढङ्गले अङ्कित गरिएको छ। यस मूर्तिमा धेरै विषयवस्तु दर्शाइएका छन् । विष्णुले विक्रान्त रूप लिएको देखाउँदा विष्णुको एक पाउ आकाशमा रहेको देखाइएको छ । आकाश 'शून्य' रूपको हुँदा आकाशको प्रतीकस्वरूप मुख बाएर 'आँ' गरिरहेको एक सानो मूर्ति अङ्कित गरिएको छ । जुन मूर्ति आकाशभैरवको जस्तो छ । 'आकाशभैरव'को उत्पत्तिबारे विचार गर्न यताबाट केही मदत पाइन्छ । आकाशतिर रहेको पाउको दर्शन–पूजन गर्न आउने केही देवताका मूर्ति पनि अङ्कित छन् । विष्णुको अर्को पाउ पातालमा रहेको दर्शाइएको छ । पाताललोकमा नागहरू बस्छन् भन्ने धारणाअनुसार पातालमा रहेको पाउको सेवा–शुश्रूषा नागहरूद्वारा गरिएको दर्शाइएको छ।आकाशभन्दा मनिको भाग दर्शाउन उल्टिएर रहेको त्रिशङ्कुको मूर्ति अङ्कित छ । तल संकल्प गर्न लागेका बलि राजा र उनका रानीहरू अङ्कित छन् । अश्वमेध यज्ञको चिह्नस्वरूप घोडा र यूप (मौलो) पनि अङ्कित छन् ।

यति धेरै कुराहरू कलाकारले ठूलो खूबीसाथ यस मूर्तिमा देखाएका छन् । विक्रान्त रूप लिएको विष्णुसम्बन्धी आख्यानहरूको मनन गरी गहिर हेर्‍यौं भने यस मूर्तिमा व्यक्त गर्न खोजिएका उपर्युक्त कुराहरू स्पष्टसंग बुझिन्छन् ।

यसो भए तापनि यस मूर्तिलाई लिई जुन कल्पना गरियो, त्यसले केही काल निकै भ्रम फैलाइएको थियो। अब त्यसबारे पनि अलिकता विचार गर्नुपरेको छ ।

राजा मानदेवले यी वामनमूर्ति किराती राजा थुङकोलाई विष्णुको वामनावतारको रूपमा संमान गरी राखेका हुन् भन्ने ती इतिहासकारको तर्क छ। यसका लागि पहिलो प्रमाण 'आचार्य कौटल्यले आफ्नो ग्रन्थमा वामन र किरातलाई एकै पारी लेखेका छन्' भन्ने दिइएको छ। अर्को प्रमाण 'किरात राजा थुङकोले बुद्धको जन्मस्थल लुम्बिनीमा अशोकले राखेको स्तम्भबाट घोडा खसालेका थिए; त्यसैको समर्थन गर्न यहाँ वामनमूर्तिमा घोडा देखाइएको हो' भन्ने छ। तर यी प्रमाण गतिला छैनन्। यी प्रमाणबाट उपर्युक्त तर्क सिद्ध हुँदैन। किनभने 'वामन' भन्ने कुनै जाति होइन। जुनसुकै जातको मानिस पनि वामन (बाउन्ने) हुन सक्तछ। आचार्य कौटल्यले वामन र र किरातलाई एकै पारी लेखेका छैनन्। राजाले आफ्नो रक्षा कसरी गर्नुपर्छ भन्ने कुरा बताउँदै जाँदा आचार्य कौटल्यले यस्तो लेखेका छन्–

"शयनादुत्थितः स्त्रीगणैर्धन्विभिः परिगृह्येत ॥१॥ द्वितीयस्यां कक्ष्यायां कञ्चुकोष्णीषिभिर्वर्षवराभ्यागारिकैः ॥२॥ तृतीयस्यां कुब्जवामनकिरातैः ॥३॥" (१ अधि २१ अ.)

(बिछयाउनाबाट उठेका राजालाई धनु भिरेका स्वास्नीमान्छेहरूले पहरा दिनू।१। दोस्रो खण्डमा जामा पगरी लाएका नपुंसक र दरबारभित्रको प्रबन्ध गर्ने काममा खटिइएका मानिसले पहरा दिनू।२। तेस्रो खण्डमा कुप्रा, बाउन्ने र किरातहरूले पहरा दिनू।)

यहाँ किरात र वामन (बाउन्ने) मा कुनै सम्बन्ध देखाइएको छैन भन्ने स्पष्ट छ। जाल–झेल व्यभिचार नहोस् भनी दरबारमा किरात, बाउन्ने, कुप्राहरू राखिन्थे। यस कुराको उल्लेख अन्त पनि पाइन्छ। यस कारण वामन र किरात एकै जातिका हुन् भन्ने कुरा सत्य होइन।

अश्वमेध यज्ञमा घोडाको प्रधानता रहन्छ। यसैले घोडा अश्वमेध यज्ञको चिह्न मानिएको छ। भारतमा समुद्रगुप्तले अश्वमेध यज्ञ गरेका थिए। यसको उपलक्ष्यमा मारेको समुद्रगुप्तको टकमा एकापट्टि यज्ञयूपमा बाँधिएको घोडा कुँदिएको छ; अर्कोपट्टि हातमा चँवर लिएकी स्वास्नीमान्छेको (महारानीको) मूर्ति अङ्कित छ; छेउ–छाउमा "राजाधिराजः पृथिवीं विजित्य दिवं जयत्याहृतवाजिमेधः = महाराजाधिराज (समुद्रगुप्त) पृथ्वीलाई जितेर अश्वमेध यज्ञद्वारा स्वर्गलाई जित्दै हुनुहुन्छ" भनी लेखिएको छ। अश्वमेध गरी निकालेको कुमारगुप्तको टकमा पनि यूपसहित घोडाको मूर्ति कुँदिएको छ तथा "श्रीअश्वमेधमहेन्द्रः = अश्वमेध यज्ञ गर्नाले इन्द्र जस्ता" भनी लेखिएको छ।

मानदेवका यी वामनमूर्तिमा पनि अश्वमेध यज्ञको बोध गराउनाको लागि नै घोडा कुँदाइएको हो। जुन वेला विष्णु ब्रह्मचारीको रूप लिएर राजा बलिकहाँ गएका थिए; त्यस वेला बलि अश्वमेध यज्ञ गर्न लागिरहेका थिए। श्रीमद्भागवतमा यस कुराको वर्णन यसरी गरिएको छ–

"श्रुत्वाश्वमेधैर्यजमानमूर्जितं बलिं भृगूणामुपकल्पितैस्ततः।
जगाम तत्राखिलसारसंभृतो भारेण गां सन्नमयन् पदे पदे ॥२०॥..

इत्थं सशिष्येषु भृगुष्वनेकधा वितर्क्यमाणो भगवान्स वामनः ।
छत्रं सदण्डं सजलं कमण्डलुं विवेश बिभ्रद्धयमेधवाटम् २३॥"

(अष्टमस्कन्ध १८ अध्याय)

(ठूला बलि राजा भृगुहरूले गराएका अश्वमेध यज्ञ गर्न लागेका छन् भन्ने सुनेर सम्पूर्ण शक्तिले युक्त भएका (भगवान् वामन) पाइलैपिच्छे भारीपनले भुइँ नुहाउँदै उहाँ जानुभयो।....यसरी भृगु र उनका चेलाहरूले अनेक थरी तर्कना गरिएका उहाँ भगवान् वामन छाता, लठ्ठी, जल भरिएको कमण्डलु लिई अश्वमेध यज्ञको मण्डपमा पस्नुभयो ।)

किरात राजा थुङ्को र अशोक सामानकालिक हुन् तथा थुङ्कोले लुम्बिनीको अशोकस्तम्भको घोडा खसालेका हुन् भन्ने कुराको पनि निश्चित प्रमाण छैन। यस कारण यस कुराको समर्थनमा घोडा कुँदाइएको हो भन्ने तर्क आधारहीन छ ।

विष्णुको दशावतारमध्ये वामनावतार एक हो। वामनावतारको महिमा प्राचीन कालदेखि चलिआएको छ। स्कन्दगुप्तको वि. सं. ५१४ को जूनागढको अभिलेखमा पनि वामनावतार विष्णुको स्तुति परेको छ।

लाजिमपाट र तिलगङ्गाका यी वामनमूर्ति कुन उद्देश्यले स्थापना गरिएका हुन् भन्ने कुराको सबभन्दा बलियो प्रमाण त यी मूर्तिमा कुँदिएका अभिलेख नै छन्। यसमा राजा मानदेवले 'आफ्नी आमा राज्यवतीको पुण्यको बढिबढाउको लागि भगवान् वामनको मूर्ति स्थापना गरेको हुँ' भनी स्पष्टसँग लेखाइराखेका छन्। यस कारण अरू आधारहीन तर्क गर्ने ठाउँ नै छैन †।

'लक्ष्मीवद् भवनं कारयित्वा' भन्ने उल्लेख यहाँ परेको छ। यसबाट मानदेवले वामनमूर्ति स्थापना गर्दा सुन्दर मन्दिर पनि बनाउन लाएका थिए भन्ने थाहा पाइन्छ। तर लाजिमपाट र तिलगङ्गा दुवै ठाउँमा अहिले मन्दिरको कुनै अवशेष पनि देखिंदैन।

भावप्रधान यो भव्य मूर्तिले मानदेवको समयमा कलाको पनि उन्नति भएको थियो भन्ने स्पष्ट पारेका छन्। यी मूर्तिका निर्माता अज्ञातनामा कलाकारको कलाको साधना प्रशंसनीय छ। यस्ता सिद्धहस्त निपुण कलाकार मानदेवको समयमा भएका हुँदा उनको पनि यसबाट ख्याति बढेको छ ।

तीनवर्ष अगाडि संवत् ३८६ मा मानदेवले चाँगुनारायणको पूजा गर्दा आमाचाहिँले पनि दान-धर्म गरेको उल्लेख चाँगुको स्तम्भलेखमा परेको छ। अहिले वामनमूर्ति स्थापना गर्दा आमा चाहिँले पनि यसमा साथ दिएको उल्लेख परेको छैन; आमाको पुण्य बढोस् भनी वामनमूर्ति स्थापना गरें भनी मात्र मानदेवले बोलेका छन्। यसबाट यस वेला राज्यवतीको मृत्यु भइसक्यो कि भन्ने शङ्का उठ्छ। यसपछि अरू कुनै अभिलेखमा पनि राज्यवतीको उल्लेख आएको छैन ।

-★-

† 'इतिहास-संशोधनको प्रमाण प्रमेय' का १९९-२०३ पृष्ठ हेर्नुहोस् ।

# लाजिमपाटको क्षेमसुन्दरीको अभिलेख

लाजिमपाट धोवीचौरमा पश्चिमपट्टि पर्खालसंगै एउटा शिवलिङ्ग रहेको छ। त्यसको जलहरीमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ४३ अङ्गुल लम्बा ९ अङ्गुल चौडा छ। यहाँ संवत् ३९० दिइएको छ।

'इतिहास-संशोधन' ६ संख्यामा (४३ क्रमागत संख्यामा) यो अभिलेख मैले छपाएको छु।

## मूलपाठ–

१. कान्त्या कान्तिमतः सुरानिह महैर्व्विद्वत्तया पण्डितान्
शूराञ्शूरतयार्त्थिनोपि वसुभिश्शुद्धैर्य्यशोभिर्न्नृपान्
२. दाक्षिण्येन च दक्षिणानरमयत्सर्व्वांश्च सर्व्वैर्ग्गुणैः
यः श्रीमान्स विशुद्धकाञ्चनवपुश्श्रीमानदेवो नृपः
३. पत्नी तस्याब्जपत्रामलशुभनयना श्लाघ्यसौभाग्यरूपा
सञ्चित्य क्षेमसुन्दर्य्यनुपमगुणधीर्द्धर्म्मकार्य्यैककार्य्या
४. श्रीमत्संस्थानरूपम्भवनमिह दृढङ्कारयित्वानुरूपम्
ऐशानं लिङ्गमग्र्यं विधिवदनुपमं स्थापयामास भक्त्या
५. संवत् ३९० ज्येष्ठमासे शुक्लपक्षे दिव ७

## अनुवाद–

कान्ति भएकाहरूलाई कान्तिले, देवताहरूलाई पूजाले, पण्डितहरूलाई विद्वत्ताले, शूराहरूलाई शुन्याईले, माग्नेहरूलाई धनले, राजाहरूलाई सफा कीर्तिले, सिपालुहरूलाई मनअनुसार चल्नाले

(यसरी) सबैलाई सबै गुणले जो खुशी पार्नुहुन्छ । सफा सुनको जस्तो जीउ भएका उहाँ राजा श्रीमानदेव हुनुहुन्छ ॥१॥

उहाँकी (मानदेवकी) रानी, कमलको पात जस्तो सफा राम्रो आँखा भएकी, असल भाग्य र रूप भएकी, बेजोड गुण र बुद्धि भएकी, धर्मकर्ममा मात्र लाग्ने भएकी क्षेमसुन्दरीले विचार गरीकन राम्रो आकार प्रकार भएको, बलियो, सुहाउँदो मन्दिर बनाउन लगाई भक्तिले महादेवको राम्रो असल लिङ्ग यहाँ विधिपूर्वक स्थापना गर्नुभयो ॥२॥

संबत् ३९० ज्येष्ठ शुक्ल सप्तमी ।

## व्याख्या–

संवत् ३९० (वि. सं ५२५) मा क्षेमसुन्दरीले शिवलिङ्ग स्थापना गरी यो अभिलेख कुँद्न लाएकी हुन् । क्षेमसुन्दरी मानदेवकी रानी हुन् भन्ने वर्णन यस अभिलेखमा परेको छ । यी क्षेमसुन्दरी-बाहेक गुणवती र भोगिनी पनि मानवदेवका रानी देखिएका छन् । भोगिनीलाई 'देवी' भनिएको छ र उनीमा 'श्री' लागेको छ । गुणवती र क्षेमसुन्दरीमा 'श्री' जोडिएको छैन । यसबाट 'भोगिनी'-चाहिं बडामहारानी र क्षेमसुन्दरी र गुणवती रानी हुन् भन्ने थाहा पाइन्छ ।

एक कुशल शासकमा हुनुपर्ने गुणको वर्णन यहाँ मानदेवमा गरिएको छ । यस्ता वर्णन अति-शयोक्तिपूर्ण पनि हुने हुनाले यिनको ऐतिहासिक महत्त्व त्यति हुँदैन । तैपनि मानदेव आफूलाई कस्ता राजाका रूपमा प्रख्यापन गर्न चाहन्थे भन्ने कुरा यस्ता वर्णनबाट हामी थाहा पाउँछौं ।

मानदेवका पालाका धेरैजसा अभिलेखमा उनी राम्रा फुर्तिला थिए भन्ने वर्णन परेको पाइन्छ । यस कारण 'कान्त्या कान्तिमतोऽरमयत्' यो उक्ति केही सार्थक देखिन्छ । मानदेवमा धार्मिक उदारता थियो । वैष्णव, शैव, बौद्ध, आदि सम्प्रदायमा उनले उत्तिकै आस्था देखाएका थिए । यस कारण 'सुरान् महैररमयत्' यो भनाइ पनि केही मिल्दो नै देखिन्छ । मानदेवको आश्रयमा विद्वान्हरू थिए । उनले विद्वान्हरूको कदर नगरेका भए चाँगुको स्तम्भलेख जस्तो पाण्डित्यपूर्ण रचना गर्न सक्ने विद्वान् उनको साथमा रहने थिएनन् । स्वयं मानदेव पनि पढेलेखेका पुरुष थिए । यस कारण 'विद्वत्तया पण्डितानरमयत्' भन्ने वर्णन पनि केही सार्थक नै देखिन्छ । यसै गरी यहाँ वर्णित अरू कुरामा पनि केही सार्थकता रहेको देखाउन सकिन्छ । तर यस्ता वर्णनको ऐतिहासिक महत्त्व भने त्यति छैन । सबै असल शासकमा यस्ता वर्णन घट्न सक्छन् ।

क्षेमसुन्दरीले स्थापना गरेको यस शिवलिङ्गको लागि पनि बलियो राम्रो मन्दिर बनाइएको उल्लेख अभिलेखमा परेको छ । परन्तु यस मन्दिरको पनि कुनै नामोनिशान अहिले भेट्टिएको छैन । लाजिमपाट धोवीचौरको यस थुम्कोमा मानदेवले स्थापना गरेको वामनमूर्ति, नरवर्माले स्थापना गरेको शिवलिङ्ग, क्षेमसुन्दरीले स्थापना गरेको शिवलिङ्ग अलि अलि फरकमा संगसंगै भने जस्तै भेट्टिएका छन् । यी तीनैका अभिलेखमा मन्दिरको उल्लेख परेको छ । यसरी यो थुम्कोमा उत्खनन हुनु आवश्यक छ भन्ने स्पष्ट छ । राम्ररी उत्खनन गरिए लिच्छविकालको इतिहासमा प्रकाश पार्ने केही उपलब्धि हुने देखिन्छ ।

★

# विष्णुपादुकाको फेदीको मानदेवको अभिलेख

बूढानीलकण्ठ नारायणस्थानको पश्चिमोत्तरतिर विष्णुपादुका डाँडाको फेदीमा विष्णुमतीको तीरैमा एउटा पीपलको बोट छ। सो पीपलबोटनिर एउटा शिवलिङ्ग रहेको छ। त्यसको जलहरीमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ४८ अङ्गुल लम्बा, ९ अङ्गुल चौडा छ।

'पूर्णिमा' १५ पूर्णाङ्कमा संशोधनमण्डलद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ–

१. ... ... ...स्त्वत्कृतेनेह यस्मात्
त्वत्तस्तस्माज्जगदविहतञ्जायते लीयते च
भक्तिप्राणैरमलमतिभिस्त्वम्मुनीन्द्रैरनिन्द्यैः
देवैस्सेन्द्रैरपि च भगवन्स्तूयसे वन्द्यसे च १
२. ... ... कुमतिग्रस्तघोरान्धकारे
नानाकारे प्रचुरनरकप्रेततिर्य्यक्प्रतिष्ठे
ये सेवन्ते न खलु भगवंस्त्वां जना भक्तियुक्ताः
ते सेवन्ते जननमरणव्याधिदुःखान्यभीक्ष्णम् २
३. [श्रीमानदेव]नृपतिः प्रणतो जगाद
त्वत्स्थापनाजनितमस्ति यदत्र पुण्यम्

तत्सर्व्वलोकसहितस्य विवृद्धमूलम्
दुःखक्षयाय भगवन्मम सर्व्वथास्तु (३)
४. [संवत् ३]९६ प्रथमाषाढे शुक्लदिव १२

## अनुवाद–

भगवन् ! . . . .किनभने हजुरकै कामबाट यहाँ . . .त्यस कारण हजुरबाटै सारा संसारको सृष्टि हुन्छ तथा प्रलय हुन्छ। अति भक्ति गर्ने, सफा बुद्धि भएका, असल चरित्र भएका ठूलठूला मुनिहरूले र इन्द्रलगायत देवताहरूले पनि हजुरको स्तुति गरिन्छ, वन्दना गरिन्छ ॥१॥

भगवन् ! खराब बुद्धिले छोपेको हुँदा घोर अन्धकारले छाएको, नानाप्रकारको . . .पर्दा पनि जुन मानिसहरू भक्तिपूर्वक हजुरको सेवा गर्दैनन्, तिनीहरूलाई सधैं जन्म मृत्यु रोग आदिले पिर्छन् ॥२॥

भगवन् ! हजुरको (मूर्ति) स्थापना गर्दा भएको पुण्यले राम्ररी जरो हालीकन मलगायत सारा लोकको हरकिसिमले दुःख हरिदेओस् भन्ने राजा श्रीमानदेवको प्रणामपूर्वक प्रार्थना छ ।

संवत् ३९६ प्रथमाषाढ शुक्ल द्वादशी ।

### व्याख्या–

असुरक्षित अवस्थामा रहेको हुनाले यस अभिलेखको छेउको अलिकता भाग फुटिसकेको छ। यसो हुनाले शिवलिङ्ग स्थापना गर्ने राजाको नाम अहिले देखिंदैन। संवत्को अङ्कमा पनि शतस्थानी अङ्क फुटेको छ। यसो हुनाले यो अभिलेख कसको हो भन्ने प्रश्न उठ्छ। तर यस अभिलेखको लिपि र अरू कुरा विचार गर्दा यो अभिलेख राजा मानदेवको हो भन्ने कुरामा सन्देह रहंदैन। मानदेवका अरू अभिलेखको लिपि र यसको लिपि ठ्वाक्कै मिल्छ। संवत्मा दशस्थानी र एकस्थानी अङ्क बचेको हुनाले यो अभिलेख संवत् ३९६ को हो भन्ने निश्चित हुन्छ। सं. ३८६ देखि ४२७ सम्म मानदेवका पालाका अभिलेख पाइएका हुनाले यो अभिलेख मानदेवकै हो भन्ने सिद्ध हुन्छ। राजाको नाउँ फुटेको ठाउँमा 'श्रीमानदेव' पाठ हाल्दा छन्दले पनि यस कुरामा साथ दिन्छ। इत्यादि कुरा विचार गर्दा यो अभिलेख मानदेवकै हो भन्ने निश्चित हुन्छ।

### धार्मिक समन्वय–

लिच्छविकालमा वैष्णव, शैव, बौद्ध आदि विभिन्न धार्मिक सम्प्रदायहरू प्रचलित थिए। मानदेवले ती विभिन्न धार्मिक सम्प्रदायहरूमा समान आस्था देखाएर धार्मिक समन्वयको राम्रो उदाहरण प्रस्तुत गरेका छन्। चाँगुनारायणको पूजा, गरुडध्वजको स्थापना, वामनमूर्तिको स्थापना आदि गरेर उनले वैष्णव सम्प्रदायमा आस्था देखाएका छन्। लगत्तै थंतुरीद्रङ्गमा शिवलिङ्ग

स्थापना गरको यस उदाहरणले शैव–धर्ममा पनि उनको उत्तिकै आस्था थियो भन्ने देखाएको छ। आफ्नै नाउँमा 'श्रीमानविहार' बनाउन लाएर बौद्धधर्ममा पनि उनले समान आस्था व्यक्त गरेका छन् ।

यसरी मानदेवले विभिन्न धार्मिक सम्प्रदायलाई संगसंगै फस्टाउने अवसर दिएका छन् । यति मात्रै होइन, धार्मिक विचारधारामा समेत एकले अर्कोको पूर्ति गर्न सक्ने सम्भावना उनले देखाएका छन् । थंतुरीद्रङ्गको मानदेवको यो अभिलेख अलि गहिरिएर अध्ययन गर्‍यौं भने यो कुरा बुझ्न सकिन्छ ।

संसारलाई रोग–व्याधि, जरा, मरण आदि कुराले सताएको हुनाले संसार दुःखमय छ । यस्तै दुःखबाट छुट्कारा पाउन बुद्धले निर्वाणमार्ग देखाएथे । बौद्धधर्ममा दुःख, दुःखसमुदय, दुःखनिरोध, दुःखनिरोधमार्ग यी चार कुरा 'चतुरार्यसत्य' नामले प्रसिद्ध छन् । बौद्धधर्मको मूल आधारमा यिनै कुरा रहेका छन् भने पनि हुन्छ । निर्वाणमार्गविषयमा विभिन्न मत निस्केपछि बौद्ध धर्ममा हीनयान, महायान आदि शाखाले जन्म लिए । नेपालमा चाहिं महायान शाखाको बढी प्रचार भएको थियो ।

यस अभिलेखमा 'शिवको उपासना गरे जन्म, मरण, व्याधि आदि दुःखबाट मुक्ति पाइन्छ' भन्ने भाव प्रकट गरिएको छ। यसबाट धार्मिक समन्वयको विचारणीय बाटो उनले देखाउन खोजेको बुझिन्छ ।

अर्को कुरा–महायान शाखाका बौद्धहरू आफू मात्र मुक्त भएर सन्तुष्ट थिएनन् । संसारका सबै सत्त्वको मुक्ति हुनुपर्छ भन्ने उनीहरूको आदर्श थियो । यसै हुँदा उनीहरू आफूले गरेको दान धर्मले सर्वसत्त्वको कल्याण होस् भनेर व्यक्त गर्दथे । यो कुरा अरू धार्मिक सम्प्रदायहरूको लागि पनि आकर्षक ठहरियो । अनि उनीहरूले पनि यसो भन्न थाले । यस अभिलेखमा मानदेवले पनि 'मैले गरेको पुण्यले सबै लोकको दुःख –क्षय होस्' भनी महादेवसंग प्रार्थना गरेका छन् । यसबाट पनि मानदेवको धार्मिक समन्वयको भावना प्रकट हुन्छ ।

–★–

# विष्णुपादुकाको फेदीको अभिलेख

विष्णुपादुका डाँडोको फेदीमा मानदेवको उपर्युक्त शिवलिङ्गको नजीकै पूर्वतिर एउटा शिलास्तम्भ रहेको छ। सो स्तम्भ अड्याउन राखिएको जलहरीमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ४० अङ्गुल लम्बा २ अङ्गुल चौडा छ।

'पूर्णिमा' १५ पूर्णाङ्कमा यो अभिलेख संशोधन-मण्डलद्वारा छापिएको छ।

## मूलपाठ–

१. देव्याः कर्त्तव्यताबुद्ध्या श्रीपादै . . . ग्रजः
शैलस्तम्भक्रियारम्भे केदुम्बाटो नियोजितः

## अनुवाद–

देवी (बडामहारानी) को कीर्ति राख्ने इच्छाअनुसार श्रीपाद (राजा)बाट . .का दाजु केदुम्बाटलाई यो शिलास्तम्भ बनाउने काममा नियुक्त गरियो।

### व्याख्या–

यो अभिलेख संक्षिप्त रूपमा लेखिराखिएको हुनाले अलि अस्पष्ट छ। यसमा संवत् पनि दिइएको छैन; राजाको नाम पनि उल्लिखित छैन। यसो हुनाले यस अभिलेखको समय निश्चित गर्ने एक मात्र आधार यसको लिपि रहेको छ। यो शिलास्तम्भ मानदेवको शिवलिङ्गनजीकै रहेको र यसको लिपि मानदेवको सो अभिलेखसंग ठीक मिल्ने हुनाले यो अभिलेख पनि मानदेवकै हो भन्ने निश्चित हुन्छ। उपर्युक्त मानदेवको शिवलिङ्ग स्थापना भएकै समयमा यो शिला-

स्तम्भको पनि स्थापना भएको हुनाले यस सानो अभिलेखमा संवत्, राजाको नाम आदि उल्लेख गर्नु आवश्यक नठानिएको देखिन्छ ।

'देवीको कीर्ति राख्ने इच्छाअनुसार श्रीपादबाट यो शिलास्तम्भ राख्न लाइएको हो' भन्ने भाव यसमा परेको छ । "राजा भट्टारको देव' यस कोशवचनअनुसार* गद्दीनशीन राजा 'देव' कहलाउँथे भन्ने थाहा पाइन्छ। 'देवी' शब्दले राजासंगै अभिषेक गरिएकी महारानीलाई बुझाउँथ्यो†। सूर्यघाटको अभिलेखमा 'श्रीभोगिनीति कथितास्य बभूव देवी' भन्ने उल्लेख परेको हुनाले मानदेवकी देवी 'भोगिनी' हुन् भन्ने थाहा पाइएको छ । मानदेवको मुद्रामा पनि एकातिर 'श्रीमानाङ्क' र अर्कोतिर 'श्रीभोगिनी' अङ्कित भएको हुनाले उक्त कुराको पुष्टि हुन्छ । यति कुराबाट यस अभिलेखमा उल्लिखित 'देवी' मानदेवकी बडामहारानी 'भोगिनी' हुन् भन्ने निश्चित हुन्छ §।

लिच्छविकालमा 'श्री' शब्दको ठूलो महत्त्व रहेको थियो । त्यस वेला राजा, युवराज, देवी र राजासरहका सामन्त, संयुक्त शासकहरू मात्र 'श्री' विशेषण लाउन पाउँथे । 'श्री' शब्द राज्यलक्ष्मीको पर्यायवाची हुनाले यसको महत्त्व रहेको हो । संस्कृतमा विशेष आदर देखाउन पऱ्यो भने 'पाद' वाचक शब्दको अनुप्रयोग गर्ने चलन थियो । जस्तै–तातपाद, बप्पपाद, भट्टारकपाद आदि । त्यसै गरी राजाको पर्यायको रूपमा 'सरकार' भन्नुपर्दा लिच्छविकालमा 'श्रीपाद' शब्दको प्रयोग गरिन्थ्यो। विशेष गरेर 'श्रीपाद' शब्दले तात्कालिक राजालाई कहन्थ्यो। यसै हुँदा यस अभिलेखमा राजा मानदेवको नामोल्लेख नगरी छोट्करीमा 'श्रीपाद' मात्र भनिएको हो । 'श्रीपाद' शब्दको उल्लेख जैसिदेवलको वसन्तदेवको अभिलेखमा, नक्साल नारायणचौरको अभिलेख आदिमा पनि आएको छ ।

यो शिलास्तम्भ बनाउने काममा नियुक्त अधिकारीको नाम 'केटुम्बाट' भन्ने रहेको छ। 'केटुम्बाट' यो शब्द संस्कृतभाषाको होइन। यो किराती भाषाको शब्द हो। 'बलियो' वा 'माहिलो' भन्ने अर्थमा 'केटुम्बा' शब्द अहिलेसम्म प्रचलित छ भन्ने किरातभाषाविशेषज्ञ श्रीईमानसिंह चेमजोङ्को भनाइ छ। अहिले जेठो, माहिलो भन्ने नाम रहे जस्तै माहिलो भन्ने अर्थमा किरातीभाषामा 'केटुम्बाट' नाम रहेको यताबाट देखिन्छ। यसबाट राजा मानदेवको दरबारमा किरातहरू उनका विश्वासप्राप्त अधिकारीका रूपमा रहेका थिए भन्ने देखिएको छ ।

---

* 'अमरकोश' १।७।१३

† "आसेवितो . . . . . . . .जाम्बूनदघटाभिषेक: शिरसा, लब्धो मनोरथदुर्लभो महादेवीपट्टबन्ध–सत्कारलाभो ललाटेन" (हर्षचरित, पञ्चम उच्छ्वासबाट)

(शिरले सुनको घडाद्वारा अभिषेकको अनुभव गरियो; निधारले पाउन गाह्रो महादेवीको पट्ट बाँध्ने सन्मान पाइयो।)

'देवी कृताभिषेकायाम्' (अमरकोश १।७।१३)

§ 'भोगिनी' बारे तल सूर्यघाटको अभिलेखमा बढी चर्चा गरिनेछ ।

लिच्छविहरूभन्दा पहिले यहाँ किरातहरूको शासन चलेको थियो; किरातहरूलाई जिती लिच्छविहरूले शासन कायम गरेका थिए भन्ने उल्लेख पशुपतिपुराण, गोपालराजवंशावली आदि ग्रन्थमा पाइन्छ। तर किरातकालका ऐतिहासिक सामग्री केही पनि नपाइएको हुनाले केही इतिहासकार यस कुरामा शङ्का गर्छन्। परन्तु अहिले पाइएका लिच्छविकालका अभिलेखहरू केलाएर हेर्दा लिच्छविभन्दा अघि किरातहरूको शासन यहाँ कायम भएको थियो भन्ने दर्शाउने केही आधार पाइएका छन्। लिच्छविकालका शासकहरूले संस्कृतलाई 'राजभाषा' बनाएका थिए। उनीहरूले यावत् कुरा संस्कृतमै लेखाएका पाइन्छन्। तर लिच्छविकालका मुख्य चार अधिकरण –कुथेर शुल्ली, लिङ्ग्वल, माप्चोक– का नाम संस्कृतभाषाका छैनन्। यसै गरी ब्रह्मुङ शुल्ह्मुङ सिङ्कर, फलन्जुविष्टि आदि शासनव्यवस्थासंग सम्बन्ध राख्ने अनेक नाम संस्कृतभिन्न भाषाका छन्। नेपाल– उपत्यकाका असी प्रतिशतभन्दा बढी ठाउँ, नदी कुलो, पोखरी, डाँडो आदिका नाम पनि संस्कृत– भाषाका छैनन्। उपर्युक्त नाउँहरू किरातपरिवारका भाषाबाट रहेका छन्। यहाँ यस विषयको विस्तृत चर्चा गर्नु अलि प्रसङ्ग मिल्दो छैन। तर माथि उल्लिखित अलिकता कुराबाटै पनि यहाँ लिच्छविहरूभन्दा पहिले किरातहरूको शासन चलेको थियो भन्ने स्पष्ट संकेत पाइन्छ *।

थंतुरीद्रङ्गको मानदेवको यस अभिलेखले मानदेवको दरबारमा किरातहरूले आश्रय पाएका थिए भन्ने दर्शाएको छ। हालै हनूमान्ढोकानिर पाइएका एक अभिलेखले पनि लिच्छवि राजदरबारमा किरातको उपस्थिति थियो भन्ने कुरा प्रामाणिक रूपमा देखाएको छ। हनूमान्ढोकाको सो अभिलेख खण्डित छ। तर त्यसमा 'राजभवन . . . किरात' भन्ने स्पष्ट उल्लेख परेको छ। सो अभिलेख अंशुवर्माको ताकाको हो ★।

यहाँ एउटा अर्को कुरामा पनि दृष्टि दिनुपरेको छ। राजाको अन्तःपुरमा व्यभिचार जालझेल आदि नहोस् भनी किरात, वामन, नपुंसक आदि नियुक्त गरिन्थे। यस कुराको उल्लेख कौटलीय अर्थशास्त्र आदि ग्रन्थमा पाइन्छ। राजाले आत्मरक्षा कसरी गर्नुपर्छ भन्ने कुरा बताउँदै जाँदा आचार्य कौटल्यले 'तेस्रो कक्षामा कुप्रा, बाउन्ने र किरातहरूले पहरा दिनू' भनी लेखेका छन्। यसको चर्चा माथि वामनमूर्तिको अभिलेखको व्याख्यामा गरिसकेको छ। संस्कृतवाङ्मयमा अन्त पनि यस कुराको उल्लेख पाइन्छ। जस्तै–

'अथान्तःपुरसहायाः– तद्वदवरोधे।
वामनषण्ढकिरातम्लेच्छाभीराः शकारकुब्जाद्याः ॥६८॥
आद्यशब्दान्मूकादयः। तत्र षण्ढवामनकिरातादयो तथा रत्नावल्याम्–
नष्टं वर्षवरैर्मनुष्यगणनाभावादपास्य त्रपा–
मन्तः कञ्चकिकञ्चुकस्य विशति त्रासादयं वामनः।
पर्यन्ताश्रयिभिर्निजस्य सदृशं नाम्नः किरातैः कृतं

---

* यस विषयको बढी चर्चा 'पूर्णिमा' १७ पूर्णाङ्कको १–८ पृष्ठमा गरिएको छ।

★ तल अंशुवर्माको प्रकरणमा सो अभिलेख दिइएको छ।

कुब्जा नीचतयैव यान्ति शनकैरात्मेक्षणाशङ्किनः ॥" ' (साहित्यदर्पण, तृतीय उच्छास)

(दरबारभित्र बाउन्ने, नपुंसक, किरात, म्लेच्छ, आभीर, शकार (राजाको सालो), कुप्रा लाटाहरू राजाका सहायक हुन्छन्। यिनमा नपुंसक, बाउन्ने, किरातहरूको चाहिं रत्नावलीनाटकमा उल्लेख छ। जस्तै–'मानिसमा गणनै नभएका हुनाले लाज पचाई नपुंसकहरू भागे। यो बाउन्ने-चाहिं डरले कञ्चुकीको जामाभित्र पस्तैछ। छेउ–छेउमा रहेका किरातहरूले आफ्नो नाउँ सुहाउँदो गरे, अर्थात् कुना पसे। आफूलाई देख्ला भन्ने डरले कुप्राहरू झन् नुहेर विस्तारै जाँदैछन् ।)

यो परम्पराले* पनि मानदेवको दरबारमा किरातहरूले प्रदेश पाएको हुन सक्छ। तर हाम्रो यहाँ किरातकालको असर लिच्छविकालको आर्थिक, लौकिक अवस्थामा पनि परेको पाइन्छ । यो विचारणीय छ ।

'.....ग्रजः केदुम्बाटो नियोजितः' भन्ने उल्लेख यस अभिलेखमा परेको हुनाले केदुम्बाटका दाजु पनि प्रसिद्ध व्यक्ति थिए; उनले पनि मानदेवको दरबारमा आश्रय पाएका थिए भन्ने देखिन्छ ।

यसरी यो अभिलेख एक श्लोकको मात्र छ तापनि लिच्छविकालको अलिकता कुरा बुझ्न यसबाट मदत पाइन्छ ।

-★-

* 'इतिहास–संशोधन प्रमाण प्रमेय' को १९९–२०१ पृष्ठ हेर्नुहोस् ।

# विशालनगर टुंडालदेवीको अभिलेख

विशालनगरमा टुंडालदेवीको सानो मन्दिर छ। त्यस मन्दिरको पेटीमा यो अभिलेख कुंदिएको ढुङ्गा रहेको छ। यसको अभिलेख कुँदिएको भाग १२ अङ्गुल लम्बा, १½ अङ्गुल चौडा छ।

'इतिहास–प्रकाश' १ अङ्कको ५७ पृष्ठमा योगी नरहरिनाथ र श्रीजनकलाल ढकालद्वारा यो छापिएको छ। नोलीद्वारा ५ संख्याको रूपमा पनि यो छापिएको छ।

## मूलपाठ–

१. संवत् ३९७ ज्येष्ठमासे शुक्लदिव २

## अनुवाद–

संवत् ३९७ ज्येष्ठ शुक्ल द्वितीया

**व्याख्या--**

यस अभिलेखमा संवत्, महीना र तिथिको मात्र उल्लेख परेको छ। अरू कुनै कुराको उल्लेख छैन। यहाँ संवत्को अङ्क ३९७ स्पष्ट देखिने हुनाले यो अभिलेख राजा मानदेवको ताकाको हो भन्ने थाहा पाइन्छ। यतिबाहेक यो अभिलेखबाट अरू कुनै विशेष कुरा थाहा पाइंदैन।

श्रीरेनिइरो नोलीले यस अभिलेखको प्रतिलिपिसंगै एक देवीको काष्ठचित्रको पनि प्रतिलिपि †

† 'नेप्लिज् इन्स्क्रिप्शनज् इन् गुप्त क्यारेक्टर्ज्' को ७ संख्याको प्रतिलिपि हेर्नुहोस्।

छपाउनुभएको छ । यसरी यो अभिलेखको सम्बन्ध सो चित्रसंग छ भन्ने देखाइएको छ। तर अहिले अभिलेख कुँदिएको ढुङ्गा त्यसै रहेको छ । उक्त काष्ठचित्र त्यहाँ देखिंदैन । यस कारण यस विषयमा निश्चित रूपमा केही भन्नु गाह्रो छ ।

विशालनगर हाँडिगाउँभेकमा लिच्छविकालमा विशेष बस्ती थियो भन्ने कुरा यतातिर पाइएका अभिलेखहरूबाट थाहा पाइन्छ। वंशावलीमा त प्राचीनकालमा विशालनगरमा ठूलो शहर नै बसेको वर्णन परेको छ। जे होस्, मानदेव ताकाको यो सानो अभिलेखले पनि यतातिरको लिच्छविकालको बस्तीको अलिकता संकेत गरेको छ ।

# देउपाटनको मानदेवको पालाको रत्नसङ्घको अभिलेख

पशुपति देउपाटनमा दक्षिणामूर्तिको पश्चिमपट्टि अलि उकालो चढेर गएपछि रूखमनि त्यसै फाँटमा एउटा शिवलिङ्गको जलहरी भेट्टिन्छ। त्यसैमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ५८ अङ्गुल लम्बा ८ अङ्गुल चौडा छ। यहाँ संवत् ३९९ दिइएको छ।

नोलीद्वारा ६ संख्याको रूपमा यो छापिएको छ। संशोधन–मण्डलद्वारा पनि 'इतिहास–संशोधन-को प्रमाण प्रमेय' को २६४ पृष्ठमा यो छापिएको छ।

## मूलपाठ–

१. संवत् ३९९ महेन्द्रसमवीर्य्यस्य कन्दर्प्पसदृशद्युतेः
राज्ञः श्रीमानदेवस्य सम्य(क्पा)लयतः प्रजाः
२. आषाढमासे तत्पादभक्त्या विधिवद्रत्नसङ्घेन सर्व्वदा
रत्नेश्वरः प्रयत्नेन स्थापितोयं सुरोत्तमः
भगवते रत्नेश्वराय रत्नसङ्घेन दत्तं क्षेत्रं यथा
३. शुक्लदिवा१० दुंलङग्रामप्रदेशे पञ्चानां शतानाम्भूमिः ५०० खोपृ-
ङग्राम[1]प्रदेशे षण्णां शतानां भूमिः ६०० दुंप्रङग्राम-

नोलीको पाठ–१. खैपुङग्राम–

प्रदेशे शतस्य भूमि १०० ह्मस्प्रिङग्रामप्रदेशे द्वयर्द्धस्य शतस्य भूमिः २५०[1]

४. विलिविक्षप्रदेशे अर्द्धतृतीयस्य भूमिः २५० वाग्वतीपार-प्रदेशे शतद्वयस्य भूमिः २०० बेम्मायामशीत्युत्तरस्य भूमिः १८० खैनष्पुप्रदेशे नवत्या भूमिः ९०

५. वल–लप्रदेशे[2] शतद्वयस्य भूमिः २०० यूपग्रामक्षेत्र-प्रदेशे शतद्वयस्य भूमिः २००

## अनुवाद–

संवत् ३८६ आषाढ शुक्ल दशमी। इन्द्रको जस्तो पराक्रम भएका, कामदेवको जस्तो कान्ति भएका, राजा मानदेवबाट राम्ररी प्रजाको पालना गरिरहनुभएको वेलामा सधैं उहाँका पाउको भक्ति गर्ने रत्नसङ्घले विधिपूर्वक ठूला देवता रत्नेश्वरलाई कोशिशसाथ स्थापना गरे ।

भगवान् रत्नेश्वरलाई रत्नसङ्घले चढाएका खेत– दुलङ ग्राममा पाँच शय ५०० भूमि, खोपृङ ग्राममा छ शय ६०० भूमि, दुंप्रङ ग्राममा एक शय १०० भूमि, ह्मस्प्रिङग्राममा दुइशय पचास २५० भूमि, विलिविक्षमा दुइ शय पचास २५० भूमि, वाग्वतीपारि दुइ शय २०० भूमि, बेम्मामा एक शय असी १८० भूमि, खैनष्पुमा नब्बे ९० भूमि, वल(ब)लमा दुइ शय २०० भूमि, यूपग्राममा दुइ शय २०० भूमि ।

### व्याख्या–

राजा मानदेवको पालामा रत्नसङ्घनामक व्यक्तिले 'रत्नेश्वर' महादेव स्थापना गरी यो अभिलेख कुँद्न लाएका हुन्। यस अभिलेखको उठानमा राजा मानदेवको वर्णन परेको छ। मानदेव बलिया, राम्रा थिए भन्ने भाव यस वर्णनमा परेको छ। मानदेवको पालाका अरू अभिलेखमा पनि उनको यस्तै वर्णन पाइन्छ। यसो हुनाले यसमा केही सत्यता थियो भन्ने देखिन्छ ।

यहाँ 'सम्यक्पालयतः प्रजाः' भनी राजा मानदेवले राम्ररी शासन गरेको वर्णन पनि गरिएको छ। यस वेला मानदेवले शासन गरेको १३ वर्ष जति भइसकेको थियो। यसको तीस वर्षजति-पछिको अभिलेखमा पनि मानदेवले राम्ररी शासन गरेका थिए भन्ने वर्णन पाइन्छ *। यसरी

---

नोलीपाठ–१. भूमिः १५०

२. .........प्रदेशे....................भूमिः १००

* चांगुको संवत् ४२७ को अभिलेख, पशुपति सूर्यघाटको अभिलेख हेर्नुहोस् ।

आफ्नो ४१ वर्षको लामो शासनकालमा मानदेवले एक उत्तम शासकले जस्तै राम्ररी शासन गरेका थिए भन्ने कुरा उनका पालाका अभिलेखबाट देखिने आएको छ। यद्यपि उनीपछिका शासकहरूले जनतालाई स्वायत्तशासनसम्बन्धी अधिकार सुम्पंदै गए जस्तै मानदेवले जनतालाई यस्तो स्वशासन-सम्बन्धी अधिकार सुम्पेको उल्लेख भने पाइंदैन । तैपनि एक टङ्कारसंग लामो कालसम्म उनले राम्ररी शासन गरेका हुनाले लिच्छविकालको इतिहासमा मानदेवको विशिष्ट स्थान रहेको छ। उनको शासनकालमा कुनै मन्त्री वा भारादारले टाउको उठाउन सकेनन् । यसो हुंदा अधिकार हथ्याउन भइरहने दाउ-पेच उनको पालामा हुन पाएन; जनतामा शान्ति, सुव्यवस्था कायम रह्यो ।

शासनमा स्थिरता रहेको हुनाले यसको असर अरू कुरामा पनि पर्‍यो; आर्थिक उन्नति भयो; विद्या बढ्यो; असल कलाकार जन्मे। यी सब सुशासनका परिणाम हुन् ।

## सार्थवाह्–

रत्नसङ्घ मानदेवका समयका प्रसिद्ध 'सार्थवाह्' थिए। यो कुरा तल आउने अर्को अभिलेखबाट थाहा पाइन्छ। त्यहाँ 'यः सार्थवाह प्रवधीः किल रत्नसङ्घः' भन्ने उल्लेख गरेको छ। व्यापारीहरूको समूहलाई 'सार्थ' भनिन्छ । सार्थहरूका नाइके 'सार्थवाह्' कहिन्छन् । त्यस वेला बाटो–घाटोको कठिनाइले गर्दा एक–दुइ व्यापारीले एक देशबाट अर्को देशमा गई व्यापार गर्नु सम्भव थिएन। यस कारण व्यापारीहरूको समूह मिली यो काम गर्दथे। 'सार्थ' शब्द यस्तै एक देशबाट अर्को देशमा गई व्यापार गर्ने बनियाँहरूलाई बुझाउने शब्द हो। संस्कृत–वाङ्मयमा यसको उल्लेख धेरै ठाउँमा पाइन्छ। कवि कालिदासले पनि यस्ता व्यापारीको चर्चा ठाउँठाउँमा गरेका छन् । शासनव्यवस्था राम्ररी कायम भएको वेलामा एक देशबाट अर्को देशमा गई व्यापार गर्ने सार्थहरूले निष्फिक्रीसंग व्यापार गर्न पाउँछन् भन्ने भाव रघुवंशमा कालिदासले यसरी दर्शाएका छन्–

"वापीष्विव स्रवन्तीषु वनेषूपवनेष्विव ।
सार्थाः स्वैरं स्वकीयेषु चेरुर्वेश्मस्विवाद्रिषु ।।" १७।६४

[ (कुशको सुशासन–कालमा) सार्थहरूले ठूलठूला खोला पोखरी तरे जस्तै तरे; जङ्गलहरूमा बगैंचामा डुले जस्तै डुले; पहाडहरूमा आफ्नै घरमा हिंडे जस्तै हिंडे ।]

यस्ता व्यापारीहरूबाट राष्ट्रलाई पनि अर्थलाभ हुने हुनाले यिनीहरूलाई शासकहरूले सुविधा गरिदिनु आवश्यक हुन्छ† । मुख्य गरी बाटो–घाटोमा सुरक्षाको बन्दोबस्त सरकारतर्फबाट मिलाइ-दिनु आवश्यक हुन्छ। यही कुरा कालिदासले माथि उद्धृत श्लोकमा व्यक्त गरेका छन् । यस्तो सुरक्षाको व्यवस्था नभएमा यस्ता व्यापारीहरू लुटिने धेरै सम्भावना रहन्थ्यो। यो कुरा पनि कवि कालिदासले अर्को ठाउँमा देखाएका छन् । गृहकलहले गर्दा शासनव्यवस्था राम्रो नभएको

---

† यस्ता व्यापारीहरूलाई केही कर माफी गरिदिई प्रोत्साहन दिनू भनी कौटल्यले बोलेका छन्–
"नाविकसार्थवाहेभ्यश्च परिहारमायतिक्षमं दद्यात् ।"

अवस्थामा सार्थहरू लुटिएको घटना 'मालविकाग्निमित्र' नामक नाटकमा उनले यसरी देखाएका छन्–

> "परिव्राजिका–स चाटव्यन्तरे निविष्टो गताध्वा वणिग्गणः।
> राजा–ततस्ततः
> परिव्राजिका–ततः किं चान्यत् ।
>
> तूणीरपट्टपरिणद्धभुजान्तराल–
> मापार्ष्णिलम्बिशिखिबर्हकलापधारि ।
> कोदण्डपाणि निनदत्प्रतिरोधकाना–
> मापातदुष्प्रसहमाविरभूदनीकम् ।. . .

परिव्राजिका–ततो मुहूर्तं बद्धायुधास्ते पराङ्मुखीभूताः सार्थवाहयोद्धारस्तस्करैः।"

(पञ्चम अङ्कबाट)

(जोगिनी–धेरै बाटो हिंडेसकेपछि ती व्यापारीहरू जङ्गलको बीचमा वास बसे ।
राजा–अनि अनि,

जोगिनी– अनि के हुन्थ्यो । ठोक्रो बाँधेको कपडाले छाती कसेका, कुर्कुच्चासम्म लत्रने गरेर मयूरका प्वाँख लाएका, हातमा धनु लिएका, कराइरहेका, डरलाग्दा डाँकाहरू देखापरे।...त्यसपछि ती सार्थवाहका सिपाहीहरूले केही बेर त डाँकाहरूसंग लडे। तर पछि डाँकाहरूले उनीहरूलाई हराए ।)

यस कारण सरकारतर्फबाट यस्ता सार्थवाहहरूको सुरक्षाको बन्दोबस्त हुनुपर्छ भन्ने स्पष्ट छ† ।

रत्नसङ्घको यस अभिलेखमा र अर्को अभिलेखमा उनले राजा मानदेवउपर ठूलो भक्ति देखाएका छन् तथा उनको शासनव्यवस्थाको प्रशंसा गरेका छन् । यसबाट राजा मानदेवले यस्ता व्यापारीहरूलाई सुविधा गरिदिएका थिए भन्ने संकेत पाइन्छ। यसै हुनाले मानदेवको समयमा यस्ता व्यापारीहरू धेरै देखापरेका छन् । यसको ३ वर्षपछिको देवपाटनको अभिलेखमा अर्का सार्थवाह गुहमित्रको उल्लेख आएको छ। रत्नसङ्घले जस्तै सार्थवाह गुहमित्रले पनि 'सम्यक्पालयत्तो महीम्' भनी मानदेवको शासनव्यवस्थाको तारीफ गरेका छन् ।

यति कुराबाट मानदेवको पालामा नेपालको विदेशसंग व्यापार राम्ररी चलेको थियो भन्ने थाहा पाइन्छ ।

सार्थवाह रत्नसंघ धनी व्यक्ति थिए भन्ने कुरा रत्नेश्वर महादेव स्थापना गरी यहाँ राखिदिएको गुठीजग्गाको परिमाणबाट पनि थाहा पाइन्छ। देवता स्थापना गरी त्यसको पूजा–आजाको लागि राखिदिएका अरू अभिलेखसंग यस अभिलेखको तुलना गरी हेर्यौं भने सो कुरा थाहा पाइन्छ ।

† 'सार्थवाह' बारे 'संस्कृत–सन्देश' १।९ मा पनि चर्चा गरिएको छ।

यस अभिलेखबाट यस ताकाको नेपाल–उपत्यकाको भूमिव्यवस्थाको पनि अलिकता संकेत पाइन्छ । यहाँ उल्लिखित 'खोपृङग्राम' वर्तमान ख्वप (भक्तपुर) हो । 'ह्मस्प्रिङ' ग्राम वर्तमान 'ह्मय्पि' (बालाज्यू जाने बाटोमा पर्ने पीठ) भेकको हो कि भन्ने देखिन्छ । 'वाग्वतीपारप्रदेश' भनी पशुपतिपारिको ठाउँलाई भनिन्थ्यो । 'यूपग्राम' ललितपुरमा थियो । यसरी रत्नसङ्घले गूठी राखेका जग्गा एकै ठाउँका छैनन् । कुनै भक्तपुरभेकका, कुनै ललितपुरभेकका, कुनै कान्तिपुरभेकका छन् । यसबाट यस ताका पनि उपत्यकाका जग्गाहरू आजभोलि जस्तै साना साना अनेक खण्डमा विभक्त भइसकेका थिए भन्ने संकेत पाइन्छ । मानदेवभन्दा निकै शताब्दी अघि नै यहाँ जग्गा आबाद भइसकेको संकेत पनि यसले दिन्छ ।

## भूमि–

लिच्छविकालका अभिलेखमा यति 'भूमि' को यति 'मानिका' कुत भन्ने उल्लेख धेरै ठाउँमा परेको छ । जमीनको नापो बुझाउन 'भूमि' शब्द र अनाजको नापो बुझाउन 'मानिका' शब्दको प्रयोग गरिएको यताबाट थाहा पाइन्छ । यी पारिभाषिक शब्दको ठीक अर्थ पत्ता लगाउने प्रमाण अझै पाइएको छैन । तर अनुमान गर्ने आधार भने नभएको होइन । भारतका अभिलेखमा यी शब्दको प्रयोग पाइंदैन । यसो हुनाले हाम्रै नेपालमा प्रचलित नापोलाई बुझाउने शब्द यी हुन् भन्ने देखिएको छ । 'मानिका' एक मुरी जतिलाई बुझाउने शब्द हो भन्ने कुरा माथि परिसकेको छ* । अब भूमि-बारे यहाँ अलिकता विचार गर्नुपरेको छ ।

'भूमि' शब्दको नेवारी भाषामा अनुवाद 'बुं' भन्ने हुन्छ । 'बुं' शब्द लिच्छविकालभन्दा अघिदेखि नै प्रचलित देखिन्छ । लिच्छविकालका अभिलेखमा कति ठाउँका नाममा 'बू' जोडिएको पाइन्छ । उदाहरणार्थ पाटन छिन्नमस्ताको अभिलेखमा उल्लिखित 'थम्बू' ग्राम, बलम्बूको अभिलेख-मा उल्लिखित 'सलम्बू' राजवासक आदिलाई देखाउन सकिन्छ । नेपाल–उपत्यका र आसपास-का प्रदेशमा खेतको नापोलाई बुझाउने प्रसिद्ध पारिभाषिक शब्द 'रोपनी' हो । नेवारी भाषामा एक रोपनी खेत, दुइ रोपनी खेत आदि भन्नुपर्दा 'छपि बुं' 'निपि बुं' आदि भन्ने चलन छ । लिच्छवि-कालको लगत्तै पछिको पाटन वलटोलको एक अभिलेखमा गूठी राखेको जग्गाको चर्चा गर्दा 'क्षेत्रं च तृ रोपणम्' भनी खेतको नापोको पारिभाषिक शब्दको रूपमा 'रोपनी' को उल्लेख आएको छ§ । यस आधारमा विचार गर्दा 'भूमि' शब्दले 'एक रोपनी' जग्गालाई बुझाएको देखिन्छ ।

–★–

---

* १ संख्याको अभिलेखको व्याख्या हेर्नुहोस् ।

§ 'अभिलेख–संग्रह' २ भागको १३ पृष्ठ हेर्नुहोस् ।

# देउपाटनको मानदेवको पालाको अभिलेख

देउपाटनमा उपर्युक्त 'रत्नेश्वर' शिवलिङ्गको नजीकै दक्षिणतिर घरको आंगनमा अर्को शिवलिङ्ग रहेको छ। त्यस शिवलिङ्गको जलहरीमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ४० अङ्गुल लम्बा, ७ अङ्गुल चौडा छ।–

नोलीद्वारा १० संख्याको रूपमा यो छापिएको छ। राष्ट्रिय–अभिलेखालयमा रहेको प्रतिलिपिको आधारमा यसको अलि बढी भाग पढ्न सकिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट यसको संवत् पनि ठम्याउन मदत पाइन्छ। सो प्रतिलिपिमा संवत् भएको ठाउँका अक्षर फुलेका हुनाले स्पष्ट त छैनन्। तर सूक्ष्मदृष्टि दिएर हेर्‍यौं भने यस अभिलेखको संवत् ठम्याउन सकिन्छ। त्यही प्रतिलिपिको आधारमा यस अभिलेखको संवत् ४०२ हो भन्ने मलाई लागेको छ।

## मूलपाठ–

१. [संवत्] ४०२ ज्येष्ठमास शुक्लपक्षदिव १३[१]
श्रीमानदेवनृपतेश्चरणप्रसादात् यःसार्थवाह उरुधीः किल रत्नसङ्घ[२]ः
२. ·········मिनः प्रभुसङ्घनाम्नः लिङ्गाश्रिताकृतिरियञ्जगतो हिताय
प्रभुकेश्वरस्य क्षेत्राभिलेख्यं यथा प्रङ्प्रिङ्प्रदेशे[३]शतस्य भूमि १००
पिण्डक मानि[का··]

---

नोलीका पाठ–

१. (संवत्)......४.....माघ शुक्लपक्षदिव १३
२. ......   रु...   लर रत्नसङ्घः
३. प्रङ्प्रिङ्प्रदेशे...

३. …(प्र)देशे (प)ञ्चाशतो भूमि ५० पिण्डकं मानिकाः २२ मैशिङ-प्रदेशे चत्वारिंशतो भूमि ४० पिण्डकं मानिकाः २० वोतवोरुषो-प्रदेशे षष्टेर्भूमि (६०…)

४. …न्प्रदेशे त्रिंशतो भूमि ३० पिण्डकं मानिकाः १८ सोताटोजोल्प्र-प्रदेशे चत्वारिंशतो भूमि ४० पिण्डकं मानिकाः २५ प्रयिट्टिखा-प्रदेशे त्रिंश(दु)त्तरस्य[१] शतस्य (भूमि १३०)

५. पिण्डकं मानि ७२

## अनुवाद

संवत् ४०२ ज्येष्ठ शुक्ल त्रयोदशी। राजा श्रीमानदेवको पाउको निगाहबाट...बुद्धिमान् सार्थवाह..रत्नसङ्घले प्रभुसङ्घको नाउँले यो शिवलिङ्ग संसारको हितको लागि (स्थापना गरे।)

प्रभुकेश्वरको खेतको बेहोरा यस प्रकारको छ– प्रङप्रिङ भन्ने ठाउँमा...कुत आउने शय १०० भूमि ।....भन्ने ठाउँमा २२ मानिका कुत आउने पचास ५० भूमि, मैशिङ भन्ने ठाउँमा २० मानिका कुत आउने चालीस ४० भूमि, वोतवोरुषो भन्ने ठाउँमा..साठी ६० भूमि....... भन्ने ठाउँमा १८ मानिका कुत आउने तीस ३० भूमि, सीताटी जोल्प्रि भन्ने ठाउँमा २५ मानिका कुत आउने चालीस ४० भूमि, प्रयिट्टिखा भन्ने ठाउँमा ७२ मानिका कुत आउने एक शय तीस १३० भूमि ।

**व्याख्या**–

रत्नसंघ मानदेवको समयका धनी सार्थवाह थिए; एक देशबाट अर्को देशमा गई व्यापार गर्ने व्यापारीहरूका नाइकेलाई 'सार्थवाह' भनिन्छ भन्ने कुरा माथि परिसकेको छ। उनै सार्थवाह रत्नसङ्घले आफ्ना नातेदार प्रभुसङ्घको नाउँमा 'प्रभुकेश्वर' महादेव स्थापना गरी यो अभिलेख कुँद्न लाएका हुन्। यो शिवलिङ्ग माथि उल्लिखित 'रत्नेश्वर' को संगसंगै नै भने जस्तै रहेको छ ।

सार्थवाह रत्नसङ्घ धार्मिक प्रकृतिका व्यक्ति थिए तथा शैवधर्मप्रति उनको श्रद्धा भएको देखिन्छ। यिनीहरूको नाउँ रत्नसङ्घ, प्रभुसङ्घ रहेको हुँदा झ्वाट्ट हेर्दा यिनीहरू बौद्ध धर्मसंग सम्बन्ध राख्ने व्यक्ति थिए कि भन्ने देखिन्छ। किनभने नाउँको पछाडि'सङ्घ' जोड्ने चलन बौद्ध धर्मानुयायीहरूमा नै बढी प्रचलित छ। तर अरू प्रमाणको अभावमा यस विषयमा कुनै निर्णय गर्न सकिँदैन ।

---

नोलीको पाठ– १. त्रिंशत्तरस्य–त–

पिण्डक–

प्रभुकेश्वर महादेवलाई गूठी राखिंदिदा यहाँ 'यति भूमिको यति मानिका 'पिण्डक' भन्ने कुरा पनि खुलाएर लेखिएको छ। भूमि र मानिकाबारे माथि लेखिसकेको छ। अब 'पिण्डक' बारे यहाँ अलिकता विचार गर्नुपरेको छ ।

संस्कृत–कोशकारहरूले 'पिण्डक' शब्दको अर्थ खुलाएर लेखेको पाइंदैन। यस कारण यस पारिभाषिक शब्दको अर्थ निश्चित गर्नामा केही मतभेद रहेको छ । तर 'पिण्डक' भनेको 'कुत' हो भन्ने कुरा लिच्छविकालका अभिलेखबाटै खुल्छ । उदाहरणार्थ पाटन छिन्नमस्ताको अभिलेखलाई देखाउन सकिन्छ ।

अंशुवर्माले बनाउन लाएको कुलो बिग्रेको हुँदा ध्रुवदेव + जिष्णुगुप्तको पालामा सामन्त चन्द्रवर्माको देखरेखमा त्यसको जीर्णोद्धार गरियो; पछि फेरि सो नबिग्रोस् भनी त्यसको हेरचाह, मरम्मत गर्ने काम निर्दिष्ट ग्रामवासीहरूलाई सुम्पियो; आर्थिक सहायतास्वरूप केही जग्गा ग्रामवासीलाई दिइयो; ग्रामवासीहरूले समयमै ती जग्गाको 'पिण्डक' उठाई कुलोको मरम्मत गर्नू भन्ने कुरा छिन्नमस्ताको त्यस अभिलेखमा परेको छ। यसबाट 'पिण्डक' भनेको 'कुत' हो भन्ने स्पष्ट थाहा पाइन्छ। प्रमाणार्थ त्यस अभिलेखको एक अंश यहाँ उद्धृत गरिन्छ–

"भट्टारकमहाराजाधिराजश्रचंशुवर्मपादैर्युष्मदीयग्रामाणामुपकाराय योसौ तिलमक आनीतोभूत्प्रतिसंस्काराभावाद्विनष्टमुद्वीक्ष्य सामन्तचन्द्रवर्मविज्ञापितैरस्माभिस्तस्यैव प्रसादीकृतस्तेन चास्मदनुज्ञातेन युष्मद्ग्रामाणामेवोपकाराय प्रतिसंस्कृतोस्य चोपकारस्य पारम्पर्याविच्छेदेन चिरकालोद्वहनाय युष्माकं वाटिका अपि प्रसादीकृतास्तदेताभ्यो यथाकालम्पिण्डकमुपसंहृत्य भवद्भिरेव तिलमकप्रतिसंस्कारः करणीयः"

काठमाडौं भैरवढोकाको अभिलेखमा पनि कुलोको मरम्मत गर्ने काम ग्रामपाञ्चालीलाई सुम्पेको छ तथा ग्रामपाञ्चालीले 'पिण्डक' उठाई समयमै मरम्मत गर्नू भनिएको छ। जस्तै –

"...पिण्डकदशभागम्प्रत्याकलय्य भवद्भिरेव...तिलमकप्रतिसंस्कारश्च कालानतिक्रमेणैव कार्यः"

माथि उद्धृत दुवै अभिलेखमा तिलमक (कुलो) मरम्मत गर्न 'पिण्डक' उठानू भनी लेखिएको देखेर पिण्डक भनेको त कुलोको मरम्मतको लागि जनतासंग उठाइने करविशेष पो रहेछ भन्ने भ्रम कुनै इतिहासकारलाई परेको छ। तर माथि उद्धृत अंश अलि गढेर पढेको खण्डमा उक्त भ्रम त्यसै दूर हुन्छ । माथिका अभिलेखमा कुलोको मरम्मतको लागि जनतासंग 'पिण्डक' उठाउनू भनी भनिएको भए उक्त कुरो सिद्ध हुन्थ्यो । तर माथिका अभिलेखमा यसको उल्टो कुलोको मरम्मतका लागि आर्थिक सहायतास्वरूप सरकारले दिएका जग्गाबाट ग्रामवासीहरूले पिण्डक उठाई कुलोको मरम्मत गर्नू भनिएको हुनाले उक्त कुरो होइन भन्ने स्पष्ट देखिन्छ ।

अर्को कुरा—कुनै निश्चित काम गर्नाको लागि जग्गा गूठी राखी कुँदाइएका अभिलेखमा प्राय: फलानो ठाउँको यति भूमिको यति पिण्डक भनी तोकिएको पाइन्छ। प्रभुकेश्वरको यस अभिलेखमा पनि यसै गरी भूमि र पिण्डक तोकिएका छन्। तल आउने टेबहालको गुहमित्रको अभिलेख, पशुपतिको जयलम्भको अभिलेख, पाटन बाहलुखाको अभिलेख, चौकिटारको अभिलेख, पशुपति भस्मेश्वरको अभिलेख,साँखु दुगाहिटीको अभिलेख आदि अनेक अभिलेखमा भूमि र पिण्डक तोकिएका छन्। यताबाट पनि 'पिण्डक' भनेको 'कुत' हो भन्ने स्पष्ट थाहा पाइन्छ। विचारार्थ पानट खपिंछेंको अभिलेखको एक वाक्य यहाँ उद्धृत गरिन्छ—

"...कारणपूजार्त्थम्ब्राह्मणध्रुवसेनेन दत्तम्दक्षिणकोलिग्रामे भूशतद्वयम्पिण्डकञ्च व्रिहिकस्य मानिकया १५०"

यहाँ वैशम्पायनको कारणपूजाको लागि ब्राह्मण ध्रुवसेनले दक्षिणकोलिग्रामका दुइ सय भूमि गूठी राखिदिएको र यसको 'पिण्डक' एक शय पचास मानिका धान उठ्छ भनी स्पष्ट तोकिएको हुनाले पिण्डक' भनेको 'कुत' हो भन्ने निश्चित हुन्छ।

## कुतको निर्धारण—

प्रभुकेश्वर महादेवको यस अभिलेखबाट र अरू अभिलेखबाट पनि लिच्छविकालमा यति जग्गाको यति कुत भन्ने पहिलेदेखि निश्चित हुन्थ्यो; जग्गाधनीले मनमानीसंग कुत उठाउन पाइंदैनथ्यो भन्ने थाहा पाइन्छ। साथै जग्गाको उत्पादनक्षमता हेरी कुत निर्धारित गरिएको हुन्थ्यो; सबै जग्गाको एकनाशसंग कुत निर्धारित गरिएको हुँदैनथ्यो भन्ने अभिलेखबाट पाइन्छ। पहिले यस अभिलेखकै कुरा लिऔं। यहाँ दिइएको भूमि र पिण्डकको परिमाणको केही अंश यस प्रकारको छ—

५० भूमि = २२ मानिका पिण्डक
४० भूमि = २० मानिका पिण्डक
३० भूमि = १८ मानिका पिण्डक
४० भूमि = २५ मानिका पिण्डक

अभिलेखमा बढीमा १०० भूमिको १०० मानिका पिण्डकसम्म लेखिएको पाइन्छ। उदाहरणार्थ पशुपति भस्मेश्वरको अभिलेखलाई देखाउन सकिन्छ। त्यहाँ 'भूमि ४०० पिण्डकञ्च मा ४००' दिइएको छ। घटीमा १०० भूमिको ४० पि.मा.सम्म लेखिएको पाइन्छ। जस्तै-खपिंछेंको अभिलेखमा 'दुलम्ग्रामे' भू ३० पिण्डक १२ दिइएको छ। यसबाट अब्बल, दोयम आदि भने जस्तै लिच्छविकालमा पनि जग्गाको उत्पादनक्षमता हेरी कुत निर्धारित गरिएको हुन्थ्यो भन्ने थाहा पाइन्छ।

यसरी लिच्छविकालको भूमिव्यवस्थाबारे बुझ्न यस अभिलेखबाट पनि केही मदत पाइन्छ।

—★—

# टेबहालको मानदेवको पालाको गुहमित्रको अभिलेख

काठमाडौं राजकुलिमहाविहार (टेबहाल) भित्र पस्ने ढोकेनिर बाँयापट्टिको एउटा पसलभित्र महाकालको मूर्ति रहेको छ। त्यसैको पादपीठमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ५० अङ्गुल लम्बा, ३३ अङ्गुल चौडा छ। यहाँ संवत् ४०२ छ।

लेभीद्वारा ३ संख्याको रूपमा यो छापिएको छ। संस्कृत–सन्देश १।६मा धनवज्र वज्राचार्य + ज्ञानमणि नेपालद्वारा पनि यो अभिलेख छापिएको छ। नोलीद्वारा ७ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. (संव)त् ४०२ राज्ञः श्रीमामदेवस्य सम्यक्पालयतो महीम्
आषाढशुक्लस्य तिथौ पञ्चदश्यां शुभार्त्थिना
२. वणिजां सार्त्थवाहेन गुहमित्रेण भक्तितः
संस्थापितोत्र भगवानिन्द्रो नाम दिवाकरः
क्षेत्रं यथा गुम्पद्वृम्प्रदेशे
३. शतस्य भूमिः पिण्डकमानिका ६०[१]

---

१. 'पिण्डक मानिका च' पाठ पहिले छापिएको थियो। परन्तु शुद्ध पाठ 'च' होइन, 'चु' रहेछ। चु = ६० हुन्छ। १०० "भूमि' को ६० मानिका पिण्डक त्यस बेलाको कुतको अनुपातको दृष्टिले पनि मिल्दो छ।

# अनुवाद

राजा श्रीमानदेवबाट राम्ररी पृथ्वीको पालना गरिरहनुभएको वेलामा, कल्याण चिताउने सार्थवाह गुहमित्रले संवत् ४०२ आषाढ शुक्ल पूर्णिमाको दिन इन्द्रनामक भगवान् सूर्यलाई भक्तिपूर्वक यहाँ स्थापना गरे।

(गूठी राखेको) खेत यस प्रकारको छ–गुम्पद्वृं भन्ने ठाउँमा ६० मानिका पिण्डक (कुत) आउने शय भूमि।

## व्याख्या–

सार्थवाह गुहमित्रले सौर सम्प्रदायका देवता स्थापना गरी यो अभिलेख राखेका हुन्। मानदेवको समयमा देश–विदेश पुगी व्यापार गर्ने व्यापारीहरू निकै थिए; यस्ता व्यापारीहरूका नाइके 'सार्थवाह' कहिन्थे भन्ने कुराको चर्चा माथि सार्थवाह रत्नसङ्घको अभिलेखको व्याख्याको प्रसङ्गमा गरिसकेको छ। यस अभिलेखबाट पनि उक्त कुराको पुष्टि हुन्छ। 'सार्थवाह' साधारण व्यापारी होइनन्, व्यापारीहरूका नाइके हुन्थे भन्ने कुराको संकेत यस अभिलेखमा उल्लिखित 'वणिजां सार्थवाहेन गुहमित्रेण' यस वाक्यबाट पनि पाइन्छ।

मानदेवका पालाका अरू अभिलेखमा जस्तै यस अभिलेखमा पनि मानदेवले राम्ररी राज्य चलाएका थिए भन्ने वर्णन परेको छ।

लिच्छविकालमा शैव, वैष्णव, बौद्ध धार्मिक सम्प्रदाय जति प्रचलित थिए; त्यति सौर सम्प्रदाय प्रचलित थिएन। तैपनि त्यस वेला सौर सम्प्रदायको पनि केही प्रचलन थियो भन्ने कुरा यस अभिलेखले देखाएको छ। लिच्छविकालको लगत्तै पछि भने सौर सम्प्रदाय अलि बढी प्रचलित भएको बुझिन्छ। ने. सं. १८५ मा प्रद्युम्नकामदेवको पालामा स्थापित* पाटन थपाहिटीको सूर्यमूर्ति, ने. सं. २०३ मा स्थापित† पाटन सौगलटोलको सूर्यमूर्ति, ने. सं. २७९ को ‡नक्सालको सूर्यमूर्ति आदिले उक्त कुरा दर्शाउँछन्।

हाल यो अभिलेख महाकालमूर्तिको आसन भागको रूपमा रहेको छ। यसबाट 'इन्द्रो नाम दिवाकरः' को ध्यान, मुद्रा कस्तो हुन्थ्यो भन्ने कुरा बुझ्न गाह्रो भएको छ। पुरानो मूर्ति नष्ट भएपछि त्यसको आसन भागलाई उपयोग गरी पछि कसैले यो महाकालमूर्ति राखिदिएको हो कि भन्ने बुझिन्छ।

---

* 'अभिलेख–संग्रह' दोस्रो भागको १० पृष्ठ हेर्नुहोस्।

† सेसिल बेण्डालको 'जर्नी' को ८० पृष्ठ हेर्नुहोस्।

‡ 'पूर्णिमा' ३ पूर्णाङ्कको १७ पृष्ठ हेर्नुहोस्।

[१३ संख्या]

# पंचदेवलको अभिलेख

पशुपतिनाथको मन्दिरदेखि दक्षिणपट्टि पञ्चदेवल छ। सो पञ्चदेवलभित्र पश्चिम–उत्तर कुनामा एउटा शिवलिङ्ग छ। त्यसको जलहरीमा पश्चिमपट्टि यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १ हात ६ अङ्गुल लम्बा, ३ अङ्गुल चौडा छ। यस अभिलेखको धेरैजसो भाग फुटिसकेको छ। यहाँ संवत् ४१० दिइएको छ।

'अभिलेख–संग्रह' १ भाग को २३ पृष्ठमा संशोधनमण्डलद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. संवत् ४१०··· ··· ··· ···

२. माघपौर्ण्णमास्याम् तस्य सुतः शैश(व...)...स···

## अनुवाद

संवत् ४१० माघ शुक्ल पूर्णिमा··· ···तिनका छोरा बालककालमै

**व्याख्या–**

यस अभिलेखमा संवत् ४१० अङ्कित भएको हुनाले यो अभिलेख मानदेवको पालाको हो भन्ने बुझिन्छ। यस अभिलेखको धेरैजसो भाग नष्ट भइसकेको हुनाले यसबाट विशेष कुरा केही बुझ्न सकिँदैन। कसैका छोराको मृत्यु बालककालमै भएको हुँदा तिनै बालकको पुण्य बढोस् भनी शिवलिङ्ग स्थापना गरी यो अभिलेख कुँद्न लाएको देखिन्छ।

–✶–

# पशुपतिको मानदेवको पालाको जयलम्भको अभिलेख

पशुपतिनाथको मन्दिरसंगै उत्तरपट्टि एक ठूलो त्रिशूल छ। त्यही त्रिशूलको आसनरूपमा रहेको जलहरीको पूर्व पाटामा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ४२ अङ्गुल लम्बा ६ अङ्गुल चौडा छ। यहाँ संवत् ४१३ दिइएको छ।

पं. भगवान्लालद्वारा २ संख्याको रूपमा यो छापिएको छ। संस्कृत–सन्देश १।६ मा पनि यो छापिएको छ। नोलीद्वारा ८ संख्याको रूपमा यो छापिएको छ। पछि मूलबाटै पाठ सच्याई इतिहास–संशोधन ४७ संख्यामा मैले यो छपाएको छु †।

## मूलपाठ

१. ॐ संवत् ४१३ श्रीमानदेवनृपतेश्चरणप्रसादात्
भक्त्या विशुद्धमतिना जयलम्भनाम्ना[1]
लिङ्गञ्जयेश्वरमिति प्रथितं नृलोके
२. संस्थापितं सनृपतेर्ज्जगतो हिताय १
भगवतोस्य लिङ्गस्य कारणपूजायाः[2] सम्यक्प्रवर्त्तनाय स्वपुण्याप्या-

† 'इतिहास संशोधनको प्रमाण प्रमेय' को २६८ पृष्ठ हेर्नुहोस्।

नोलीका पाठ–१. जयवर्म्मनाम्ना
२. कारणपूजा–स– – – –य

यनार्त्थंन्दत्तमक्षयणीयम्[१]

३. भूमिः ४५० पिण्डकं मा २०० ज्यैष्ठशुक्लदिवा ११[२]

# अनुवाद

संवत् ४१३ ज्येष्ठ शुक्ल एकादशीको दिन राजा श्रीमानदेवको पाउको निगाहबाट जयलम्भले भक्तिले शुद्ध चित्त भई राजालगायत (सारा) संसारको हितको लागि जयेश्वर भनी पृथ्वीमा नाउँ चलेको शिवलिङ्गको स्थापना गरे ।

यी भगवान् शिवलिङ्गको कारणपूजा राम्ररी चलाउनाको लागि आफ्नो पुण्य बढोस् भनी २०० मानिका पिण्डक (कुत) आउने ४५० भूमि कोइलाकाँटा गरी गूठी राखे ।

**व्याख्या—**

राजा मानदेवको शासनकालमा जयलम्भले आफ्नो नाउँबाट 'जयेश्वर' महादेव स्थापना गरी यो अभिलेख कुँद्न लाएका हुन् । पं. भगवान्लालले यो अभिलेख छपाउँदा अभिलेख राख्न लाउनेको नाउँ 'जयवर्म्मा' भनी छपाएका थिए । नोलीले र हामीले पनि पहिले 'जयवर्म्मा' भन्ने पाठ नै छपाएका थियौं । यो अभिलेख अलि खिइएको छ; तर खण्डित छैन । बढी ध्यान दिई पढ्दा शुद्ध पाठ ठम्याउन सकिन्छ । यसैले पछि राम्ररी प्रतिलिपि झिकी पढ्दा 'जयवर्म्म' पाठ अशुद्ध हो, शुद्ध पाठ 'जयलम्भ' रहेछ भन्ने पत्ता लाग्यो । पढ्न नसकेर त्यसै छोडिराखेको भागको पाठ पनि भर्न सकियो । यसरी यो अभिलेख पूरा भयो । राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट पनि यसको पाठ शुद्ध्याउन सहायता पाइन्छ ।

लिच्छविकालका अभिलेखमा सरकारी कर्मचारीलाई भन्दा 'अस्मत्पादप्रसादप्रतिबद्धजीवन' 'अस्मत्पादप्रसादोपजीवी' आदि लेखिएको पाइन्छ । यस अभिलेखमा जयलम्भले 'श्रीमानदेवनृपतेश्चरणप्रसादात्' भनी बोलेको हुनाले जयलम्भ सरकारी कर्मचारी थिए कि भन्ने अनुमान हुन्छ ।

**कारणपूजा–**

दिनका दिन गरिने पूजालाई 'नित्यपूजा' भनिन्छ । विशेष निमित्त (कारण) लाई लक्ष्य गरी पर्व पर्वमा गरिने पूजालाई 'नैमित्तिकपूजा' भनिन्छ । यहाँ 'कारणपूजा' भनी विशेष कारणले पर्व पर्वमा गरिने 'नैमित्तिकपूजा'लाई भनिएको हो ।

---

नोलीका पाठ– १. दत्तमक्षय (नीवी)

२. . . . . . . . . . . .क्र– –ज्यैष्ठशुक्ल . . . .

तान्त्रिकहरूको कारणपूजामा मद्यको पनि प्रयोग हुने हुनाले उनीहरूको कारणपूजामा मद्य–कलश राखी पूजा गर्ने पद्धतिको उल्लेख पाइन्छ । यस्तै तन्त्रवचनलाई आधार बनाई कुनै इतिहासकारले लिच्छविकालमा प्रचलित 'कारणपूजा' भनेको मद्य–कलश राखी पूजा गर्ने विधि हो भनी लेखेका छन् ‡ । तर यो कुरा होइन । शिवलिङ्गको कारणपूजा गर्दा कुनै हालतमा पनि मद्यको प्रयोग हुँदैनथ्यो। नरेन्द्रदेवको पाटन गैह्रिधाराको अभिलेखमा त्यस वेला प्रचलित 'कारणपूजा' गरिने तरीकाको उल्लेख परेको छ। विचारार्थ सो अभिलेखको एक अंश यहाँ उद्धृत गरिन्छ–

"....पशुपतौ वाग्वतीपूर्वकूले भगवद्वज्रेश्वरमण्डल्यां......यथाकालमनतिक्रम्य देवानां स्नपनगन्धपुष्पधूपप्रदीपवर्षवर्धनवर्षाकालवादित्रजपकादिका कारणपूजा कर्तव्या"

यसबाट लिच्छविकालमा प्रचलित 'कारणपूजा' भनेको विशेष पर्व दिनमा देवतालाई स्नान गराउनु, चन्दन आदि सुगन्धी वस्तु चढाउनु, फूल चढाउनु, बत्ती धूप बाल्नु, बाजा बजाउनु, जप गर्नु आदि रहेछ भन्ने स्पष्ट हुन्छ ।

विशेष पर्वदिनमा मात्र गरिने 'कारणपूजा' लाई पनि यहाँ २०० मानिका कुत आउने ४५० भूमि गूठी राखिएको छ। यसबाट 'कारणपूजा' अलि धूमधामसंग गरिन्थ्यो भन्ने देखिन्छ ।

---

‡ डा. हितनारायण झाको 'दि लिच्छविज्' को १८५–८७ पृष्ठ हेर्नुहोस् ।

# लाजिमपाटको गुणवतीको अभिलेख

लाजिमपाट टुकुचापारि बारीभित्र एउटा शिवलिङ्ग रहेको छ। त्यसको जलहरीको पश्चिम-पट्टि यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ३४ अङ्गुल लम्बा, ५ अङ्गुल चौडा छ। यहाँ संवत् ४१९ दिइएको छ।

'इतिहास–संशोधन' ४७ क्रमागत संख्यामा यो अभिलेख मैले छपाएको छु *।

## मूलपाठ

१. संवत् ४१९ ज्येष्ठशुक्लदिवा १३ अस्यान्दिवसपूर्व्वायाम्
भर्त्तुः श्रीमानदेवस्य प्रसादोपचितश्रिया
२. [भ]क्तया स्थापितं लिग(ङ्ग)ङगुणवत्या शुभेच्छया
शैवन्देवालयस्थस्य पितुः किन्नरवर्म्मणः
लिङ्गं संस्थाप्य यत्पुण्य-
३. धनञ्चाक्षय्यमस्त्वति

## अनुवाद

संवत् ४१९ ज्येष्ठ शुक्ल त्रयोदशीको दिन, (आफ्ना) पति श्रीमानदेवको निगाहले ऐश्वर्य बढेको, सत्कर्ममा मन लाएकी, भक्तिनी गुणवतीले शिवलिङ्ग स्थापना गर्नुभयो। शिवलिङ्ग

* 'इतिहास–संशोधनको प्रमाण प्रमेय' को २६५ पृष्ठ हेर्नुहोस्।

स्थापना गरेर पाइएको पुण्यरूपी धन स्वर्ग हुनुभएका (आफ्ना) बाबु किन्नरवर्माको लागि अक्षय्य (कहिले नाश नहुने) भइरहोस् ।

## व्याख्या–

आफ्ना बाबु किन्नरवर्माको पुण्य बढोस् भनी गुणवतीले शिवलिङ्ग स्थापना गरी यो अभिलेख कुँद्न लाएकी हुन्। यी गुणवतीले राजा मानदेवसंग 'भर्ता' भन्ने सम्बन्ध देखाएकी हुनाले गुणवती मानदेवकी रानी थिइन् भन्ने थाहा पाइन्छ । यहाँ गुणवतीमा राजोचित 'श्री'पद भने लागेको छैन । यसबाट गुणवती मानदेवकी रानी मात्र थिइन्; श्रीभोगिनीसरह 'देवी' थिइनन् भन्ने थाहा पाइन्छ। मानदेवकी अर्की रानी क्षेमसुन्दरीको चर्चा माथि परिसकेको छ।

यसबाट लिच्छविकालमा उच्चवर्गमा 'बहुविवाह' गर्ने चलन चलेको थियो भन्ने बुझिन्छ ।

यस अभिलेखमा संवत् ४१९ अङ्कित छ । मानदेवले राज्य गरिरहेको यस बेला ३३ वर्ष जति भइसकेको छ। मानदेवको जीवनको अन्तिम चरणमा भने जस्तै यी गुणवतीको उल्लेख आएको हुनाले यिनी मानदेवकी कान्छी रानी थिइन् कि भन्ने अनुमान हुन्छ । 'भर्त्तुः श्रीमानदेवस्य प्रसादोपचितश्रिया' भनी यहाँ गुणवतीको वर्णन गरिएको हुनाले रानी गुणवतीले धनसम्पत्ति निकै जोडेको तथा उनको केही प्रभाव बढेको आभास पाइन्छ ।

गुणवतीका बाबु किन्नरवर्मा को हुन्; कहाँका हुन्; केही थाहा पाउन सकिएको छैन । लिच्छवि राजाहरूको विवाहसम्बन्ध 'वर्मा' नामधारी राजपुत्र (रजपूत) हरूसंग भएको पाइन्छ । यस्तै विवाहसम्बन्धले गर्दा राजपुत्रहरूको उल्लेख लिच्छविकालका अभिलेखमा निकै आएको छ । यसै गरी किन्नरवर्मा पनि कुनै राजपुत्र थिए कि भन्ने देखिन्छ ।

–★–

# पलांचोकको मानदेवको पालाको विजय-स्वामिनीको अभिलेख

पलाञ्चोक भगवतीको स्थान प्रसिद्ध छ। त्यहाँ भगवतीको मन्दिरको दक्षिण–पश्चिम कुनामा यो अभिलेख कुँदिएको शिला राखिएको छ। यसको अभिलेख कुँदिएको भाग ३८ अङ्गुल लम्बा, ३½ अङ्गुल चौडा छ। यहाँ संवत् ४२५ छ।

'हिमवत्संस्कृति' १ अङ्कमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। इतिहाससंशोधन ४७ क्रमागत संख्यामा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. संवत् ४२५ माघशुक्लपौर्ण्णमास्याम् अस्यान्दिवसपूर्व्वायां भट्टारकमहाराजश्रीमानदेवस्य

२. साग्रं वर्षशतमाज्ञापयतः सम्राड्गृहपतेस्पत्न्या विजयस्वामिन्या प्रतिष्ठापिता देवी भगवती विजयेश्वरी

## अनुवाद

संवत् ४२५ माघ शुक्ल पूर्णिमाको दिन भट्टारक (गद्दीनशीन) महाराज श्रीमानदेवले शयभन्दा बढी वर्षसम्म (लामो कालसम्म) आज्ञा गरिरहनुभएको वेलामा सम्राट् गृहपतिकी पत्नी विजय-स्वामिनीले भगवती विजयेश्वरी देवीको प्रतिष्ठा गरियो।

**व्याख्या–**

राजा मानदेवले राज्य गरिरहेको वेलामा 'सम्राट्' नाउँ भएका कुनै गृहपतिकी पत्नी विजयस्वामिनीले विजयेश्वरी भगवती स्थापना गरेको कुरा यस अभिलेखमा लेखिएको छ। तर यस अभिलेखको अर्थगराइमा गल्ती हुँदा यस अभिलेखले मानदेवको विषयमा केही भ्रम पारिदिएको छ। सर्वप्रथम योगी नरहरिनाथले यो अभिलेख छपाउनुभएको हो। उहाँले यसको अनुवाद पनि छपाउनुभएको छ। योगीजीले सो अनुवादमा विजयस्वामिनी मानदेवकी रानी हुन् भन्ने दर्शाउनुभएको छ। यसैको आधारमा अरू इतिहासकारले पनि विजयस्वामिनी मानदेवकी रानी हुन् भनी लेखेका छन्* तथा कसैले अन्तिम समयमा मानदेवले 'सम्राट्' पदवी लिएको देखिन्छ भन्ने पनि लेखेका छन्§। परन्तु यो अभिलेख र लिच्छविकालका अरू अभिलेख राम्ररी केलाएर हेर्‍यौं भने हामी उपर्युक्त कुरा होइन भन्ने स्पष्ट थाहा पाउँछौं। यस कुराको टुङ्गो लाउन अब यस विषयमा विचार गर्नुपरेको छ।

लिच्छविकालका दुइ किसिमका अभिलेखहरू पाइएका छन्। एकथरी राजा वा शासकवर्गले राखेका, अर्कोथरी दुनियाँदारले राखेका। शासकवर्गले राखेका र दुनियाँदारले राखेका अभिलेखमा लेखनशैली फरक छ। दुनियाँदारले राखेको अभिलेखमा प्रायः तात्कालिक शासकप्रति भक्ति देखाउने वाक्य परेको हुन्छ। कुनैमा 'सम्यग्राज्यं प्रशास्ति', 'सम्यक्पालयतः प्रजाः' 'प्रवर्द्धमानविजयराज्ये' आदि वाक्य परेको पाइन्छ। दुनियाँदारका कुनै अभिलेखमा राजाको लामो कालसम्म शासन चलिरहोस् भन्ने कामना गरी 'साग्रं वर्षशतमाज्ञापयतः' आदि लेखिएको पनि पाइन्छ। शासक र शासक–परिवारले राखेका अभिलेखमा भने उपर्युक्त किसिमको लेखाइ हुँदैन। त्यहाँ सोझै शासकको गुणवर्णन गरिएको हुन्छ तथा शासकसंग आफ्नो सम्बन्ध देखाइएको हुन्छ। यसरी अभिलेखको लेखनशैलीबाटै शासकवर्ग र दुनियाँदारको अभिलेख स्पष्ट छुट्टिन्छ। यस कुराको पुष्टि लिच्छविकालका प्रायः सबै अभिलेखबाट हुन्छ। तैपनि केही अभिलेखको नामोल्लेख यहाँ गरिन्छ। दुनियाँदारले राखेका अभिलेखमा देउपाटनको रत्नसंघको, टेबहालको गुहमित्रको, खर्पिछेको वसन्तदेवको पालाको, बूढानीलकण्ठको मनुदेवको पालाको, साँखु ढुगाहिटीको वामनदेवको पालाको, मृगस्थलीको रामदेवको पालाको, लगन जाने बाटोको, देउपाटनको स्वामी वार्त्तको, पशुपति छत्र–चण्डेश्वरको, देउपाटनको नरेन्द्रदेवको पालाको, नालाको द्वितीय शिवदेवको पालाको अभिलेखलाई देखाउन सकिन्छ। यी अभिलेखमा 'साग्रं वर्षशतं समाज्ञापयतः' आदि राजाप्रति भक्ति प्रकट गरिएका वाक्य परेका छन्। शासक र शासकवर्गले राखेका अभिलेखमा यस्तो वाक्य परेका छैनन्। उदाहरणार्थ मानदेवकी रानी क्षेमसुन्दरी र गुणवतीको अभिलेख, मानदेवकी छोरी विजयवतीको अभिलेख आदिलाई देखाउन सकिन्छ।

---

* श्रीडिल्लीरमण रेग्मीको 'एशेन्ट नेपाल' तेस्रो संस्करणको १२१,१३९,२७५ पृष्ठ, श्रीजगदीशचन्द्र रेग्मीको 'लिच्छविसंस्कृति' को १६७ पृष्ठ हेर्नुहोस्।

§ 'लिच्छवि–संस्कृति' को १६७–६८ पृष्ठ हेर्नुहोस्।

पलाञ्चोकको यस अभिलेखमा 'भट्टारकमहाराजश्रीमानदेवस्य साग्रं वर्षशतमाज्ञापयतः' भन्ने दुनियाँदारले लेख्ने शैली परेको हुनाले यो अभिलेख राजपरिवारले राख्न लाएको होइन भन्ने स्पष्ट थाहा पाइन्छ ।

यहाँ अर्को पनि विचारणीय कुरा छ । यो अभिलेख राख्न लाउनेले मानदेवलाई 'सम्राट्' (चक्रवर्ती राजा) भनी देखाउन खोजिएको हो भने पहिले नै 'सम्राजः श्रीमानदेवस्य' भन्ने लेखिने थियो । त्यसो नगरी 'भट्टारकमहाराजश्रीमानदेवस्य' भनी माथि स्पष्टसंग लेखिसकेपछि अलि तल आएर मात्र सम्राट्गृहपतेस्पत्न्या भनी लेखिएको छ। यसबाट यहाँ 'सम्राट्' शब्द मानदेवको विशेषण रूपमा आएको होइन; गृहपतिको नामविशेष मात्र यो हो भन्ने स्पष्ट छ ।

अब यहाँ गृहपति शब्दको बारेमा पनि केही विचार गर्नुपरेको छ। यसताका 'गृहपति' शब्दले राजालाई बुझाउँदैनथ्यो । हुनत उठानमा 'गृहपति' शब्द सामान्य गृहस्थीलाई बुझाउने शब्द थियो। पाणिनिले यही अर्थमा 'गृहपति शब्दको प्रयोग गरेका छन् (अ. ४।४।९०) । पछि 'गृहपति' शब्द अलि अर्कै अर्थमा रूढ हुन थाल्यो । कौटल्यको पालामा 'गृहपति' शब्दले जग्गाजमीन प्रशस्त भएको दानशील धनी व्यक्तिलाई बुझाउन थालेको थियो। 'गृहपति' रूपमा रहने एकथरी राजकीय मानिस बनाउने कुरा कौटल्यले 'गूढपुरुषोत्पत्ति' प्रकरणमा लेखेका छन् । जातक आदि बौद्ध वाङ्मयमा 'नगरका प्रसिद्ध दानशील धनी व्यापारी'लाई गृहपति शब्दले बुझाएको पाइन्छ। दशकुमार-चरितमा दण्डीले ठाउँ–ठाउँमा शहरका प्रधान (मुखिया) रूपमा 'गृहपति' को उल्लेख गरेका छन्। अन्त पनि यस्तो उल्लेख पाइन्छ । यसै गरी पलाञ्चोकको यस अभिलेखमा उल्लिखित 'गृहपति' पनि लिच्छविकालका कुनै प्रसिद्ध धनी व्यक्ति हुन् भन्ने देखिन्छ ।

यति कुराबाट विजयस्वामिनी मानदेवकी रानी होइनन्; सम्राट्नामक कुनै गृहपतिकी पत्नी हुन् भन्ने निश्चित हुन्छ ।

लिच्छविकालमा पाइएको शाक्त सम्प्रदायसम्बन्धी यो पहिलो अभिलेख हो । यसैले धार्मिक इतिहासको दृष्टिले संवत्सहितको यो अभिलेखको निकै महत्त्व छ । मानदेवकै समयमा शाक्त सम्प्रदाय पनि यहाँ प्रचलित भइसकेको थियो भन्ने कुराको पुष्टि यसबाट हुन्छ। पछि पछि विशेष गरेर मध्यकालमा शाक्त सम्प्रदाय खूप लोकप्रिय रह्यो।

यो अभिलेख कुँदिएको शिला वर्तमान पलाञ्चोक भगवतीको आसनको रूपमा अहिले रहेको छैन । मन्दिरको नजीकै एक कुनामा त्यसै रहेको छ। यस कारण वर्तमान पलाञ्चोक भगवतीसंग यसको सोझै सम्बन्ध जोड्न अलि गाह्रो छ। तर विजयेश्वरी भगवती स्थापना गरेको वर्णन यस अभिलेखमा परेको र 'पलाञ्चोक–भगवती' को नामले यहाँका देवीको प्रसिद्धि धेरै पहिलेदेखि भएको पाइने हुनाले यस अभिलेखको सम्बन्ध पलाञ्चोक भगवतीसंग छ भन्ने देखिन्छ ।

योगीजीले भगवतीको नाउँ 'विजयश्री' छपाउनुभएको थियो । हामीले पनि पहिले यही पाठ छपाएका थियौं। तर मूलस्थानमा गई पाठ रुजु गर्दा शुद्ध पाठ 'विजयेश्वरी' ठहरियो। यस

अभिलेखको छेउको भाग अलि फुटेको छ । तर अन्तिम अक्षर 'री' को 'र' चाहिं स्पष्टै देखिन्छ। दीर्घमात्राचाहिं अलि स्पष्ट छैन। विजयस्वामिनीले स्थापना गरेको हुनाले 'विजयेश्वरी' नाम रहेको कुरा प्रसङ्गबाट पनि मिल्न आउँछ ।

मानदेवको पालाको यस अभिलेखबाट लिच्छविकालमा पनि 'पलाञ्चोक' प्रसिद्ध स्थान थियो भन्ने संकेत पाइन्छ। अहिले यहाँ विशेष बस्ती छैन; सामान्य बस्ती मात्र छ। मध्यकालमा भने सांग्रामिक दृष्टिले यो प्रदेश महत्त्वपूर्ण रहेको थियो। गोपालवंशावलीमा वर्णित घटनाबाट उक्त कुरा थाहा पाइन्छ। मदनसिंहरामवर्द्धनको अभिलेखमा यस प्रदेशलाई 'पलखचो–राजदुर्ग' भनिएको छ* । 'पलखचो' यस नामले यस प्रदेशको प्राचीनतालाई झल्काइरहेको छ ।

–★–

* 'पूर्णिमा' ७ पूर्णाङ्कको ३४ पृष्ठ हेर्नुहोस् ।

# केलटोलको मानदेवको अभिलेख

काठमाडौं केलटोल (मछिन्द्रबहालनिर) तखाछेंको चोकभित्र इनारको दायाँपट्टि पर्खालको भित्तामा केही वर्ष अगाडिसम्म यो अभिलेख कुँदिएको ढुङ्गो रहेको थियो। हाल सो ढुङ्गो त्यहाँ छैन। अहिले सो कता छ; थाहा पाउन सकिएको छैन। राष्ट्रिय अभिलेखालयमा यसको प्रतिलिपि छ। त्यतैबाट यो पाठ पढिएको हो। यसको अभिलेख कुँदिएको भाग २७ अंगुल लम्बा ६ अंगुल चौडा छ। यो अभिलेख अपूर्ण छ।

'पूर्णिमा' ६ पूर्णाङ्कमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ... ... शास्त्रविहिते यो निग्रहे (सं)रतः
शुद्धात्मा प्रकृतेः पितेव दयते श्रीमानदेवो (नृपः)
२. स्वप्राणै ... ... ... ... युक्तात्मना
... ... ... जितवता क्ष्मां रक्षता सर्व्वदा
३. (तेने)दं श्रुतिधर्म्मशास्त्रविहितां धर्मक्रियाङ्कुर्व्वता
लोकानां सुखकाम्यया सुविमलम्पानीयमानाय्य--

## अनुवाद

.....शास्त्रमा कहेअनुसार....निग्रह (कज्याउनु) मा लागेका, चोखो मन भएका राजा मानदेव दुनियाँलाई बाबुले जस्तै माया गर्नुहुन्छ।

दिलो ज्यानले.....आफू लागेका.....जिती सधैं राज्य रक्षा गरेका,.....वेद तथा धर्मशास्त्रमा विधान गरेबमोजिम धर्म–कर्म गर्ने उहाँले (मानदेवले) दुनियाँहरूको सुख-सुविधाको लागि सफा पानी ल्याउन लाएर...

## व्याख्या–

यो अभिलेख अपूरो पाइएको र पाइएको अंश पनि जम्मै पढ्न नसकिएको हुनाले यस अभिलेख-को महत्त्व केही घटेको छ। तैपनि अहिले पढ्न सकिएको जति अंशबाट पनि मानदेवको आदर्श आदि केही कुरामा केही प्रकाश पर्छ। यसो हुनाले मानदेवका अभिलेखमा यसको पनि भिन्नै स्थान रहेको छ।

## मानदेवको आदर्श–

जुनसुकै उत्तम शासकको पनि मुख्य आदर्श आफ्ना जनतालाई कसरी सुखी राखूं भन्ने रहेको हुन्छ। उत्तम शासकको आदर्श र कर्तव्यबारे चर्चा गर्दै कौटल्य लेख्तछन्–

"प्रजासुखे सुखं राज्ञः प्रजानां च हिते हितम्।
नात्मप्रियं हितं राज्ञः प्रजानां तु प्रियं हितम्॥"
(कौ. अ. १।१९।३९)

(दुनियाँलाई सुख भएमा नै राजालाई सुख हुन्छ। दुनियाँको हित भएमा नै राजाको हित हुन्छ। आफूलाई मन पर्ने कामले राजाको हित हुँदैन, दुनियाँलाई मन पर्ने कामले राजाको हित हुन्छ।)

उत्तम शासकको आदर्शको चित्रण गर्दा कवि कालिदासले प्रजाप्रति राजाको स्थान बाबुको जस्तो हुनुपर्छ भनी बोलेका छन्–

"प्रजानां विनयाधानाद्रक्षणाद्भरणादपि।
स पिता पितरस्तासां केवलं जन्महेतवः॥" (रघुवंश १।२४)

(दुनियाँलाई शिक्षा दिनाले, रक्षा गर्नाले र खाना लाउनाको बन्दोबस्त गरिदिनाले ती राजा दुनियाँहरूका 'बाबु' भए। तिनीहरूका बाबुहरू त खाली जन्माउने मात्र भए।)

'स्याद् राजा भृत्यवर्गेषु प्रजासु च यथा पिता' भनी यही कुरा याज्ञवल्क्यस्मृतिकारले पनि बोलेका छन्। (आचाराध्याय ३३ श्लो.)

राजा मानदेवको पनि यस्तै आदर्श थियो भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ। यहाँ 'शुद्धात्मा प्रकृतेः पितेव दयते श्रीमानदेवो (नृपः) = चोखो मन भएका राजा मानदेव दुनियाँलाई बाबुले जस्तै माया गर्नुहुन्छ' भनी लेखिएको हुनाले मानदेवको आदर्शबारे केही थाहा पाइन्छ।

कौटल्यले विनयाधिकरणमा 'इन्द्रियजयः' नामक एक अध्याय लेखेका छन् । इन्द्रियलाई वश पार्न नसक्ने राजाको विनाश हुन्छ भन्ने कुरा त्यहाँ उदाहरणसहित वर्णन गरिएको छ । असल शासक हुन चाहनेले इन्द्रियलाई वशमा राख्नुपर्छ भन्ने कुरामा त्यहाँ जोड दिइएको छ ।

यहाँ 'शास्त्रविहिते यो निग्रहे संरतः' भनी लेखिएको हुनाले शास्त्रकारहरूले भने जस्तै 'इन्द्रियजय' गर्नुपर्छ भन्ने आदर्श मानदेवको थियो भन्ने देखिन्छ । चाँगुको स्तम्भलेख भरखर उठ्दो उमेरमा राखिएको हुनाले त्यहाँ 'साक्षात्काम इवाङ्गवान् नरपतिः कान्ताविलासोत्सवः' भनी मानदेवको वर्णन गरिएको छ । यसबाट त्यसताका उनी केही विलासी थिए कि भन्ने झल्कन्छ । तर उमेर अलि पाको भएपछि राखिएका उनका अभिलेखमा त्यस्तो वर्णन पाइँदैन । यद्यपि अन्तिम समयसम्म पनि उनको शारीरिक सौन्दर्य कायम थियो भन्ने वर्णन भने पाइन्छ ।(सूर्यघाटको अभिलेख हेर्नुहोस्) तर पछिका मानदेवका अभिलेखमा उनको वर्णन पहिलेको भन्दा अलि फरक देखापर्छ । केलटोलको यो अभिलेखबाट पनि यही कुरा झल्कन्छ ।

नेपालमा प्रचलित शैव, बौद्ध, वैष्णव आदि धार्मिक सम्प्रदायमा मानदेवले समान आस्था प्रकट गरेका थिए भन्ने कुराको चर्चा पहिले गरिसकेको छ । यस अभिलेखमा 'तेनेदं श्रुतिधर्म्मशास्त्रविहितां धर्मक्रियाङ्कुर्व्वता' भनी लेखाएर वेद र धर्मशास्त्रहरूमा विहित सनातन धर्म–कर्ममा उनले आस्था प्रकट गरेका छन् ।

मानदेवका अरू अभिलेख देवताको स्थापना, पूजा आदि गरी त्यस उपलक्ष्यमा राखिएका मात्र पाइएका छन् । यस अभिलेखमा भने जनताको हितको लागि पानीको बन्दोबस्त मिलाइदिएको कुरा परेको छ । लोकहितलाई ध्यानमा राखेर गरेको मानदेवको कृति अहिले यही एक मात्र फेला परेको छ ।

यस अभिलेखको अहिले प्राप्त अंशमा संवत् तिथिमिति रहेको छैन । यस कारण यस अभिलेखलाई कहाँनिर पार्ने भन्ने प्रश्न उठ्छ । मानदेव जीवित छँदै यो कृति राखिएको कुरा निश्चित भएको हुनाले उनका अन्तिम ताकाका अभिलेखभन्दा केही अघि यहाँ राखिएको हो ।

–★–

# स्वयम्भूको अभिलेख

स्वयम्भूनाथको चैत्यपछाडि पश्चिमोत्तर दिशामा रहेको चुन पोल्ने खाल्डोमा यो अभिलेख कुँदिएको ढुङ्गो पल्टाएर राखिएको छ भन्ने कुरा राष्ट्रिय–अभिलेखालयमा रहेको यसको प्रतिलिपिमा लेखिएको छ । तर उपर्युक्त ठाउँमा धेरै पटक गई खोजखबर गर्दा पनि यो अभिलेख कुँदिएको मूल ढुङ्गो भेट्टाउन सकिएको छैन। यसो हुनाले राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिको भरमा यो पाठ पढिएको छ। यसको अभिलेख कुँदिएको भाग ३७ अङ्गुल लम्बा ११ अङ्गुल चौडा छ। माथितिर खिइएको र छेउ छेउमा फुटेको हुनाले यो अभिलेख अपूरो छ ।

'पूर्णिमा' ६ पूर्णाङ्कमा गौतमवज्र वज्राचार्यद्वारा यो प्रकाशित भएको छ । मूलबाट पढी केही पाठ यहाँ सच्याइएको छ ।

## मूलपाठ

१. ... ... मा ... न्यः
२. ... वसुत रदेवो ... नरेन्द्र
३. ... श्रीमा ... र शतलक्ष्मी
४. ... ... ... प्रसाद
५. ... ... वन्यगजेन्द्रम्मत्तं
६. ... ... ... त्त्रः
७. ... ... विनीतभृत्य
८. ... ... पविमान

९. . . . पर . . .   . . .   र्य्यादम्
१०. . . . क्षेत्रश्चाक्षयं दत्तं(श्री)मानविहारे
११. . . .   . . .   .मेत्य मत्त. . .तस्य तनय
१२. . . . महिम्ना . . .   . . .   . . .
१३. . . . क्ष्र्मो राजा...   ...सर्व्वः
१४. . . . सन्धर्मा. . .द्युतिमा(न्) ईजे
१५. . . . (म)खैरुदारै...भूमि... ङ्काय
१६. . . . श्रेयः निरुपमसत्त्वो दान्तः
१७. . . . ख्यातयशा... स्वधर्म्मकर्म्मसुनय
१८. . . . तनयोभिजात... सर्व्वानतिवर्त्तते
१९. . . . णैर्नृपतीन्यः अनुपरतधर्म्म
२०. . . . करुणैकसम्प्रियः सदा दारणाम्
२१. . . . तकठिनबाहुः केसरिमत्तेभविक्रमः
२२. . . . स्थिरधीः यम्बिभ्यति वीक्ष्य नृपाः
२३. . . . मृगाः केसरिणमिव रणेष्वभयः
२४. . . . पितृनिमित्तपातो शिक्षासौष्ठवविधान-
२५. . . . मतिमान् रूपबलसत्त्वतेजःश्रुत
२६. . . . लनिधिः कलासु निपुणः प्रियवत्
२७. साग्रं शतं वर्षाणामाज्ञापयता विचिन्त्य
२८. . . . निपुणम् श्रेयोर्त्थिना धृतिमता
२९. . . . . . . वरुणमहेन्द्रवपुषा महता

## अनुवाद

...का छोरा.....रदेव राजा......श्री......शतलक्ष्मी.......निगाह ....मत्ता बनैयाँ हात्ती.......नोकर–चाकरलाई राम्ररी तह लाएका.......

(श्री)मान विहारमा कोइलाकाँटा गरी खेत गूठी राखियो । ...

उहाँका छोरा......बडप्पनले.....राजा......सबै......चहकिला......

ठूलठूला यज्ञ गरे।......भूमि.....बेजोड पराक्रम भएका इन्द्रिय वशमा पारेका.....कीर्ति फैलिएका...आफ्नो धर्म–कर्म असल नीति (ले)......

राम्ररी जन्मेका छोरा...सबै राजाहरूलाई माथ गर्नुहुन्छ।....जसले राजाहरूलाई...धर्मबाट नहटेका.....दयालु.......सधैं नाश.......कस्सिएको पाखुरा भएका, सिंह र मत्ता हात्तीको जस्तो पराक्रम भएका, मन स्थिर भएका, सिंहलाई देखेर मृगहरू जस्तै जसलाई देखेर राजाहरू थर्कमान हुन्छन्।..... लडाइँमा नडराउने.....बाबुको निम्ति दुःख गर्ने, शिक्षाको सदुपयोग गर्ने, बुद्धिमान्, रूप बल सत्त्व तेज पढाइ......को खानि, कलामा सिपालु........शय वर्षभन्दा बढी समयसम्म शासन चलाउने (धेरै कालसम्म राज्य गर्ने).....राम्ररी......विचार गरीकन.....कल्याण चाहने, धैर्यशाली........वरुण इन्द्रको जस्तो शरीर भएका, ठूला........

## व्याख्या–

यो अभिलेख अपूरो छ। स्तम्भको एक पाटामा लेखिएको अंश मात्र अहिले पाइएको छ। लेखको प्रसङ्ग विचार गर्दा यसै गरी स्तम्भको अरू पाटामा पनि यो अभिलेख कुँदिएको थियो कि भन्ने देखिन्छ। यसरी एक अंश मात्र प्राप्त भएको र त्यसको पनि उठानको धेरै भाग पढ्न नसकिए-को हुनाले यस अभिलेखमा वर्णित कुरा अलि विवादास्पद बनेको छ।

यस अभिलेखको वर्णनशैलीबाट उदात्त राजाहरूको प्रशस्तिमय अभिलेख यो हो भन्ने स्पष्ट बुझिन्छ। यहाँ वर्णित 'विनीतभृत्य' आदि पदले सिपालु शासकको संज्ञना गराउँछ। 'ईजे....मखै-रुदारैः' यस वाक्यले यज्ञयागादि गर्ने धार्मिक प्रकृतिका राजाको संकेत दिन्छ। 'यम्बिभ्यति वीक्ष्य नृपाः' आदि कुराबाट शत्रुलाई दमन गर्ने बलिया शासकको झलक पाइन्छ। 'कलासु निपुणः' आदि पदले कलाकार विद्वान् राजालाई दर्शाएका छन्। कठिनबाहुः केसरिमत्तेभविक्रमः' आदि शब्दले शारीरिक बलले युक्त वीर राजाको चरित्रलाई लक्ष्य गरेका छन्। यसरी यति धेरै गुण भएका यी शासक को हुन् भन्ने प्रश्न स्वभावतः उठ्छ। यद्यपि यी वर्णन अतिशयोक्तिपूर्ण छन्, तैपनि विशिष्ट राजाका वर्णन यी हुन् भन्ने कुरामा सन्देह छैन।

यस अभिलेखको लिपि मानदेवको ताकाको छ। यसमा 'क्षेत्रं...दत्तं (श्री)मानविहारे' भन्ने वाक्य पनि देखापरेको छ।....'नविहारे' पाठचाहिं स्पष्टै देखिन्छ। 'मा' को आधा भाग पनि देखिन्छ। यस कारण 'मानविहारे' पाठमा शङ्का छैन। यस आधारमा यो अभिलेख मानदेवको पालाको हो भन्ने थाहा पाइन्छ। तर अलि गढेर विचार गरेको खण्डमा यस अभिलेखमा मानदेवको मात्र होइन; बृषदेवदेखिको उनका पुर्खाको पनि वर्णन परेको छ भन्ने थाहा पाइन्छ। यस अभिलेखको उठानमा परेको '......वसुत...रदेवो नरेन्द्र' यी पदले (वृषदे)वका छोरा (शङ्क)रदेवको संज्ञना दिलाउँछन्। चाँगुको अभिलेखमा शङ्करदेवको वर्णन गर्दा 'स्वं संयम्य ररक्ष गामभिमतैर्भृत्यैर्मृगेन्द्रोपमः' भनी लेखिएको छ। यहाँ पनि उनलाई 'विनीतभृत्यः'

भनिएको छ । यसपछि 'तस्य तनय = उनका (शङ्करदेवका) छोरा अर्थात् धर्मदेवको वर्णन आउँछ। चाँगुको अभिलेखमा धर्मदेवले धेरै यज्ञयागादि गरे भन्ने वर्णन यसरी गरिएको छ—

'ईजे सत्पशुभिः सुराननुगुणैः सम्पन्नमन्त्र्याद्धिभिः
यज्ञैः कर्म्मविशुद्धदेहहृदयश्चन्द्रद्युतिः पार्थिवः'

स्वयम्भूको यस अभिलेखमा पनि 'ईजे.....मखैरुदारैः' भनी उनको वर्णन गरिएको छ । यसपछि 'तनयोभिजात' भनी उनका (धर्मदेवका) छोरा अर्थात् मानदेवको वर्णन गरिएको छ । उनको वर्णनमा 'यम्भिभ्यर्ति वीक्ष्य नृपाः.......रणेष्वभयः' आदि भनिएको छ । यसले विद्रोह गर्न खोज्ने सामन्त राजाहरूलाई मानदेवले दमन गरेको कुरालाई लक्ष्य गरेको छ । 'पितृनिमित्तपाती, शिक्षासौष्ठविधान' यी पदको भाव चाँगुको अभिलेखमा मानदेवको मुखबाट निकालिएको 'बुवाको पाउको सेवा गरेर उहाँबाट विधिपूर्वक सिकेको अस्त्रविद्याको भरमा शत्रुहरूलाई दमन गरेर म बुवाको अऋणी हुनेछु' भन्ने भावसंग मिल्छ ।

इत्यादि कुरा विचार गर्दा वृषदेवदेखि मानदेवसम्मका लिच्छवि राजाहरूको वर्णन गराई कुनै दानपतिले यो अभिलेख कुँदाएको हो भन्ने बुझिन्छ ।

स्वयम्भूनाथ निकै अधिदेखि बौद्ध धर्मानुयायीहरूको पुण्यस्थल रहेर आएको छ । वृषदेवले यहाँ ठूलो बुद्ध चैत्य बनाउन लाए भन्ने अनुश्रुति चलेर आएको पाइन्छ । गोपालराजवंशावलीकारले वृषदेवको वर्णनमा 'तेन कृत सीनगुविहारचैत्यभट्टारिक प्रतिष्ठित सम्पूर्ण कृतम्' (२० पत्र) भनी यो कुरा लेखेका छन् । भाषावंशावलीमा पनि यस कुराको उल्लेख परेको छ । 'सीनगुंविहार' वर्तमान स्वयम्भूविहार हो । स्वयम्भूको डाँडो 'वनदुर्ग' रूपको थियो । यसो हुनाले सो डाँडो 'सीनगुं' कहलाएको हो । अहिलेसम्म पनि नेवारीमा स्वयम्भूलाई 'सिंगु' भनिन्छ । वृषदेवको बौद्धधर्ममा विशेष श्रद्धा थियो भन्ने कुरा पहिले लेखिसकेको छ ।

*श्रीमानविहार*—यो अभिलेख स्वयम्भूमा पाइएको छ तापनि यसको सम्बन्ध सोझै स्वयम्भूसंग रहेको कुरा अहिले पाइएको भागबाट देखिन आएको छैन । यस अभिलेखमा श्रीमानविहारमा जग्गा गूठी राखिदिएको उल्लेख आएको छ । 'मानविहार' राजा मानदेवले बनाउन लाएका हुन् । गोपालवंशावलीमा 'श्रीमानदेव वर्ष ४१ तेन......स्वनामेन मानविहार प्रतिष्ठितं' (२०–२१ पत्र) भनी यो कुरा लेखिएको छ । अंशुवर्माको ताकासम्ममा 'मानविहार' नेपालका विशिष्ट विहारमध्ये एक कहलाइसकेको थियो । यो कुरा अंशुवर्माको हाँडिगाउँको अभिलेखबाट थाहा पाइन्छ । त्यहाँ 'गुंविहार' 'श्रीमानविहार' 'श्रीराजविहार' 'खर्जुरिकाविहार' 'मध्यमविहार' यी पाँच विहार विशिष्ट विहारका रूपमा उल्लेख गरिएका छन् । मानविहारमा राजोचित 'श्री' जोडिएको हुनाले यो विहार राजा मानदेवले बनाउन लाएका हुन् भन्ने कुराको पुष्टि हुन्छ ।

'श्रीमानविहार' पाटनभेकमा पर्दथ्यो भन्ने कुरा नरेन्द्रदेवको पाटन यागबहालको अभिलेखबाट

थाहा पाइन्छ। त्यहाँ श्रीशिवदेवविहारलाई दिइएको ग्रामको चारकिल्ला खोल्दा 'श्रीमानदेवविहार' को उल्लेख आएको छ ।

स्वयम्भूनाथमा अंशुवर्माको ताकाको अर्को एक अभिलेख पनि पाइएको छ । यस कारण लिच्छविकालमा स्वयम्भूस्थान प्रसिद्ध देवस्थलको रूपमा थियो भन्ने कुरामा शङ्का छैन ।

# चाँगुको मानदेवको पालाको निरपेक्षको अभिलेख

चाँगुनारायणको मन्दिरसंगै मूल ढोकाको दाँयापट्टि यो अभिलेख कुँदिएको ढुङ्गो त्यसै रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३० अङ्गुल लम्बा, ५ अङ्गुल चौडा छ। यहाँ संवत् ४२७ दिइएको छ।

नोलीद्वारा ९ संख्याको रूपमा यो छापिएको छ। संशोधनमण्डलद्वारा 'इतिहास–संशोधनको प्रमाण प्रमेय' को १०८ पृष्ठमा पनि यो छापिएको छ।

## मूलपाठ

१. संवत् ४२७ कार्त्तिके शुक्लदिवा १३
दातर्य्यतीव विदुषि प्रथितप्रभावे
श्रीमानदेवनृपतौ जगतीं भुनक्ति
२. तस्यैव शुद्धयशसश्चरणप्रसादात्
पित्रोः कृताकृतिरियन्निरपेक्षनाम्ना
कृत्वा च तां विधिवदत्र यदस्ति पुण्यम्
३. पुण्येन तेन पितृदैवतभागिनो मे
पित्रोः प्रवासगतयोर्ध्रुवमस्तु योगः
अन्यत्र जन्मनि विशुद्धवतीति कृत्वा

# अनुवाद

संवत् ४२७ कार्तिक शुक्ल त्रयोदशी ।

दानी, ज्यादा विद्वान्, प्रभाव फैलिएका राजा श्रीमानदेवले पृथ्वीको रक्षा गरिरहनुभएको वेलामा सफा कीर्ति भएका उहाँ (मानदेव) को पाउको निगाहले निरपेक्ष भन्नेले बाबु आमाको यो सालिक बनाए ।

यहाँ विधिबमोजिम यो सालिक बनाएर जो पुण्य मैले पाएको छ, त्यो पुण्यले देवता र पितृलाई मान्ने मेरा परदेश (परलोक) गएका बाबु–आमाको अर्को चोखो जन्ममा (पनि) पक्का भेटघाट होस् भनीकन (यो सालिक बनाइएको हो ।)

## व्याख्या—

यो अभिलेख मानदेवको शासनको अन्तिम समयतिरको हो । निरपेक्ष नाउँ भएको एक व्यक्तिले स्वर्गवासी आफ्ना माता पिता अर्को जुनिमा पनि संगसंगै रहून् भन्ने कामना गरी आमा–बाबुको सालिक बनाई यो अभिलेख राखेका हुन् । अहिले सो सालिक हराइसकेको छ। यसको पादपीठ रूपको ढुङ्गो मात्र अहिले भेट्टिएको छ । सो सालिक अहिलेसम्म सुरक्षित रहेको भए लिच्छविकालको वेशभूषा आदि थाहा पाउन उपयोगी हुने थियो । तर सो सालिक हराइसकेको हुनाले एउटा उपयोगी वस्तुबाट हामीले वञ्चित हुनुपरेको छ । लिच्छविकालका देवमूर्ति त केही पाइएका छन् । तर मानिसको सालिक पाइएको छैन । यसो हुनाले त्यस वेलाको वेशभूषाबारे प्रामाणिक रूपमा जान्ने साधन कम छन् ।

पुनर्जन्म हुन्छ भन्ने लोकधारणा लिच्छविकालमा थियो । यो कुरा निरपेक्षको यस अभिलेखबाट र अरू अभिलेखबाट पनि थाहा पाइन्छ ।

निरपेक्ष को हुन्, थाहा पाउन सकिएको छैन । मानदेवको पाउको निगाहले यो सालिक राखें भनी यहाँ भनिएको हुनाले यिनी मानदेवको दरबारमा प्रवेश पाएका कुनै सरकारी कर्मचारी हुन् कि भन्ने देखिन्छ ।

मानदेवको पालाका अरू अभिलेखमा जस्तै यस अभिलेखमा पनि उनी विद्वान् थिए; दानी थिए; उनको प्रभाव फैलिएको थियो आदि वर्णन परेको छ ।

## कार्तिकादि संवत्–

लिच्छविकालमा संवत्सरको शुरू कार्तिकदेखि हुन्थ्यो; त्यस वेला प्रचलित संवत् चैत्रादि होइन; कार्तिकादि थियो भन्ने कुरा देखिएको छ । यो कुरा नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको

अभिलेखबाट देखिन्छ। त्यसमा हंसगृहद्रङ्गका लोकपालस्वामीको वार्षिकयात्रा आदिको चर्चा गर्दा पहिले कार्तिकको उल्लेख आएको छ। अनि मात्र माघ फाल्गुन ज्येष्ठको उल्लेख आएको छ। त्यस वेला प्रचलित संवत् चैत्रादि भएको भए ज्येष्ठको चर्चा पहिले गरी अनि मात्र कार्तिक, माघ, फाल्गुनको चर्चा गरिने थियो। त्यसो नगरी कार्तिकदेखि महीनाको गणना गरिएको हुनाले त्यस वेला कार्तिकादि संवत्को प्रचलन थियो भन्ने बुझिन्छ। यही परम्पराअनुसार 'नेपालसंवत्' पनि कार्तिकादि भएको देखिन्छ। यस अभिलेखमा महीना कार्तिक छ। यसो हुनाले आषाढको सूर्यघाटको अभिलेखभन्दा अघि यो अभिलेख राखिएको हो।

[२० संख्या]

# सूर्यघाटको विजयवतीको अभिलेख

पशुपति कैलासबाट सूर्यघाटतिर ओर्ह्लँदा बाटामा बायाँपट्टि तीनवटा शिवलिङ्ग देखापर्छन् । तिसमा सबभन्दा छेउको शिवलिङ्गको जलहरीको पश्चिमपट्टि भागमा यो अभिलेख कुँदिएको छ । यस.को अभिलेख कुँदिएको भाग २ हात १ अङ्गुल लम्बा, ६ अङ्गुल चौडा छ । पहिलो पङ्क्तिका केही अक्षर अलि अस्पष्ट छन्; अरू भाग स्पष्ट छ । यहाँ संवत् ४२७ दिइएको छ ।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. यस्येच्छया जगदिदम्पृथु विश्वरूपम्
सर्गास्थितिव्ययजराव्यसनादियोगैः
संयुज्यते वत तथा प्रतिमुच्यते च
तस्मै नमः सततमस्तु महेश्वराय १

२. सततसरलकान्तस्वाङ्गशोभासमृद्धः
अनुपहतयशोधीविक्रमश्रीप्रभावः
सुनयविदनुरक्तस्फीतस(द्)वृत्तलोकः
नृपतिरिह हतारिर्म्मानदेवो बभूव २

३. तस्यानवद्यगुणरत्ननिधानभूता
भूतानुकम्पचतुरा विनयप्रवीणा
वीणानिनादमधुरस्वरवल्गुवाक्या
श्रीभोगिनीति कथितास्य बभूव देवी ३

४. तस्यां स लिच्छविकुलाम्बरपूर्णचन्द्रः
चन्द्रः प्रभामिव शरन्निशि निर्म्मलायाम्
स्फीतौजसं दुहितरं जनयाम्बभूव
आत्मानुरूपविविधामलसद्गुणाढ्याम् ४

५. नाम्ना सा विजयवतीति राजपुत्री
प्रख्याता विविधकलाविचक्षणत्वात्
या पत्यौ हर इव वार्त्तदेवलाभे
भक्तत्वात्तदनुनयैकपेशलाभूत् ५

६. तीव्रप्रसादजलधौतमनःकलङ्का
पुण्यक्रियापरिचयैकरसानुरक्ता
लिङ्गन्तदत्र विजयेश्वरमक्षयाय
सातिष्ठिपज्जनमनोनयनाभिरामम् ६

७. संवत् ४२७ आषाढशुक्लदिव १

## अनुवाद

जसको इच्छाले यो सम्पूर्ण विशाल संसारको सृष्टि, स्थिति, प्रलय, बुढ्याइँ, [illegible] हुन्छन् तथा छुट्छन्। ती महेश्वरलाई सधैं नमस्कार छ ॥१॥

सधैं (बुढेसकालमा पनि) सोझो (नकुप्रिएको) जीउ हुँदा अङ्ग–ढङ्ग मिलेका, यश बुद्धि पराक्रम ऐश्वर्य यी सबै थोक भएका, शत्रुहरूलाई नष्ट पारेका राजा मानदेव हुनुहुन्थ्यो। उहाँका दुनियाँहरू उहाँमा रत्तिएका सुखी र सच्चरित्र छन् ॥२॥

उहाँकी (मानदेवकी) असल गुणरूपी रत्नका खानी भएकी, प्राणीमा दया गर्ने, विनयले युक्त भएकी, वीणाको आवाज जस्तै मधुर स्वर र राम्रो बोली–वचन भएकी 'श्रीभोगिनी' भनीकन प्रख्यात भएकी देवी (बडामहारानी) हुनुहुन्थ्यो ॥३॥

लिच्छविकुलमा जन्मेका उहाँले (मानदेवले) उहाँमा (श्रीभोगिनीमा) चन्द्रमाले शरद् कालको सफा रातमा जूनलाई झैं तेजिलो आफू सुहाउँदा अनेक असल गुणहरू भएकी छोरी विजयवतीलाई जन्माउनुभयो ॥४॥

उहाँ राजकुमारी विजयवती किसिम किसिमका कलामा सिपालु हुनाले प्रख्यात हुनुहुन्छ।

महादेवमा जस्तै आफ्ना पति वार्त्त देवलाभमा उहाँको भक्ति छ तथा उहाँलाई प्रसन्न पार्न उहाँ जान्नुहुन्छ ॥५॥

त्यस कारण ठूलो प्रसाद (मनको सफाइ) रूपी पानीले मनको कलङ्क पखालेकी, धर्म–कर्म गर्ने काममा मात्र चाख लिने भएकी उहाँले (विजयवतीले) मोक्ष होस् भन्नाका लागि राम्रो विजयेश्वर लिङ्ग यहाँ स्थापना गर्नुभयो ॥६॥

संवत् ४२७ आषाढ शुक्ल प्रतिपदा ।

## व्याख्या–

मानदेवकी छोरी विजयवतीको यस अभिलेखबाट मानदेवताकाका केही प्रश्नका उत्तर प्रामाणिक रूपमा पाइएको छ। यस कारण यस अभिलेखको निकै महत्त्व रहेको छ ।

यस अभिलेखको उठानमा महादेवको स्तुति परेको छ। विजयवतीले आफ्नो नाउँमा 'विजयेश्वर' महादेवको स्थापना गरी यो अभिलेख कुँदाइएको हुनाले उठानमा महादेवको स्तुति पर्नु प्रासङ्गिक छ। संसारको सृष्टि स्थिति र प्रलयका कारण महादेव हुन् भन्ने धारणा शैव–धर्मानुयायीहरूको थियो। यस कुराको उल्लेख ठाउँ–ठाउँमा पाइन्छ। तर महादेवको निगाहले रोग–व्याधि, जरा, मरण आदिबाट पनि मुक्ति पाइन्छ भन्ने कुराको प्रचार मानदेवको धार्मिक समन्वयको नीतिले गर्दा बढी हुन थालेको थियो भन्ने कुराको चर्चा पहिले गरिसकेको छ† । यहाँ पनि शिवस्तुतिको प्रसङ्गमा उक्त धारणा प्रकट गरिएको छ ।

यसपछि मानदेवको वर्णन गरिएको छ। मानदेवले ४१ वर्षभन्दा बढी समयसम्म शासन गरेका थिए। अन्तिम समयमा उनको उमेर साठीको आसपासमा पुगिसकेको थियो। तैपनि उनको शरीर–शोभा कायम थियो; उनी तगडा थिए; उनी कत्ति पनि कुप्रिएका थिएनन् भन्ने भाव यहाँ व्यक्त गरिएको छ। मानदेवको पालामा जनता सुखी थिए; सच्चरित्र थिए; राजाप्रति प्रजाको भक्ति थियो भन्ने वर्णन पनि यहाँ गरिएको छ ।

## भोगिनी को हुन् ?

लिच्छविकालका तामाका विभिन्न किसिमका निकै टकहरू पाइएका छन्। तिनमा 'श्रीमानाङ्क' अङ्कित टक पनि एक हो। विभिन्न साइजका 'श्रीमानाङ्क' मुद्रा अरूभन्दा केही बढी मात्रामा प्राप्त भएका छन्। तिनमा ध्वजासहित सिंहको मूर्ति अङ्कित 'श्रीमानाङ्क' मुद्रा विशेष उल्लेखनीय छ। यी 'श्रीमानाङ्क' मुद्रामा अङ्कित लिपि चाँगुको स्तम्भलेखको लिपिसंग ट्वाक्क मिल्ने हुनाले 'श्रीमानाङ्क' मुद्रा प्रसिद्ध मानदेवकै हो भन्ने कुरा निश्चित छ ।

---

† माथि गएको विष्णुपादुकाको फेदीको मानदेवको अभिलेखको व्याख्या हेर्नुहोस् ।

अहिलेसम्म पाइएका मानदेवका सब मुद्रामा एकातिर 'श्रीमानाङ्क' र अर्कोतिर 'श्रीभोगिनी' लेखिएको छ। यी श्रीभोगिनी को हुन् भन्ने प्रश्नले धेरै वर्षसम्म इतिहासकारहरूलाई अल्मलाइरह्यो। यस विषयमा विभिन्न इतिहासकारले विभिन्न अड्कल लाएथे। कसैले 'श्रीभोगिनी' लाई भोगवती विद्या भनेर कसैले लक्ष्मी भनेर कसैले 'श्रीभगिनी' भन्ने पाठ पढी मानदेवकी दिदीबहिनी भनी यसको अर्थ गरेका थिए। तर यी अड्कल सबै अशुद्ध ठहरिएका छन्। सूर्यघाटको विजयवतीको यस अभिलेखबाट यस कुराको टुङ्गो लागेको छ। यस अभिलेखमा 'श्रीभोगिनीति कथितास्य बभूव देवी' भन्ने उल्लेख परेको हुनाले 'श्रीभोगिनी' मानदेवकी बडामहारानी रहेछन् भन्ने कुरा सिद्ध भएको छ। साथै 'श्रीमानाङ्क'' मुद्रा प्रथम मानदेवकै रहेछ भन्ने कुरा पनि यसबाट सिद्ध भएको छ।

श्रीभोगिनीबाहेक मानदेवका क्षेमसुन्दरी र गुणवती भन्ने अरू दुइ रानीको पनि उल्लेख पाइएको छ। क्षेमसुन्दरीले संवत् ३९० मा स्थापना गरेको शिवलिङ्ग लाजिमपाट धोबीचौरमा छ। गुणवतीले संवत् ४१६ मा स्थापना गरेको शिवलिङ्ग लाजिमपाट टुकुचापारि बगैंचामा छ। ती दुइ अभिलेखमा क्षेमसुन्दरी र गुणवतीले आफूलाई 'मानदेवकी पत्नी' तथा 'आफ्ना पति मानदेव' भनेर सम्बन्ध देखाएका छन्। ती अभिलेखमा क्षेमसुन्दरी र गुणवतीले आफूलाई 'देवी' भन्न सकेका छैनन्। यसबाट क्षेमसुन्दरी र गुणवती मानदेवका रानी मात्र हुन्; भोगिनीचाहिं 'देवी' (बडामहारानी) हुन् भन्ने थाहा पाइन्छ। राजाका सबै रानीले 'देवी' भन्ने पदवी पाउँदैनथे। यस कुराको उल्लेख अन्त पनि पाइन्छ। अर्को कुरा—क्षेमसुन्दरी र गुणवतीमा 'श्री' जोडिएको छैन। 'भोगिनी' मा चाहिं 'श्री' जोडिएको छ। लिच्छविकालमा 'श्री' शब्दको ठूलो महत्त्व थियो। 'श्री' शब्दले राजकीय मान्यतालाई प्रकट गर्दथ्यो।

राजाको राज्याभिषेक हुँदा देवीको पनि संगै अभिषेक गरिन्थ्यो। यसैले देवीको राजासरह नै राजकीय सन्मान हुन्थ्यो। 'श्रीमानाङ्क' मुद्रामा 'श्रीभोगिनी' अङ्कित गरिएको यस कुराले पनि उपर्युक्त कुराको पुष्टि गर्दछ †।

## मानदेवको वंश—

विजयवतीको सूर्यघाटको यस अभिलेखले मानदेवको वंशबारे पनि महत्त्वपूर्ण प्रकाश पारेको छ। अब यस विषयमा पनि केही विचार गर्नुपरेको छ।

आफ्नो पुर्खाको वर्णन, आफ्नो विजयवर्णन लेखाई राखेको चाँगुको स्तम्भलेखमा मानदेवले आफ्नो लिच्छविवंशको उल्लेख गराएका छैनन्। द्वितीय जयदेवको पशुपतिको अभिलेखमा मात्र मानदेव लिच्छविवंशका हुन् भनी लेखिएको छ। मानदेवका नाति वसन्तदेवका तथा अझ निकै पछिसम्मका लिच्छवि राजाहरूका अभिलेखमा पनि आफूलाई लिच्छवि भनी खुलाएर लेखिएको

† २०१८।१२।१०।६ को 'नेपाल समाचार' मा 'भोगिनी को हुन्' भन्ने निबन्ध संशोधनमण्डलद्वारा प्रकाशित भएको छ।

पाइंदैन । पछि शिवदेवदेखिका गद्दीनशीन राजाहरूले मात्र 'लिच्छविकुलकेतु' भनी खुलाएर लेखाउन थालेको पाइन्छ । यस कारण मानदेवहरू लिच्छवि हुन् भन्ने कुरामा शङ्का छ, पछिका उनका वंशजहरूले मात्र लिच्छविवंशसंग सम्बन्ध जोड्न पुगेको पनि हुन सक्छ भनी एक जना इतिहासकारले मानदेवको वंशबारे प्रश्न उठाएथे । तर सूर्यघाटको यस अभिलेखले उक्त शङ्का निर्मूल पारिदिएको छ । यहाँ–

'तस्यां स लिच्छविकुलाम्बरपूर्णचन्द्र :
स्फीतौजसं दुहितरं जनयाम्बभूव'

भनी स्पष्टसंग लेखिएको हुनाले मानदेव लिच्छविवंशकै हुन् भन्ने प्रमाणित भएको छ* । तर मानदेवदेखि शिवदेवअघिसम्मका लिच्छवि राजाहरूले आफ्ना अभिलेखमा आफ्नो लिच्छविवंशबारे खुलाएर किन लेखेनन् भन्ने जिज्ञासाचाहिं अझै उठ्तछ । तात्कालिक अवस्थामा राम्ररी दृष्टि दियौं भने यो कुरा पनि खुल्दछ ।

मानदेवभन्दा केही शताब्दी अघिदेखि नै नेपालमा लिच्छविहरूको राज्य चल्दै आएको थियो । यसबीच लिच्छविवंशसंग टक्कर लिन सक्ने अर्को वंश अगाडि आउन सकेको देखिदैन । यस कारण राजवंशको रूपमा त्यस वेला लिच्छविवंश मात्र थियो । यसो हुनाले पुख्यौंली गद्दीमा बसी राज्य चलाएका मानदेवहरूले आफ्नो लिच्छविवंशको गौरव गाउनुपर्ने आवश्यकता त्यस वेला परेको थिएन । वसन्तदेवपछि शासनको बागडोर क्रमशः गुप्त आभीरहरूको हातमा जान थाल्यो । त्यस वेलाका लिच्छवि राजाहरूको काम गद्दीको शोभा बढाउनु मात्र रह्यो भने पनि हुन्छ । शिवदेवको समयमा आएर परिस्थिति केही बदलियो । गुप्त आभीरहरूको हातबाट शासनाधिकार झिक्ने विचार अंशुवर्माको मदतले शिवदेवले गर्न थाले । यस कारण हामी प्रसिद्ध लिच्छविराजवंशका हौं, गद्दी तथा शासनाधिकारमा हाम्रो पूरा हक छ भन्ने दावा गर्ने अभिप्रायले शिवदेवले सर्वप्रथम 'लिच्छविकुलकेतु' भनी लेखाउन शुरू गरे । पछि विष्णुगुप्तहरूलाई राम्ररी हटाएर शासनाधिकार सबै सोझै आफ्नो हातमा लिएपछि नरेन्द्रदेवले लिच्छविवंशको अझ गौरव गाउन थाले । उनका नाति द्वितीय जयदेवले त लिच्छविवंशको गौरव दर्शाउन एक खण्डकाव्य नै लेखाएर गए ।

यस दृष्टिले विचार गरे उठानमा मानदेवहरूले आफ्नो लिच्छविवंशबारे खुलाएर नलेख्नाको कारण खुल्दछ जस्तो मलाई लाग्छ ।

*राजकुमारीको शिक्षा*–यस अभिलेखमा राजकुमारी विजयवतीको वर्णन गर्दा उनलाई 'प्रख्याता विविधकलाविचक्षणत्वात्' भनी लेखिएको छ । यसबाट किसिम किसिमका कला अर्थात् नृत्य, गीत, वाद्य आदिको शिक्षा विजयवतीलाई दिइएको थियो; उनी ती कलामा सिपालु पनि थिइन् भन्ने थाहा पाइन्छ । हर्षचरितमा हर्षकी बहिनी राज्यश्रीलाई पनि यस्तै नृत्य, गीत, वाद्य आदि कलासम्बन्धी शिक्षा दिइएको उल्लेख बाणले गरेका छन् । जस्तै–

* 'पूर्णिमा' १ पूर्णाङ्कमा दिनेशराज पन्तद्वारा 'मानदेवको वंश' भन्ने निबन्ध प्रकाशित भएको छ ।

"अथ राज्यश्रीरपि नृत्तगीतादिषु. . . .सकलासु कलासु प्रतिदिवसमुपचीयमानपरिचया शनैः शनैरवर्धत ।" (हर्षचरित, चतुर्थ उच्छ्वास) ।

(अनि राज्यश्री पनि नृत्य, गीत आदि सबै कलामा दिन प्रतिदिन ज्ञान हासिल गर्दै अभ्यास बढाउँदै क्रमशः बढिन् ।)

यसबाट त्यसताका उच्चवर्गकी आइमाईलाई दिइने शिक्षाबारे केही थाहा पाइन्छ ।

*वार्त्त देवलाभ*—मानदेवले आफ्नी छोरी विजयवतीको विवाह वार्त्त देवलाभसंग गरिदिएका थिए भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ । देवलाभ कहाँका हुन्, थाहा पाउन सकिएको छन । देवलाभ कुनै 'राजपुत्र' होलान् भन्ने अनुमान हुन्छ । यहाँ देवलाभको विशेषण वार्त्त भनी दिइएको छ । 'प्रज्ञाश्रद्धार्चावृत्तिभ्यो णः' सूत्रले मतुबर्थमा वृत्तिशब्ददेखि ण' प्रत्यय भई 'वार्त्त' रूप बनेको हो । यस कारण यसको अर्थ वृत्ति भएको भन्ने हुन्छ । लिच्छविकालका अरू अभिलेखबाट राजाका प्रिय अनेक पदाधिकारीहरू विशेष वृत्ति पाई 'वार्त्त' कहलाएका देखिन्छन् ; यहाँ देवलाभको विशषण'वार्त्त' भनी लेखिएको हुनाले उनको सन्मानको लागि विशेष वृत्ति (जागीर)-को बन्दोबस्त मिलाइदिइएको थियो तथा देवलाभ यहाँ आई रहन लागेको पनि बुझिन्छ; यसबाट 'डोलाजीप्रथा' को शुरू लिच्छविकालमै भइसकेको थियो कि भन्ने आभास पाइन्छ । अरू बलियो प्रमाण नआउन्जेल यस विषयमा निश्चित रूपमा भने केही भन्न सकिंदैन ।

—★—

# पशुपति छत्रचण्डेश्वरको अभिलेख

श्रीपशुपतिनाथको मन्दिरसंगै दक्षिणभागमा छत्रचण्डेश्वरको मूर्ति रहेको एउटा सानो वेदी छ। त्यस वेदीको दक्षिणपट्टि भित्तामा सिमेण्ट लगाई जडेर राखिएको ढुङ्गामा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १ हात १५ अङ्गुल लम्बा, १५ अङ्गुल चौडा छ। अक्षर धेरै नै खिइसकेको हुनाले जम्मै भाग पढन सकिएको छैन। यसको लिपि मानदेवको ताकाको छ। यस कारण यहाँ राखिएको हो।

'अभिलेख–संग्रह' ५ भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. … … त्रैलोक्यनाथ … … …

२. … … पूर्व्व वातवाहनस्य दक्षिणेन क्षेत्रन्दत्तम्भूमि ३५० पिण्डक मा २५५…

३. … १६ काष्ठमूल्यम्पणमेकैकम्प्रतिदिवसं मा… चैत्रकृष्णपञ्चमी…

४. … पुराणाः १५ ज्येष्ठशुक्लत्रयोदश्यां राज्यवर्द्धनदेवस्य स्नपनमङ्गपूजा … …

५. त्थम्भूते दानवस्तुनि तृष्णाभिभूतमनसां पापबुद्धिर्म्मा भूदिति कृत्वा मया स…

६. मस्य पूर्व्वेण क्षेत्रन्दत्तम्भूमि २३० पिण्डक मा ११० पणका –
तैलघट १ राज्ञा राज्यवर्द्धनस्नपनादीनां भूमि — मा ६० इत्थमिह
७. व्ययः मा ५० उभयत्र तैलघट १ भवितारो मदूर्द्ध्वं ये नृपाः
कुर्य्युरिहान्यथा .... स्तर्हि वयं ... ... ...
८. त्मना लेखितोयं क्रियाकारः स्ववंश्याननुरक्षता

## अनुवाद

.......त्रैलोक्यनाथ.......। पूर्व वातवाहनको दक्षिणतिर २५५ मानिका कुत आउने ३५० भूमि खेत दान दिइयो।........१६ काठको मोल, एक एक पण प्रतिदिन मानिका......चैत्र कृष्ण पञ्चमीको दिन.....१५ पुराण ....ज्येष्ठ शुक्ल त्रयोदशीको दिन राज्यवर्द्धनदेवको स्नान, अङ्गपूजा...गर्नू। यस किसिमको दानको कुरामा लोभीहरूको पापबुद्धि नहोस् भनी मैले......

पूर्वतिर ११० मानिका कुत आउने २३० भूमि खेत दान दिइयो।.....पणहरू, १ घडा तेल। राजाले राज्यवर्द्धनको स्नान आदिको लागि ६० मानिका कुत आउने....भूमि...... यसरी यहाँ खर्च ५० मानिका....दुवैतिर १।१ तेलका घडा।

मभन्दा पछि हुने जुन राजाहरूले यहाँ अन्यथा गर्लान्.....त्यसो भए हामीहरू.... सन्तान–दरसन्तानलाई सजिलो होस् भनी मैले आफैंले यो विधिविधान लेखाइराखेको हुँ।

**व्याख्या–**

यो अभिलेख खण्डित अवस्थामा पाइएको छ। निकै खिइसकेको हुनाले बीच बीचमा पढ्न पनि सकिएको छैन। यसरी यो अभिलेख अपूरो छ।

'मपछि हुने राजाहरूले यस कुरामा तल–माथि नगरून् भनी मैले यो व्यवस्था आफ्ना सन्तानलाई सजिलो पार्न लेखाएको हुँ' भन्ने भाव यस अभिलेखमा परेको छ। यसबाट यो अभिलेख कुनै राजाले नै राख्न लाएका हुन् भन्ने थाहा पाइन्छ। तर अहिले भेट्टिएको भागमा राजाको नामोल्लेख भने भएको छैन। यसमा संवत् पनि देखिँदैन। यस कारण यो कसको अभिलेख हो भन्ने कुराको टुङ्गो लाउन सकिएको छैन। लिपि भने यसको मानदेवको ताकाको छ।

यसमा 'राज्यवर्द्धनदेव' नामक देवताको पूजा आजाको लागि गूठी राखिदिएको कुरा परेको छ। यी 'राज्यवर्द्धनदेव' नामक देवताबारे पनि विशेष कुरा थाहा पाउन सकिएको छैन।

छत्रचण्डेश्वरको वेदीमा यो अभिलेख कुँदिएको ढुङ्गा टाँसी राखिएको छ तापनि छत्रचण्डेश्वर-संग यस अभिलेखको सम्बन्ध छैन।

यहाँ गूठी राखेको जग्गाको चर्चा गर्दा त्यसबाट आउने कुतको पनि चर्चा परेको छ। यति भूमिको यति मानिका, यति पण, यति तेलको घडा कुत आउँछ भन्ने चर्चा यहाँ परेको हुँदा लिच्छवि-कालमा जिनिस तथा नगदको रूपमा पनि कुत उठाइंदो रहेछ भन्ने संकेत यताबाट पाइन्छ।

—✱—

# थानकोट आदिनारायणको वसन्तदेवको अभिलेख

थानकोटमा आदिनारायणको मन्दिरसंगै यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ । यसको अभिलेख कुँदिएको भाग ३८ अङ्गुल लम्बा, १५ अङ्गुल चौडा छ । यहाँ संवत् ४२८ दिइएको छ ।

नोलीद्वारा १२ संख्याको रूपमा यो अभिलेख छापिएको छ । 'पूर्णिमा' १४ पूर्णाङ्कमा मैले पनि यो छपाएको छु । पाठ शुद्धचाउँदा राष्ट्रिय अभिलेखालयमा रहेको यसको प्रतिलिपिबाट मदत पाइएको छ ।

## मूलपाठ

१. ऊँ स्वस्ति मानगृहा[त्परमदैवतबप्प]भट्टा–
२. रकमहाराजश्रीपादा[नुद्ध्यातः श्रुतनयद]या–
३. दानदाक्षिण्यपुण्यप्र[तापविकसितसित]कीर्ति–
४. भट्टारकमहाराजश्री[वसन्तदेवः कु]शली
५. जयपल्लिकाग्रामे नि[वासोपग]तान् ब्राह्मणपुरस्स–
६. रान् ब्रंह्मंशुल्ह्मुंतेपुल[1] . . .प्रधानान्ग्रामकुटुम्बिनः
७. साष्टादशप्रकृतीन् कु[शलम्पृ]ष्ट्वा समाज्ञापयति

---

नोलीको पाठ–

१. ब्रङ्ब्रंशुल्मुंतेपुल

८. विदितं वोस्तु यथा मयायुष्मत्यै[१] प्रियभगिन्यै
९. जयसुन्दर्य्यै स्वसन्तानानुक्रमेण सुस्थितकोट्ट--
१०. [म]र्य्यादः अचाटभटप्रवेश्योयं ग्रामोतिसृष्टोस्य
११. [ग्रामस्य] सीमा शीताटीगुल्मकस्य पश्चाद् या नदी ततः पर्व्वं
१२. [तप]श्चिमे[२] यावत् पर्व्वतचूडिका दक्षिणतोपि तत एव नद्या
१३. ...त्य पश्चिमेन ...पजु यावद्धस्तिमार्गं सम्प्राप्तेति
१४. [त]तोपि च हस्तिमार्ग्ग .. [प]श्चिमतो यावत्पर्व्वतचूडिका
१५. पश्चिमतः पर्व्वताग्रस्थ ... ति प्रागापः स्यन्दन्ते पश्चिमोत्तर-
१६. तोपि शिवकदेवकुलस्य दक्षिणतः पानीयमार्ग्गावधिः उत्तरेणा--
१७. पि थेञ्चोग्रामस्य[३] दक्षिणतः यावन्महापथः प्रागुत्तरेणापि नव--
१८. ग्रामस्य दक्षिणतो मार्ग्ग एवावधिर्य्यावत्पूर्व्वेण नदीम्प्रविष्टा इति
१९. तदेतस्मिन्ग्रामे ये प्रविष्टाः प्रविविक्षवश्च ब्राह्मणप्रधानाः सा--
२०. ष्टादश प्रकृतयस्तेषामत्र प्रतिवसतान्न केनचिदस्मत्पादोप--
२१. जीविना स्वल्पाप्याबाधा कर्तव्या यश्चेमामाज्ञामुल्लंघ्यान्यथा कुर्य्यात्कार--
२२. येद्वा तस्याहं दृढम्न मर्षयिष्यामि तदेवं विदित्वात्रभवद्भिर्न्नि-र्वृतविश्व--
२३. स्तैरकुतोभयैः स्वकर्म्मावस्थायिभिः परस्परेणाश्वासयद्भिश्च समुचि
२४. तभागभोगकरपिण्डकदानादिभिरुपकुर्व्वद्भिरनया प्रतिपाल्यमानै-
२५. राज्ञाश्रवणविधेयैः सुखं प्रतिवस्तव्यमिति समाज्ञापना येप्यागामि-
२६. नो राजानोस्मद्वंश्या भविष्यन्ति तेप्येनामस्मद्दत्ताम्भूमिमनुमोदितुम-
२७. र्हन्ति यत्कारणं बहुभिर्व्वसुधा भुक्ता राजभिः सगरादिभिर्यस्य यस्य
२८. यदा भूमिस्तस्य तस्य तदा फलम् स्वदत्तां परदत्तां वा यो हरेत वसुन्ध-
२९. राम् । स विष्ठायां कृमिर्भूत्वा नरकेषु प्रपद्यते[४] इति दूतको याज्ञिक-
३०. विरोचनगुप्तः संवत् ४२८ मार्ग्गशीर्षशुक्लदिव १

---

नोलीका पाठ--

१. यथा (स्माभि) रायुष्मत्यै

२. (त) – –

३. थेञ्चेग्रामस्य

४. पितृभिः सह पच्यत

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट परमदैवत (ठूला देवतास्वरूप भएका), भट्टारक (गद्दीनशीन) महाराज श्रीबुबाको पाउको अनुग्रह पाएका, (आफ्ना) पढाइ नीति दया दान चतुऱ्याइँ पुण्य र प्रभावद्वारा सफा कीर्ति फैलिएका, गाथमा आराम रहेका, भट्टारक महाराज श्रीवसन्तदेवबाट जयपल्लिका ग्राममा बस्ने ब्राह्मणलगायत......ब्रङह्मं, शुल्ह्मं, तेपुल..... मुखियालगायत गाउँका अठाह्रै जातका गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ–

हामीबाट प्यारी बहिनी नानी जयसुन्दरीलाई सन्तान–दरसन्तानले भोग गर्न पाउने गरी, कोट्ट (किल्ला) सम्बन्धी स्थितिबन्धेजले युक्त पारी, चाटभटले पस्न नपाउने गरी यो गाउँ दिइएको छ। यो कुरा तिमीहरूलाई थाहा होस् ।

यस ग्रामको सीमा यस प्रकारको छ–शीताटी गुल्म (चौकी) को पश्चिमपट्टि जुन खोला छ, त्यसदेखि पहाडको पश्चिमतिर पहाडको चुचुरोसम्म, दक्षिणतिर पनि त्यही खोलाको.... पश्चिम लागी.....हस्तिमार्ग (हात्ती हिंड्ने बाटो)) सम्म, त्यसदेखि पनि हस्तिमार्गको.... पश्चिमतिर पहाडको चुचुरोसम्म, पश्चिमतिर पहाडको चुचुरोको...पूर्वतिरको पानीको झरनासम्म पश्चिम–उत्तरतिर पनि शिवक देवकुल (मन्दिर) को दक्षिणतिर पानीको धारासम्म, उत्तरतिर थेञ्चोग्रामको दक्षिणतिरको ठूलो सडकसम्म, पूर्व–उत्तरतिर नवग्रामको दक्षिणतिरको बाटोसम्म, पूर्वतिर खोलासम्म ।

तसर्थ यो गाउँमा (अहिले) बसेका र पछि बस्न आउने ब्राह्मणलगायत अठाह्रै जातका जुन दुनियाँ छन्, तिनीहरूलाई हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी) कसैले पनि अलिकता पनि दुःख नदिनू । जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला, त्यसलाई हामी बिलकुल सहनेछैनौं ।

यो कुरा थाहा पाई तिमीहरूले विश्वास मानी, निर्धक्क भई, आफ्नो आफ्नो काममा लागी, परस्परमा मिली, साबिकबमोजिम भाग भोग कर पिण्डक यिनीलाई बुझाई, यिनीले लाए अह्राएको काम गरी, यिनीद्वारा नै हेरचाह गरिएका छंदा सुखसंग बस्नू ।

पछि हुने हाम्रा वंशका राजाहरूले पनि हामीले दिएको यो जग्गा थाम्नुपर्छ । किनभने सगर आदि धेरै राजाहरूले पृथ्वीको पालना गरिसकेका छन् । जसको पालामा जुन भूमि छ; त्यस वेला त्यसको फल तिनलाई नै हुन्छ । आफूले वा अरूले दिएको जग्गालाई जसले हर्ला, त्यो विष्टाको कीरा भएर नरकमा पर्ला ।

यहाँ दूतक (मार्फत) याज्ञिक विरोचनगुप्त छन् ।
संवत् ४२८ मार्ग शुक्ल प्रतिपदा ।

## व्याख्या–

लिच्छविकालका अहिले पाइएका अभिलेखमा सनद–शिलापत्ररूपको यो पहिलो अभिलेख हो। त्यस बेलाका निकै कुरामा विशेष गरेर आर्थिक कुरामा यस अभिलेखबाट प्रकाश पर्छ। अब क्रमशः तिनको चर्चा यहाँ गर्नु परेको छ।

संवत् ४२७ सम्मका मानदेवका पालाका अभिलेख पाइएका छन्। यो अभिलेख संवत् ४२८ को हो। यसमा राजाको नाम भएको भागमा पाप्रो उप्केको हुँदा राजाको नाम अहिले देखिंदैन। यस कारण यो अभिलेख कसको हो भन्ने प्रश्न उठ्छ। पशुपतिको द्वितीय जयदेवको अभिलेखमा–

"श्रीमानदेवो नृपतिस्ततोभूत्ततो महीदेव इति प्रसिद्धः।
आसीद्वसन्तदेवोस्मात्. . . . ."

भनी लेखिएको हुनाले मानदेवपछि उनका छोरा महीदेव गद्दीमा बसे; महीदेवपछि उनका छोरा वसन्तदेव गद्दीमा बसे भन्ने थाहा पाइन्छ। यसरी यो अभिलेख महीदेवको हो कि वसन्तदेवको हो; निर्णय गर्नुपरेको छ। सीतापाइलाको वसन्तदेवको अभिलेख र यो अभिलेख मिलाएर विचार गर्दा यो अभिलेख पनि वसन्तदेवकै हो भन्ने सिद्ध हुन्छ। थानकोटको यस अभिलेखमा 'मेरी बहिनी जयसुन्दरी' भन्ने उल्लेख परेको छ। सीतापाइलाको अभिलेखमा पनि 'मेरी बहिनी जयसुन्दरी' भन्ने उल्लेख आएको छ। सीतापाइलाको अभिलेखमा वसन्तदेवको नाउँ स्पष्ट देखिन्छ। यस कारण थानकोटको यो अभिलेख पनि वसन्तदेवको हो भन्ने थाहा पाइन्छ। अर्को कुरा जैसीदेवलको वसन्तदेवको अभिलेखमा उनको जुन प्रशस्ति दिइएको छ; उही प्रशस्ति थानकोटको यस अभिलेखमा पनि परेको छ। यसबाट पनि यो अभिलेख वसन्तदेवकै हो भन्ने कुराको पुष्टि हुन्छ।

## महीदेव–

यसरी ४२७ सम्म मानदेव र ४२८ मा उनका नाति वसन्तदेव राजा भएको देखिएको हुनाले मानदेवका छोरा महीदेव राजा भएनन् कि भन्ने प्रश्न उठ्छ। तर यो अभिलेख, जैसिदेवलको अभिलेख र सीतापाइलाको अभिलेख आदि अलि गहिरिएर हेर्‍यौं भने महीदेव पनि राजा भएका थिए भन्ने थाहा पाइन्छ। जैसीदेवलको अभिलेखमा वसन्तदेवले आफूलाई 'परमदैवतबप्पभट्टारकमहाराजश्रीपादानुध्यातः = परमदैवत भट्टारक महाराज श्रीबुवाको पाउको अनुग्रह पाएका भनी लेखाएका छन्। गद्दीमा पैतृक अधिकार दर्शाउन 'बप्पपादानुध्यात' भनी लेखाउने चलन त्यस बेला चलेको थियो। तर यहाँ 'बप्पपादानुध्यात' मात्र नभनी बप्प (बुवा) को विशेषण रूपमा 'भट्टारक महाराज श्री' पद पनि जोडिएको छ। यसबाट महीदेव पनि गद्दीमा बसेका थिए भन्ने साबित हुन्छ। सीतापाइलाको अभिलेखबाट यो कुरा अझ खुल्छ। त्यहाँ 'विदितमस्तु. . . . परमदैवतश्रीबप्पभट्टारकपादैः. . . .युष्मदीयग्रामः. . . . .' भन्ने उल्लेख परेको हुनाले आफ्नो शासनकालमा महीदेवले सीतापाइलाभेकको ग्राममा कुनै बन्दोबस्त मिलाइदिएका थिए भन्ने

थाहा पाइन्छ । केवलपुरको अभिलेखमा पनि भूतपूर्व राजाहरूको पङ्क्तिमा महीदेवको उल्लेख परेको छ ।

यसरी द्वितीय जयदेवले लिच्छविवंशको वर्णनमा मानदेवपछि महीदेव राजा भए भनी लेखाउनु, वसन्तदेवका अभिलेखमा उनलाई भट्टारक महाराज भन्नु, उनले गरेको कार्यको उल्लेख पाइनु आदि कुराबाट मानदेवपछि उनका छोरा महीदेव गद्दीमा बसेका थिए भन्ने कुरामा शङ्का गर्ने ठाउँ रहँदैन । महीदेवको शासनकाल भने ज्यादा छोटो अर्थात् एक वर्ष जतिको मात्र थियो भन्ने देखिएको छ ।

## राजा र प्रजाबीचको शिष्टाचार–

'ॐ' स्वस्ति' बाट यो अभिलेख शुरू गरिएको छ । मलाई आरामै छ; तिमीहरूको पनि भलो चाहन्छु भन्ने भाव यहाँ राजाको तर्फबाट प्रकट गरिएको छ । जनतालाई सम्बोधन गरी राखिएका अरू अभिलेखमा पनि यस्तै भाव प्रकट गरिएको पाइन्छ । यसबाट हामी लिच्छविकालमा प्रचलित राजा र प्रजाको बीचको शिष्टाचार तरीकाबारे केही थाहा पाउँछौं । 'शासक र शासित' को भावनाभन्दा माथि उठी राजा र प्रजामा पिता र पुत्रको जस्तो सम्बन्ध कायम राख्ने आदर्श त्यस वेला थियो भन्ने कुराको केही पुष्टि यसबाट पनि हुन्छ । । यसै हुँदा शासन(सदन)पट्ट गरिदिंदा पहिले भलाकुसारी गरीकन मात्र अरू कुरा गर्ने चलन चलेको थियो । साथै सबैको कल्याण होस् भन्ने भावनाले 'शासनपट्ट' मा सबभन्दा माथि मङ्गलसूचक 'ॐ स्वस्ति' शब्दको प्रयोग गरिएको हो । यसै गरी केही कीर्ति राखी जनतातर्फबाट राखिएका अभिलेखमा पनि आफ्ना राजाको विजय भइरहोस्; लामो कालसम्म शासन चलिरहोस् आदि शुभकामना प्रकट गरी 'प्रवर्द्धमान-विजयराज्ये' 'सम्यग्राज्यं प्रशासति' 'साग्रं वर्षशतं समाज्ञापयति' आदि उद्गार प्रकट गरिएको पाइन्छ ।

राजा र प्रजाको बीचमा शिष्टाचार प्रकट गर्ने यो प्रथा तात्कालिक सभ्यताको परिचायक रूपमा रहेको छ भनी भन्न सकिन्छ । यो प्रथा शास्त्रसम्मत पनि थियो । यो शिष्टाचार–प्रथा लिच्छविकालपछि पनि केही अंशमा कायम रहेको देखिन्छ । तर पहिलेको जस्तो स्पष्ट भावना पछि पाइंदैन । पछिका शासकहरूको शासनसम्बन्धी आदर्श त्यति स्पष्ट छैन ।

## मानगृह–

मानदेवले ४१ वर्षभन्दा लामो कालसम्म शासन गरेका थिए । तर उनको पालाको सनद–पत्र एउटा पनि नपाइएको हुनाले कुन दरबारमा बसी उनले शासन चलाए भन्ने कुरा उनका पालाका अभिलेखबाट थाहा पाउन सकिंदैन । मानदेवको लगत्तै एक वर्ष जतिपछिको थानकोटको यस अभिलेखबाट भने यस विषयमा केही प्रकाश पर्छ । वसन्तदेवको यो अभिलेख 'मानगृह' दरबारबाट जारी गरिएको छ । यसबाट वसन्तदेव'मानगृह'दरबारमा बसी शासन गर्दथे भन्ने थाहा पाइन्छ ।

उक्त दरबारको नाम 'मानगृह' रहेको हुनाले यसको सम्बन्ध मानदेवसंग छ भन्ने स्पष्ट देखिन्छ। मानदेवको टक 'मानाङ्क' कहलाएको, मानदेवले बनाउन लाएको विहार 'मानविहार' कहलाएको देखिएको हुनाले मानदेवले बनाएको हुनाले नै 'मानगृह' नाम रहेको हो भन्ने बुझिन्छ ।

यसरी मानदेवदेखि भीमार्जुनदेवसम्मका लिच्छवि राजाहरूको मुकाम 'मानगृह' रह्यो । शासनको केन्द्रस्थल राजदरबार हुने हुनाले 'मानगृह' दरबारको महत्त्वपूर्ण स्थान रहेको थियो। 'मानगृह' कहाँनिर थियो, यो निश्चित हुन सकेको छैन ।

## विर्त्ताप्रथा–

राजाद्वारा आफना मन परेका व्यक्तिलाई वा धार्मिक संगठनलाई 'अग्रहार' को रूपमा दिइएको जग्गालाई 'विर्त्ता' भनिन्छ। यद्यपि 'विर्त्ता' शब्द 'वृत्ति' शब्दबाट बनेको हो। तर लिच्छविकालको 'वृत्ति' शब्दको अर्थचाहिं 'विर्त्ता' भन्ने होइन। त्यसवेला सरकारी कर्मचारीलाई 'जागीर' को रूपमा दिइएको जग्गालाई 'वृत्ति' भनिन्थ्यो। 'वृत्ति' रूपमा पाइएको जग्गा स्थायी हुँदैनथ्यो। सरकारी पद खोसिएपछि 'वृत्ति' पनि खोसिन्थ्यो। 'अग्रहार' रूपमा दिइएको जग्गाचाहिं सन्तान–दरसन्तानसम्म पनि भोग गर्न पाइने हुन्थ्यो। साथै यस्ता जग्गाबाट सरकारले पाउने भाग, भोग, कर र जग्गा धनीले पाउने पिण्डक (कुत) समेत सो जग्गावालले नै पाउँथ्यो। यसबाट 'अग्रहार' भनेको चाहिं आजकलको 'विर्त्ता' हो भन्ने थाहा पाइन्छ ।

थानकोटको यस अभिलेखमा पनि यसै गरी राजा वसन्तदेवले आफ्नी बहिनी जयसुन्दरीलाई सन्तान–दरसन्तानले भोगचलन गर्न पाउने गरी 'विर्त्ता' दिइएको कुरा परेको छ। राजा वसन्तदेवले आफ्नी बहिनीलाई 'दाइजो' को रूपमा यो विर्त्ता दिइएको देखिन्छ भनी कुनै इतिहासकारले अनुमान गरेका छन्*। यो कुरा हुन पनि सक्छ। परन्तु अभिलेखमा चाहिं यो कुरा स्पष्ट छैन। सबै अधिकारसहित विर्त्ता दिइएको कुरा मात्र यहाँ स्पष्ट छ। अबदेखि, भाग, भोग, कर तथा पिण्डक जयसुन्दरीलाई बुझाउनू; उनकै आज्ञा मान्नू; तिमीहरूको हेरचाह उनीद्वारा नै हुनेछ भनी यहाँ स्थानीय बासिन्दाहरूलाई अह्राइएको छ। यसबाट विर्त्ता रूपमा दिइएको ग्राममा स्थानीय प्रशासन पनि केही अंशमा विर्त्तावालकै हातमा रहन्थ्यो भन्ने देखिन्छ। यसै गरी नरेन्द्रदेवले भुवनेश्वर देवमन्दिरलाई अग्रहाररूपमा दिइएको जग्गामा, शिवदेवविहारको भिक्षुसङ्घलाई दिइएको जग्गामा पोता कुत आदि उठाउने अधिकारको साथसाथै स्थानीय प्रशासनसम्बन्धी केही अधिकार-समेत सुम्पिएको छ। यसरी लिच्छविकालमा विर्ताको रूपमा जमीनदारीप्रथा केही अंशमा प्रचलित थियो भन्ने देखिएको छ ।

लिच्छविकालको भूमिव्यवस्थामा 'विर्त्ता' को कुन स्थान थियो भन्ने कुरा बुझ्नाका लागि त्यस वेलाको करव्यवस्थाबारे पनि केही बुझ्नु आवश्यक छ।

---

* 'लिच्छवि संस्कृति' का ३४३–४४ पृष्ठ हेर्नुहोस् ।

## करव्यवस्था–

लिच्छविकालमा राजकीय आम्दानीको मुख्य स्रोत करव्यवस्था थियो। कर अनेक किसिमका थिए। कुनै सर्वत्र लागू हुने व्यापक र कुनै स्थानीय रूपमा लाग्ने गरी लिच्छविकालका करलाई दुइ भागमा छुट्ट्याउन सकिन्छ। त्यस वेलाका करहरूमा मुख्यचाहिं 'भाग' 'भोग' 'कर' नामक तीनथरी कर हुन्। अंशुवर्माका अभिलेखमा यिनै तीनथरी करलाई 'त्रिकर' संज्ञा दिइएको छ। यस विषयको विचार तल यथास्थानमा गरिनेछ।

अब भाग, भोग, कर यी के कस्ता किसिमका कर हुन्; यसको निर्णय गर्नुपरेको छ। करका यी नाम भारतका अभिलेखमा पनि पाइएका छन्। यी करसम्बन्धी स्पष्ट व्याख्या नपाइएको हुनाले विभिन्न विद्वान्हरूले यिनका विभिन्न अर्थ अड्कल गरेका छन्। परन्तु महाभारत, कौटलीय अर्थशास्त्र, मनुस्मृति आदि ग्रन्थहरू राम्ररी छानबीन गरी हेर्‍यौं भने भाग, भोग, करका अर्थ खुल्छन् भन्ने मलाई लागेको छ।

कृषि, पाशुपाल्य, वाणिज्य यी तीन कुरा आम्दानीका मुख्य स्रोत हुन्। यी तीन कुरालाई संस्कृतवाङमयमा 'वार्त्ता' भन्ने संज्ञा दिइएको छ। 'वार्त्तोच्छेदे हि लोकोयं श्वसन्नपि न जीवति = वार्ता शास्त्र लुप्त भयो भने मानिस जिउँदै मर्छन्' भनी शास्त्रकारले यसको महिमा गाएका छन्* । आचार्य कौटल्यले पनि वार्ताशास्त्रको उपयोगिताको चर्चा यसरी गरेका छन्–

"कृषिपाशुपाल्ये वाणिज्या च वार्ता। धान्यपशुहिरण्यकुप्यविष्टिप्रदानादौपकारिकी। तया स्वपक्षं परपक्षं च वशीकरोति कोशदण्डाभ्याम्"

(कौटलीय अर्थशास्त्र १।३)

(कृषि, पाशुपाल्य, वाणिज्य 'वार्ता' कहिन्छ। अनाज, पशु, नगद, जिनिस, बेठबिगार दिने हुनाले वार्ता उपयोगी छ। वार्ताद्वारा संगृहीत कोश र दण्डद्वारा नै राजा आफन्त र पराईलाई वश पार्छन्)।

यसबाट राजकीय आम्दानीको मुख्य आधार कृषि, पाशुपाल्य, वाणिज्य हुन् भन्ने थाहा पाइन्छ। कृषि, पाशुपाल्य, वाणिज्यबाट बढी कर उठ्न सक्ने हुनाले उहिलेदेखि यी तीन कुरामा देश कालअनुसार विभिन्न कर लागेको उल्लेख पाइन्छ।

कृषिमा लागेको कर 'भाग' हो। जग्गाको पैदाबार हेरी 'भाग' उठाइन्थ्यो। साधारणतः अनाजको पैदावारको ६ भागको १ भागको रूपमा यो कर लिइन्थ्यो। जग्गाको पैदावारी हेरी आठ भागको एक भाग, बाह्र भागको एक भाग पनि लिइन्थ्यो। 'भाग' को यो परिभाषा मनुस्मृति आदि प्राचीन धर्मशास्त्रसम्बन्धी ग्रन्थबाट खुल्दछ। विचारार्थ 'मनुस्मृति' को वचन यहाँ उद्धृत गरिन्छ–

---

* 'कामन्दकीय नीतिसार' १।१२

"पञ्चाशद् भाग आदेयो राज्ञा पशुहिरण्ययोः ।
धान्यानामष्टमो भागः षष्ठो द्वादश एव वा ॥"

(राजाले पशु र हिरण्यमा पचास भागको एक भाग लिनू । अनाजमा चाहिं छ भागको एक भाग, आठ भागको एक भाग वा बाह्र भागको एक भाग लिनू ।)

टीकाकार यस कुरालाई अझ स्पष्ट पार्दै यस्तो लेख्छन्–

"अष्टमः षष्ठो द्वादश इति विकल्पो भूम्युत्कर्षापकर्षक्लेशलाघवगौरवापेक्षया द्रष्टव्यः । धान्यानां व्रीहियवादीनाम् । अयं च भागः कर्षकेभ्य एव ग्राह्यः ।"
(वीरमित्रोदय, राजनीतिप्रकाशबाट उद्धृत)

(जग्गाको असल कंसल, सजिलो गाह्रो आदि कुराको विचार गरी छ भागको एक भाग, आठ भागको एक भाग वा बाह्र भागको एक भाग लिने नियम बनाइएको हो। यो 'भाग' खेतीवालहरूसंग अनाजमा मात्र लिइने कर हो ।)

यसबाट 'भाग' भनेको कृषिमा लागेको कर हो भन्ने निश्चित भएको छ। केवलपुरको अभिलेखमा 'द्वादशभाग' को उल्लेख आएको छ । त्यसबाट लिच्छविकालमा 'बाह्र भागको एक भाग' आदि लिने चलन थियो भन्ने कुराको पुष्टि हुन्छ ।

'कर' शब्द साधारण कर भन्ने अर्थमा पनि प्रयुक्त हुन्छ । विशिष्ट रूपमा प्रयुक्त हुँदाचाहिं 'कर' शब्दले वाणिज्यमा लागेको करलाई बुझाउँथ्यो । महाभारत आदि ग्रन्थमा यसको उल्लेख पाइन्छ। विचारार्थ महाभारतको एक श्लोक यहाँ उद्धृत गरिन्छ–

"विक्रयं क्रयमध्वानं भक्तं च सपरिच्छदम् ।
योगक्षेमं च सम्प्रेक्ष्य वणिजां कारयेत्करम् " (शान्तिपर्व ८७।१४)

(किन–बेच, बाटो, बाटोखर्च, मालको प्राप्ति र बचावट आदि कुराको विचार गरी व्यापारीहरूसंग 'कर' लिनू ।)

यसरी 'भाग' कृषिमा र 'कर' वाणिज्यमा लागेका कर हुन् भन्ने स्पष्ट भएको छ । बाँकी रहेको 'भोग' चाहिं पाशुपाल्यमा लागेको कर हो भन्ने देखिन्छ। यद्यपि 'भोग' शब्दको अर्थ स्पष्ट पार्ने वचन पाइएको छैन । तैपनि उपर्युक्त कुराको प्रसङ्ग विचार गर्दा 'पाशुपाल्य' मा लागेको कर नै 'भोग' हो भन्ने देखिन्छ। कुक्कुट, मत्स्य, सूकर, मल्ल आदि पाशुपाल्यमा लागेको करको उल्लेख लिच्छविकालका अभिलेखमा धेरै ठाउँमा आएको छ। यसबाट पनि उक्त कुराको केही पुष्टि हुन्छ।

भाग, भोग, कर यी सर्वत्र लागू हुने व्यापक कर हुन् । केही स्थानीय कर पनि थिए । उदाहरणार्थ दक्षिणकोलिग्राममा हुने गोयुद्धको उपलक्ष्यमा उठाइने 'गोयुद्धकर' लाई देखाउन सकिन्छ।

थानकोटको भीमार्जुनदेव + जिष्णुगुप्तको अभिलेखमा यस करको उल्लेख आएको छ । यसै गरी अरू पनि केही स्थानीय करको उल्लेख पाइन्छ ।

लिच्छविकालका अभिलेखमा लशुनकर, पलाण्डुकर, सिंकर, चैलकर, तैलकर, आपणकर, मल्लकर, मत्स्यकर, सूकरकर, आदि करका नामोल्लेख भएका छन् । तिनको चर्चा यथास्थानमा गरिनेछ ।

## चाटभट–

'राजस्व' उठाउने काम मुख्य गरी 'कुथेर' अधिकरण अन्तर्गत थियो । यसको चर्चा तल यथास्थानमा गरिनेछ । अभिलेखहरूमा 'कुथेर्वृत्त्यधिकृतानां समुचितस्त्रिकरमात्रसाधनायैव प्रवेशः = कुथेर अधिकरणका अधिकारीहरूले 'त्रिकर' उठाउन मात्र यहाँ पस्नु योग्य छ' आदि उल्लेख पाइने हुनाले सरकारी अधिकारीहरू गाउँ–गाउँमा गई भाग, भोग आदि कर उठाउँथे भन्ने थाहा पाइन्छ । यी अधिकारीहरू के कस्ता थिए भन्ने कुरा अभिलेखबाट खुल्न सकेको छैन । तर यीमध्ये एक 'चाटभट' नामक अधिकारीबारे भने हामी केही बुझ्न सक्छौं ।

थानकोटको यस अभिलेखमा 'चाटभट' को उल्लेख परेको छ । लिच्छविकालका अरू अभिलेखमा पनि 'चाटभट' को उल्लेख आएको छ । भारतका अभिलेखहरूमा पनि 'चाटभट' को प्रशस्त उल्लेख पाइन्छ । तर यसको निश्चित अर्थ प्रकाशमा आएको छैन । पहिले यसको अर्थ 'पुलीस र सिपाही' भनी छपाइएको थियो† । तर यो अर्थ अशुद्ध देखिएको छ ।

नेपालका र भारतका अभिलेखहरू गहिरिएर पढ्यौं भने 'चाटभट' को कामबारे हामी केही बुझ्न सक्छौं । जहाँ जहाँ मालपोत माफी गरी बिर्ताको रूपमा जग्गा दिइएको हुन्छ, त्यहाँ त्यहाँ 'चाटभटाप्रवेशः = यहाँ चाटभट नपस्नू' भनी लेखिएको पाइन्छ । यसबाट 'चाटभट' को काम ठाउँ ठाउँमा गई सरकारी मालपोत उठाउन जाने हुन्थ्यो भन्ने स्पष्ट थाहा पाइन्छ । यस विषयमा विचार गर्न केही अभिलेखहरू केलाएर हेर्नुपरेको छ ।

थानकोटको यस अभिलेखमा वसन्तदेवले आफ्नी बहिनी जयसुन्दरीलाई मालपोत आदि सबै किसिमका कर माफी गरी बिर्ता दिएको कुरा परेको छ भन्ने चर्चा पहिले नै गरिसकेको छ । मालपोत मिनाहा गरी विर्ता दिइएको हुँदा अब उक्त ग्राममा 'चाटभाट' ले पस्नु आवश्यक थिएन । यस कारण अन्त जस्तै उक्त ग्राममा पनि मालपोत उठाउन 'चाटभट' पस्लान् र खिचोला गर्लान् भन्ने आशङ्काले अबदेखि उक्त ग्राममा 'चाटभले नपस्नू' भनी स्पष्ट निर्देशन दिइएको हो । यसबाट हामी 'चाटभट' को कामको झलक पाउँछौं ।

का. इ. लगनटोलको द्वितीय शिवदेवको अभिलेखमा भाग, भोग, कर आदि माफी गरी बिर्ताको रूपमा पाशुपत आचार्यहरूलाई ग्राम दिइएको कुरा कुरा परेको छ । त्यहाँ पनि 'चाटभटानाम-

---

† 'इतिहास–संशोधनको प्रमाण प्रमेय' को ५६ पृष्ठ, 'पूर्णिमा' ६ अङ्कको १२ पृष्ठ हेर्नुहोस् ।

प्रवेश्येन' भनी भनिएको छ। जस्तै–

"......महाराजाधिराजश्रीशिवदेवः......समाज्ञापयति...... अयङ्ग्रामः शरीरकोट्टमर्यादोपपन्नश्चाटभटानामप्रवेश्येन....वशपाशुपताचार्येभ्यः प्रतिपादितः तदेवम-वगतार्थैर्भवद्भिः समुचितदेयभागभोगकरहिरण्यादिसर्वप्रत्यायानेषामुपयच्छद्भिः.....सुख-मत्र स्थातव्यं.....'

(महाराजाधिराज श्रीशिवदेवबाट.....आज्ञा भएको छ। शरीर र कोट्टको स्थितिबन्देजले युक्त भएको, चाटभटले पस्न नपाउने गरिएको यो गाउँ.....वश पाशुपत सम्प्रदायका आचार्य-हरूलाई दिइएको छ। यो थाहा पाई तिमीहरूले साबिकबमोजिम दिनुपर्ने भाग, भोग, कर, हिरण्य आदि सबै राजकीय आम्दानी यी आचार्यहरूलाई नै बुझाउनू....., सुखसंग बस्नू।)

यसै गरी धरमपुर, चाँगु, यङ्गालहिटी, देउपाटन, अनन्तलिङ्गेश्वर, वज्रघर, यागबहाल, बलम्बू आदि ठाउँका अभिलेखहरूमा पनि अनुग्रह गरी जग्गा दिंदा 'यहाँ चाटभटले नपस्नू' भनी लेखिएको छ। यिनमा केहीको संक्षिप्त चर्चा यहाँ गर्नुपरेको छ।

चाँगुको शिवदेव अंशुवर्माको अभिलेखमा स्थानीय वनदुर्गको सुरक्षाको लागि बन्दोबस्त मिलाएको कुरा परेको छ। त्यहाँ 'अयं....अचाटभटप्रवेश्यो वसतये कृषिकर्मणे च कोट्टो वः प्रतिपादितः=यो कोट्ट (किल्ला) चाटभटले पस्न नपाउने गरी.....बस्ती बसाल्न र खेती गर्न पाउने गरी तिमीहरूलाई सुम्पिएको छ' भन्ने उल्लेख परेको छ। यसबाट 'चाटभट' भनेको 'पुलीस र सिपाही' होइन भन्ने कुरा स्पष्ट हुन्छ। किनभने चाटभटको अर्थ पुलीस र सिपाही भन्ने भएको भए किल्लाभित्र पुलीस र सिपाहीले नपस्नू भनी बन्धेज बाँध्नु अनर्थक र बिलकुल अप्रासङ्गिक कुरा हुने थियो। वास्तवमा चाटभटले कोट्टभित्र नपस्नू भन्ने कुराको अभिप्राय उक्त कोट्टको इलाकाभित्रका बासिन्दाहरूलाई मालपोत मिनाहा गरियो भन्ने हो; तब प्रसङ्ग मिल्छ।

यङ्गालहिटीको नरेन्द्रदेवको अभिलेखमा बिर्ता रूपमा दिइएका तीन ग्रामसहित भुवनेश्वर देवमन्दिरको हेरचाहको काम दक्षिणकोलीग्रामद्रङ्गलाई सुम्पेको कुरा परेको छ। त्यहाँ "......ग्रामैरेभिरग्रहारत्वेनोत्सृष्टैश्चाटभटाप्रवेशैः......सहितं प्रतिमुक्त" भनी लेखिएको छ। अग्रहार (बिर्ता) रूपमा दिइएका ग्राममा चाटभटले पस्नु अनावश्यक भएको कुरा यताबाट झल्किन्छ।

नरेन्द्रदेवको देउपाटनको अभिलेखमा 'याश्च गौष्ठचो नवगृहप्रतिबद्धास्ताश्च चाटभटानाम-प्रवेश्याः=नवगृह इलाकाभित्र जति गोष्ठीहरू छन्, ती सबैमा पनि चाटभटले नपस्नू' भन्ने उल्लेख परेको छ। धार्मिक र लौकिक काम कुरा चलाउने उद्देश्यले स्थापित गोष्ठीहरूमा चाटभटले नपस्नू भन्ने कुरा झ्वाट्ट हेर्दा निरर्थक जस्तो देखिन्छ। तर यसको अभिप्राय नवगृह (वर्तमान देउपाटनभेक) भित्रका सबै गोष्ठीसम्बन्धी जग्गाहरूमा पोता माफी गरियो भन्ने हो। माथि उल्लिखित प्रसङ्गबाट यो कुरा बुझिन्छ।

नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखमा हंसगृहद्रङ्गका लोकपालस्वामीको पूजाआजा यात्रा आदिको प्रबन्ध मिलाई यसको लागि रकम तोकिएको छ। त्यहाँ पनि 'चाटभटाप्रवेश' भनी भनिएको छ।

नरेन्द्रदेवको पशुपति वज्रघर र पाटन यागबहालको अभिलेखमा भिक्षुसङ्घलाई बिर्ता दिएको कुरा परेको छ। त्यहाँ पनि 'चाटभटानामप्रवेश्येन' भनी लेखिएको छ ।

द्वितीय शिवदेवको बलम्बूको अभिलेखमा नारायणमन्दिरसम्बन्धी जग्गा शीताटीद्रङ्गलाई सुम्पिएको छ। त्यहाँ पनि 'चाटभटानामप्रावेश्येन' भन्ने उल्लेख परेको छ।

यसै गरी भारतका अभिलेखहरूमा पनि पोता आदि माफ गरी बित्त्र्ता आदि दिएको प्रसङ्गमा चाटभटको उल्लेख आएको छ। विचारार्थ भारतका अभिलेखको अलिकता उद्धरण यहाँ दिइन्छ—

"......श्रीमहाराजहस्तिना......अग्रहार उत्सृष्ट.......अचाटभटप्रावेश्यः"..

(जबलपुरको अभिलेखबाट‡)

"......महाराजशर्व्वनाथः...... समाज्ञापयति......एष ग्रामो मया..... अचाटभटप्रावेश्यः......प्रतिपादितः"

(शर्वनाथको अभिलेखबाट§)

यति कुराबाट गाउँ–गाउँमा गई सरकारी मालपोत उठाउने काम 'चाटभट' नामक सरकारी कर्मचारीहरूले गर्दा रहेछन् भन्ने स्पष्ट भएको छ।

गाउँ–गाउँ गई मालपोत उठाउन जाँदा सरकारी धाक–रवाफ देखाई चाटभटहरूले अनुचित रूपमा रैतीलाई पिर्ने सम्भावना थियो। यसै हुँदा 'कायस्थ'लाई जस्तै 'चाट' लाई पनि दुनियाँलाई पिर्नेहरूको पङ्क्तिमा शास्त्रकारहरूले गणना गरेका छन्। जस्तै—

'चाटतस्करदुर्वृत्तमहासाहसिकादिभिः ।
पीडचमानाः प्रजा रक्षेत् कायस्थैश्च विशेषतः ॥

(याज्ञवल्क्यस्मृति, आ. अ. ३३६)

(चाट, चोर, दुर्जन, हरामज्यादाहरूलाई दुनियाँ पिर्न नदिनू । विशेष गरेर कायस्थहरूलाई दुनियाँ पिर्न नदिनू) ।

कायस्थ (सरकारी कारिन्दा) असैनिक कर्मचारी हुन्थे। तर 'चाट' चाहिं सैनिक रूपका कर्मचारी थिए। यसो हुँदा अभिलेखहरूमा 'चाटभट' 'भटचाट' आदि रूप प्रयुक्त गरिएको पाइन्छ। शास्त्रकारले चाहिं 'चाट' शब्दको मात्रै प्रयोग गरेका छन् ।

‡ राजबलि पाण्डेको 'हिस्टोरिकल यॉन्ड् लिटररी इन्स्क्रिप्शन्ज्' को ९१ पृ.

§ दिनेशचन्द्र सरकारको 'सिलेक्ट् इन्स्क्रिप्शन्ज्' को ३७१ पृ.

## कोटमर्यादा–

यस अभिलेखमा जयसुन्दरीलाई बिर्त्ताको रूपमा दिइएको ग्रामको विशेषण रूपमा 'सुस्थित-कोट्टमर्यादः' शब्दको उल्लेख परेको छ। अब यस विषयमा पनि अलिकता विचार गर्नुपरेको छ।

राष्ट्ररक्षाको लागि 'दुर्ग' (किल्ला) को पनि आवश्यकता हुन्छ। 'दुर्ग' धेरै किसिमका हुन्थे। गिरिदुर्ग, वनदुर्ग आदि अनेक किसिमका दुर्गको उल्लेख कौटलीय अर्थशास्त्र, मनुस्मृति आदिमा पाइन्छ†। ठाउँ हेरी ती विभिन्न किसिमका दुर्गको उपयोगिता रहन्थ्यो। लिच्छविकालमा पनि राष्ट्ररक्षाको लागि ठाउँ ठाउँमा कोट्ट (किल्ला) बनाइएका थिए। अभिलेखमा कोट्टको उल्लेख ठाउँ ठाउँमा आएको छ। कोट्टभित्र बस्ती पनि हुन्थ्यो, खेती पनि हुन्थ्यो। कोट्टको इलाका निश्चित हुन्थ्यो। कोट्टको इलाकाभित्र बस्नेहरूलाई केही सुबिधा दिइएको हुन्थ्यो। यसैलाई कोट्टमर्यादा (किल्लासम्बन्धी स्थितिबन्धेज) भनिएको हो। चाँगुको शिवदेव + अंशुवर्माको अभिलेखबाट कोट्टसम्बन्धी केही कुरा बुझिन्छ। विचारार्थ त्यसको अलिकता अंश यहाँ उद्धृत गरिन्छ–

'......अस्मद्गुरुभिः कृतसीमनिर्णयो योयं सर्व्वकोट्टमर्यादोपपन्नत्वादचाटभटप्रवेश्यो वसतये कृषिकर्मणे च कोट्टो वः प्रतिपादित आसीद्.....प्रीतमनसा मयापि पूर्वलब्धेन सहैकीकृत्य शिलापट्टकशासनमिदं वो दत्तम्......"

कोट्टका* बासिन्दालाई अन्तका बासिन्दाभन्दा बढी सुबिधा दिइएको हुनाले यस्तै सुबिधा गरिदिई बिर्त्ता दिंदा पनि 'सुस्थितकोट्टमर्याद' 'कोट्टमर्यादोपपन्न': आदि लेखिएको पाइन्छ।

## लिच्छविकालको ग्राम–

यस अभिलेखमा 'जयपल्लिका' ग्रामको उल्लेख परेको छ। ब्राह्मण आदि अनेक जातको बसोबास भएको यो विकसित ग्राम देखिन्छ। लिच्छविकालका बस्तीबारे थाहा पाउन त्यस वेलाका 'ग्राम' को परिभाषा जान्नु आवश्यक छ।

'ग्राम' शब्दको अर्थ हामी 'गाउँ' भन्ने गर्छौं। बीस पच्चीस फाटफुट घर भएको बस्ती पनि गाउँ कहलाउँछ। गाउँको यस परिभाषाले हामीले लिच्छविकालका 'ग्राम' लाई हेर्‍यौं भने वस्तु-स्थितिसंग मेल खाँदैन।

लिच्छविकालका धेरैजसा बस्तीलाई 'ग्राम' भनिएको छ। व्यापारको दृष्टिले बढी विकसित भएपछि 'ग्राम' ले 'द्रङ्ग' संज्ञा पाउँथ्यो। तर कुनै बस्तीलाई पनि स्पष्ट शब्दमा 'पुर वा पुरी' संज्ञा दिइएको पाइएको छैन। पाटन छिन्नमस्ताको अभिलेखमा एक ठाउँमा 'शहरिया' भन्ने उल्लेख

---

† कौटलीय अर्थशास्त्र २।३।२, मनुस्मति ७।७०

* 'पूर्णिमा' २४ पूर्णाङ्कका २२७–३२ पृष्ठमा 'लिच्छविकालका कोट्ट' बारे प्रकाश पारिएको छ।

आएको छ। त्यहाँ पनि कुनै ठाउँलाई तोकेर त्यस्तो उल्लेख आएको होइन। जिष्णुगुप्तको वर्णनको प्रसङ्गमा 'समस्तपौरार्चितशासनः' भन्ने पद प्रयोग त्यहाँ गरिएको छ। गद्दीमा लिच्छवि राजा ध्रुवदेव बसे तापनि शासनको बागडोर जिष्णुगुप्तको हातमा रहेको छ भन्ने देखाउन मात्र सो पद प्रयोग गरिएको हो। किनभने सो अभिलेख नै थम्बू, गाङशुल, मूलवाटिका ग्रामका बासिन्दाहरूलाई सम्बोधन गरी राखिएको हो ।

नक्साल नारायणचौरको अभिलेखमा उल्लिखित सात प्रमुख बस्तीमध्ये एउटाको नाउँ 'साम्बपुर' रहेको छ। तर 'पुर' नाम रहे तापनि त्यसलाई पनि 'ग्राम' नै भनिएको छ; यो विचारणीय छ। शासकको मुकाम भएको बस्तीलाई पनि 'ग्राम' नै भनिएको छ। नीलवाराहीको अभिलेखमा त्यस वेला जिष्णुगुप्तले याप्रिङ ग्राममा बसी शासन गरिरहेको उल्लेख परेको छ ।

घना बस्तीको दृष्टिले 'यूपग्राम' ले त्यस वेला विकसित शहरको रूप लिइसकेको थियो। साधारण ग्राममा त्यहाँको बन्दोबस्तको लागि एक पाञ्चाली (पञ्चायत) रहेको हुन्थ्यो। तर यूपग्राममा अनेक पाञ्चाली थिए । यसबाट 'यूपग्राम' निकै विकसिल बस्ती थियो भन्ने स्पष्ट थाहा पाइन्छ। यसै गरी दक्षिणकोलिग्राममा पनि अनेक पाञ्चाली कायम भएका थिए। यसै हुँदा 'यूपग्राम' 'दक्षिण कोलिग्राम' आदिले 'द्रङ्ग' संज्ञा पाएका थिए । तर तिनलाई पनि 'ग्राम' भन्न छोडिएको थिएन ।

इत्यादि कुराबाट लिच्छविकालका 'ग्राम' को अनुवाद सोझै 'गाउँ' भनी गर्दा सबैतिर ठीक मिल्न आउँछ भनी भन्न सकिँदैन भन्ने स्पष्ट छ। यसको लागि 'ग्राम' को तात्कालिक परिभाषा बुझ्नु आवश्यक छ।

पाँच शयसम्म घर भएको बस्तीलाई 'ग्राम' संज्ञा दिने चलन संस्कृत वाङमयमा प्रचलित थियो। यो कुरा कौटलीय अर्थशास्त्रको 'जनपदनिवेश' प्रकरणको यो वाक्यबाट बुझ्न सकिन्छ–

'.....कुलशतावरं पञ्चशतकुलपरं ग्रामं क्रोशद्विक्रोशसीमानमन्योन्यारक्षं निवेशयेत् ।२।।
(कौ. अ. २।१)

(......घटीमा शय घर भएको, बढीमा पाँच शय घर भएको, एक दुइ कोशको इलाका भएको, परस्परमा रक्षाको प्रबन्ध भएको 'ग्राम' बसाउनू।)

शुक्रनीतिमा पनि 'भवेत्क्रोशात्मको ग्रामः' १।१९३ भनी एक कोश गिर्दा भएको बस्तीलाई 'ग्राम' भनिएको छ। यस्तै परिभाषाअनुसार राजदरबार भएको समृद्ध बस्ती पनि 'ग्राम' नै कहलाउँथ्यो। यो कुरा हामी भासविरचित 'स्वप्नवासवदत्त' नाटकबाट राम्ररी बुझ्न सक्छौं। विचारार्थ त्यहाँको अलिकता अंश यहाँ उद्धृत गरिन्छ–

"यौगन्धरायणः– भोः कुत आगम्यते, क्व गन्तव्यं, क्वाधिष्ठानमार्यस्य।

ब्रह्मचारी–भोः श्रूयताम् । राजगृहतोस्मि । श्रुतिविशेषणार्थं वत्सभूमौ लावाणकं नाम ग्रामस्तत्रोषितवानस्मि ।

तत्रोदयनो नाम राजा प्रतिवसति । तस्यावन्तिराजपुत्री वासवदत्ता नाम पत्नी दृढमभिप्रेता किल । ततो मृगयानिष्क्रान्ते राजनि ग्रामदाहेन सा दग्धा । ततो....विलपन्तं राजानममात्यैर्महता यत्नेन तस्माद् गृहीत्वापक्रान्तम् । ततो निष्क्रान्ते राजनि प्रोषितनक्षत्रचन्द्रमिव नभोऽरमणीयः संवृत्तः स ग्रामः । ततोहमपि निर्गतोस्मि ।

(पहिलो अङ्कबाट)

(यौगन्धरायण– तपाईं कहाँबाट आउनुभएको; कहाँ जान लाग्नुभएको; तपाईंको घर कहाँ हो ?

ब्रह्मचारी–सुन्नुहोस् । राजगृहबाट आउँदैछु । वत्सदेशमा लावाणक नाउँको 'ग्राम' छ । विशेष वेद अध्ययन गर्न त्यहाँ बसेको थिएं ।

त्यहाँ उदयन राजा हुनुहुन्छ । अवन्तिदेशका राजाकी छोरी वासवदत्ता नामकी महारानी उहाँको ज्यादै मन पर्ने हुनुहुन्थ्यो । अनि राजा शिकार खेल्न जाँदा ग्राममा आगलागी हुँदा उहाँ महारानी पनि आगोमा पर्नुभयो । यसपछि...विलाप गरिरहनुभएका राजालाई बल्लतल्ल साथ लिई मन्त्रीहरू त्यो ग्राम छोडी जानुभयो । अनि राजाको सवारी भएपछि नक्षत्र चन्द्रमा नभएको आकाश जस्तै त्यो 'ग्राम' नरमाइलो हुन थाल्यो । त्यसपछि म पनि त्यताबाट हिंडे ।)

'ग्राम' को यस्तै परिभाषाअनुसार लिच्छविकालका विकसित बस्तीलाई पनि 'ग्राम' संज्ञा दिइएको हो* ।

## अष्टादशप्रकृति–

जयपल्लिका ग्राममा बस्ने ब्राह्मणलगायत अष्टादशप्रकृति (अठार्ह प्रकारका जात) लाई सम्बोधन गरी यो अभिलेख शुरू गरिएको छ । अन्त्यतिर पनि 'एतस्मिन्ग्रामे ये प्रविष्टाः प्रविविक्षवश्च ब्राह्मणप्रधानाः साष्टादशप्रकृतयः' भन्ने वाक्य परेको छ । यसबाट लिच्छविकासको जातपातबारे हामी केही थाहा पाउँछौं ।

लिच्छविकालका शासकहरूको नीति यहाँ वर्णव्यवस्था कायम गर्नेतिर ढल्केको थियो । यसको अलिकता चर्चा पहिले गरिसकेको छ । केही चर्चा तल आउँदैछ । तर हाम्रो यहाँ किरातकालदेखि नै वर्णव्यवस्थाभन्दा भिन्न व्यवस्थामा हुर्केका जातिहरूको पनि बसोबास थियो । यस

* यस विषयको चर्चा 'पूर्णिमा' १८ पूर्णाङ्कको ९७–९८ पृष्ठमा पनि गरिएको छ ।

कारण चार वर्णभित्र सबै जनतालाई समावेश गर्नु गाह्रो थियो। यसो हुँदा यहाँका सबै जातिको अन्तर्भावको लागि पछि 'चार वर्ण छत्तीस जात' भने जस्तै लिच्छविकालमा 'चार वर्ण अठाह्र जात' भनिएको देखिन्छ ।

यसै गरी भारततिरका अभिलेखमा पनि 'अष्टादशप्रकृति' को उल्लेख पाइन्छ । कुमाउँका कत्यूरी राजा ललितशूरको अभिलेखमा† '......अष्टादशप्रकृत्यधिष्ठानीयान् खशकिरातद्रविडकलिङ्गगौडहूणोड्मेदान्ध्रचाण्डालपर्यन्तान् समस्तजानपदान्....समाज्ञापयति' भनी अष्टादशप्रकृतिबारे अलि खुलाएर पनि लेखिएको छ।

नेपालमा मध्यकालको पूर्वार्धसम्म पनि 'अष्टादशप्रकृति' को उल्लेख पाइन्छ ।

## 'शीताटी' गुल्म–

यहाँ जयसुन्दरीलाई दिइएको जयपल्लिका ग्रामको चारकिल्ला खोल्दा 'शीताटी' गुल्मको उल्लेख आएको छ। चन्द्रागिरि र दहचोक डाँडोको बीच भागमा लिच्छविकालमा प्रशस्त बस्ती बसेका थिए। सतुङ्गल, किसिपिंडी, थानकोट, भेल्बू, बलम्बू, वांसिख्य, मालटार, चौकिटार, आदि यस भेकमा पाइएका अभिलेखबाट यो कुरा थाहा पाइन्छ । 'शीताटी' यही भेकलाई भनिन्छ।

'गुल्म' भनेको 'सुरक्षाचौकी' हो। संस्कृत काव्य नाटकहरूमा 'गुल्म' को उल्लेख धेरै ठाउँमा पाइन्छ। त्यसबाट यस शब्दको अर्थ खुल्छ। विचारार्थ अलिकता उद्धरण यहाँ दिनुपरेको छ–

"अरे रे दौवारिकाः, अप्रमत्ताः स्वेषु स्वेषु गुल्मस्थानेषु भवत। एषोद्य गोपालदारको गुप्ति भङ्क्त्वा गुप्तिपालकं व्यापाद्य बन्धनं भित्वा परिभ्रष्टोऽपक्रामति। तद् गृह्णीत, गृह्णीत।"

(मृच्छकटिक, छैटौं अङ्कबाट)

(चौकीदारहरूहो ! आफ्नो आफ्नो गुल्म (चौकी) मा होशियार भएर रहनू। यो गोठालोको छोरो अहिले झ्यालखाना फोरेर पालेलाई मारेर नेल तोडी भाग्दैछ। त्यस कारण समात, समात।)

"क्षपणकः– श्रावक, न साम्प्रतमेतस्मिन्मलयकेतुकटकेऽनुकूलेन गम्यते।

सिद्धार्थकः– भदन्त, कथय कुत एतत् ?

क्षपणकः– श्रावक, निशामय। प्रथमं तावदत्र कटके लोकस्यानिवारिता निर्गमप्रवेशा आसन्। इदानीमितः प्रत्यासन्ने कुसुमपुरे न कोप्यमुद्रालाञ्छितो निर्गन्तुं प्रवेष्टुं वानुमोद्यते। तस्माद् यदि मुद्रया लाञ्छितोसि ततो गच्छ विश्रब्धः। अन्यथा तिष्ठ निभृतः। मा गुल्माधिकारिभिः संयमितकरचरणो राजकुलं प्रवेश्यसे ।

× × ×

---

† श्रीराहुल सांकृत्यायनको 'कुमाऊँ' को ३९–४१ पृष्ठ हेर्नुहोस् ।

(प्रविश्य)

पुरुषः—जयतु कुमारः। आर्य, गुल्माधिकृतो दीर्घचक्षुर्विज्ञापयति। एष खल्वस्माभिः कटकान्नि-ष्क्रामन्नगृहीतमुद्रः सलेखः पुरुषो गृहीतः। तत्प्रत्यक्षीकरोत्वेनमार्य इति।"

(मुद्राराक्षस, पाँचौं अङ्कबाट)

(क्षपणक— भक्तिबा, हिजो आज मलयकेतुको यो छाउनीबाट जहाँ पायो, त्यहाँ आफूखुशी जान पाइंदैन।

सिद्धार्थक— सिद्धबा, भन्नुहोस् न, किन यस्तो भयो।

क्षपणक— भक्तिबा, सुन। पहिले त यस छाउनीमा सबै मानिस विना रोकटोक जानु आउनु गर्दथे। हिजो आज यताबाट कुसुमपुर नजीकै भएपछि राहदानी नलिईकन कसैलाई पनि जान आउन दिइंदैन। त्यस कारण राहदानी लिएको छ भने निर्धक्कसंग जाऊ। होइन भने चूप लागेर बस। नत्र गुल्म (चौकी) का अधिकारीहरूले पक्रेर हातखुट्टा बाँधेर अड्डामा पुऱ्याइनेछौ।

× × ×

(पसेर)

पुरुष— राजकुमारको जय होस्। हजुर, गुल्म (चौकी) का अधिकारी दीर्घचक्षु बिन्ति गर्दछन्। राहदानी नलिईकन छाउनीबाट निस्कन लागेको चिठीपत्रस-मेतको यस मानिसलाई हामीले पक्रेका छौं। त्यस कारण हजुरबाट यसलाई नजर होस्।)

यी उदाहरणबाट 'गुल्म' भनेको सुरक्षाचौकी हो भन्ने निश्चित हुन्छ। शीताटी गुल्म अन्तर्गत परेको एउटा क्षेत्र अहिलेसम्म पनि 'चौकिटार' कहलाएको छ। पहिले चौकी रहेको टाररूपको जग्गा हुँदा सो ठाउँ 'चौकिटार' भनी कहलाएको हो भन्ने देखिन्छ। यस कुराले पनि 'गुल्म' भनेको सुरक्षा चौकी हो भन्ने उपर्युक्त अर्थको पुष्टि गरेको छ।

वसन्तदेवको पालामा 'शीताटी' गुल्मको रूपमा थियो; गणदेवको पालामा गएर 'शीताटिका' 'तल' रूपमा प्रसिद्ध भयो। बलम्बू, चौकिटार, किर्सिपिंडी, सतुङ्गल आदि ठाउँका गणदेवको पालाका अभिलेखमा शीताटिकातलको उल्लेख परेको छ। पछि शीताटिका 'द्रङ्ग' कहलाएको थियो। बलम्बूको द्वितीय शिवदेवको अभिलेखबाट यो कुरा थाहा पाइन्छ। यसरी वसन्तदेवदेखि द्वितीय शिवदेवको समयसम्मको डेढ शताब्दीभित्र 'शीताटी' प्रशासनको दृष्टिले झन झन महत्त्वपूर्ण स्थान बन्दै गएको देखिन्छ*।

* 'गुल्म' बारे 'पूर्णिमा' १० अङ्कको १०–११ पृष्ठमा पनि विचार गरिएको छ।

## बाटो–घाटो–

यस अभिलेखमा जयपल्लिका ग्रामको चारकिल्ला खोल्दा 'मार्ग' 'महापथ' 'हस्तिमार्ग' यी तीनथरी बाटोको उल्लेख आएको छ। 'मार्ग' 'पन्था' साधारण बाटो हो। तर 'महापथ' अलि महत्त्वपूर्ण बाटो हुन्थ्यो। विशेष रूपमा बनाइएको 'मूल बाटो' लाई 'महापथ' भनिन्थ्यो। लिच्छविकालका अरू अभिलेखमा पनि 'महापथ' को उल्लेख आएको छ। नक्साल र नारायणचौरको अभिलेखमा 'रथ्या महारथ्या' को पनि उल्लेख आएको छ। हात्ती हिंड्न हुने गरी बनाइएको बाटो 'हस्तिमार्ग कहलाउँथ्यो। 'दुर्गनिवेश' ' प्रकरणमा कौटल्यले बाटो–घाटोको चर्चा गरेका छन्। त्यहाँ 'चतुर्दण्डान्तरा रथ्या' . . . . . द्विदण्डहस्तिक्षेत्रपथः' भनी लेखिएको छ। यसबाट 'रथ्या' सोह्र हात जति फराकिलो, 'हस्तिमार्ग' आठ हात जति फराकिलो हुन्थ्यो भन्ने थाहा पाइन्छ। 'महारथ्या' त अझ बढी फराकिलो थियो होला। यसरी लिच्छविकालमा बाटो–घाटो राम्रो थियो भन्ने कुराको संकेत यताबाट पाइन्छ। अरू अभिलेखबाट यस कुराको पुष्टि हुन्छ।

## राजपादोपजीवी–

यस अभिलेखमा "अत्र प्रतिवसतान्न केनचिदस्मत्पादोपजीविना स्वल्पाप्याबाधा कर्तव्या = यस ग्राममा बसोबास गर्नेहरूलाई कुनै पनि हाम्रो पादोपजीवीले अलिकता पनि दुःख नदिनू" भन्ने उल्लेख परेको छ। यसबाट 'राजपादोपजीवी' यो पद सरकारी कर्मचारीलाई बुझाउने पारिभाषिक पद हो भन्ने देखिन्छ। लिच्छविकालका अरू सनद–शिलापत्रमा पनि यस्तै प्रसङ्गमा 'पादोपजीवी' पदको प्रयोग गरिएको पाइन्छ। कही कहीं यही भावको 'अस्मत्प्रसादप्रतिबद्धजीवन' आदि पदको पनि प्रयोग भएको पाइन्छ। राजाको पर्याप–रूपमा 'सरकार' भन्ने अर्थमा 'श्रीपाद' शब्दको प्रयोग हुन्थ्यो भन्ने चर्चा पहिले गरिसकेको छ। सबै ठूलठूला सरकारी कर्मचारी राजाद्वारा नियुक्त गरिने हुनाले र उनीहरूको पदको स्थायित्व राजाको इच्छामा निर्भर रहने हुनाले सरकारी कर्मचारी 'राजपादोपजीवी' कहलाएका हुन्। भारतका अभिलेखमा पनि यही अर्थमा 'पादोपजीवी' पदको उल्लेख पाइन्छ। कवि बाणले राजदरबारको वर्णनमा यस शब्दको प्रयोग गरेका छन्। जस्तै–

"शिवसपर्यासमुचितैरुपायनैः प्राभृतैश्च पौराः पादोपजीविनः सचिवाः स्वभुजबलनिर्जिताश्च करदीकृता महासामन्तास्तं सिषेविरे।"

(हर्षचरित, तृतीय उच्छ्वासबाट)

यसबाट 'पादोपजीवी' सरकारी कर्मचारीलाई कहने पारिभाषिक जस्तै शब्दविशेष हो भन्ने थाहा पाइन्छ*।

## दूतक–

राजाको आज्ञा जनतासम्म पुऱ्याउने काम गर्ने अधिकारी 'दूतक' कहलाउँथे। 'दूतक' कुनै

---

* आचार्य कौटल्यले पनि यो शब्द धेरै ठाउँमा प्रयोग गरेका छन्। उदाहरणार्थ 'अनुजीविवृत्त' प्रकरणको यस श्लोकलाई देखाउन सकिन्छ–'अग्नाविव हि सम्प्रोक्ता वृत्ती राजोपजीविनाम्।'

सरकारी पदविशेष होइन । शासकका विश्वासप्राप्त जुनसुकै पदाधिकारी पनि दूतक बन्न सक्थे । वसन्तदेवको यस अभिलेखमा दूतक याज्ञिक विरोचनगुप्त छन् । वसन्तदेवका पछिका अभिलेखमा दूतक सर्वदण्डनायक महाप्रतिहार रविगुप्त छन् । गणदेवका अभिलेखमा महाप्रतिहार सर्वदण्डनायक भौमगुप्त, बभ्रुवर्मा ब्रह्मपुत्र छन् । शिवदेवको बूढानीलकण्ठनिरको अभिलेखमा दूतक महाबलाध्यक्ष कुलप्रवीर छन् । अरू अभिलेखमा वार्त्त रामशील आदि छन् । अंशुवर्माको हातमा शासनाधिकार सोझै आएपछि उनले आफूपछि गद्दीमा लिच्छवि–कुमार उदयदेव बसून् भन्ने अभिप्रायले युवराजको घोषणा गरे तथा युवराज उदयदेवलाई दूतक बनाए । यस वेलादेखि युवराजलाई दूतक बनाउने चलन चल्यो । नरेन्द्रदेवका उठानका अभिलेखमा दूतक युवराज देखिएका छैनन्; कुमारामात्य, दण्डनायक आदि अरू नै रहेका देखिन्छन् । तर पछिका उनका अभिलेखमा दूतक युवराज नै रहेका छन् । यसको अर्थ उठानमा नरेन्द्रदेवका छोरा भइसकेका थिएनन् र अरू नै विश्वस्त व्यक्ति दूतक बनाइए; पछि युवराज जन्मे र युवराज नै दूतक बनाए भन्ने हुन्छ ।

युवराजलाई दूतक बनाउने परम्परा पछिसम्म पनि कायम रह्यो । तर मल्लकालमा 'दूतक' पदको ठाउँ 'दृष्टसाक्षी' पदले लियो । शाहकालमा 'दृष्टसाक्षी' को स्थानमा 'मार्फत' राख्ने चलन चल्यो । तर पछि अलि अन्तर आयो । पहिले दूतक एक जना मात्र हुन्थ्यो । अब मार्फत भने लालमोहर गर्दा जति जना ठूलठूला भारदार उपस्थित थिए; प्रायः त्यति जना नै मार्फत रहने हुन थाल्यो ।

## याज्ञिक विरोचनगुप्त–

वसन्तदेवको यस अभिलेखमा उल्लिखित दूतक विरोचनगुप्त को हुन्; यिनको विशेष परिचय पाउन सकिएको छैन । दूतक बनाइएका हुनाले यिनी वसन्तदेवका विश्वासप्राप्त कुनै अधिकारी थिए भन्ने थाहा पाइन्छ । तर यहाँ विरोचनगुप्तको पद खुलाएर लेखिएको छैन । उनले आफूलाई 'याज्ञिक' मात्र भनेका छन् । 'याज्ञिक' कुनै सरकारी पदलाई बुझाउने शब्द होइन । यसको अर्थ त यज्ञ गर्ने (अग्निहोत्री) भन्ने मात्र हुन्छ । यसरी विरोचनगुप्तले आफ्नो सरकारी पदमा भन्दा 'याज्ञिक' पदमा गौरव देखेका थिए भन्ने थाहा पाइन्छ । यसबाट त्यस वेलाको धार्मिक अवस्थाको अलिकता संकेत पाइन्छ । यी गुप्तहरू आभीर थिए । यसको सप्रमाण चर्चा तल भौमगुप्तको प्रसङ्गमा गरिनेछ । यी आभीर गुप्तहरूको यज्ञयागादि गर्ने वैदिक सनातन धर्ममा बढी आस्था थियो । अनुपरमगुप्तको हाँडिगाउँको स्तम्भलेखबाट हामी यो कुरा बुझ्छौं । यसै हुँदा विरोचनगुप्तले पनि आफूलाई 'याज्ञिक' भन्नामा गौरव संझेका हुन् । शक्तिशाली अधिकारीहरूले समेत 'याज्ञिक' भन्न मन पराएका हुँदा त्यस वेला आफूलाई याज्ञिक भन्ने अरू पनि देखापरेका थिए । वसन्तदेवको पालाको पाटन खपिछेको अभिलेखमा याज्ञिक विप्रसेन, याज्ञिक वेदभट्टहरूको उल्लेख आएको छ ।

यस अभिलेखमा विरोचनगुप्त दूतक देखिएका हुनाले वसन्तदेवको शासनको प्रारम्भमै गुप्तहरू लिच्छवि–दरबारमा शक्तिशाली अधिकारीका रूपमा रहन थालिसकेको देखिन्छ । पछि

रविगुप्तको त झन् शक्ति बढेको थियो। उनी सरकारी कर्मचारी मात्र नरही सहायक शासकका रूपमा देखापरेका थिए। यस विषयको विशेष चर्चा तल आउँदैछ।

## लोकधारणा–

अब अन्त्यमा यस अभिलेखमा परेको तात्कालिक लोकधारणाबारे पनि अलिकता चर्चा गर्नुपरेको छ। त्यस वेला पौराणिक विचारधाराले समाजमा निकै असर पारेको थियो। यसो हुनाले स्वर्ग, नरकमा जनताको विश्वास जमेको थियो। असल काम गरे स्वर्ग गइन्छ; खराब काम गरे नरकमा परिन्छ भन्ने लोकधारणा थियो। यस कारण पछि हुने राजाहरूले यो भूमिदानको लोप गरे नरकमा परिनेछ भन्ने त्रास यहाँ देखाइएको छ; यसको रक्षा गरे असल फल मिल्नेछ भन्ने वचन उद्धृत गरिएको छ।

—~—

# टिस्टुङ्गको वसन्तदेवको अभिलेख

टिस्टुङ्ग गाउँमा पाठशालाको सामुन्नेको चौरमा यो अभिलेख कुँदिएको शिलापत्र त्यसै लडाएर राखिएको छ। यसको शिरोभागको बीचमा चक्र अङ्कित छ। त्यसको दायाँ बायाँ शङ्ख अङ्कित छन्। तर एकातिरको शङ्ख अङ्कित भाग प्रायः खण्डित भइसकेको छ। २८ अङ्गुल लम्बा, १९ अङ्गुल चौडा भागमा अभिलेख कुँदिएको छ। उठानको अलिकता भागबाहेक अरू भाग ज्यादै खिइसकेको छ। यसमा संवत् ४३४ देखिन्छ।

'अभिलेख–प्रकाश' को ७ पृष्ठमा श्रीहेमराज शाक्यले यसको अलिकता अंश छपाउनुभएको छ। 'टिस्टुङ्ग–चितलाङभेकको ऐतिहासिक सामग्री' को १४ पृष्ठमा प्रा. हेमन्त राणा र मैले यो अभिलेख छपाएका छौं।

## मूलपाठ

१. (स्व)स्ति नैपालेभ्यः परमदैवतश्रीबप्प(भट्टारक)–
२. (पादानु)ध्यातभट्टारकमहाराजश्रीवसन्तदे(वः)
३. (कुशली)...ङ्गग्रामे निवासोपगतान् प्रधान(पुर-)
४. (स्सरान्कुटुम्बि)नः कुशलमभिधाय समाज्ञापयति
५. (विदि)तमस्तु वो यथा ... ...

... ... ... ... ...

१०. ... ... सर्व्वदण्डनाय(क)

... ... ... ... ...

१५. संवत् ४३४ ... ...

# अनुवाद

नेपालीहरूलाई कल्याण होस् । परमदैवत (ठूला देवतास्वरूप भएका) गद्दीनशीन महाराज श्रीबुवाका पाउको अनुग्रह पाएका, गाथमा आराम भएका गद्दीनशीन महाराज श्रीवसन्तदेवबाट (तेस्तुङ्ग) ग्राममा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ । तिमीहरूलाई थाहा होस् । ..... .......

.......सर्वदण्डनायक..........संवत् ४३४..........

**व्याख्या–**

असुरक्षित अवस्थामा राखिएको हुनाले यस अभिलेखको धेरै भाग अस्पष्ट भइसकेको छ । शुरूका ४।५ पङ्क्ति अलि स्पष्ट छन्; संवत् पनि गहिरिएर हेर्दा थम्याउन सकिन्छ । बीचको भाग भने पढ्न गाह्रो भइसकेको छ । प्रशस्त परिश्रमसाथ पढियो भने यसको केही भाग अझै पढ्न सकिने सम्भावना छ । तर अहिले यतिसिबाय पढ्न सकिएन ।

अहिले पढ्न सकिएको यति भागबाट पनि लिच्छविकालको इतिहासमा अलिकता प्रकाश परेको छ । यस अभिलेखको आरम्भ 'स्वस्ति नैपालेभ्यः' बाट भएको छ । अर्थात् 'नेपालीहरूलाई कल्याण होस्' भन्ने शुभकामनासाथ यो अभिलेख शुरू गरिएको छ । यसै गरी टिस्टुङ्ग र भट्टुवालका अंशुवर्माका अभिलेख पनि 'स्वस्ति नैपालेभ्यः' बाट नै शुरू गरिएको छ । चितलाङको उदयदेवको अभिलेख पनि यसै गरी शुरू गरिएको अनुमान हुन्छ । तर त्यसमा अक्षर भने अलि स्पष्ट छैनन् । उपत्यकाभित्र अहिलेसम्म पाइएका अभिलेखमा भने यसरी 'स्वस्ति नैपालेभ्यः' बाट शुरू गरिएको पाइंदैन । यसबाट उपत्यकाबाहिरका जनतामा पनि 'हामी नेपाली हौं' भन्ने भावना जागोस्; 'पौर र जानपद' मा भेदभावको वातावरण नरहोस् भन्ने उद्देश्यले उपत्यकाबाहिरका अभिलेखमा 'नेपाली मात्रको कल्याण होस्' भन्ने घोषणा अङ्कित गर्ने प्रथा चलेको बुझिन्छ । यसबाट त्यस वेलाको राष्ट्रिय भावनाको झलक हामी पाउँछौं । लिच्छविकालमा उपत्यका मात्र 'नेपाल' थिएन भन्ने कुराको पुष्टि पनि वसन्तदेवको यस अभिलेखले गरेको छ ।

यस अभिलेखको तल्लो भागमा 'सर्वदण्डनायक' पद देखापरेको छ । वसन्तदेवको समयमा उनका हजुरिया सर्वदण्डनायक रविगुप्त क्रमशः शक्तिशाली हुँदै गएका थिए । यसबाट जनतामा असन्तोष फैलिन नपाओस् भनी उनले जनतालाई स्वशासनसम्बन्धी केही अधिकार सुम्पंदै जाने नीति लिएका थिए । विशेष गरेर थानकोटभेकका जनतालाई उनले स्वशासनसम्बन्धी केही अधिकार दिलाएका थिए । यसै नीतिअनुसार यस अभिलेखमा पनि टिस्टुङ्गभेकका जनतालाई स्वशासनसम्बन्धी केही अधिकार दिलाएको अनुमान हुन्छ ।

'सर्वदण्डनायक' पद र रविगुप्तबारे तल अर्को अभिलेखमा बढी विचार गरिएको छ ।

# पाटन बाहालुखाको वसन्तदेवको अभिलेख

पाटन बाहालुखाटोलमा त्रिलिङ्गेश्वर महादेवको मन्दिर छ। त्यस मन्दिरको पश्चिमपट्टि पेटीमा आड लाई यो अभिलेख कुँदिएको ढुङ्गा रहेको छ। यो शिलापत्रको आधाभन्दा बढी भाग जमीनभित्र गाडिएको छ। माथिल्लो भाग धेरै फुटेको छ। यसको अभिलेख कुँदिएको भाग १ हात ६ अङ्गुल लम्बा, २२ अङ्गुल चौडा छ। यहाँ संवत् ४३५ दिइएको छ।

'अभिलेख–संग्रह' ५ भागमा संशोधनमण्डलद्वारा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति मा(नगृहात्)... ... ...
३. महाराजश्रीपादा ... ... (श्रीवस–)
३. न्तदेवः कुशली... ... ...
४. धिकृतान्प्रेषणे... ... ...
५. त...स्त ... ... ...
६. ... ... ... ... ...
७. ... ... ... तद ...
८. न... ... ... ... क्षेत्र...
९. द्र्दत्त... ... ...(प्रदे)शे चत्वारिम्शतो भूमिः
१०. तत्रै... ... (प्रदे)शे दशानाम्भूमिः ह्लीम्
११. कोप्रदेशे विम्शतेर्भूमिः गुडन्दुलुत्तरप्रदेशे (ष)ण्णाम्भू–

१२. मिः तदासां पिण्डकं १४२ तदेवं विदिता(त्थैँर्न्न क)थ–
१३. श्चिद्य ्ष्माभिरस्मत्पादोपजोविभिरियमाज्ञा विलङ्घ–
१४. यितव्या यश्च मामाज्ञामुल्लङ्घ्य स्मरयेत्स्मारयेद्वा त–
१५. स्याहं यथोचितं मर्य्यादाबन्धमनुष्ठास्यामीति समाज्ञा–
१६. पना, दूतकोत्र सर्व्वदण्डनायकमहाप्रतिहाररवि–
१७. गुप्त इति, संवत् ४३५ द्वितोयपौषे शुक्लदिव ५

## अनुवाद

कल्याण होस् । मानगृह (दरबार)बाट....महाराज श्रीबुवाबाट (अनुग्रह पाएका) ......गाथमा आराम भएका (भट्टारक महाराज) श्रीवसन्तदेवबाट.....(आज्ञा भएको छ ।).....अधिकारीहरूलाई पठाउनामा......खेत दिइयो । .......भन्ने ठाउँमा ४० भूमि, त्यही नै......भन्ने ठाउँमा १० भूमि, ह्लीम्को भन्ने ठाउँमा २० भूमि, गुडन्दुलुत्तर भन्ने ठाउँमा ६ भूमि। यिनीहरूको (जम्मा) कुत १४२ (मानिका)।

तसर्थ यो कुरा थाहा पाएर हाम्रो तर्फबाट जीविका चलाउने तिमीहरूले (सरकारी कर्मचारी-हरूले) कुनै तरहले पनि यो आज्ञा बखिलाफ गर्नु हुँदैन। जसले यो आज्ञा नटेरेर (यहाँ) कार्बाइ गर्ला वा गराउला; त्यसलाई हामी कानूनअनुसार सजाय गर्नेछौं। यस्तो आज्ञा छ ।

यहाँ दूतक सर्व्वदण्डनायक, महाप्रतिहार रविगुप्त छन् ।
संवत् ४३५ द्वितीय पौष शुक्ल पञ्चमी ।

**व्याख्या–**

यस अभिलेखको माथिल्लो भागको धेरै अंश फुटेको छ। यस कारण यसको मुख्य कुरा नबुझिने भएको छ। राजा वसन्तदेवले १४२ मानिका कुत आउने खेत कुनै कार्यको लागि निर्धारित गरिदिएको देखिन्छ। ती तोकिएका क्षेत्रमा सम्बद्ध अधिकरणका अधिकारीहरू नपस्नू भन्ने व्यवस्था पनि बाँधेको देखिन्छ। सो के कार्य हो; खुल्न सकेको छैन ।

थानकोटको वसन्तदेवको उठानको अभिलेखमा दूतक विरोचनगुप्त छन् । त्यसको सात वर्षपछिको यस अभिलेखमा चाहिं दूतक सर्वदण्डनायक, महाप्रतिहार छन् । यसरी यस वेला रविगुप्त वसन्तदेवका विश्वासप्राप्त अधिकारी देखापर्छन् । तात्कालिक परिस्थिति बुझ्न पहिले सर्वदण्डनायक, महाप्रतिहार के कस्ता पद हुन्; यसबारे विचार गर्नुपरेको छ ।

दण्डनायक, सर्वदण्डनायक–

लिच्छविकालका अभिलेखमा जस्तै भारतका अभिलेखहरूमा पनि दण्डनायक, सर्वदण्डनायक पदको उल्लेख पाइन्छ। तर यस शब्दको अर्थ गराइमा विद्वान्हरूको मतभेद रहेको छ। 'दण्डो यमे मानभेदे लगुडे दमसैन्ययोः' विश्वकोशको यस उक्तिअनुसार 'दण्ड' शब्दको अर्थ फौज पनि हुने हुनाले केही विद्वान्हरूले दण्डनायकको अर्थ सेनापति भन्ने गरेका छन्। कल्हणको राजतरङ्गिणीमा धेरै ठाउँमा 'दण्डनायक' को उल्लेख आएको छ। त्यहाँ दण्डनायकले सैन्यको नेतृत्व लिई लडाइँ गर्न गएको वर्णन पनि परेको छ। जस्तै–

"विलम्बमाने सन्नद्धसैनिके दण्डनायके ।
त्वरितं प्राहिणोत्पट्टं वितीर्णासंख्यनायकम् ॥७।१३०५
क्रुध्यन् राजपुरीं राजा व्यसृजद् दण्डनायकम् ।७।९६८"

(फौजसाथ गएका दण्डनायकले अलमल गरी ढीलो गरेका हुँदा प्रशस्त फौजसाथ पट्टलाई छिटो पठाए ।
राजा रिसाएर दण्डनायकलाई राजपुरीमा हमला गर्न पठाए।)

तर त्यस वेलाको परिस्थितिअनुसार सैनिक योग्यता भएका राजाका विश्वासप्राप्त व्यक्ति जुनसुकै पदमा रहे तापनि परेको बखतमा लडाइँको मैदानमा पनि पठाइन्थे। यस कारण यतिकै भरमा दण्डनायक भनेको सेनापति नै हो भनी निश्चय गर्न सकिदैन। लिच्छविकालका र भारतका अभिलेखहरू केलाएर हेर्दा दण्डनायक र सेनापति पद एकै होइनन्; भिन्नाभिन्नै हुन् भन्ने थाहा पाइन्छ। लिच्छविकालका अभिलेखमा प्रधानसेनापतिलाई 'महाबलाध्यक्ष' पद प्रयोग गरिएको छ। 'बल' शब्द फौजलाई कहने प्रसिद्ध शब्द हुँदा 'महाबलाध्यक्ष' भनेको 'प्रधानसेनापति' हो भन्ने निश्चित छ। शिवदेवको विष्णुपादुकाको फेदीको अभिलेखमा त्यस वेलाका सर्वदण्डनायक र महाबलाध्यक्ष पद पाउने दुवै अधिकारीको नामोल्लेख भएको छ। विचारार्थ त्यस अभिलेखको एक अंश यहाँ उद्धृत गरिन्छ–

"भट्टारकमहाराजश्रीशिवदेवः......समाज्ञापयति......सर्वदण्डनायकमहाप्रतीहार-भौमगुप्तविज्ञापितेन मया शिलापट्टकेन प्रसादः कृत इति समाज्ञापना। दूतकश्चात्र महाबलाध्यक्षः कुलप्रवीर इति"

यहाँ सर्व्वदण्डनायक पदमा भौमगुप्त रहेको र महाबलाध्यक्ष पदमा कुलप्रवीर रहेको कुरा एउटै अभिलेखमा परेको हुनाले लिच्छविकालमा सर्वदण्डनायक र महाबलाध्यक्ष पद भिन्नाभिन्नै हुन् भन्ने कुरा स्पष्ट थाहा पाइन्छ। यसै गरी अरू अभिलेखबाट पनि यी दुइ पद बेग्ला बेग्लै हुन् भन्ने थाहा पाइन्छ। भारतका अभिलेखमा पनि अधिकारीहरूको क्रममा दण्डनायक र सेनापति पदको बेग्लाबेग्लै उल्लेख भएको छ। जस्तै–

"....महाराजाधिराजः श्रीमान्महीपालदेवः कुशली श्रीपुण्ड्रवर्द्धनभुक्तौ कोटीवर्षविषये कुरटपल्लिकाग्रामे समुपागताशेषराजपुरुषान् राजराजन्यकराजपुत्रराजामात्यमहासान्धिविग्रहिक-महाक्षपटलिकमहामन्त्रिमहासेनापतिमहाप्रतिहारदौःसाधनिकमहादण्डनायकमहाकुमारामात्य... चाटभटसेवकादीन् अन्यांश्चाकीर्तितान् राजपादोपजीविनः......समादिशति"

(दिनाजपुर बाणगढको ताम्रपत्रबाट)

यहाँ अधिकारीहरूको प्रकरणमा महासेनापति र महादण्डनायक दुबैको उल्लेख परेको छ। यसबाट दण्डनायक भनेको सेनापति होइन भन्ने स्पष्ट थाहा पाइन्छ।

'दण्डनायक' शब्दको अर्थ निश्चित गर्न राजकाजमा 'दण्ड' शब्द कुन अर्थमा प्रयुक्त हुन्थ्यो भन्ने बुझ्नुपरेको छ। दण्डको विस्तृत वर्णन गर्दै जाँदा मनुस्मृतिकार लेख्तछन्–

'अमात्ये दण्ड आयत्तो दण्डे वैनयिकी क्रिया'।

(मनुस्मृति ७।६५)

(अमात्यको अधीनमा दण्ड रहेको हुन्छ; विनयसम्बन्धी काम कुरा दण्डमा रहेको हुन्छ।)

यसबाट 'दण्ड' को काम सबैमा विनय कायम गर्नु हो भन्ने बुझिन्छ। विनय भनेको आफ्नो आफ्नो कर्तव्यपालनसम्बन्धी ज्ञान हो। जब कोही कर्तव्य बिर्सेर देशको ऐन कानून नाघेर अकर्तव्य गर्दछ; तब त्यसलाई तह लाउन दण्ड गर्नुपर्ने हुन्छ।

यताबाट दण्डनायकको काम आफ्नो कर्तव्य भुली हुल–दङ्गा, कूटपीट, थिचोमिचो, चोरी डकैती आदि गैरकानूनी काम गरी शान्ति सुरक्षामा खलल पार्नेहरूलाई समाती दण्ड दिलाउनु, शान्तिसुरक्षा कायम गर्नु हो भन्ने बुझिन्छ। वर्तमान कालमा उपर्युक्त कार्य गृहमन्त्रालय अन्तर्गत पर्दछ। अतः दण्डनायक भनेको पुलीस–विभागका उच्च अधिकारी हो भनी भन्न सकिन्छ। दण्डनायकहरूमा मुख्यचाहिं 'सर्वदण्डनायक' कहलाउँथे। 'अमात्ये दण्ड आयत्तः' भनिएको हुनाले यो पद अमात्यसरहको थियो कि भन्ने देखिन्छ। लिच्छविकालको शासनव्यवस्थामा 'सर्वदण्डनायक' पद महत्त्वपूर्ण रहेको छ।

## प्रतिहार, महाप्रतिहार–

'प्रतीहारो द्वारपालद्वास्थद्वास्थितदर्शकाः' २।८।६

अमरकोशको यस उक्तिअनुसार 'प्रतिहार' भनेको 'राजदरबारका ढोके' भन्ने हुन्छ। परन्तु प्रतिहारको काम ढोका कुरेर बस्नु हुँदैनथ्यो। बाहिरका विभिन्न आवश्यक कुरा राजाकहाँ जाहेर गर्नु आदि काम प्रतिहार वा प्रतिहारीको हुन्थ्यो। एउटा श्लोकमा प्रतिहारीको लक्षण यसरी दिइएको छ–

"सन्धिविग्रहसंनद्धनानाचारसमुत्थितम्।
निवेदयन्ति याः कार्यं प्रतिहार्यस्तु ता मताः।"

(मेल, झगडा, सैनिक तयारी आदि व्यवहारका अनेक कामकुरा राजाकहाँ जाहेर गर्नेलाई प्रतिहारी भन्दछन्।)

यसबाट प्रतिहारको कामबारे केही थाहा पाइन्छ। साधारण प्रतिहारभन्दा माथिल्लो दर्जाका प्रतिहार 'महाप्रतिहार' कहलाउँथे। राजाका हजुरियाको काम महाप्रतिहारले गर्दथे। महाप्रतिहारसंग नभेटीकन कसैले राजासंग भेट गर्न पाउँदैनथ्यो। राजाको अङ्गरक्षकको काम पनि महाप्रतिहारले गर्दथे। यसैले राजाका भरपर्दा मानिस मात्र महाप्रतिहार बनाइन्थे। कवि बाणले हर्षवर्द्धनको दरबारको वर्णनको प्रसङ्गमा 'महाप्रतिहार' को चित्रण राम्ररी गरेका छन्। जस्तै–

"मेखलकस्तु दूरादेव द्वारपाललोकेन प्रत्यभिज्ञायमानः 'तिष्ठतु तावत् क्षणमात्रमत्रैव पुण्यभागी' इति तमभिधायाप्रतिहतः पुरः प्राविशत्।

अथ स मुहूर्तादिव प्रांशुना.....गौरेण धौतकञ्चुकच्छन्नवपुषा समुन्मिषन्माणिक्यपदकबन्धकृशावलग्नेन....विशालवक्षसा....विकटांसतटेन उरसा...हारं बिभ्रता......श्रवणगताभ्यां मणिकुण्डलाभ्यां समुद्भासमानेन....मौलिना पाण्डुरमुष्णीषमुद्वहता, वामेन स्थूलमुक्ताफलच्छुरणदन्तुरत्सरुं करकिसलयेन कलयता कृपाणम्, इतरेण शातकौम्भीं वेत्रयष्टिमुन्मृष्टां धारयता पुरुषेणानुगम्यमानो निर्गत्यावोचत् –'एष खलु महाप्रतीहाराणामनन्तरश्चक्षुष्यो देवस्य पारियात्रनामा दौवारिकः। समनुगृहणात्वेनमनुरूपया प्रतिपत्त्या कल्याणाभिनिवेशी' इति। दौवारिकः समुपसृत्य कृतप्रणामो मधुरया गिरा सविनयमभाषत–'आगच्छत, प्रविशत, दर्शनाय कृतप्रसादो देवः' इति। बाणस्तु 'धन्योस्मि, यदेवमनुग्राह्यं मां देवो मन्यते' इत्युक्त्वा तेनोपदिश्यमानमार्गः प्राविशदभ्यन्तरम्।" (हर्षचरित द्वितीय उच्छ्वासबाट)

(मेखलकचाहिं टाढैबाट ढोकेहरूले चिनिएका हुँदा 'एक छिन तपाईं यहाँ बस्नुहोस्' भनी बाणलाई भनेर सरासर भित्र पसे।

अनि एक छिनपछि अग्ला, गोरा, सफा जामाले जीउ ढाकिएका, टल्कने माणिक्य जडेको पदकले सुहाएको कमरपेटी बाँध्नाले झिनो कमर भएका, ठूलो छाती भएका, पुष्ट काँध भएका, मोतीको माला लाएका, मणि जडेका चौगडी कानमा लाएका...टाउकोमा सेतो पगरी (फेटा) लाएका, बायाँ हातले ठूलठूला मोती जडेको बीँड भएको तरबार र दायाँ हातले टल्कने सुनले मोरेको बेतको लट्ठी लिएका मानिस पछि लाएर आई मेखलकले भने–'यहाँ महाप्रतिहारहरूमा मुख्य पारियात्र भन्ने, राजाका मन परेका महाप्रतिहार हुनुहुन्छ। उहाँसंग भलाकुसारी गर्नुहोस्।' (अनि) नमस्कार गरिएका महाप्रतिहारले नजीक आई 'आउनुहोस्' दर्शन भेटको लागि राजाबाट निगाह गरिबक्सेको छ' भनी भने। बाणचाहिं 'म भाग्यमानी रहेछु; यसरी मलाई राजाबाट अनुग्रह गर्न लायक ठानिबक्स्यो' भनी उनले देखाएको बाटोबाट भित्र पसे।)

बाणको यस वर्णनबाट 'महाप्रतिहार' ले 'राजाका हजुरिया' को काम गर्दथे भन्ने स्पष्ट बुझिन्छ। हर्षवर्द्धनको समयमा महाप्रतिहारको सरकारी पोशाक कस्तो हुन्थ्यो भन्ने पनि यताबाट थाहा

पाइन्छ। त्यस वेला महाप्रतिहारले माथिदेखि तलसम्म पुग्ने जामा लाउँथे, कम्मरपेटी बाँढ्थे; सेता पगरी (फेटा) लाउँथे; एक हातले तरबार र अर्को हातले सुनले मोरेको बेतको लट्ठी लिन्थे भन्ने बुझिन्छ ।

कल्हणको राजतरङ्गिणीबाट पनि प्रतिहारबारे हामी केही बुझ्न सक्छौं । अमात्य, सामन्तहरूले पनि प्रतिहारको अनुमतिविना राजाको दर्शन पाउँदैनथे। प्रतिहारको शक्ति बढे ताका अमात्यहरूले पनि उनको मुख ताक्नुपर्ने हुन्थ्यो। उक्त कुरा कल्हणका यी वर्णनबाट थाहा पाइन्छ—

"प्रतीहारकरन्यस्तसर्वभारस्तु भूपतिः ।
मदाक्रान्तितया राज्यमसुस्थितममन्यत ॥८।१६५७
सर्वामात्याः प्रतीहारमन्वगच्छन्पुनः परे।८।१८४०.
प्राप्तान् सचिवसामन्तान् विन्यस्यन्तो यथाक्रमम् ।
प्रतीहारा नृपस्याग्रमनयन्त विविक्तताम् ॥५।३५५
यथापूर्वमधीकारानजहत्सुज्जिरप्यभूत् ।
प्रतीहारमुखप्रेक्षी का कथेतरमन्त्रिणाम् ॥८।१४८३॥"

(लोसे प्रतिहारको हातमा सबै अधिकार सुम्पनाले राजा जयसिंहले राज्यमा सुव्यवस्था भएको देखेनन् ।

त्यसवेला अरू सबै अमात्यहरू प्रतीहारकै पछि लागे ।

आइपुगेका मन्त्री, सामन्तहरूलाई क्रमअनुसार राखी प्रतिहारहरूले राजाको सामुन्नेको ठाउँ खाली पारे ।

अधिकार पहिले जस्तै सबै आफ्नै हातमा रहे तापनि राजा सुज्जिले पनि प्रतिहारको मुख ताक्न थाले; अरू मन्त्रीहरूको त के कुरा गर्नु ।)

लिच्छविकालका अभिलेखहरू केलाई हेर्दा त्यस वेलाको शासनव्यवस्थामा प्रतिहार, महाप्रतिहारको उल्लेखनीय स्थान रहेको थियो भन्ने थाहा पाइन्छ। गद्दीनशीन राजा अलि कमजोर भएको मौकामा त सर्वदण्डनायक, महाप्रतिहार पदाधिकारीले शासनको बागडोरसमेत आफ्नो हातमा लिई झन् शक्तिशाली बनेको उदाहरण पनि पाइन्छ। तर त्यस वेलाको शासनव्यवस्थाअनुसार राजा र प्रजा दुवैसंग सम्बन्ध राख्ने हुँदा 'प्रतिहार' पदको त्यसै पनि महत्त्व थियो ।

शासनाधिकार केन्द्रमा मात्र सीमित नराखी स्थानीय संघट्टनलाई स्वायत्त शासनसम्बन्धी उचित अधिकार दिने नीति लिच्छविकालका शासकहरूले लिएका थिए। त्यस वेला प्रत्येक ग्राममा आवश्यक काम कुरा मिलाउन 'पाञ्चाली' नामक 'पञ्चहरूको सभा' कायम थियो। यस्ता ग्रामपाञ्चालीहरूले स्वायत्तशासनसम्बन्धी निकै अधिकार पाएको हुन्थ्यो। (पाञ्चालीविषयको विस्तृत चर्चा तल यथास्थानमा गरिनेछ।) पाञ्चाली आदि स्थानीय संघट्टनले गर्न नसकेको कुरा अथवा पाञ्चालीले गरेको कुरामा चित्त नबुझी मर्का परी राजकुल (राजदरबार) मा

उजूरी गर्न ल्याइएका प्रत्येक कुरा प्रतिहार (दौवारिक = द्वारे) ले टिप्तथे। अनि प्रतिहारले राजाकहाँ जाहेरी गरी महीना दिनभित्रमा यस्ता कुराको निकासा गराइदिनुपर्थ्यो। यस कुराको उल्लेख हामी नक्साल नारायणचौरको अभिलेखमा पाउँछौं। विचारार्थ त्यहाँको एक अंश यहाँ उद्धृत गरिन्छ–

"दौवारिकेणापि यथाशास्त्रानुगतं विचारणीयं...व्यवहारपरिनिष्ठितजातं द्रव्यस्य षड्भागं पाञ्चालिकानां दातव्यं.....यस्तु कुदृष्टमिति कार्यमस्य ततो रोगमाचौदौवारिकस्यावेदनीयं तेनापि श्रीमत्पादीयान्तरासनकरणे यथामासं रोपणीयम्। आत्मघातकानां...दौवारिकस्यावेद्य मृतशोधनम्।.......प्रतिवर्षं स्थानदौवारिकस्य पणपुराणसहस्रमेकं पाञ्चालिकैर्देयम्..."

(दौवारिक (प्रतिहार = द्वारे) ले पनि शास्त्रअनुसार विचार गर्नुपर्छ.....मुद्दा छिन्दा उठेको रकमको ६ भागको १ भाग पाञ्चालिकहरूलाई दिनू। राम्रोसंग हेरिएन भनेर जसले (उजूरी गर्छन्), तिनको मुद्दामामिला अनि रोगमाचौ दौवारिककहाँ दर्ता गराउनू। उनले पनि महीनादिनभित्रमा राजाको 'अन्तरासन' करणमा (भित्री इजलासमा) जाहेर गर्नू।..... आत्महत्या गर्नेहरूको लास दौवारिककहाँ जाहेर गरी उठाउनू।.....प्रतिवर्ष स्थान दौवारिकलाई पाञ्चालिकहरूले एक हजार पणपुराण बुझाउनू।)

यसबाट त्यस वेलाको शासनव्यवस्थामा प्रतिहार वा दौवारिकको कुन स्थान थियो भन्ने थाहा पाइन्छ। दौवारिक अनेक हुन्थे। नक्साल नारायणचौरको उपर्युक्त अभिलेखमा मात्र पनि रोगमाचौ दौवारिक, सिन्द्रिरदौवारिक, वेत्रदौवारिक, स्थानदौवारिकको उल्लेख आएको छ। तर हामी त्यस वेलाका दौवारिकलाई मुख्य गरी दुइ थरीका रूपमा छुट्ट्याउन सक्छौं। एक थरी राजदरबारमा रहने दौवारिक; अर्कोथरि सरकारी प्रतिनिधिस्वरूप ग्राममा नियुक्त दौवारिक; जसलाई 'स्थान दौवारिक' भन्ने संज्ञा दिइएको छ।

यसरी लिच्छविकालमा प्रत्येक ग्रामसंग केन्द्रको सम्बन्ध प्रतिहार (द्वारे) द्वारा हुन्थ्यो। द्वारेद्वारा ग्रामसंग सम्बन्ध राख्ने लिच्छविकालको यो पद्धति पछि मल्लकाल र शाहकालमा पनि केही अंशमा कायम रहेको थियो। मल्लकालमा पनि प्रत्येक ग्राममा सरकारको तर्फबाट द्वारे नियुक्त गरिएका हुन्थे। उदाहरणार्थ मल्लकालका केही अभिलेखको उद्धरण यहाँ दिनुपरेको छ–

"......श्रीश्रीजयरणजितमल्लदेवसन सोर्मालिंग दल थाङाव वाभु लितेलाव गोर्खालि लाङावं पूर्ण्णसिं प्रमुखन दुवार नियनेह्या प्रजापंचयाता किसि प्रसन्न जुया"

(ठिमी बालकुमारीस्थानको यो अभिलेख 'ऐतिहासिक–पत्रसंग्रह' दोस्रो भागमा छापिएको छ।)

(श्रीश्रीजयरणजित्मल्लदेवले सोर्मालिंगमा रहेको संयुक्त फौज हटाएर ओभू फिर्ता गरिलिएर गोरखालीहरूलाई समातेको खुशियालीमा पूर्णसिं आदि द्वारे र बाईस जना प्रजापंचलाई हात्ती बकस दिनुभयो।)

"उपरान्त, प्रमान दुवालयता ह्लाया दस्तुरथें बियमाल...प्रमान दुवालया ह्लेगो गुगुल प्रनित, उगुल बकस यायधुनो" (अभिलेख–संग्रह ११ भाग १६ पृ.)

(उपरान्त प्रमान (बडाहाकिम), द्वारेलाई पहिलेको दस्तुरबमोजिम दिनू......प्रमान र द्वारेको पहिले जुन बन्दोबस्त थियो; सोही बन्दोबस्त थामिदिइसकें ।)

"अत्र पत्रया साक्षी....वृत्तिया, धाकन्या दुवारपनि..."

(चोपुरको रणजित्मल्लको अभिलेखबाट । अ. सं. ११ भागको १५ पृ.)

(यस पत्रका साक्षी–जागीरदार र ढाक्रे द्वारेहरू..........)

यसै गरी शाहकालमा पनि प्रत्येक ग्राउँमा 'द्वारे' नियुक्त भएका हुन्थे । प्रमाणको लागि पृथ्वीनारायण शाहको एउटा पत्रको एक अंश यहाँ उद्धृत गरिन्छ –

"आगे पलांचोकका द्वारा जेठाबूढा प्रति पुर्वका काजकन...ताहा तिम्रा अंबलका प्रजा झारा गरि डोका नाम्लासमेत लियेर द्वाऱ्याले आफ्ना जिय डिट्ठा भैकन प्रजा दुम्जासम्म ल्यायेर....४० बोकायेर चौडंडि षुटांग नपुऱ्याया काज अटकला....इति सम्वत् १८३१ साल ज्येष्ठ शुदि १३ रोज" ('श्री ५ पृथ्वीनारायण शाहको उपदेश' ११८१–८२ पृ.)

लिच्छविकालदेखि शाहकालसम्म पनि स्थानीय प्रशासनमा दौवारिक–दुवार– द्वारेको निकै हात रहन्थ्यो भन्ने कुराको झलक माथि उल्लिखित कुराबाट पाइन्छ ।

लिच्छविकालमा राजदरबारमा आइपुगेका मुद्दामामिलाबारे कार्बाइ चलाउन राजाद्वारा एक अधिकारी नियुक्त भएका हुन्थे । अहिले मुद्दामामिलासम्बन्धी सो काममा यो व्यक्ति नियुक्त भएको छ भन्ने कुरा जनताले थाहा पाओस् भन्ने हेतुले शासनसम्बन्धी अरू कुरा शिलालेखमा कुँदाइराखदा यो पनि कुँदाउने चलन पनि थियो । यो पदमा 'प्रतिहार' पदधारी व्यक्ति नियुक्त भएको पनि पाइन्छ। उदाहरणार्थ बलम्बू पासिख्य, चौकिटार आदि ठाउँका वसन्तदेवका अभिलेखलाई देखाउन सकिन्छ । त्यसमा 'ब्रह्मुडि च प्रतिहारभवगुप्ते व्यवहरतीति' भन्ने उल्लेख परेको छ । यस कुराबाट न्यायव्यवस्थासंग पनि प्रतिहारको केही सम्बन्ध रहेको हुन्थ्यो भन्ने थाहा पाइन्छ । अरू अभिलेखबाट पनि यस कुराको पुष्टि हुन्छ ।

यति कुराबाट लिच्छविकालमा दण्डनायक, सर्वदण्डनायक, प्रतिहार, महाप्रतिहार पद महत्त्वपूर्ण थिए भन्ने स्पष्ट देखिन्छ† ।

## रविगुप्त–

सर्वदण्डनायक र महाप्रतिहार जस्तो महत्त्वपूर्ण दुवै पद ओगटेका रविगुप्त स्वभावतः वसन्त-

† 'पूर्णिमा' ११ अङ्कका ६–१२ पृष्ठमा र १६ अङ्कका ३४६–४८ पृष्ठमा पनि 'सर्वदण्डनायक' 'महाप्रतिहार' आदिबारे विचार गरिएको छ।

देवको शासनकालमा शक्तिशाली हुँदै गए। यस अभिलेखमा उनी राजाका 'दूतक' रूपमा देखापरेका छन् । राजाको आज्ञा जनतासम्म पुर्याउने काम गर्ने अधिकारी दूतक कहलाउँथे; दूतक बन्न पाउने अवसर राजाका विश्वासप्राप्त व्यक्तिलाई मात्र प्राप्त हुन्थ्यो भन्ने कुराको चर्चा माथि गरिसकेको छ। यसबाट संवत् ४३५ तिरै रविगुप्त केही शक्तिशाली भइसकेको संकेत पाइन्छ। पछि पछि रविगुप्तको शक्ति झन् झन् बढ्दै गएको देखिन्छ। अन्तिम समयमा रविगुप्त शक्तिशाली सरकारी अधिकारी मात्र थिएनन्; राजाका सहायक शासकका रूपमा देखापर्छन्। यो कुरा बलम्बू पासिख्य र चौकिटारको अभिलेखबाट थाहा पाइन्छ। पशुपति आर्यघाटको अभिलेखबाट पनि रविगुप्तको त्यस वेलाको अवस्थाको संकेत पाइन्छ। त्यस अभिलेखमा राजा वसन्तदेवको उल्लेख गरिएको छैन; सो अभिलेख राख्नेले आफूलाई 'सर्वदण्डनायकपादानुध्यात' मात्र लेखेका छन्। यस विषयको बढी चर्चा तत् तत् अभिलेखको व्याख्यामा गरिनेछ।

### अधिकमास–

यस अभिलेखमा मिति 'संवत् ४३५ द्वितीयपौषे शुक्लदिव ५' दिइएको छ। यसबाट यो अभिलेख राखिएको सालमा पौषमा 'अधिकमास' परेको देखिन्छ। आजकल प्रचलित पद्धतिअनुसार पौषमा अधिकमास पर्दैन। लिच्छविकालका अभिलेखमा भने पौषमा र आषाढमा मात्र अधिकमासको उल्लेख पाइन्छ। विचारार्थ लिच्छविकालका अभिलेखमा देखिएका केही अधिकमासको तालिका यहाँ दिइन्छ;

| संवत्– | अधिकमास– | अभिलेख– |
|---|---|---|
| ३९६ | प्रथमाषाढ | विष्णुपादुकाको फेदीको मानदेवको |
| ४३५ | द्वितीय पौष | पाटन बाहलुखाको वसन्तदेवको |
| ४४९ | प्रथमाषाढ | किसिपिडीको |
| ४७९ | द्वितीय आषाढ | का. इ. ब्रह्मटोलको |
| ४८७ | प्रथमाषाढ | देउपाटनको गणदेवको पालाको |
| ५१७ | प्रथमाषाढ | धर्मस्थली र बूढानीलकण्ठको |
| ५१९ | प्रथमपौष | सतुङ्गलको शिवदेव + अंशुवर्माको |
| ३१ | द्वितीयपौष | भक्तपुर, इनायटोलको |
| ३४ | प्रथमपौष | पाटन सुनधाराको अंशुवर्माको |

यसबाट लिच्छविकालमा आषाढ र पौषमा मात्र अधिकमास पर्दथ्यो भन्ने बुझिन्छ। त्यस वेला 'अधिकमास' भन्ने बित्तिकै आषाढ र पौषलाई बुझाउँथ्यो। यस कुराको संकेत नरेन्द्रदेवको वज्रघरको अभिलेखबाट पाइन्छ। त्यहाँ 'अधिकमासतुलादण्ड' को उल्लेख परेको छ। त्यसको अर्थ अधिकमासमा अर्थात् आषाढ र पौषमा बजारमा तुला (ढक तराजु आदि) जाँच्दा नाप तौलमा फरक परे व्यापारीलाई गरिने दण्ड भन्ने हो। आषाढ र पौषमा ६ महीनाको अन्तर छ। छ

महीनामा ढक तराजू आदिको परीक्षा गर्नू भन्ने वचन मनुस्मृति आदिमा पाइन्छ। यसरी लिच्छवि-कालमा 'अधिकमास' शब्दले आषाढ र पौषलाई बुझाउँथ्यो भन्ने थाहा पाइन्छ।

आषाढ र पौषमा मात्र अधिकमास पर्ने लिच्छविकालको यो पद्धति पछि मध्यकालसम्म पनि प्रचलित थियो। श्रीलुशियानो पेटेकले यस अधिकमास–पद्धतिबारे महत्त्वपूर्ण प्रकाश पार्नुभएको छ†। राष्ट्रिय अभिलेखालयमा रहेको 'धर्मनिर्णयतिथिसारसंग्रह' आदि ग्रन्थबाट यस अधिकमास पद्धतिबारे प्रकाश पर्छ। भारततिर यस किसिमको अधिकमासपद्धतिको उल्लेख पाइएको छैन। यस पद्धतिको प्रसार हाम्रो यतै भएको हो कि भन्ने देखिएको छ। नेपालीहरू पात्रो बनाउने काममा सिपालु छन् भन्ने कुराको उल्लेख चीनिया ताङवृत्तान्तमा पाइन्छ। यस्तो प्रसिद्धि किन भयो; यो खोजीको विषय छ।

–★–

† 'मिडिइभल हिस्ट्रि आफ् नेपाल' का १३–२३ पृष्ठ हेर्नुहोस्।

[२५ संख्या]

# जैसीदेवलको वसन्तदेवको अभिलेख

काठमाडौं ल्हुगलटोलमा जैसीदेवलसंगै यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको अभिलेख कुँदिएको भाग २८ अङ्गुल लम्बा, २० अङ्गुल चौडा छ। यस शिलापत्रको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ४३५ दिइएको छ।

भगवान्लालद्वारा ३ संख्याको रूपमा यो अभिलेख छापिएको छ। संस्कृतसन्देश १।९ मा भोलानाथ पौडेल, म र ज्ञानमणि नेपालले पनि यो छपाएका छौं। नोलीद्वारा १३ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति मानगृहात्परमदैवतबप्पभ–
२. ट्टारकमहाराजश्रीपादानुध्यातः श्रुतन–
३. यदयादानदाक्षिण्यपुण्यप्रतापविकसि–
४. तसितकीर्त्तिर्भट्टारकमहाराजश्रीवसन्त–
५. देवः कुशली [चतु]र्ष्वधिकरणेषु धर्म्म–
६. स्था... ... ... णिकाञ्च कुश–
७. [लम्पृष्ट्वा समाज्ञापयति] विदितमस्तु वो मया
८. ... ... ... ... लिङ्गवल
९. ... ... ... ... कूथेर
१०. ... ... ... (क)रणाय

११. ... ... ... (भ)ट्टारक
१२. ... ... ... व्य तेषान्त्र
१३. ... ... ... दिकार्य्येषु सद्वि
१४. ... ... ... मयापि तेषां
१५. ... ... ... ... मोचित
१६. ... ... ... ...
१७. ... [अस्म]त्पादोपजीविभिरिय[माज्ञा विल]
१८. [ङ् घयितव्या] यश्चे मामाज्ञामुल्लङ्घ्य [स्मरेत्समार]-
 ९. [ये]द्वा तस्याहं दृढं मर्य्यादा[बन्धमनुष्ठास्या]
२०. [मी]ति समाज्ञापना संवत् ४३५[आश्व]
२१. युजि शुक्लदिवा १ दूतकः सर्व्वदण्डना-
२२. यकमहाप्रतिहाररविगुप्त इति
२३. ब्रह्मुडि च महीशीले व्यवहरतीति

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार)बाट ठूला देवतास्वरूप भएका, गद्दीनशीन महाराज श्रीबुवाका पाउको अनुग्रह पाएका, (आफ्ना) पढाइ नीति दया दान चतुर्याइँ धर्म र प्रभावद्वारा सफा कीर्ति फैलिएका, गाथमा आराम रहेका, गद्दीनशीन महाराज श्रीवसन्तदेवबाट चारै अड्डाहरूका .....अधिकारीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ । तिमीहरूलाई थाहा होस् ।

मैले... ..लिङ्ग्वल........कूथेर.... ...गर्नाको लागि .....भट्टारक .....तिमीहरूको ..... आदि कामकार्बाइहरूमा दुइ.......सहित.....मैले तिमीहरूको.....माफी गरियो ।

.....हामीबाट जीविका चलाउनेहरूले (सरकारी कर्मचारीहरूले) यो आज्ञा नाघ्नु हुँदैन । जसले यो आज्ञा नाघेर अड्डाद्वारा कार्बाइ गर्ला वा गराउला, त्यसलाई हामी कडा कार्बाइ गर्नेछौं। यस्तो मेरो आज्ञा छ ।

संवत् ४३५ आश्विन शुक्ल द्वितीया ।

यहाँ दूतक सर्वदण्डनायक,महाप्रतिहार रविगुप्त छन् । महीशील ब्रह्मुङले मुद्रामामिलासम्बन्धी काम गरिरहेको वेलामा ।

## व्याख्या–

वसन्तदेवको यस शिलापत्रको शिरोभागमा बीचमा चक्र र त्यसको दुइतिर दुइटा शङ्ख अङ्कित छन् । यसै गरी चौकिटारको उनको अभिलेखमा पनि शङ्ख र चक्र अङ्कित छन् । शङ्ख र चक्र विष्णुका स्मारक चिह्न हुन् । यसबाट वसन्तदेवको वैष्णव धर्ममा श्रद्धा थियो भन्ने देखिन्छ । शिलापत्र राख्न लाउने व्यक्तिको जुन धर्ममा श्रद्धा छ, त्यही धर्मसंग सम्बन्ध राख्ने चिह्न शिरोभागमा कुँदाउने चलन थियो । शिवदेवसम्मका लिच्छवि राजाहरूका अभिलेखमा प्रायः शङ्ख र चक्र नै कुँदाइएका पाइन्छन् । अंशुवर्मालि पनि उठानमा आफ्ना अभिलेखमा प्रायः शङ्ख र चक्र नै कुँदाएका छन् । तर पछिका उनका अभिलेखमा प्रायः 'बसाहा' अङ्कित गरिएको पाइन्छ । उनका केही अभिलेखमा बौद्ध धर्मका स्मारक चिह्नस्वरूप मृग र धर्मचक्र पनि कुँदिएका पाइन्छन् । यसै गरी पछिका अरू राजाहरूका अभिलेखहरूमा पनि स्मारकचिह्न अङ्कित छन् । यसबाट धार्मिक भावना थाहा पाउन मदत पाइन्छ । यस कारण शिलालेखको शिरोभागमा अङ्कित चिह्नहरूमा पनि दृष्टि दिनु आवश्यक छ ।

यस अभिलेखको बीचको भाग निकै फुटिसकेको छ । यस कारण यसमा उल्लिखित मुख्य कुरा स्पष्टसंग बुझ्न नसकिने भइसकेको छ । बचेको भागबाट यस अभिलेखमा शासनसम्बन्धी कुनै व्यवस्था बाँधिएको थियो भन्ने संकेतसम्म पाउन सकिन्छ । अहिले पाइएका अभिलेखमा शासनसम्बन्धी व्यवस्था बाँधिएको यो पहिलो अभिलेख हो भन्न सकिन्छ । परन्तु खण्डित हुँदा यसको महत्त्व घटेको छ । तैपनि लिच्छविकालको शासनव्यवस्थाको इतिहासको दृष्टिले यस अभिलेखको केही महत्त्व छ भन्नुपरेको छ ।

## चार अधिकरण–

लिच्छविकालमा प्रशासनसम्बन्धी आवश्यक काम कुराहरू मिलाउन अनेक अधिकरणहरू (अड्डा, अदालत) कायम थिए । तिनमा चार अधिकरण मुख्य थिए । ती हुन्–कुथेर, शोल्ल (वा शुल्ली), लिङ्ग्वल, माप्चोक । यस अभिलेखमा उल्लिखित चार अधिकरण यिनै हुन् । यिनै चार अधिकरणका अधिकृतहरूलाई सम्बोधन गरी यो अभिलेख शुरू गरिएको हो । यी चार अधिकरणमध्ये कुथेर र लिङ्ग्वलको नामोल्लेख भएको भाग अहिले पनि बचेको छ । अरू अधिकरणको नामोल्लेख भएको भाग फुटिसकेको छ । तर पछिका अभिलेखबाट लिच्छविकालका चार मुख्य अधिकरणहरूका नामहरू पत्ता लाग्छन् । उदाहरणार्थ गणदेवको चौकिटारको अभिलेखलाई देखाउन सकिन्छ । त्यसमा यस्तो उलेलख परेको छ–

"......मानगृहात्......भट्टारकमहाराजश्रीगणदेवः.........सर्व्वानेव कुटुम्बिनः कुशलं पृष्ट्वा मानयति पूर्व्वराजभिर्य्युष्माकं कुथेरशुल्यधिकरणाभ्यान्न प्रवेष्टव्यमित्यनुग्रहः कृतोधुना मया.....लिङ्ग्वलमाप्चोकाधिकरणाभ्यां पञ्चापराधद्वारेण चतुर्भिरप्यधिकरणैर्न प्रवेष्टव्यमिति स्थितिपट्टकेन प्रसादः कृतः"

[मानगृह (दरबार)बाट.....भट्टारक महाराज श्रीगणदेवले...सबै गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। उहिलेका राजाबाट तिमीहरूकहाँ कुथेर र शुली यी दुइ अधिकरणले पस्न नपाउने गरी निगाह गरिएको थियो।....अहिले हामीबाट लिंग्वल माप्चोकसहित चारै अधिकरणले पञ्चापराध(पञ्चखत)द्वारा पनि पस्न नपाउने गरी यो सनद शिलापत्र निगाह गरी दिइएको छ।]

यताबाट लिच्छविकालमा प्रसिद्ध चार अधिकरणहरू कुथेर, शोल्ल (कहीं शुल्ली आदि), लिङ्ग्वल, माप्चोक हुन् भन्ने थाहा पाइन्छ। अंशुवर्मादेखिका अभिलेखमा पश्चिमाधिकरण, पूर्वाधिकरण, भट्टाधिकरण आदि अरू अधिकरणको पनि उल्लेख पाइन्छ। पहिले उपर्युक्त चार अधिकरणहरू नै मुख्य हुँदा गणदेवका अभिलेखसम्ममा यी चार अधिकरणको उल्लेख पाइन्छ। पछि अरू अधिकरणहरू पनि प्रमुख हुन थालेका हुनाले 'चार अधिकरण' को ठाउँमा 'सर्वाधिकरण' शब्दको उल्लेख पाइन्छ।

यस प्रसङ्गमा यी चार अधिकरणहरूको काम र अधिकारबारे पनि केही चर्चा गर्नु आवश्यक छ। यद्यपि यी अधिकरणहरूको काम र अधिकारबारे खुलस्त रूपमा प्रकाश पार्ने सामग्री अझै प्राप्त भइसकेका छैनन्। तैपनि अहिले पाइएका अभिलेखहरू केलाई हेर्दा बुझ्न सकिने जति कुराको भए पनि यहाँ चर्चा गर्नुपरेको छ।

## कुथेर अधिकरण–

चार अधिकरणहरूमध्ये 'कुथेर' अधिकरणको काम र अधिकार बढ्ता व्यापक देखिन्छ। यस अधिकरणको मुख्य कामचाहिं 'राजस्व' उठाउने थियो। यो कुरा अभिलेखहरूको प्रसङ्गबाट स्पष्ट थाहा पाइन्छ।

लिच्छविकालका शासकहरूले शासनाधिकार मूल (केन्द्र) मा मात्र सीमित नराखी विभिन्न तहलाई प्रशासनसम्बन्धी अधिकार दिई 'स्वायत्तशासन' लाई प्रोत्साहन दिने नीति लिएका थिए। यसो हुँदा ग्रामपाञ्चाली (पञ्चायत) आदिले क्रमशः बढी अधिकार पाउँदै गएको हामी देख्छौं। स्वायत्तशासनलाई प्रोत्साहन दिने यस क्रममा वसन्तदेवको समयमा रविगुप्तको देखरेखमा पहिले यो काम शुरू भएको थियो। अनि भौमगुप्तले यसलाई अझ बढाए। रविगुप्त र भौमगुप्तको समयमा यो सुधार प्रायः बलम्बू थानकोट टिस्टुङ आदि पश्चिमभेकमा मात्र सीमित थियो। अंशुवर्माले यस सुधारकार्यलाई व्यापक बनाए। स्थानीय संघटनको कार्यक्षमता हेरी अंशुवर्माले प्रशासनाधिकार दिई गरिदिएका सनद शिलापत्रहरू छरिएर रहेका छन्। शासनव्यवस्थाको यस सुधारक्रममा अंशुवर्माले 'कुथेर' अधिकरणबाहेक अरू अधिकरणले तत् तत् निर्दिष्ट ठाउँमा पस्न नपाउने व्यवस्था बाँधेका थिए। त्यस प्रकरणबाट कुथेर अधिकरणको मुख्य काम 'राजस्व' उठाउने थियो भन्ने थाहा पाइन्छ। विचारार्थ केही अभिलेखको अलिकता अंश यहाँ उद्धृत गर्नुपरेको छ–

"भट्टारकमहाराजश्रीशिवदेवः.....(समाज्ञा)पयति ..... श्रीसामन्तांशुवर्म्मणा विज्ञापितेन मया....कुथेर्वृत्त्यधिकृतानां समुचितस्त्रिकरमात्रसाधना(यैव प्रवेशो)स्मिन् द्रङ्गे......लिङ्ग्वलशुल्लीपञ्चापराधादिनिमित्तन्त्वप्रवे(श इति) प्रसादो वः कृतः"

(ललितपुर भीमसेनस्थानको अभिलेखबाट)

(भट्टारक महाराज श्रीशिवदेवबाट...आज्ञा भएको छ।....श्रीसामन्त अंशुवर्माले हाम्रा हजूरमा बिन्ति चढाएका हुँदा.....कुथेर अधिकरणका अधिकारीहरूले 'त्रिकर' उठाउनाका लागि मात्र यस द्रङ्गमा पस्नु योग्य छ।...लिंग्वल, शुल्ली अधिकरणले पञ्चापराधको तहकीकात गर्न पनि यहाँ नपस्नू भनी तिमीहरूलाई निगाह गरिएको छ।)

".......कुथेर्वृत्त्यधिकृतानामत्र समुचितस्त्रिकरमात्रसाधनायैव प्रवेशो लेख्यदान-पञ्चापराधाद्यर्थन्त्वप्रवेश इति प्रसादो वः कृतः।"

(भक्तपुर, गोलमाढीटोलको अभिलेखबाट)

(.....यहाँ कुथेर अधिकरणका अधिकारीहरूले 'त्रिकर' उठाउनाको लागि मात्र पस्नु योग्य छ। लेख्यदान र पञ्चापराधको तहकीकात गर्ने आदि कामको निमित्त [सम्बद्ध अधिकरणले] नपस्नू भनी तिमीहरूलाई निगाह गरिएको छ।)

भक्तपुर तुलाछेंटोल धर्मस्थली, बूढानीलकण्ठ आदि ठाउँमा पनि यही बेहोराका अभिलेखहरू रहेका छन्। धापासीको अभिलेखबाट पनि उपर्युक्त कुरा बुझ्न मदत पाइन्छ। यस कारण धापासीको अभिलेखको पनि अलिकता अंश यहाँ उद्धृत गरिन्छ—

'....कुथेर्लिङ्ग्वल्पञ्चापराधमात्राप्रवेशेन वः प्रसादः कृतः समुचितकरमात्रसाधनाय तु तदधिकृतैः प्रवेष्टव्यमेव"

(....कुथेर, लिङ्ग्वल अधिकरण र पञ्चापराधसम्बन्धी काम गर्ने अधिकरणले तिमीहरू-कहाँ पस्न नपाउने गरी निगाह गरिदिइएको छ। उचित कर लिनालाई चाहिं सम्बद्ध अधिकरणका अधिकारीहरू पस्न पाउँछन्।)

माथि उद्धृत अभिलेखहरूमा 'कुथेर' अधिकरणका वृत्त्यधिकृत (वृत्ति=जागीर पाउने अधिकारी) ले 'त्रिकर' (भाग, भोग, करनामक तीनवटा रकम) उठाउन मात्र निर्दिष्ट ठाउँमा पस्नू....लिङ्ग्वल शुल्ली आदि अरू अधिकरणले पञ्चापराधसम्बन्धी काममा पनि उक्त ठाउँमा नपस्नू भन्ने व्यवस्था बाँधिएको छ। अर्थात् कुथेर अधिकरणबाहेक अरू सरकारी अधिकरणले गर्ने कामको अधिकार स्थानीय संघट्टनलाई नै दिइएको छ। ज्यान लिनु आदि ठूलठूला अपराध 'पञ्चापराध'भित्र पर्दथे। ती ठूलठूला अपराधसम्बन्धी काममा पनि सरकारी अधिकरणले नपस्नू भनी यहाँ भनिएको छ। तर 'राजस्व' को मूल स्रोतरूपको 'त्रिकर' माफी गरिदिंदा राजकोशलाई

ज्यादै हानि हुने हुनाले 'कुथेर' अधिकरणले त्रिकर उठाउनचाहिं पर्नू भनी भनिएको हो। यसबाट 'कुथेर' अधिकरणको मुख्य काम 'राजस्व' उठाउने हुन्थ्यो भन्ने स्पष्ट थाहा पाइन्छ।

यसरी मालपोत उठाउने काम कुथेर अधिकरणअन्तर्गत रहेको हुँदा भूमिसम्बन्धी अरू केही काम पनि कुथेर अधिकरणमार्फत हुन्थे। तिनमा 'लेख्यदान' पनि एक हो। यो कुरा वसन्तदेवको पांसिख्यको अभिलेखबाट थाहा पाइन्छ। यसको सप्रमाण चर्चा तल शोल्ल अधिकरणको प्रकरणमा गरिएको छ। 'लेख्यदान' को अर्थ हामीले पहिले 'पुर्जी काट्नु' भनी गरेका थियौं। तर यो अर्थ अलि स्पष्ट भएन। हाल यसको अर्थ खुलेको छ। जग्गा खरीद–बिक्री, दान आदि गर्दा भूस्वामित्वको सरकारी निस्साको रूपमा दिइने लिखित पत्रलाई 'लेख्य' भनिंदो रहेछ। याज्ञवल्क्यस्मृतिबाट यो कुरा स्पष्ट भएको छ। यसको चर्चा तल यथास्थानमा गरिनेछ। यसरी जग्गाको रजिस्टेशन गर्ने काम पनि कुथेर अधिकरणले गर्दो रहेछ भन्ने थाहा पाइन्छ।

## शोल्ल, शुल्ली अधिकरण–

चार अधिकरणमध्ये 'कुथेर' पछि शुल्ली अधिकरणको स्थान रहेको देखिन्छ। उठानका अभिलेखमा यस अधिकरणको नाम शोल्ल लेखिएको पाइन्छ। अलिपछिका अभिलेखमा शुल्ली वा शुली लेखिएको पाइन्छ। कुथेर, लिङ्ग्वल, माप्चोक जस्तै यो अधिकरणको नाउँ पनि संस्कृतभाषाबाट रहेको छैन, स्थानीय जनभाषाबाट रहेको छ। यसो हुनाले नाउँबाट यस अधिकरणको कामबारे केही खुल्दछ कि भन्ने आशा अहिले लिन सकिंदैन। यसको काम पत्ता लाउन अभिलेखहरू नै केलाउनुपरेको छ।

माथि उल्लिखित गणदेवको चौकिटारको अभिलेखबाट र अरू अभिलेखबाट चार अधिकरण-मध्ये एक अधिकरणले 'पञ्चापराध' सम्बन्धी मुद्दाको छिनफान, दण्ड–सजाय गर्ने काम गर्दथ्यो भन्ने बुझिन्छ। 'पञ्चापराध' को परिभाषा देश कालअनुसार अलि अलि फरक देखिन्छ तापनि ठूलठूला अपराध यसभित्र पर्दथे भन्ने निश्चित छ। नरेन्द्रदेवको पशुपति वज्रघरको अभिलेख र पाटन यागबहालको अभिलेखमा 'पञ्चापराध' को सम्बन्धमा यस्तो उल्लेख परेको छ–

"चौरपरदारहत्यासम्बन्धादिपञ्चापराधकारिणां शरीरमात्रं राजकुलाभाव्यन्तद्गृहक्षेत्रकलत्रादिसर्वद्रव्याण्यार्यसङ्घस्येति"

(चोरी गर्नु, अर्काकी स्वास्नी हेर्नु, ज्यान मार्नु तथा यस्ता अपराध गर्नेहरूसंग सम्बन्ध राख्नु आदि 'पञ्चापराध' गर्ने अपराधीको शरीरचाहिं राजदरबार लाग्ने, तिनका घर–खेत जहानबच्चा आदि सबै धनसम्पत्ति आर्यसङ्घले लिनू।)

यसबाट लिच्छविकालमा 'पञ्चापराध' भनेपछि चोरी गर्नु, ज्यान मार्नु आदि रहेछन् भन्ने थाहा पाइन्छ। भीमार्जुनदेव + विष्णुगुप्तको यङ्गालहिटी र भृङ्गारेश्वरको अभिलेखमा 'चौरपरदारहत्या' को संगसंगै 'राजद्रोह' को पनि उल्लेख परेको छ–

"ये . . . चौरपरदारहत्याराजद्रोहकापराधमवाप्नुयुस्तेषामेवामुनापराधेन दोषवतां यदात्मीयमेव गृहक्षेत्रगोधनादिद्रव्यन्तदेव राजकुलाभाव्यम्"

(जसले चोरी गर्नु, अर्काकी स्वास्नी हर्नु, ज्यान मार्नु, राजद्रोह गर्नु यी अपराध गर्लान्, यी अपराधद्वारा दोषी ठहरिएका तिनको आफ्नै अंशको घर खेत गाईवस्तु आदि सम्पत्ति मात्र राजदरबार लाग्नेछ ।)

यसबाट लिच्छविकालमा 'पञ्चापराध' भित्र 'राजद्रोह' पनि पर्दथ्यो कि भन्ने देखिन्छ । जे होस्; पञ्चापराध अन्तर्गतको अपराधले दोषी ठहरेकाको परिवारैलाई पनि सजाय गरिन्थ्यो; यस्ता अपराधले दोषी ठहरेकाको घर खेत आदि सर्वस्वहरण गरिन्थ्यो भन्ने कुरा माथि उद्धृत वाक्यबाट बुझिन्छ । यसरी 'पञ्चापराध' सम्बन्धी मुद्दा उल्लेखनीय थिए; साधारण थिएनन् भन्ने थाहा पाइन्छ ।

अब चार अधिकरणमध्ये कुनचाहिं अधिकरणले 'पञ्चापराध' सम्बन्धी कामकार्बाइ गर्दथ्यो भन्ने पत्ता लाउने कोशिश गर्नुपरेको छ । वसन्तदेवको बलम्बू पासिख्यको अभिलेखबाट यो कुरा खुलेको छ जस्तो मलाई लाग्छ । वसन्तदेवको चौकिटार र पासिख्यको अभिलेखको बेहोरा एउटै छ; मितिमा पनि एक पक्षको सिवाय अन्तर छैन । यी दुइ अभिलेखलाई जोडी पढ्दा 'शोल्ल' अधिकरणको काम केही खुल्छ । विचारार्थ दुवै अभिलेखको केही अंश यहाँ उद्धृत गर्नुपरेको छ—

" . . . . श्रीवसन्तदेवः . . . (समाज्ञा) पयति . . . यदि कश्चिदस्मत्पादोपजीव्यन्यो वेमामाज्ञामुत्क्रम्याभिलेख्यं प्रवेशयेद् यश्च पञ्चापराधेन स्मरेत्स्मारयेद्वा तानहं दृढन्न मर्षयिष्यामि . . . ततो ग्रामीणैरपि माभूद् राजकोशस्यापहानिरिति तत्प्रतिमोचनाय स्वे स्वे ग्रामेधिकरणयोरुभयोः क्षेत्रं दत्तं पश्चिमोद्देशे भूमि ६ पिण्डकं शोल्लाधिकरणस्य मा २ कूथेराधिकरणस्य मा १ . . . . ."

(चौकिटारको अभिलेखबाट)

( . . . . श्रीवसन्तदेवबाट . . . आज्ञा भएको छ । . . . . . हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी) वा अरू कसैले यो आज्ञा नाघेर यहाँ लेख्यदान गर्ला वा जसले पञ्चापराधको तहकीकात गर्ला, गराउला, तिनलाई हामी पक्का सहनेछैनौं ।

अनि गाउँलेहरूले पनि राजकोश (सरकारी ढुकुटी) लाई नोक्सान नहोस् भन्नाको लागि आफ्नो आफ्नो गाउँमा दुवै अधिकरणलाई खेत दिएका छन् । गाउँको पश्चिमपट्टि ६ भूमि । त्यसको कुत शोल्ल अधिकरणलाई २ मानिका, कुथेर अधिकरणलाई १ मानिका ।)

" . . . . . . श्रीवसन्तदेवः . . . . (समाज्ञा) पयति . . . यदि कश्चिदस्मत्पादोपजीवी वान्यश्चेमामाज्ञामुत्क्रम्याभिलेख्यं प्रवेशयेद् यश्च शोल्लं पञ्चापराधेन स्मारयेत् तावहमत्यर्थंन्न मर्षयिष्यमि . . . . . ततो ग्रामीणैरपि मा राजकोशस्यापचितं भूदिति तत्प्रतिमोचनाय स्वे स्वे ग्रामेधिकरणयोरुभयोः क्षेत्रं दत्तं दक्षिणोद्देशे भूमि ४ पिण्डकं शोल्लस्य मा १ कुथेरस्य मा १."

(पासिख्यको अभिलेखबाट)

यी अभिलेखमा 'लेख्यदान' सम्बन्धी अधिकार र पञ्चापराधको छिनफान गर्ने अधिकार स्थानीय ग्रामपाञ्चालीलाई दिइएको कुरा परेको छ। यी दुइ काम कुथेर र शोल्ल अधिकरण-अन्तर्गतका हुन् भन्ने पनि यी अभिलेखबाट थाहा पाइन्छ। यहाँ चौकिटारको अभिलेखमा 'हाम्रो आज्ञा नाघेर सरकारी कर्मचारी वा अरू जसले पञ्चापराधसम्बन्धी काम गर्ला वा गराउला, त्यसलाई हामी सहनेछैनौं' भनी भनिएको छ। पार्सिख्यको अभिलेखमा चाहिं त्यही कुरा लेख्दा "पञ्चापराधसम्बन्धी कुरालाई लिएर जसले शोल्ल अधिकरणमा दर्ता गराउन जान्छ, त्यसलाई सहनेछैनौं" . . . भनी खुलाएर लेखिएको छ। यसबाट पञ्चापराधसम्बन्धी काम कार्बाइ 'शोल्ल' अधिकरणले गर्दो रहेछ भन्ने स्पष्ट भएको छ। साथै लेख्यदानसम्बन्धी कामचाहिं कुथेर अधिकरण अन्तर्गत थियो भन्ने पनि यताबाट बुझिन्छ।

'पञ्चापराध' सम्बन्धी काम कार्बाइबाट 'राजकोश' लाई केही आम्दानी हुन्थ्यो। सो काम 'शोल्ल' अधिकरणबाट छुटाई स्थानीय ग्रामपाञ्चालीलाई सुम्पंदा राजकोशलाई हानि हुने भयो। यस कारण ग्रामपाञ्चालीले स्वायत्तशासनसम्बन्धी अधिकार पनि पाओस्, राजकोशलाई हानि पनि नहोस् भनी माथि उद्धृत दुवै अभिलेखमा यसको पनि व्यवस्था गरिएको हो। यसका लागि गाउँलेहरूले आफ्नो आफ्नो ग्रामबाट केही मानिका कुत आउने केही खेत राजकोशको लागि छुट्याइदिएका छन्।

यति कुराबाट शोल्ल वा शुल्ली अधिकरणको काम 'पञ्चापराध' सम्बन्धी मुद्दामामिला हेर्ने थियो भन्ने बुझिन्छ।

## लिङ्ग्वल अधिकरण—

चार मुख्य अधिकरणमध्ये एउटा अधिकरण 'लिङ्ग्वल' पनि हुँदा तात्कालिक शासनव्यवस्थामा यसको पनि विशेष स्थान रहेको थियो भन्ने अनुमान गर्न सकिन्छ। तर यस अधिकरणको काम अभिलेखहरूबाट खुल्न सकेको छैन। नक्साल गैह्रीधाराको अंशुवर्माको अभिलेखमा—

"नीलीशालाप्रणालीकर्मपरितोषितैरस्माभिर्लिङ्ग्वलषण्ढाश्विकवाहिकागन्त्रीबलीवर्दानमप्रवेशेन वः प्रसादः कृतः = नीलीशालाको धारा बनाउने कामले खुशी भएका हामीबाट लिङ्ग्वल अधिकरणले पस्न नपाउने गरी तथा साँढे, बग्गी, गाडा गोरूको आवत—जावतलाई रोकिदिएर तिमीहरूलाई निगाह गरिएको छ।"

यस्तो उल्लेख परेको छ। यसबाट लिङ्ग्वल अधिकरणको काममध्ये एउटा काम कुलो धारा आदि पानीसंग सम्बन्ध राख्ने थियो कि भन्ने आभास पाइन्छ। तर निश्चित रूपमा भन्न गाह्रो छ।

## माप्चोक अधिकरण—

माप्चोक अधिकरणले गर्ने कामबारे पनि खुलस्त रूपमा बुझ्न सकिएको छैन। तर मालिगाउँको

अभिलेखबाट यस अधिकरणको काम केही खुल्छ। विवाह, विवाहसम्बन्धविच्छेद आदिसंग सम्बन्ध राख्ने काम माप्चोक अधिकरणले गर्दथ्यो भन्ने कुरा सो अभिलेखबाट थाहा पाइन्छ। विचारार्थ सो अभिलेखको केही अंश यहाँ उद्धृत गर्नुपरेको छ–

".....पत्यावुपरते नष्टे प्रव्रजितेपि वा पतितेपि....योषितामपरः पति इत्येव....मादिभिः कारणैरपरैरपि कारणान्तरैर्विवाहात्पतनकालं सङ्ग्रहणेनापरं पतिमुपयाता निरपत्या योषितो ज्ञातिभि....यदि परिभ्रश्यान्यत्पत्यन्तरमुपाददत एवं द्वितीयं सङ्ग्रहमुपयाता नि(ःपु)-त्रवत्यो भविष्यन्ति तासु माप्चोकाधिकारोयं यथाव्यवस्थम्प्रवर्तयितव्यस्तास्वप्यतीतासु यतीसारु-प्यकन्तन्नाम्ना परिभाषितञ्च धनं तम्माप्चोकवृत्तिभुजा ग्राह्यं ततोपि पुरुषपरितोषमभावयित्वा बहुशोपि व्यपेतलज्जाः प्रखलस्वभावाश्चारित्रधर्मापगता युवत्यः सन्तोषहीनाः प्रथमे विरक्ता रागानुसक्ताः पुरुषं भजन्ते ता अपि यदि पुत्रवत्यो भविष्यन्ति नैव माप्चोकाधिकारभागधेयाः"

(.....लोग्ने मरेमा, हराएमा, जोगी भएमा वा पतित भएमा...यी कारण र अरू कारणद्वारा....अरू लोग्ने लिएका आइमाई निःसन्तान भएर...पतित भई अरू लोग्ने लिन्छन्, यसरी दोस्रो संग्रह (ल्याइते स्वास्नी) हुन पुगेर निःसन्तान हुन्छन् भने तिनीहरूमा माप्चोक अधि-करणले लाग्ने कानून लाउनू। तिनीहरूबाट...नाउँले तोकिएको धन माप्चोकका वृत्तिभुक् (जागीरदार)ले लिनू। यताबाट पनि लोग्नेबाट सन्तुष्ट नभई धेरै बाजी लाज पचाएका, खराप स्वभावका, चरित्रधर्मबाट च्युत भएका, पहिलो लोग्नेदेखि विरक्त भएका, कामवासनातिर झुकेका असन्तुष्ट युवतिहरू अरू लोग्ने लिन्छन् र तिनीहरूको पनि यदि सन्तान भयो भनेचाहिं माप्चोक अधिकरणले कार्‌बाइ गर्न पर्दैन।

यसबाट विवाह, विवाहविच्छेद आदिसंग सम्बन्ध राख्ने कामकार्‌बाइ माप्चोक अधिकरणले गर्दथ्यो भन्ने थाहा पाइन्छ। नरेन्द्रदेवको पाटन भन्सारचोकको अभिलेखबाट माप्चोक अधिकरणका कानून केही कडा थिए भन्ने देखिन्छ। त्यसमा '...भट्टमाप्चोकाधिकारयोः प्राबल्यादवश्यं जनस्य महती पीडेत्यनयोरेवाधिकारयोरप्रवेश्येन प्रसादः कृतः लेखिएको छ। यहाँ उल्लिखित 'जनस्य महती पीडा' यस वाक्यले माप्चोक अधिकरणका कानून केही कडा थिए भन्ने दर्शाएको छ†।

यी चार अधिकरणसम्बन्धी अर्को महत्त्वपूर्ण कुरातिर पनि हामीले अलिकता दृष्टि दिनुपरेको छ। कुथेर, शुल्ली, लिङ्ग्वल, माप्चोक यी चारै अधिकरणका नाम संस्कृतभाषाबाट रहेका छैनन्। लिच्छविकालका सारा अभिलेखहरू संस्कृतमा लेखिएका पाइन्छन्। लिच्छविकालमा राजभाषा नै संस्कृत थियो। यसो हुनाले लिच्छविकालका शासकहरूले यावत् व्यवस्थाहरू संस्कृतमै लेखाएर राखेका थिए। त्यसो भए यी प्रसिद्ध चार अधिकरणका नामहरू संस्कृतभिन्न भाषाबाट कसरी रहे, यो बडो विचारणीय छ। यावत् कुरा संस्कृतभाषामा लेखाउने लिच्छवि शासकहरूले यी अधिकरणका नाम पनि संस्कृतभाषामै राख्न सक्थे। जस्तै कि पछि पश्चिमाधिकरण,

† 'लिच्छविकालका अधिकरण' बारे 'पूर्णिमा' २३ अङ्कका १६९–१८२ पृष्ठमा पनि विचार गरिएको छ।

पूर्वाधिकरण, भट्टाधिकरण आदि केही अधिकरणको नाम संस्कृतमै रहेको पनि देखिन्छ तथा राजाको 'भित्री इजलास' भन्नालाई 'अन्तरासन' 'परमासन' भन्ने संज्ञा संस्कृतमै रहेको छ। यस प्रश्नको उत्तर हामी लिच्छविकालका अभिलेखबाटै पाउँछौं। लिच्छविकालका शिलालेख संस्कृतभाषामा लेखिएका छन् तापनि तिनमा संस्कृतभिन्न भाषाका अनेक शब्दहरू परेका छन्। विशेष गरेर ठाउँ गाउँका नाउँ खोलानाला वन–डाँडो आदिका नाउँ संस्कृतभिन्न भाषाका छन्। शासनव्यवस्थासंग सम्बन्ध राख्ने कर, विष्टि आदिका केही नाम पनि जनभाषाबाट रहेका छन्। यसबाट लिच्छविहरूको यहाँ प्रवेशभन्दा अघिदेखि नै चलिसकेका ती नाउहरू फेरे व्यवहार चलाउन गाह्रो हुने हुनाले लिच्छवि शासकहरूले तिनीहरूलाई कायमै राखेको स्पष्ट देखिन्छ। यसरी कुथेर, शुल्ली, लिङ्ग्वल, माप्चोक यी अधिकरणहरू लिच्छविहरूको शासन कायम हुनुभन्दा अघिदेखि नै अर्थात् किरातकालमै कायम भइसकेका देखिन्छन्।

यस अभिलेखमा दूतक महाप्रतिहार, सर्वदण्डनायक रविगुप्त छन्। यिनको बारेमा अघिल्लो अभिलेखमा लेखिसकिएको छ।

यस अभिलेखको अन्त्यमा 'ब्रह्मुडि च महोशीले व्यवहरतीति' भन्ने उल्लेख परेको हुनाले यस वेला महोशील ब्रह्मुङले मुद्दामामिलासम्बन्धी काम गरिरहेका थिए भन्ने थाहा पाइन्छ। भारतका गुप्तकालका अभिलेखमा मुद्दामामिलासम्बन्धी यस्ता काम गर्नेहरूमा नगरश्रेष्ठी, सार्थवाह आदिको समेत उल्लेख पाइन्छ*। लिच्छविकालका अभिलेखमा भने त्यस किसिमको उल्लेख पाइँदैन। यसका लागि राजाद्वारा एक भरपर्दो व्यक्ति नियुक्त गरेको उल्लेख मात्र हाम्रो यहाँ पाइन्छ। अंशुवर्मादेखि यता यसरी लेखाउने चलन छुट्यो।

## ब्रह्मुङ–

'ब्रहमुङ' यो शब्द व्यक्तिको थरलाई बुझाउने शब्द हो कि कुनै सरकारी पदविशेष नै हो; निश्चय गर्नुपरेको छ। यस अभिलेखमा महोशीललाई 'ब्रहमुङ' भनिएको छ। वसन्तदेवको बलम्बू पासिख्य र चौकिटारको अभिलेखमा प्रतिहार भवगुप्त ब्रह्मुङको उल्लेख परेको छ। गणदेवका बलम्बू, सतुङ्गल, चौकिटार, किसिपिंडीका अभिलेखमा दूतक बभ्रुवर्मा ब्रह्मुङ छन्। शङ्खमूल सिकुबहीको अभिलेखबाट बभ्रुवर्मा राजपुत्र (रजपूत) थिए भन्ने थाहा पाइन्छ। यसरी गुप्त, वर्मा आदि अनेक व्यक्तिमा 'ब्रह्मुङ' विशेषण जोडिएको हुनाले यो पदविशेष नै हो भन्ने देखिन्छ। तौखेलको अंशुवर्माको अभिलेखले यस कुराको पुष्टि गर्दछ। त्यहाँ अधिकारीको प्रसङ्गमा 'ब्रह्मुङ' को उल्लेख परेको छ।

---

* उदाहरणार्थ दामोदरपुरको कुमारगुप्तको पालाको अभिलेखलाई देखाउन सकिन्छ। त्यसमा यस्तो उल्लेख छ– "'.......श्रीकुमारगुप्ते पृथिवीपतौ.....कोटिवर्षविषये...... अधिष्ठानाधिकरणञ्च नगरश्रेष्ठि धृतिपाल सार्थवाहबन्धुमित्र प्रथमकुलिकधृतिमित्रप्रथमकायस्थ-शाम्बपालपुरोगे संव्यवहरति"

# सीतापाइलाको वसन्तदेवको अभिलेख

सीतापाइला डाँडा पौवा गणेशस्थानको अगाडि यो अभिलेख रहेको छ भनी राष्ट्रिय अभिलेखालयमा रहेको यसको प्रतिलिपिमा लेखिएको छ। परन्तु त्यहाँ गई हेर्दा यो अभिलेख कुँदिएको मूल ढुङ्गो पत्ता लाउन सकिएन। यस कारण राष्ट्रिय अभिलेखालयमा रहेको यस अभिलेखको प्रतिलिपिबाट यो पाठ पढिएको छ। यसको अभिलेख कुँदिएको भाग २४ अङ्गुल लम्बा १२ अङ्गुल चौडा छ। यस अभिलेखको छेउ–छेउको निकै भाग अस्पष्ट छ। यसो हुनाले बीचको अलिकता भाग मात्र पढ्न सकिएको छ।

'पूर्णिमा' ६ अङ्कमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ... ... ... ...
२. ... श्रीबप्पभट्टारकपादानुध्यातो ...
३. ... (म)हाराजश्रीवसन्तदेवः कुशली
४. ... यथाप्रधानङ्ग्रामकुटुम्बिनः (कुशल)
५. (मभि)धाय समाज्ञापयति विदितमस्तु ...
६. ... परमदैवतश्रीबप्पभट्टारकपा(दैः) ...
७. ... युष्मदीयग्रामः पूर्व्वेण तो...
८. ... तशिखरात् दक्षिणपश्चिमदेश...
९. ... मार्ग्गात् पश्चिमेन राजभूमे...

१०. ... रमुत्तरेणापि हारागुङ् शिखर...

११. ... ... रपूव्वमेव

१२. ... (आयुष्म)त्या प्रियभगिन्या

१३. ... जयसुन्दर्या ... परमदेव(त)

१४. ... बप्पभ(ट्टारकपादा)नामात्मनश्च श्रे(यसे)...

१५. ... पश्चि(म) ... (प्रणा)ल्याः खण्डफुट्ट

१६. ... प्रतिसंस्कार ... दुलुसिङ...

१७. ... पञ्च ... दत्तो दूतकश्चात्र

१८. सर्वदण्डनायकमहाप्रतिहार...

१९. ...(व्य)वहरति संवत् ४००, ३०

## अनुवाद

....भट्टारक (गद्दीनशीन) श्रीबाबुको पाउको अनुग्रह पाएका...गाथमा आराम भएका महाराज श्रीवसन्तदेवबाट... ...गाउँका बासिन्दाहरूलाई यथोचित कुशल मङ्गल सोधर आज्ञा भएको छ – तिमीहरूलाई थाहा होस्। परमदैवत (ठूला देवतास्वरूप भएका) भट्टारक श्रीबुवाबाट (निगाह गरी दिइएको) तिमीहरूको गाउँ...पूर्वतिर...डाँडोबाट...दक्षिण पश्चिमतिर... बाटोदेखि पश्चिमपट्टि राजक्षेत्रदेखि....उत्तरतिर हारागुं डाँडो.....पहिले नै...... प्यारी बहिनी नानी जयसुन्दरीले ठूला देवतास्वरूप भट्टारक श्रीबुवाको र आफ्नो कल्याणको लागि पश्चिम......धाराको टूटफूट भएको मरम्मत गर्नाका लागि....दुलुसिङ....पाँच... दिइयो।

यहाँ दूतक (मार्फत) सर्वदण्डनायक, महाप्रतिहार (रविगुप्त छन्।)...ले मुद्दा मामिलाको काम हेरिरहेको वेलामा।

संवत् ४००,३०.........

**व्याख्या–**

यो अभिलेख खण्डित छ। यसो हुनाले यस अभिलेखमा परेको विषय राम्ररी बुझ्न नसकिने भएको छ। तर यसमा राजा वसन्तदेवको नाम स्पष्ट देखिन्छ। यस कारण वसन्तदेवले कुनै व्यवस्था बाँधी यो अभिलेख राख्न लाएका हुन् भन्ने थाहा पाइन्छ। यहाँ संवत् पनि पूरा देखिदैन। शतस्थानी अङ्क अ–प्क = ४०० र दशस्थानी अङ्क ल = ३० स्पष्ट देखिन्छन्। एकस्थानी अङ्क देखिदैन।

यसरी यो अभिलेखको संवत् ४३० देखि ४३९ भित्र हुनुपर्छ भन्ने देखिन्छ। संवत् ४२८ देखि ४५४ सम्मका वसन्तदेवका अभिलेख पाइएका छन् ।

लिच्छविकालको इतिहाससम्बन्धी एक दुइ प्रश्नको उत्तर यस अभिलेखबाट पाइने हुनाले खण्डित भए पनि यो अभिलेख केही काम लाग्ने ठहरिएको छ। संवत् ४२७ सम्म मानदेव राजा भइरहेको र संवत् ४२८ मा वसन्तदेव राजा भइसकेको देखिएको हुँदा महीदेव गद्दीमा बसे कि बसेनन् भन्ने प्रश्न उठेको थियो। यस प्रश्नको उत्तर यस अभिलेखबाट पाइन्छ। यद्यपि वसन्तदेवले अरू अभिलेखमा पनि आफ्ना बुवालाई 'भट्टारक' (गद्दीनशीन राजा) भनी उल्लेख गरेका छन् ; त्यताबाट पनि महीदेव गद्दीमा बसेका थिए भन्ने संकेत पाइन्छ। तर सीतापाइलाको यस अभिलेख-बाट यो कुरा अझ स्पष्ट भएको छ। यहाँ 'गद्दीनशीन मेरा बुवाले तिमीहरूलाई दिएको ग्राम' भन्ने उल्लेख परेको हुनाले आफ्नो राज्यकालमा महीदेवले केही व्यवस्था पनि गरिगएका थिए भन्ने थाहा पाइन्छ। यसरी महीदेव गद्दीमा बसेका थिए भन्ने यताबाट प्रमाणित हुन्छ ।

अर्को कुरा—जयसुन्दरीको परिचय पनि यस अभिलेखबाट पाइन्छ। थानकोटको अभिलेखमा पनि जयसुन्दरीको उल्लेख आएको छ। त्यहाँ उनीलाई राजाले 'मेरी प्यारी बहिनी' भनेर पनि लेखिएको छ। तर त्यस अभिलेखमा राजाको नाम भएको भागमा पाप्रो उप्केको हुँदा यी जयसुन्दरी को हुन् भन्ने निर्णय त्यताबाट हुँदैन। सीतापाइलाको यस अभिलेखमा राजा वसन्तदेवको नाम स्पष्ट देखिने हुनाले जयसुन्दरी वसन्तदेवकी बहिनी हुन् भन्ने निर्णय यसबाट हुन्छ ।

आफ्ना बुवा र आफ्नो पुण्य बढोस् भन्ने उद्देश्यले जयसुन्दरीले धारा आदि बनाउन लाएको र पछि टुटफुट भए त्यसको मरम्मत आदिको लागि राजा वसन्तदेवले जग्गा निर्धारित गरिदिई बन्दोबस्त मिलाइदिएको कुरा यस अभिलेखमा परेको छ।

यस अभिलेखमा दूतकको नाम फुटिसकेको छ। तर दूतकको पद सर्वदण्डनायक, महाप्रतिहार देखिएको हुनाले वसन्तदेवका अरू अभिलेखमा देखिएका रविगुप्त नै यहाँ पनि दूतक हुन् भन्ने कुरामा शङ्का छैन ।

—★—

# किसिपिंडीको अभिलेख

थानकोट जाने बाटोमा बलम्बूको हाराहारी 'किसिपिंडी' रहेको छ। त्यहीं बस्तीभित्र यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको माथिल्लो भाग नष्ट भइसकेको छ। तल्लो भाग अलिकता मात्र बचेको छ। यसको अभिलेख कुँदिएको भाग २० अङ्गुल लम्बा, १७ अङ्गुल चौडा छ। यहाँ संवत् ४४९ छ।

सिल्भाँ लेभीद्वारा ६ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा १४ संख्याको रूपमा यो छापिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट यसको अलि बढी भाग पढ्न सकिएको छ।

## मूलपाठ

... ... ...

१. धिकरणेन पीडाल्पा करणीया कूथेर[१]

२. ... करणमात्रं तदुभयमेतद्भव...[२]

३. प्रतिमुक्ता इत्येवञ्चावेत्य यूयमद्याग्रेण स[३]

४. मुचितकरं ददन्तः सर्व्वकृत्येष्वाज्ञाविधेयाः

५. सन्तो निरुद्विग्नमनसो[४] यथासुखं प्रतिव(सतेति)

---

नोलीका पाठ–

१. .................कुथेर

२. .................मेतद्भ–

३. ..............यूयमद्याग्रेण स–

४. ..............मनसो

६. दूतकश्चात्र सर्व्वदण्डनायकमहाप्रतिहार–
७. रविगुप्त इति संवत् ४४९ प्रथमाषा(ढ)
८. शुक्लदशम्याम् ।।

## अनुवाद

....अधिकरणले अलिकता पनि दुःख नदिनू। कूथेर (अधिकरणले).....काम मात्र यी दुवै कुरा.....माफी गरिए ।

यो कुरा थाहा पाएर तिमीहरू अबदेखि साबिकबमोजिम कर बुझाउँदै, लाए अह्राएअनुसार सबै काम गरी निर्धक्क भई, सुखसंग बस्नू ।

यहाँ दूतक सर्वदण्डनायक, महाप्रतिहार रविगुप्त छन्। इति संवत् ४४९ प्रथमाषाढ शुक्ल दशमी ।

**व्याख्या–**

यस अभिलेखको माथिल्लो भाग नष्ट भएको हुनाले यस अभिलेखको मुख्य विषय अस्पष्ट छ। यहाँ संवत् ४४९ दिइएको र दूतक रविगुप्त रहेका हुनाले यो अभिलेख वसन्तदेवको हो भन्ने निश्चित छ। अहिले बचेको भागमा '...अधिकरणले दुःख नदिनू...माफी गरिए...ग्रामवासी-हरूले साबिकबमोजिमका कर बुझाई आनन्दसंग रहनू' भन्ने भाव परेको हुनाले किसिपिडीका बासिन्दालाई कुथेर आदि केही अधिकरणले गर्ने कामको अधिकार सुम्पेको देखिन्छ। चौकिटार, पांसिख्य आदि ठाउँका वसन्तदेवका अभिलेखमा पनि कुथेर र शोल्ल अधिकरणले गर्ने काम स्थानीय बासिन्दालाई सुम्पेको कुरा परेको छ तथा गणदेवका किसिपिडी, चौकिटार, बलम्बू, सतुङ्गल आदि ठाउँका अभिलेखबाट पनि वसन्तदेवले कुथेर र शोल्ल अधिकरणले गर्ने काम जनतालाई नै सुम्पेको बुझिन्छ।

कुथेर अधिकरणका काममध्ये मुख्य काम 'राजस्व' उठाउने थियो। 'राजस्व' नउठे राजकोशलाई हानि हुने हुनाले समुचित (साबिकबमोजिमका) कर जनताले बुझाउनू भनी यहाँ भनिएको हो। त्यस वेलाको समुचित कर भनेको त्रिकर (भाग, भोग, कर) हो। क्रमशः कृषि, पाशुपाल्य, वाणिज्यमा लागेका कर यी हुन् भन्ने कुराको चर्चा माथि गरिसकेको छ ।

लिच्छविकालमा थानकोट, किसिपिडी, बलम्बू, चौकिटारभेकमा आभीरगुप्तहरूको पनि बसोबास थियो। यस कुराको संकेत बलम्बू खाद्याँको अभिलेखबाट केही पाइन्छ। वंशावलीमा पनि मातातीर्थभेकमा आभीरहरूको बसोबास थियो भन्ने उल्लेख परेको छ । रविगुप्तहरू पनि

आभीर हुन् भन्ने देखिएको छ। यसको चर्चा पछि गरिनेछ। यो अभिलेख राखिएको ताका रविगुप्त निकै शक्तिशाली भइसकेका थिए। यसो हुनाले रविगुप्तको बन्दोबस्तअनुसार वसन्तदेवले किसि-पिंडीका बासिन्दाहरूलाई प्रशासनसम्बन्धी केही अधिकार सुम्पेको बुझिन्छ।

यसरी अभिलेख खण्डित भई कुरा अस्पष्ट भए तापनि जनतालाई प्रशासनसम्बन्धी केही अधिकार सुम्पेको संकेत यसबाट पाइने हुनाले स्वायत्तशासनको इतिहासको दृष्टिले यसको पनि महत्त्व केही बचेकं छ भन्ने देखिन्छ।

–★–

# खपिंछेको वसन्तदेवको पालाको अभिलेख

ललितपुर च्यासलटोलदेखि अलिकता दक्षिणतिर लागेपछि खपिंछेमा पुगिन्छ। त्यहाँ भैरवको मन्दिर छ। सो मन्दिरको दक्षिण–पश्चिमपट्टि परखालमा जलद्रोणीमाथि रहेको ढुङ्गामा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १ हात १६ अङ्गुल लम्बा, ५ अङ्गुल चौडा छ। यसमा केही अक्षर खण्डित छन्। यहाँ संवत् ४५२ दिइएको छ।

"अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति महर्षौ वैशम्पायने श्रद्धेये ... [संवत्] ४५२ पौष-शुक्लतिथौ तृतीयस्याम्भट्टारकमहाराजश्रीवसन्तदेवे सम्यग्राज्यम्प्रशासति

२. याज्ञिकविप्रसेनेन वेदकृताम्नाय भगवते कारणपूजार्त्थम्ब्राह्मणध्रुवसेनेन दत्तन्दक्षिणकोलिग्रामे भूशतद्वयम्पिण्डकञ्च वि(वी)-हिकस्य मानि–

३. कया १५० ब्राह्मणवृद्धिषेणेन पिकङकूलकप्रदेशे मालार्त्थं पिण्डकमानि ७ याज्ञिकवेदभट्टेन दत्तं दुलम्ग्रामे भू ३० पिण्डक १२

## अनुवाद

कल्याण होस्। श्रद्धेय महर्षि वैशम्पायनमा (श्रद्धा राखी) .....संवत् ४५२ पौष शुक्ल तृतीया तिथिमा, भट्टारक महाराज श्रीवसन्तदेवबाट राम्ररी शासन गरिरहनुभएको बेलामा।

वेद अभ्यास गरेका भगवान् (वैशम्पायन)को कारणपूजा (नैमित्तिक पूजा) को लागि याज्ञिक विप्रसेनले र ब्राह्मण ध्रुवसेनले दक्षिणकोलीग्राममा १५० मानिका धान पिण्डक (कुत) आउने दुइ शय भूमि दान दिए। ब्राह्मण वृद्धिषेणले मालाको निमित्त पिकङ्कूलक भन्ने ठाउँको ७ मानिका कुत आउने खेत दान दिए। याज्ञिक वेदभट्टले दुंलङ्ग्राममा १२ मानिका कुत आउने ३० भूमि दान दिए।

## व्याख्या–

यस अभिलेखमा राजनैतिक इतिहाससम्बन्धी कुरा परेको छैन। 'सम्यग्राज्यं प्रशासति' भनी वसन्तदेवले राम्ररी राज्य गरिरहेको कुराको उल्लेख यहाँ परेको छ तापनि यसको राजनैतिक महत्त्व छैन। राजाप्रति श्रद्धा राखी यो शिष्टाचार प्रकट गरिएको मात्र हो। शासनको बागडोर प्रायः रविगुप्तको हातमा परेको हुनाले शासनको दृष्टिले यस ताका वसन्तदेवको त्यति महत्त्व रहेको छैन; जति रविगुप्तको देखिएको छ। यसै हुँदा यसै सालको आर्यघाटको अभिलेखमा राजा वसन्तदेवको नामोल्लेखसम्म गरिएको छैन। रविगुप्तप्रति भने विशेष आस्था प्रकट गरिएको छ। सो अभिलेख तल आउँदैछ।

धार्मिक र लौकिक इतिहासको दृष्टिले भने यस अभिलेखको महत्त्व रहेको छ। गुप्त आभीर-हरूको प्रभाव बढेपछि यज्ञयागादिमा जोड दिने प्रवृत्ति बढेको थियो। हुनत लिच्छवि राजाहरू पनि यज्ञ गर्थे। राजा धर्मदेवले प्रशस्त यज्ञ गरेको वर्णन चाँगुको मानदेवको स्तम्भलेखमा परेको छ। लिच्छविकालमा राजदरबारभित्र 'अग्निशाला' रहन्थ्यो भन्ने संकेत हाँडिगाउँको अंशुवर्माको अभिलेखबाट पाइन्छ। तर वसन्तदेवको समयदेखि आभीर गुप्तहरूको प्रभाव बढेको र आफूलाई 'याज्ञिक' (अग्निहोत्री) भनी देखाउन गौरव संझनेहरू देखापरेको कुरा माथि थानकोटको अभिलेखको प्रसङ्गमा लेखिसकेको छ। थानकोटको वसन्तदेवको त्यस अभिलेखमा दूतक विरोचनगुप्तले आफ्नो सरकारी पदको चर्चा नगरी आफूलाई 'याज्ञिक' भन्न गौरव संझेका थिए।

यस अभिलेखमा पनि याज्ञिक विप्रसेन, याज्ञिक वेदभट्टहरूको उल्लेख परेको छ। यिनीहरू र ब्राह्मण ध्रुवसेन, ब्राह्मण वृद्धिषेण मिली महर्षि वैशम्पायनको कारणपूजाको लागि गूठी राखिदिएको कुरा यसमा परेको छ।

महर्षि वैशम्पायन महर्षि द्वैपायन (वेदव्यास) का चेला हुन्। द्वैपायनले वेदहरूको वर्गीकरण गरेका थिए भन्ने प्रचलित छ। साथै महाभारतको रचना पनि द्वैपायनले गरे भन्ने प्रसिद्ध छ। महर्षि वैशम्पायनले उक्त दुवै कुरामा गुरुको साथ दिएका थिए। राजा जनमेजयलाई महाभारत वैशम्पा-यनले नै सुनाएका थिए। चार वेदमध्ये यजुर्वेदको सम्पादनमा वैशम्पायनको पनि हात रहेको थियो। यजुर्वेदको सम्बन्ध यज्ञयागादि कर्मकाण्डसंग बढी रहेको छ। यसो हुनाले उपर्युक्त विप्रसेन, वेदभट्ट आदि याज्ञिकहरूले महर्षि वैशम्पायनको पूजाको लागि गूठी राखेको देखिन्छ।

वैशम्पायनका चेला याज्ञवल्क्य हुन्। याज्ञवल्क्यको समयदेखि यजुर्वेदका दुइ प्रसिद्ध शाखा

कृष्णयजु: र शुक्लयजु: प्रचलित भए। यी दुइ शाखाअन्तर्गत पनि पछि अनेक शाखा प्रचलित भए। तिनमा कृष्णयजुर्वेद अन्तर्गत 'तैत्तिरीय' शाखा प्रसिद्ध भयो। नक्साल नारायणचौरको अभिलेखमा 'तैत्तिरीयशाखागोष्ठी' को उल्लेख आएको छ। यसबाट लिच्छविकालमा तैत्तिरीयशाखा यहाँ प्रचलित थियो भन्ने थाहा पाइन्छ। पछि मध्यकालमा भने नेपालमा शुक्लयजुर्वेद अन्तर्गत माध्यन्दिनी शाखा प्रचलित थियो।

लिच्छविकालमा धर्म, शिक्षा, स्वास्थ्यसम्बन्धी पारलौकिक र लौकिक कुराको लागि अनेक गोष्ठीहरू खडा थिए। कति वर्गीय गोष्ठीहरू पनि थिए। लेलेको अंशुवर्माको अभिलेखमा ब्राह्मण-गोष्ठीको पनि उल्लेख आएको छ। यसै गरी केही याज्ञिक ब्राह्मणहरू मिली महर्षि वैशम्पायनको कारणपूजा गर्ने गोष्ठी बनाएको यस अभिलेखबाट बुझिन्छ।

ऋषि, ऋषिक, ऋषिपुत्र र महर्षि गरी मुनिका चार भेद उहिले थिए। महाभारत आदि प्राचीन ग्रन्थमा यस कुराको उल्लेख पाइन्छ। नयाँ नयाँ सिद्धान्त, विचार प्रवर्तन गर्नेलाई 'महर्षि' भन्ने चलन थियो। वैशम्पायन पनि महर्षिको श्रेणीमा पर्ने हुनाले यस अभिलेखमा उनलाई 'श्रद्धेय महर्षि' भनिएको हो। महर्षि वैशम्पायनको पूजा गर्न गूठी राखेको उल्लेख यहाँ परेको हुनाले उनको मूर्ति पनि स्थापना गरिएको बुझिन्छ। तर अहिले खर्पिछे आसपासमा यस्तो कुनै मूर्ति भेट्टिएको छैन। पुराना ऋषिका केही मूर्ति भने नेपाल–उपत्यकामा देखानपरेका होइनन्। जे होस्, शिक्षाको दृष्टिले ऋषि मुनिको पूजा गर्ने यस परम्पराको महत्त्व छ भन्ने स्पष्ट छ।

लिच्छविकालमा नेपालमा वर्णव्यवस्थाको राम्रो उदाहरण देखापर्छ। त्यस बेला लोकमा ब्राह्मणवर्गको सन्मानपूर्ण स्थान थियो। लिच्छविकालका यी ब्राह्मणहरू पछि कुन अवस्थामा रहे; यो कुरा खुल्न सकेको छैन।

# पशुपति आर्यघाटको अभिलेख

पशुपति आर्यघाटमा 'सूर्यमण्डल' कहिने बाटुलो आकारको ढुङ्गाको चारैतिर यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ४० अङ्गुल लम्बा, १½ अङ्गुल चौडा छ। यसको अलिकता भाग खण्डित छ। यहाँ संवत् ४५२ दिइएको छ।

नोलीद्वारा ८७ संख्याको रूपमा यो छापिएको छ। यसको परिचयमा 'संवत् नभएको अभिलेख' भनी उहाँले लेख्नुभएको छ। तर मूल अभिलेखमा संवत्को अङ्क स्पष्ट देखिन्छ। यसको केही बढी भाग पढी 'पूर्णिमा' २० पूर्णाङ्कमा मैले पनि यो अभिलेख छपाएको छु।

## मूलपाठ

१. ॐ संवत् ४५२ ... ... सर्व्वदण्डनायकपादानुध्यातो (ध्यातेन) ब्राह्मणपुण्यगोमिना स्वपुण्याप्यायनाय पार्त्थिवशिला स्थापिता धान्यपिण्डक मा ३०

## अनुवाद

ॐ संवत् ४५२................सर्वदण्डनायकका पाउको अनुग्रह पाएका ब्राह्मण पुण्य गोमीले आफ्नो पुण्य बढोस् भनी पार्थिव शिलाको स्थापना गरियो। ३० मानिका धान कुत आउने (खेत गूठी राखियो।)

**व्याख्या–**

एक पङ्क्तिको सानो अभिलेख यो हो तापनि तात्कालिक राजनैतिक अवस्था झल्काउन यो

अभिलेख सफल भएको छ। यस अभिलेखमा राजाको नामोल्लेख गरिएको छैन। तर यो अभिलेख कुँदाउने ब्राह्मण पुण्य गोमीले आफूलाई 'सर्व्वदण्डनायकपादानुध्यात = सर्वदण्डनायकका पाउको अनुग्रह पाएका' भनी लेखेका छन्। यहाँ उल्लिखित 'सर्वदण्डनायक' रविगुप्त हुन् भन्ने निश्चित छ। किनभने संवत् ४३४ देखि ४५४ सम्मका अभिलेखमा सर्वदण्डनायक रविगुप्त शक्तिशाली व्यक्तिका रूपमा देखापर्छन्। यसताका गद्दीमा लिच्छवि राजा वसन्तदेव थिए। तर शासनको बागडोर वसन्तदेवका हजुरिया सर्वदण्डनायक यी रविगुप्तको हातमा थियो। यसै हुँदा ब्राह्मण पुण्य गोमीले आफूलाई 'भट्टारकपादानुध्यात' नभनीकन 'सर्वदण्डनायकपादानुध्यात' भनी लेखेका हुन्। यसरी तात्कालिक राजनैतिक अवस्थाको केही झलक यस अभिलेखबाट पाइन्छ।

### गोमी–

'गोमी' शब्दको अर्थ अमरकोशअनुसार प्रशस्त गाई पाल्ने व्यक्ति भन्ने हो†। लिच्छविकालमा 'गोमी' शब्द प्रायः 'आभीर' जातिलाई कहने शब्दको रूपमा प्रचलित थियो। पशुपतिको भौमगुप्तकी आमा आभीरीको अभिलेखबाट यो कुरा स्पष्ट हुन्छ। त्यहाँ आभीरीले आफूलाई 'गोमिनी' पनि लेख्न लाएकी छन्। लिच्छविकालमा 'गोमी'हरू ठूलठूला सरकारी पदमा नियुक्त थिए। यसो हुँदा लिच्छविकालका अभिलेखमा 'गोमी' को उल्लेख धेरै ठाउँमा आएको छ। यस प्रसङ्गमा एउटा कुरा उल्लेखनीय छ। गोमीहरूमा केही क्षत्रिय थिए। केही ब्राह्मण पनि थिए। भोगवर्मा गोमी अंशुवर्माका भानिज हुन्। उनी राजपुत्र थिए भन्ने कुरा अंशुवर्माको पशुपति देउपाटनको अभिलेखबाट थाहा पाइन्छ। यस कारण भोगवर्मा गोमी क्षत्रिय थिए भन्ने निश्चित छ। यस अभिलेखमा पुण्य गोमीले आफूलाई ब्राह्मण भनेका छन्। देउपाटनको नरेन्द्रदेवको पालाको एक अभिलेखमा ब्राह्मण विश्वसेनकी पत्नी सुवर्ण गोमिनीको उल्लेख परेको छ। यसबाट उपर्युक्त कुराको पुष्टि हुन्छ।

यो अभिलेख कुँदिएको बाटुलो आकारको ढुङ्गा 'सूर्यमण्डल' हो भनी नोलीले लेख्नुभएको छ। तर अभिलेखमा 'पार्थिवशिला' स्थापना गरेको कुरा लेखिएको हुनाले यो सूर्यमण्डल होइन कि भन्ने देखिन्छ। पृथ्वी पनि देवता मानिन्छ। महादेवका अष्ट मूर्तिमा एक पृथ्वी पनि हो। यस्तै पृथ्वीलाई देवता मान्ने भावनाले यो 'पार्त्थिवशिला' स्थापना गरिएको देखिन्छ।

—~—

† 'गोमान् गोमी.....'अमर २।९।५८

# बलम्बू खाद्याँको वसन्तदेवको अभिलेख

बलम्बूमा महालक्ष्मीको मन्दिरसंगै त्यसको दक्षिण–पश्चिमपट्टि खाद्याँनामक ठाउँ छ। त्यहाँ काभ्रोको रूखमनि पर्खालमा यो शिलालेख घोप्टयाएर उल्टो पारी राखिएको छ। यो अभिलेख खण्डित छ। ढुङ्गाको आकार प्रकार हेर्दा कुनै देवताको जलहरीको टुक्रा जस्तो यो देखिन्छ। यसमा अहिले देखिने अभिलेख कुँदिएको भाग १४ अङ्गुल लम्बा, २ अङ्गुल चौडा छ। यहाँ संवत् देखिंदैन।

'पूर्णिमा' ५ पूर्णाङ्कको ७१ पृष्ठमा यो अभिलेख संशोधन–मण्डलद्वारा छापिएको छ।

## मूलपाठ

१. ...भट्टारकमहाराजश्रीवसन्तदेवः प्रजानां श्रेयसे ...

२. ...श्रीवर्म्म थुल्लगुप्त शुभगुप्त श्रीदेवयश पूर्णा—

## अनुवाद

भट्टारक (गद्दीनशीन) महाराज श्रीवसन्तदेवबाट प्रजाहरूको कल्याणको लागि........ श्रीवर्म्म, थुल्लगुप्त, शुभगुप्त, श्रीदेवयश, पूर्णा.......

**व्याख्या–**

धेरै अंश खण्डित र थोरै अंश मात्र बचेको हुनाले यस अभिलेखमा मुख्य गरी के कुरा परेको थियो, भन्न नसकिने भएको छ। यो अभिलेख कुँदिएको ढुङ्गा जलहरी जस्तो देखिएको हुनाले कुनै देवता स्थापना गरी यो अभिलेख राखेको अनुमान हुन्छ। यसमा संवत् देखिंदैन। तर राजा

वसन्तदेवको नाम भएको भाग बचेको छ । यसो हुनाले वसन्तदेवको अन्तिम समयतिर यहाँ यो अभिलेख पारिएको हो ।

चन्द्रागिरि र दहचोक डाँडाको बीच भागमा लिच्छविकालमा निकै बस्ती बसेका थिए । भेल्बू, पासिख्य, मालटार, चौकिटार आदि ठाउँका पुराना बस्ती अहिले छैनन् । थानकोट, बलम्बू किसिपिंडी, सतुङ्गल आदि ठाउँका लिच्छविकालका केही बस्ती भने अहिले पनि छन् । तर लिच्छविकालसंग आफ्नो सम्बन्ध देखाउने कुनै बासिन्दा अहिले त्यहाँ भेटिंदैन । थानकोटमा एकथरी ब्राह्मण छन्; जसको रीति–रिवाज अन्तका ब्राह्मणको भन्दा भिन्नै छ भनी भनिन्छ । तर यसको अध्ययन हुन सकेको छैन । यस कारण यस विषयमा अहिले केही भन्न सकिंदैन ।

लिच्छविकालमा यस भेकमा ब्राह्मणलगायत अठाह्रै जातका प्रजाको बसोबास थियो भन्ने उल्लेख थानकोटको वसन्तदेवको अभिलेखमा परेको छ । तर यो उल्लेख सबै बस्तीतिर लागू हुने सामान्य कुरा हो। वंशावलीमा यस भेकमा प्राचीन कालमा आभीरहरूको बस्ती थियो भन्ने उल्लेख पाइन्छ । यस कुराको पुष्टि यस अभिलेखले केही गरेको छ । यहाँ यो अभिलेख राख्न लाउनेहरूमा दुइ जना गुप्त आभीर थुल्लगुप्त र शुभगुप्त पनि छन् । यसताकाका 'गुप्त' नामधारीहरू आभीर हुन् भन्ने कुरा अरू अभिलेखबाट देखिएको छ । फेरि रविगुप्त, भौमगुप्त, जिष्णुगुप्तहरूले यतातिरका बासिन्दाहरूलाई बढी सुबिधा गरिदिएको देखिएको हुनाले पनि उपर्युक्त कुराको केही पुष्टि हुन्छ ।

यस अभिलेखमा उल्लिखित शुभगुप्त कुनै सरकारी पदमा नियुक्त व्यक्ति थिए कि भन्ने संकेत पशुपति भस्मेश्वरको अभिलेखबाट पाइन्छ । त्यसमा प्रतिहार ध्रुवसङ्घले स्थापना गरेका पाँच शिवलिङ्गमध्ये एकको नाम 'शुभेश्वर' रहेको छ । शुभगुप्तको नाउँमा 'शुभेश्वर' स्थापना गरिएको हो भन्ने देखिन्छ । साथै त्यस अभिलेखमा 'रवीश्वर'को पनि उल्लेख छ । जुन रविगुप्तको नाममा स्थापना गरिएको हो भन्ने बुझिन्छ । भस्मेश्वरको त्यस अभिलेखले अर्को के संकेत गरेको छ भने जुन काण्डमा रविगुप्तको ज्यान गयो; त्यही काण्डमा शुभगुप्त आदि अरू चार जनाका पनि ज्यान गुमे । यसै हुँदा रविगुप्तहरूप्रति भक्ति राख्ने प्रतिहार ध्रुवसङ्घले रविगुप्तहरूका नाममा संगसंगै एकै चोटि पाँच शिवलिङ्ग स्थापना गरिदिए । यस विषयको अरू चर्चा तल त्यसै अभिलेखको व्याख्यामा गरिनेछ ।

यस अभिलेखमा उल्लिखित श्रीवर्मा आदि अरूको परिचय केही पाउन सकिएको छैन ।

–✶–

# चौकिटारको वसन्तदेवको अभिलेख

बलम्बूदेखि पाउभर जति पश्चिम–उत्तरतिर चौकिटार पर्दछ । चौकिटारमा अहिले कुनै बस्ती छैन । खेतको बीचमा यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ । यो शिलापट्ट रहेको ठाउँमा चाहिं अलिकता जग्गा त्यसै छोडिएको छ । यसको अभिलेख कुँदिएको भाग २७ अङ्गुल लम्बा, २४ अङ्गुल चौडा छ । यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन् । यहाँ संवत् ४५४ दिइएको छ ।

नोलीद्वारा १५ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. ॐ स्वस्ति मानगृहात्सम्यक्प्रजापालन ... ...
२. भट्टारकमहाराजश्रीवसन्तदेवः कुशली ... (ब्राह्मण-)
३. पुरःसरान्ग्रामकुटुम्बि(नः) कुशलम्पृष्ट्वा (समाज्ञा)पयति
४. यथा मयं ... श्च ... ङ्ग ... ... ... (कुथे)
५. राधिकरणाभिलेख्यकैश्च पश्चापराध ... ... सर्व्वदण्डना
६. यकमहाप्रतिहाररविगुप्तेन विज्ञापिते(न) ... त्रैव सर्व्वदण्डनायक
७. महाप्रतिहाररविगुप्तेन महाराजमहासामन्तश्रीक्रमलीलेन च साकं स–
८. मवाप्य तथेति प्रसादः कृतस्तदित्थम्प्रति यदि कश्चिदस्मत्पा-दोपजीव्य

९. न्यो वेमामाज्ञामुत्क्रम्याभिलेख्यं प्रवेशयेद् यश्च पञ्चापराधेन स्मरेत्स्मार--

१०. येद्वा तानहं दृढम्न मर्षयिष्यामि एवं विदितार्था यूयं निर्वृत-विश्वस्ताः

११. सुखं प्रतिवसतेति ततो ग्रामीणैरपि मा भूद् राजकोशस्या-पहानिरिति

१२. तत्प्रतिमोचनाय स्वे स्वे ग्रामेधिकरणयोरुभयोः क्षेत्रं दत्तम्पश्चि

१३. मोद्देशे भूमि ६ पिण्डकं शोल्लाधिकरणस्य मा २ कूथेराधि-करणस्य

१४. मा १ दूतकश्चात्र सर्वदण्डनायकमहाप्रतिहाररविगुप्तः ब्रह्मडि च

१५. प्रतिहारभवगुप्ते व्यवहरतीति संवत् ४५४ ज्यैष्ठशुक्लदिवा ६

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट राम्ररी प्रजाको हेरविचार गर्नामा लागेका, गाथमा आराम रहेका,.....भट्टारक महाराज श्रीवसन्तदेवबाट .....(ब्राह्मण)लगायत गाउँका गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ ।

यहाँ.......कुथेर अधिकरणले लेख्यदान गर्न र (शोल्ल अधिकरणले) पञ्चखतको तहकीकात गर्नाको लागि (पस्न नपाउने गराउन) सर्वदण्डनायक महाप्रतिहार रविगुप्तले हाम्रा हजूरमा बिन्ति चढाएका हुँदा......सो ठीक छ भनी सर्वदण्डनायक महाप्रतिहार रविगुप्त र महाराज महासामन्त श्रीक्रमलीलसंग मिलेर यो लिगाह् गरिदिइएको छ ।

तसर्थ यस विषयमा हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी) वा अरू कसैले यो आज्ञा नाघेर यहाँ लेख्यदान गर्ला वा पञ्चखतको तहकीकात गर्ला, तिनलाई हामी पक्का सहनेछैनौं । यो कुरा थाहा पाई तिमीहरू खातिरजमासंग सुखपूर्वक रहनू ।

अनि गाउँलेहरूले पनि राजकोश (सरकारी ढुकुटी) लाई नोक्सान नहोस् भन्नाका लागि आफ्नो आफ्नो गाउँमा दुवै अधिकरण (कुथेर र शोल्ल) लाई खेत दिएका छन् । पश्चिमपट्टि ६ भूमि । (यसको) कुत शोल्ल अधिकरणलाई २ मानिका, कुथेर अधिकरणलाई १ मानिका ।

यहाँ दूतक सर्वदण्डनायक, महाप्रतिहार रविगुप्त छन् । प्रतिहार भवगुप्त ब्रह्मुङले मुद्दामामिला-को काम गरिरहेको वेलामा ।

संवत् ४५४ ज्येष्ठ शुक्ल सप्तमी ।

# पासिंख्यको वसन्तदेवको अभिलेख

बलम्बूदेखि पूर्व खोलापारि केही पर पासिंख्य भन्ने ठाउँ छ। त्यहाँ दक्षिणाभिमुख भई यो शिलापत्र रहेको छ। यसको शिरोभागमा दायाँ बायाँ फुटी चोइटा उप्किसकेका र अक्षर पनि खिइसकेका छन्। यसको अभिलेख कुँदिएको भाग १ हात ८ अङ्गुल लम्बा र २२ अङ्गुल चौडा छ। यहाँ संवत् ४५४ दिइएको छ।

'अभिलेख–संग्रह' ५ भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ... ... ...

२. ... ... महाराजश्रीवसन्तदेवः ...

३. ... ... ...

४. ... (समाज्ञा)पयति विदितमस्तु भवतां यथेयम्पश्चा

५. ... ... ग्रामाणां कूथेराधिकरणस्य

६. ... ... ... दिति विज्ञापितेन म(या)

७. सर्व्वदण्डनायकमहाप्रतिहाररविगुप्तमहाराजमहा

८. (सामन्त)श्रीक्रमलीलाभ्यां सार्कं समवाय्य तथेति प्रसादः(कृ)

९. तस्तदित्थम्भूते यदि कश्चिदस्मत्पादोपजीवी वान्यश्चे मा–

१०. माज्ञामुत्क्रम्याभिलेख्यं प्रवेशयेद् यश्च शोल्लं पश्चापराधेन

११. स्मारयेत्तावहमत्यर्थंन्न मर्षयिष्याम्येवं विदितार्था (यू)

१२. (यं) निर्वृतविश्वस्तास्सुखम्प्रतिवसतेति ततो ग्रामीणंर-
१३. पि मा राजकोशस्यापचितं भूदिति तत्प्रतिमोचनाय स्वे
१४. स्वे ग्रामेधिकरणयोरुभयोः क्षेत्रं दत्तं ग्रामस्य दक्षि-
१५. णोद्देशे भूमि ४ पिण्डकं शोल्लस्य मा १ कुथेरस्य मा
१६. (१) दूतकोत्र सर्व्वदण्डनायकमहाप्रतिहाररविगु-
१७. प्तः । ब्रह्मुडि च प्रतिहारभवगुप्ते व्यवहरतीति
१८. संवत् ४५४ ज्येष्ठकृष्णदिव ६

# अनुवाद

(मानगृह दरबारबाट) . . . . . . . महाराज श्रीवसन्तदेवले आज्ञा गर्नुभएको छ । तिमीहरूलाई थाहा होस् । . . . . . . . गाउँहरूमा कुथेर अधिकरणले (लेख्यदान गर्न र शोल्ल अधिकरणले पञ्चापराधको तहकीकात गर्न पस्न नपाउने गराउन सर्वदण्डनायक महाप्रतिहार रविगुप्तले) हाम्रा हजूरमा बिन्ति चढाएका हुँदा सो ठीक छ भनी . . . . सर्वदण्डनायक महाप्रतिहार रविगुप्त र महाराज महासामन्त श्रीक्रमलीलसंग मिली यो निगाह गरिएको छ ।

तसर्थ यस विषयमा हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी) वा अरू कसैले यो आज्ञा नाघेर लेख्यदान गर्ला वा जसले शोल्ल अधिकरणमा पञ्चापराधसम्बन्धी कुरा दर्ता गराउला, तिनलाई हामी बिलकुल सहनेछैनौं । यो कुरा थाहा पाई तिमीहरू खातिरजामासंग सुखपूर्वक रहनू ।

अनि गाउँलेहरूले पनि सरकारी ढुकुटीलाई नोक्सान नहोस् भन्नाको लागि आफ्नो आफ्नो गाउँमा दुवै अधिकरणलाई खेत दिएका छन् । गाउँको दक्षिणतिर ४ भूमि । यसको कुत शोल्ललाई १ मानिका, कुथेरलाई १ मानिका ।

यहाँ दूतक सर्वदण्डनायक महाप्रतिहार रविगुप्त छन् । प्रतिहार भवगुप्त ब्रह्मुडले मुद्दामामिलाको काम गरिरहेको वेलामा ।

संवत् ४५४ ज्येष्ठ कृष्ण षष्ठी ।

**व्याख्या**–

चौकिटार र पासिख्यका यी दुइ अभिलेखको बेहोरा उही छ । मितिमा पनि एक पक्षको मात्र अन्तर छ । चौकिटारभेकका बासिन्दाहरूलाई प्रशासनसम्बन्धी केही अधिकार सुम्पेको १५ दिनपछि पासिख्यभेकका बासिन्दाहरूलाई पनि त्यही अधिकार सुम्पेको यसबाट बुझिन्छ ।

## द्वैतशासनको शुरू–

वसन्तदेवका यी अन्तिम अभिलेख हुन् । यी अभिलेखले त्यस बेलाको अवस्थालाई निकै स्पष्ट पारेका छन् । रविगुप्त अब शक्तिशाली सरकारी कर्मचारी मात्र थिएनन्; राजा वसन्तदेवको साथमा रही शासन चलाउने सहायक शासकका रूपमा उनी देखापरेका थिए । हुनत यसभन्दा अघिदेखि नै रविगुप्तको हातमा शासनको बागडोर रहन लागिसकेको थियो । यसै हुँदा आर्यघाटको अभिलेखमा राजाको नामोल्लेखसम्म नगरी रविगुप्तप्रति मात्र भक्ति प्रकट गरिएको छ । यस कुराको चर्चा पहिले गरिसकेको छ । यी अभिलेखमा चाहिं रविगुप्त सहायक शासक बनेको कुरा राजाको मुखबाट विधिपूर्वक निकालिएको छ । यहाँ रविगुप्त दूतक मात्र छैनन् । शासनसम्बन्धी देखरेख गर्ने काम पहिले उनी गर्दथे; अनि राजामा जाहेर गरी त्यसको निकासा गराइन्थ्यो भन्ने कुरा यी अभिलेखमा परेको 'रविगुप्तेन विज्ञापितेन मया ....... ' यस बेहोराले स्पष्ट पार्छ । यति मात्र होइन । 'सर्व्वदण्डनायकमहाप्रतिहाररविगुप्तेन महाराजमहासामन्तश्रीक्रमलीलेन च सार्कं समवाध्य तथेति प्रसादः कृतः' यस बेहोराले यो सनदपत्र राजा एक्लैले गरिदिइएको होइन; रविगुप्त र क्रमलीलसंग मिली संयुक्त रूपमा गरिदिइएको हो भन्ने स्पष्ट देखाउँछ । यसरी सनदपत्र गरिदिने काममा समेत संयुक्त हुन पुगेको देखिएको हुनाले क्रमलीलको मदतले रविगुप्त सहायक शासक हुन पुगेको स्पष्ट छ ।

यसरी वसन्तदेवको अन्तिम समयदेखि लिच्छविकालमा एक किसिमको 'द्वैतशासन' कायम भएको हामी पाउँछौं । हुन त लिच्छविकालको द्वैतशासनबारे इतिहासकारमा मतभेद देखापरेको छ । रविगुप्तदेखि एक किसिमले द्वैतशासनको शुरू भयो भन्ने कुरा मान्ने पक्षमा केही इतिहासकार छैनन् । अंशुवर्मापछि जिष्णुगुप्तको पालादेखि मात्र द्वैतशासन शुरू भयो भन्ने ती इतिहासकारको मत छ† । तर यो कुरा तर्कसम्मत छैन । जुनसुकै कुरा पनि क्रमशः शुरू हुँदै गई पछि विकसित हुने हुनाले द्वैतशासनको स्थिति पनि यस्तै रह्यो । उठानमा यसको रूप अलि अस्पष्ट थियो । पछि जिष्णुगुप्तहरूको समयसम्ममा यो स्पष्ट देखापर्‍यो । यस दृष्टिले हेर्‍यौं भने द्वैतशासनको शुरू हामी वसन्तदेव रविगुप्तको अन्तिम समयदेखि नै पाउँछौं । यस कुराको बलियो प्रमाण चौकिटार र पांसिख्यका यिनै अभिलेख छन् । कुनै पनि स्वतन्त्र राजाको मुखबाट 'मैले फलानासंग मिली यो सनदपत्र गरिदिएको छु' यस्तो वचन निस्कंदैन । 'तेन सह समवाध्य तथेति प्रसादः' यस वाक्यले एक किसिमको संयुक्तशासनलाई स्पष्ट रूपमा औंल्याउँछ । द्वैतशासन खतम भएपछिका नरेन्द्रदेव, जयदेवका अभिलेखसंग यी अभिलेखको तुलना गरी हेरे यो कुरा अझ स्पष्ट हुन्छ । फेरि पशुपतिको जयदेवको अभिलेखमा वसन्तदेवपछिका, नरेन्द्रदेवअघिका लिच्छवि राजाहरूको वर्णन नगरिएको हुनाले पनि उपर्युक्त कुराको पुष्टि हुन्छ ।

## क्रमलील–

महाराज महासामन्त पदधारी यी क्रमलील को हुन्; कहाँका हुन्; थाहा पाउन सकिएको छैन ।

---

† 'लिच्छवि संस्कृति'को पृष्ठ १९-२० हेर्नुहोस् ।

रविगुप्त जतिसुकै शक्तिशाली भए पनि उनको नाममा राजोचित 'श्री' जोडिएको थिएन ।क्रमलील-मा चाहिं 'श्री' जोडिएको हुनाले यिनी कुनै राजवंशका थिए भन्ने देखिन्छ । यिनमा लागेको 'महाराज' पदले पनि यही कुरा प्रकट गर्छ । तर नाममा 'देव' नजोडिएको हुनाले यिनी लिच्छविचाहिं होइनन् भन्ने बुझिन्छ । महाराज र श्री यिनमा जोडिए तापनि यिनी स्वतन्त्र राजा होइनन् भन्ने कुरा यिनमा लागेको 'महासामन्त' पदले देखाउँछ । यसरी कुनै राजवंशमा जन्मेका यी क्रमलील लिच्छवि राजाका महासामन्त थिए; यसताका राजधानीमा आई रहन लागेका र वसन्तदेवका सहायक शासक बन्न पुगेका थिए भन्ने देखिन्छ ।

यसरी उठानमा क्रमलीलले रविगुप्तको साथ दिएको देखिन्छ । तर रविगुप्तको नाशको कारण यिनै बनेको प्रसङ्गबाट देखिएको छ । यी शिलापत्र गरिदिएको एक वर्ष नबित्दैमा एक ठूलो काण्ड मच्चियो । जसले वसन्तदेवको पनि अन्त्य गरिदियो; रविगुप्तको पनि अन्त्य गरिदियो । यस कुराको संकेत तल आउने भस्मेश्वरको अभिलेखबाट पाइन्छ । यहाँ एउटा कुरा विचारणीय छ । वसन्तदेव र रविगुप्तको अन्त्य भए तापनि 'क्रमलील' को चाहिं अन्त्य भएन । पछि उनी झन् शक्तिशाली रूपमा देखापरे । यो कुरा मृगस्थली जाने बाटोको रामदेवको पालाको अभिलेखबाट थाहा पाइन्छ । यस बीच भौमगुप्तको उदय नहुन्जेल अरू गुप्तहरू अधिकारमा आउन सकेको पनि देखिंदैन । यसरी यस ताकाका घटनालाई केलाएर हेर्दा रविगुप्तको अन्त्य गराउनामा क्रमलीलको हात रहेको थियो कि भन्ने संकेत पाइन्छ । यसको निश्चय गर्न त्यसताकाका अरू अभिलेखको प्राप्तिको प्रतीक्षा गर्नुपरेको छ ।

### लेख्यदान–

चौकिटार र पासिख्यका यी अभिलेखले कुथेर अधिकरण र शोल्ल अधिकरणको कामबारे पनि महत्त्वपूर्ण प्रकाश पारेका छन् । कुथेर अधिकरणको मुख्य काम 'राजस्व' उठाउने थियो भन्ने कुरा अरू अभिलेखबाट थाहा पाइएको थियो । यस अभिलेखबाट चाहिं 'लेख्यदान' को काम पनि कुथेर अधिकरणअन्तर्गत नै थियो भन्ने थाहा पाइएको छ । यसबारे माथि 'चार अधिकरण' भन्ने प्रकरणमा पनि चर्चा गरिसकेको छु । यहाँ अब 'लेख्यदान' भनेको के हो; त्यसको निर्णय गर्नुपरेको छ ।

लिच्छविकालका शासकहरूले स्थानीय ग्रामपाञ्चालीहरूलाई स्वायत्तशासनसम्बन्धी अधिकार दिंदा 'लेख्यदान' सम्बन्धी अधिकार पनि दिइएको पाइन्छ । विशेष गरेर अंशुवर्माका अभिलेखमा 'लेख्यदानपञ्चापराधादिनिमित्तन्त्वप्रवेशः' भनी कुथेर शोल्ल आदि सम्बद्ध अधिकरणले तोकिएका ग्राममा नपस्नू भनी लेखिएको पाइन्छ । 'लेख्य' शब्दको अर्थ 'पुर्जी' भन्ने हुने हुनाले 'लेख्यदान' को अर्थ 'पुर्जी काट्नु' भनी हामीले ठाउँ ठाउँमा छपाएका थियौं । परन्तु यो अर्थगराइ अलि अस्पष्ट भयो । पुर्जी काट्ने काम त आवश्यक परे सबै अधिकरणले गर्दा हुन्; यो काम 'कुथेर' अधिकरणअन्तर्गत मात्र कसरी रह्यो; ग्रामपाञ्चालीलाई यो अधिकरण दिंदा के फाइदा

आदि अनेक प्रश्न यस विषयमा उठ्छन् । यस कारण 'लेख्यदान' को वास्तविक अर्थ निश्चित गर्नु बाँकी नै छ भन्ने कुरा यताबाट बुझिन्छ ।

सरकारी मालपोत उठाउने काम कुथेर अधिकरणअन्तर्गत रहेको र 'लेख्यदान' पनि कुथेर अधिकरण अन्तर्गत नै रहेको हुनाले 'लेख्यदान' को भूमिव्यवस्थासंग सम्बन्ध छ भन्ने कुरा प्रसङ्गबाट बुझिन्छ । यस कुराको पुष्टि याज्ञवल्क्यस्मृति आदिबाट हुन्छ । ती ग्रन्थमा पनि भूमिदानको प्रसङ्गमा 'लेख्य' लेखी दिने कुरा परेको छ । विचारार्थ याज्ञवल्क्यस्मृतिको वचन यहाँ उद्धृत गर्नुपरेको छ–

'दत्वा भूमिं निबन्धं वा कृत्वा लेख्यं तु कारयेत् ।
आगामिभद्रनृपतिपरिज्ञानाय पार्थिवः" ॥३१८॥ आचाराध्याय

(राजाले जग्गा दिंदा वा जग्गाको आयस्ता तोक्दा पछिका राजाहरूलाई बुझ्न सजिलो होस् भनी 'लेख्य' लेखाउन लाउनू ।)

टीकाकारले 'लेख्य' बारे अझ खुलाउँदै यस्तो लेखेका छन्–

'लेख्यं द्विविधं शासनं जानपदं चेति'

यसबाट राजाले जग्गा दिंदा वा जग्गासम्बन्धी आयस्ताको नियम बनाउँदा तथा जनताले जग्गा किनबेच गर्दा भूस्वामित्वको प्रमाणको लागि दिइने निस्सापत्र 'लेख्य' हो भन्ने निश्चित हुन्छ । पछि मल्लकालसम्म पनि राजाले जग्गा दिंदा वा जनताले जग्गा किनबेच गर्दा ताडपत्रमा लेखिदिने चलन थियो । मल्लकालका यस्ता 'क्री. वि. पत्र' रूपका ताडपत्रहरू प्रशस्त पाइएका छन् । यिनमा भाषा संस्कृत नै हुन्छ । अलि राम्ररी खोजी गर्न सके लिच्छविकालका पनि यस्ता ताडपत्र पाइने सम्भावना नभएको होइन ।

यति कुराबाट 'लेख्यदान' को अर्थ स्पष्ट भएको छ जस्तो मलाई लाग्छ । जग्गा किनबेच गर्दा त्यसको रजिस्ट्रेशनको लागि सरकारी अधिकरण (कुथेर अधिकरण)सम्म पुग्नुपर्दा जनतालाई असुबिधा हुनु स्वाभाविक थियो । स्थानीय ग्रामपाञ्चालीलाई नै लेख्यदानसम्बन्धी अधिकार सुम्पिदिंदा यसबाट जनतालाई सुबिधा हुने स्पष्ट छ । यसै हुँदा 'लेख्यदान' सम्बन्धी अधिकार ग्रामवासीलाई सुम्पिदिइएको देखिन्छ ।

यसरी जग्गा रजिस्ट्रेशन गर्दा यसबाट कुथेर अधिकरणलाई केही आम्दानी हुन्थ्यो । सो काम ग्रामबासीलाई नै सुम्पंदा राजकोशलाई हानि हुने भयो । यसो हुँदा सो नहोस् भन्ने अभिप्रायले त्यसको पनि बन्दोबस्त यी अभिलेखमा मिलाइएको छ । ग्रामका बासिन्दाहरूले केही जग्गाको कुत कुथेर अधिकरणलाई बुझाउन मञ्जूर गरेको कुरा यहाँ लेखिएको छ । यसबाट राजकोशलाई पनि हानि नहुने भयो; जनतालाई पनि सुबिधा हुने भयो ।

चार अधिकरणमध्ये एक 'शोलल' अधिकरणको काम पनि यी अभिलेखबाट खुलेको छ । यी

अभिलेखमा लेख्यदानसम्बन्धी अधिकार ग्रामवासीलाई सुम्पे जस्तै 'पञ्चापराध' सम्बन्धी मुद्दा मामिला हेर्ने अधिकार पनि ग्रामवासीलाई नै सुम्पेको कुरा परेको छ । यसैले यी ग्राममा शोल्ल अधिकरणले नपस्नू भन्ने बन्धेज पनि यसमा बाँधिएको छ। केही गरी कसैले यो बन्धेज नाघेर शोल्ल अधिकरणमा गई पञ्चापराधसम्बन्धी मुद्दामामिला दर्ता गर्न गए भने तिनलाई कडा दण्ड गरिनेछ भन्ने स्पष्ट उल्लेख पनि पाँसिख्यको अभिलेखमा परेको छ। यसबाट शोल्ल अधिकरणको मुख्य काम 'पञ्चापराध' सम्बन्धी मुद्दामामिला हेर्नु रहेछ भन्ने स्पष्ट थाहा पाइएको छ।

मुद्दामामिला छिन्दा सरकारलाई केही आम्दानी हुन्थ्यो । सो काम ग्रामवासीलाई दिंदा राजकोशलाई हानि नहोस् भन्ने अभिप्रायले शोल्ल अधिकरणको लागि पनि ग्रामवासीले केही जग्गा छुट्टयाइदिएको कुरा यी अभिलेखमा परेका छन् ।

यी अभिलेखको अन्त्यमा यस बेला प्रतिहार भवगुप्तले मुद्दामामिलासम्बन्धी काम गरिरहेको उल्लेख परेको छ ।

यसरी चौकिटार र पाँसिख्यका यी अभिलेख तात्कालिक निकै कुरा बुझ्न उपयोगी छन् ।

—✶—

# चापागाउँको अभिलेख

चापागाउँ यकुटोलमा गणेशको देवलभन्दा दक्षिणपट्टि एउटा जलद्रोणी छ। त्यस जलद्रोणी-माथि एउटा देवमूर्ति रहेको छ। त्यसको कमलाकार आसनको कमल–डाँठको दुवैतिर गरी यो अभिलेख कुँदिएको छ। यहाँ संवत् छैन।

'अभिलेख–संग्रह' नवौं भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

कुबेरगुप्त अनीकगुप्त

**व्याख्या–**

यो अभिलेख कुँदिएको देवमूर्ति मूर्तिकलाको दृष्टिले महत्त्वपूर्ण छ। यस मूर्तिलाई कोही दत्तात्रेयको, कोही महादेवको भनेर पनि त्यहाँका मानिसहरू भन्दा रहेछन्। परन्तु यस मूर्तिको ध्यानको विचार गर्दा ब्रह्माको मूर्ति जस्तो यो देखिन्छ। देवता कमलमा बसेका छन्; यिनका तीन मुख, दुइ हात छन्। एक हातमा जपमाला र अर्को हातमा जलपात्र (कमण्डलु) लिइएको छ। छातीको भागमा मृगचर्म लट्किएको छ।

यस अभिलेखमा 'कुबेरगुप्त' 'अनीकगुप्त' यी दुइ नामसिबाय अरू केही कुँदिएको छैन। यहाँ संवत् पनि दिइएको छैन। यी कुबेरगुप्त अनीकगुप्तको उल्लेख अन्त आएको पनि छैन। यस कारण यस अभिलेखको ठीक समय पत्ता लाउन अलि गाह्रो छ। यसको लिपिद्वारा आसन्न समयसम्म अनुमान गर्न सकिन्छ। यसको लिपि वसन्तदेवको ताकाको छ। गुप्त आभीरहरू चलतापूर्जा

भई निस्केको समय यही हुँदा यो अभिलेख यहाँ दिइएको हो। योभन्दा केही अघिको पनि यो हुन सक्छ ।

कुबेरगुप्त र अनीकगुप्तले मिली यो मूर्ति स्थापना गरेका हुनाले यी दुइको नाम यहाँ अङ्कित गरिएको देखिन्छ। यो देवमूर्ति जलद्रोणीमाथि रहेको छ। यस मूर्तिमै पनि 'मकर' को मुख भाग अलिकता यसो निकाली देखाइएको छ। यस कारण जलद्रोणीसाथै यो मूर्ति स्थापना गरिएको हो भन्ने देखिन्छ ।

कुबेरगुप्त र अनीकगुप्तका नाउँमा 'गुप्त' पद जोडिएको हुनाले यिनीहरू पनि आभीर हुन् भन्ने देखिन्छ। आभीर गुप्तहरू यज्ञ यागादि वैदिक कर्मकाण्डका समर्थक देखिएका र यस ताका द्वैपायन, वैशम्पायन आदि महर्षिहरूको पूजा गर्ने भावना पनि देखिएको हुनाले कुबेरगुप्त, अनीकगुप्तले स्थापना गरेको यो मूर्ति पनि कहीं यस्तै ऋषि मुनिको सन्मानमा स्थापना गरिएको त होइन भन्ने प्रश्न पनि यस प्रसङ्गमा नउठ्ने होइन। लेलेभेक लिच्छविकालमा केही अंशमा विद्याको केन्द्रको रूपमा रहेको देखापरेको छ। तर यस मूर्तिमा तीन मुख, कमलासन आदि देखिएको हुनाले ब्रह्माकै मूर्ति यो हो भन्ने देखिन्छ ।

–★–

# पशुपति भस्मेश्वरको अभिलेख

पशुपतिनाथको मन्दिरदेखि दक्षिण–पूर्वपट्टि 'भस्मेश्वर' भनी प्रख्यात शिवलिङ्ग छ। सो शिवलिङ्गको जलहरीभन्दा मनि आसनको रूपमा रहेको ढुङ्गामा पश्चिमपट्टि यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १ हात १६ अङ्गुल लम्बा, ६½ अङ्गुल चौडा छ। यहाँ संवत् ४५५ दिइएको छ।

यस अभिलेखमा उल्लिखित ५ शिवलिङ्गमध्ये एउटा बीचमा रहेको यही नै भयो। अरू चार शिवलिङ्ग चार कुनामा अद्यापि छँदैछन्। आज भोलि 'भस्मेश्वर' भनी प्रख्यात भए तापनि यस अभिलेखमा भस्मेश्वरको उल्लेख परेको छैन। यहाँ उल्लिखित 'भद्रेश्वर' नै भस्मेश्वरको नामले पछि कहलाएको हो कि भन्ने देखिन्छ।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ॐ संवत् ४५५ चैत्रशुक्लदिवा १० भगवतः पशुपतेः क्षेत्त्रे स्वयम्प्रतिष्ठापितेभ्यो भद्रेश्वरनाथेश्वरशुभेश्वर-

२. स्थितेश्वररवीश्वरेभ्यः पञ्चभ्यः कारणपूजानिमित्तं खण्डफुट्ट-प्रतिसंस्कारनिमित्तञ्च प्रतीहारध्रुवसङ्घवार्त्तेन १

३. स्वपुण्याप्यायनार्त्थम्मातापित्त्रोश्चानुग्रहार्त्थञ्च स्वजनगोष्ठिका-धीनं कृत्वा यूपग्रामस्य दक्षिणेन संवैद्यक्षेत्त्र-

४. न्दत्तं भूमि ४०० पिण्डकञ्च मा ४००

# अनुवाद

सवत् ४५५ चैत्र शुक्ल दशमी। भगवान् पशुपतिको क्षेत्रमा आफूले स्थापना गरेका भद्रेश्वर नाथेश्वर, शुभेश्वर, स्थितेश्वर, रवीश्वर यी पाँच देवताको कारणपूजा (नैमित्तिक पूजा) को लागि र टुटफुट भए बनाउनाका लागि वार्त्त (सरकारी वृत्ति पाएका) प्रतिहार (राजदरबारका द्वारे) ध्रुवसङ्घले आफ्नो पुण्य बढोस् भनेर तथा आमाबाबुको भलो होस् भनेर आफ्नै मानिसको गोष्ठीको अधीन राखी धूपग्रामको दक्षिणतिरको 'संवैद्ये' भन्ने ४०० मानिका कुत आउने ४०० भूमि खेत दान गरे।

## व्याख्या–

यो अभिलेख प्रतिहार ध्रुवसङ्घ वार्त्तले राख्न लाएका हुन्। लिच्छविकालको शासनव्यवस्थामा प्रतिहारको विशेष स्थान थियो; राजा र प्रजा दुवैसंग यिनको सम्बन्ध रहन्थ्यो भन्ने कुराको चर्चा माथि गरिसकेको छ। राजदरबारभित्र रहने प्रतिहारलाई त्यस वेला गद्दीमा को राजा थिए भन्ने कुरामा वास्ता नरहने कुरै थिएन। परन्तु प्रतिहार ध्रुवसङ्घले राखेको यस अभिलेखमा तात्कालिक राजाको नामोल्लेखसम्म पनि परेको छैन।

संवत् ४५४ ज्येष्ठसम्म गद्दीमा राजा वसन्तदेव थिए; सहायक शासकरूपमा रविगुप्त र क्रमलील थिए भन्ने कुरा माथि गएका चौकिटार पांसिख्यका अभिलेखबाट थाहा पाइन्छ। त्यसको दश महीनापछिको यस अभिलेखबाट अब त्यो पहिलेको अवस्था रहेन भन्ने संकेत पाइन्छ। अलि गहिरिएर विचार गरेको खण्डमा यस वेला रविगुप्तको अन्त्य भइसक्यो भन्ने कुरा यस अभिलेखले देखाउँछ। यहाँ ध्रुवसङ्घले स्थापना गरेका पाँच शिवलिङ्गका नाम भद्रेश्वर, नाथेश्वर, शुभेश्वर, स्थितेश्वर, रवीश्वर छन्। यिनमा 'रवीश्वर' रविगुप्तको नाउँमा स्थापना गरिएको हो भन्ने देखिन्छ। 'शुभेश्वर' चाहिं शुभगुप्तको नाउँमा स्थापना गरिएको बुझिन्छ। शुभगुप्तको उल्लेख वसन्तदेवको पालाको खाद्याँको अभिलेखमा आएको छ। यसै गरी भद्रेश्वर, नाथेश्वर, स्थितेश्वर पनि भद्रगुप्त आदिका नामबाट स्थापना गरिएका देखिन्छन्। मरेका आफ्ना अभीष्ट व्यक्तिको नाउँमा शिवलिङ्ग स्थापना गर्ने चलन लिच्छविकालमा थियो। तर यसरी एकैचोटि पाँच जनाका नाउँमा पाँच शिवलिङ्ग स्थापना गरेको यो घटना अलि अनौठो छ। फेरि प्रतिहार ध्रुवसङ्घले रविगुप्त आदि यी व्यक्ति-हरूसंग आफ्नो कुनै सम्बन्ध पनि यहाँ देखाएका छैनन्।

यसरी प्रतिहार वार्त्त जस्तो सरकारी पदमा रहेका व्यक्तिले गद्दीनशीन राजाको नामोल्लेखसम्म नगर्नु, पाँच पाँच व्यक्तिका नाममा एकैचोटि पाँच शिवलिङ्ग स्थापना गर्नु संयोगवश भएको होइन; यसमा कुनै रहस्य लुकेको छ भन्ने देखिन्छ। यसले निम्नलिखित कुरा दर्शाएको छ जस्तो मलाई लाग्छ– यस वेला राजा वसन्तदेवको अन्त्य भइसक्यो; त्यसै काण्डमा रविगुप्त आदि उपर्युक्त पाँच व्यक्ति पनि परे; ध्रुवसंघ रविगुप्तहरूप्रति भक्ति राख्ने व्यक्ति थिए; यसै हुँदा रविगुप्तहरूका नाउँमा एकैचोटि शिवलिङ्ग स्थापना गरिदिए; गद्दीनशीन नयाँ राजाप्रति प्रतिहार ध्रुवसङ्घको

मनमा आदर थिएन; यसै हुँदा गद्दीनशीन राजाको नामोल्लेख उनले गरेनन्। यी कुरा प्रसङ्गबाट देखिएका हुन्। यी कुराको पुष्टिको लागि अझ अन्वेषण गरिनु जरूरी छ।

**गोष्ठी–**

श्रद्धालु राजा र प्रजाले धार्मिक कुरा चलाउन वा लोकको हित हुने कामको लागि अर्पण गरेको चल, अचल सम्पत्तिलाई नियत रूपमा उपयोग गरी निश्चित उद्देश्य प्राप्ति गर्न गोष्ठी खडा गरिएका हुन्थे। लिच्छविकालको जनजीवनमा गोष्ठीप्रथा अभिन्न अङ्ग जस्तै बनेको थियो। लिच्छविकालका गोष्ठी मुख्य गरी दुइ किसिमका देखिएका छन्। एक थरी आफ्नै परिवारको अधीन रहेको, अर्को थरी नियत गुठियारलाई सुम्पेको। पहिलो किसिमको गोष्ठी दाताको सन्तानदरसन्तानले आफ्नो विवेकअनुसार चलाउने किसिमको थियो। यस किसिमको गोष्ठीसंग अरू व्यक्तिको त्यतिको सरोकार रहँदैनथ्यो। दोस्रो किसिमको गोष्ठी दाताको सन्तानको अधीन नरही नियत व्यक्ति र निश्चित व्यवस्थाको अन्तर्गत रहन्थ्यो। यस्ता गोष्ठीको लौकिक जीवनसंग निकै सम्बन्ध रहन्थ्यो।

यहाँ ध्रुवसङ्घले भद्रेश्वर आदि पाँच शिवलिङ्गको कारणपूजाको लागि खडा गरेको गोष्ठी व्यक्तिगत रूपको हो। यहाँ 'स्वजनगोष्ठिकाधीनं कृत्वा' भनी यो गूठी आफ्नै मानिसको अधीनमा रहनेछ भनी स्पष्टसंग लेखिएको छ। यसरी लिच्छविकालको गोष्ठीप्रथाबारे विचार गर्न यो अभिलेख पनि उपयोगी छ। 'गोष्ठी' बारे अरू बढी चर्चा पछि लेलेको अभिलेखको प्रसङ्गमा गरिनेछ।[१]

–★–

१. 'लिच्छविकालका गोष्ठी' बारे 'पूर्णिमा' १३ अङ्कका १–६ पृष्ठमा पनि विचार गरिएको छ।

# हाँडिगाउँ सत्यनारायणस्थानको अभिलेख

हाँडिगाउँको प्रसिद्ध डबली भएको ठाउँबाट पूर्वतिर तल ओर्लेपछि सत्यनारायणको मन्दिर आउँछ। त्यहाँ मन्दिरको सामुन्ने एउटा 'गरुडध्वज' रहेको छ। त्यसैको पूर्व पाटामा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ३ हात १३ अङ्गुल लम्बा १६ अङ्गुल चौडा छ। यहाँ संवत् देखिंदैन। लिपिको दृष्टिले यो अभिलेख मानदेवको लगत्तै पछाडिको अर्थात् वसन्तदेवको ताकाको हो भन्ने देखिन्छ। यसै हुँदा यो अभिलेख यहाँ दिइएको हो।

लेभीद्वारा ४ संख्याको रूपमा यो छापिएको छ। केही पाठ सच्याई 'संस्कृत–सन्देश' २। १–२–३ मा म र ज्ञानमणि नेपालले पनि यो अभिलेख छपाएका छौं। नोलीद्वारा ११ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ... ... ... स यतात्मने
२. ... ... ... धियैष ते नमः
३. ... ... ... त्प्रतिदेहनिर्वृ (तः)
४. ... ... ... विकीर्ण्णभानुना
५. ... ... ... त सर्व्वमात्मनि
६. ... ... ... (श)शिनीव कान्तता
७. ... ... ... मयेन तेजसा
८. ... ... ... सवितेव भासते

९. … … … पथेन सौगताः

१०. … … … (गि)राम्पतिर्भवेः

११. … … … त्रयी त्वया

१२. … … … (धा)र्य्यते

१३. … … … न वारणेन

१४. … … … त्वयावरुग्नम्

१५. … … … मिदमप्रबुद्धच

१६. … … … ताम्ब्रजेयुः

१७. … … (भवा)र्ण्णवं ज … रवि … दा … भश्वत्

१८. … … तयेव संस्थमुद्वीक्ष्य … … मित्थम्

१९. … … करणाङ्तेन नित्यम्पृथुमति … …

२०. … … किमिदमस्ति वाच्यशेषः … प्रकथित … (ध)र्म्मविद्या

२१. (नरैः) परान्नास्तिकताम्प्रपन्नैस्त्रयीविरोधेन निवार्य्यमाणः

२२. (धर्मो) व्य(व)स्थास्यत नाद्य लोके धर्त्ता त्वमस्या यदि (ना)भविष्यः

२३. … वेदं व्यविकीर्ण्णवाक्त्वाऽनादिनिष्ठं(वचसा त्व)या च

२४. … कथं वेद इहाभविष्यत्त्वं भारतादिं यदि ना(तनि)ष्यः

२५. (प्र)माणशुद्धया विदितार्त्थतत्त्वः प्रकम्प्यमाणम … ष्ठैः

२६. …(ध)र्म्ममित्थं जगतो हितैषी न प्रातनिष्यद् यदि…यः

२७. (स्वमौ)र्ख्यमात्राश्रयणादभीक्ष्णं कुतार्क्किकैस्तद्वि(निवार्य्यमा)-णम्

२८. … व्यचैषीन्न पृथक्प्रमाणं कथन्तदस्थातुमिदं … पः

२९. … पि च प्राणवियोगहेतुर्न्न प्रत्यवायो(यदि नान्य)थैषा

३०. … त्वमेव प्रतिवेत्सि सम्यङ्न वेदितान्यो भुवि कश्चि(दस्ति)

३१. … स्तुतिः स्यादनुवादतो वा स्तुत्येषु वाचां द्वितय(म्प्रवृत्तम्)

३२. … (स्तु)तिर्गुणानां विधिना न सत्त्वान्न चानुवादस्त्वयि…

३३. … न धर्म्मं सकलं न्यहिंसीत् त्वन्नैवरागादिरयं न्य(भान्सीः)

३४. (स्वर्ग)षिणीं वैषयिकीञ्च तृष्णां विधूय शुद्धस्त्वम(ति प्रसिद्धः)

३५. (ध)र्म्मार्त्थकामाद्यविविक्तरूपं यदि व्यवारिष्यत (सर्व्वदा)दः

३६. (दूरात्)स्मृतीनामगतेः श्रुतीनां तदद्य लोके नियतं व्य(नश्यत्)

३७. (वि)पाटच्च माहानमृतं व्यसृक्षत् स्वयञ्च धर्म्मादि जगत्यतिष्ठथाः

३८. (त्र)यी त्वयागाज्जगति प्रतिष्ठान्त्वमेव धर्म्मं विविधानतिष्ठिपः

३९. ... वन्दुष्प्रतिपादमेतत्स्वर्गादिशब्दोपनिबन्धमा(त्रम्)

४० ... दस्तीति जनोग्रहीष्यद् भवानिहैवं यदि न व्यनेक्ष्य(त)

४१. (निराकृ)ता कुमतिभिरंहसावृतैः कुतार्किककैः कथमपि सौगतादिभिः

४२. (त्रयी) त्वयि प्रथितगिरि प्रभावियम्पयोनिधौ सरिदिव विन्दति स्थितिम्

४३. ... द् विनियतपदार्त्थाद्यनुगमात्तव श्रुत्वा काव्यं सपदि मनसा गम्यपद–

४४. .. र्त्थत्वादवनपरमार्त्थानुसरणे दधात्युच्चैर्म्मोहं सपदि गतविद्योष्वनि(यतं)

४५. ... शास्त्रे मनुयमबृहस्पत्युशनसां विधानं कृत्यानामसुगमपदं लोक(निभृतम्)

४६. ... नैवं प्रतिविषयमाधूय निपुणम्फलेनैवाशेषन्त्वमिदमम...

४७. ... न्नृपचरितानुवादिभावात्पादादेः प्रतिनियतं स्वतश्च काव्यम्

४८. ... रनुकथनादपीह शास्त्रं त्वं शक्तेरिदमपि भारताद्यकार्षी(:)

४९. . भवजलधौ विवर्त्तमानान् रागादिप्रपतधियः प्रगाढमोहान्

५०. .. स्यास्त्वमिति विधाय मुक्तिमार्ग्गं साचीनाम्भुवि पुरुषाङ्क-रोषि मन्त्रे

५१. सु(खि)ना विविक्तवचसा त्वया सता कृपया परार्त्थविनिवेशि-बुद्धिना

५२. ज(ग)तो हिताय सुकृते ह भारते भुवि वाङ्मयं सकलमेव दर्शितम्

५३. विदितविविधधर्म्मो वेदिता वाङमयानान्निरवधिकममिथ्या शान्त-
रागादिदोषम्
५४. ...स्वपरार्थस्तद् भवान्मोहजालन्तिमिरमिव विवस्वानंशुभिः
प्रक्षिणोति
५५. प्रतिविषयनियोगात्पालकत्वाच्च तासान्निपुणतदवबोधात्तद्विवेका-
ददोषात्
५६. जगति तदुपदेशात्त्वम्मिथस्तद्विभागादुपहित इव मूर्त्तिस्त्वात्मना
मन्त्रवाचाम्
५७. सौक्ष्म्याद् दुर्ब्बोधमीशं स्थितमपि सकलं लोकमावृत्य तन्वा वाग्बु-
द्ध्योरप्यतीता-
५८. (कृति)मपि मुनिभिः स्वागमाद् ध्याततत्त्वम् विद्यारूपं विशुद्धे
पदमनतिशय-
५९. क्षीणसंसारबन्धम् स्यादात्मानन्न जातु त्वमिव कथयिता कश्चिदन्यो
द्वितीयः
६०. प्रत्याधारस्थितत्वात्पृथगपि न पृथक् तत्स्वरूपाविशेषात् नित्यं
धर्म्मैरयोगा-
६१. त्पुनरपि न तथा सर्व्वकालाप्रतीतेः नाशोत्पादाद्ययोगात्स्थितमपि
६२. जगतः सर्व्वगं व्यापिभावात् चैतन्यं रूपपक्षस्थितमपि कथये-
६३. त्को नु लोके त्वदन्यः निरंहसन्दुरितभिदं विवेकिनन्तमोमुषं शमि-
६४. तभवं विपश्चितं गिराम्पतिं सुधियमसङ्गिचेतसं मयोदि-
६५. तं वचनमुपैतु ते सदा शमितभवभयेन क्षायिणाज्ञानराशेः
६६. स्वयमुपहितधाम्ना वेद्यपारङ्गतेन जगदपरजसेदन्तत्त्व-
६७. या सर्व्वमाराद् वियदिव तिमिराणां क्षायकेनावभाति
६८. गुणपुरुषविवेकज्ञानसंभिन्नजन्मा व्यतियुतविषयाणां त्वं
६९. गिरां संविवेकी जगति घनविरूढव्यापिसम्मोहभेदी च्युतजग-
७०. दनिरोधः खे शशीव चकास्सि तदहमिति नुनूषद्भिन्नसंसार
७१. बन्धम् वितमसमरजस्कं त्वाङ्गरीयांसमाद्यम् कथमपि पर

७२. लघ्वीं स्वान्निबध्नामि वाचं तदिह पितरि मे त्वं सम्पदस्सं-
विधत्स्व

७३. भगवतो द्वैपायनस्य स्तोत्रङ् कृतमनुपरमेण

(यस अभिलेखको माथिल्लो केही भाग निकै खण्डित भएको र ठाउँ ठाउँमा अर्थ पनि राम्ररी नचढिसकेको हुनाले यहाँ यसको अनुवाद दिइएको छैन। दर्शनशास्त्रमा राम्रो दखल भएका विद्वान्‌को दृष्टि यस अभिलेखमा पर्नु आवश्यक देखिन्छ।)

**व्याख्या–**

लिच्छविकालका अभिलेखहरूमा यस स्तम्भलेखको बेग्लै महत्त्व छ। ७३ पङ्क्ति भएको यो लामो अभिलेख राजवंशको वर्णन वा अरू राजनैतिक घटनालाई लिई लेखिएको होइन। महर्षि द्वैपायनको स्तुतिको रूपमा यो अभिलेख लेखिएको छ। प्रौढ लेखनशैली, दार्शनिक विचारधारा आदिको दृष्टिले यो अभिलेख उच्चकोटिको मानिएको छ। विशेष गरेर द्वैपायनको स्तुतिको रूपमा वैदिक परम्पराको जोडदार समर्थन यसमा गरिएको छ। यस अभिलेखमा प्रतिपादित विषय बुझ्न पहिले यो अभिलेख कसले राख्न लाएको हो तथा कुन अवस्थामा के उद्देश्यले राख्न लाएको हो भन्ने कुरा अलि बुझ्नुपरेको छ।

यस अभिलेखको अन्त्यमा 'भगवतो द्वैपायनस्य स्तोत्रङ्कृतमनुपरमेण' भनी लेखिएको छ। यसबाट द्वैपायनको स्तुति भएको यो अभिलेखको रचना 'अनुपरम' ले गरेका हुन् भन्ने थाहा पाइन्छ। तर यहाँ 'अनुपरम' को थर, गोत्र, समय आदि केही उल्लेख नभएको हुनाले यी 'अनुपरम' को हुन् भन्ने प्रश्न उठ्छ। यस प्रश्नको उत्तर हामी पशुपतिको आभीरीको अभिलेखबाट पाउँछौं। यस कारण सो अभिलेखमा हामीले अलि दृष्टि दिनुपरेको छ। भौमगुप्तकी आमा आभीरीको उक्त अभिलेखमा संवत् ४६२ दिइएको छ। आफ्ना स्वर्गवासी पतिको नाउँमा आभीरी गोमिनीले शिवलिङ्ग स्थापना गरेको कुरा त्यसमा परेको छ। पत्नीले पतिको नाउँ लिनुहुँदैन भन्ने लोकाचार-अनुसार आभीरीले आफ्नो पतिको नामोल्लेख गरेकी छैनन् तापनि आफ्ना पतिको नाउँमा 'अनुपरमेश्वर' स्थापना गरेको कुरा स्पष्टसंग लेखाएकी हुनाले आभीरीका पतिको नाउँ 'अनुपरम' हो भन्ने स्पष्ट थाहा पाइन्छ। यताबाट लिच्छविकालका एक प्रसिद्ध सहायक शासक भौमगुप्तका पिता अनुपरम हुन्; संवत् ४६२ तिर उनको मृत्यु भएको थियो भन्ने देखिएको छ।

यस अभिलेखको लिपि, यस अभिलेखमा प्रतिपादित विषय, तात्कालिक अवस्था इत्यादिको विचार गरी हेर्दा पनि उपर्युक्त कुराको पुष्टि हुन्छ। वसन्तदेवको समयमा गुप्त आभीरहरू शक्तिशाली भई निस्के; यी गुप्त आभीरहरू यज्ञयागादि वैदिक कर्मकाण्डका पक्षपाती थिए; यसो हुनाले त्यस वेला यज्ञयागादि वैदिक कर्मकाण्डले प्रोत्साहन पाउन थाल्यो; त्यस वेला विरोचनगुप्त जस्ता

ठूला अधिकारीसमेत 'याज्ञिक' बनेका थिए भन्ने कुराको चर्चा पहिले गरिसकेको छ। अनुपरम पनि गुप्त आभीर हुन्। वैदिक पद्धतिमा उनको बढी आस्था थियो। यसै हुँदा हाम्रा अनुपरमले वेदव्यास द्वैपायनको स्तुतिको रूपमा 'प्रस्थानत्रयी' मा आदर प्रकट गर्न यो स्तम्भलेख राख्न लाएको देखिन्छ ।

महर्षि द्वैपायनले वेदहरूको वर्गीकरण गरेका थिए; यसै हुँदा उनको नाम 'वेदव्यास' रहेको हो भन्ने प्रचलित छ। विशाल ग्रन्थ महाभारतको रचना द्वैपायनले नै गरेका थिए भन्ने प्रसिद्ध छ। साथै प्रसिद्ध दर्शनग्रन्थ 'वेदान्तसूत्र' (ब्रह्मसूत्र) पनि द्वैपायन (वादरायण)ले नै बनाएका हुन् भन्ने धारणा प्रचलित छ। यस कारण वैदिक परम्परामा आस्था राख्नेहरूको लेखा महर्षि द्वैपायन अत्यन्त पूजनीय व्यक्ति हुनु स्वाभाविक छ। यसैले वेदको वर्गीकरण, महाभारत, वेदान्तसूत्रको रचना आदि गरी वैदिक परम्पराको उद्धार गरेकोमा कृतज्ञता प्रकट गर्न भव्य स्तुतिसहितको गरुडध्वज खडा गरिएको हो। यसबाट लिच्छविकालमा वेदाध्ययन, महाभारतको पठन, दर्शन-शास्त्रको चिन्तन, मनन हुन्थे भन्ने कुरा स्पष्ट देखिएको छ ।

लिच्छविकालमा सार्वजनिक रूपमा जनतालाई शिक्षा दिने चलन थिएन। यसो हुनाले प्रसिद्ध चीनीया यात्री युआनच्वाङ्गले नेपालका जनता अशिक्षित छन् भनी लेखेका छन्। साथै शासकवर्ग चाहिं विद्वान् छन् भनेर पनि उनले लेखेका छन्। लिच्छविकालका अभिलेखबाट पनि त्यस वेला शासकवर्ग शिक्षित थिए; पण्डितवर्ग विविध विषयको अध्ययन गर्थे भन्ने देखिएको छ। शासकवर्गभित्र पर्ने अनुपरमको पाण्डित्यपूर्ण यो स्तम्भलेखले पनि उक्त कुरा देखाएको छ ।

दर्शनशास्त्रमा मेरो दखल छैन। यस कारण प्रामाणिक रूपमा तुलना गर्न म सक्तिनं। तर हाम्रा अनुपरमलाई 'वेदान्तदर्शन'ले अत्यन्त प्रभाव पारेको थियो भन्ने कुरा सामान्य ज्ञानकै भरमा पनि भन्न सकिन्छ। वेदान्तसूत्रमा प्रतिपादित आत्मा, चैतन्य आदि विषयलाई पद्यमा सुन्दर ढङ्गले उतार्न उनी सफल पनि भएका छन्। शाङ्करभाष्यको रचना भई 'वेदान्तसूत्र' को प्रसिद्धि फैलिनुभन्दा अघि नै नेपालमा 'वेदान्तसूत्र'को अध्ययन राम्ररी हुन्थ्यो भन्ने कुरा अनुपरमको यस द्वैपायनस्तोत्रले सिद्ध गरेको छ ।

वेदान्तसूत्रमा विपक्षीहरूको मतको खण्डन पनि परेको छ। वेदको प्रामणिकतालाई नमान्नु; यज्ञयागादि कर्मकाण्डको विरोध गर्नु; आत्मा नै छैन भनी प्रचार गर्नु आदि कारणले गर्दा बौद्ध दर्शन विपक्षी मतमा पर्दथ्यो। फेरि लिच्छविकालमा नेपालमा बौद्ध धर्मको प्रभाव र प्रचार बढी नै थियो। यसो हुनाले वैदिक परम्पराका भक्त अनुपरमले यस स्तम्भलेखमा नास्तिक, कुतार्किक, मूर्ख, कुमति आदि शब्दको प्रयोग गरी बौद्धहरूको निन्दा गरेका छन्। उदार धार्मिक भावनाले प्रश्रय पाएको नेपालमा अनुपरमको यस कार्यको समर्थन गर्न सकिंदैन। किनभने यसले गर्दा एक धार्मिक सम्प्रदायले अर्को धार्मिक सम्प्रदायको निन्दा गर्ने नराम्रो भावना पैदा भएको थियो। तर अनुपरमले किन बौद्धहरूको निन्दा गरे भन्ने कुराचाहिं हामीलाई थाहा छ। फेरि शास्त्रार्थको

रूपमा खण्डन मण्डन गर्ने परम्पराको रूपमा मात्र यो भावना सीमित थियो। जनतासम्म धार्मिक कलहले स्थान पाएको उदाहरण हाम्रो यहाँ पाइंदैन। जे होस्, धार्मिक दृष्टिले उदार रहेको नेपालमा परस्परमा निन्दा गर्ने भावना अभीष्ट कुरो थिएन। यसो हुनाले पछि आभीर गुप्तहरूलाई पन्छाई अधिकार आफ्नो हातमा लिन सफल भएपछि अंशुवर्माले नेपालमा प्रचलित सबै धर्मलाई समान रूपले कदर गरी उपर्युक्त भावनालाई हटाएका थिए। यो कुरा अंशुवर्माको हाँडिगाउँको अभिलेखबाट थाहा पाइन्छ।

द्वैपायनको स्तुति लेखिराखिएको यो स्तम्भ गरुडध्वजरूपको छ। 'गरुडध्वज' त नारायणलाई मात्र चढाउने चलन थियो। यस कारण द्वैपायनसंग 'गरुड' को के सम्बन्ध भन्ने प्रश्न यहाँ उठ्छ। तर यसमा त्यस बेलाको भावना लुकेको छ। महर्षि द्वैपायनलाई उनका भक्तहरूले पछि 'नारायण'को रूपमा देख्न थालेका थिए। यस कुराको संज्ञना शाङ्करभाष्यको यो पङ्क्तिले दिलाउँछ–

'तथाह्यपान्तरतमा नाम वेदाचार्यः पुराणर्षिर्विष्णुनियोगात्कलिद्वापरयोः सन्धौ कृष्णद्वैपायनः संबभूवेति स्मरन्ति।' ३।३।३२

यही भावनाले लिच्छविकालमा पनि असर पारेको कुरा हाँडिगाउँको यो गरुडध्वजले देखाएको छ। द्वैपायनको मात्र होइन; उनका प्रसिद्ध चेला महर्षि वैशम्पायनको पनि पूजा लिच्छविकालका याज्ञिकहरूले गर्न थालेका थिए भन्ने कुरा माथि गएको पाटन खपिंछेंको अभिलेखले देखाएको छ। ज्ञानको दियो बाल्ने ऋषि–मुनिहरूको पूजा देवतासरह गरिनु शिक्षाको दृष्टिले विशेष महत्त्वपूर्ण छ।

—~—

# बूढानीलकण्ठनिरको मनुदेवको पालाको अभिलेख

बूढानीलकण्ठ नारायणस्थानभन्दा अलिकता उत्तरतिर गैह्रीगाउँ भन्ने ठाउँ छ। त्यहाँ खेतमा रहेको ठूलो जलहरीमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग २हात ८ अङ्गुल लम्बा १० अङ्गुल चौडा छ। तर कसैले छिनोले अभिलेखको धेरैजसो भागमा प्वाल प्वाल पारिदिएको हुनाले अहिले अभिलेख पढ्न ज्यादै गाह्रो भएको छ। यसो हुनाले अहिले पढ्न सकिएको केही भाग मात्र यहाँ दिदैछु। यसमा संवत् स्पष्ट देखिदैन।

यस अभिलेखको एक अंश 'पूर्णिमा' १६ अङ्कमा संशोधनमण्डलद्वारा छापिएको छ।

## मूलपाठ

१. … … … …
… … भट्टारकमहाराजश्रीमनुदेवे राज्यम्प्रशासति
२. … … … …
… विधिवत्तदस्याश्च कारणपूजाबलिभोजननिमित्तन्ते
३. … … … …
…राज्ये विशुद्धमनुजे मनुदेवनाम्नः पादप्रबुद्धकमलद्वितयप्रसादात्
४. … … … संस्थापितात्र विधि-
वत्प्रतिमा विचित्रा शम्भोर्गुणाधिकतया क्षि-- आहरन्तो २
भास्वद्विचित्रमणिरत्नविभूषणाढ्या … …

५. ... ... ... ... ...

६. ... ... ... ... ...

... ... नाल्पोपि वित्तविभवे मनसापि चार्य्यः

# अनुवाद

.......भट्टारक महाराज श्रीमनुदेवले राज्य गरिरहनुभएको वेलामा.......यिनको विधिपूर्वक कारणपूजा बलि भोजनको लागि.......असल प्रजा भएको मनुदेवको राज्यमा उहाँका चरणकमलको निगाहले.....यहाँ बढ्ता गुण भएका हुनाले........ल्याउने, चह्किला अनौठा असल मणिरत्नले सिंगारिएको महादेवको विचित्र प्रतिमा विधिपूर्वक स्थापना गरियो।.............धनसम्पत्ति प्रशस्त भए पनि असल मन भएका.......

## व्याख्या–

यस अभिलेखको धेरैजसो भाग पढ्न सकिएको छैन। यसो हुनाले यस अभिलेखमा परेको कुरा अलि अस्पष्ट छ। तर यस अभिलेखको गद्यभाग र पद्यभागमा गरी दुइ ठाउँमा राजा मनुदेवको उल्लेख आएको छ। यसबाट यो अभिलेख राखेको वेला गद्दीमा लिच्छवि राजा मनुदेव थिए भन्ने थाहा पाइन्छ। अहिलेसम्म योबाहेक अरू अभिलेखमा मनुदेवको उल्लेख पाइएको छैन। यस अभिलेखमा संवत् देखिंदैन। त्यस कारण यी मनुदेव कहिले भए; लिच्छवि राजाहरूको क्रममा यिनलाई कहाँनिर राख्ने भन्ने प्रश्न उठ्तछ। लिच्छविवंशबारे सबभन्दा बढी प्रकाश पार्ने पशुपतिको जयदेवको अभिलेखबाट पनि यसबारे कुनै प्रकाश पर्दैन। किनभने वसन्तदेवभन्दा पछिका नरेन्द्रदेवभन्दा अघिका लिच्छवि राजाहरूको वर्णन त्यहाँ गरिएको छैन। यसो हुनाले मनुदेव कहिले भए भनी निश्चित रूपमा भन्न सकिंदैन। तर हाम्रो यहाँ प्रचलित विभिन्न संक्षिप्त वंशावली-बाट यस विषयमा बुझ्न केही मदत पाइन्छ। ती वंशावलीमा वसन्तदेवपछि हुने मनोदेव भन्ने राजाको उल्लेख परेको छ। विचारार्थ भक्तपुरका राजा जितामित्रमल्लले रचेको वंशावलीको एक अंश यहाँ उद्धृत गरिन्छ–

> महीप वृषदेव शङ्करदेव धर्मदेव मानदेव महीदेव ।
> वसन्त उदय मनोदेव.........”

अरू संक्षिप्त वंशावलीमा पनि वसन्तदेवपछि उदयदेव र मनोदेवको उल्लेख परेको छ। यसबाट यस अभिलेखमा उल्लिखित मनुदेव यिनै हुन् कि भन्ने देखिन आएको छ। यस अभिलेखको लिपिले पनि यस कुराको पुष्टि गरेको छ। यस कारण यो अभिलेख यहाँनिर राखिएको हो।

राजा मनुदेवको पालामा कुनै धनी व्यक्तिले महादेवको भव्य प्रतिमा (शिवलिङ्ग) स्थापना गरेको कुरा यस अभिलेखमा परेको छ। अहिले जलहरी मात्र बाँकी छ; शिवलिङ्ग नष्ट भइसकेको छ। सो शिवलिङ्गको कारणपूजा (नैमित्तिक पूजा) आदिको लागि जग्गा गूठी पनि राखिएको देखिन्छ। यो शिवलिङ्ग स्थापना गर्ने व्यक्तिको नाउँ थाहा पाइएको छैन। 'नाल्पोपि वित्तविभवे मनसापि चार्य्यः' भन्ने वर्णन यहाँ परेको हुनाले ती कुनै धनी व्यक्ति थिए भन्ने थाहा पाइन्छ।

बर्खायाममा पानी नपरेको बेलामा पाटनभेकका मानिस गाजाबाजाका साथ पानी माग्न यहाँ आउने चलन छ भन्ने सुनिन्छ। यसबाट यो शिवलिङ्ग पाटनभेकका व्यक्तिले स्थापना गरेको अनुमान हुन्छ।

अहिले ज्यादै थोरै भाग मात्र पढ्न सकिएको छ तापनि लिच्छविकालका एक जना गद्दीनशीन राजाको अस्तित्वबारे प्रकाश पार्ने एक मात्र अभिलेख हुनाले यसको पनि निकै उपयोगिता रहेको छ।

-★-

# साँखु दुगाहिटीको वामनदेवको अभिलेख

साँखु शहरको बीचमा भने जस्तै दुगाहिटीटोल पर्दछ। त्यहाँ सडकको पूर्वपट्टि एउटा दुगाहिटी (गैह्लीधारा) छ। सो धाराको ईशान कुनामा केही देवताका भग्नावशेषहरू छन्। तिनमध्ये छेउको देवताको पादपीठमा यो अभिलेख कुँदिएको छ। यसको छेउको अलिकता भाग खण्डित छ। यसको अभिलेख कुँदिएको भाग २२ अङ्गुल लम्बा, ५ अङ्गुल चौडा छ। यहाँ संवत् ४६० छ।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति संवत् ४६० ज्येष्ठशुक्लदिवअष्टम्याम् भट्टारक-महाराजश्रीवामनदेवस्य[साग्रं वर्षशतं]

२. समाज्ञापयतः भगवतो वामनस्वामिनः क्षेत्रं लेंदुप्रदेशे भूमि १०० पिण्डक मा ५०...

३. सुब्रंकोप्रदेशे भूमि ४० पिण्डक मा २६ शटम्मि भूमि १० पिण्डक मा ४...

४. गम्मे भूमि १० पिण्डक मा ४ *मिङ्को भू ६० पि मा ५० भूमि ५ पि मा ३*[१]

---

१. यहां इटालिक टाइपमा छापिएको यो भाग नाम मात्रको लिच्छविलिपिमा कसैले पछि थपि-दिएको हो।

# अनुवाद्

कल्याण होस् । संवत् ४६० ज्येष्ठ शुक्ल अष्टमीको दिन भट्टारक महाराज श्रीवामनदेवले शयभन्दा बढी (लामो काल) सम्म शासन गरिरहनुभएको वेलामा भगवान् वामनस्वामीको निमित्त खेत (गूठी राखियो) ।

लेन्दु भन्ने ठाउँमा ५० मानिका कुत आउने १०० भूमि, सुब्रंको भन्ने ठाउँमा २६ मानिका कुत आउने ४० भूमि । शट्टम्मि भन्ने ठाउँमा ४ मानिका कुत आउने १० भूमि । गम्मे भन्ने ठाउँमा ४ मानिका कुत आउने १० भूमि । मिङ्को भन्ने ठाउँमा ५० मानिका कुत आउने ६० भूमि, ३ मानिका कुत आउने ५ भूमि ।

## व्याख्या–

यस अभिलेखमा संवत् ४६० स्पष्ट छ; 'भट्टारकमहाराजश्रीवामनदेवस्य' भन्ने भाग पनि स्पष्ट छ। यस कारण संवत् ४६० मा राजगद्दीमा लिच्छवि राजा वामनदेव थिए भन्ने यताबाट निश्चित हुन्छ। यी वामनदेव कसका छोरा हुन्; मनुदेवसंग यिनको के नाता पर्दथ्यो इत्यादि कुरा थाहा पाउन सकिएको छैन। पशुपतिको जयदेवको अभिलेखमा यस ताकाका राजाहरूको बारेमा केही लेखिएको छैन। वंशावलीहरूमा पनि वामनदेवको उल्लेख आएको छैन । तर संवत् तिथि मितिसहितको स्पष्ट अभिलेख पाइएको हुनाले यस ताका गद्दीमा राजा वामनदेव थिए भन्ने कुरा प्रमाणित भएको छ।

वामनदेवको शासनकाल कति रह्यो; यो पनि पत्ता लाग्न सकेको छैन। यसको लगत्तै दुइ वर्षपछिको पशुपतिको आभीरको अभिलेखमा गद्दीनशीन राजाको उल्लेखसम्म पनि गरिएको छैन। यसरी गद्दीनशीन राजाप्रति अनास्था दर्शाइएको छ । यसबाट त्यस वेलाका गद्दीनशीन राजा नाममात्रका थिए भन्ने झल्किन्छ। त्यस वेला यिनै वामनदेव राजा थिए वा अर्कै राजा फेरिइसके केही भन्न सकिंदैन ।

यस अभिलेखमा 'भट्टारकमहाराजश्रीवामनदेवस्य (साग्रं वर्षशतं) समाज्ञापयतः' भन्ने बेहोरा परेको हुनाले यो अभिलेख कुनै दुनियाँदारले राखेको देखिन्छ। तर तिनको नामोल्लेख भने यसमा गरिएको छैन।

भगवान् 'वामनस्वामी' को पूजाआजाको लागि जग्गा गूठी राखिदिएको कुरा यसमा परेको छ। यसबाट वामनावतार विष्णुको मूर्ति साँखु दुगाहिटीभेकमा थियो भन्ने थाहा पाइन्छ । तर अहिले वामनावतार विष्णुको मूर्ति त्यहाँ छैन । वामनावतार, वराहावतार आदि विष्णुका विभिन्न अवतारसम्बन्धी मूर्तिहरूको उल्लेख लिच्छविकालका अभिलेखमा अन्त पनि आएको छ । लिच्छविकालमा वैष्णवसम्प्रदायबारे विचार गर्न यताबाट मदत पाइन्छ ।

# पशुपतिको आभीरी गोमिनीको अभिलेख

पशुपतिनाथको मन्दिरदेखि दक्षिणपट्टि चौसट्ठीलिङ्गदेखि अलि तललिर वत्सलाको मन्दिरदेखि पश्चिमपट्टि एउटा शिवलिङ्ग रहेको छ। त्यसको पादपीठको पश्चिम भागमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ४२ अङ्गुल लम्बा, ७ अङ्गुल चौडा छ। यहाँ संवत् ४६२ दिइएको छ।

'संस्कृत–सन्देश' २।१–२–३ मा रामजी तेवारी, देवीप्रसाद भण्डारी, शङ्करमान राजवंशीद्वारा यो छापिएको छ। नोलीद्वारा १६ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ॐ आभीरी ख्यातगुणा भार्य्या परमाभिमानिनः सूनोः ।
पुण्यविवृद्ध्यै भर्त्तुर्देवत्वमितः प्रयातस्य ।
पुण्येहनि धननिचयैर्द्विजजनमभिपूज्य दानमानाभ्याम् ।
२. पुत्रेणानुज्ञाता चकार संस्थापनम्शम्भोः ॥
दत्वा चाक्षयनीवीं वप्रपरिच्छदविभूषादीन् ।
अनुपरमेश्वरसंज्ञाञ्च शम्भोर्भुवनमहितस्यास्य ॥
३. भगवते देवदेवायास्मै स्वयम्प्रतिष्ठापितायानुपरमेश्वरसंज्ञितायाभ्य-
ङ्गस्नपनार्च्चनगन्धधूपबलिनिवेदनादिप्रवर्त्तनार्थं खण्डफुट्टप्रतिसं-
४. स्कारार्थञ्च पतिदेवप्राणाभीरीगोमिन्या[१] पतये त्रिदिवस्थाय पुण्या-

नोलीको पाठ–१. पतिदेवपुण्याभीरीभगिन्यापतये

ध्यायनार्थमायुष्मताञ्चापत्यानाम्भौमगुप्तादीनाम्भोगारोग्यायुरानन्त्यावाप्तये

५. वेस्पाग्रामे[१] स्वयपुपारोपितनदीक्षेत्रखण्डद्वयं दत्तमिति । संवत् ४६२ ज्येष्ठमासे तिथौ द्वितीयायाम्

# अनुवाद

परमाभिमानीका छोराकी पत्नी आभीरीले यहाँबाट देवता हुन पुगेका (स्वर्ग) भएका पतिको पुण्य बढोस् भन्नाका निमित्त छोराको अनुमति लिई असल दिनमा धनको थुप्रोले, दानले, मानले ब्राह्मणहरूलाई पूजा गरेर महादेव स्थापना गरिन्; सो महादेवको निमित्त कहिल्यै नाश नहुने मूलधन तथा खेत, सामान, गहनाहरू चढाइन्; संसारले पूजिएका यी महादेवको 'अनुपरमेश्वर' भन्ने नामकरण पनि गरिन् ।

देवताका पनि देवता भएका, आफैंले स्थापना गरिएका अनुपरमेश्वर नाम भएका भगवान् यी महादेवलाई तेल घस्नु, नुहाउनु, पूजा गर्नु, चन्दन नैवेद्य चढाउनु आदि काम चलाउनाका निमित्त र टुटेफुटेका ठाउँमा संस्कार (मरम्मत) गर्नाका निमित्त पतिदेवलाई प्राण सम्झने आभीरी गोमिनीले स्वर्गवासी पतिको पुण्यको बढिबढाउ होस् भन्नानिमित्त तथा चिरञ्जीवी नानी भौमगुप्त आदि सन्तानहरूको सुखभोग आरोग्य आयु धेरै होस् भनी वेम्पा प्रदेशमा स्वयपुपारोपित नदीको खेत दुइ गूठी राखिन् ।

संवत् ४६२ ज्येष्ठ महीना द्वितीयामा ।

## व्याख्या–

संवत् ४६२ मा आभीरी गोमिनीले राख्न लाएको यस अभिलेखबाट तात्कालिक केही कुरा बुझ्न मदत पाइन्छ । यहाँ आभीरी गोमिनीले आफ्ना स्वर्गवासी पतिको नाउँमा शिवलिङ्ग स्थापना गरेको कुरा परेको छ । आभीरीले आफ्ना पतिका पिता (ससुरा) को नामोल्लेख यहाँ गराएकी छन्; आफ्ना छोरा भौमगुप्तको उल्लेख पनि गराएकी छन् । तर पतिको नामोल्लेख भन्ने यहाँ गरिएको छैन । पत्नीले पतिको नाम लिनु हुँदैन भन्ने लोकाचार प्रचलित थियो । यसै हुँदा पत्नीको मुखबाट पतिलाई 'आर्यपुत्र' मात्र भन्ने लाएको उदाहरण संस्कृतवाङ्मयमा धेरै पाइन्छ । यही लोकाचारअनुसार यहाँ पनि आभीरीको तर्फबाट पतिलाई 'परमाभिमानिनः सूनुः' मात्र भन्न लाएको हो । परन्तु स्वर्गवासी पतिको नाउँमा स्थापना गरिएको महादेवलाई 'अनुपरमेश्वर' संज्ञा यहाँ दिइएको छ । यसबाट आभीरी गोमिनीका पति 'अनुपरम' हुन् भन्ने थाहा पाइन्छ । किनभने जसको पुण्य बढोस् भनी शिवलिङ्ग स्थापना गरिन्छ; तिनैको नाउँबाट

१. टिम्पाग्रामे. . . पुष्करोपेत

सो शिवलिङ्गको नामकरण गर्ने चलन थियो । मानदेवले स्थापना गरेको शिवलिङ्ग 'मानेश्वर' रत्नसङ्घले आफ्नो लागि स्थापना गरेको शिवलिङ्ग 'रत्नेश्वर' रत्नसङ्घले नै प्रभुसङ्घको नाउँमा स्थापना गरिदिएको शिवलिङ्ग 'प्रभुकेश्वर' जयलम्भले स्थापना गरेको शिवलिङ्ग 'जयेश्वर' भोगदेवीले आफू र आफ्ना पति शूरसेनको पुण्य बढोस् भनी स्थापना गरेको शिवलिङ्ग 'शूरभोगेश्वर' कहलाएका थिए । यसै गरी आभीरीले आफ्ना पति अनुपरमको पुण्य बढोस् भनी स्थापना गरेको शिवलिङ्गको संज्ञा 'अनुपरमेश्वर' राखिएको हो। यस अभिलेखमा 'शम्भोः. . . . . अनुपरमेश्वर–संज्ञाञ्च चकार' भनी यो कुरा स्पष्ट पनि पारिएको छ । यस कारण आभीरी गोमिनीका पति 'अनुपरम' हुन् भन्ने कुरामा सन्देह गर्ने ठाउँ छैन। अर्को कुरा यसताका 'अनुपरम' नामक प्रसिद्ध व्यक्ति थिए भन्ने कुरा हाँडिगाउँको स्तम्भलेखबाट पनि थाहा पाइन्छ। सो स्तम्भलेखको पाण्डित्य-पूर्ण द्वैपायनस्तोत्र अनुपरमले नै बनाएका थिए। 'भगवतो द्वैपायनस्य स्तोत्रङ्कृतमनुपरमेण' भनी त्यसमा लेखिएको छ। यस कुराको चर्चा माथि पनि गरिसकेको छ ।

## लिच्छविकालका केही जाति–

'चार वर्ण अठाह्र जात' को रूपमा लिच्छविकालको समाज बाँडिएको थियो । तिनमा केही मुख्य जातिको नामोल्लेख शिलालेखहरूमा आएको छ। तिनको संक्षिप्त चर्चा यहाँ गर्नुपरेको छ।

*किरात*–कयौं शताब्दीसम्म नेपालमा किरातहरूले शासन चलाएको र नेपाल–उपत्यका र आसपासमा किरातकालमै प्रशस्त बस्तीहरू पनि बसिसकेका हुनाले लिच्छविकालमा पनि यहाँ किरातहरू थिए भन्ने कुरामा शङ्का छैन । हनूमान्ढोकानिरको एउटा शिलालेखमा 'किरात'को उल्लेख आएको पनि छ ।

*लिच्छवि*–लिच्छविहरूले यहाँ कयौं शताब्दीसम्म राज्य नै गरेका हुनाले निकै संख्यामा लिच्छविहरू यहाँ थिए भन्ने स्पष्ट छ। यस कारण यस विषयमा बढ्ता चर्चा गर्नु आवश्यक छैन ।

*वृजिक*–वृजि जनपदका वासिन्दा 'वृजिक' कहलाएका थिए । देउपाटनको नरेन्द्रदेवको अभिलेखमा वृजिकहरूको बस्ती 'वृजिकरथ्या' को उल्लेख आएको छ । यसबाट वृजिकहरूको पनि बसोबास यहाँ थियो भन्ने थाहा पाइन्छ ।

*मल्ल*–पश्चिमपट्टि गण्डकीपारि 'मल्लपुरी' नामक सामन्तराज्यको उल्लेख मानदेवको चाँगुको स्तम्भलेखमा परेको छ। मल्लहरूको विशेष वस्ती रहेको हुनाले नै सो प्रदेश 'मल्लपुरी' कहलाएको हो भन्ने देखिन्छ । गोरखपुर कुशीनारातिर पहिले मल्लहरूको प्रसिद्ध गणराज्य थियो । त्यतैका मल्लहरू नेपालको पश्चिम पहाडीभेकमा पसी बसोबास गरेको देखिन्छ। जे होस्; लिच्छविकालमा नेपालमा मल्लहरू थिए भन्ने कुरामा शङ्का छैन ।

*शाक्य*–बुद्धको अन्तिम समयतिर कपिलवास्तुका शाक्यहरू निकै मात्रामा नेपालउपत्यकामा पसेका थिए भन्ने वर्णन 'मूलसर्वास्तिवादविनय' मा परेको छ। टेबहाल र चाबहिलका अभिलेखमा

शाक्यवंशी भिक्षु प्रियपाल र बन्धुभद्रको उल्लेख आएको छ। यसबाट लिच्छविकालमा यहाँ शाक्यहरू पनि थिए भन्ने देखिएको छ।

*कोली*–लिच्छवि, वृजिक, शाक्य जस्तै कोलीहरू पनि त्यस बेलाका प्रसिद्ध जातिमा पर्दथे। कपिलवास्तुको पूर्वपट्टि कोलीहरूको राज्य थियो। यी कोलीहरू पनि निकै संख्यामा नेपाल–उपत्यकामा आई बसेको देखिएको छ। कान्तिपुरभेकको प्रदेश लिच्छविकालमा र पछिसम्म पनि 'कोलीग्राम' नामले प्रसिद्ध थियो। कोलीग्रामको दक्षिण भाग 'दक्षिणकोलीग्राम' अझ बढ्ता आबाद थियो। कोलीहरूको बस्ती यहाँ भएको हुनाले नै 'कोलीग्राम' नाम रहन गएको देखिन्छ।

*आभीर गुप्त*–वसन्तदेवको पालादेखि नरेन्द्रदेवको उदय नहोउन्जेल लिच्छविकालको इतिहासमा गुप्तहरूको ठूलो स्थान रहेको थियो। रविगुप्त, भौमगुप्त, जिष्णुगुप्त, विष्णुगुप्तहरू शक्तिशाली शासक बन्न पुगेका थिए। यीबाहेक विरोचनगुप्त, अनुपरम, भवगुप्त शुभगुप्त, प्रसादगुप्त, कल्याणगुप्त आदि अनेक गुप्तहरूको उल्लेख शिलालेखमा आएको छ। यिनीहरूमा धेरैजसा ठूलठूला सरकारी पदमा थिए। यी गुप्तहरू को हुन् भन्ने प्रश्नको उत्तर पशुपतिको आभीरी गोमिनीको यस अभिलेखबाट पाइएको छ। यी गुप्तहरू आभीर रहेछन्। यहाँ भौमगुप्तकी आमाको नाम 'आभीरी गोमिनी' रहेको हुनाले यो कुरा पत्ता लागेको छ। उनी आभीरवंशकी नभएकी भए 'आभीरी' नामकरण हुनु सम्भव थिएन। आभीरहरू 'गोमी' पनि कहलाएका थिए। यसै हुँदा भौमगुप्तकी आमा 'गोमिनी' पनि कहलाएकी हुन्। भौमगुप्तहरू पनि 'गोमी' हुन्। भौमगुप्तका जेठा बाबु 'मानगुप्त' लाई केवलपुरको अभिलेखमा 'गोमी' भनेर स्पष्ट लेखिएको पनि छ।

यसरी लिच्छविकालका प्रसिद्ध जातिको पङ्क्तिमा 'आभीर गुप्तहरू' पनि पर्न आएका छन्। पशुपतिको यो अभिलेख र अरू केही अभिलेखको आधारमा अब यी गुप्त आभीर शासकहरूको वंशक्रम केही जोडिएको छ। सो यस प्रकारको छ–



## समाजमा स्त्रीको स्थान–

लिच्छविकालको समाजमा केही अंशमा स्त्रीस्वतन्त्रता थियो । तर आजकालको जस्तो स्त्रीस्वतन्त्रताको भावना भने त्यस वेला उठेकै थिएन । त्यस वेलाको समाजको उच्च र मध्यम वर्गलाई प्रभावित पार्ने विचारधारा नीतिशास्त्र, धर्मशास्त्र, पुराण आदिको आधारमा कायम रहेको थियो । यस कारण उच्च र मध्यमवर्गमा पतिको अनुसरण गर्नु पत्नीको जीवनको आदर्श रहेको देखिन्छ । यसै हुनाले पतिउपर ठूलो आदर प्रकट गरिएको पाइन्छ । यस अभिलेखमा आभीरीले आफूलाई 'पतिदेवप्राण' भनी लेखाएकी छन् । पुरुषतर्फबाट पनि पत्नीको आदर अर्धाङ्गिनीको रूपमा गरिएको देखिन्छ । राजा मानदेवले आफ्नो टकमा एकातिर 'श्रीमानाङ्क' र अर्कोतिर 'श्रीभोगिनी' कुँदाएर बडामहारानी भोगिनीलाई आफूसरह स्थान दिएका छन् ।

लिच्छविकालमा उच्च र मध्यवर्गमा सतीप्रथा प्रचलित थियो । तर सती जानु अनिवार्य थिएन । सती जाने अथवा सतीव्रतमा रहने दुइ मार्गमध्ये एक रोज्न पाउने वचन नारदस्मृति आदिमा परेको हुनाले भौमगुप्तकी आमा आभीरी सती नगई सतीव्रतमा रहेको देखिन्छ । मानदेवकी आमा राज्यवती पनि सती नगई सतीव्रतमा रहेको चर्चा माथि परिसकेको छ । यसरी सतीव्रतमा रहेपछि स्त्रीस्वतन्त्रतामा भने निकै बन्धेज लाग्दथ्यो । जुनसुकै कार्य चाहे धर्म कर्मै किन नहोस्; गर्नुपरे पनि आफ्ना मान्यजन अथवा छोराको अनुमति लिई मात्र गर्नू भन्ने वचन धर्मशास्त्रमा पाइन्छ । यसै हुँदा यहाँ–

> पुण्येहनि धननिचयैर्द्विजजनमभिपूज्य दानमानाभ्याम् ।
> पुत्रेणानुज्ञाता चकार संस्थापनम्शम्भोः ॥'

भनी अनुपरमेश्वर स्थापना गर्दा पनि आभीरीले छोरा भौमगुप्तको अनुमति लिएको कुरा उल्लेख गरिएको हो ।

यस अभिलेखबाट यस वेला भौमगुप्त समर्थ भइसकेको देखिन्छ । 'आयुष्मताञ्चापत्यानाम्भौमगुप्तादीनाम्' भन्ने उल्लेख यहाँ परेको हुनाले भौमगुप्तका भाइहरू पनि थिए भन्ने बुझिन्छ । यस वेला राजकाजमा भौमगुप्तको स्थान रहेको थियो वा थिएन; यो कुराचाहिं यस अभिलेखबाट केही खुल्दैन ।

यसरी यो अभिलेखले लिच्छविकालको इतिहासमा केही प्रकाश पारेको छ ।

–★–

# मृगस्थलीको जाने बाटोको रामदेवको पालाको अभिलेख

पशुपति आर्यघाटबाट मृगस्थली जाने बाटोमा पुलदेखि अलि माथि बाटोको दक्षिणतिर यो अभिलेख कुँदिएको शिवलिङ्गको पादपीठ रहेको छ । यसको अभिलेख कुँदिएको भाग २४ अङ्गुल लम्बा, ८ अङ्गुल चौडा छ । यहाँ संवत् ४६७ *छ ।

संस्कृत–सन्देश १।७ मा योगी नरहरिनाथद्वारा यो छापिएको छ । पछि पाठ सच्याई संस्कृत-सन्देश २।१–२–३ मा फेरि म र ज्ञानमणि नेपालले यो छपाएका छौं । नोलीद्वारा १७ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. ॐ स्वस्ति संवत् ४६७ वैशाखे शुक्लदिवपौर्णमास्याम्भट्टारकमहाराज-
२. श्रीरामदेवस्य साग्रं वर्षशतं समाज्ञापयति महाराजमहासामन्त-
३. श्रीक्रमलीलः कुशलीः भगवतः नाथेश्वराय मानमत्या दत्तं दोव-
४. ग्रामोद्देशे शालगाम्बक्षेत्रपिण्डक मा २८ तत्र देशे खुडुस्वामिनः
५. दत्तम् मा २

## अनुवाद

कल्याण होस् । संवत् ४६७ वैशाख शुक्ल पूर्णिमामा भट्टारक (गद्दीनशीन) महाराज श्री-

* नोलीले यस अभिलेखको संवत् ४६९ छपाउनुभएको छ । तर शुद्ध पाठ '४६७' हो ।

रामदेवले शयभन्दा बढी वर्ष (लामो काल)सम्म शासन गरिरहनुभएको वेलामा महाराज महा-सामन्त श्रीक्रमलील कुशल हुनुहुन्छ ।

भगवान् नाथेश्वरलाई मानमतीले दोवग्राम भन्ने ठाउँको २८ मानिका कुत आउने शालगम्बि खेत गूठी राखिन् । त्यहीं ठाउँका खुडु स्वामीलाई २ मानिका दान दिइयो ।

## व्याख्या—

यस अभिलेखमा 'भट्टारकमहाराजश्रीरामदेव' को उल्लेख परेको हुनाले संवत् ४६७ मा गद्दीमा लिच्छवि राजा रामदेव थिए भन्ने थाहा पाइन्छ। यस अभिलेखमा राजाको साथै 'महाराजमहासामन्त-श्रीक्रमलीलः कुशली' भन्ने उल्लेख परेको हुनाले यस वेला क्रमलील शक्तिशाली सहायक शासकका रूपमा थिए भन्ने थाहा पाइन्छ । यी क्रमलीलको बारेमा माथि चौकिटार, पासिख्यको अभिलेखको व्याख्यामा चर्चा गरिसकेको हुनाले यहाँ दोहऱ्याउनु आवश्यक देखिंदैन । संवत् ४५४ मा वसन्तदेवको अन्तिम समयमा रविगुप्तसंगै सहायक शासक हुन पुगेका यी क्रमलील यस वेला झन् शक्तिशाली भएको कुरा यो अभिलेखले स्पष्टसंग दर्शाएको छ ।

मानमती भन्ने आइमाईले 'नाथेश्वर' को पूजाआजाको लागि केही जग्गा गूठी राखिदिएको कुरा यस अभिलेखमा परेको छ। साथै 'खुडुस्वामी' भन्ने देवताको लागि पनि २ मानिका छुट्याइएको कुरा यसमा परेको छ। वैष्णव सम्प्रदायको देवतालाई 'स्वामी' भन्ने चलन थियो। चाँगुनारायणलाई 'दोलाशिखरस्वामी' वामनावतार विष्णुलाई 'वामनस्वामी' इचंगुनारायणलाई 'नारायणस्वामी' आदि भनिएको पाइन्छ। यस कारण 'खुडुस्वामी' वैष्णवसम्प्रदायका देवता हुन् कि भन्ने देखिन्छ। यसरी मानमतीले शैव र वैष्णव सम्प्रदायका देवतालाई एकैचोटि गूठी राखिदिएको यसबाट देखिन्छ । लिच्छविकालमा जनतामा धार्मिक उदारता रहेको थियो भन्ने उदाहरण यसले प्रस्तुत गरेको छ। अथवा 'खुडुस्वामी' पुजारीको नाम पनि हुन सक्छ। विन्दुस्वामी आदि व्यक्तिका नाम पनि त्यस वेला देखिएका छन् ।

वसन्तदेवपछि गद्दीमा बसेका मनुदेव, वामनदेव जस्तै यी रामदेवको पनि परिचय पाउन सकिएको छैन । संवत् ४६७ मा गद्दीमा लिच्छवि राजा रामदेव थिए भन्ने कुरालाई चाहिं यस अभिलेखले प्रमाणित पारेको छ।

यो अभिलेख अलि अशुद्ध छ। लिच्छविकालका अरू अभिलेखमा यति भद्दा अशुद्धि पाइंदैन। यस ताका राजकाजमा अस्थिरता आएको थियो । यसको केही असर विद्याध्ययनमा समेत पऱ्यो कि भन्ने लक्षण यसले देखाएको छ। यसैताकाको लगननिरको अभिलेख पनि अशुद्ध देखिएको हुनाले पनि उक्त कुराको केही पुष्टि हुन्छ ।

—◆—

# धरोहराबाट लगन जाने बाटोको अभिलेख

काठमाडौं धरोहराबाट लगनतिर जाने 'ताहागल्ली' नाघेर गएपछि पिप्पलको रूखमनि एउटा धारा देखापर्छ। त्यहाँ धाराभित्र दक्षिणपट्टि रहेको अवलोकितेश्वरको पादपीठमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ४० अङ्गुल लम्बा, ५ अङ्गुल चौडा छ। यहाँ अहिले संवत् देखिदैन ।

संस्कृत–सन्देश १।९ मा म र ज्ञानमणि नेपालले यो अभिलेख छपाएका छौं। नोलीद्वारा १८ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. ॐ स्वस्ति ··· ··· भट्टारकम(हाराज श्री - - )देवस्य साग्रं वर्षशतं समाज्ञा(पयत:)

२. सर्व्वसत्त्वहितसुखार्त्थाय भगवत आर्या(व)लोकितेश्वरनाथ प्रतिष्ठापित : देयधर्म्मोयं परमोपासकमणिगुप्तस्य

३. भार्य्यया महेन्द्रमत्या सह यदत्र पुण्यं तद्भ(व)तु मातापितृपूर्व्वङ्गमं कृत्वा सर्व्वसत्त्वानां सर्व्वाकारवरोपेत

४. ···· सर्व्वज्ञज्ञानावाप्तये

## अनुवाद

कल्याण होस्। .......भट्टारक महाराज....देवले शयभन्दा बढी वर्ष (लामो काल) सम्म शासन गरिरहनुभएको वेलामा सारा प्राणीको हित र सुखको लागि भगवान् आर्यावलोकितेश्वरनाथको स्थापना गरियो। परमोपासक मणिगुप्तले पत्नी महेन्द्रमतीसंगै भएर यो दानधर्म गरेको हो।

यसबाट जुन पुण्य भएको छ, त्यसले आमा बाबुलगायत सारा प्राणीले सबै किसिमले असल... सर्वज्ञ ज्ञान प्राप्ति गरोस् ।

## व्याख्या–

यस अभिलेखको पहिलो पङ्क्ति निकै खण्डित हुँदा यसमा राजाको नाम अहिले देखिंदैन। 'भट्टारकम.......देवस्य' मात्र देखिन्छ। रेनिइरो नोलीले यो अभिलेख रामदेवको पालाको हो भन्ने अनुमान गर्नुभएको छ। यस अभिलेखको लिपि त यसै ताकाको हो। तर मूलमा संवत् पनि नदेखिएको हुनाले यो रामदेवकै पालाको हो भनी निश्चित रूपमा भन्न चाहिं सकिंदैन।

परमोपासक मणिगुप्त र उनकी पत्नी महेन्द्रमतीले 'अवलोकितेश्वर' स्थापना गरेको कुरा यस अभिलेखमा परेको छ। 'परमोपासक' शब्द यसताका बौद्ध धर्मानुयायीमा प्रयोग गरिन्थ्यो। अवलोकितेश्वरको मूर्ति स्थापना गरेको कुरा यसमा परेको हुनाले पनि उक्त कुराको पुष्टि हुन्छ। यसबाट मणिगुप्त बौद्धधर्मानुयायी थिए भन्ने देखिन्छ। मणिगुप्तको नाउँमा 'गुप्त' जोडिएको हुनाले यिनी पनि आभीर गुप्त थिए कि भन्ने अनुमान हुन्छ। यस ताका आभीर गुप्तहरू प्रतिष्ठित थिए भन्ने कुराको चर्चा माथि गरिसकेको छ।

मणिगुप्त आभीर हुन् भने यसबाट लिच्छविकालको धार्मिक स्वतन्त्रताको राम्रो उदाहरण यहाँ देखापर्छ। यसताकाका विरोचनगुप्त, अनुपरम आदि आभीर गुप्तहरू यज्ञयागादि वैदिक कर्मकाण्डका पक्षपाती थिए; वैदिक परम्पराका भक्त अनुपरमले हाँडिगाउँको द्वैपायनस्तोत्रमा बौद्धहरूको प्रशस्त निन्दा गरेका छन्। तर यसै ताका मणिगुप्त र उनकी पत्नी महेन्द्रमतीचाहिं बौद्धधर्मानुयायी देखिएका छन्। यसबाट लिच्छविकालमा जनता स्वेच्छाले विविध धार्मिक सम्प्रदायमा लाग्दथे भन्ने देखिएको छ।

## अवलोकितेश्वर–

आफू मात्र मुक्त नभई सारा संसारलाई नै मुक्त पार्नुपर्छ भन्ने उदार आदर्शलाई 'महायान' सम्प्रदायले ठूलो प्रोत्साहन दिन थाल्यो। यसो हुँदा यो यान बढ्ता लोकप्रिय पनि बन्यो। करुणा, त्याग कष्टसहिष्णुता आदिद्वारा सारा लोकको उद्धार गर्ने मार्गमा लागेका बुद्धत्वका अधिकारी महापुरुष 'बोधिसत्त्व' कहलाएका थिए। बोधिसत्त्वकै एक विशिष्ट रूप 'अवलोकितेश्वर' हुन्। बुद्धत्व प्राप्त गर्न सक्ने अवस्थामा आफू पुगिसकेर पनि सारा संसारको दुःख निवारण नगरेसम्म बुद्धत्व प्राप्त गर्दिनं भनी संकल्प गरी लोकको उपकारमा लागेका करुणामय बोधिसत्त्व 'अवलोकितेश्वर' कहिन्छन्। अवलोकितेश्वर बुद्धसरह नै मान्य ठानिन्छन्। सद्धर्मपुण्डरीक आदि ग्रन्थले अवलोकितेश्वरको महिमा गाएका छन्। लिच्छविकालमा यहाँ सद्धर्मपुण्डरीकको प्रभाव परेको थियो भन्ने कुरा पाटन त्यागलटोलको अभिलेखले देखाएको छ। लिच्छविकालमा महायानसम्प्रदाय बढी लोकप्रिय भएको हुनाले त्यसवेला यहाँका बौद्ध धर्मानुयायीको हृदयमा अवलोकितेश्वरले ठूलो स्थान पाए। यसै हुँदा त्यसवेला यहाँ अवलोकितेश्वरका मूर्तिहरू निकै स्थापना गरिए। पछिसम्म पनि अवलोकितेश्वरको महिमा यहाँ कायम रह्यो *।

---

* तल का. इ. ब्रह्मटोलको अभिलेखको व्याख्यामा पनि अवलोकितेश्वरको बारेमा केही चर्चा गरिएको छ।

# हाँडिगाउँको भारविको अभिलेख

हाँडिगाउँको प्रसिद्ध डबली (अंशुवर्माका दुइ शिलालेख भएको) निर यो अभिलेख कुँदिएको ढुङ्गा पहिले रहेको थियो। तर पछि सो ढुङ्गा त्यहाँ देखिएन। हाल श्रीकेशरबहादुर के. सी. ले सो पत्ता लगाई राष्ट्रियसंग्रहालय (छाउनी) मा लगी राखिदिनुभएको छ।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

| | |
|---|---|
| १. संवत् | श्रीमान् प्रभुश्च न च लोकविरुद्धकारी<br>रूपान्वितश्च न च रूपमदम्बिभर्त्ति |
| २. ४७२ | सम्पन्नपौरुषबलश्च बहुक्षमश्च<br>दाता च नाम न च दानविकत्थनश्च |
| ३. फाल्गुण | तेनैवमादिगुणराशिसमन्वितेन<br>श्रीमानदेवनृपतेर्द्दुहितुस्सुतेन |
| ४. शुक्लदि(व) | सुस्वादुशीतलविशुद्धजलाभिरामा<br>कीर्त्तिः कृतेयमिह भारविना न(वीना) |
| ५. १२ | |

## अनुवाद

संवत् ४७२ फाल्गुन शुक्ल द्वादशी।

ऐश्वर्यशाली र शक्तिशाली भएर पनि लोकको विरुद्ध काम नगर्ने, राम्रो भएर पनि राम्रो छु भन्ने घमण्ड नलिने, पुरुषार्थी भएर पनि धेरै सहन सक्ने दानी भएर पनि (आफ्नो) दानको प्रशंसा

नगर्ने इत्यादि थुप्रै गुणहरू भएका, राजा श्रीमानदेवका छोरीका छोरा भारविले स्वादिलो चीसो सफा पानी आउने यो कीर्ति (धारा) यहाँ बनाउनुभयो ।

## व्याख्या–

राजा मानदेवकी छोरीका छोरा भारविले धारा बनाई यो अभिलेख राख्न लाएका हुन् । यसमा संवत् ४७२ रहेको छ । राजा मानदेवको मृत्यु भएको यस वेला ४५ वर्ष भइसकेको थियो । पशुपति सूर्यघाटको अभिलेखबाट मानदेवकी छोरी विजयवतीको विवाह वार्त्त देवलाभसंग भएको थियो भन्ने थाहा पाइन्छ । यी भारवि विजयवतीकै छोरा हुन् भन्ने देखिन्छ । सूर्यघाटको सो अभिलेखमा देवलाभको विशेषण वार्त्त (जागीरदार) भनी लेखिएको हुनाले उनी यतै रहेको देखिन्छ । मानदेवका दौहित्र भारविले धारा बनाएको यस घटनाले पनि उक्त कुराको पुष्टि हुन्छ ।

मानदेवकी छोरीका छोराको नाताले गर्दा भारवि सम्पन्न थिए तथा केही शक्तिशाली पनि थिए भन्ने कुरा यस अभिलेखको वर्णनशैलीले देखाउँछ । श्रीमान्, प्रभु, सम्प्रन्नपौरुषबल आदि शक्तिशालीहरूमा लाग्ने विशेषण यस अभिलेखमा भारविमा लाइएको छ । हुनत कवितामय यस्तो वर्णनको ऐतिहासिक महत्त्व त्यति हुँदैन । तैपनि साधारण व्यक्तिको यस्तो वर्णन हुनु सम्भव छैन ।

कवि कालिदासको कविताको छाया यस अभिलेखमा परेको छ । आदर्श राजाको चरित्रको चित्रण गर्दै जाँदा कवि कालिदासले रघुवंशमा यस्तो लेखेका छन्–

"ज्ञाने मौनं क्षमा शक्तौ त्यागे श्लाघाविपर्ययः
गुणा गुणानुबन्धित्वात्तस्य सप्रसवा इव ॥"१।२२

यस्तै भाव यस अभिलेखको पहिलो श्लोकमा परेको छ । जे होस्; मानदेवका छोरीका छोरा भारवि यस ताका केही शक्तिशाली थिए भन्ने संकेत यस अभिलेखबाट पाइन्छ ।

यस अभिलेखमा गद्दीनशीन राजाको नामोल्लेख गरिएको छैन । यस वेलाको गद्दीनशीन राजा कमजोर थिए भन्ने यताबाट देखिन्छ । संवत् ४६७ मा गद्दीमा लिच्छवि राजा रामदेव थिए । यसको ५ वर्ष पछिको यो अभिलेख हो । यस ताका छिटो राजा फेरिएको देखिएको हुनाले यस वेला पनि गद्दीमा रामदेव नै थिए वा अर्कै राजा थापिइसके; भन्न गाह्रो छ ।

## कीर्त्ति–

लोकको हितको लागि पाटीपौवा, धारा पोखरी आदि बनाउनुलाई 'कीर्त्ति' भन्ने चलन थियो । पछिसम्म यश, कीर्ति फैलाइराख्ने कुरा हुँदा त्यस्तो लोकहित कार्यलाई 'कीर्ति' भनिएको बुझिन्छ । यस अर्थमा 'कीर्तन' शब्द पनि प्रचलित छ । कादम्बरीमा 'सत्रकूपप्रपाप्रासादतडागारामादिभिः कीर्तनैरलंकृता मेदिनी' भन्ने उल्लेख परेको छ । आर्यशूरको जातकमालामा 'श्रीमन्ति कीर्तनशतानि

निवेशितानि' भनी लेखिएको छ। एलोराको एउटा अभिलेखमा पनि 'कीर्तन' को उल्लेख परेको छ–

"कर्तापि यस्य खलु विस्मयमाप शिल्पी
तन्नाम कीर्तनमकारयद्येन राज्ञा ।"

भारविको अभिलेखमा यही अर्थमा 'कीर्तिः कृतेयमिह भारविना न(वीना)' भनी 'कीर्ति' शब्दको प्रयोग भएको छ । फलानाको कीर्ति भन्ने चलन अहिलेसम्म चलेकै छ ।

–◆–

# फर्पिङको (गणदेवको) अभिलेख

फर्पिङ कोटालटोलमा दक्षिणकाली जाने बाटोभन्दा उत्तरतर्फ घरअगाडि सानो बगैंचामा पर्खालमा अड्याएर एउटा ढुङ्गा राखिएको छ। त्यसैमा यो अभिलेख कुँदिएको छ। यहाँ अभिलेख कुँदिएको भाग २८ अङ्गुल लम्बा, ११ अङ्गुल चौडा छ। असुरक्षित अवस्थामा रहेको हुनाले यसको धेरैजसो भाग नबुझिने भइसकेको छ। अहिले पढ्न सकिए जति भाग यहाँ दिइएको छ। यहाँ संवत् ४७९ छ।

'अभिलेख-संग्रह' नवौं भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

... ... ...

...यकारिभिर्ज्ञेय... ... ...

... ... ...

........नेन महाप्रतिहारसर्व्वदण्डनायक(भौम)
गुप्तेन विज्ञापितेन मया तामेव.......

... ... ...

करणार्थमेवो... ... ... र्म्मवर्गाय प्रसाद(शिला)
(प)ट्टकशासन... ... ...
केनचिदप्य... ... ...
स्तामाज्ञामप्रमाणीकृत्यान्यथा कुर्यात्कारये(द्वा)

... ......तमहम्र्मतितरान्न मर्षयाम्यस्मिंश्च..................

................राज्ये ये मदूर्ध्वं राजानो भवितारस्तै–

रपि... ... ... ... ............कृतप्रसादानुर्वात्तभिरिय...

..................................यत्यस्मिंष्च प्रसाद–

..........................(महा)प्रतिहारमहासर्व्वदण्डनाय(क)

(भौ)मगुप्तः संवत् ४७९ वैशाखमासकृ–

ष्णपक्षे तिथौ द्वादश्याम् ॥ॐ॥ अर्द्धे...

पन्नदी अर्द्धा भूय बुन्लुनदी दक्षि(णे) अर्द्धे...

दक्षिणेन मिंदिचो भूय खाह्लिचो भूय............

भूय.....................भूय तेग्वङ्गतो दक्षि–

(ण).........पश्चिमेन केखा भूय...........

.............भूय........अर्द्धचो भूय ब्रेम्गुंचो पश्चि–

....................मन्तरेण मोगुंचो भू............

......................................भूय पश्चिमेन...........

......................................मकमिति..................

## अनुवाद

.........गर्नेहरूले थाहा पाउनुपर्छ । ......यो महाप्रतिहार सर्वदण्डनायक (भौम)गुप्तले हाम्रा हजूरमा विन्ति चढाएका हुँदा हामीबाट......त्यही.......... गर्नाको लागि .........को निगाह गरी सनद शिलापत्र (गरिदिइएको छ।)...... कसैले पनि .....यो आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला, त्यसलाई हामी बिलकुल सहनेछैनौं ।

.......यस राज्यमा हामीभन्दा पछि जुन राजाहरू हुनेछन्; तिनीहरूले पनि (अघिका राजाले गरेको) निगाहको ख्याल राखी यो .....(थाम्नुपर्छ) ।

यो सनदपत्रमा (दूतक) महाप्रतिहार महासर्वदण्डनायक (भौ)मगुप्त छन् ।

संवत् ४७९ वैशाख कृष्ण द्वादशी ।

........पन् खोला......फेरि बुन्लु खोला, दक्षिणतिर......मिंदिचो फेरि खाह्लिचो, फेरि........फेरि तेग्वङतिर लागी दक्षिणतिर.....पश्चिमतिर केखा फेरि... फेरि.......अर्द्धचो फेरि ब्रेम्गुंचो पश्चिमतिर......लाई छोडेर मोगुंचो फेरि....... फेरि पश्चिमतिर........

व्याख्या--

यस अभिलेखमा 'महाप्रतिहारसर्वदण्डनायक(भौम)गुप्तेन विज्ञापितेन मया...... शिलापट्टकशासनं....(कृतम्)' भन्ने बेहोरा परेको छ तथा यहाँ दूतक पनि (भौ)मगुप्त नै छन्। यसबाट संवत् ४७९ मा भौमगुप्त शक्तिमा आइसकेका थिए भन्ने थाहा पाइन्छ। यस अभिलेखमा गद्दीनशीन राजाको नाम भने अहिले देखिदैन। यसको ३ वर्षपछिका चौकिटार, बलम्बू आदि ठाउँमा पाइएका गणदेव + भौमगुप्तका अभिलेखको बेहोरा र यस अभिलेखको बेहोरामा सादृश्य रहेको हुनाले यस वेला पनि गद्दीमा गणदेव नै थिए कि भन्ने अनुमान हुन्छ।

यी भौमगुप्त अनुपरमका आभीरी गोमिनीतर्फबाट जन्मेका छोरा हुन्। यो कुरा पशुपतिको आभीरीको अभिलेखबाट थाहा पाइन्छ। राजकाजमा अनुपरमको कुन स्थान थियो; यो थाहा पाउन सकिएको छैन। तर भौमगुप्तले चाहिं राजकाजमा रविगुप्तको स्थान लिए। वसन्तदेवको समयमा सर्वदण्डनायक महाप्रतिहार जस्तो महत्त्वपूर्ण पद ओगटेका रविगुप्त क्रमशः शक्तिशाली हुँदै गई अन्तिम समयमा सहायक शासक सम्म बन्न पुगेका थिए। गणदेवलाई गद्दीमा राखेर भौमगुप्तले पनि त्यस्तै स्थान लिए। भौमगुप्त रविगुप्तभन्दा अझ अगाडि बढेका थिए। जतिसुकै शक्तिशाली भए तापनि रविगुप्तले राजोचित 'श्री' आफूमा लाउन सकेका थिएनन्। भौमगुप्तले चाहिं महाप्रतिहार महासर्वदण्डनायक पद लिएर पनि साथै 'श्री' पनि आफूमा लाएका थिए। लिच्छविकालमा 'श्री' पदको ठूलो महत्त्व थियो। राजा र राजासरह व्यक्तिले मात्र 'श्री' लाउन पाउँथे। यस अभिलेखमा छेउ-छेउमा फुटेको हुँदा यहाँ भौमगुप्तको नाउँ अगाडि 'श्री' जोडिएको छ कि छैन, भन्न गाह्रो छ। तर बलम्बू चौकिटार आदि ठाउँका संवत् ४८२ का सबै अभिलेखमा भौमगुप्तमा 'श्री' लागेको छ। यसरी रविगुप्तभन्दा श्रीभौमगुप्त एक खुड्किलो अगाडि बढेको स्पष्ट छ। यस कारण गद्दीमा गणदेव रहे तापनि शासनको सारा बागडोर भौमगुप्तकै हातमा थियो। कहाँ के बन्दोबस्त गर्नुपर्छ भन्ने सब कुरा भौमगुप्त स्वेच्छाले गर्दथे। राजामा जाहेर गरेर निकासा गराउने कुरा औपचारिकता पुऱ्याउन मात्र देखाइएको हुन्थ्यो। भौमगुप्तका पालाका अभिलेखले यही कुरा देखाउँछन्। भौमगुप्तबारेको अरू चर्चा तल यथास्थानमा गरिनेछ।

यो अभिलेख धेरै नै खण्डित छ। ज्यादै खिइएको हुनाले बीच बीचमा पढ्न सकिएको छैन। यस कारण फर्पिङका जनतालाई के कस्तो सुबिधा गरिदिई यो सनदपत्र राखिएको हो; सो बुझिदैन। यस अभिलेखमा चारकिल्ला खुलाउँदा मिंदिचो, खाह्रिचो, ब्रेम्गुंचो, मोगुंचो आदि डाँडाहरूको नामोल्लेख भएको छ। फर्पिङका आसपासका डाँडाहरूका नाम यी होलान्। यसमा तेग्वङ, केखा आदि ठाउँको नामोल्लेख पनि भएको छ। यी डाँडाका नाम, ठाउँका नाम किरातपरिवारको भाषाबाट रहेका देखिन्छन्। फर्पिङभेकमा लिच्छविकालभन्दा अघिदेखि नै अर्थात् किरातकालदेखि नै बसोबास रहेको थियो भन्ने संकेत यी नामहरूले दिन्छन्। यस दृष्टिले यो अभिलेख पनि उपयोगी देखिन आएको छ।

-★-

# का. इ. ब्रम्हटोलको अभिलेख

काठमाडौं ब्रह्मटोलको बीच बाटोमा नारायणको एउटा सानो मन्दिर छ। त्यस मन्दिरभित्र पश्चिमाभिमुख भई रहेको नारायणको पादपीठमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १ हात ४ अङ्गुल लम्बा, ३$\frac{1}{4}$ अङ्गुल चौडा छ। यस अभिलेखको धेरैजसो भाग फुटिसकेको छ। यहाँ संवत् ४७९ छ।

अभिलेखको बेहोराबाट यो पादपीठ वास्तवमा अवलोकितेश्वरको हो भन्ने स्पष्ट थाहा पाइन्छ। अवलोकितेश्वरको त्यसै रहेको पादपीठमा पछि कसैले नारायणमूर्ति स्थापना गरिदिएको देखिन्छ।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. संवत् ४७९ द्वितीय आषाढ......................यजीव.................

२. ....................भगवदार्य्या................मानेनार्द्ध..........

३ ....................सर्व्वज्ञज्ञानावाप्तये भवतु ॥

## अनुवाद

संवत् ४७९ द्वितीय आषाढ...... (प्रि)यजीवले..... भगवान् आर्या (वलोकितेश्वर) ...... (स्थापना गरे।)......ले आधा......सर्वज्ञ ज्ञानको प्राप्ति होस्।

व्याख्या–

यस अभिलेखको धेरैजसो भाग फुटिसकेको छ । यस कारण यो अभिलेख राख्न लाउनेको नाम पनि पूरा देखिंदैन । अहिले '–यजीव' यति बाँकी रहेको हुनाले '(प्रि) यजीव' भन्ने व्यक्तिले यो अभिलेख राख्न लाएको हो कि भन्ने अनुमान हुन्छ । नरेन्द्रदेवका यङ्गालहिटीको अभिलेखमा र पाटन भन्सारचोकको अभिलेखमा उनका दूतकका रूपमा कुमारामात्य प्रियजीव भन्ने एक व्यक्तिको उल्लेख आएको छ । तर यो झण्डै शताब्दीपछिको कुरा हो । यस कारण यी प्रियजीव भिन्नै हुन् भन्ने स्पष्ट छ । यसरी यहाँ उल्लिखित (प्रि) यजीव को हुन्; निश्चय गर्न सकिंदैन ।

यहाँ 'भगवदार्य्या.....' यति भाग बचेको हुनाले 'आर्यावलोकितेश्वर' स्थापना गरी यो अभिलेख कुँदाइएको हो भन्ने बुझिन्छ । यस अभिलेखमा संवत् भएको भाग बचेको छ । यसो हुनाले नेपालमा बौद्धधर्मको विकासक्रम देखाउन यो अभिलेख केही उपयोगी रहेको छ ।

बुद्धत्व प्राप्त गर्ने अवस्थामा पुगिसकेर पनि संसारका सारा प्राणीको उद्धार नगरेसम्म निर्वाणपदमा प्रवेश गर्दिन भनी संकल्प गरी लोकको हितमा लागेका करुणामय बोधिसत्त्व 'अवलोकितेश्वर' कहिन्छन् । महायानको प्रसिद्ध ग्रन्थ सद्धर्मपुण्डरीकले अवलोकितेश्वरको ठूलो महिमा गाएको छ । त्यसमा एक ठाउँमा यसो भनी अवलोकितेश्वरको महिमा गाइएको छ–

"यच्च कुलपुत्र द्वाषष्ठीनां गंगानदीवालुकासमानां बुद्धानां भगवतां सत्कारं कृत्वा पुण्याभिसंस्कारो याश्चावलोकितेश्वरस्य बोधिसत्त्वस्य महासत्त्वस्यान्तश एकमपि नमस्कारं कुर्यान्नामधेयं च धारयेत्समोऽनधिको ऽनतिरेकः पुण्याभिसंस्कार उभयतो भवेत् "

(सद्धर्मपुण्डरीक २४ परिवर्तबाट )

अवलोकितेश्वरको नाम मात्र स्मरण गरे पनि सारा दुःख, आपद् आदिबाट रक्षा हुन्छ भन्ने धारणा छ । सद्धर्मपुण्डरीकको प्रचार लिच्छविकालमा यहाँ थियो । चीन जापान आदि देशमा पनि यो ग्रन्थ ज्यादै लोकप्रिय बनेको थियो ।

संवत् ४७९ ताका नेपालमा आर्यालोकितेश्वरको पूजा गरिन्थ्यो भन्ने कुरा यस अभिलेखले देखाएको छ ।

–✶–

# चौकिटारको गणदेव भौमगुप्तको अभिलेख

बलम्बूबाट पाउभर जति उत्तर–पश्चिमतिर चौकिटार भन्ने ठाउँ छ । त्यहाँ वसन्तदेवको अभिलेखसंगै यो अभिलेख कुँदिएको ढुङ्गा पनि रहेको छ । यसको अभिलेख कुँदिएको भाग २८ अङ्गुल लम्बा, २२ अङ्गुल चौडा छ । यहाँ संवत् ४८२ दिइएको छ । यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन् ।

नोलीद्वारा १९ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. ॐ स्वस्ति मानगृहाद् बप्पपादानुध्यातो भट्टारकम–
२. हाराजश्रीगणदेवः कुशली शीताटिकातले टेग्वल् (ग्रा)–
३. मे यथाप्रधानब्राह्मणपुरस्सरान् सर्व्वानेव कु–
४. टुम्बिनः कुशलम्पृष्ट्वा मानयति पूर्व्वराजभिर्य्यु–
५. ष्माकं कुथेरशुल्यधिकरणाभ्यान्न प्रवेष्टव्यमित्य–
६. नुग्रहः कृतोधुना मया सर्व्वदण्डनायक
७. महाप्रतिहारश्रीभौमगुप्तानुज्ञापितेन लिङ्ग्वल–
८. माप्चोकाधिकरणाभ्यां पञ्चापराधद्वारेण च–
९. तुर्भिरप्यधिकरणैर्न्न प्रवेष्टव्यमिति स्थितिपट्ट–
१०. केन प्रसादः कृतस्तद् यूयमेवं विदित्वा यथै–
११. व पूर्व्वमाज्ञाश्रवणविधेयास्तथैवावलगनप–
१२. रा भूत्वा निर्वृ तविश्वस्ताः सुखं प्रतिवत्स्यथ ये चा–

१३. स्मद्वंश्या राजानो भवितारस्तैरपि धर्म्मगुरुभि–
१४. र्गुरुकृतप्रसादानुवर्त्तिभिरियमाज्ञा प्रति–
१५. पालनीयेति दूतकश्चात्र बब्भ्रुवर्मा[१] ब्रह्म ुङ
१६. प्रसादगुप्तवार्त्ते व्यवहरतीति संवत्
१७. ४८२ श्रावणशुक्लप्रतिपदि

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार)बाट बप्प (बुवा) का पाउको अनुग्रह पाएका गाथमा आराम रहेका भट्टारक महाराज श्रीगणदेवबाट शीताटिका तल टेग्वल ग्राममा रहेका मुखिया, ब्राह्मणलगायत सबै गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ–

उहिलेका राजाबाट तिमीहरूकहाँ कुथेर तथा शुली यी दुइ अधिकरणले पस्न नपाउने गरी निगाह गरिएको थियो। सर्वदण्डनायक महाप्रतिहार श्रीभौमगुप्तले हाम्रा हजुरमा बिन्ति चढाएका हुनाले अहिले हामीबाट लिङ्ग्वल माप्चोकसहित चारै अधिकरणले पञ्चापराध (पञ्चखत)–द्वारा पनि पस्न नपाउने गरी यो सनदशिलापत्र निगाह गरी दिइएको छ ।

यो कुरा बुझेर तिमीहरू पहिले जस्तै हुकूममा तामेल रही निर्धक्क भई सुखपूर्वक बस। पछि हुने हाम्रो कुलका राजाहरूले पनि नियम कानूनलाई ठूलो संझी आफ्ना मान्यजनले गरिदिएको निगाहको ख्याल राखी यो आज्ञाको प्रतिपालन गर्नुपर्दछ ।

यहाँ दूतक बब्भ्रुवर्मा ब्रह्मुङ छन् । वार्त्त प्रसादगुप्तले मुद्दामामिलासम्बन्धी काम गरिरहेको वेलामा।

संवत् ४८२ श्रावण शुक्ल प्रतिपदाको दिन ।

(बलम्बू, किसिपिडी, सतुङ्गल, थानकोट आदि ठाउँमा पनि यही बेहोराका यही मितिका गणदेव भौमगुप्तका अभिलेख पाइएका छन्। एउटै बेहोरा भए तापनि तिनको पनि ऐतिहासिक महत्त्व छ। गणदेव भौमगुप्तले स्वायत्तशासनसम्बन्धी अधिकार दिइएको इलाका, स्थानीय प्राचीन नाउँ, तलको परिभाषा आदि कुरा थाहा पाइने हुनाले ती अभिलेखलाई पनि बेग्लाबेग्लै दिनु आवश्यक संझेको छु।)

---

नोलीको पाठ– १. वस्त्रवर्मा

[४५ संख्या]

# बलम्बूको अभिलेख

१. ॐ स्वस्ति मानगृहाद्बप्पपादानुध्यातो भट्टा (रकमहाराज)
२. श्रीगणदेवः कुशली शीताटिकातले बु---ङग्रामे
३. यथाप्रधानब्राह्मणपुरस्सरान्सर्व्वानेव (कुटुम्बिनः)
४. कुशलम्पृष्ट्वा मानयति पूर्व्वराजभिर्य्यु (ष्माकं कुथेरशुल्य)
५. धिकरणाभ्यां न प्रवेष्टव्यमित्यनुग्रहः (कृतोधुना म)
६. या सर्व्वदण्डनायकमहाप्रतिहारश्रीभौमगुप्तविज्ञा–
७. पितेन लिङ्ग्वल्माप्चोकाधिकरणाभ्याम्प (ञ्चापराधद्वारेण च)
८. तुर्भिरप्यधिकरणैर्न्न प्रवेष्टव्यमिति स्थितिपट्टकेन प्रसादः
९. कृतस्तद्यूयमेवं विदित्वा यथैव पूर्व्वमाज्ञाश्रवणविधेया–
१०. स्तथैवावलगनपरा भूत्वा निर्व्वृतविश्वस्ताः सुखम्प्रतिवत्स्य (थ)
११. ये चास्मद्वंश्या राजानो भवितारस्तैरपि धर्म्मगुरुभिर्गु (रु)
१२. कृतप्रसादानुवर्त्तिभिरियमाज्ञा प्रतिपालनीयेति, दूतक–
१३. श्चात्र बब्भ्रुवर्मा बह्मुङ प्रसादगुप्तवार्त्ते व्यवहरतीति
१४. श्रावणशुक्लप्रतिपदि १ संवत् ४८२

[बलम्बू गाउँबाहिर 'लुकुमहाद्य' नामक खाल्डोभित्र यो रहेको छ ।]

# बलम्बूकै अर्को अभिलेख

(१. ॐ स्वस्ति मानगृहाद् बप्पपादानुध्यातो भट्टारकम
२. हाराजश्रीगणदेवः कुशली शीताटिकातले....ग्रा–
३. मे यथाप्रधानब्राह्मणपुरस्सरान् सर्व्वानेव कु–
४. टुम्बिनः कुशलं पृष्ट्वा मानयति पूर्व्वराजभिर्य्युष्माकं)
५. कुथेर्शौल्याधिकरणाभ्यां न प्रवेष्ट(व्यमित्य)
६. नुग्रहः कृतकोधुना मया सर्व्वदण्ड(नाय)
७. कमहाप्रतिहारश्रीभौमगुप्तविज्ञा(पिते)
८. न लिङ्ग्वल्माप्चोकाधिकरणाम्पञ्चा(पराध)
९. द्वारेण चर्तुभिरप्यधिकरणैर्न्न प्र(वेष्टव्य)
१०. मिति स्थितिपट्टकेन प्रसादः कृत(स्तद्यूय)
११. मेवम्विदित्वा यथैव पूर्व्वमाज्ञाश्रवण(विधेया)
१२. स्तथैवावलगनपरा भूत्वा निर्वृ तविश्व(स्ताः)
१३. (सुखं)प्रतिवत्स्यथ ये चास्मद्वंश्या राजा(नो भविता)
१४. (रस्तै)रपि धर्म्मगुरुभिर्ग्गुरुकृतप्र(सादा)
१५. (नुव)र्त्तिभिरियमाज्ञा प्रतिपालनी(येति दूतक)
१६. (श्चा)त्र बब्भ्रुवर्म्मा ब्रह्मं प्रसाद(गुप्तवार्त्ते)
१७. (व्यवहर)तीति श्रावणशुक्लप्रतिपदि (सं ४८२)

(बलम्बू महालक्ष्मीमन्दिरको नगीचैको 'हितिगा' भन्ने खाल्डोमा यो अभिलेख कुँदिएको ढुङ्गा रहेको छ। यसको केही भाग छोपिएको छ। 'पूर्णिमा' १० पूर्णाङ्कमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ।)

# किसिपिंडीको अभिलेख

१. (ॐ) स्वस्ति मानगृहाद्बप्पपादानु(ध्या)तो भट्टारक–
२. महाराजश्रीगणदेवः कुशली शीताटिका–
३. तले किचप्रिचिङग्रामे यथा(प्र)धानब्राह्मण–
४. पुरस्सरान्सर्व्वानेव कुटुम्बिनः कुशलम्पृष्ट्वा
५. मानयति पूर्व्वराजभिर्य्युष्मा(कं कुथेर्शुल्य)धिकर–
६. णाभ्यान्न प्रवेष्टव्यमित्यनुग्रहः कृतोधुना मया
७. सर्व्वदण्डनायकमहाप्रतिहारश्रीभौ(म)गुप्तविज्ञा–
८. पितेन लिङग्वल्माञ्चोकाधिकरणाभ्या(म्पञ्चापराधद्वा)
९. रेण चर्तुभिरप्यधिकरणैर्न्न प्रवेष्टव्यमिति (स्थितिप)
१०. ट्टकेन प्रसादः कृतस्तद्यूयमेवं (विदित्वा यथैव पूर्व्वमाज्ञा)
११. श्रवणविधेयास्तथैवावलगन(परा भूत्वा निर्वृतविश्वस्ताः)
१२. सुखम्प्रतिवत्स्यथ ये चास्मद्वंश्या (राजानो) भवितारस्तै-
१३. रपि धर्म्मगुरुभिर्ग्गुरुकृतप्रसादानुर्वात्तिभिरियमा
१४. ज्ञा प्रतिपालनीयेति दूतकश्चात्र बब्भ्रुवर्म्मा ब्रह्मुङ
१५. प्रसादगुप्तवार्त्ते व्यवहरतीति ।। संवत् ४८२
१६. श्रावणशुक्लप्रतिपदि १

(लेभीद्वारा ७ संख्याको रूपमा यो छापिएको छ ।)

# किसिपिंडीकै अर्को अभिलेख

१. (ॐस्व) स्ति मानगृहाद्बप्पपादानुध्यातो भट्टारकमहाराज–
२. (श्रीग) णदेवः कु (शली शीता) टिकातले किचप्रिचिङग्रामे य–
३. (था) प्रधानब्रा (ह्मणपुर) स्सरान्सर्व्वानेव कुटुम्बिनः (कु)–
४. (श) लम्पृष्ट्वा मानयति पूर्व्वराजभिर्य्युष्माकं कुथेर्शुल्य–
५. (धिकर) णाभ्यान्न प्रवेष्टव्यमि (त्य) नुग्रहः कृतकोधुना म–
६. या सर्व्वदण्डनायकम (हा) प्रतिहारश्रीभौमगुप्त–
७. विज्ञापितेन (लिङ्ग्वल्माप्चोका) धिकरणाभ्याम्पञ्चापरा–
८. धद्वारेण (चतु) र्भिरप्यधिकरणैर्न्न प्रवेष्टव्यमिति
९. स्थितिपट्टकेन प्रसादः कृतस्तद्यूयमेवम्विदित्वा
१०. यथैव पूर्व्वमाज्ञाश्रवणविधेयास्तथैवावलगन–
११. परा भूत्वा निर्वृतविश्वस्ताः सुखम्प्रतिवत्स्यथ ये चा–
१२. स्मद्वंश्या राजानो भवितारस्तैरपि धर्म्मगुरुभिर्ग्गु–
१३. रुकृतप्रसादानुवर्त्तिभिरियमाज्ञा प्रतिपालनी–
१४. या दूतकश्चात्र बभ्रुवर्म्मा ब्रह्मं प्रसादगुप्त–
१५. वार्त्तं व्यवहरतीति संवत् ४८२ श्रावणशुक्लप्रतिपदि

(किसिपिंडी कुलांछेटोलमा यो अभिलेख रहेको छ ।)

(थानकोटमा पनि यही बेहोराको अभिलेख पाइएको छ । तर ज्यादै खिइएको हुनाले सो यहाँ दिइएन ।)

# सतुङ्गलको अभिलेख

१. स्वस्ति मानगृहाद् बप्पपादा(नुध्यातो भट्टारक)
२. (म)हाराजश्रीगणदेवः कुशली शीताटि(कातले)
३. कादुङग्रामे यथाप्रधानब्राह्मण(पुरस्सरान्)
४. ...............पालककुटुम्बिनः सर्व्वानेव (कुशल)
५. (म्पृष्ट्वा) मानयति विदितम्वोस्तु यथा (मया सर्व्वं)
६. (दण्ड)नायकमहाप्रतिहारश्रीभौमगुप्त(विज्ञापि)
७. तेन युष्माकं लिङग्वल्माप्चोक............
८. ............पञ्चापराधद्वारेण न प्रवेष्टव्य(मिति)
९. (स्थितिपट्टकेन्) प्रसादः कृतस्तदेवं (विदित्वा)
१०. (यथैव पूर्व्वं)माज्ञाश्रवणविधेयास्त(थैवा)
११. (वलगनपरा) भूत्वा निर्व्वृतविश्वस्ता (सुखं प्रति)
१२. (वत्स्यथ ये चा)स्मद्वंश्या (राजा)नो भवितार(स्तैरपि)
१३. (धर्म्मगुरुभिर)गुरुकृतप्रसादानुवर्त्ति(भिरिय)
१४. (माज्ञा प्रतिपाल)नीयेति दूतकश्चा(त्र बम्भ्रु)
१५. (वर्म्मा ब्रह्मुङ प्रसादगुप्तवार्त्ते व्यवहरतीति संवत् ४८२)
१६. (श्रावणशुक्लप्रतिपदि)

[सतुङ्गल देउननीमा यो अभिलेख रहेको छ । यसको बेहोरा अरूभन्दा अलि फरक छ ।]

**व्याख्या—**

चौकिटार, बलम्बू, किसिपिंडी, सतुङ्गल, थानकोट आदि ठाउँमा पाइएका यी अभिलेखको विषय एउटै छ । संवत् तिथिमिति पनि उही नै छ । यसरी यी ठाउँमा एकैचोटि प्रशासनमा सुधार गरिएको यो घटना उल्लेखनीय छ ।

यी अभिलेखबाट यस ताका गद्दीमा लिच्छवि राजा गणदेव थिए भन्ने थाहा पाइन्छ। गणदेव कसका छोरा हुन्; थाहा पाउन सकिएको छैन। यहाँ गणदेवको विशेषण 'बप्पपादानुध्यात= बुवाको पाउको अनुग्रह पाएका' भन्ने रहेको हुनाले गद्दीनशीन राजाकै छोरा यी हुन् भन्ने संकेत पाइन्छ। गणदेवको सन्मानसूचक अरू प्रशस्ति यहाँ परेको छैन। यसरी गणदेव गद्दीमा बसे तापनि नाममात्रका राजा थिए भन्ने संकेत यी अभिलेखबाट पाइन्छ।

योभन्दा तीन वर्ष जति पहिलेदेखि नै भौमगुप्त अधिकारमा आइसकेका थिए। यो कुरा माथि गएको फर्पिङको अभिलेखबाट थाहा पाइएको छ। फर्पिङको अभिलेख खण्डित हुँदा त्यसबाट कुरा स्पष्ट हुन सकेको थिएन। यी अभिलेखले चाहिं भौमगुप्तको अवस्था स्पष्टसंग देखाइदिएका छन्। रविगुप्तले तयार पारेको बाटोबाट अघि बढ्न भौमगुप्त सफल भए भन्ने कुरा पनि यी अभिलेखले स्पष्ट देखाएका छन्। शीताटिका–तलमा अर्थात् चन्द्रागिरि र दह्चोक डाँडोको बीच भागका थानकोट, किसिंपिंडी, बलम्बू, चौकिटार आदि बस्तीमा आभीर र उनका पक्षपातीहरूको बसोबास बढी थियो। यसो हुनाले आभीर रविगुप्तले यताभेकका जनतालाई कुथेर र शुल्ली अधिकरणले गर्ने कामसम्बन्धी अधिकार दिलाएका थिए। अब भौमगुप्तले लिंग्वल र माप्चोक-समेत चारै अधिकरणले यस भेकमा पस्न नपाउने अर्थात् चारै अधिकरणले गर्ने काम स्थानीय ग्रामवासीले नै गर्न पाउने बन्दोबस्त मिलाइदिए। यी अभिलेखमा 'पूर्व्वराजभिर्य्युष्माकं कुथेर् शुल्यधिकरणाभ्यान्न प्रवेष्टव्यमित्यनुग्रहः कृतः' भनी राजा वसन्तदेवको पालामा रविगुप्तको रेखदेखमा भएको कुराको उल्लेख गरिएको हो। बलम्बू पासिख्य र चौकिटारमा वसन्तदेवका यस विषयका अभिलेख पाइएका पनि छन्। यसै गरी अन्त पनि वसन्तदेवका यस विषयका अभिलेख हुँदा हुन्। रविगुप्तले सहायक शासकको हैसियतले शासन चलाउन थालेपछि जनतामा विरोधी भावना नफैलियोस्; आफन्तहरू सन्तुष्ट भई आफ्ना पक्षमा रहिरहून् भन्ने उद्देश्यले दुइ सरकारी अधिकरणले पस्न नपाउने गरी यस भेकका जनतालाई सुविधा गरिदिएका थिए। अहिले भौमगुप्तले पनि त्यस्तै अवस्थामा अरू बढी अधिकार यस भेकका जनतालाई सुम्पिदिएका हुन्। 'तेन साकं समवाप्य तथेति प्रसादः कृतः' भनी राजाको तर्फबाट लेखाउन लगाई रविगुप्त सहा-यक शासक बन्न पुगेका थिए तापनि उनले राजोचित 'श्री' पद आफूमा लाउन सकेका थिएनन्। अब भौमगुप्तले सर्वदण्डनायक महाप्रतिहार पदका साथै 'श्री' पदसमेत लिएका छन्। शाहकालमा जङ्गबहादुरले 'श्री ३ महाराज' पद लिए सरह नै यो थियो। यसरी भौमगुप्तको महत्त्वाकाङ्क्षा रविगुप्तको भन्दा बढी थियो भन्ने देखिन्छ। पछि भौमगुप्तको शक्ति झन् बढ्यो। यस कुराको झलक देउपाटनको स्वामी वार्त्तको अभिलेखबाट पाइन्छ। यसको चर्चा सोही अभिलेखको व्याख्यामा गरिनेछ।

## तल र तलस्वामी–

लिच्छविकालका बस्तीहरू प्रशासनको दृष्टिले ग्राम, तल, द्रङ्ग यी तीन रूपमा विभक्त गरिएको हामी पाउँछौं। छुट्टाछुट्टै रहेका ठूल–ठूला बस्ती पनि 'ग्राम' कहलाएका थिए। सम्म

ठाउँमा आबाद भएका संयुक्त ग्रामलाई 'तल' संज्ञा दिइएको देखिन्छ। ग्राम र तलभन्दा माथिल्लो बस्ती 'द्रङ्ग' भनिन्थ्यो। द्रङ्गभित्र ग्राम र तलसमेत सम्बद्ध रहन्थे ।

'तल' शब्दको साधारण अर्थ त 'सम्म ठाउँ' भन्ने मात्र हो। तर लिच्छविकालमा 'तल' शब्द प्रशासनको दृष्टिले छुट्ट्याइएको एक थरी बस्तीलाई बुझाउने पारिभाषिक शब्द बनेको थियो। लिच्छविकालको 'तल' को केही परिचय यी अभिलेखले दिन्छन्। यी अभिलेखमा चन्द्रागिरि र दहचोक डाँडाको बीचको भागलाई 'शीताटिका-तल' भनिएको छ। शीताटिका-तलभित्र अनेक ग्रामको उल्लेख परेको छ। चौकिटारको अभिलेखमा शीताटिका-तलभित्रको टेग्वल ग्रामको उल्लेख छ। किसिपिंडीको अभिलेखमा शीताटिका-तलभित्रको किचप्रिचिङ ग्रामको उल्लेख छ। सतुङ्गलको अभिलेखमा शीताटिका-तलभित्रको कादुङ ग्रामको उल्लेख छ। बलम्बूको अभिलेखमा शीताटिका-तलभित्रको गाउँको नाउँ अलि स्पष्ट छैन। 'बु-ङ' ग्राम मात्र देखिन्छ। यसरी एउटा तलअन्तर्गत अनेक ग्राम पनि रहन्थे भन्ने कुरा यताबाट निश्चित हुन्छ ।

अर्को कुरा-बस्तीको विकास हुँदै गएपछि ग्रामबाट तल, तलबाट द्रङ्ग संज्ञा उही प्रदेशले पाएको उदाहरण पनि शीताटिका-भेकका अभिलेखमा हामी पाउँछौं। वसन्तदेवको थानकोटको संवत् ४२८ को अभिलेखमा शीताटीगुल्मको उल्लेख परेको छ। यसबाट यस बेलासम्म 'शीताटी' तल कहलाएको थिएन भन्ने बुझिन्छ। गणदेवका ४८२ का यी अभिलेख राखिएको बेलामा भने शीताटिका 'तल' बनिसक्यो। पछि द्वितीय शिवदेवको संवत् १२९ को बलम्बूको अभिलेख राखिएको बेलासम्ममा शीताटीले 'द्रङ्ग'को दर्जा पाइसक्यो। त्यहाँ 'सतलशीताटीद्रङ्गनिवासिनां = तल सहितको शीताटी द्रङ्गमा बस्नेहरूको' भन्ने उल्लेख परेको छ।

यसरी ग्राम तल बनेपछि, तल द्रङ्ग बनेपछि प्रशासनको दृष्टिले के कति अन्तर हुन्थ्यो; यो कुरा राम्ररी खुल्न सकेको छैन। लिच्छविकालको प्रशासनव्यवस्था बुझ्न यो कुरा जान्नु आवश्यक छ। खोजी गर्दै जाँदा भविष्यमा पाइने अरू अभिलेखले यस विषयमा प्रकाश पार्ने आशा हामीले लिनुपरेको छ ।

यसै गरी ललितपुरभेकका अभिलेखमा, भक्तपुरभेकका अभिलेखमा, कान्तिपुरभेकका अभिलेखमा पनि 'तल' को उल्लेख आएको छ। ललितपुर दरबार भन्सारचोकको अभिलेखमा 'यूपग्रामद्रङ्गस्य सर्वतलसहितस्य' भन्ने उल्लेख परेको छ। यसबाट यूपग्रामद्रङ्गअन्तर्गत अनेक तल थिए भन्ने थाहा पाइन्छ। यसै गरी काठमाडौं यङ्गालहिटीको अभिलेखमा 'दक्षिणकोलीग्राम-द्रङ्गस्य सर्वतलग्रामैः सहितस्य' भन्ने उल्लेख परेको छ। भक्तपुर गोलमाढीटोलको अभिलेखमा 'माखोपृम्सतलद्रङ्गनिवासिनः' भन्ने उल्लेख आएको छ। यसबाट 'तल' द्रङ्गसंग सम्बद्ध रहन्थ्यो; उपत्यकामा 'तल' संज्ञा पाएका प्रदेश निकै थिए भन्ने देखिन्छ ।

नेपाल-उपत्यकाबाहिर पनि 'तल' संज्ञा पाएका बस्ती थिए। यो कुरा खोपासीको अभिलेखबाट थाहा पाइन्छ। खोपासीको अभिलेखबाट 'तल' बारे अझ बढी कुरा थाहा पाइन्छ। प्रत्येक तलको रेखदेखको लागि 'तलस्वामी' नियुक्त हुन्थे; कुनै कुनै तलस्वामीले प्रशासनसम्बन्धी निकै अधिकार

पनि पाएका हुन्थे भन्ने कुरा खोपासीको सो अभिलेखबाट हामी बुझ्न सक्छौं । विचारार्थ सो अभिलेखको अलिकता अंश यहाँ उद्धृत गर्नुपरेको छ ।

"......भट्टारकमहाराजश्रीशिवदेवः.......कुर्प्पासीग्रामनिवासिनः...... समाज्ञापयति.......श्रीमहासामन्तांशुवर्म्मणा मां विज्ञाप्य मदनु(ज्ञा)तेन सता युष्माकं सर्व्वाधिकरणाप्रवेशेन प्रसादः कृतः(स)मुपस्थितविचारणीयकार्येषु स्वतलस्वामिनैव यूयं विचारणीयाः सर्व्वकार्य्येषु चैकमेव वो द्वारं"

(भट्टारक महाराज श्रीशिवदेवबाट....कुर्प्पासी गाउँमा बस्ने गृहस्थीहरूलाई....आज्ञा भएको छ।.....श्रीमहासामन्त अंशुवर्माले हाम्रा हजूरमा बिन्ति चढाएर हाम्रो अनुमति लिई सबै अधिकरणले पस्न नपाउने गरी तिमीहरूलाई निगाह गरिएको छ। विचार पुऱ्याउनुपर्ने कामकार्‌बाइ आइपरेमा आफ्ना तलस्वामीद्वारा नै तिमीहरूको हेरविचार हुनेछ। सबै कामकार्‌बाइमा तिमीहरूको निमित्त एउटै मात्र द्वार हुनेछ....।)

यस वेला शासनव्यवस्थाको मूल केन्द्र 'राजकुल' (राजदरबार) थियो। राजकुलमा विभिन्न द्वार थिए। विभिन्न द्वारमा विभिन्न विभाग रहेका थिए। जनताले आफूलाई परेको मर्काको उजूरी सम्बद्ध द्वारमा गई गर्दथ्यो। तर खोपासीका बासिन्दाहरूले अब जुनसुकै कामकार्‌बाइ गर्नुपरेमा पनि विभिन्न द्वार धाउनुपर्दैन; एकै द्वार (अर्थात् तलस्वामीकहाँ) मात्र गए पुग्छ भनी यहाँ भनिएको छ। जनतालाई स्वायत्तशासनसम्बन्धी अधिकार सुम्पँदै जाने अंशुवर्माको योजना-अनुसार कुर्प्पासीग्राममा कुनै पनि सरकारी अधिकरण (अड्डा, अदालत) ले नपस्नू; केही गरी राजदरबारतर्फबाट कामकार्‌बाइ गर्नुपर्ने अवस्था आइपऱ्यो भने तलस्वामीकहाँ गई सो मिलाउनू भनी यहाँ भनिएको हुनाले यहाँ 'तलस्वामी' लाई ठूलो अधिकार सुम्पेको स्पष्ट छ ।

यसरी लिच्छविकालको प्रशासनको दृष्टिले 'तल' संज्ञक प्रदेशको बेग्लै स्थान रहेको थियो भन्ने संकेत पाइन्छ। तर यस विषयको कुरा अझै खुलस्त हुन सकेको छैन ।

लिच्छविकालदेखिको यो पारिभाषिक शब्द अर्थमा धेरै फरक परे तापनि पछिसम्म पनि प्रचलित थियो। काठमाडौं मरुसत्तलमा रहेको वि. सं. १५४२ को ताम्रपत्रबाट यो कुरा थाहा पाइन्छ। त्यसमा 'तलपति' शब्दको उल्लेख आएको छ। गोसाईंकुण्ड गई फर्किआएका जोगीहरूलाई चक्रभोज खुवाउन राखिएको गूठी जग्गाबाट बाली उठाई तलपतिले सो गूठी चलाउनू भनी त्यस ताम्रपत्रमा लेखिएको छ। त्यसको केही अंश यस प्रकारको छ–

"सम्वत् ६०५ अश्विनिशुक्लचतुर्थ्यायान्तिथौ । अङ्गारवासरे ।....भाषा सिवलितिन लिला वरङाव जोगी भलादत्वं सकल लिथ्यनङाव, चक्र बिययातं किटनद्वं बू रोव ४ तलपतिसमत थ्व बूया वाससन द्वथ्यम् श्रषम्प्रत्ते वसवम् चक्र बिस्यं निस्त्रपं निर्व्वाहरपं यञ्जमाल।"

(संस्कृत–सन्देश १।६ मा यो ताम्रपत्र छापिएको छ।)

(ने. सं. ६०५ (वि. सं. १५४२) आश्विन शुक्ल चतुर्थी मङ्गलवार। . . . . .यसको बेहोरा शिवलिति = सिल्हु = गोसाईंकुण्डमा गई फर्केर आउनुभएका सबै जोगीहरूलाई यहाँ आइपुगेपछि चक्रभोज खुवाउनाको लागि किटनद्वंको ४ रोपनी खेत गूठी राखियो। तलपतिले यो खेतको बालीले भ्याउने जति प्रतिवर्ष चक्रभोज खुवाई गूठी चलाउनुपर्छ।)

यहाँ उल्लिखित 'तलपति' शब्द लिच्छविकालको तलस्वामीकै पर्यायवाची हो भन्ने कुरामा शङ्का छैन। तर मल्लकालसम्ममा प्रशासनव्यवस्थामा धेरै अन्तर आइसकेको हुनाले तलस्वामी र तलपतिको काम र अधिकारमा पनि निकै अन्तर परिसकेको देखिन्छ।

यस प्रसङ्गमा वर्तमान कालसम्म पनि नेवारी र नेपाली भाषामा ठेट शब्दको रूपमा प्रचलित 'तलसिङ' शब्दतिर औंल्याउनु आवश्यक संझन्छु। जग्गाधनीलाई बुझाउने 'तलसिङ' शब्दको सम्बन्ध 'तलस्वामी' संग रहेको देखिन्छ। तलस्वामीकै विकृत रूप 'तलसिङ' बनेको देखिन्छ। लिच्छविकालका कति पारिभाषिक शब्द अर्थमा फरक परे तापनि अहिलेसम्म पनि चलेर आइरहेका छन् भन्ने कुरा यसले देखाएको छ† ।

*बभ्रुवर्मा*— यी अभिलेखमा दूतक बभ्रुवर्मा रहेका छन्। यहाँ रहेका दूतकको नाउँ वस्त्रवर्मा भनी नोलीले छपाउनुभएको छ। साथै यो पाठ सन्देहास्पद छ भन्ने टिप्पणी पनि उहाँले दिनुभएको छ‡। अहिले राम्ररी पाठ मिलाई हेर्दा 'बभ्रुवर्मा' शुद्ध पाठ ठहरिएको छ। फेरि यी बभ्रुवर्माको उल्लेख हामी पाटन सिकुबहीको अभिलेखमा पनि पाउँछौं। संवत् ४९५ को त्यस अभिलेखबाट त्यस वेला बभ्रुवर्माको मृत्यु भइसकेको थियो भन्ने थाहा पाइन्छ। त्यस अभिलेखबाट बभ्रुवर्मा कुनै राजपुत्र (रजपूत) परिवारका थिए भन्ने संकेत पाइन्छ। त्यस अभिलेखमा 'राजपुत्र वज्ररथका एक जना गोतियाले स्थापना गरेको मातृका मूर्तिको जीर्णोद्धार गर्ने संकल्प परमधार्मिक बभ्रुवर्माले गरेका थिए; तर सो संकल्प पूरा गर्न नपाउँदै बभ्रुवर्माको मृत्यु भयो भनी लेखिएको छ। बभ्रुवर्माका भतिजा देशवर्मा थिए। अंशुवर्माका पालामा यिनी 'दूतक' का रूपमा देखापरेका छन्। यसरी यसताकाको राजकाजमा बभ्रुवर्माको परिवारको प्रवेश थियो भन्ने थाहा पाइन्छ।

★

---

† 'पूर्णिमा' १० पूर्णाङ्कका ११–१३ पृष्ठमा पनि 'तल' बारे विचार गरिएको छ।

‡ 'नेप्लिज् इन्स्क्रिप्शन्ज् इन् गुप्त क्यारेक्टर्ज्' को २७ पृष्ठ हेर्नुहोस्।

# पशुपति देउपाटनको स्वामी वार्त्तको अभिलेख

देउपाटनमा पशुपतिनाथको मन्दिरतिर जाने मूल बाटोको उत्तरपट्टि गचाननी भन्ने ठाउँ छ। त्यहाँ घरको आंगनमा रहेको देवताको पादपीठमा यो अभिलेख रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३६ अङ्गुल लम्बा, १३ अङ्गुल चौडा छ। यहाँ संवत् ४८७ छ* ।

'संस्कृत–सन्देश' १।८ मा ऐ. शि. बाबुराम आचार्य र श्रीगुरु पं. नयराज पन्तद्वारा यो अभिलेख छापिएको छ। नोलीद्वारा २० संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. ॐ पत्योर्न्नौ पश्य हे श्रीर्य्युगलममिथुनं शूलभृच्छार्ङ्गपाण्यो-
रेकैकस्यात्र किन्तन्न सुकरमनयोस्तौ यदेकत्र पृक्तौ ।
मूर्त्तित्या (गेन१)

२. नूनं सखि मदनरिपोरेवमुक्त्वा भवान्या यो दृष्टो जातु तस्मै सततमिह
नमोस्त्वर्द्धशौरीश्वराय ।।संवत् ४८७ प्रथमाषाढ

३. शुक्लद्वितीयायाम्भट्टारकमहाराजश्रीगणदेवे कालमपरिमितं समाज्ञापयति
परमदैवतश्रीभौमगुप्तपादानुध्यातो विदि-

४. तविनयः शश्वत्कुशलकर्म्मण्युपहितपरमानुग्रहः प्रकृष्टकुलजन्मा दिवमुप-
गतयोर्म्मातापित्रोरात्मनश्च पुण्योपचितये

---

* ऐ.शि. ज्यूहरूले तथा नोलीले यो अभिलेखको संवत् ४८९ छपाउनुभएको छ।तर शुद्ध पाठ ४८७ हो ।

१. ऐ. शि. ज्यूहरूले 'मद्भित्या (तस्य)' पाठ छपाउनुभएको छ। नोलीले 'मूर्त्ति (म्) त्य– त्स्वेव)' पाठ छपाउनुभएको छ ।

५. स्वामिवार्त्तः सकलभुवनसम्भवस्थितिप्रलयकारणमनादिनिधनं भगवन्तमिह शङ्करनारायणस्वामिनं प्रतिष्ठापितवानपि च
६. योसौ सर्व्वत्रिभुवनगुरुः श्रेयसाञ्चाधिवासो यस्मिन् बद्धा नियमितफलाः सम्पदः पुण्यभाजाम् नानारूपं भुवनमखिलं
७. धार्य्यते येन चेदं तस्मिन्भक्तिर्न भवति वृथा शुद्धचित्ताशयानाम् ॥ भिन्ने पुंसां जगति च तथा देवताभक्तिभावे पक्षग्राहभ्रमित-
८. मनसां पक्षविच्छित्तिहेतोः इत्यर्द्धाभ्यां समुपरचितं यन्मुरारीश्वराभ्या-मेकं रूपं शरदिजघनश्यामगौरं तदव्यात् पुण्यानि ये
९. प्युभयलोकसुखावहानि कुर्व्वन्ति हि प्रतिदिनं विगताभिमानाः कृत्वापि तेत्र वि-धिवद्विषयोपभोगं स्वैः कर्म्मभिः सुकृतिनो दिव-
१०. मावसन्ति पुंसां पापकृतामधः सुकृतिनामूर्द्ध्वङ्गतिर्द्धोमतामित्येवं प्रविचिन्त्य निश्चितमतिः संप्रज्ञया प्रज्ञया दृष्टादृष्ट-
११. विधिप्रयोगनिपुणो वार्त्तः स्वपुण्याप्तये मूर्त्तिङ्केशवशङ्करार्द्धरचितामस्था-पयद्भक्तितः ॥

# अनुवाद

हे संगिनी लक्ष्मी, त्रिशूल र शार्ङ्ग हातमा लिएका हाम्रा पतिहरूको जोडपोडबेगरको जोडा हेर न। यी दुइटामा एउटा एउटाले पनि गर्न नसकिने काम के थियो र यसरी आफ्ना रूप छोडी मिलेका हुनन्। पार्वतीले यसो भनेर कुनै दिन जसलाई हेर्नुभएथ्यो। उहाँ अर्धशौरीश्वर (शङ्करनारायण) लाई सधैं नमस्कार छ।

संवत् ४८७ प्रथमाषाढ शुक्ल द्वितीयामा। भट्टारक (गद्दीनशीन) महाराज श्रीगणदेवबाट धेरै कालसम्म राज्य गरिरहनुभएको समयमा, परमदैवत श्रीभौमगुप्तका पाउको अनुग्रह पाएका, अनुशासन जानेका, सधैं बढिया काममा ठूलो अनुग्रह देखाएका, ठूलो कुलमा जन्मेका, वार्त्त (जागीरदार) स्वामीले स्वर्गमा गएका आफ्ना आमा बाबुको र आफ्नो पनि पुण्य बढाउनाका लागि सारा संसारको सृष्टि स्थिति प्रलयका कारण भएका, आदि र अन्त्य (जन्म र मरण) नभएका भगवान् शङ्करनारायण स्वामीलाई यहाँ स्थापना गरे। अरू पनि–

जो तीनै लोकमा सबभन्दा ठूला र कल्याणका घर पनि हुनुहुन्छ; पुण्यात्माहरूले जसलाई अर्पण गरेको संपत्ति ठीक ठीक फल दिने हुन्छ; नानारूप भएको यो सारा संसारलाई जसले अड्याइराख्नुभएको छ; मनको अठोट शुद्ध पारिसकेकाले उहाँ (परमेश्वर) मा गरेको भक्ति सित्तै खेर जाँदैन।

त्यस्तै संसारमा मानिसहरूको भिन्नाभिन्नै देवताहरूमा भक्तिभाव हुन्छ; पक्षपातमा परेर मनमा भ्रम भएका ती मानिसको पक्षपात हटाउनाको लागि विष्णुले र महादेवले आधा आधा भई यसरी जुन एउटै रूप लिनुभएको छ; शरद् ऋतुको मेघ जस्तो कालो र गोरो भएको त्यस (रूप) ले रक्षा गरोस् ।

जसले अहङ्कार नलिएर दुवै लोकमा सुख दिने धर्म कर्म दिनका दिन गर्दछन्; ती धर्मात्माहरू ता यस लोकमा राम्रोसंग सुखभोग गरेर पनि आफ्ना धर्म कर्मले स्वर्गमा बस्न पाउँछन् ।

पापी मानिसको अधोगति, धर्मात्मा बुद्धिमान्को उभो गति हुन्छ भन्ने कुरालाई राम्रोसंग पकड्न सक्ने बुद्धिले विचार गरेर अठोट बाँधी यो लोक परलोक दुवैतिरको काम गर्न सिपालु भएका वार्त्त स्वामीले आफ्नो र आफन्तको पनि पुण्य बढाउनाका लागि विष्णु र महादेवको आधा आधा (जीउ) बाट बनेको मूर्तिलाई भक्तिपूर्वक स्थापना गरे ।

## व्याख्या—

संवत् ४८७ मा स्वामी वार्त्तले शङ्करनारायणको मूर्ति स्थापना गरी राखेको यो अभिलेख तात्कालिक राजनैतिक अवस्था, धार्मिक भावना, विद्याको तह देखाउन निकै सफल भएको छ। यस वेला गद्दीमा लिच्छवि राजा गणदेव नै थिए। तर शासनको बागडोर भौमगुप्तको हातमा थियो तथा उनी एक किसिमका अघोषित राजाका रूपमा थिए भन्ने कुरा यो अभिलेखले देखाएको छ। यो अभिलेख राख्न लाउने व्यक्ति 'वार्त्त' हुन्। सरकारतर्फबाट विशेष वृत्ति (जागीर) पाउने व्यक्ति 'वार्त्त' कहलाउँथे। त्यस वेलाको परिस्थितिअनुसार यो महत्त्वपूर्ण पद थियो। वार्त्त जस्तो पदमा रहेको व्यक्ति त्यस वेलाको राजकाजबाट प्रभावित हुनु स्वाभाविक थियो। यसो हुनाले 'जसको शक्ति, उसको भक्ति' भने झैं स्वामी वार्त्तले गद्दीनशीन राजा गणदेवमा भन्दा भौमगुप्तमा बढी भक्ति देखाएका छन्। भौमगुप्तलाई सोझै राजाका रूपमा वर्णन गर्न त उनले आँट गरेका छैनन्। तैपनि उनलाई 'परमदैवत' भन्ने विशेषण लगाई यस वेलाका वास्तव राजा भौमगुप्त नै हुन् भन्ने कुरा उनले स्पष्ट झल्काएका छन्।

'राजा भट्टारको देवः' भनी राजालाई देवस्वरूप मान्ने चलन थियो। मनुस्मृतिकारले 'महती देवता ह्येषा नररूपेण तिष्ठति' भनी यो कुरा स्पष्ट शब्दमा नै लेखेका छन्। यही भावनाअनुसार राजालाई 'परमदैवत' भन्ने विशेषण लगाउने गरिन्थ्यो। वसन्तदेवका माथि गएका अभिलेखमा वसन्तदेवका पिता महीदेव आदरणीय राजा थिए भन्ने दर्शाउन उनले आफ्ना बाबुलाई यही 'परमदैवत' विशेषण लाएका छन्। भारतका अभिलेखमा पनि 'परमदैवत' पद ठूलठूला राजाहरूमा लागेको देखिन्छ। त्यस्तो राजकीय प्रभुता देखाउने परमदैवत पद यहाँ स्वामी वार्त्तले भौमगुप्तमा लाएका छन्। साथै स्वामी वार्त्तले आफूलाई राजाका पाउको अनुग्रह पाएको नभनी भौमगुप्तको पाउको अनुग्रह पाएका भनी गर्वसाथ लेखेका छन्। भौमगुप्तले विधिवत् पाएको सरकारी पद 'सर्वदण्डनायक महाप्रतिहार' को भने स्वामी वार्त्तले यहाँ उल्लेखसम्म पनि गरेका

छैनन् । यसरी भौमगुप्त अब आफूलाई विधिवत् राजा भनी घोषणा मात्र गर्न नसकेका तर राजा जस्तै हर्ताकर्ता हुन पुगेका सहायक शासक थिए भन्ने यताबाट स्पष्ट देखिन्छ । स्वामी वार्त्त जस्ता व्यक्तिहरूचाहिं उनको यो स्थितिका प्रशंसक, समर्थक बनेका थिए ।

यसरी अघोषित राजाको अवस्थामा भौमगुप्त पुगेका हुनाले पछि उनकै अनुसरण गरी हर्ता-कर्ता हुन पुगेका उनका नाति जिष्णुगुप्तले भौमगुप्तलाई पनि 'पूर्वराज' कै पङ्क्तिमा उभ्याइदिए । केवलपुरको अभिलेखमा परेको 'भट्टारकमहाराजश्रीवसुराजश्रीमहीदेवश्रीमानदेवश्रीगणदेवास्म-त्पितामहश्रीभूमगुप्त इत्यैतैः पूर्वराजभिः' यो वाक्यले उक्त कुरा देखाउँछ । उपर्युक्त कुरा नबुझ्दा भौमगुप्तको अवस्थाबारे केही इतिहासकार अलमलिएका छन् । भौमगुप्तले कुनै वेला स्वतन्त्र राजाका रूपमा गद्दीमै बसेर शासन चलाएको देखिन्छ भन्ने अनुमान कुनै इतिहासकारले गरेका छन्†। परन्तु यो कुरा चाहिं सत्य होइन । गद्दीनशीन लिच्छवि राजा कमजोर हुँदा भौमगुप्तले अघोषित राजाकै हैसियतले शासन चलाएका थिए तापनि, आफ्ना मन परेका व्यक्तिलाई राजा थाप्ने अवस्थामा उनी पुगेका थिए तापनि सोझै आफूलाई राजाचाहिं उनले घोषित गरेका थिएनन् । उनले विधिपूर्वक पाएको सरकारी पद त 'सर्वदण्डनायक महाप्रतिहार श्री' मात्र हो । यस कुराको पुष्टि सरकारी सनद शिलापत्रले गर्दछन् । स्वामी वार्तको गैरसरकारी यस अभिलेखमा भौमगुप्तको 'परमदैवत' भनी उनको प्रशंसा गाइएको छ तापनि यसको २ वर्षपछिको सरकारी सनदपत्रमा पद उही 'सर्वदण्डनायक महाप्रतिहार श्री' मात्रै छ । यो कुरा चपलीगाउँको अभिलेखबाट बुझिन्छ। भौमगुप्तको पालाको विष्णुपादुकाको फेदीमा रहेको सनदपत्रबाट पनि यो स्पष्ट बुझिन्छ ।

कुनै पनि व्यक्तिले पाएको पदको निर्धारण गर्नाको लागि हामीले सरकारी तौरले राखिएका सनद शिलालेख आदिलाई नै प्रमाणका रूपमा लिनुपर्छ । आशामुखी व्यक्तिले प्रशंसा गरी राखेको अभिलेखलाई प्रमाणको रूपमा लिनुहुँदैन । 'जसको शक्ति, उसको भक्ति' गर्नेहरूले त विधिवत् नपा-एको तर व्यवहारमा घुमाउरो तरहले देखिएको अधिकारको प्रशंसा गर्नु अस्वाभाविक छैन । यस्ता उदाहरण धेरै पाइन्छन् । यही कुरा पछि जिष्णुगुप्तको पालामा पनि केही अंशमा भएको थियो । मध्यकालमा पनि यस्ता घटना भएका थिए । उदाहरणार्थ महामन्त्री जयसिंहरामको घटनालाई लिन सकिन्छ । जयसिंहराम पहिले राजा जयार्जुनदेवका महामन्त्री थिए । जयार्जुनदेवलाई पदच्युत गरी स्थितिमल्ल गद्दीमा बसे । पहिले त जयसिंहराम विद्रोही बनेका थिए । उनी दुइपटक कैदमा समेत परेका थिए । तर पछि स्थितिमल्लको चतुर्याइँले उनी स्थितिमल्लको पक्षमा मिल्न आए । अनि उनी स्थितिमल्लका हजुरिया बन्न पुगे । ने. सं. ५१५ (वि. सं. १४५२) मा स्थितिमल्लको मृत्यु भएपछि जयसिंहराम र उनको परिवारको शक्ति प्रशस्त बढ्यो । यसैले उनका पुरोहितले जयसिंहरामलाई 'महाराजाधिराज' सम्म फूर्तिसाथ लेखेको पाइन्छ§ ।

---

† लिच्छवि संस्कृति' को १४,१६ पृष्ठ हेर्नुहोस् ।

§ 'पूर्णिमा' ७ पूर्णाङ्कका २७–३० पृष्ठ हेर्नुहोस् ।

यसै गरी काश्मीरको इतिहासतिर दृष्टि दियौं भने पनि यस्ता उदाहरण पाइन्छन् । गद्दीमा राजा रहे तापनि प्रतिहारले राजा जस्तै भई शासन गरेको घटना राजतरङ्गिणीमा लेखिएको पाइन्छ । फेरि हाम्रा भौमगुप्त त खाली सर्व्वदण्डनायक र महाप्रतिहार मात्रै पनि होइनन् । उनले राजोचित 'श्री' पद त विधिपूर्वक नै पाएका थिए । शाहकालमा जङ्गबहादुरले 'श्री३' पद पाए जस्तै नै भौमगुप्तले राजाबाटै 'श्री' पद पाएका थिए । सरकारी सनदपत्रमा समेत यसको उल्लेख हुन्थ्यो । यसै हुँदा उनका प्रशंसक र वंशजहरूले उनलाई राजाकै पङ्क्तिमा राख्न पुगेका थिए ।

यहाँनिर नरेन्द्रदेवले भौमगुप्तको उल्लेख किन गरे भन्ने कुरामा पनि अलिकता विचार गर्नु आवश्यक छ । काठमाडौं यङ्गालहिटीको अभिलेखमा नरेन्द्रदेवले यस्तो बोलेका छन्–

"पूर्वराजभिर्मानेश्वरे भुवनेश्वरदेवकुलं यथाकल्पिताग्रहारादिप्रत्यायं पालनोपभोगाय प्रतिपादितं केनापि च हेतुना श्रीभूमगुप्तेनाक्षितं राजकुलभोग्यमभूत् तदिदमधुना पूर्वमर्यादास्थिति-प्रवर्तनादृतमनोभिरस्माभिः.......प्रजानां श्रेयसे......प्रतिमुक्तम्"

यस वेला गुप्त आभीरहरूलाई हटाई नरेन्द्रदेव भरखर शक्तिमा आएका थिए । गुप्त आभीर-हरूको हातमा शक्ति रहे ताका देवताको सम्पत्तिसम्म पनि हरण गरिन्थ्यो; उक्त हरण गद्दीनशीन राजाले स्वेच्छाले गरेका होइनन्; भौमगुप्तले सो हरेका हुन् भनी आफ्ना विरोधीको निन्दा फैलाउन यहाँ नरेन्द्रदेवले भौमगुप्तको नाम लिएका हुन् ।

यति लामो कुरा गर्नाको तात्पर्य भौमगुप्त सर्वाधिकार हातमा लिएका हर्ताकर्ता शासक थिए तापनि उनले सोझै गद्दीमा बसी शासनचाहिं गरेका थिएनन् भन्ने हो । ३३ वर्षभन्दा लामो उनको कार्यकालमा गद्दीमा भने गणदेव, गङ्गादेव, शिवदेव आदि अनेक राजा फेरिएका थिए ।

## धार्मिक एकता ल्याउने प्रयत्न–

लिच्छविकालमा शैव, बौद्ध, वैष्णव आदि धार्मिक सम्प्रदायहरू यहाँ प्रचलित थिए । लिच्छवि राजाहरूले यी विविध धार्मिक सम्प्रदायलाई समान आदरको दृष्टिले हेरेका थिए । तर आभीर गुप्तहरूको हातमा शक्ति गएपछि धार्मिक सम्प्रदायमा अलि छेडपेच चल्न थाल्यो । वैदिक यज्ञ-यागादिका पक्षपातीहरू र बौद्धहरूमा केही कटुता देखापर्‍यो । यसको चर्चा पहिले गरिसकेको छ । भेदभावको यो भावना वैष्णव र शैव सम्प्रदायमा पनि अलि अलि देखापर्न थालेको बुझिन्छ । यसो हुनाले एकथरी उदार व्यक्तिहरूले धार्मिक सम्प्रदायमा एकता ल्याउनुपर्छ भनी सोच्न थाले । यो कुरा स्वामी वार्त्तको यस अभिलेखबाट थाहा पाइन्छ । स्वामी वार्त्तले आधा महादेव र आधा विष्णुको रूप मिलाई 'शङ्करनारायण' मूर्ति स्थापना गरेको कुरा यसमा परेको छ । यसरी महादेव र विष्णुको आधा आधा शरीर मिलाई संयुक्त रूपको 'शङ्करनारायण' मूर्ति बनाउनुपर्ने कारण पनि स्पष्ट रूपमा यहाँ खुलाई लेखिएको छ । यसो हुनाले तात्कालिक अवस्था बुझ्न यसबाट मदत मिल्छ ।

'मानिसले आफ्नो श्रद्धाअनुसार भिन्न भिन्न देवतामा भक्तिभाव राख्न सक्छन्; तर मनमा पनपक्षको भाव लिनुहुँदैन, ईश्वर सबै एकै हुन् भन्ने भाव यहाँ सुन्दर ढङ्गले यसरी व्यक्त गरिएको छ–

> "भिन्ने पुंसां जगति च तथा देवताभक्तिभावे
> पक्षग्राहभ्रमितमनसां पक्षविच्छित्तिहेतो: ।
> इत्यर्द्धाभ्यां समुपरचितं यन्मुरारीश्वराभ्या–
> मेकं रूपं शरदिजघनश्यामगौरं तदव्यात् ।"

स्वामी वार्त्त भौमगुप्तको पक्षका मानिस हुन् । यसो हुनाले शैव र वैष्णव सम्प्रदायमा धार्मिक एकता स्थापित गराउने विचार भौमगुप्तको पनि थियो भन्ने बुझिन्छ । विष्णुपादुकाको फेदीको शिवदेव + भौमगुप्तको अभिलेखमा विष्णु र महादेवको स्तुति संगसंगै समान रूपमा गरिएको उदाहरणबाट उक्त कुरा बुझिन्छ ।

यस अभिलेखमा अर्को कुराको पनि संकेत परेको छ । यस ताका घरगृहस्थी छोडी संन्यासतिर लागेकाको कदर गरिन्थ्यो । शैव, बौद्ध आदि सम्प्रदायका जोगी, भिक्षुहरू प्रतिष्ठित थिए । तर यहाँ स्वामी वार्त्तले घरगृहस्थीमै रहेर पनि शुद्ध भक्तिभावले सत्कर्म गरे स्वर्ग पुगिन्छ भन्ने कुरा जोड दिएर लेखाएका छन् ।

कविताको दृष्टिले पनि यो अभिलेख उत्कृष्ट छ । यस अभिलेखमा पद्यहरू धेरै छैनन् तापनि जति छन्, सुन्दर छन् । संस्कृतभाषामा राम्रो दखल भएका विद्वान्को कलमबाट यी पद्य निस्केका हुन् भन्ने देखिन्छ । यस कारण कविताको दृष्टिले उत्कृष्ट लिच्छविकालका अभिलेखमा यसको पनि गणना हुन्छ ।

यसरी स्वामी वार्त्तको यो अभिलेख अनेक दृष्टिले तात्कालिक कुरा बुझ्न उपयोगी रहेको छ ।

–◆–

[ ५१ संख्या ]

# चपलीगाउँको गङ्गादेवको अभिलेख

बूढानीलकण्ठ नारायणस्थान जाने बाटोमा 'चपलीगाउँ' भन्ने ठाउँ छ। त्यहाँ सानो देवलसंगै यो अभिलेख कुँदिएको शिलापत्र खडा रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३६ अङ्गुल लम्बा, १६ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ४८९ छ।

लेभीद्वारा ८ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा २१ संख्याको रूपमा यो छापिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट पाठ सच्याउन र थप्न मदत पाइएको छ।

## मूलपाठ

१. स्वस्ति मानगृहाद्बप्पपादानुध्यातो भट्टा-
२. रकमहाराजश्रीगङ्गादेवः कुशली तुन्चत्
३. चतुग्रामनिवासिनो ब्राह्मण ... ...
४. ... मनुष्य ... ... कुशलम्पृष्ट्वा
५. समाज्ञापयति विदितिमस्तु वो यथा
६. सर्व्वदण्डनायकमहाप्रतिहारश्रीभौ-
७. मगुप्तविज्ञापितेन मया शिलापट्ट-
८. केन प्रसादः कृत ... ... कु
९. टुम्बिनो ... ... मा
१०. ... ... ...
११. ... ... प्रतिमुक्त
१२. ... ...

१३. – – करणीयमेव मा भूदेवञ्च वृत्तिभुजां
१४. मापहानिरिति ... ... ... क्षेत्रं
१५ दत्तं ... ... ... ...
१६. अशीति ... करणीय ...
१७. ... न प्रवि ... ... †
१८. चिदपि किञ्चि ... (इ)त्येवं विदित्वाद्या-
१९. ग्रेण न केनचिदन्यथा करणीयं यश्चेद-
२०. मन्यथा कुर्य्यात्कारयेद्वा तस्याहमकृत्यका-
२१. रिणो वाढन्न मर्षयिष्यामीति भट्टारक–
२२. पादीयोप्यत्र दूतको वृषवर्म्मा ॥ संवत्
२३. ४८९ श्रावणशुक्लदिवाद्वादश्याम्

## अनुवाद

कल्याण होस् । मानगृह (दरबार)बाट बुवाको पाउको अनुग्रह पाएका, गाथमा आराम

---

† यस अभिलेखको १ देखि १७ पङ्क्तिसम्मको नोलीले छपाउनुभएको पाठ यस प्रकारको छ–

१. (ॐ स्वस्ति) मानगृहात्प . . . . . . (भट्टा)–
२. रकमहाराज (श्री)गणदेवः (कुशलो) . . .
३. . . . . प . . . . नव . . . . .
४. . . . मनु . . . . . . . . . .
५. . . . . . ज्ञापयति विदितमस्तु . . . . . .
६. . . . . द . . . न . . . . . . . . . . . . .
७. –गुप्तविज्ञापि (तेन) . . . . . . . . . . .
८. . . . . र . . . . . . . . . . . . ती–
९. . . . . . . . . . . . . . . . . .
१०. . . . . . . . . . . . . . . . . .
११. . . . . . . . . . . . . . . तस्त्र–
१२. . . . . . . . . . . . . . .
१३. . . . . . समि . . . . . . वति . .
१४. मा . . . . . ह नि . . . . . . . . . .
१५. . . . . . . . . . . . . .
१६. . . . . . . . . करम् . . . . . . .
१७. –न प्रवि . . . . . . . .

रहेका भट्टारक महाराज श्रीगङ्गादेवबाट तुञ्चत्चतु ग्राममा बस्ने ब्राह्मणलगायत (सारा) मानिस—लाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस्।

सर्वदण्डनायक महाप्रतिहार श्रीभौमगुप्तले हाम्रा हजूरमा बिन्ति चढाएका हुनाले हामीबाट शिलापत्र गरी निगाह गरिएको छ। ..........गृहस्थीहरू........माफी गरिएको छ। .........काम कार्वाइ नगर्नू। यसरी वृत्तिभुक् (जागीरदार) हरूलाई नोक्सान नपरोस् भन्नाका लागि.......खेत दिइयो। ......असी....... कामकार्बाइ... कुनै तरहले केही पनि.........

यो कुरा थाहा पाएर अबदेखि कसैले पनि अन्यथा नगर्नू। जसले अन्यथा गर्ला वा गराउला बेकाइदा गर्ने त्यसलाई हामी पक्का सहनेछैनौं।

यहाँ राजाका तर्फबाट दूतक वृषवर्मा छन्। संवत् ४८९ श्रावण शुक्ल द्वादशी।

## व्याख्या–

संवत् ४८७ सम्म गद्दीमा गणदेव थिए। माथि गएको स्वामी वार्त्तको अभिलेखबाट यो थाहा पाइन्छ। त्यसको दुइ वर्षपछिको संवत् ४८९ को यो अभिलेख हो। यो अभिलेख निकै खिइएको छ। तर यो खण्डितचाहिं भएको छैन। यस कारण जनतसंग पढ्दा यसको केही भाग अझै पढ्न सकिन्छ। लेभीले छपाउँदा यसमा राजाको नाम पढ्न सकेका थिएनन्। नोलीद्वारा छापिंदा चाहिं यहाँ राजाको नाम 'गणदेव' पढियो। तर अहिले मूलसंग पाठ भिडाइहेर्दा 'गणदेव' होइन; 'गङ्गादेव' पाठ देखियो। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपि धेरै वर्षअगि लिइएको हुनाले त्यसमा त 'गङ्गादेव' पाठ स्पष्टै देखिन्छ। मूल ढुङ्गामा पनि सूक्ष्म दृष्टिले हेरे 'गङ्गादेव' पाठ अहिले पनि देखिन्छ। देउपाटनको स्वामी वार्त्तको अभिलेखको संवत् नोलीले ४८९ पढ्नुभएको छ। त्यहाँ गणदेव राजा छन्। चपलीगाउँको यस अभिलेखमा पनि संवत् ४८९ छ। यसो हुनाले यो अभिलेख राखिएको ताका पनि गणदेव नै गद्दीमा होलान् भन्ने धारणाले नोलीले यहाँ राजाको नाउँ पढ्नामा बढी दृष्टि नदिनुभएको बुझिन्छ। तर देउपाटनको स्वामी वार्त्तको अभिलेखको संवत् ४८९ होइन, ४८७ हो। यसको चर्चा माथि गरिसकेको छ। चपलीगाउँको यस अभिलेखको संवत् भने ४८९ नै हो। यसरी यी दुइ अभिलेखमा दुइ वर्षको अन्तर छ।

जे होस्; चपलीगाउँको यस अभिलेखमा उल्लिखित राजाको शुद्ध नाउँ 'गङ्गादेव' हो भन्ने कुरामा शङ्का छैन। यस कारण गद्दीनशीन लिच्छवि राजाहरूको पङ्क्तिमा अब 'गङ्गादेव' लाई पनि राख्नुपरेको छ। गणदेवको अभिलेखमा जस्तै गङ्गादेवको प्रशस्तिमा पनि 'बप्पपादानुध्यात' भन्ने पद रहेको छ। यसबाट गङ्गादेव गद्दीनशीन राजाकै सन्तान देखिन्छन्। प्रसङ्ग विचार गर्दा गङ्गादेव गणदेवकै छोरा हुन् कि भन्ने देखिन्छ। यी गङ्गादेवको राज्यकाल कतिसम्म रह्यो; थाहा पाइएको छैन।

भौमगुप्तको अवस्था यस वेला पनि पूर्ववत् नै रहेको छ। गणदेवलाई जस्तै अब गङ्गादेवलाई गद्दीमा राखी भौमगुप्तले हर्ताकर्ता भई शासन चलाएको बुझिन्छ ।

बीचको निकै भाग पढ्न नसकिएको हुनाले यस अभिलेखमा के स्थिति बाँधेको कुरा परेको थियो; सो राम्ररी बुझ्न सकिएको छैन । सरकारी केही अधिकरणले चपलीगाउँभेकमा पस्न नपाउने गरिएको र यसबाट उक्त अधिकरणका जागीरदार (वृत्तिभुक् अधिकृत) लाई मर्का पर्न नपाओस् भनी गाउँलेहरूले केही जग्गा छुट्टयाइदिएको कुरा यसमा परेको थियो भन्ने कुरा बचेको भागको प्रसङ्गबाट बुझिन्छ ।

-★-

# मङ्गलबजारको भारविको अभिलेख

ललितपुर मङ्गलबजारमा भीमसेन–मन्दिरअगाडिको ढुङ्गे धारामा यो अभिलेख कुँदिएको ढुङ्गा गाडिएर रहेको छ। यसको छेउको भाग अलिकता खण्डित छ। यसको अभिलेख कुँदिएको भाग १५ अङ्गुल लम्मा १३ अङ्गुल चौडा छ। यहाँ संवत् ४९२ छ।

श्रीहेमराज शाक्यद्वारा 'अभिलेख–प्रकाश' को ५ पृष्ठमा यो छापिएको छ। यसको मूल ढुङ्गा मैले हेर्न पाएको छैन। शाक्यज्यूले दिनुभएको यसको प्रतिलिपिको आधारमा यहाँ सकभर पाठ शुद्ध्याइएको छ। मूलैबाट पढ्न सके यो अभिलेख पूरा पार्न सकिने सम्भावना छ।

## मूलपाठ

१. – – – – प्रलयसम्भवकारणस्य
स्तम्भाकृतेस्तरुण – – – – – – – –

२. स्याति – – – न गतो– – म प्रयानो
– – भवो दिशतु सन्ततमिष्टमी (शः)

३. नित्यं ख्यातगुणप्रभावचरिते वंशेपि लब्धास्पदे

४. जातस्यात्र जनस्य जन्म विफलं कीर्त्त्या विना जोवतः

५. दृष्टं सौख्यवताम्परत्र च सुखं प्रा– – कीर्त्त्या यया

६. तां कर्त्तुं न समुत्सुकः प्रयतते को नाम मूढः स्वय (म्)

७. कीर्त्तेः फलं स किल भारविरित्यवेक्ष्य
मानुष्यकं क्षणिकमर्त्थवताञ्च– –

८. मातापितृस्वकृतपुण्यविवर्द्धनार्थ–
मेतां भिषग्–ष– – – चकार की(त्तिम्)
९. अक्षयणीयार्थञ्च यूपग्रामस्य दक्षिणपश्चिमेन
१०. क्षेत्रं दत्तं यस्य पिण्डकं विंशिकया मानिकाः पञ्चाशदिति
११. संवत् ४९२ वैशाखशुक्लदिवा १३

# अनुवाद

सृष्टि, (स्थिति), प्रलयका कारण भएका... ...महादेवले स्थायी इष्ट कुरा दिऊन्।
गुण प्रभाव र चरित्रद्वारा सधैं प्रख्यात भएको, ठूलो पद पाएको कुलमा जन्मेका मानिस भए तापनि कीर्ति विना बाँचेका छन् भने तिनको जन्म सफल हुँदैन। यहाँ सुख पाएकाहरू पनि जुन कीर्तिले गर्दा अर्को लोकमा पनि सुख पाउँछन्। त्यस्तो कीर्ति राख्न कुनचाहिं मूर्ख मानिस उत्सुक भई आफै कोशिश गर्दैन।

कीर्तिको यस्तो फल र धन भएकाहरूको पनि मनुष्य–जीवन क्षणिक छ भन्ने कुरा विचार गरेर भारविले आमा बाबु र आफ्नो पुण्य बढोस् भनी.....यो कीर्ति बनाउन लाउनुभयो।

यो कहिले नाश नहोस् भन्नाका लागि यूपग्रामको दक्षिण पश्चिमपट्टि खेत गूठी राखियो। जसको पिण्डक (कुत) बीस बीसको हिसाबले पचास मानिका छ।

संवत् ४९२ वैशाखशुक्लत्रयोदशी।

**व्याख्या–**

धारा, पाटी पौवा आदि लोकहित हुने कृतिलाई 'कीर्ति' भनिन्थ्यो भन्ने कुराको चर्चा पहिले गरिसकेको छ ◊। यस अभिलेखमा पनि त्यस्तै कीर्ति राखेको कुरा परेको छ। पाटन मङ्गलबजारको प्रसिद्ध धारामा यो अभिलेख पाइएको हुनाले सोही धारा बनाई यो अभिलेख राख्न लाइएको हो भन्ने निश्चित छ। यसरी मङ्गलबजारको यो धारा लिच्छविकालमा बनेको देखिएको छ। साथै लिच्छविकालदेखि अहिलेसम्म चालू रहेको यो धारा निकै उल्लेखनीय हुन आएको छ।

यहाँ कीर्ति राख्ने व्यक्तिको नाउँ 'भारवि' छ। भारविको कुनै परिचय यहाँ दिइएको छैन। तर भारवि मानदेवका प्रसिद्ध दौहित्र (छोरीका छोरा) नै हुन् भन्ने संकेत प्रसङ्गबाट तथा यस अभिलेखमा व्यक्त गरिएको भावबाट पनि पाइन्छ।

---

◊ माथि गएको ४१ संख्याको अभिलेखको व्याख्या हेर्नुहोस्।

पानीको स्रोत पत्ता लाई त्यहींदेखि सुरक्षित रूपमा पानी ल्याई बनाउनुपर्ने हुनाले यस्ता धारा बनाउन निकै खर्च लाग्दथ्यो। यस कारण निकै सम्पन्न व्यक्तिले मात्र यस्ता कीर्ति राखेर जान सक्थे। पुगिसरी आएकाहरूले यस्ता कीर्ति राखेर जानुपर्छ भन्ने धारणा त्यस वेला लोकमा प्रचलित थियो। यही कुरा यस अभिलेखमा व्यक्त गरिएको छ।

हाँडिगाउँभेकमा यस्तै कीर्ति बनाउन लाई संवत् ४७२ मा भारविले राख्न लाएको अभिलेख माथि परिसकेको छ। त्यसको बीस वर्षपछि यूपग्रामका जनतालाई पानीको सुबिधा होस् भन्ने उद्देश्यले भारविले यो कीर्ति बनाउन लाएका हुन्। हाँडिगाउँको सो अभिलेखमा भारविले आफ्नो वर्णन फूर्तिसाथ गराएका थिए। त्यस वेला आफ्नो रूप, धन, बल आदिबारे भारविलाई निकै गर्व रहेको थियो। यस वेला भने भारविको मनमा मनुष्य–जीवन क्षणिक छ भन्ने वैराग्य पैदा भएको बुझिन्छ। यसरी कालक्रमले मानिसको भावनामा आउने अन्तरलाई हामी पाउँछौं।

यस अभिलेखको लेखनशैली प्रौढ छ। लिच्छविकालको पद्यसाहित्यको नमूनारूपमा यसलाई पनि लिन सकिन्छ। तर मूल हेर्न नपाइएको हुनाले अभिलेख पूरा पढ्न सकिएको छैन। यस अभिलेखलाई सुरक्षित रूपमा राख्नेतिर दृष्टि जानु आवश्यक छ।

★

# शङ्खमूल सिकुबहीको अभिलेख

पाटन शङ्खमूल सिकुबहीमा बाटोमा केही देवमूर्तिहरू भएको स्थान देखापर्छ। त्यहाँ मातृका देवमूर्तिको पादपीठमा यो अभिलेख कुँदिएको छ। यहाँ संवत् ४६५ छ।

'पूर्णिमा' १७ अङ्कमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ॐ बहिर्देशाद्दक्षिणस्यां राजपुत्रवज्ररथनाम्नो..................
२. आसीत्तद्गोत्रजेनैकेन याश्च वाग्वत्या मणिमत्याश्च सन्धिदेशे........
३. मातरः स्थापिता आसन् मृन्मयास्ताः कालक्रमेण चिरन्तनतयाति-
विशीर्ण्णभग्नपतितपाणिपादा जाता इत्थम्भूताश्च ता अवलोक्य.........
४. – नेन च पश्चात्परमधार्म्मिकेन बभ्रुवर्म्मनाम्नासामेव मातॄणाम्प्र-
तिसंस्कारक्रिया चिन्तितासीदसम्भाव्यैव ताङ्क्रियां स कालधर्म्मवश.......
५. फलोपभुक्तये दिवन्नीतवां (न्) तदधुना तद्भ्रातुष्पुत्रस्य नित्यधर्माभिरत-
चेतस्कस्य परमभागवतस्य देशवर्म्मनाम्नो मात्रा पतिव्रतया
६. धर्म्मिष्ठया देशभट्टारिकया तस्यैव कालगतस्य बभ्रुवर्म्मणः स्वर्ग्गा-
नन्त्याय मातापित्रोर्भर्त्तुरात्मनश्च पुण्याभिवृद्धये पुनरन्यथा
७. देव्यो मातरः शैल्याः कारिता इति संवत् वर्षशत ४६५

## अनुवाद

ॐ बहिर्देशबाट दक्षिणतिर राजपुत्र वज्ररथको......हुनुहुन्थ्यो। उहाँकै गोतिया एक जनाले वाग्वती र मणिमतीको दोभानको ठाउँमा जुन मातृका देवी स्थापना गरिएका थिए;

माटाका ती मूर्तिहरू कालक्रमले पुराना भएका हुनाले ज्यादै जीर्ण भए र तिनका हात–खुट्टा भाँचिए।

यसरी बिग्रेका ती मूर्ति देखेर ठूला धर्मात्मा बभ्रुवर्माले ती मातृकाहरूको जीर्णोद्धार गर्ने विचार गर्नुभएको थियो। (तर) यो काम पूरा गर्न नपाउँदैमा कालगतिले. . . .फल भोग्नाको लागि उहाँ स्वर्ग जानुभयो।

त्यस कारण अहिले उहाँकै भतिजा, सधैं धर्ममा मन लाउने, परमभागवत देशवर्माकी आमा पतिव्रता धर्मात्मा देशभट्टारिकाले स्वर्गवासी उहाँ बभ्रुवर्माको अनन्तकालसम्म स्वर्गमा वास होस् भनी तथा आमा बाबु पति र आफ्नो समेत पुण्य बढोस् भनी फेरि अर्कै किसिमले ढुङ्गे ती मातृका देवीहरू बनाइएका छन्।

संवत् ४९५

## व्याख्या–

राजपुत्र (रजपूत) वज्ररथका कुनै गोतियाले वाग्वती र मणिमतीको दोभानमा मातृका देवताको स्थापना गरेका थिए; ती मूर्ति माटाका थिए; यसैले केही कालपछि हातखुट्टा भाँचिए र ती बिग्रिए; ती मूर्तिको जीर्णोद्धार गर्ने विचार बभ्रुवर्माले गरेका थिए; तर सो पूरा गर्न नपाउँदैमा उनको मृत्यु भयो; यस कारण उनका भतिजा देशवर्माकी आमा देशभट्टारिकाले माटाका ठाउँमा ढुङ्गाका मातृ–देवता स्थापना गरेको कुरा यस अभिलेखमा परेको छ।

बभ्रुवर्माको उल्लेख गणदेव + भौमगुप्तका संवत् ४८२ का अभिलेखहरूमा 'दूतक' का रूपमा आएको छ। यस कारण उनी राजदरबारमा प्रवेश पाएका ठूला अधिकारी थिए भन्ने थाहा पाइन्छ। यसै गरी बभ्रुवर्माका भतिजा देशवर्मा पनि शिवदेव + अंशुवर्माको खोपासीको अभिलेखमा दूतकका रूपमा देखापरेका छन्। यसरी बभ्रुवर्माको परिवार राजकाजसंग सम्बन्ध राख्ने तथा प्रतिष्ठित थियो भन्ने थाहा पाइन्छ। यसो भए तापनि यस अभिलेखमा गद्दीनशीन राजा वा सहायक शासकको उल्लेख गरिएको छैन। संवत् ४७९ देखि ५१२ सम्म नै शासनको बागडोर भौमगुप्तको हातमा रहेको थियो। यस कारण यस वेला (संवत् ४९५ मा) पनि शासनको बागडोर त भौमगुप्तकै हातमा रहेको बुझिन्छ। तर यस वेला गद्दीमा को राजा थिए; योचाहिं भन्न गाह्रो छ। ४८२ का अभिलेखमा दूतक रहेका हुनाले बभ्रुवर्माले त भौमगुप्तको साथ दिएको देखिन्छ। तर देशवर्मा चाहिं भौमगुप्तहरूदेखि अप्रसन्न रहेको संकेत यस अभिलेखबाट पाइन्छ। यसै हुँदा भौमगुप्तहरूको उल्लेख गरिएन। पछि भौमगुप्तको पतन भई अंशुवर्माको हातमा शक्ति गएपछि देशवर्माले दूतकका रूपमा राजकाजमा स्थान पाएको घटनाले पनि देशवर्मा भौमगुप्तका विरोधी थिए कि भन्ने दर्शाउँछ।

राजपुत्र वज्ररथसंग बभ्रुवर्माहरूको नाता पर्दथ्यो भन्ने संकेत यस अभिलेखबाट पाइन्छ। 'राजपुत्र' शब्दले सोझै राजाकै छोरालाई पनि बुझाउँथ्यो। जस्तै ठिमीको अभिलेखमा तथा

भृङ्गारेश्वको अभिलेखमा जयदेव (द्वितीय) लाई 'राजपुत्र' भनिएको छ । साथै राजवंशका क्षत्रियविशेषलाई पनि 'राजपुत्र' शब्दले बुझाउँथ्यो । यस ताका आफूलाई 'राजपुत्र' भन्ने क्षत्रियहरू पनि यहाँ निकै रहेको बुझिन्छ ।

लिच्छविकालमा माटाका देवमूर्ति बनाउने चलन थियो भन्ने यस अभिलेखले देखाएको छ । माटाका मूर्तिमा स्थायित्व कम हुने हुनाले तिनलाई टिकाऊ पारी राख्न गाह्रो हुन्थ्यो भन्ने उदाहरण पनि यस अभिलेखले देखाएको छ । यसै हुँदा लिच्छविकालका माटाका कति मूर्तिहरू पछि जीर्णोद्धार नभई बिलाएको पनि हुन सक्छ । पछिसम्म पनि माटाका देवमूर्तिहरू बनाउने चलन यहाँ थियो । राता मछिन्द्रनाथ, सेता मछिन्द्रनाथ, जयवागीश्वरी आदि कति प्रसिद्ध देवमूर्तिहरू प्रायः माटाकै हुन् ।

# विष्णुपादुकाको फेदीको शिवदेवको अभिलेख

बूढानीलकण्ठ नारायणस्थानदेखि पश्चिम–उत्तरतिर विष्णुपादुका डाँडाको फेदीमा विष्णुमतीको तीरैमा एउटा पीपलको बोट छ। सो बोटसंगै यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३१ अङ्गुल लम्बा, १३ अङ्गुल चौडा छ। यहाँ संवत् ५१२ छ।

'पूर्णिमा' १५ अङ्कमा संशोधन–मण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ............ ............... ............

२. .................... ला कुलाङ्ग ............ ...............

३. ............ .........म्मीजनितकर ............ .......

४. –र्ला-ब्जाविलासैरलसमृदुगतिर्व्वासुदेवः स पातु

५. – – विद्यात्मरूपम्भवभयशमनङ्कोटिसंर्ग्गमाद्य(म्)

६. (स)र्व्वाकारं दृढन्तम्पुनरणुमनघं सर्व्वकल्पव्यतीतम्

७. .....क्षीण..........दमितरजसो वेधसः संश्रयी (यः)

८. ......रातेजाः स जयति सततं विश्वधामा स्मरारिः

९. (स्वस्ति मा)नगृहाद् बप्पपादानुध्यातस्सततमुपचीयमान-

१०. (शशाङ्क)किरणामलयशःप्रतानो लिच्छविकुलकेतु-

११. (र्भ ट्टारकमहा)राजश्रीशिवदेवः कुशली थंतुंरीद्रङगे

१२. (प्रधानपुरस)सरान्ग्रामकुटुम्बिनः कुशलमाभाष्य समा-

१३. (ज्ञापयति वि)दितमस्तु वो यदेतत्पूर्व्वराजैरस्य द्रङ्ग-

१४. ............(उ)पकर्म्मपरितुष्टेन मल्लकरकरणीयङ्कार्षा-

१५. (पणा) दूद्र्ध्वं न ग्रहीतव्यमिति प्रसादः कृत. .
१६. प्रसादस्य दृढीकरणार्थं सर्व्वदण्डनायकमहाप्रतीहा-
१७. रभौमगुप्तविज्ञापितेन मया शिलापट्टकेन प्रसादः
१८. कृत इति समाज्ञापना दूतकश्चात्र महाबलाद्ध्यक्ष
१९. कुलप्रवीर इति ।। संवत् ५१२ ज्येष्ठशुक्लदशम्याम्

# अनुवाद

. . . . . .विलासद्वारा अल्छी भई विस्तारै हिंडेका उहाँ वासुदेवले रक्षा गरून् ।

विद्यात्मस्वरूप भएका, संसारको भय हटाउने, करोडौं सृष्टि गरेका, पहिला, सबैतिर ढाकेर रहेका (व्यापी) ठूला, फेरि अत्यन्त सूक्ष्म, कुनै प्रकारको खोट नभएका, सबै कल्प नाघेका . . . . . .रजोगुणलाई दबाएका ब्रह्माजीका आड भएका . . . . .तेजिला, संसारको आश्रयस्थान भएका उहाँ महादेव सधैं ठूला हुनुहुन्छ ।

*कल्याण होस् । मानगृह (दरबार) बाट बप्प (बुवा) को पाउको अनुग्रह पाएका,* बढ्दै गइरहेको (शुक्लपक्षको) चन्द्रमाको जून जस्तो सफा कीर्ति फैलिएका, लिच्छविकुलको झण्डास्वरूप भएका, गाथमा आराम रहेका भट्टारक महाराज श्रीशिवदेवबाट थंतुंरीद्रङ्ग्मा बस्ने मुखियालगायत ग्रामका गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस् ।

पहिलेका राजाबाट . . . . . (कुनै) उपकारले खुशी भई मल्लकर विषयमा १ कार्षापणभन्दा भन्दा बढी नलिनू भनी यो द्रङ्गलाई निगाह गरिएको थियो। सो निगाहको थमौती गर्न सर्वदण्डनायक महाप्रतिहार भौमगुप्तले हामीमा बिन्ति चढाएका हुनाले हामीबाट यो शिलापत्रद्वारा निगाह गरिएको छ। यस्तो आज्ञा छ। यहाँ दूतक महाबलाध्यक्ष कुलप्रवीर छन् ।
संवत् ५१२ ज्येष्ठ शुक्ल दशमी ।

## व्याख्या-

संवत् ४८९ को चपलीगाउँको अभिलेखपछि संवत् ५१५ भन्दा अघि कम अभिलेख पाइएको छ। यस बीचमा पाइएका शङ्खमूल सिकुबही श्रादिका अभिलेखमा पनि गद्दीनशीन राजा वा सहायक शासकको नामोल्लेख परेको छैन । यस कारण ४८९ देखि ५१५ सम्मको बीचको समयमा कुन अवस्था रह्यो; अंशुवर्माको उदय कहिले कसरी भयो आदि कुरा अज्ञात थिए। यो अभिलेख पाइएपछि यस विषयमा निकै कुरा खुल्यो। संवत् ५१२ को यस अभिलेखमा राजा शिवदेवको उल्लेख परेको छ। साथै भौमगुप्त सर्वदण्डनायक महाप्रतिहारका रूपमा कायमै छन्। यसरी संवत् ४७९ देखि ५१२ सम्म अर्थात् ३३ वर्षभन्दा लामो कालसम्म भौमगुप्तको दबदबा कायम

भएको देखिन्छ । भौमगुप्तका कार्यकालमा कमसेकम पनि गद्दीमा तीन जना लिच्छवि राजा फेरिएको थाहा भइसकेको छ ।

यस वेलासम्म अंशुवर्मा अगाडि देखापरेका छैनन् । तर भविष्यमा हुने परिवर्तनको संकेत यस अभिलेखले दिइसकेको छ। निकट भविष्यमै भौमगुप्तको पतन हुने लक्षण यहाँ देखापरिसकेको छ। अलि गहिरिएर विचार गऱ्यौं भने हामी यो कुरा थाहा पाउन सक्छौं। पहिलो कुरा यस अभिलेखमा परेको शिवदेवको प्रशस्तिले उनी गणदेव, गङ्गादेवको अवस्थामा थिएनन् भन्ने दर्शाउँछ । यस अभिलेखमा शिवदेवको अगाडि अरू विशेषणको साथै 'लिच्छविकुलकेतु' भन्ने विशेषण पनि लाइएको छ । शिवदेवभन्दा अगाडि गद्दीमा बसेका राजाहरू पनि सबै लिच्छविकुलकै थिए । तर अरू कसैले लिच्छविकुलको गौरव गाएको उल्लेख पाइंदैन । अहिले आएर शिवदेवले मात्र लिच्छविकुलको गौरव गाउन किन शुरू गरे; यो विचारणीय छ। यसमा रहस्य लुकेको छ। 'हामी प्रसिद्ध लिच्छवि राजवंशका हौं, नाममात्रका राजा होइनौं; राज्यमा वास्तव अधिकार हाम्रो हो; हामीले आफूले चाहेको किसिमले शासन गर्न पाउनुपर्छ भन्ने भाव शिवदेवको मनमा उठिसकेको यताबाट आभास पाइन्छ ।

सर्वदण्डनायक, महाप्रतिहार पदमै रहे तापनि भौमगुप्तले राजोचित 'श्री' पद लिएका थिए । पहिलेका सबै अभिलेखमा भौमगुप्तको अगाडि 'श्री' लागेको पाइन्छ । तर यस अभिलेखमा भने भौमगुप्तमा पहिलेदेखि लाग्दै आएको सो राजोचित 'श्री' खोसिएको छ। ध्यान दिनुपर्ने महत्त्वपूर्ण कुरा यो छ। भौमगुप्तको पतन हुने लक्षण यसले स्पष्टसंग देखाएको छ ।

अर्को ध्यान दिनुपर्ने कुरा यहाँ रहेका दूतकमा पनि छ। राजाका विश्वासपात्र व्यक्ति दूतक बनाइन्थे। यहाँ दूतक महाबलाध्यक्ष (प्रधानसेनापति) कुलप्रवीर छन् । यसको अर्थ सेनाका सर्व्वोच्च अधिकारीलाई शिवदेवले आफ्नो पक्षमा मिलाइसकेको छ। अर्थात् सेनाले पनि राजा शिवदेवको साथ दिएको छ। यस प्रसङ्गमा 'महाबलाध्यक्ष' भनेका को हुन्; त्यस वेला उनको कुन स्थान थियो भन्ने कुराको पनि अलिकता विचार गर्नुपरेको छ ।

## महाबलाध्यक्ष–

संस्कृतवाङ्मययमा राजकाजको प्रकरणमा 'बल' शब्दले फौजलाई बुझाउँछ। 'स्वाम्यमात्यसुहृत्कोशराष्ट्रदुर्गबलानि' भनी राज्यका सात अङ्गमध्ये एक फौज मानिएको छ । राष्ट्ररक्षाको लागि बल = सेनाको आवश्यकता हुनु स्वाभाविक छ। लिच्छविकालका शासकहरूले पनि राष्ट्रको रक्षाको लागि सेना राखेका थिए । चीनिया वृत्तान्तअनुसार सैनिकसंख्या निकै भएको देखिन्छ।

फौजका सबभन्दा माथिल्ला अधिकारी महाबलाध्यक्ष कहलाउँथे। यस कारण महाबलाध्यक्ष भनेका प्रधान सेनापति हुन् भन्ने निश्चित छ । भारतका अभिलेखहरूमा पनि 'महाबलाध्यक्ष'को उल्लेख पाइन्छ ।

लिच्छविकालमा मर्यादाक्रममा 'महाबलाध्यक्ष' को स्थान निकै माथिल्लो तहमा रहन्थ्यो भन्ने कुरा अंशुवर्माको हाँडिगाउँको अभिलेखबाट थाहा पाइन्छ। त्यहाँ मर्यादाक्रमअनुसार दिइने रकमको प्रसङ्गमा महाबलाध्यक्षलाई राजा, युवराजसरह दिने कुराको उल्लेख परेको छ। विचारार्थ सो अभिलेखको एक अंश यहा उद्धृत गर्नुपरेको छ–

"......मर्यादानिमित्तं यावन्तः पणा देयास्तेषामयथोचितदानेन मा भूदुभयेषां पी(डे)ति मया पूर्वराजानुवृत्त्या यथोचितप्रदानाय शासनोपनिबन्ध.....लिखितो यत्र.....श्री भट्टारकपादानाम्प्रत्येकं पु २५ महाबलाध्यक्षस्य पु २५...."

(......मर्यादाको निमित्त जति पण दिनुपर्ने हो; ती ठीकसंग नदिनाले दुवैलाई मर्का नपरोस् भन्नाका लागि मैले अघिका राजाले बाँधेको साबिक दस्तूरबमोजिम दिनाका लागि सनद सवाल.......लेखिराखेको छु। जसमा.......श्रीभट्टारक (राजा, युवराज) प्रत्येकलाई २५ पुराण, महाबलाध्यक्षलाई २५ पुराण...)

यसरी लिच्छविकालमा महाबलाध्यक्ष पद महत्त्वपूर्ण थियो भन्ने स्पष्ट छ। महाबलाध्यक्ष विन्दुस्वामी, रामस्वामी आदिको नामोल्लेख तात्कालिक अभिलेखमा आएको छ। विष्णुपादुकाको फेदीको यस अभिलेखमा महाबलाध्यक्ष कुलप्रवीरको उल्लेख आएको छ * ।

अब बाहिर शिवदेवको प्रतिष्ठा बढ्न लागेको थियो। यसै हुँदा यहाँ 'सततमुपचीयमान-(शशाङ्क) किरणामलयशःप्रतानः' भनी शिवदेवको वर्णन गरिएको छ।

यसको केही कालपछि महत्त्वपूर्ण परिवर्तन हुन्छ। गुप्त आभीरहरू शक्तिबाट हटाइन्छन्। यस घटनाका सूत्रधार अंशुवर्मा हुन्छन्। यस कुराको चर्चा तल यथाप्रसङ्गमा गरिनेछ।

यस अभिलेखको उठानमा वासुदेव र महादेवको स्तुति परेको छ। वैष्णव र शैवसम्प्रदायमा एकता ल्याउने विचारधाराले ठाउँ पाएको थियो भन्ने संकेत यसबाट पाइन्छ। यसताका 'शङ्करनारायण' को संयुक्त रूप लोकप्रिय भएको देखिन्छ भन्ने चर्चा माथि गरिसकेको छ।

विष्णुपादुकाको फेदीमा लिच्छविकालमा विकसित बस्ती थियो भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ। विष्णुमतीको तीरमा हावापानी स्वच्छ हुँदा यताभेकमा बस्ती बढी बसेको बुझिन्छ। यो भेक उहिले 'थंतुंरी' द्रङ्ग कहलाएको थियो। अलि उचा जग्गामा बसेको बस्ती हुँदा 'थंतुंरी' नामकरण भएको बुझिन्छ। 'थंतुंरी' यो शब्द मध्यकालमा नेवारीभाषामा प्रचलित 'थंथु' शब्दको पूर्वरूप हो भन्ने देखिन्छ। भक्तपुर–दरबारको एक भाग 'थंथुराजकुल' कहलाएको थियो‡। यसै गरी उकालो चढी जानुपर्ने शहरका बाटालाई 'थंथुलँ' भनिएको पाइन्छ§।

---

* 'पूर्णिमा ११ पूर्णाङ्कको १२ पृष्ठमा पनि 'महाबलाध्यक्ष' बारे विचार गरिएको छ।

‡ 'पूर्णिमा' २ पूर्णाङ्कको १२ पृष्ठ तथा 'अभिलेख–संग्रह' ७ भागको २६ पृष्ठ हेर्नुहोस्।

§ 'पूर्णिमा' २ पूर्णाङ्कको २४ पृष्ठ हेर्नुहोस्।

'थंतुंरी' बस्ती कति विकसित थियो भन्ने कुरा बुझ्नाका लागि पहिले 'द्रङ्ग' भनेको के हो; सो बुझ्नुपरेको छ ।

द्रङ्ग—

लिच्छविकालको इतिहासमा महत्त्वपूर्ण स्थान राख्ने 'द्रङ्ग' शब्द संस्कृतवाङमयमा उत्तिको चल्तीको शब्द होइन । संस्कृत भाषाका कति प्रसिद्ध कोशमा यसको उल्लेख पाइंदैन । तर शब्द कल्पद्रुम, वाचस्पत्यमा 'द्रङ्ग' को उल्लेख परेको छ । विशेष गरेर वाचस्पत्यमा द्रङ्गको अर्थ अलि खुलाएर लेखिएको छ । शहरविशेषको नाउँ द्रङ्ग हो । 'पत्तन' भन्दा माथिल्लो दर्जाको 'कर्वट' भन्दा तल्लो दर्जाको बस्ती 'द्रङ्ग' हो भनी वाचस्पत्यमा लेखिएको छ । जस्तै—

"द्रङ्ग—पुरीभेदे । 'कर्वटादधमो द्रङ्गः पत्तनादुत्तमश्च सः' इति वचनात् ।"

वाचस्पत्यमा 'कर्वट' र 'पत्तन' को बारेमा यस्तो लेखिएको छ—

"कर्वट—द्विशतग्राममध्ये सुन्दरस्थाने, यत्र गत्वा क्रयविक्रयादिना सन्निहितजनपदवासिनो जना जीवन्ति तादृशे ग्रामे पुरे वा ।',
"पत्तन— नगरे ।"

यसबाट साधारण 'ग्राम' भन्दा माथिल्लो तहको व्यापारको केन्द्ररूपको बस्ती 'द्रङ्ग' हो भन्ने थाहा पाइन्छ† ।

कल्हणविरचित राजतरङ्गिणीमा धेरै ठाउँमा 'द्रङ्ग'को उल्लेख आएको छ । काश्मीरमा पनि 'द्रङ्ग' कहलाएका बस्ती प्रशस्त थिए भन्ने त्यताबाट थाहा पाइन्छ । त्यताबाट 'द्रङ्ग' को परिचय पनि केही पाइन्छ । यस कारण विचारको लागि त्यहाँको केही अंश यहाँ उद्धृत गरिन्छ ।

"जित्वा माणिक्यनामानं तेन सेनापतिं रणे ।
प्रापि शूरपुरद्रङ्गाज्जयश्रीः श्रीश्च भूयसी ॥७।१३५२॥
जहार तुरगांल्लुण्ठि चकाराट्टिलिकापणे ।
मार्गद्रङ्गादिभङ्गं च तदा सर्वत्र सोऽकरोत् ॥८।१९९१॥
बद्ध्वाधिकारिणः शुल्कं गृह्णताकारि राजवत् ।
तेन स्वनाम्ना भाण्डेषु द्रङ्गे सिन्दूरमुद्रणम् ॥८।२०१०॥"

(तिनले लडाइँमा माणिक्यनामक सेनापतिलाई जितेर शूरपुर द्रङ्गबाट धेरै धन र जितबाजी पनि पाए ।

---

† 'वाचस्पत्य'मा द्रङ्गको स्पष्ट परिभाषा पाइएपछि पूर्वधारणालाई अब केही बदल्नुपरेको छ ।

त्यस वला तिनले घोडाहरू हरे; अट्टिलिका–बजार लुटे; बाटो द्रङ्ग आदि बिगारे ।

तिनले द्रङ्गका अधिकारीहरूलाई बाँधी भन्सार लिई राजाले जस्तै मालसामानमा आफ्नै नाउँको लालछाप लगाए ।)

राजतरङ्गिणीका यी वर्णनबाट हामी 'द्रङ्ग' को झलिकता झलक पाउँछौं । यहाँ विद्रोही कोष्ठेश्वरले द्रङ्गका अधिकारीलाई बाँधी भन्सार लिई राजाले जस्तै मालसामानमा आफ्नै नाउँको लालछाप मारेको उलेल्ख परेको छ । यसबाट द्रङ्ग विशेष रूपले गुलजार रहन्थ्यो; त्यहाँ बन्द व्यापार प्रशस्त चल्थ्यो; सरकारी भन्सार अड्डा आदि हुन्थे भन्ने कुरा बुझिन्छ। अर्को श्लोकमा लडाइँमा सेनापतिलाई मारी 'शूरपुर–द्रङ्ग' कब्जा गर्दा जितबाजीका साथै प्रशस्त धन पनि पाएको उल्लेख छ । यसबाट पनि उक्त कुराको पुष्टि हुन्छ । साथै सैनिक दृष्टिले पनि द्रङ्गको केही महत्त्व रहन्थ्यो भन्ने पनि यस वर्णनबाट बुझिन्छ ।

हाम्रा यताका लिच्छविकालका अभिलेखहरू केलाई हेर्दा पनि अनेक ग्राम,तलसहितको विकसित बस्तीले लिच्छविकालमा 'द्रङ्ग' को संज्ञा पाएको थियो भन्ने स्पष्ट थाहा पाइन्छ । विचारार्थ लिच्छविकालका केही द्रङ्गको चर्चा यहाँ गर्नुपरेको छ ।

हंसगृहद्रङ्ग– भक्तपुर सूर्यविनायकदेखि दक्षिणपट्टि अनन्तलिङ्गेश्वर स्थान रहेको छ । त्यहाँ लिच्छवि राजा नरेन्द्रदेवको अभिलेख पाइएको छ। त्यसबाट लिच्छविकालमा यस भेकमा 'हंसगृह-द्रङ्ग' नामक विकसित बस्ती थियो भन्ने थाहा पाइन्छ। त्यस अभिलेखमा 'हंसगृहद्रङ्गस्य. . ग्रामस-हितस्य' भन्ने उल्लेख परेको हुनाले हंसगृहद्रङ्ग अन्तर्गत अरू ग्राम पनि थिए भन्ने थाहा पाइन्छ। त्यहाँ परेको 'द्रङ्गसीमाभ्यन्तरस्थानाम्ब्राह्मणप्रमुखानाम्माचाण्डालेभ्यः' यस वाक्यले हंसगृहद्रङ्गको सीमा (इलाका) पनि निश्चित थियो; त्यहाँ ब्राह्मणलगायत चाण्डालसम्मको बस्ती थियो भन्ने दर्शाउँछ।

यस द्रङ्गभित्र प्रसिद्ध नारायणस्थान थियो । सो देवताको पूजाआजा, वार्षिक यात्रा धूमधामसंग गरिन्थ्यो । त्यहाँको धार्मिक विधानको देखरेखको लागि एक जना 'कुलपति' नै नियुक्त हुन्थे । देवमन्दिरमा सफाइ आदिको लागि दसौं देव-दास र आरती आदिको लागि बीसौं देवदासीहरू हुन्थे। गोयुद्धोत्सव आदि हुन्थे ।

यसरी हंसगृहद्रङ्ग लिच्छविकालमा विकसित बस्ती थियो भन्ने यताबाट देखिन्छ ।

लेम्बटीद्रङ्ग– नेपाल–उपत्यकाबाहिर दक्षिणपट्टि रहेको लेलेभेक लिच्छविकालमा 'लेम्बटी-द्रङ्ग' कहलाएको थियो। त्यहाँ रहेको शिवदेव + अंशुवर्माको अभिलेखबाट यो कुरा थाहा पाइन्छ । लेलेभेकमा अत्यन्त विकसित विद्याकेन्द्ररूपको बस्ती थियो भन्ने कुरा सो अभिलेखले देखाएको छ। त्यहाँ धर्म, शिक्षा, स्वास्थ्य, मनोरञ्जन आदि अनेक कार्य 'गोष्ठी' द्वारा गरिन्थे । गोष्ठीप्रथा त्यस वलाको विकसित समाजको द्योतक रहेको छ । लेलेको सो अभिलेखमा लेम्बटीद्रङ्गभित्रका अनेक

गोष्ठीको उल्लेख आएको छ; सार्वजनिक आरोग्यशाला (औषधालय) को उल्लेख आएको छ; विद्यासम्बन्धी संघट्टनको उल्लेख आएको छ ।

शीताटिकाद्रङ्ग– चन्द्रागिरि र दह्चोक डाँडाको बीच भागमा सतुङ्गल, किर्सिपिंडी, थानकोट, भेल्बू, बलम्बू, मालटार, चौकिटार आदिमा अनेक बस्ती थिए। यो भेकका धेरैजसो बस्ती शीताटिका द्रङ्ग अन्तर्गत थिए। यताका अभिलेखबाट यो कुरा थाहा पाइन्छ। पहिले शीताटिकातल नामले यो भेक प्रसिद्ध थियो। पछि मात्र 'शीताटिका' ले द्रङ्ग संज्ञा पाएको थियो। यस विषयको चर्चा माथि गरिसकेको छ। शीताटिका द्रङ्ग प्रशस्त विकसित थियो भन्ने यताबाट थाहा पाइन्छ ।

नुप्पुन्नद्रङ्ग– पश्चिम १ नं. केवलपुरमा लिच्छविकालमा 'नुप्पन्नद्रङ्ग' थियो भन्ने कुरा त्यहाँ पाइएको अभिलेखबाट थाहा पाइन्छ। लिच्छविकालका वसुराज आदि धेरै शासकहरूले सो बस्तीको बासिन्दाहरूलाई सुबिधा गरिदिएको उल्लेख त्यस अभिलेखमा परेको छ। यसबाट निकै अघिदेखि यो बस्ती विकसित हुँदै आएको देखिन्छ। यहाँ पनि प्रसिद्ध नारायणस्थानको उल्लेख आएको छ।

यूपग्रामद्रङ्ग– ललितपुरभेकमा लिच्छविकालमा बाक्लो बस्ती बसेको थियो। तर अहिले ललितपुर भनिए जस्तै उठानैदेखि एउटै शहरको संज्ञा भने रहेको थिएन। संगसंगै बसेका विभिन्न नाउँका ग्रामहरूको समूहको रूपमा यो रहेको थियो। मङ्गलबजार र त्यसको आसपासको प्रदेश पहिलेदेखि 'यूपग्राम' कहलाएको थियो। पछि यूपग्राम 'द्रङ्ग' बनेपछि आसपासका धेरै बस्ती यस द्रङ्गअन्तर्गत रहेका थिए। यसो हुनाले अभिलेखमा 'यूपग्रामद्रङ्गस्य सर्वतलसहितस्य' भन्ने उल्लेख पाइन्छ ।

ग्रामको स्थानीय प्रशासन चलाउनाका लागि 'पाञ्चाली' (पञ्चायत) रहन्थ्यो। साधारण ग्राममा एक पाञ्चाली रहन्थ्यो। तर अनेक ग्राम मिली द्रङ्गको रूप लिएका बस्तीहरूमा भने अनेक पाञ्चाली रहन्थे। पाटन मीननाथको अभिलेखमा यूपग्रामद्रङ्गभित्रका पाँच पाञ्चालीको उल्लेख आएको छ। अरू अभिलेखमा अरू पाञ्चालीको उल्लेख आएको छ ।

खर्जुरिकाविहार, मध्यमविहार, श्रीराजविहार आदि अनेक विहारको उल्लेख यस भेकका अभिलेखमा आएको छ। एक ग्रामबाट अर्को ग्राममा जाने बृहत्पथ, महापथ आदि मूलसडकको उल्लेख पनि यताका अभिलेखमा आएको छ ।

दक्षिणकोलिग्रामद्रङ्ग– कान्तिपुरको मध्यभाग त्यस बेला 'कोलीग्राम' नामले प्रसिद्ध थियो। कोलीग्रामको दक्षिण भाग 'दक्षिणकोलिग्राम 'भन्ने आबाद थियो। आबादी बढ्दै गई पछि यसले 'दक्षिणकोलिग्रामद्रङ्ग'को संज्ञा पायो। दक्षिणकोलिग्रामद्रङ्ग अन्तर्गत अनेक ग्रामहरू थिए। यो कुरा यङ्गालहिटीको नरेन्द्रदेवको अभिलेखमा परेको 'दक्षिणकोलिग्रामद्रङ्गस्य सर्वतलग्रामैः सहितस्य' भन्ने उल्लेखले देखाउँछ। यूपग्रामद्रङ्गमा जस्तै यहाँ पनि अनेक पाञ्चालीहरू थिए। यङ्गालहिटीको भीमार्जुनदेव + विष्णुगुप्तको अभिलेखबाट द्रङ्गको सीमानिर्धारणसम्बन्धीअलिकता

कुरा बुझिन्छ । पुरानो दक्षिणकोलिग्राम त्यहाँ कायम भएको 'द्रङ्ग'को चार भागको एक भाग रूपको थियो । अर्थात् दक्षिणकोलीग्राम आदि अरू ग्रामसमेत मिलेर मात्र 'द्रङ्ग' कहलाएको थियो । यो कुरा उक्त अभिलेखमा परेको 'दक्षिणकोलिग्रामस्य पूर्वमेव द्रङ्गचतुर्भागत्वेन प्रविभक्तस्य' यस उक्तिले देखाउँछ ।

अरू द्रङ्गहरू–नक्साल हाँडिगाउँतिर पनि लिच्छविकालमा विशेष बस्तीहरू थिए । तिनमा ताम्रकुट्टशाला, मानेश्वर, शाम्भपुर, ह्मम्प्रिग, पुठम्प्रिङ्ग, जमयम्बी, पुंदट्ट आदि बस्तीहरू पनि प्रमुख थिए । नारायणचौर नक्सालको अभिलेखमा यी बस्तीहरूलाई 'द्रङ्ग' को संज्ञा दिइएको उल्लेख परेको छ । जस्तै–

"ताम्रकुट्टशाला । मानेश्वर । शाम्भपुर । ह्मम्प्रिग । पुठम्प्रिङ्ग । जमयम्बी पुंदट्टग्रामाणां द्रङ्गत्वमात्रमेव प्रसादीकृतम् ।"

यसबाट ग्राम विकसित हुँदै गएपछि सरकारीतर्फबाट 'द्रङ्ग' भनी घोषित गरिन्थ्यो । कुनै पनि बस्तीले 'द्रङ्ग' संज्ञा पायो भने त्यसको गौरव बढ्थ्यो भन्ने यताबाट थाहा पाइन्छ ।

माखोपृ द्रङ्ग– ललितपुर र कान्तिपुरको तुलनामा भक्तपुरमा लिच्छविकालमा बस्ती अलि कम थियो भन्ने देखिन्छ । तर भक्तपुरको गोलमाढीटोलको शिवदेव + अंशुवर्माको अभिलेखमा 'माखोपृम्सतलद्रङ्गनिवासिनः' भन्ने उल्लेख आएको छ । यसबाट 'माखोपृ' द्रङ्गको रूपमा विकसित बस्ती यता पनि थियो भन्ने देखिएको छ ।

थंतुंरीद्रङ्ग– विष्णुपादुकाको फेदीको यस अभिलेखबाट यस भेकमा लिच्छविकालमा 'थंतुंरीद्रङ्ग' नामक बस्ती थियो भन्ने बुझिएको छ । माथि गरिएको चर्चाबाट बन्द–व्यापार चली गुलजार भएको, प्रशासनको दृष्टिले विशिष्ट दर्जा दिइएको भन्सार अड्डा रहेको, निश्चित इलाका भएको एक किसिमको शहर रूपको विकसित बस्ती 'द्रङ्ग' कहलाउँथ्यो भन्ने सिद्ध भएको छ । यस कारण 'थंतुंरीद्रङ्ग' पनि त्यस किसिमकै विकसित बस्ती हो भन्ने कुरामा शङ्का छैन† ।

**मल्लकर–**

यस अभिलेखमा थंतुंरीद्रङ्गका बासिन्दाहरूसंग 'मल्लकर' एक कार्षापणभन्दा बढी नलिने व्यवस्था मिलाइदिएको कुरा परेको छ । लिच्छविकालका अरू अभिलेखमा पनि 'मल्लकर' को उल्लेख ठाउँ ठाउँमा आएको छ । 'मल्लकर' बारे इतिहासकारहरूको निकै मतभेद रहेको छ । 'मल्ल' शब्दका धेरै थरी अर्थ हुँदा यसो हुनु स्वाभाविक पनि छ ।

'मल्लजातिका मानिसमा लागेको कर' अथवा 'मल्लजातिको आक्रमणबाट बच्न उठाइएको कर' यो होला भनी केही विद्वान्ले अड्कल गरेका छन् । संस्कृतमा 'मल्ल' शब्दको अर्थ

---

† 'स्थरु द्रङ्ग' को चर्चा तल चापागाउँको अभिलेखमा गरिएको छ । 'पूर्णिमा' १८ अङ्कमा पनि त्यस वेलाका बस्तीबारे विचार गरिएको छ ।

'पहलमान' भन्ने पनि हुन्छ। लेलेको अंशुवर्माको अभिलेखमा 'मल्लयुद्धगोष्ठी' को उल्लेख आएको पनि छ। यसबाट लिच्छविकालमा पहलमान लडाउने चलन थियो भन्ने थाहा पाइन्छ। यसो हुनाले यस्तै पहलमान लडाउने उत्सवको उपलक्ष्यमा लिइने कर 'मल्लकर' होला भनी अर्काथरीले अनुमान गरेका छन्। तर अभिलेखहरू केलाई हेर्दा उपर्युक्त दुवै कुरा सत्य होइनन् भन्ने स्पष्ट देखिन्छ। विचारार्थ 'मल्लकर' को उल्लेख भएका अभिलेखको केही उद्धरण यहाँ दिनुपरेको छ—

"तेभ्यो मल्लकर.......समुचितताम्रपणचतुष्टयादूर्द्ध्वं (न ग्रा) ह्यमिति प्रसादद्वयं समधिकन्दत्तं" (धरमपुरको अभिलेखबाट)

"श्रीमहासामन्तांशुवर्मा.........समाज्ञापयति........कुक्कुटसूकराणां मल्ल–(पोता)नां मत्स्यानाञ्चाबाधनेन परितुष्टै रस्माभिर्भट्टाधिकरणाप्रवेशेन वः प्रसादः कृतो......" (बुङ्मतीको अभिलेखबाट)

"...श्रीमहासामन्तांशुवर्मा......समाज्ञापयति......शालाप्रणालीकर्मपरितोषितै-रस्माभि...........मल्लपोतसूकरकराणां......मुक्त्वा......" (वटुको अभिलेखबाट)

"...अन्यश्चास्माभिः प्रयोजनान्तराराधितैर्भवतां ग्रामनिवासिनां कुटुम्बिनाम्प्रसादविशेषो दत्तो....मल्लकरे च पणचतुष्टयन्देयमिति" (थानकोटको अभिलेखबाट)

"...यो युष्माकं मल्लकरः पूर्वं...श्चतुर्भिस्ताम्रिकपणैः प्रतिमुक्तोभूदस्माभि...(प)णाः प्रतिमुक्ता मल्लपोतकानामपि मर्यादा..." (यङ्गालहिटीको अभिलेखबाट)

यी उद्धरणहरूमा 'मल्ल' को उल्लेख कुखुरा, सुंगुर, माछाहरूसंगै आएको छ। यसबाट कुखुरा सुंगुरहरू जस्तै 'मल्ल' पनि पाल्तू प्राणिविशेष हो भन्ने स्पष्ट थाहा पाइन्छ। बुङ्मतीको अंशुवर्माको अभिलेखबाट त यो अझ स्पष्ट हुन्छ। त्यहाँ कुक्कुट, सूकर, मत्स्य जस्तै मल्लपोतलाई राम्ररी हेरचाह गरेर उत्पादन बढाएको हुनाले अंशुवर्माले खुशी प्रकट गरेको कुरा परेको छ। यस कारण 'मल्ल' पाल्तू प्राणिविशेष हो भन्ने कुरामा कत्ति पनि शङ्का छैन। यिनैमा लागेको कर 'मल्लकर' हो।

माथि उद्धृत अभिलेखमा 'मल्लकर' साथै 'मल्लपोतकर' को पनि उल्लेख आएको छ। 'पोतः पाकोर्भको डिम्भः पृथुकः शावकः शिशुः २।५।३८ अमरकोशको यस वचनअनुसार 'पोत' भनेको बच्चा हो भन्ने निश्चित छ†। यसबाट 'मल्लकर' पहलमानीसम्बन्धी कर होइन भन्ने स्पष्ट-

† कुनै इतिहासकारले 'पोत' पनि करविशेष हो भनी लेखेका छन्। तर यसमा कुनै सत्यता छैन।

बुझिन्छ। किनभने पहलमानको बच्चामा समेत कर लाग्ने कुरा कुनै हालतमा मिल्ने देखिंदैन।

माछा आदिमा लागेको करभन्दा 'मल्ल' मा लागेको कर अलि बढी रूपमा लिइन्थ्यो भन्ने कुरा माथि उद्धृत अभिलेखबाट थाहा पाइन्छ। विष्णुपादुकाको फेदीको यस अभिलेखमा 'मल्लकर' एक कार्षापण (१६पण) भन्दा बढी नलिनू भन्ने कुरा परेको छ। यसबाट कहीं मल्लकर एक कार्षापणभन्दा बढी पनि लिइन्थ्यो भन्ने बुझिन्छ। कहीं पछि घटाएर चार पण मात्र लिने गरियो भन्ने कुरा धरमपुर र थानकोटको अभिलेखबाट बुझिन्छ। ठूला मल्ल र बच्चा मल्लमा भिन्नै व्यवस्था लागू थियो भन्ने कुरा यङ्गालहिटी र वटुको अभिलेखबाट थाहा पाइन्छ। कुखुरा, सुंगुर आदिका बच्चामा भने यस्तो भिन्नै करव्यवस्थाको उल्लेख शिलालेखहरूमा आएको छैन। यसबाट कुक्कुट, सूकरहरूभन्दा 'मल्ल' ठूलो जातिको प्राणी हो भन्ने थाहा पाइन्छ। नेवारी भाषामा राँगोको एकथरी जातलाई 'मले मे' भनी अहिलेसम्म भनिन्छ। यस कारण 'मल्लकर' राँगोमा लागेको कर र 'मल्लपोतकर' राँगोको बच्चामा लागेको कर हो कि भन्ने मलाई लागेको छ। यसको निर्णयको लागि अरू प्रमाणको प्रतीक्षा गर्नुपरेको छ।

## लिच्छविकालका मुद्रा–

यस अभिलेखमा 'कार्षापण' नामक मुद्राको उल्लेख परेको छ। पुराण, पण, पणपुराण नामक अरू किसिमका मुद्राहरू पनि लिच्छविकालमा प्रचलित थिए भन्ने कुरा अरू अभिलेखबाट थाहा पाइन्छ। त्यस वेला प्रचलित मुद्राहरूमा 'पुराण' माथिल्लो तहको देखिन्छ। यो मुद्रा चाँदीको हुन्थ्यो। थानकोटको भीमार्जुनदेव+जिष्णुगुप्तको अभिलेखबाट १६ पणबराबर १ कार्षापण हुन्थ्यो भन्ने थाहा पाइन्छ। त्यहाँ '... यद्देयमासीत्तस्यार्धम्प्रतिमुक्तं ......येन कार्षापणन्देयन्तेनाष्टौ पणा देया, येनाष्टौ पणा, देयं तेन पणचतुष्टयम्' भनी लेखिएको छ। यहाँ 'कार्षापणको आधा आठ पण' भनिएको हुनाले एक कार्षापण बराबर सोह्र पण हुंदा रहेछन् भन्ने स्पष्ट भएको छ। त्यस वेला सबभन्दा बढी प्रचलित मुद्रा 'पण' थियो। 'पण' तामाको हुन्थ्यो। 'ताम्रिकपण' भनी अभिलेखहरूमा खुलाएर लेखिएको पनि पाइन्छ। नरेन्द्रदेवको पालादेखि एक थरी अर्को मुद्राको पनि प्रचलन भएको देखिन्छ। त्यो मुद्रा हो 'पणपुराण'।

लिच्छविकालका मुद्राहरू त प्रशस्त मात्रामा पाइएका छन्। तर ती तामाका छन्। चीनीया ताङवृत्तान्तमा पनि नेपाली मुद्रा तामाका छन् भन्ने वर्णन परेको छ। यसबाट लिच्छवि राजाहरूले आफ्ना टक तामाका मात्र ढालेको देखिन्छ। 'पुराण' आदि चाँदीका टकहरू जुन चलनचल्तीमा आएका थिए; ती व्यापारसम्बन्धबाट भारततिरबाट आएका देखिन्छन्। तर यस विषयमा अहिले निश्चित रूपमा भन्न सकिंदैन। प्रसङ्गबाट देखिएको कुरा मात्र यो हो। यस विषयमा बढी खोजी हुनु जरूरी छ।

अहिले पाइएका तामाका मुद्राहरूमा 'श्रीमानाङ्क' 'श्रीगुणाङ्क' 'अंशुवर्मा' 'वैश्रवण' 'पशुपति' 'जिष्णुगुप्त' आदि अङ्कित गरिएको हामी पाउँछौं। 'श्रीमानाङ्क' मुद्रा प्रसिद्ध

राजा मानदेवको हो भन्ने अब निश्चित भइसकेको छ। यसमा अङ्कित 'श्रीभोगिनी' ले र यसको लिपिले उक्त कुरा सिद्ध गर्छ। 'श्रीगुणाङ्क' मुद्रा कसको हो भन्ने निश्चित हुन सकेको छैन। यो मुद्रा राजा गुणकामदेवको हुनुपर्छ भन्ने अनुमान गरिएको छ। तर 'गुणकामदेव' नामक लिच्छवि राजाको उल्लेख तात्कालिक अभिलेखमा अहिलेसम्म पाइएको छैन; वंशावलीहरूमा मात्र पाइन्छ। लिपिको दृष्टिले विचार गर्दा 'श्रीगुणाङ्क' मुद्रा अंशुवर्माभन्दा अघिको हो भन्ने देखिन्छ। यसमा राजोचित 'श्री' अङ्कित गरिएको हुनाले यो गुणकामदेवको वा 'गुण' उठानमा भएका कुनै लिच्छवि राजाको नाउँमा ढालिएको मुद्रा हो भन्ने कुरामा चाहिं शङ्का छैन। अंशुवर्माका विभिन्न थरी मुद्रा पाइएका छन्। तिनमा एक थरी मुद्रामा 'महाराजाधिराजस्य श्रचंशोः' अङ्कित गरिएको पनि पाइन्छ। 'वैश्रवण' मुद्रा कसले चलाएको हो भन्ने कुरामा विद्वान्हरूको एक मत हुन सकेको छैन। यसमा राजोचित 'श्री' लागेको छैन। यस कारण यो राजाको नाउँमा ढालिएको मुद्रा होइन भन्ने स्पष्ट छ। यसको लिपि र यसमा अङ्कित 'कामदोही' आदि कुराले यो मुद्रा अंशुवर्माले नै चलाएको हो भन्ने देखिएको छ। 'पशुपति' अङ्कित मुद्राहरू पनि अनेक थरी पाइएका छन्। यसमा पनि राजोचित 'श्री' अङ्कित गरिएको छैन। यस कारण यो पनि कुनै राजाको नाउँबाट चलाइएको होइन भन्ने स्पष्ट छ। 'पशुपतिभट्टारकपादानुध्यात' भनी पशुपतिप्रति अतिशय भक्ति प्रकट गर्ने पहिला शासक अंशुवर्मा नै हुन्। यस कारण पशुपतिनाथको सन्मानमा 'पशुपति' अङ्कित मुद्रा अंशुवर्माले नै पहिले प्रचलित गरेको देखिन्छ। लिपिको दृष्टिले विचार गर्दा पशुपति मुद्रा विभिन्न समयका देखिन्छन्। यसरी अंशुवर्मापछिका शासकहरूले पनि पशुपतिनाथको सन्मानमा 'पशुपति' मुद्रा प्रचलित गरेको देखिन्छ। 'श्रीजिष्णुगुप्त' अङ्कित मुद्रा प्रसिद्ध आभीरगुप्त जिष्णुगुप्तले लिच्छवि राजालाई मिची चलाइएको हो।

लिच्छविकालका मुद्राहरूबारे पर्याप्त खोजी हुनु बाँकी छ। पछि हुने खोजीले यस विषयमा बढी प्रकाश पार्दै जाने आशा लिनुपरेको छ।

यसरी विष्णुपादुकाको फेदीको यस अभिलेखले तात्कालिक निकै कुरामा प्रकाश पारेको छ।

–★–

# चापागाउँको शिवदेवको अभिलेख

'चापागाउँ' नामक प्रसिद्ध बस्तीको बीच भागमा भन्सारटोलमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ४० अङ्गुल लम्बा, १७ अङ्गुल चौडा छ। यसको शिरोभाग खण्डित छ। यहाँ संवत् पनि अहिले देखिंदैन; फुटिसकेको छ।

नोलीद्वारा ३२ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति मानगृहादपरिमितयशा बप्प(पादानुध्यातो लिच्छविकुल)
२. केतुर्भट्टारकमहाराजश्रीशिवदेवः (कुशली ... .... .... नि)
३. वासिनः प्रधानपुरस्सरान्कुटुम्बिनः कुशलमाभाष्य समाज्ञाप-
४. यति विदितम्भवतु भवतां यथेह स्थरुद्रङ्गे[१]..........
५. मत्स्योपक्रयङ्कृत्वा प्रतिनिवर्त्तमानानामेकस्य पु.... .... ....
६. शुल्कापह्रासेन काष्ठिकामत्स्यभारक एकस्मिंश्च त........ (ताम्रि)
७. कपणत्रयञ्च भुक्कुण्डिकामत्स्यभारके दश भुक्कु.. ... ...
८. त्रिपणाः राजग्रीवके दश राजग्रीवमत्स्याः पणत्रयं ... ... ...
९. रीमत्स्यभारके... .... ... ...त्रिपणाः मुक्तामत्स्यभा(रके)...
१०. यम्..... ..... .... .... ...(प)ञ्चाशत्तमशुक्लन्तदस्य..........[२]
११. केतु ... ... .... .... ... ...कल्य प्राङ्नृपतिभि...
१२. ......... ........ ...... व्यापियश.......
१३. ......... ..... ...... मस्मिन्प्रसादे ....
१४. ...... ...... ......... .......कोवेकै ...

नोलीका पाठ–१.—द——   २. त्त्रमशुल्कन्तदस्य

१५. ... ... ... ... ... ... ... (चिरकाल) स्थितये चास्य प्र (सा)

१६. (दस्य) ... ... ... ... ... (शिलापट्टशास) नमिदन्दत्तम्....

१७. ... ... ... ... ... ... ... ... भाविभिश्चायं

१८. (प्रसादः)... ... ... ... ... ... ... .. ... (भूप) तिभिर्द्धर्म्मगु–

१९. रुभिर्गुरु (कृतप्रसादानुवर्त्तिभिरियमाज्ञा सम्यक्पालनीये) ति समाज्ञापना

२० दूतकश्चात्र .... .... .... .....वैशाखशुक्लपञ्चम्याम्

## अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट ठूलो कीर्ति फैलिएका, बुवा (को पाउको अनुग्रह पाएका, लिच्छविकुलका) झण्डास्वरूप भएका (गाथमा आराम रहेका) भट्टारक महाराज श्रीशिवदेवबाट .........(ग्राम) मा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस् ।

यहाँ स्थरुद्रङ्गमा.......माछा बिक्री गरेर फर्केकाहरूको एउटाको.......शुल्क (भंसारदर) मा कमी गरी.....एक भारी काष्ठिका माछामा....तीन तामाका पण, एक भारी भुक्कुण्डिका माछामा दशवटा तो माछा र तीन पण, (एक भारी) राजग्रीव माछामा.... तीन पण, एक भारी मुक्ता माछामा .....तीन पण.....पचासौं भाग शुल्क , त्यस कारण यसको.......बनाएर.......पहिलेका राजाहरूले...........फैलिएको कीर्ति.. .......यस निगाहमा..........

यो निगाह धेरै कालसम्म कायम होस् भनी सनद शिलापत्र गरी दिइएको छ। पछि हुने..... राजाहरूले पनि नियम कानूनलाई ठूलो संझी, आफ्ना मान्य जनले गरिदिएको निगाहको ख्याल राखी यो आज्ञाको राम्ररी पालना गर्नुपर्छ भन्ने आज्ञा छ ।

यहाँ दूतक.........छन्।.........वैशाख शुक्ल पञ्चमी

### व्याख्या–

३३ वर्षभन्दा बढी कालसम्म एक टङ्कारसंग शासनको बागडोर आफ्नो हातमा राख्न सफल भएका 'अघोषित' राजा रूपका भौमगुप्तको पतनको लक्षण देखापरिसकेको थियो भन्ने चर्चा योभन्दा अघिको अभिलेखमा गरेको थिएं। हुन पनि त्यसको लगत्तै भौमगुप्तको पतन भएको कुरा यो अभिलेखले देखाएको छ । यस अभिलेखमा र यसपछिका अरू अभिलेखमा पनि भौमगुप्तको उल्लेख आएको छैन। यस बेला भौमगुप्तलाई पन्छाउने काम भइसकेको छ। कालगतिले नै भौमगुप्तको मृत्यु भयो कि उनलाई बलैले सदाको लागि पन्छाइयो; यो कुरा स्पष्ट रूपमा देखाउने प्रमाण त प्रकाशमा आएको छैन । तर पूर्वापर प्रसङ्ग विचार गर्दा बलैले भौमगुप्तलाई पन्छाएको

हो भन्ने बुझिन्छ। विष्णुपादुकाको फेदीको अभिलेखमा उनको राजोचित 'श्री' खोसेर उनलाई निस्तेज पारिसकेको थियो। यसरी उनलाई पन्छाउने योजना भित्रभित्र तयार भइरहेको त्यसबाट झल्किन्छ। अनि लगत्तै पछि उनलाई बलैले सदाका लागि पन्छाइयो। उनीपछि उनका वंशजहरूले उनको स्थान लिन नसकेको कुराले उक्त कुराको पुष्टि गर्छ। भौमगुप्तलाई पन्छाउने योजनाको सञ्चालन भित्र बसी अंशुवर्मालि गरेका थिए। शुरूका अंशुवर्माका अभिलेखमा 'पृथुसमरसम्पात-निर्जयाधिगतशौर्य्यप्रतापोपहतसकलशत्रुपक्षप्रभावेन' जस्ता विशेषण लागेका हुनाले भौमगुप्तहरू-लाई पन्छाउँदा संघर्ष पनि भएको अनुमान हुन्छ।

जे होस्; चापागाउँको यस अभिलेखमा भौमगुप्तको उल्लेख परेको छैन। यसबाट यस बेला भौमगुप्तलाई पन्छाउने काम भइसकेको स्पष्ट छ। यसमा शिवदेव एक्लैको मात्र उल्लेख परेको छ। यस बेलासम्म अंशुवर्मा पनि अगाडि नदेखापरेको बुझिन्छ।

यस अभिलेखमा संवत् नफुटेको भए एउटा महत्त्वपूर्ण घटना कहिले घट्यो भन्ने कुराको निर्णय हुने थियो। तर दुर्भाग्यले संवत्का अङ्क फुटेका हुनाले त्यसो हुन सकेन। प्रसङ्ग विचार गर्दा यसको संवत् ५१४ तिरको हो भन्ने अनुमान गर्न सकिन्छ। किनभने यसको लगत्तै पछि त अंशुवर्मा अगाडि देखापरिसकेका छन्।

### स्थरुद्रङ्ग–

'कर्वट' भन्दा अलि तल्लो तहको 'पत्तन' भन्दा माथिल्लो तहको विकसित बस्ती 'द्रङ्ग' हो भन्ने कुरा माथि लेखिसकेको छ। चारैतिरका बस्तीबाट किनबेच गर्नाका लागि आइने व्यापार-केन्द्र रूपको बस्ती 'कर्वट' भनिन्थ्यो भन्ने कुरा पनि वाचस्पत्यको आधारमा माथि लेखिसकेको छ। 'द्रङ्ग' पनि यस्तै हो। वरपरका बस्तीबाट मानिसहरू किन–बेच गर्न यहाँ आउँथे; बन्द व्यापार चलेको हुनाले यहाँ 'भन्सार अड्डा' रहेको हुन्थ्यो भन्ने कुरा चापागाउँको यस अभिलेखबाट थाहा पाइएको छ। यहाँ 'स्थरुद्रङ्ग'मा अरू बस्तीबाट माछा बेच्न आउनेहरूको लागि भन्सार–दर घटाइदिएको कुरा परेको छ। यो अभिलेख कुँदिएको ढुङ्गालाई अहिलेसम्म स्थानीय बूढापाकाहरू 'स्थारो ढुङ्गा' भन्दैछन्। जो 'स्थरुद्रङ्ग' को अपभ्रंश हो भन्ने कुरामा कुनै शङ्का छैन†। साथै यो अभिलेख भएको ठाउँ अहिलेसम्म 'भन्सारटोल' भनिन्छ। यहाँको कृष्णमन्दिरमा रहेको ने. सं. ७७२ को अभिलेखमा पनि यो ठाउँलाई 'भन्सारगृह' भनिएको छ। द्रङ्गभित्र भन्सार अड्डा रहन्थ्यो भन्ने कुराको पुष्टि यसबाट भएको छ। यहाँ मात्र होइन; अन्त पनि लिच्छविकालमा जहाँ जहाँ द्रङ्ग थियो; त्यहाँ त्यहाँ अहिलेसम्म पनि 'भन्सार' को नाम जोडिएको पाइन्छ। उदाहरणार्थ पाटन–दरबारको नरेन्द्रदेवको अभिलेख भएको 'भन्सारचोक' लाई देखाउन सकिन्छ। मल्ल राजाहरू-को पालामा दरबारभित्र भन्सार भए र यो चोकको नाम 'भन्सारचोक' रहेको होइन; यूपग्रामद्रङ्गको

† नेपाली भाषामा राज्यलाई कहने ठेट शब्दको रूपमा रहेको 'ढुङ्गा' शब्दको सम्बन्ध 'द्रङ्ग' शब्दसंग छ कि भन्ने आभास परेको छ। 'स्थरुद्रङ्ग' को अपभ्रंश स्थारो ढुङ्गा' भएको यो उदाहरणले उक्त कुराको पुष्टि गरेको छ।

पुरानो भन्सार यस ठाउँमा रहेको हुनाले पछिसम्म पनि यो भन्सारचोक कहलाएको हो। यसै गरी कान्तिपुरमा दक्षिणकोलीग्रामद्रङ्गभित्र पर्ने भन्सारको संज्ञाना 'पुरानो भन्सार' नामक स्थानले दिलाउँदैछ। नक्सालभेकको द्रङ्गभित्रको भन्सारको संकेत नक्साल गैह्रीधाराको नाम 'भन्सार-हिटी' रहेकोबाट पाइन्छ। यस्ता उदाहरण अन्त पनि पाइन्छन् ।

यसबाट चारैतिरका बस्तीबाट किन-बेच आदि गर्न आइने, बन्द व्यापार चलेको विकसित बस्ती 'द्रङ्ग' हुनाले यसको एक अभिन्न अङ्ग भन्सारअड्डा बनेको थियो भन्ने थाहा पाइन्छ। साथै लिच्छविकालमा चापागाउँमा 'स्थरुद्रङ्ग' नामक विकसित बस्ती थियो भन्ने कुरा पनि यताबाट थाहा पाइन्छ ।

मत्स्यकर– लिच्छविकालमा 'करप्रथा' कति व्यवस्थित थियो भन्ने कुरा यस अभिलेखले देखाएको छ। यहाँ नेपालमा पाइने माछाका विभिन्न जातअनुसार भन्सारदर तोकिएको छ। पहिलेदेखि चलेर आएको दरमा केही घटाइदिई यो भन्सारदर तोकिएको हो भन्ने कुरा यहाँ उल्लिखित 'शुल्कापह्रासेन' पदले देखाउँछ। यहाँ 'पच्चाशत्तमशुक्ल' पदको पनि उल्लेख आएको छ। यसले मनुस्मृति आदि–धर्मशास्त्रको वचनलाई सम्झाएको देखिन्छ। प्राचीन धर्मशास्त्रमा–

'पञ्चाशद्भाग आदेयो राज्ञा पशुहिरण्ययोः'

भन्ने वचन पाइन्छ। यहाँ भने त्यसो नगरी केही नगद र केही जिनिसको रूपमा भन्सार–दर तोकिएको देखिन्छ। यस अभिलेखको बीचको भाग केही खण्डित हुँदा जम्मै कुरा स्पष्ट हुन सकेको त छैन। तैपनि मुख्य मुख्य कुरा केही बुझिन्छ ।

यहाँ 'काष्ठिकामत्स्य' भनी सिन्का जस्तोमा उनेर बिक्री गरिने सानो जातको माछालाई भनिएको बुझिन्छ। जो अहिलेसम्म पनि यसरी नै बिक्री गरिन्छ। 'भुक्कुण्डिका मत्स्य' भनेर थैलो जस्तो एकथरी माछा हाल्ने भाँडोमा राखी बिक्री गरिने सानो जातको माछालाई भनिएको बुझिन्छ। जो अहिलेसम्म पनि केही प्रचलित छ। 'राजग्रीव' भनेको ठूलो जातको माछा हो। 'मुक्तामत्स्य' भनेको अहिलेको 'अछला' भन्ने जातको माछा हो ।

कृषि, पाशुपाल्य, वाणिज्य आर्थिक उन्नतिका प्रमुख कुरा हुँदा माछा पाल्ने व्यवसायलाई प्रोत्साहन दिन माछाको बिक्रीमा भन्सार–दर घटाइदिइएको देखिन्छ। अंशुवर्माले मत्स्यपालनको वृद्धिमा चाख राखेको कुरा बुङमतीको अभिलेखबाट पनि थाहा पाइन्छ ।

–★–

# ललितपुर च्यासलटोलको अभिलेख

ललितपुरका टोलहरूमध्ये 'च्यासलटोल' पनि प्रसिद्ध छ। त्यहाँ यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको धेरैजसो भाग अहिले खण्डित भइसकेको छ। यहाँ संवत् ५१५ छ।

नोलीद्वारा २२ संख्याको रूपमा यो छापिएको छ। राष्ट्रियपुस्तकालयमा रहेको प्रतिलिपिबाट यसको पाठ शुद्धचाउन मदत भएको छ।

## मूलपाठ

(माथिल्लो भागमा १२।१३ पङ्क्ति पढ्न नसकिने भइसकेका छन्)

१. .... ... ... ...दस्मत्कृतप्रसादो[१]... ... ...
२. ..... ..... ...... ..... ..... ....न्यथा कुर्यात्कारयेद्वा.............
३. .... ...... ..... ..... ..... ....धर्म्मगुरुभि.............
४. ... ... ... ... ...प्रतिपालनीया एवं श्रूय(ते) [२]
५. ..... .... ..... ..... .... .....मतो..... .... ....
६. ..... ..... ...... .... .....भूसम्प्रदानफलभाक् स तदातदा [३]स्या(त्)
७. ......... ....... ....... ......स्वर्ग्गे निरास्थो निवसेन्मनस्वी... ...[४]
८. ... ... ...तावच्चिरकदुःखभाक् स्यात्... ...

---

नोलीका पाठ–

१. ...... .....    २. ......य–हस्तिन...
३. ........सम्प्रसाद–रिषत् तदा तदा....
४. .........स्स्वर्ग्गनिरास्थो नि–सन्मनस्वी......

९. ... ... ... ... ... ... म्महीम्प्रसह्याथ हरेच्छलाद्वा, .......

१०. ... ... ... ... ... ... .....पश्य सोञ्चो। जायेत पश्चाद् निरयेषु निम

११. ... ... ... नगोमीति सवत् ५१५ फाल्गुनशुक्लदिवात्र(योदश्याम्)[२]

## अनुवाद

.....हामीबाट भएको निगाह.....(जसले यो नाघेर अन्यथा) गर्ला वा गराउला; (त्यसलाई हामी सहनेछैनौं। पछि हुने राजाहरूले पनि ) ऐन–कानूनलाई ठूलो संझेर (यसको प्रतिपाल गर्नुपर्छ .....)यस्तो सुनिन्छ ।

.....त्यसवेला ऊ भूमिदानको फल पाउने हुन्छन्। ती दिलदार मानिस स्वर्गमा बस्छन्। ...तबसम्म धेरै काल नरकको दुःख पाउनेछन् । ...दान दिएको जग्गा जसले जबर्जस्ती छलद्वारा हर्छन्..... हेर, ती पछि नरकमा पर्नेछन् ।

(यहाँ दूतक).....गोमी छन्। संवत् ५१५ फाल्गुन शुक्ल पञ्चमी

### व्याख्या–

यस अभिलेखको माथिल्लो भाग स्वाट्टै खण्डित भइसकेको छ। तल्लो भागमा पनि छेउका केही भाग मात्र बाँकी छ। यस कारण यस अभिलेखमा परेको मुख्य विषय बुझ्न गाह्रो भएको छ। संवत् ५१५ भने अहिले पनि स्पष्ट बुझिन्छ। यसैले यो अभिलेख शिवदेवले राख्न लाएका हुन् भन्ने थाहा पाइन्छ। यहाँ दूतकको नाम पनि स्पष्ट छैन; '..न गोमी' मात्र देखिन्छ ।

अहिले बचेको भागमा 'चिरन्नरकभाक् स्यात्, जायेत पश्चाद् निरयेषु' आदि वाक्य परेका हुनाले धर्म–कर्मसम्बन्धी कुनै व्यवस्था यसमा परेको थियो भन्ने देखिन्छ ।

★

---

नोलीका पाठ–

१. ......म्महीभुजां ह्यपहरेच्छल.....

२. प (ञ्चम्याम्)

# भक्तपुर कुम्हालेटोलको अभिलेख

भक्तपुर कुह्मालेटोलको डबलीमा एउटा सानो मन्दिर छ। त्यस मन्दिरको दक्षिणपट्टिको भित्तामा रहेका तीन मूर्तिमध्ये माझको मूर्ति अडेस लगाई राखिएको ढुङ्गामा यो अभिलेख कुँदिएको छ। देवताको मूर्ति अडेस लगाएर राखिएको हुनाले अभिलेखको धेरै भाग पढ्न सकिएको छैन।

"अभिलेख–संग्रह' ५ भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. .... .... ... ..... .... .... ..... .... ....

२. ........ लिच्छविकुलकेतु .... ..... ...... .... ....

३. ........ (कु)शली माखोदुलु ....... ..... .... .... .....

४. ........... णोत्तरतरंफुथुल्व ... ... .... ... ....

५. ...... मार्गस्य हेली तिलं .... ...... ..... .... ....

६. ........ उत्तरतः वि–यखोट्टसूल्पमार्ग ...... .... ..... ....

७. ........... सङ्कोसन्जरासम्पातनद्याः प्रणालीश्वर ...........

८. .......... वृह(त)पथस्य दट्टणदल्पसपूर्वोत्तर –लमस्य

९. लदेवीमार्ग .... .... .... सीमापरिसि .... .... .... ...

१०. प्रधानपुरस्सरान् ......... कुशल .........

११. प्रश्नपूर्व्व ...... .... .... ..... ..... भवतु (भ)

१२. (व)तां यथा .... .... ..... नय .... ... ....

१३. .......... ........ ..........

१४. ........... ............ ............

१६. ... ... ... ... ... ... ... ... ... ...

१७. प्रसाद ... ... ... ... ... ... प्रवे... ....

१८. व्यदान ... ... ... ... ... ... ...तिप्रसा-

१९. त-द्दे ... ... ... ... ... ... ...पजीवि... ...

२० त–द्दे ... ... ... ... ... ... ... ... ...

# अनुवाद्

.....लिच्छविकुलका झण्डास्वरूप भएका...गाथमा आराम भएका...माखोदुलुं ... ... .... ....उत्तरतिर तरंफुथुल्व...बाटोको हेलीतिलं... ...उत्तरतिर वि-यखोट्टसुल्प बाटो ...सङको र सन्जराको दोभान भएको नदीको प्रणालीश्वर...ठूलो सडकको दट्टणदल्पसको पूर्वोत्तरतिर...लदेवी बाटोमा...यति चार किल्ला छुट्टयाइएको....

मुखियालगायत.....(गृहस्थीहरूलाई) कुशल मङ्गल सोधेर (आज्ञा भएको छ ।) तिमीहरूलाई थाहा होस् ।.... .... .... ....निगाह.....पस्नु ...... ठूलो निगाह.........(हाम्रोतर्फबाट) जीविका गर्नेहरूले (अन्यथा नगर्नू ।)

**व्याख्या—**

यस अभिलेखमा राजाको नाम अहिले देखिँदैन; संवत् पनि देखिँदैन । यहाँ 'लिच्छविकुल केतु' पद भने देखिन्छ । यो विशेषण लाउने पहिला लिच्छवि राजा शिवदेव हुन् । यस कारण यो अभिलेख शिवदेवको हो भन्ने अनुमान हुन्छ । लिपिले यस कुराको साथ दिएको छ । फेरि यस अभिलेखमा राजाको सहायक शासकको रूपमा कसैको उल्लेख परेको देखिँदैन । यसो हुनाले शिवदेवले शासनाधिकार सोझै आफ्नो हातमा लिएपछि यो अभिलेख गरिदिइएको हो कि भन्ने देखिन्छ । तर धेरै भाग खण्डित भएको हुँदा यसै हो भनी भन्नचाहिं सकिँदैन । छोपिएको भागमा कतै अंशुवर्माको उल्लेख भएको पनि हुन सक्छ । त्यसो भए यसलाई अलि तल राख्नुपर्ने हुन्छ ।

यस अभिलेखको शैली अलि फरक छ । यो अभिलेख पूरा पढ्न सकिएको भए यसबाट लिच्छवि-कालको भक्तपुरभेकको बस्तीको बारेमा बढ्ता जानकारी हासिल हुने थियो । तर अभिलेख पूरा नहुँदा कुरा पनि अपूरो रहेको छ ।

# चाँगुको शिवदेव+अंशुवर्माको अभिलेख

चाँगुनारायणस्थानमा मन्दिरको सामुन्ने रहेको गरुडको पछाडि यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३० अङ्गुल लम्बा, २० अङ्गुल चौडा छ। यसको शिरोभागमा फूलविशेष अङ्कित छ। यहाँ संवत् अहिले देखिदैन।

नोलीद्वारा ३४ संख्याको रूपमा यो छापिएको छ। यो अभिलेख अप्ठ्यारो ठाउँमा रहेको र अलि खिइएको पनि हुनाले यसको पाठ शुद्ध्याउने काम गर्न सकिएन।

## मूलपाठ

१. स्वस्ति मानगृहात्प्रशस्तानेकगुणगणाधारो लिच्छविकुलकेतुर्भट्टारकमहा-
२. राजश्रीशिवदेवः कुशली गुङदीमकग्रामनिवासिनः प्रधानपुरस्सरान्ग्रामकु-
३. टुम्बिनः कुशलपरिप्रश्नपूर्व्वं समाज्ञापयति विदितम्भवतु भवतां यथाने-
४. न स्वयशोमरीचिविस्तारव्याप्ताशेषदिङमण्डलेन प्रणतसामन्तशिरोमणि-
५. मयूखविक्षुरितचरणारविन्दद्युतिना श्रीसामन्तांशुवर्म्मणा विज्ञापितेन
६. मयैतद्बहुमानाद् युष्मदनुकम्पया चानेनैव साकं समवाय्य पूर्व्व--
७. त्यक………… दादृतैर्य्यथाज्ञमनुतिष्ठद्भिर्य्युष्मत्पूर्व्वकैराराधितैरस्मद्गुरु-
८. भिः कृतसीमनिर्णयो योयं सर्व्वकोट्टमर्यादोपपन्नत्वादचाटभटप्रवेश्यो
९. वसतये कृषिकर्म्मणे च कोट्टो वः प्रतिपादित आसीदस्योत्तरपूर्व्वतोधस्ताद्दक्षिण-
१०. राजकुलपुण्डिराजकुलयोर्भूमिक्षेत्रैः परिवर्त्य प्रीतमनसा मयापि पूर्वलब्धेन सहैकीकृत्य शि-
११. लापट्टकशासनमिदं वो दत्तमङ्गारञ्च चक्रसरलकाष्ठ……य प्रसादश्च यथा
१२. प्राग्…स्त…श्रोभोपरिखाभोङखा… वाग्वत्या…त्य…ग्राममहानु-

१३. द्य ....... रन–पुरो युष्मद्–सैश्च कैश्चिद्विक्रेयाश्चिलकं च कञ्चिदप्यशेष-
१४. मविक्रेयं यथा प्रतिषिद्धवस्तुद्वयमज्ञानाद्यर्थं ग ........ द्विक ..........
१५. कृताङ्गारञ्चलकाक्षेपोसौ भवद्भ्यो मुच्येत स्ववनादाहृत्य ..........
१६. चत्वारिंशदधः सरलकाष्ठं विक्रीणतां वोवस्कराधिकृतैः ...........
१७. स्मद्गोत्रजा ये कोट्टाद् बहिरन्यत्र निवसेयुस्तेषाङ्कार्यप्रयोजने स्वकोट्टा ...
१८. –वद्वारङ्कोट्टसीमा च ग्रामस्य पश्चिमतो दक्षिणतश्च दोलाशिखराटवीपर्य्य-
१९. न्तश्च तत उदल्मलकसेतु शातुन्तीदुल्छिलागृहखिलभूमिबुर्दुम्ब्रादुल्नदीसङ्ग-
२०. –श उत्तरतो मणिमतीम्पुरोनुसृत्य भारविश्रमणस्थानपूर्व्वतो ........ ष्ट
२१. पानीयस्रोतस्ततो रिप्शिङकोसेतुप्रोंज्ञम्बुप्रोङनिप्रङप्रोङप्रोवाङसंक्रमेण ततः
२२. पर्व्वतमूलन्ततो नदीपूर्व्वतो विह्लिङखोस्रोतःपर्व्वतस्योपरि विह्लिङमार्ग्गदक्षिणेन
२३. पानीयपातस्ततो मार्ग्गशिलां सेतुसरलवृक्षप्लक्षमूलानि यथाक्रमन्तदे–
२४. तत्सीमापरिक्षिप्तेस्मिन् कोट्टे न कैश्चिदस्मत्पादप्रसादोपजीविभिरन्यैर्व्वा सूक्ष्मा-
२५. पि पीडा कार्य्या यस्त्विमामाज्ञां विलङ्घ्यान्यथा कुर्य्यात्कारयेद्वा तमहं न मर्षयि-
२६. ष्यामि येपि मदूर्द्ध्वंभूभुजो भवितारस्तैरपि धर्म्मगुरुभिर्ग्गुरुकृतप्रसादा-
२७. नुर्वात्तिभिरियमाज्ञा सम्यक्प्रतिपालनीया यत्कारणं बहुभिर्व्वसुधा दत्ता राजभि-
२८. स्सगरादिभिः यस्य यस्य यदा भूमिस्तस्य तस्य तदा फलम् षष्टिं वर्षसहस्राणि
२९. स्वर्ग्गे मोदति भूमिदः आक्षेप्ता चानुमन्ता च तावन्ति नरके वसेत् (स्वद) त्तां परद-
३०. त्तां वा (यो हरेत वसुन्धराम् । स विष्टायां कृमिर्भूत्वा पितृभिः सह पच्यते) संवत्
३१. ............ ............ ........... ............... वार्त्त इति

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट अनेक असल गुणहरू भएका, लिच्छविकुलका झण्डा-स्वरूप भएका, गाथमा आराम भएका, भट्टारक महाराज श्रीशिवदेवबाट गुङदीमक ग्राममा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ । तिमीहरूलाई थाहा होस् ।

. . . . अदबपूर्वक हुकूम तालीम गरी तिमीहरूले खुशी तुल्याइएका हाम्रा पुर्खाहरूले चारकिल्ला छुट्टयाइएको, कोट्ट (किल्ला)का सबै स्थितिबन्धेजले युक्त भएको हुनाले चाटभटले पस्न नपाउने

गरिएको यो कोट्ट तिमीहरूलाई बस्न र खेतीपाती गर्न दिइएको थियो। (हाल) दिशाको छेउ-छेउसम्म कीर्ति फैलिएका; ढोग्न आएका सामन्त राजाका शिरपेचका मणिको चहकले पाउ झलमल्ल सुहाएका श्रीसामन्त अंशुवर्माले हाम्रा हजूरमा विन्ति चढाएका हुँदा हामीबाट यिनको कुरा राख्न र तिमीहरूउपरको दयाले पनि उनैसंग मिली उक्त कोट्टको उत्तरपूर्वपट्टि तलतिर दक्षिणराजकुल र पुण्डिराजकुलका जग्गासंग साटी अघिदेखि खाई पाई आएको पनि संगै गाभी खुशीसाथ यो सनद शिलापत्र गरी तिमीहरूलाई दिइएको छ ।

गोल...सल्लोको दाउरा..... ...निगाह साबिकबमोजिम...श्रोभो खाई भोङखा ...वाग्वतीको...ग्राम......कसैले बेच्न लैजान पाइंदैन।...बिक्री गर्न नपाइने गरी रोकिएका दुइथरी वस्तु थाहा नपाई...बनाइएको गोल..माफी गरिनेछ । आफ्नो वनबाट लगी...चालीस...सल्लाको दाउरा बेच्न लैजाने तिमीहरूलाई पलकरसम्बन्धी अधिकारीहरूले (रोक्नू).....कोट्टबाट बाहिर अन्त जो हाम्रा गोतियाहरू बसेका छन्, तिनीहरूलाई आवश्यक भएको वेलामा आफ्नो कोट्टबाट (लिन दिनू।)

कोट्टको सीमा यस प्रकारको छ—ग्रामको पश्चिमपट्टि र दक्षिणपट्टि दोलाशिखरको वनसम्म, त्यताबाट उदल्मलक सेतु शातुन्तीदुल् शिलागृहको बाँझो जग्गा र दुर्दुम्म्रादुल् खोलाको दोभान, उत्तरतिर मणिमतीको अगाडि लागी भारवि श्रमणको स्थानदेखि पूर्वमा...पानीको सोतो, त्यताबाट रिम्शिङको सेतु प्रोंज्ञम्बु प्रोङनिप्रङ प्रोङप्रोवाङको दोभान, त्यताबाट पहाडको फेदीसम्म, त्यताबाट नदीको पूर्वतिर विल्लिङखो सोतो, पहाडमाथि विल्लिङको बाटोदेखि दक्षिणतिर पानीको झरना, त्यसदेखि बाटोको ढुङ्गा, सेतु, सल्लोको रूख, पाखरको फेद क्रमैसंग पर्छन् ।

यो चारकिल्लाभित्र पर्ने यो कोट्टमा हाम्रा कर्मचारीहरू वा अरू कसैले अलिकता पनि दुःख दिनु हुंदैन । जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला; त्यसलाई हामी सहंदैनौं । हामीपछि जो राजा हुनेछन्; तिनीहरूले पनि ऐनकानूनलाई ठूलो संझी अघिका राजाले गरेको निगाहको ख्याल राखेर यस आज्ञाको राम्ररी पालना गर्नुपर्छ । किनभने सगर आदि धेरै राजाहरूले जग्गा दान दिएका थिए । जस जसको पालामा जुन जुन जग्गा छ; त्यस वेला त्यसको फल तिनैलाई हुन्छ । जग्गा दान दिने मानिस साठी हजार वर्षसम्म स्वर्गमा बस्छन्; जग्गा हर्ने र हर्न लाउने त्यति नै वर्षसम्म नरकमा बस्छन् । आफूले दान दिएको वा अरूले दान दिएको जग्गा (जसले हर्छ; त्यो पितृहरूसंग नरकमा कीरा भएर बस्छ ।)

संवत्..... ...... ।(यहाँ दूतक)....वार्त्त छन् ।

## व्याख्या—

भौमगुप्तहरूलाई पन्छाउने काममा राजा शिवदेवले एक योग्य तथा चतुर व्यक्तिको सहायता पाएका थिए; ती व्यक्ति हुन् अंशुवर्मा । यसै हुँदा भौमगुप्तहरूलाई पन्छाउने योजना सफल हुन सक्यो ।

तर अंशुवर्मा एकैचोटि अगाडि देखापरेनन् । पहिले शिवदेवलाई अघि सारी गुप्त आभीरहरूको हातबाट शक्ति खोस्न लाए; अनि स्थिति अनुकूल भएपछि मात्र अंशुवर्मा अगाडि देखापरे। यो कुरा यस ताकाका अभिलेखहरू केलाई हेर्दा स्पष्ट थाहा पाइन्छ। यस कुराको अलिकता चर्चा पहिले गरिसकेको छ।यस अभिलेखबाट पनि यो कुरा थाहा पाइन्छ। यस अभिलेखमा अंशुवर्मा 'श्रीसामन्त' का रूपमा अगाडि देखापरिसकेका छन्। राजकीय सन्मानको दृष्टिले शिवदेवको स्थान माथि रहेको देखिन्छ तापनि शासनाधिकार सबै अंशुवर्माको हातमा गइसकेको यस अभिलेखबाट स्पष्ट थाहा पाइन्छ।

यस अभिलेखमा अहिले संवत् फुटिसकेको छ। तर अंशुवर्माको क्रमशः हुँदै गएको उदयलाई ध्यानमा राखी विचार गर्‍यौं भने शिवदेव अंशुवर्माको संयुक्त शासनकालको उठानको अभिलेख यो हो भन्ने थाहा पाइन्छ। अंशुवर्मा विद्वान् र चतुर व्यक्ति थिए। कौटलीय अर्थशास्त्र आदि राजशास्त्र-हरूको अध्ययन उनले गरेका थिए। यसो हुनाले 'प्रकृतिकोप' नहोस् अर्थात् जनतामा असन्तुष्टिको भावना नफैलियोस् भन्ने कुरामा पनि उनले बडो चनाखा भई दृष्टि दिएका थिए। महत्त्वाकाङ्क्षी व्यक्ति उनी थिए तापनि एकैचोटि सबै अधिकार अँठ्याई सोझै राजाका रूपमा उनी अगाडि देखापरेनन्। क्रमशः श्रीसामन्त, श्रीमहासामन्त, श्र्यंशुवर्मा अनिपछि 'महाराजाधिराज श्र्यंशु' का रूपमा उनले अगाडि पाइला सारेका थिए। चाँगुको यस अभिलेखमा उनको दर्जा 'श्रीसामन्त' छ। पाटन भीमसेनस्थानको संवत् ५१६ वैशाखसम्मको अभिलेखमा उनी 'श्रीसामन्त' मात्र छन्। यसको एक महीनापछि उनी 'श्रीमहासामन्त' बने। भक्तपुरको गोलमाढीटोलको संवत् ५१६ ज्येष्ठको अभिलेखबाट यो कुरा थाहा पाइन्छ। यस कारण चाँगुको यो अभिलेख संवत् ५१५ तिरको हो भन्ने देखिन्छ।

गुप्त आभीरहरूलाई पन्छाई अंशुवर्मा अगाडि बढेका थिए तापनि रविगुप्त, भौमगुप्तहरूले तयार पारेको अवस्थाबाट अंशुवर्माले पनि प्रशस्त लाभ उठाए। अब भौमगुप्तको स्थान अंशुवर्माले लिए। भौमगुप्तभन्दा अझ बढी अधिकार अंशुवर्माले अँठ्याए। एक त राजोचित श्रीपदसहितको सामन्त दर्जा लिई राजाको श्रेणीमा उनी बस्न पुगे। दोस्रो राजा शिवदेवको मुखबाट आफ्नो भूरि भूरि प्रशंसा गराउन लाएर उनले आफ्नो उच्चता प्रमाणित गराए। प्रचलित परम्पराअनुसार वरपरका सामन्त राजाहरूद्वारा गद्दीनशीन राजालाई ढोग्न आएको वर्णन गरिनुपर्ने थियो। तर यहाँ सामन्तहरूले राजा शिवदेवलाई होइन; अंशुवर्मालाई ढोग्न आएको वर्णन गरिएको छ। स्वयं अंशुवर्माको दर्जा पनि 'श्रीसामन्त' मात्र भए तापनि 'प्रणतसामन्तशिरोमणिमयूखविस्फुरितचरणारविन्दद्युतिना' भनी सारा सामन्त राजाहरूले उनलाई ढोग्न आएको कुरा लेखाएर गद्दीमा नबसे तापनि यस वेलाका वास्तव शासक अंशुवर्मा नै हुन् भन्ने कुरा यहाँ देखाइएको छ। भौमगुप्तले पनि अघोषित राजाका रूपमा शासन चलाएका थिए तापनि राजाको तर्फबाट यस्तो वर्णन सनद शिलालेखमा लेखाउन उनले सकेका थिएनन्। अंशुवर्माचाहिं अब त्यस अवस्थामा पनि पुगे।

यहाँनिर एउटा कुरामा ध्यान दिनु आवश्यक छ। अंशुवर्मा त्यस अवस्थामा शिवदेवलाई

बलपूर्वक अँठ्याई पुगेका होइनन् । भौमगुप्तहरूलाई पन्छाउने काम अंशुवर्माकै योजनाअनुसार सफल भएको हुनाले र अंशुवर्माको विद्वत्ता, व्यक्तित्वबाट प्रभावित भएर शिवदेवले उनलाई त्यस अवस्थामा पुऱ्याएका हुन् । फेरि अंशुवर्मा जतिसुकै महत्त्वाकाङ्क्षी व्यक्ति थिए तापनि कुनै लिच्छवि राजाले पनि पहिले नलिएको 'महाराजाधिराज' पदसम्म पनि पछि उनले लिए तापनि लिच्छवि राजगद्दीउपर उनको सधैं आदर रह्यो; लिच्छवि राजगद्दी भएको मानगृह दरबारमा उनी कहिल्यै बसेनन्; आफूपछि लिच्छवि राजकुमार उदयदेव नै गद्दीमा बसून् भन्ने अभिप्रायले उनले उदयदेवलाई 'युवराज' घोषित गरे; शिवदेवले राजत्याग गरेपछि पनि केही कालसम्म आफूलाई उनले राजा घोषित गरेनन्; लिच्छवि राजासरह आफ्नो नाउँमा 'देव' पद जोडेनन्; इत्यादि लिच्छवि राजाप्रति आदर प्रकट गर्ने अनेक कुरा अंशुवर्माले गरेका थिए । संक्षेपमा भन्ने हो भने राजा र प्रजा दुवैको विश्वास प्राप्त गरी माथिल्लो अवस्थामा पुगेका, नेपालको इतिहासमा अलि बेग्लै खालका शासक अंशुवर्मा हुन् । तल यथास्थानमा यसबारे अरू बढी चर्चा गरिनेछ ।

अंशुवर्मा यस अवस्थामा पुग्न कसरी सफल भए भन्ने कुरा बुझ्नाको लागि अब शिवदेव र अंशुवर्मामा के नाता पर्दथ्यो भन्ने कुरा बुझ्नुपरेको छ । शिवदेव र अंशुवर्माको नाताबारे प्रकाश पार्ने तात्कालिक प्रमाण त पाइएको छैन; लिच्छविकालका अभिलेखमा यस कुराको उल्लेख कतै आएको छैन । एकथरी भाषावंशावलीको फितलो आधार लिई केही इतिहासकारले अंशुवर्मा शिवदेवका जुवाइँ थिए भनी लेखेका छन् । तर योभन्दा गोपालवंशावलीको उक्ति यस विषयमा बढी प्रामाणिक छ । गोपालवंशावलीकारले अंशुवर्माबारे यस्तो बोलेका छन्–

"अथ भुयोपि सूर्यवंशप्रभावात् कृत राजा श्रीशिवदेव वर्ष ४१ तस्य भग्नीयपुत्र राजा श्रीअंशुवर्मा वर्ष ४३ तेन च राजविहार कृतं । प्यण्डकादिव्यवहार प्रवर्तते, व्याकरणादिशास्त्रचर्चता प्रवर्तते ।"
(२२ पत्रबाट)

(अनि फेरि पनि सूर्यवंशको प्रभावबाट श्रीशिवदेव राजा हुनुभयो । वर्ष ४१ । उहाँका भानिज राजा श्रीअंशुवर्मा हुनुभयो । वर्ष ४३। उहाँले राजविहार बनाउनुभयो । प्यण्डक = पिण्डक = कुत आदिको व्यवस्था बाँध्नुभयो । व्याकरण आदि शास्त्रको चर्चा हुन थाल्यो ।)

यसरी गोपालवंशावलीकारले अंशुवर्मालाई शिवदेवका भानिज भनेका छन् । चल्तीका भाषावंशावलीहरूमा पनि यही कुरा लेखिएको पाइन्छ । प्रसङ्ग विचार गर्दा यो कुरा सत्य हुनु धेरै सम्भावना देखिन्छ । अंशुवर्माबारे पाइएको सबभन्दा पुरानो परिचय पनि यही हो ।

यसरी शिवदेव र अंशुवर्मामा मामा–भानिजको नाता देखिएको र अंशुवर्माकै योजनाअनुसार भौमगुप्तहरूलाई पन्छाउन शिवदेव समर्थ भएका हुनाले स्वभावतः शिवदेव अंशुवर्माबाट प्रभावित भए । यसो हुनाले अंशुवर्मा सजिलैसंग संयुक्त भई शासन चलाउन पुग्न सफल भए । यद्यपि केही इतिहासकार शिवदेव अंशुवर्माको संयुक्त शासन चलेको थिएन; अंशुवर्मा सरकारी उच्च कर्मचारी मात्र हुन् भन्ने तर्क गर्छन्§ । तर वस्तुस्थिति हेर्ने हो भने शिवदेवको अधिकार भौमगुप्तको पालामा

§ 'लिच्छविसंस्कृति' को २० पृष्ठ हेर्नुहोस् ।

भन्दा सीमित भएको थियो। सारा सामन्त राजाहरूले अंशुवर्मालाई ढोग्न आएको वर्णन शिवदेवकै मुखबाट निकाल्न लाएको तथा 'अनेन सार्कं समवाय्य प्रसादः कृतः' भन्ने बेहोरा शिलापत्रमा लेखाउन लाएको हुनाले यस वेला संयुक्त शासन चलेको थियो भन्ने स्पष्ट छ। वास्तवमा भन्ने हो भने यस वेलाका हर्ताकर्ता शासक अंशुवर्मा नै थिए। बाहिर देखिने गरी अंशुवर्माले 'श्रीसामन्त' पद मात्र लिएका थिए तापनि उनी राजासरह नै थिए; यसमा शङ्का छैन। चाँगुनारायणको सुवर्णपत्रले यस कुराको पुष्टि गरेको छ।

## वनदुर्ग–

राष्ट्ररक्षाको लागि दुर्ग (किल्ला) को पनि आवश्यकता हुन्छ। 'दुर्ग' धेरै किसिमका हुन्थे। गिरिदुर्ग, वनदुर्ग आदि अनेक किसिमका दुर्गको उल्लेख कौटलीय अर्थशास्त्र, मनुस्मृति आदिमा पाइन्छ†। ठाउँ हेरी ती विभिन्न किसिमका दुर्गको उपयोगिता रहन्थ्यो। लिच्छविकालमा पनि राष्ट्ररक्षाको लागि ठाउँ ठाउँमा कोट्ट (किल्ला) बनाइएका थिए। अभिलेखमा धेरै ठाउँमा कोट्टको उल्लेख आएको छ।

कोट्टभित्र बस्ती पनि हुन्थ्यो; खेती पनि हुन्थ्यो। कोट्टको सीमा निश्चित हुन्थ्यो। कोट्टको सीमा (इलाका) बस्नेका लागि विशेष सुविधा दिइएको हुन्थ्यो; स्थितिबन्धेज बाँधिएको हुन्थ्यो; यसैलाई 'कोट्टमर्यादा' भनिएको हो। चाँगुको यस अभिलेखबाट कोट्टसम्बन्धी केही कुरा बुझिन्छ। यस अभिलेखमा उल्लिखित कुराबाट यहाँको कोट्ट 'वनदुर्ग' रूपको थियो भन्ने थाहा पाइन्छ। यो अभिलेख अलि खिइएको र अप्ठ्यारो ठाउँमा रहेको हुनाले राम्ररी पाठ पढ्न सकिएको छैन। तैपनि यहाँको वनबाट दाउरा लगी बेच्ने, गोल बनाई बेच्ने काम गर्न पाइंदैन; राजपरिवारलाई आवश्यक परेको वेलामा मात्र काठ लिन पाइन्छ। आदि कुरा यस अभिलेखमा परेको हुनाले यो कोट्ट 'वनदुर्ग' रूपको थियो भन्ने कुरा निश्चित हुन्छ। दाउरा काट्ने, गोल बनाउने आदि गरे वन पातलो भई दुर्गको काम नदिने हुनाले उक्त बन्धेज बाँधिएको हो। पछि मल्लकालसम्म पनि यहाँ 'वनदुर्ग' थियो। लिच्छवि राजाकै स्थितिबन्धेजको अनुसरण गरी मल्ल राजाहरूले पनि 'वनदुर्ग'को रक्षाको लागि व्यवस्था बाँधी राखेका ताम्रपत्र यता पाइन्छन्। उदाहरणार्थ चाँगुको जगज्जयमल्लको ताम्रपत्रको अलिकता अंश यहाँ उद्धृत गरिन्छ–

"....मयजलगामं पश्चिम चंगुंन पूर्व्व एता गुदानास थ्वते थासस सुयातं छें ग्वयकाव तयमदु, थ्वते थासस सुनानं सि कायके मदु.सको चंगुया पंच आदिन देसालपनिसेन, खस मगल ब्राह्मन चेल भ्वातिनसनं थ्वगुलि थासस सि कायाव खप्वस मिलवनेमदु.....सि मिलओङ्ह्मयाके कटं ८ राजदण्ड काय जुलो. सकोया पनिसेनं चंगुंया पनिसेन थ्वगुल गुंस राजस फोङाव गङगुल सि काय दु. प्याक सि धेनेमदु. सि ह्लाया छातथेंजुको कायदु".

---

† कौटलीय अर्थशास्त्र २।३।२, मनुस्मृति ७।७० हेर्नुहोस्

(मयजल गाउँदेखि पश्चिम, चाँगुदेखि पूर्व यति वन–डाँडाभित्र कसैलाई पनि घर बनाउन नदिनू। यस ठाउँबाट कसैले पनि दाउरा लिन लाउन हुँदैन। साँखु, चाँगुका पञ्च आदिले, देसालहरूले खस मगर ब्राह्मण चाकर चाकर्नीहरूले यस ठाउँबाट दाउरा लिएर भादगाउँमा बेच्न लान पाउँदैनन्। ....दाउरा बेच्न जानेलाई आठ रूपिया राजदण्ड लाग्छ। साँखुका र चाँगुका बासिन्दाहरूले राजासंग साधेर मात्र यस ठाउँबाट सुकेको दाउरा लिन पाउँछन्। काँचा दाउरा काट्न पाइंदैन; पहिलेको दस्तूरअनुसार मात्र दाउरा लिन पाइन्छ।)

('ऐतिहासिक पत्रसंग्रह' दोस्रो भागको ६६ पृ.)

यसै गरी स्वयम्भू, साँखु वज्रयोगिनी, गोकर्ण आदि ठाउँमा पनि मध्यकालमा 'वनदुर्ग' थिए। साँखु वज्रयोगिनीमा रहेको जयप्रकाशमल्लको ताम्रपत्रबाट हामी यो कुरा बुझ्छौं। त्यसको एक अंश यस प्रकारको छ–

"स्वयंभूचैत्यया गर वारावुगर गोकर्णगर चंगुगर वज्रयोगिनिया गर। थ्वति देवया स्थानया सिमागर सुनानं सिषुछका षुनं ढचङाम्रो कायमदू। .... खेल वन षण्ड गनं मि तयेमदू .....राजदंड मोह् ३२ थुति जुरो।"

(स्वयम्भूगढ, बाराबुगढ, गोकर्णगढ, चांगुगढ वज्रयोगिनीगढ यति देवस्थानका सिमागढ (रूखको किल्ला = वनदुर्ग) बाट कसैले एक टुक्रा दाउरा पनि चोरी काटी लिनु हुँदैन। ....चौर जङ्गल खण्ड (बगैचा?) मा कतै पनि आगो लाउन हुँदैन। ....राजदण्ड ३२ मोहर हुनेछ। ....।)

(ऐतिहासिक पत्रसंग्रह दोस्रो भागका ६१–६२पृ.)

शत्रु बस्तीभित्र पस्न समर्थ भए त्यहाँका बासिन्दाहरू रसद–पानी लुकाई यस्तै 'वनदुर्ग' भित्र पसी आत्मरक्षा गर्दथे। यस्तो अवस्थामा वनदुर्गको उपयोगिता बढी रहन्थ्यो। मध्यकालको नेपालको इतिहासमा यस्ता घटनाका उदाहरण पाइन्छन्†। 'वनदुर्ग' को उपयोगिताको चर्चा गर्दा आचार्य कौटल्यले पनि 'वनदुर्गम्.... आपद्यपसारो वा' २।३।३ आपद् आइपरेको वेलामा यस्ता वनदुर्गभित्र पस्दा सुबिधा पर्छ' भनी बोलेका छन्।

'वनदुर्ग' को रक्षाको लागि व्यवस्था मिलाई अंशुवर्माले यो शिलालेख राख्न लाएका हुनाले सर्वप्रथम अंशुवर्मालि 'रक्षाप्रबन्ध' तिर दृष्टि दिए भन्ने कुरा यताबाट देखिएको छ। हुन पनि रक्षाव्यवस्था मजबूत नभईकन देशमा शान्ति सुव्यवस्था कायम गर्न सकिंदैन।

–✶–

† 'इतिहास–संशोधनको प्रमाण प्रमेय'को १४८ पृष्ठ हेर्नुहोस्।

# बनेपाको शिवदेव+अंशुवर्माको अभिलेख

बनेपा शहरको बीचमा सानो देवमन्दिरसंगै यो अभिलेख कुँदिएको ढुङ्गा रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३२ अङ्गुल लम्बा, १६ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यसमा अहिले संवत् देखिंदैन।

नोलीद्वारा ३३ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति मानगृहादनवगीत ...... ...... ...... ......
२. ताहितप्रतापधन्या ........... (बप्पपादानुध्यातो लिच्छविकुलकेतुर्भट्टारक)
३. (म)हाराजश्रीशिवदेवः कुश(लो) .... .... (कु-)
४. टुम्बिनः कुशलमाभाष्य (समाज्ञापयति विदितम्भवतु भवता यथानेन)
५. —नेकविद्यामयपरिज्ञान ........... ..........
६. विशेषवादेन दिगन्तरविसारियशःसमूह[1] ............. ....... (प्रण)
७. ताशेषसामन्तमण्डलेन[2] महा——धिराजश्रीसामन्तां(शुवर्म्मणा) .......
८. साकं सम्प्रधार्य तदनुमतेन[3] ............ क्लेशापहारि ..............
९. दोलाशिखरस्वामिनः[4] ............ (चाटभ)टाप्रावेश्यः कोट्टमर्या(दोपपन्नो)
१०. ग्रामः कृतोस्य चोतर ............ (मा)र्गस्तमनुसृत्य ............. (दे)

नोलीका पाठ—

१. दिगन्तरविसारि— — सामन्त — नशा — — —
२. — — शेष — मन्ममण्डलेन
३. — — — — म्प्रधार्य्य तद — — — —
४. — — — — — — शिखरस्वामिना

११. वकुलं ततः पूर्व्वदक्षि (णेन ....) ....... (नु)सृत्य श्मशानवृहत् ....१....

१२. पूर्व्वेण तेखुंदुलस्रोतस्त ........... मार्ग्गगोटनक्षेत्र ......

१३. पर्व्वतमूलम्दक्षिणेन ......... ......... ......... ततः पश्चिमेन .......

१४. ततो दक्षिणेन धेलन्तीनदीस ........... पश्चिमे चन्द्रेश्वर ..........

१५. –ङग्रामस्तत उत्तरेण दक्षिणेश्वरस्ततः पर्व्वतमूलम् पूर्व्व .......

१६. पानीयमार्ग्ग इत्येतत्सीमपरिक्षिप्तस्तस्य च चिरका (लस्थितये)

१७. शिलापट्टकशासनन्तेभ्यो दत्तमिति कैश्चिदस्मत्पादप्रसादो (पजीवि)

१८. (भि)रन्यैर्वा नात्र सूक्ष्मापि पीडा कार्य्या य इमामाज्ञामुत्क्र(म्या)

१९. (न्य)था कुर्युः कारयेयुर्वा ........ ......... ........

२०. ....... ..... लिच्छविवङशक्रमागत ....... (धर्म्मगु)

२१. (रुभि)र्ग्गुरुकृतप्रसादानुर्वात्तिभिरियमा (ज्ञा सम्यक्प्रतिपालनी)

२२. (येति समाज्ञापना दूतक) श्चात्र ...... ...... गोमी (संवत्) .........

२३. श्रावणमासे .......... ....... ..........

# अनुवाद

कल्याण होस्। मानगृह (दरबार) बाट निखुरी..... प्रतापले भाग्यमानी भएका.... (बुवाको पाउको अनुग्रह पाएका, लिच्छविकुलका झण्डास्वरूप भएका) गाथमा आराम भएका भट्टारक महाराज श्रीशिवदेवबाट.... .....का गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर (आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस् )......

....विद्याद्वारा भएको ज्ञानले ..... .....विशेषवाद भएका, दिशाको छेउसम्म कीर्ति फैलिएका, ...सारा सामन्तहरूले ढोगिएका महा (—) धिराज, श्रीसामन्त अंशुवर्मासंग सल्लाह गरी उनको अनुमतिले.... ..दुःख हटाउने...दोलाशिखरस्वामी (चाँगुनारायण) को.... ...गाउँ गरियो।

यसको सीमा उत्तरतिर...बाटो, त्यतातिर लागी....देवमन्दिर, त्यसदेखि पूर्वदक्षिणतिर ..... ....तिर लागी श्मशानको ठूलो.....पूर्वतिर तेखुंदुल्को धार, त्यसदेखि... बाटोको गोटन खेत.... ....पहाडको फेदी, दक्षिणतिर... ...त्यसदेखि पश्चिमतिर ...त्यसदेखि दक्षिणतिर धेलन्ती नदी; पश्चिममा चन्द्रेश्वर....... .गाउँ, त्यसदेखि उत्तरतिर दक्षिणेश्वर, त्यसदेखि पहाडको फेदी, पूर्वतिर पानीको धार, यति चारकिल्ला छुट्टयाइएको छ।

नोलीको पाठ–

१. शुशान–हृ– – – –

धेरैकालसम्म यो कायम भइरहोस् भनी सनद शिलापत्र गरी तिनीहरूलाई दिइएको छ। यो थाहा पाई हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी )वा अरू कसैले यहाँ अलिकता पनि दुःख नदिनू। जसले यो आज्ञा नाघेर अन्यथा गर्लान् वा गराउलान्, (तिनीहरूलाई हामी सहनेछैनौं)।

लिच्छविवंशमा क्रमैले हुने (पछिका राजाहरूले पनि).....अघिका राजाले गरेको निगाहको ख्याल राखेर यो आज्ञाको (राम्ररी पालना गर्नुपर्छ। यस्तो आज्ञा छ।)

यहाँ दूतक (मार्फत).....गोमी छन्। संवत्....श्रावण महीना.....

## व्याख्या-

बनेपाको यस अभिलेखमा पनि अहिले संवत् देखिंदैन। 'श्रावण मास' मात्र देखिन्छ। यसमा अंशुवर्माको पद 'श्रीसामन्त' मात्र रहेको छ। संवत् ५१६ ज्येष्ठमा त अंशुवर्माले 'श्रीमहासामन्त' पदवी लिइसकेका थिए। यस कारण यो अभिलेख ५१५ को हो भन्ने देखिन्छ।

यस अभिलेखको बीचको भाग ज्यादै खिइएको छ। यस कारण केही भागको पाठ छम्याउन गाह्रो भएको छ। अंशुवर्माको विशेषण रूपमा 'महा— —धिराजश्रीसामन्त' भागचाहिं देखिन्छ। यहाँ नोलीले 'म(हाराजा)धिराजश्रीसामन्त' पाठ छपाउनुभएको छ। यसले गर्दा अंशुवर्माको उदयक्रमबारे भ्रम पैदा गरिएको छ। अंशुवर्माले यसै वेला 'महाराजाधिराज' पदवी पनि लिइसकेका रहेछन्; अंशुवर्माको उदयक्रम नियत छैन; महाराजाधिराज पद पहिले लिएर बीचमा छोडिदिए; पछि फेरि सो पद लिए भन्ने तर्क गरिएको पनि देखिन्छ। परन्तु यो कुरा होइन भन्ने देखिन्छ। अंशुवर्मा भविष्य देख्ने चतुर व्यक्ति थिए। लिच्छवि राजवंशप्रति उनले बाहिर पूरा आदर देखाएका थिए। आफू हर्ताकर्ता शासकका रूपमा पुग्दा प्रजामा असन्तोषको भावना नफैलियोस् भन्ने कुरामा उनले पूरा दृष्टि दिएका थिए। यसो हुनाले उनले 'श्रीसामन्त, श्रीमहासामन्त, श्रंशुवर्मा, महाराजाधिराज श्रंशु' का रूपमा क्रमशः आफ्नो तह माथि उकाल्दै लगे; लिच्छविहरूको राजगद्दी भएको मानगृहमा उनी कहिल्यै बसेनन्; लिच्छवि राजासरह 'देव' पद उनले आफ्नो नाउँमा कहिल्यै जोडेनन्; आफूपछि लिच्छवि राजा नै गद्दीमा रहून् भन्ने उद्देश्यले उदयदेवलाई युवराज घोषित गरे। तात्कालिक अभिलेखबाट यी कुरा स्पष्ट देखिन्छन्। यस बारेको केही चर्चा माथि पनि गरिसकेको छ। यहाँ गद्दीनशीन लिच्छवि राजा शिवदेवको पदवी 'महाराज' मात्र रहेको छ। अंशुवर्माले चाहिं महाराजाधिराज पदवी यसै वेलादेखि लिए भन्ने कुरा मिल्दैन। अर्को कुरा—यस अभिलेखमा अंशुवर्माको पदवी 'श्रीसामन्त' भनी स्पष्ट लेखिएकै छ। 'महाराजाधिराज' पदवी उनले लिएका भए परस्परविरोधी 'श्रीसामन्त' पदवी पनि किन लिइरहन्थे। यस कारण 'महा — — धिराज' लाई 'महाराजाधिराज' को रूपमा पढ्न सकिंदैन। बरू यसलाई 'महामात्याधिराज' वा महामन्त्राधिराज आदि रूपमा पढ्न सकिन्छ। जसबाट 'अमात्य-परिषद्' को नेतृत्व यस बेला स्वयं अंशुवर्माले नै लिएको झल्कन्छ। यस्तो उदाहरण नपाइने होइन।

जयसिंहरामवर्द्धनको घटनातिर ध्यान दिए पनि यसको उदाहरण पाइन्छ। स्थितिमल्लले जयसिंहराम आफ्नो पक्षमा मिल्न आएपछि सामन्त पद उनलाई दिएका थिए। साथै उनी महामन्त्री पनि बनाइएका थिए। स्थितिमल्लको मृत्युपछि जयसिंहरामको शक्ति बढ्यो र उनका पक्षका मानिसले उनलाई 'महाराजाधिराज' सम्म पनि लेखे। तर स्थितिमल्ल छँदै नै महामन्त्री जयसिंह–राम'महामन्त्राधिराज' कहलाएका थिए ◊। यो कुरा इटुंबहालको अभिलेखबाट थाहा पाइन्छ। जे होस्; अंशुवर्माले शुरूमै 'महाराजाधिराज' पदवी लिएको चाहिं होइन भन्ने देखिन्छ। यस कुराको पुष्टि अनेक अभिलेखबाट हुन्छ।

बनेपाको यस बस्तीको दोलाशिखरस्वामी (चाँगुनारायण)संग कुनै सम्बन्ध रहेको देखिन्छ। यसै हुँदा यस ग्रामलाई सुबिधा गरिदिई यो अभिलेख राखिएको हो। यहाँ '(चाटभ)-टाप्रावेश्यः कोट्टमर्यादोपन्नः, . . . . . ग्रामः कृत, भनिएको छ। यसबाट यस ग्रामलाई कोट्ट (किल्ला) को दर्जामा राखी कर माफी आदि गरिदिएको देखिन्छ। गाउँ–गाउँमा गई सरकारी मालपोत उठाउन जाने सैनिकरूपका सरकारी कर्मचारी 'चाटभट' कहलाउँथे। यसको चर्चा माथि गरिसकेको छ।

★

---

◊ 'पूर्णिमा' ७ अङ्कका २७–४४, पृष्ठ हेर्नुहोस्।

# पाटन भीमसेनस्थानको शिवदेव+अंशुवर्माको अभिलेख

पाटन मङ्गलबजारमा भीमसेनस्थानअगाडि ढल छोप्न घोप्ट्याएर यो शिलालेख राखिएको थियो। हाल यो शिलालेख राष्ट्रिय संग्रहालयमा राखिएको छ। यसको अभिलेख कुँदिएको भाग ३२ अङ्गुल लम्बा २१ अङ्गुल चौडा छ। यहाँ संवत् ५१६ दिइएको छ† ।

योगी नरहरिनाथद्वारा 'इतिहासप्रकाश' १।१ मा यो छापिएको छ। नोलीद्वारा २३ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १८ अङ्कमा मैले पनि यो छपाएको छु ।

## मूलपाठ

१. (ॐ स्वस्ति मानगृहात्)......चीयमानकल्याणो[1] निरुपमगुण-
२. ..... .... ....(भ)ट्टारकमहाराजश्रीशिवदेवः कुशली
३. ...............(निवासि)नः प्रधानपुरस्सरान् ग्रामकुटुम्बिनः कु-
४. (शलमाभाष्य) समाज्ञापयति विदितम्भवतु भवतां यथाने-
५. (न)............प्रणत...... ........ ......चरणयुगलेन प्रख्याता-
६. (मलवि)पुल(यशसा) श्रीसामन्तांशुर्म्मणा विज्ञापितेन मयैतद्गौरवाद्
७. (युष्मदनुकम्पया च) कुथेर्वृत्त्यधिकृतानां समुचितस्त्रिकरमात्रसाधना(यै)
८. (व प्रवेशो)स्मिन्द्रङ्गे........लिङ्ग्वलशुल्लीपञ्चापराधादिनिमित्तन्त्वप्रवे(श)
९. (इति)प्रसादो वः कृतो लशुनपलाण्डुकराभ्यां च प्रतिमुक्तश्चिरस्थितये चास्य

† नोलीले यस अभिलेखको संवत् ५१७ छपाउनुभएको छ । तर यहांको एकस्थानी अङ्क ७ होइन, ६ हो। यस कुराको टुङ्गो 'पूर्णिमा १४ अङ्कको १२४ पृष्ठमा गरिएको छ। नोलीको पाठ–१. – – – – मा–कल्याणो

१०. (प्र)सादस्य शिलापट्टकशासनमिदन्दत्तन्तदेवंवेदिभिरस्म-
११. त्पादोपजीविभिरन्यैर्व्वा न कैश्चिदयम्प्रसादोन्यथा करणीयो यस्त्वे-
१२. तामाज्ञां विलङ्घ्यान्यथा कुर्य्यात्कारयेद् वा तमहमतितरान्न मर्षयि-
१३. ष्यामि भाविभिरपि भूपतिभिर्धर्म्मगुरुभिर्गुरुकृतप्रसादानु-
१४. वर्त्तिभिरियमाज्ञा सम्यक्पालनीयेति समाज्ञापना दूतकश्चात्र
१५. रामशील वार्त्तः संवत् ५१६ वैशाखमासे शुक्लदिवादशम्याम्

# अनुवाद

(कल्याण होस् । मानगृह दरबारबाट) . . . . . . . . भलो भएका, बेजोड गुणहरू भएका, गाथमा आराम रहेका. . . . भट्टारक महाराज श्रीशिवदेवबाट . . . मा बस्ने मुखियालगायत ग्रामका गृहस्थीहरूलाई कु(शलमङ्गल सोधेर) आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस् ।

(सामन्त राजाहरूले) . . . दुवै पाउ ढोगिएका, सफा ठूलो कीर्ति फैलिएका श्रीसामन्त अंशुवर्माले हाम्रा हजूरमा बिन्ति चढाउँदा हामीबाट यिनको कुरा राख्न र तिमीहरूउपरको (दयाले पनि) यस द्रङ्गमा कुथेर अड्डाका अधिकारीहरूले 'त्रिकर' उठाउन मात्र पस्नु योग्य छ; . . . लिङ्ग्वल, शुल्ली अधिकरणले पञ्चापराधको तहकीकात आदि गर्न पनि यहाँ नपस्नू भनी तिमीहरूलाई निगाह गरिएको छ । लशुन र प्याजमा लागेको कर माफी गरिएको छ। यो निगाह धेरै कालसम्म कायम रहोस् भनी यो सनद शिलापत्र गरिदिइएको छ।

यो कुरा थाहा पाई हाम्रो तर्फबाट जीविका गर्ने (सरकारी कर्मचारी) वा अरू कसैले यो निगाह अन्यथा नगर्नू । जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला, त्यसलाई हामी बिलकुल सहनेछैनौं। पछि हुने राजाहरूले पनि ऐन कानूनलाई ठूलो संझी अघिका राजाले गरेको निगाहको ख्याल राखी यो आज्ञाको राम्ररी पालना गर्नुपर्छ भन्ने अनुरोध छ ।

यहाँ दूतक वार्त (जागीरदार) रामशील छन् । संवत् ५१६ वैशाख शुक्ल दशमी ।

## व्याख्या–

अंशुवर्मा कसरी अगाडि देखापरे भन्ने कुराको चर्चा पहिले गरिसकेको छ। संवत् ५१६ वैशाखको यस अभिलेखसम्म अंशुवर्मा 'श्रीसामन्त' नै छन् । तर शासनाधिकार सबै उनकै हातमा थियो भन्ने कुरा यस अभिलेखबाट पनि स्पष्ट थाहा पाइन्छ । राजा शिवदेव पनि उनलाई गौरवको दृष्टिले हेर्थे भन्ने कुरा यहाँ उल्लिखित 'एतद्गौरवाद्' पदले देखाएको छ। माथि गएको चाँगुको अभिलेखमा 'एतद्बहुमानाद्' शब्द प्रयोग गरिएको छ । बनेपाको अभिलेखमा 'तदनुमतेन' शब्द प्रयोग गरी अंशुवर्माको अनुमति लिई यो निगाह गरिएको हो भन्ने भाव दर्शाइएको छ। यसरी राजा शिवदेवले

पनि गौरव, बहुमानको दृष्टिले हेरिनुपर्ने, उनको अनुमति लिई काम गर्नुपर्ने अवस्थामा अंशुवर्मा पुगेको यताबाट स्पष्ट देखिन्छ ।

## शासनव्यवस्थामा सुधार–

आफ्नो हातमा शासनाधिकार आएपछि अंशुवर्माले शासनव्यवस्थामा सुधार गरे । हुनत रविगुप्त र भौमगुप्तको कार्यकालमा पनि शासनव्यवस्थामा केही सुधार गरिएको थियो । तर यो व्यापक थिएन । केही ठाउँमा मात्र यो सीमित थियो । अब अंशुवर्माले प्रशासनाधिकार मूल (केन्द्र) मा मात्र सीमित नगरी ग्राम, तल, द्रङ्ग, आदि विभिन्न तहका बस्तीका प्रजालाई नै (स्थानीय पाञ्चालीलाई नै) प्रसाशनसम्बन्धी अधिकार सुम्पी स्वायत्तशासनलाई प्रोत्साहन दिए। यसरी शासनव्यवस्थामा सुधार गर्दा अंशुवर्माले एकै चोटि सबै ठाउँमा एकै किसिमको प्रशासनाधिकारचाहिं सुम्पेको देखिंदैन । तत् तत् ठाउँका जनताको प्रशासन चलाउने क्षमता हेरी तदनुसार उनले अधिकार सुम्पेको देखिन्छ । उनले जनतालाई अधिकार दिई गरिदिइएका सनदपत्रहरूको तुलना गरी हेर्दा यो कुरा थाहा पाइन्छ ।

यस अभिलेखमा चाहिं यूपग्राम द्रङ्गमा कुथेर, लिङ्गवल, शुल्ली आदि अधिकरणले पञ्चापराधसम्बन्धी काममा पनि पस्न नपाउने व्यवस्था गरिएको छ । अर्थात् उपर्युक्त अधिकरणले गर्ने काम स्थानीय पाञ्चालीलाई नै सुम्पिएको छ । यसरी विभिन्न सरकारी अड्डा अदालत धाउनु नपर्दा जनतालाई सुबिधा हुने स्पष्ट छ ।

कुथेर अधिकरणको मुख्य काम राजस्व उठाउने थियो । 'राजस्व' नउठाए राजकोशलाई हानि भई सरकार चलाउन नै गाह्रो हुने हुनाले राजस्व उठाउनचाहिं कुथेर अधिकरणका अधिकारीहरू यहाँ पस्नू भन्ने व्यवस्था मिलाइएको छ । यसबाट जनताले स्वायत्तशासनसम्बन्धी अधिकार पनि पाउने भयो, साथै राजकोशलाई पनि हानि नहुने भयो । यसरी अंशुवर्माको नीति निकै सन्तुलित रहेको हामी पाउँछौं ।

यसरी अनुग्रह र परिहार दिंदा राजकोशलाई हानि नहोस् भन्ने कुरामा दृष्टि दिनू; किनभने राजकोश खाली भयो भने पछि जनतालाई नै पिर्नुपर्ने खण्ड आइपर्छ भनी आचार्य कौटल्यले बोलेको कुरा यस प्रसङ्गमा स्मरणीय छ । कौटल्यका वाक्य यस प्रकारका छन्-

"अनुग्रहपरिहारौ चैभ्यः कोशवृद्धिकरौ दद्यात् । कोशोपघातिकौ वर्जयेत् । अल्पकोशो हि राजा पौरजानपदानेव ग्रसते ।"

(कौ. अ. २ अधिकरण १ अध्यायबाट)

हाम्रा अंशुवर्मालाई कौटल्यको विचारले प्रभाव पारेको थियो । (यसको चर्चा तल गरिएको छ।)

त्रिकर–

लिच्छविकालका करहरूमा 'त्रिकर' मुख्य हुन्। 'त्रिकर' के के हुने भन्ने कुरामा विद्वान्‌हरूको मतभेद रहेको छ। बूढानीलकण्ठ र धर्मस्थलीका एकै दिन राखिएका अभिलेखमा कुँद्‌नेको भ्रमवश 'समुचितस्त्रीकर' पाठ कुँदिएको छ। यसो हुनाले 'आइमाईमाथि लागेको कर' यो हुनुपर्छ; महाभारत कालमा पनि आइमाईमा कर लागेको पाइन्छ भनी कुरा तानतुन गरी देखाई त्यसै गरी लिच्छवि-कालमा पनि आइमाईमाथि कर लागेको देखिन्छ भन्ने तर्क गरिएको पनि पाइन्छ। परन्तु यो कुरा सत्य होइन। धेरैजसा अभिलेखमा ह्रस्व 'त्रिकर' पाठ नै पाइन्छ। फेरि अभिलेखहरू केलाई हेर्‍यौं भने राजकोशलाई हानि नहोस् भनी उठाइने 'त्रिकर' व्यापक कर हुन् भन्ने स्पष्ट थाहा पाइन्छ।

अंशुवर्माभन्दा अघिका अभिलेखमा 'त्रिकर' शब्दको प्रयोग पाइंदैन। अंशुवर्मापछिका अभिलेखमा पनि 'त्रिकर' शब्दको उल्लेख पाइंदैन। अंशुवर्माका ताकाका अभिलेखहरूमा मात्र 'त्रिकर' शब्दको प्रयोग भएको पाइन्छ। यो कुरा यस प्रसङ्गमा विचारणीय छ। फेरि अंशुवर्माकै पनि कुनै कुनै अभिलेखमा त्रिकरको सट्टामा 'समुचितकर' मात्र भनिएको पनि पाइन्छ। उदाहरणार्थ धापासीको अभिलेखलाई देखाउन सकिन्छ। त्यहाँ 'समुचितकरमात्रसाधनाय तु तदधिकृतैः प्रवेष्टव्यमेव' भनी लेखिएको छ। यसबाट पहिलेदेखि चल्दै आइरहेको समुचित (साबिक बमोजिमको) करलाई नै अंशुवर्माले 'त्रिकर' सञ्ज्ञा दिएका त होइनन् भन्ने प्रश्न उठ्छ। यस कुराको पुष्टि अंशुवर्म्माभन्दा अघिका र पछिका अभिलेखले गर्छन्। माथि गएको थानकोटको वसन्तदेवको अभिलेखमा 'समुचितभागभोगकर' को उल्लेख परेको छ। का. इ. लगनटोलको द्वितीय शिवदेवको अभिलेखमा पनि 'समुचितदेयभागभोगकर' को उल्लेख परेको छ। कृषिमा लागेको कर 'भाग' पाशुपाल्यमा लागेको कर 'भोग' तथा वाणिज्यमा लागेको कर 'कर' हुन् भन्ने निर्णय माथि गरिसकेको छ। पहिलेदेखि चल्दै आइरहेका भाग, भोग, कर यी तीन व्यापक करलाई नै अंशुवर्माका अभि-लेखमा 'त्रिकर' संज्ञा दिइएको हो भन्ने यताबाट खुल्छ।

यस अभिलेखमा कुथेर अधिकरणका अधिकृतहरूले 'त्रिकर' अर्थात् भाग, भोग, कर नामक तीन थरी कर उठाउन मात्र यहाँ पस्नू भनिएको हो।

लशुनकर, पलाण्डुकर–

'त्रिकर' उठाउन कुथेर अधिकरणका अधिकारीले यहाँ पस्नू भनी भनिएको हुनाले तरकारीमा लागेको कर पनि उठाउन पाउने भएको थियो। तर अनुग्रह गरी प्याज र लशुनमा लागेको करचाहिं माफी गरिए भनी यहाँ भनिएको छ। यसबाट लशुन र प्याजबाहेक अरू तरकारीमा कर लागू थियो; अनुग्रह गरिएको निर्दिष्ट इलाकाबाहेक अरू ठाउँमा 'लशुनकर' र 'पलाण्डुकर' पनि साबिकबमोजिम लागू नै थिए भन्ने बुझिन्छ।

अधिकरणको अधिकार–

प्रशासन राम्ररी चलाउनाका लागि लिच्छविकालमा कुथेर, शुल्ली, लिङ्ग्वल, माप्चोक

आदि अनेक अधिकरण थिए। यो अधिकरणले यो काम गर्नू; यस अधिकरणको यति अधिकार छ आदि कुरा कानूनद्वारा निश्चित गरिएको हुन्थ्यो। यसै हुँदा अभिलेखहरूमा "माप्चोकाधिकारोयं यथाव्यवस्थम्प्रवर्तयितव्य: = माप्चोक अधिकरणले लाग्ने कानून लाउनू" आदि उल्लेख पाइन्छ। पछि लिच्छविकालका शासकहरूले ग्रामपाञ्चाली जस्ता स्थानीय संघटूनलाई नै यी अधिकरणहरूले गर्ने काम सुम्पँदै गए। यसो हुनाले यी अधिकरणहरूको अधिकार केही अंशमा सीमित हुँदै गएको हामी पाउँछौं। जनतालाई सुम्पिएको प्रशासनाधिकारमा अधिकारीहरूले यो मेरो अधिकरणको अधिकारभित्रको काम हो भनी हस्तक्षेप गर्न नपाउन् भनी अभिलेखहरूमा स्पष्टसंग बोलिएको पाइन्छ। यस अभिलेखमा पनि 'यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा कुर्य्यात्कारयेद् वा तमहमतितरान्न मर्षयिष्यामि' भनी बोलिएको छ।

अधिकृत— अधिकरणमा काम गर्नेहरूको पद र क्रम के कस्तो हुन्थ्यो भन्ने कुरा अभिलेखबाट खुल्न सकेको छैन। अधिकरणका माथिल्ला तहका कर्मचारी 'अधिकृत' कहलाउँथे भन्ने चाहिं अभिलेखबाट थाहा पाइन्छ। यस अभिलेखमा पनि कुथेर अधिकरणका अधिकृतको उल्लेख आएको छ।

वृत्ति—अधिकृतहरू कुन रूपमा वेतन (तलब) पाउँथे भन्ने कुराको पनि चर्चा गर्नुपरेको छ। हाम्रो यहाँ सरकारी अधिकारीलाई वृत्ति (जागीर) को रूपमा निश्चित जग्गा तोकिदिने प्रथा पछिसम्म पनि प्रचलित थियो। लिच्छविकालमा पनि यसै गरी अधिकृतहरूलाई 'वृत्ति' दिइन्थ्यो भन्ने थाहा पाइएको छ। यसै हुँदा यस अभिलेखमा कुथेरवृत्त्यधिकृत = कुथेर अधिकरणका वृत्ति (जागीर) पाउने अधिकृतको उल्लेख परेको हो। अरू अभिलेखमा 'माप्चोकवृत्तिभुक्' 'पश्चिमाधिकरणवृत्तिभुक्' आदिको उल्लेख आएको छ। बलम्बूको भीमार्जुनदेव जिष्णुगुप्तको अभिलेखबाट वृत्ति' भनेको जागीरको रूपमा दिइएको निश्चित जग्गा हो भन्ने स्पष्ट थाहा पाइन्छ। त्यहाँ 'वृत्ति'को रूपमा दिइएको जग्गाको चारकिल्ला नै खोली दिइएको छ। यति कुराबाट लिच्छविकालका अधिकृतहरू नगदको रूपमा तलब पाउँदैनथे; 'वृत्ति' पाउँथे भन्ने थाहा पाइएको छ†।

---

† 'पूर्णिमा' २३ अङ्कका १८०–१८२ पृष्ठमा पनि यी विषयमा विचार गरिएको छ।

# गोलमाढीटोलको शिवदेव+अंशुवर्माको अभिलेख

भक्तपुरको गोलमाढीटोलमा एउटा सानो देवमन्दिरसंग यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३१ अङ्गुल लम्बा २५ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ५१६ छ†।

सेसिल बेन्डालद्वारा १ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा २४ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १८ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. स्वस्ति मानगृहादपरिमितगुणसमुदयोद्भासितयशा ब-
२. प्पपादानुद्ध्यातो लिच्छविकुलकेतुर्भट्टारकमहाराजश्रीशिवदे-
३. वः कुशली माखोपृंसतलद्रङ्गनिवासिनः प्रधानपुरस्सरा-
४. न्ग्रामकुटुम्बिनः कुशलपरिप्रश्नपूर्व्वं समाज्ञापयति विदि-
५. तम्भवतु भवतां यथानेन प्रख्यातामलविपुलयशसा स्वप-
६. राक्रमोपशमितामित्रपक्षप्रभावेन श्रीमहासामन्तांशुवर्म्म-
७. णा विज्ञापितेन मयैतद्गौरवाद् युष्मदनुकम्पया च कुथेर्वृ-
८. त्त्यधिकृतानामत्र समुचितस्त्रिकरमात्रसाधनायैव प्रवे-
९. शो लेख्यदानपञ्चापराधाद्यर्थन्त्वप्रवेश इति प्रसादो वः
१०. कृतस्तदेवंवेदिभिरस्मत्पादप्रसादोपजीविभिरन्यैर्व्वा न
११. कैश्चिदयमन्यथा करणीयो यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा कु-
१२. र्य्यात्कारयेद्वा तमहमतितरान्न मर्षयिष्यामि येपि मद्-

---

† नोलीले यस अभिलेखको पनि संवत् ५१७ छपाउनुभएको छ। तर शुद्ध पाठ ५१६ हो।

१३. द्‌ध्वंम्भूभुजो भवितारस्तैरपि धर्मगुरुभिर्ग्गुरुकृतप्रसा-
१४. दानुवर्त्तिभिरियमाज्ञा सम्यक्प्रतिपालनीयेति समाज्ञापना
१५. दूतकश्चात्र भोगवर्म्मगोमी संवत् ५१६ ज्येष्ठशुक्लदिवादशम्याम्

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट अनगिन्ती गुणको थुप्रोले सफा कीर्ति फैलिएका, बप्प (बुवा) का पाउको अनुग्रह पाएका, लिच्छविकुलको झण्डास्वरूप भएका, गाथमा आराम रहेका, भट्टारक महाराज श्रीशिवदेवबाट तलसहितको माखोपृम् द्रङ्गमा बस्ने मुखियालगायत ग्रामका गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ ।

सफा र ठूलो कीर्ति फैलिएका, आफ्नै पराक्रमले शत्रुको दबदबालाई खतम पारेका यी श्रीमहासामन्त अंशुवर्माले हाम्रा हजूरमा बिन्ति चढाउँदा हामीबाट यिनको कुरा राख्न र तिमीहरूउपरको दयाले पनि यहाँ (तिमीहरूको ग्राममा) कुथेर अधिकरणका अधिकृतहरूले त्रिकर (भाग, भोग, कर) उठाउनाको लागि मात्र पस्नु योग्य छ। लेख्यदान र पञ्चापराधको तहकीकात गर्ने कामको निमित्तचाहिँ नपस्नू भनी तिमीहरूलाई निगाह गरिएको छ। यो कुरा तिमीहरूलाई थाहा होस् ।

तसर्थ यस कुरालाई बुझेर हाम्रो निगाहबाट जीविका चलाउनेहरू (सरकारी कर्मचारीहरू) र अरू कसैले पनि यस बातमा अन्यथा नगर्नू। जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला त्यसलाई हामी बिलकुल सहनेछैनौं। हामीभन्दा पछि जो राजा हुनेछन्, तिनीहरूले पनि धर्मलाई ठूलो संझेर हामीले गरेको निगाहको ख्याल राखेर यस आज्ञाको राम्रोसंग पालना गर्नुपर्छ भन्ने अनुरोध छ।

यहाँ दूतक (मार्फत) भोगवर्म्मा गोमी छन्। संवत् ५१६ ज्येष्ठ शुक्ल दशमी ।

**व्याख्या–**

यस अभिलेखमा संवत् ५१६ ज्येष्ठ महीना दिइएको छ। यस वेला अंशुवर्मा 'श्रीमहासामन्त' बनिसकेका छन्। यसभन्दा एक महीना पहिलेको पाटन भीमसेनस्थानको अभिलेखमा अंशुवर्माको दर्जा 'श्रीसामन्त' मात्र रहेको थियो। यसरी अंशुवर्मा अब एकतह माथि चढेका छन्। उनको अवस्था पहिलेभन्दा अब झन् मजबूत भएको यसबाट देखिन्छ। अंशुवर्माको विशेषणमा पनि अब अलिकता फरक भएको छ । योभन्दा अघिका चाँगु, बनेपा, पाटन भीमसेनस्थानको अभिलेखमा सामन्तहरूले उनलाई ढोग्न आएको, आफ्नो विद्वत्ताले अज्ञान हटाएको आदि विशेषण अंशुवर्मामा लागेका थिए। अब यहाँ 'स्वपराक्रमोपशमितामित्रपक्षप्रभावेन' भन्ने विशेषण उनमा लागेको छ। यसबाट आभीरगुप्तहरूलाई पन्छाउनामा अंशुवर्माको हात रहेको थियो भन्ने ध्वनि निस्कन्छ। साथै उनीहरूले फेरि टाउको उठाउने सक्नेछैनन् भन्ने विश्वास पनि अंशुवर्मालाई भएको

यताबाट देखिन्छ । यसैले 'आफ्नो पराक्रमले शत्रुको दबदबालाई खतम पारेको' यस्तो विशेषण उनले लाएको देखिन्छ । अंशुवर्माका अभिलेखहरू केलाई हेर्दा त्यस वेला जुन कुरामा जोड दिनु, प्रख्यापन गर्नु आवश्यक हुन्थ्यो; त्यसै किसिमको विशेषण अंशुवर्माले लिएको देखिएको छ। यस कारण समय समयमा फेरिएका उनका यस्ता विशेषणबाट पनि हामी तात्कालिक अवस्थाको अलिकता झलक पाउँछौं ।

कुथेर अधिकरणको मुख्य काम राजस्व उठाउने थियो । साथै जग्गाको रजिस्ट्रेशन गराउने आदि काम पनि कुथेर अधिकरणले गर्थ्यो । यसो हुनाले यस अभिलेखमा कुथेर अधिकरणका अधिकृतहरू त्रिकर (भाग, भोग, कर नामक तीन थरी मुख्य कर) उठाउन मात्र माखोपृम् द्रङ्गमा पस्नू, लेख्यदान (जग्गा रजिष्ट्रेशनसम्बन्धी निस्सापत्र दिने काम ) को लागि यहाँ नपस्नू भनिएको छ । जग्गा किन–बच गर्दा त्यसको रजिस्ट्रेशनको लागि सरकारी अड्डामा धाउनुपर्दा जनतालाई अलि असुबिधा थियो । सो नहोस् भन्नाका लागि 'लेख्यदान' सम्बन्धी अधिकार स्थानीय ग्राम-पाञ्चालीलाई नै सुम्पिएको हो ।

चोरी गर्नु, हत्या गर्नु, राजद्रोह गर्नु आदि ठूल–ठूला पाँच अपराध 'पञ्चापराध' कहलाएको थियो। त्यस्ता पञ्चापराधसम्बन्धी मुद्दामामिलाको लागि पनि सम्बद्ध सरकारी अधिकरणले नपस्नू भन्ने व्यवस्था पनि यहाँ मिलाइएको छ। पञ्चापराधसम्बन्धी मुद्दामामिला शुल्ली अधिकरणले हेर्दथ्यो। अब यस्ता मुद्दामामिलाको छिनफान गर्ने अधिकार पनि ग्रामपाञ्चालीलाई नै सुम्पियो। सरकारी अड्डा धाउनुनपर्दा जनतालाई यसबाट पनि सुबिधा हुने स्पष्ट छ ।

प्रशासनको दृष्टिले त्यस वेलाका बस्तीहरू ग्राम, तल, द्रङ्गमा विभक्त गरिएका थिए । तलसहितको माखोपृम् द्रङ्गका बासिन्दाहरूलाई प्रशासनसम्बन्धी केही अधिकार सुम्पी यो अभिलेख गरिदिइएको हुनाले भक्तपुर भेकमा पनि यस वेला विकसित व्यापार–केन्द्र रूपको बस्ती थियो भन्ने कुरा यो अभिलेखले देखाएको छ ।

नेवारीभाषामा भक्तपुरलाई अहिलेसम्म पनि 'खोपः' भनिन्छ । यसको पूर्वरूप 'खोपृङ' हो । यो कुरा लिच्छविकालका अभिलेखबाट थाहा पाइन्छ। मानदेवको पालाको देउपाटनको रत्नसङ्घको अभिलेखमा 'खोपृङग्राम' को उल्लेख परेको छ । गोलमाढीटोलको यस अभिलेखमा 'खोपृम्' को अगाडि 'मा' पनि जोडिएको छ। 'मा' ले के कुरा जनाएको हो; सो बुझ्न सकिएको छैन। भक्तपुरको तुलाछेंटोलको अभिलेखमा भने अर्कै 'खृपुङ' ग्रामको उल्लेख परेको छ। तर पछिसम्म पनि चलेर आएको हुनाले भक्तपुरको प्राचीन नाउँ 'खोपृङ' नै हो भन्ने कुरामा शङ्का छैन। स्थानभेदले मात्र यसको विभिन्न रूप देखापरेको बुझिन्छ ।

'खोपृङ' यो शब्द संस्कृतभाषाको होइन; किरातपरिवारको भाषाको शब्द यो हो। यसबाट 'खोपृङ' बस्ती लिच्छविहरूको आगमनभन्दा पहिले नै बसिसकेको थियो भन्ने देखिन्छ ।

यस अभिलेखमा दूतक भोगवर्मा गोमी छन्। राजाका विश्वासप्राप्त व्यक्ति मात्र दूतक बनाइने हुनाले यी भोगवर्मा गोमी त्यस बेलाका प्रतिष्ठित व्यक्ति देखिन्छन्। अंशुवर्मा एक्लैले शासन गर्न थालेपछिको पाटन नबहिलको अभिलेखमा दूतक भोगवर्मा नै छन्। त्यहाँ उनको दर्जा 'महासामन्त' लेखिएको छ। यसबाट अंशुवर्माले पछि भोगवर्मालाई 'महासामन्त' पद दिएको बुझिन्छ। अंशुवर्माको पशुपतिको अभिलेखबाट भोगवर्मा अंशुवर्माका भानिज थिए भन्ने देखिन्छ।

# तुलाछेंटोलको शिवदेव+अंशुवर्माको अभिलेख

भक्तपुर तुलाछेंटोलमा यो अभिलेख कुँदिएको शिलापत्र पहिले रहेको थियो। हाल भक्तपुर संग्रहालयमा लगी यो राखिएको छ। यसको अभिलेख कुँदिएको भाग ३६ अङ्गुल लम्बा १९ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्; छेउ–छाउमा फूल पनि अङ्कित छन्। यहाँ संवत् ५१६ छ।

लेभीद्वारा ९ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा २५ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति मानगृहादपरिमितगुणसमुदयोद्भासि-
२. तयशा बप्पपादानुध्यातो लिच्छविकुलकेतुर्भ-
३. (ट्टा) रकमहाराजश्रीशिवदेवः कुशली खृपुङ्ग्रामे
४. ग्रासूर्यविध्वद्यग्रान्निवासिनः प्रधानपुरस्सरान्ग्राम–
५. कुटुम्बिनः कुशलपरिप्रश्नपूर्व्वं समाज्ञापयति विदि-
६. तम्भवतु भ (वतां यथाने) न प्रख्यातामलविपुलयशसा
७. स्वपराक्र (मोपशमि) तामित्रपक्षप्रभावेन श्रीमहा-
८. सामन्तांशु (वर्म्मणा) विज्ञापितेन मयैतद्गौरवाद् युष्म-
९. दनुकम्प (या च कुथे) वृ स्त्यधिकृतानामत्र समुचितस्त्रिक-
१०. रमात्रसाधनायैव प्रवेशो लेख्यदानपञ्चापराधा-
११. द्यर्थन्त्वप्रवेश इति प्रसादो वः कृतस्तदेवंवेदिभि-

१२. रस्मत्पादप्रसादोपजीविभिरन्यैर्व्वा न कैश्चिदयमन्य-
१३. था करणीयो यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा कुर्य्यात्कारये-
१४. द्वा तमहमतितरान्न मर्षयिष्यामि येपि मद्रूर्द्ध्वम्भू-
१५. भुजो भवितारस्तैरपि धर्म्मगुरुभि(र्ग्गुरुकृ)तप्रसादा-
१६. नुर्वात्तिभिरियमाज्ञास(म्यक्प)रिपालनीयेति समा-
१७. ज्ञापना (दूतकश्चात्र भो)गवर्म्मगोमी संवत् ५००,
१८. १०,६............(शु)क्लदिवा (प)ञ्चम्याम्

## अनुवाद

कल्याण होस्। मानगृह (दरबार)बाट अनगिन्ती गुणको थुप्रोले सफा कीर्ति फैलिएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, लिच्छविकुलको झण्डास्वरूप भएका, गाथमा आराम रहेका, भट्टारक (गद्दीनशीन) महाराज श्रीशिवदेवबाट सूर्य चन्द्र रहेदेखि अहिलेसम्म खृपुङ्ग्राममा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ।

सफा र ठूलो कीर्ति फैलिएका, आफ्नो पराक्रमले शत्रुहरूको दबदबालाई खतम पारेका यी श्रीमहासामन्त अंशुवर्माले हाम्रा हजूरमा बिन्ति चढाउँदा हामीबाट यिनको कुरा राख्न र तिमीहरू उपरको दयाले पनि यहाँ (तिमीहरूको ग्राममा) कुथेर अधिकरणका अधिकृतहरूले त्रिकर (भाग, भोग, कर नामक तीन थरी मुख्य कर ) उठाउनाको लागि मात्र पस्नु योग्य छ; लेख्यदान र पञ्चापराधको तहकीकात गर्ने आदि कामको निमित्तचाहिं (सम्बद्ध अधिकरणले) नपस्नू भनी तिमीहरूलाई निगाह गरिएको छ। यो कुरा तिमीहरूलाई थाहा होस्।

तसर्थ यो कुरा बुझेर हाम्रो निगाहबाट जीविका गर्ने (सरकारी कर्मचारी) हरूले वा अरू कसैले पनि यस कुरामा अन्यथा नगर्नू। जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला, त्यसलाई हामी बिलकुल सहनेछैनौं। हामीभन्दा पछि जो राजा हुनेछन्; तिनीहरूले पनि ऐन कानूनलाई ठूलो संझी अधिका राजाले गरेको निगाहको ख्याल राखेर यस आज्ञाको राम्ररी पालना गर्नुपर्छ भन्ने अनुरोध छ।

यहाँ दूतक भोगवर्मा गोमी छन्। संवत् ५१६....शुक्ल पञ्चमी।

### व्याख्या-

गोलमाढी टोलको माथि गएको अभिलेख र यस अभिलेखको बेहोरा उही नै छ। शिवदेव र अंशुवर्मामा लागेका विशेषण पनि उही नै छन्। सनद–पत्र गरिदिएको साल पनि उही छ; दिन मात्र फरक छ। माखोपृम् द्रङ्गका बासिन्दाहरूलाई प्रशासनसम्बन्धी केही अधिकार सुम्पेको लगतै पछि त्योसंगै रहेको खृपुङ्ग्रामलाई पनि त्यही अधिकार सुम्पेको यता-

बाट बुझिन्छ। माखोपृम् द्रङ्ग र खृपुङ ग्राम भिन्नाभिन्नै बस्ती हुन् भन्ने पनि यताबाट बुझिन्छ। यस अभिलेखमा 'खृपुङग्रामे आसूर्यविधु अद्याग्रान् निवासिनः' भन्ने उल्लेख परेको हुनाले खृपुङ बस्ती अझ पुरानो थियो भन्ने आभास पाइन्छ। तर बाटोघाटो आदिको सुबिधाले 'माखोपृम्' बढी विकसित भई व्यापारकेन्द्र बन्यो र त्यसले चाहिं 'द्रङ्ग' को रूप लिन पुग्यो । खृपुङग्रामको चाहिं त्यति विकास हुन सकेन भन्ने देखिन्छ ।

यस अभिलेखमा परेका मुख्य विषयको चर्चा माथिको अभिलेखको व्याख्यामा नै परिसकेको हुनाले यहाँ फेरि दोहऱ्याउनु आवश्यक देखिंदैन। माथि छुटेका एक दुइ विषयको मात्र यहाँ चर्चा गरिन्छ।

## संयुक्त परिवार–

लिच्छविकालमा संयुक्त परिवार प्रथा प्रचलित थियो। यसो हुनाले जनतालाई सम्बोधन गरी राखिएका सबै अभिलेखमा 'कुटुम्बी' शब्दको प्रयोग गरिएको पाइन्छ। यस अभिलेखमा पनि 'ग्रामकुटुम्बिनः कुशलप्रश्नपूर्व्वं समाज्ञापयति' भनिएको छ। अरू अभिलेखमा पनि कुटुम्बी-लाई नै सम्बोधन गरिएको छ। यसबाट त्यसवेला व्यक्तिलाई भन्दा परिवारलाई बढी महत्त्व दिइएको थियो भन्ने स्पष्ट छ। अर्को कुरा परिवारको एक सदस्यले हत्या, चोरी,राजद्रोही आदि ठूलठूला अपराध गरे पूरा परिवारलाई सजाय गरिन्थ्यो। यो कुरा यङ्गालहिटी र सुनागुठीको अभिलेखबाट थाहा पाइन्छ। विचारार्थ यङ्गालहिटीको अभिलेखको अलिकता अंश यहाँ उद्धृत गर्नुपरेको छ–

"ये वा पुनरेतद्द्रङ्गचतुर्भागसीमाभ्यन्तरवर्तिनश्चौरपरदारहत्याराजद्रोहकापराधमवाप्नुयु-स्तेषामेवामुनापराधेन दोषवतां यदात्मीयमेव गृहक्षेत्रगोधनादिद्रव्यन्तदेव राजकुलाभाव्यमेतद्दोषा-भिशस्तानां ये दायादास्तेभ्यो नान्यायेनाल्पमपि क्रष्टव्यम्"

जलशयन नारायणमूर्ति बनाउन लायको ठूलो ढुङ्गा तानेर ल्याएका हुनाले प्रसन्न भएर अबउप्रान्त यस ठाउँमा बस्नेहरूले चोरी, हत्या, राजद्रोह आदि ठूलठूला अपराध गरे भने खाली अपराधीलाई मात्र दण्ड गरिनेछ; तिनका परिवारउपर कार्बाइ गरिनेछैन भन्ने उल्लेख यहाँ परेको छ। यसबाट अनुग्रह गरी माफी दिइएको उक्त सीमित ठाउँबाहेक अन्यत्र यस्ता ठूला अपराध गरे अपराधीको परिवारैलाई सजाय दिइन्थ्यो भन्ने स्पष्ट छ ।

सुनागुठी भृङ्गारेश्वरको अभिलेखमा पनि यस्तै कुरा परेको छ। यसबाट लिच्छविकालमा संयुक्त परिवार प्रथा प्रचलित थियो भन्ने थाहा पाइन्छ ।

### *प्रधान–*

बस्तीका बासिन्दाहरूलाई सम्बोधन गर्दा प्रायः सबै अभिलेखमा 'प्रधानपुरःसरान् ग्रामकुटुम्बिनः समाज्ञापयति = मुखियालगायत ग्रामका गृहस्थीहरूलाई आज्ञा भएको छ' भन्ने बेहोरा परेको पाइन्छ। यस अभिलेखमा पनि सो कुरा परेको छ। यसबाट प्रत्येक ग्राममा 'प्रधान' रहेका हुन्थे भन्ने थाहा

पाइन्छ। ग्रामको रेखदेखको काम प्रधानको हातमा रहने हुनाले अरू गृहस्थीभन्दा प्रधान (मुखिया) को मान बढी हुनु स्वाभाविक छ। यसो हुनाले सरकारी सम्बोधनमा 'प्रधानपुरस्सर' भनिएको हो। कवि बाणले कादम्बरीमा उज्जयिनी शहरको वर्णन गर्दा 'प्रधानपुरुषोपेतेन' भनी 'प्रधान'-को चर्चा गरेका छन्।

# धर्मस्थलीको शिवदेव+अंशुवर्माको अभिलेख

काठमाडौं–उपत्यकाको उत्तरी भागमा टोखाको हाराहारी 'धर्मस्थली'[†] भन्ने बस्ती छ । त्यहाँ बस्ती बाहिर उत्तरतिर सानो देवस्थल छ । त्यहीं यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ । यसको अभिलेख कुँदिएको भाग २५ अङ्गुल लम्बा, २१ अङ्गुल चौडा छ । यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन् । यहाँ संवत् ५१७* छ ।

नोलीद्वारा २६ संख्याको रूपमा यो छापिएको छ । 'पूर्णिमा' १८ अङ्कमा मैले पनि यो छपाएको छु । राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट यसको पाठ पढ्न मदत पाइन्छ ।

## मूलपाठ

१. स्वस्ति मानगृहात्प्रथितामलविपुलयशा निरुपमगुणगणो[१]

---

† यो अभिलेख 'धरमपुर' को हो भनी नोलीले छपाउनुभएको छ । तर यो अभिलेख धरमपुरको होइन; 'धर्मस्थली' को हो । धरमपुर र धर्मस्थली बेग्लाबेग्लै ठाउँ हुन् । बांसबारीबाट पाउभर जति उत्तरपट्टि धरमपुर रहेको छ । टोखाको हाराहारी रहेको धर्मस्थली त प्रसिद्ध नै छ ।

* नोलीले यस अभिलेखको संवत्को अङ्क ५१८ पढी छपाउनुभएको छ । तर यहांको संवत् ५१७ हो । यहांको एकस्थानी अङ्क जस्तो अङ्क ७ हो भन्ने निर्णय 'पूर्णिमा' १४ अङ्कको १०१–१०५ गरिएको छ ।

१. यस अभिलेखको १ देखि ६ पङ्क्तिसम्मको नोलीले छपाउनुभएको पाठ यस प्रकारको छ–

१. (स्वस्ति मानगृहाद्) अमल... .... ....
२. – – – – – – – – – – – – – (श्री) शिवदेवः कुशली.....
३. – – – – – – – – – – – – कु– – – – – –
४. – – – – समाज्ञापयति विदितम् (भवतु भवतां यथानेन)
५. – – – – – – – – क्षितिपति – – – – – – – – – – – –
६. – – लन– – – – – – – – – – – – – – – – – – – –

२. (लि)च्छविकुलकेतुर्भट्टारकमहाराजश्रीशिवदेवः कुशली –दु
३. .....ग्ग्रामनिवासिनः प्रधानपुरस्सरान्ग्रामकुटुम्बिनः कुशल-
४. (प)रिप्रश्नपूर्व्वं समाज्ञापयति विदितम्भवतु भवतां यथानेन...
५. –पनमितानेकक्षितिपतिशिरोविभूषणमणिरुचा (वभासित) चर-
६. णयुगलेन सम्यक्प्रजापालनपरिश्रमोपार्जितदिगन्तव्याप्तप-
७. (रा)क्रमश्रीमहासामन्तांशुवर्म्मणा युष्मदनुग्रहाय... ... ...
८. कूथेरवृत्त्यधिकृतानामिह समुचितस्त्रिकरमात्रसाधनायैव (प्रवे)
९. शो (ले)ख्यदानपञ्चापराधादिनिमित्तन्त्वप्रवेश इति प्रसादो वः कृतस्त(दे)
१०. वंवेदिभिरस्मच्चरणोपजीविभिरन्यैर्व्वा न कैश्चिदयं प्रसादोन्यथा (क)
११. रणीयो यस्त्वेतामाज्ञामुल्लङ्घ्यान्यथा कुर्य्यात्कारयेद्वा तमहमति-
१२. (त)रान्न मर्षयिष्यामि येपि मदूर्ध्वम्भूभुजो भवितारस्तैरपि धर्म्मगु-
१३. रुभिर्ग्गुरुकृतप्रसादानुवर्तिभिरियमाज्ञा सम्यक्प्रतिपालनीया
१४. दूतकश्चात्र विप्रवर्म्मगोमी संवत् ५१७ प्रथमाषा–
१५. ढशुक्लदिवाद्वादश्याम्

## अनुवाद

कल्याण होस्। मानगृह (दरबार) बाट सफा र ठूलो कीर्ति फैलिएका, बेजोड गुणहरू भएका, लिच्छविकुलको झण्डास्वरूप भएका, गाथमा आराम रहेका भट्टारक महाराज श्रीशिवदेवबाट दु––ग् ग्राममा बस्ने मुखियालगायत ग्रामका गृहस्थीहरूलाई कुशलमङ्गल सोधेर आज्ञा भएको छ –

ढोग्न नुहेका अनेक (सामन्त) राजाका शिरपेचका मणिका चहकले दुवै पाउ झलमल्ल सुहाएका, परिश्रमपूर्वक राम्ररी प्रजाको पालन गर्नाले दिशाको छेउ छेउसम्म प्रभाव फैलिएका,श्रीमहासामन्त अंशुवर्माले तिमीहरूउपर अनुग्रह गरी यहाँ (तिमीहरूको ग्राममा) कुथेर अधिकरणका अधिकृतहरूले त्रिकर (भाग, भोग, कर नामक तीन थरी मुख्य कर) उठाउनाको लागि मात्र पस्नु योग्य छ; लेख्यदान र पञ्चापराधको तहकीकात गर्ने आदि कामको निमित्तचाहिं (सम्बद्ध अधिकरणले) नपस्नू भनी तिमीहरूलाई निगाह गरिएको छ। यो कुरा तिमीहरूलाई थाहा होस्।

तसर्थ यस कुरालाई बुझेर हाम्रो तर्फबाट जीविका चलाउनेहरूले (सरकारी कर्मचारीहरूले) वा अरू कसैले पनि यस कुरामा अन्यथा नगर्नू। जसले यो आज्ञालाई मटेरेर अन्यथा गर्ला वा गराउला; त्यसलाई हामी बिलकुल सहनेछैनौं। हामीभन्दा पछि जो राजा हुनेछन्, तिनीहरूले पनि ऐन

कानूनलाई ठूलो संझी अधिका राजाले गरेको निगाहको ख्याल राखेर यस आज्ञाको राम्ररी पालना गर्नुपर्छ ।

यहाँ दूतक (मार्फत) विप्रवर्मा गोमी छन् । संवत् ५१७ प्रथमाषाढ शुक्ल द्वादशी ।

## व्याख्या-

धर्मस्थलीका बासिन्दाहरूलाई लेख्यदान र पञ्चापराधसम्बन्धी कामको अधिकार सुम्पी यो सनदपत्र गरिदिइएको हो । यसै गरी ललितपुर, भक्तपुरभेकका बासिन्दाहरूलाई पनि यस्तै अधिकार दिई गरिदिएका सनद शिलापत्र माथि गइसकेका छन् । तल आउने बूढानीलकण्ठ आदि ठाउँका अभिलेखमा पनि जनतालाई अधिकार सुम्पेको कुरा परेको छ । यसबाट जनतालाई सकभर प्रशासनसम्बन्धी अधिकार दिंदै जाने नीति अंशुवर्माले लिएका थिए भन्ने स्पष्ट छ ।

जुनसुकै उत्तम शासकको पनि उद्देश्य राम्ररी शासन–व्यवस्था बाँधी जनतालाई सुखी राख्ने रहेको हुन्छ । उत्तम शासकको आदर्शको चर्चा गर्दै जाँदा आचार्य कौटल्यले 'प्रजासुखे सुखं राज्ञः' भनी यो कुरा स्पष्ट शब्दमा भनेका छन् । हाम्रा अंशुवर्मालाई आचार्य कौटल्यको विचारधाराले प्रभावित पारेको थियो । अनेक प्रमाणबाट यो कुरा देखिएको छ । यसै हुँदा 'कथं प्रजा मे सुखिता भवेदिति प्रिया व्यवस्थेयमकारि धीमता' भनी हाँडिगाउँको अभिलेखमा अंशुवर्माले पनि यो कुरा स्पष्टसंग बोलेका छन् । यस अभिलेखमा पनि 'सम्यक्प्रजापालनपरिश्रमोपार्जितदिगन्तव्याप्तपराक्रम' भनी बोलिएको छ । जनतालाई सुविधा गरिदिने, उनीहरूलाई सन्तुष्ट राख्ने उद्देश्यले नै अंशुवर्माले उनीहरूलाई स्वायत्तशासनसम्बन्धी अधिकार सुम्पने नीति लिएका हुन् । यसका परिणामस्वरूप त्यस बेलाको शासनव्यवस्था स्वायत्तशासनको नमूना बन्न पुग्यो । यस कुराको श्रेयः निकै अंशमा अंशुवर्मालाई छ ।

सामन्त राजाहरू पनि शिरपेच लाउँथे; शिरपेचमा मणिहरू जडिएका हुन्थे; सामन्त राजाहरू अंशुवर्माको खुट्टामै ढोग्थे; यसो हुँदा उनीहरूको शिरपेचका मणिहरूले अंशुवर्माका खुट्टा झलमलल हुन्थे भन्ने कुरा यस अभिलेखको वर्णनबाट थाहा पाइन्छ । यसबाट मोजा लाउने चलन त्यस बेला थिएन भन्ने देखिन्छ ।

यस अभिलेखमा दूतक विप्रवर्मा गोमी रहेका छन् । यस ताका अरू अभिलेखमा पनि विप्रवर्मा गोमी दूतकका रूपमा देखापरेका छन् । यिनको परिचय भने पाउन सकिएको छैन । भट्टुवालको तल आउने अभिलेखबाट पछि यिनलाई अंशुवर्माले 'महाराज' पदवीले विभूषित पारेको देखिएको छ ।

-★-

# बूढानीलकण्ठस्थानको शिवदेव+अंशुवर्माको अभिलेख

बूढानीलकण्ठ नारायणस्थानमा देवदर्शन गर्न ओर्लने पश्चिम ढोकाको सामुन्ने सानो वेदिका जस्तोमा यो अभिलेख कुँदिएको शिलापत्र टाँसिएको छ। तर त्यसमा दश पङ्क्तिभन्दा मुनिको भाग छैन। राष्ट्रिय अभिलेखालयमा चाहिं यस अभिलेखको सम्पूर्ण प्रतिलिपि रहेको छ। यसको शिरोभागमा फूलविशेष अङ्कित छ। यसको अभिलेख कुँदिएको भाग २८ अङ्गुल लम्बा, ११ अङ्गुल चौडा छ। यहाँ संवत् ५१७ छ† ।

भगवान्‌लालद्वारा ५ संख्याको रूपमा यो अभिलेख (१० पङ्क्तिसम्म) छापिएको छ। नोली-द्वारा २७ संख्याको रूपमा यो सम्पूर्ण छापिएको छ। 'पूर्णिमा' १८ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. ॐ स्वस्ति मानगृहाच्छ्रुतनयविनयगाम्भीर्य्यशौर्य्याद्यशेष-
२. सद्‌गुणगणाधारो लिच्छविकुलकेतुर्भट्टारकमहाराजश्रीशि-
३. वदेवः कुशली ग्राङ्गलाबकसपितानरसिंहोभयपाञ्चाली-
४. निवासिनो यथाप्रधानङ्ग्रामकुटुम्बिनः कुशलमाभाष्य
५. समाज्ञापयति विदितम्भवतु भवतां यथानेन पृथुस-
६. मरसम्पातनिर्जयाधिगतशौर्य्यप्रतापोपहतसक-
७. लशत्रुपक्षप्रभावेन सम्यक्प्रजापालनपरिश्रमोपार्ज्जि-

---

† नोलीले यस अभिलेखको पनि संवत्‌को अङ्क ५१८ छपाउनुभएको छ। तर यहांको संवत् ५१७ हो

नोलीको पाठ —१. शौर्य्य

८. तशुभ्रयशोभिव्याप्तदिङ्मण्डलेन श्रीमहासामन्तांशुवर्म्म-
९. णा युष्मद्धितविधानाय विज्ञापितेन मयैतद्गौरवा-
१०. (द्युष्मदनुकम्प)या च कूथेर्वृत्त्यधिकृतानां समुचितस्त्री(स्त्र)-
११. करमात्रसाधनायैवात्र प्रवेशो (लेख्यदान)–
१२. पञ्चापराधादिनिमित्तं[१]त्वप्रवेश इति प्रसादो वः कृ-
१३. तस्तदेवंवेदिभिरस्मच्चरणतलोपजीविभिरन्यैर्व्वा
१४. न कैश्चिदयम्प्रसादोन्यथा करणीयो यस्त्वेतामाज्ञां विल-
१५. ङ्घ्यान्यथा कुर्य्यात्कारयेद्वा तमहमतितरान्न मर्षयिष्या-
१६. मि भाविभिरपि भूपतिभिर्द्धर्म्मगुरुभिर्गुरुकृतप्रसा-
१७. दानुवर्त्तिभिरियमाज्ञा सम्यक्प्रतिपालनीया दूतकश्चात्र
१८. विप्रवर्म्मगोमी संवत् ५१७ प्रथमाषाढशुक्लद्वादश्याम्

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट पढाइ, नीति, विनय (कर्तव्यको शिक्षा), गम्भीरपन धैर्य, पराक्रम आदि असल गुणहरू भएका, लिच्छविकुलको झण्डास्वरूप भएका, गाथमा आराम रहेका, भट्टारक महाराज श्रीशिवदेवबाट आङलाबकसपिता र नरसिंह भन्ने दुवै पाञ्चाली (पञ्चायतका इलाका) मा बस्ने मुखियालगायत ग्रामका गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ ।

ठूलो लडाइँको मैदानमा बाजी मार्दा भएको शुर्‍याइँको प्रभावले सारा शत्रुहरूको दबदबालाई सखाप पारेका, परिश्रमपूर्वक राम्ररी प्रजाको हेरचाह गर्नाले आर्जेको सफा कीर्तिले दिशाका छेउछाउ ढाकेका, श्रीमहासामन्त अंशुवर्माले तिमीहरूको भलो गर्न हाम्रा हजूरमा बिन्ति चढाउँदा हामीबाट उनको कुरा राख्न र तिमीहरूउपरको दयाले पनि यहाँ (तिमीहरूको ग्राममा) कुथेर अधिकरणका अधिकृतहरूले त्रिकर (भाग, भोग, कर नामक तीनथरी मुख्य कर) उठाउनाको लागि मात्र पस्नु योग्य छ; लेख्यदान र पञ्चापराधको तहकीकात गर्ने आदि कामको निमित्तचाहिं (सम्बद्ध अधिकरणले) नपस्नू भनी तिमीहरूलाई निगाह गरिदिएको छ । यो कुरा तिमीहरूलाई थाहा होस् ।

तसर्थ यो कुरा बुझेर हाम्रो तर्फबाट जीविका चलाउनेहरूले वा अरू कसैले पनि यस कुरामा अन्यथा नगर्नू । जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला; त्यसलाई हामी बिलकुल सहनेछैनौं । पछि हुने राजाहरूले पनि धर्मलाई ठूलो संझेर अघिका राजाले गरेको निगाहको ख्याल

---

नोलीकोपाठ–१ पञ्चापराधाद्यर्थं

राखी यस आज्ञाको राम्रोसंग पालना गर्नुपर्छ भन्ने अनुरोध छ ।

यहाँ दूतक (मार्फत) विप्रवर्मा गोमी छन्। संवत् ५१७ प्रथमाषाढ शुक्ल द्वादशी ।

## व्याख्या--

माथि गएको धर्मस्थलीको अभिलेख र बूढानीलकण्ठको यो अभिलेख एकै दिन राखिएको छ। यी दुइमा परेका मुख्य विषय पनि उही नै छन् । आङलावकसपिता र नरसिंहनामक दुइ पाञ्चाली भेकका जनतालाई लेख्यदान र पञ्चापराधसम्बन्धी अधिकार सुम्पेको कुरा यसमा परेको छ। एकै दिन गरिदिइएका भए पनि यी दुइ सनदपत्रमा राजा शिवदेव र श्रीमहासामन्त अंशुवर्माको प्रशस्तिमा भने अलि भिन्नता रहेको छ । धर्मस्थलीको अभिलेखमा शिवदेवको विशेषण 'निरुपमगुणगणः' भन्ने रहेको छ। यसमा भने शिवदेवले पढेका थिए; उनमा कर्तव्यको ज्ञान थियो; उनी गम्भीर प्रकृतिका थिए; उनी वीर पनि थिए; उनमा धैर्य पनि थियो भन्ने भाव दर्शाउने प्रशंसात्मक शब्दहरू खुलाएर लेखिएका छन् । अंशुवर्मालि ठूलो लडाइँ लड्नुपरेको थियो भन्ने कुरा यस अभिलेखमा पहिलेभन्दा खुलाएर लेखिएको छ ।

बूढानीलकण्ठनिरको बस्ती दुइ पाञ्चालीमा विभक्त थियो; एक पाञ्चालीको नाम आङला-बसपिता थियो र अर्को नरसिंह पाञ्चाली कहलाएको थियो भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ। यो ठाउँ पछिसम्म पनि नरसिंहस्थान भनी कहिन्थ्यो। यो कुरा गोपालवंशावलीबाट हामी बुझ्छौं। जस्तै–

"राजा श्रीविष्णुगुप्त वर्ष ७१ तेन.....उत्र प्रवतात् मध्ये नरशिंहस्थाने महाशिलामय विष्णु जलसयन, अतिसुन्दर आवाससहितम् कृतवान्" (२२ पत्रबाट)

लिच्छविकालको शासनव्यवस्थामा 'पाञ्चाली' (पञ्चायत) पद्धतिको विशिष्ट स्थान रहेको थियो। यसको विस्तृत चर्चा तल गरिने छ।

यस अभिलेखमा परेका अरू विषयको चर्चा माथि गरिसकेको छ ।

★

# सतुङ्गलको शिवदेव+अंशुवर्माको अभिलेख

बलम्बूभन्दा अलि वर सतुङ्गल भन्ने बस्ती छ। त्यहीं बस्तीभन्दा अलि बाहिर यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३२ अङ्गुल लम्बा, १६ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ५१९ छ।

नोलीद्वारा २८ संख्याको रूपमा यो अभिलेख छापिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट यसको पाठ शुद्‍याउँदा मदत पाइएको छ।

## मूलपाठ

१. (ॐ स्वस्ति) मानगृहान्निरतिशयगुणसम्पदाव[१]........
२. ..........[२](लि)च्छविकुलकेतुर्भट्टारकमहाराज(श्री)
३. (शिव)देवः कुशली कादुङग्रामनिवासिनः प्रधानपुरस्स–
४. (रान्ग्रामकु)टुम्बिनः कुशलमाभाष्य समाज्ञापय(ति वि)
५. (दितम्भवतु भव)तां यथानेन शरदघनशशाङ्कमु(खेन)
६. शत्रुसंख्याप्रमितबलपराक्रमेण श्रीमहासा(म)–
७. न्तां(शु)वर्म्मणा विज्ञापितेन सता मयैतद्‌गौरवाद् यु-
८. (ष्मदनु)कम्पया च शिलापट्टकशासनेभिलिख्य
९. प्रसा(दो)यं वः कृतो युष्मद्ग्रामनिवासिनामितः

---

नोलीका पाठ–

१. (ॐ स्वस्ति मानगृहादपरिमित)गुणसमुद(योद्भासितयशा बप्प)–
२. (पादानुध्यातो लि)

१०. काष्ठघासपत्त्राहरणाय सर्व्वत्र वनभूमि-
११. ङ्गच्छतान्तदादायागच्छताञ्चाध्वनि फेरङकोट्टनि-
१२. वासिभिरन्यैश्च न कैश्चिद् दात्रकट्टारककुठार-
१३. काष्ठाद्याक्षेपो विधारणा वा कार्य्या यस्त्वेतामा-
१४. ज्ञामविगणय्यान्यथा कुर्य्यात् कारयेद् वा स नि-
१५. (य)तन्नृपाज्ञातिक्रमनियमनमवाप्स्यति भ-
१६. (वि)ष्यद्भिरपि भूपतिभिर्द्धर्म्मगुरुभिर्ग्गुरुकृत-
१७. (प्रसा)दानुवर्त्तिभिरयम्प्रसादोनुपालनीय
१८. (इति स)माज्ञापना दूतकश्चात्र वार्त्तपुत्त्रगुणचन्द्रः
१९. (संवत्) ५१९ प्रथमपौषशुक्लदिवाद्वादश्याम्

## अनुवाद

(कल्याण होस् ।) मानगृह (दरबार)बाट अनगिन्ती गुणहरूले (कीर्ति फैलिएका) . . . लिच्छविकुलको झण्डास्वरूप भएका, गाथमा आराम रहेका, भट्टारक (गद्दीनशीन) महाराज श्रीशिवदेवबाट काद्रुङ ग्राममा बस्ने मुखियालगायत ग्रामका गृहस्थीहरूलाई कुशलमङ्गल सोधेर आज्ञा भएको छ ।

शरद् ऋतुका बादल नभएका चन्द्रमा जस्तो (उज्यालो) मुख भएका, शत्रुहरूले बल–पराक्रम थाहा पाइएका यो श्रीमहासामन्त अंशुवर्माले हाम्रा हजूरमा विन्ति चढाउँदा हामीबाट यिनको वचन राख्न र तिमीहरूमाथिको दयाले पनि शिलापत्रमा सनद कुँदाएर तिमीहरूलाई यो निगाह गरिएको छ। यो कुरा तिमीहरूलाई थाहा होस्।

तिमीहरूको ग्राममा बस्नेहरू यताबाट दाउरा, घाँस, पात ल्याउन सबतिरको जङ्गलमा जाँदाखेरि र त्यो लिएर आउँदा खेरि पनि बाटोमा फेरङ कोट्टका बासिन्दाहरू र अरू कसैले पनि हँसिया, कटारी, बञ्चरो र काठ–पात नखोस्नू तथा तिमीहरूलाई छेक–थुन पनि नगर्नू ।

जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला; त्यसले राजाको आज्ञा नाघ्नेले पाउने दण्ड–सजाय अवश्य पाउनेछ। पछि हुने राजाहरूले पनि ऐन कानूनलाई ठूलो संझी मान्य-जनहरूले गरेको निगाहको ख्याल राखेर यो निगाहको पालना गर्नुपर्छ भन्ने अनुरोध छ।

यहाँ दूतक वार्त्तका छोरा गुणचन्द्र छन्। संवत् ५१९ प्रथमपौष शुक्ल द्वितीया ।

---

नोलीकोपाठ–१.तो (र) णसुपत्त्राहरणाय

व्याख्या--

लिच्छविकालमा नेपाल–उपत्यकाभित्र ठाउँ ठाउँमा निकै वनहरू थिए । तिनमा केही वनहरू राष्ट्ररक्षाको लागि 'वनदुर्ग' का रूपमा परिणत गरी राखिएका थिए । जथाभावी दाउरा काट्ने गरे वन पातलो भई किल्लाको काम नदिने हुनाले यस विषयमा नियम–कानून लागू थिए । यो कुरा माथि गएको चाँगुको अभिलेखबाट थाहा पाइन्छ । यसो हुनाले वन–जङ्गलको सुरक्षाको भार बोकेकाहरूद्वारा बेकाइदासंग काठपात ल्याउनेउपर कारबाइ गरिन्थ्यो। उनीहरूका बञ्चरो आदि र काठ–पात खोसेर लिइन्थे; कहिलेकहीं छेकथुन पनि गरिन्थ्यो । तर यस अभिलेखमा सतुङ्गलभेकको 'कादुङ' ग्राममा बस्नेहरूलाई जङ्गलबाट काठपात ल्याउन पाउने विशेष सुबिधा गरिदिएको कुरा परेको छ । अबदेखि कादुङग्रामका बासिन्दाहरूले जुनसुकै जङ्गलबाट काठ–पात घाँस ल्याए पनि बाटोमा पर्ने फेरङ कोट्टका मानिसले सो नखोस्नू; छेकथुन पनि नगर्नू भन्ने अनुग्रह अंशुवर्माद्वारा गरिदिइएको छ ।

यस अभिलेखबाट लिच्छविकालका कोट्ट (किल्ला) बारे अलिकता कुरा हामी थाहा पाउँछौं । बाटामा पाइक पारी ठाउँ ठाउँमा कोट्ट बनाइएका हुन्थे; कोट्टको उपयोगिता राष्ट्ररक्षाको काममा मात्र सीमित थिएन; नियम–कानून नाघ्नेहरूलाई छेकथुन गर्ने काममा पनि यसको उपयोगिता रहन्थ्यो भन्ने संकेत यस अभिलेखबाट पाइन्छ । पाटन मीननाथको तल आउने अभिलेखबाट पनि ऐनकानूनविरूद्ध काम गर्ने अपराधीलाई समात्ने काममा पनि कोट्टको उपयोगिता रहन्थ्यो भन्ने कुराको पुष्टि हुन्छ । केही गरी अपराधी भाग्यो भने यस्ता कोट्टका अधिकारी (कोट्टनायक) लाई सूचित गरेर अपराधीलाई पक्रने काम गरिन्थ्यो । विचारार्थ सो अभिलेखको अलिकता अंश यहाँ उद्धृत गरिन्छ–

"....विधमिममपराधं कृत्वा प्रपलायितः कोट्टस्थानम्....निवेद्य यथापूर्वमनुष्ठातव्यम् । ......गृहीत्वा राजकुलमुपनेतव्याः"

(.....किसिमको यो अपराध गरेर भाग्यो भने कोट्टका.....जाहेर गरी साबिकबमोजिम गर्नू।.....समाती राजदरबारमा ल्याउनू ।)

पछि मध्यकालमा यस्ता कोट्टको अझ बढी स्थान रहेको थियो । मूल (केन्द्र) को शासनमा कमजोरी देखापरेको मौका छोपी ठाउँठाउँका कोट्टका नायकहरू बराबर विद्रोह गरिरहन्थे । गोपालराजवंशावलीमा यस्ता अनेक घटनाको चर्चा परेको छ ।

★

[ ६६ संख्या ]

# टोखाको (शिवदेव+अंशुवर्माको) अभिलेख

काठमाडौँ–उपत्यकाको उत्तरी भेकमा धर्मस्थलीको हाराहारी 'टोखा' नामक प्रसिद्ध बस्ती छ। त्यहाँ बस्तीको बीच भागमा भने जस्तै यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यस अभिलेखको धेरै भाग फुटिसकेको छ। यसको अभिलेख कुँदिएको भाग ३२ अङ्गुल लम्बा, १८ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ५१६ छ।

लेभीद्वारा १० संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा २९ संख्याको रूपमा यो छापिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट यसको पाठ सच्याउँदा मदत पाइएको छ।

## मूलपाठ

(१ देखि ६ पङ्क्तिसम्म पढ्न नसकिने)

७. .......... .......... त्ययथे—परभोग[१].......... ..........

८. .......... .......... गुल्म ......[२]दक्षिणपश्चिमेन..........

९. .......... .......... तिलमकसंगमस्ततस्तमेव तिलमक[३]..........

१०. .......... .......... नुसारेण सेतु.......... ......ङ्ग[४]

११. .......... ......परि ............... स्ततो मार्ग्गमनुसृत्य......

---

नोलीका पाठ–

१. ....... यथे........

२. ............लम.........

३. – – – – – – सङ्गमस्ततस्त..

४. ..............सेतु–ङ्ग....

१२. ........... .......... ......(शा)लवृक्षस्तस्य चाधस्तिलमकम[१]-

१३. .......... .......... तिलमकमनुसृत्य[२] बसेग्र—तस्मादुत्तर-

१४. ............. .........(ती)रे उदक्पानीयपातस्तस्मादुत्तर-

१५. .......... ........... .....पञ्चकश्च ततो दक्षिणानुसारतो.....

१६. ......... ....... .....तु तस्यैव नासिकामनुसृत्य[३] रिन्..........

१७. .......... ........... ..........स्य दक्षिणतो ज्ञातिखृन्नदी तस्या

१८. .......... .......... ........ तदेव .... ..... परिक्षिप्त.....

१९. ............(न कैश्चिदस्मत्पादप्रसादोपजीविभि)रन्यैर्व्वा सूक्ष्मापि पीडा कार्य्या

२०. (यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा कुर्य्यात्कार) येद्वा तमहन्न मर्षयिष्यामि ये(पि)

२१. (मदूर्द्ध्वम्भूभुजो भवितारस्तैरपि धर्म्म)गुरुभिर्ग्गुरुकृतप्रसादानुव(र्त्ति)

२२. (भिरियमाज्ञा सम्यक्प्रतिपालनीया)... .... ...नि श्रूयते भूपालैर्ब्बहुभि-[४]

२३. ............ ............. .............ण्ड-विक्रमार्ज्जित धनं[५].....

२४. ......... ......... ......... .........सत्तोयावलीयं खला ये

२५. ................ ............. ........... तदा तस्य।फल दत्त......... प्यानानि

२६. .......... ........... .......... दाता नैव न्यग्व्रजति[६]...... दत्तामुपहरन्

२७. ............ ........... .......... नन्त........ घ्नन्न कर्त्तव्यम्भू..... रपहरेत्

२८. .......... .......... ........दूतकश्चात्र विप्रवर्म्मगोमी संवत् ५१९

२९. ............शुक्लदिवादशम्याम् ॥

## अनुवाद

...गुल्म (सुरक्षाचौकी)....दक्षिण पश्चिमतिर....तिलमक (कुलो) को दोभान, त्यताबाट त्यही कुलो....तिर लागी पुल,.....त्यताबाट बाटोतिर लागी....(सा)लको रूख, त्यसको तलतिर कुलोतिर लागी.....कुलो तिर लागी... त्यसदेखि उत्तरतिर..

---

नोलीका पाठ–

१. ..............लवृक्षस्तस्य चाधस्ति......

२. ..........(अनु)सृत्य

३. ................रि—मनुसृत्य

४. ........यतो—पा ——ह्—

५. . . . . . . . . ण्ड. त. ि—मार्ज्जित—नैर्द्द

६. . . . . . . . . . दा. ɛ. —वन्य. प्रजा— — —

(ती)रमा उत्तरतिर पानी झरेको ठाउँ, त्यसदेखि उत्तरतिर . . .पञ्चक, त्यसदेखि दक्षिणतिर लागी . . . .त्यसैको नाकनिर लागी रिन् . . . .को दक्षिणपट्टि ज्ञातिखून् खोलो, त्यसको . . . .

यति चारकिल्लाभित्रको (ठाउँमा) . . . . . .(हाम्रो तर्फबाट जीविका चलाउनेहरूले सरकारी कर्मचारीले) वा अरू कसैले अलिकता पनि दुःख नदिनू। (जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा ) गराउला; त्यसलाई हामी सहनेछैनौं। (हामीभन्दा पछि जो राजा हुनेछन्; तिनीहरूले पनि धर्मलाई ठूलो संझी) अघिका राजाले गरेको निगाहको ख्याल राखेर (यो आज्ञाको राम्ररी पालना गर्नुपर्छ भन्ने अनुरोध छ ।) . . . . .,

. . .सुनिन्छ; धेरै राजाहरूले . . . . . .     . . .आफ्नो पराक्रमद्वारा धन कमाई . . .सफा पानीको भेल . . .जुन दुष्टहरू . . . . .  . . . . .त्यस बेला तिनलाई फल हुन्छ । . . . . .  . . दाताको कहिले पनि पतन हुँदैन । (अरूले) दान दिएको हर्‍यो भने . . . .  . . . . गर्नु  हुंदैन . . . . .हर्ला । . . . . .

यहाँ दूतक विप्रवर्मा गोमी छन्। संवत् ५१६ . . . .शुक्ल दशमी ।

### व्याख्या—

यो अभिलेख ज्यादै खिइएको हुनाले उठानका केही पङ्क्ति त पढ्नै सकिएका छैनन् । तल पनि छेउ–छेउका केही भाग मात्र पढ्न सकिएका छन् । यसो हुनाले यस अभिलेखमा मुख्य गरी के कुरा परेको थियो भनी भन्न गाह्रो छ । यसमा संवत् ५१६ चाहिं स्पष्ट देखिने हुनाले शिवदेव अंशुवर्माको अभिलेख यो हो भन्ने कुरामा चाहिं शङ्का छैन । यस अभिलेखको तल्लो भागमा 'दाताको पतन हुँदैन; हर्‍यो भने . . .' आदि भावका वचन परेका हुनाले कुनै दानधर्म गरेको कुरा यसमा परेको बुझिन्छ ।

### तिलमक–

यस अभिलेखमा जग्गाको चारकिल्ला खोल्दा धेरै पटक 'तिलमक' शब्दको उल्लेख आएको छ। एक ठाउँमा 'तिलमकसंगम' पद पनि देखापरेको छ। यसबाट यस भेकमा 'तिलमक' अनेक थिए भन्ने थाहा पाइन्छ। 'तिलमक' यो शब्द संस्कृत भाषाको होइन। संस्कृत भाषाका कोशहरूमा यस शब्दको उल्लेख पाइंदैन। यस ताकाका भारतका अभिलेखहरूमा पनि तिलमक शब्दको प्रयोग पाइंदैन। हाम्रो यहाँ भने मल्लकालका अभिलेखमा पनि तिलमकको उल्लेख पाइन्छ। स्थितिमल्लको पालामा लेखिएको नेवारी अनुवादसहितको एउटा अमरकोशमा 'कुल्या स्यात् कृत्रिमा नदी' को अनुवादमा 'कुल्या = तिलमक' भनी लेखिएको पाइएको छ। यसबाट 'तिलमक' भनेको कुलो हो भन्ने निश्चत हुन्छ। तिलमक भनेको कुलो हो भन्ने कुराको झलक लिच्छविकालका अभिलेखबाट पनि पाइन्छ। विचारार्थ पाटन मीननाथको अभिलेखलाई देखाउन सकिन्छ। त्यसमा

विभिन्न पाञ्चालीका बासिन्दाहरूले भाग शान्ति मिलाई तिलमकको उपयोग गर्ने कुरा परेको छ। जस्तै–

"तिलमकसम्बद्धं कार्यञ्च यदुत्पद्यते, (तदन्तरासने)नैव विचार्य निर्णतव्यं तिलमकश्च सप्तधा विभज्य परिभोक्तव्यो गीग्वलपाञ्चालिकैरे(को भा)गो ग्राह्यो जाज्जेपाञ्चालिकैरेको भागस्तेग्वलपाञ्चालिकैरेको भागो यूग्वल्पाञ्चालिकैस्त्रयो (भागा)–ल्वपाञ्चालिकैस्त्वेको भाग इति"

(जब तिलमकसम्बन्धी मुद्दामामिला उठ्नेछ, तब अन्तरासनमा (राजाको भित्री इजलासमा) छानबीन गरेर छिन्नुपर्छ। तिलमकको सात भाग लगाई भोग चलन गर्नू। गीग्वलका पाञ्चालिकहरूले एक भाग, जाज्जेका पाञ्चालिकहरूले एक भाग, तेग्वलका पाञ्चालिकहरूले एक भाग, यूग्वलका पाञ्चालिकहरूले तीन भाग,–ल्लका पाञ्चालिकहरूले एक भाग लिनू।)

यसबाट 'तिलमक' भनेको कुलो हो भन्ने कुराको पुष्टि हुन्छ। अरू अभिलेखमा पनि तिलमकको उल्लेख धेरै ठाउँमा आएको छ। पाटन छिन्नमस्ताको अभिलेखमा अंशुवर्माले तिलमक बनाइदिएको र पछि मरम्मत नहुँदा बिग्रेको हुनाले सामन्त चन्द्रवर्माको देखरेखमा त्यसको जीर्णोद्धार गरेको कुरा यसरी लेखिएको छ–

"भट्टारकमहाराजाधिराजश्रयंशुवर्मपादैर्युष्मदीयग्रामाणामुपकाराय योसौ तिलमक आनीतोभूत्प्रतिसंस्काराभावाद्विनष्टमुद्वीक्ष्य सामन्तचन्द्रवर्मविज्ञप्तैरस्माभिस्तस्यैव प्रसादीकृतस्तेन चास्मदनुज्ञातेन युष्मद्ग्रामाणामेवोपकाराय प्रतिसंस्कृतः. . . ."

यसरी तिलमक भनेको कुलो हो भन्ने निश्चित भएपछि लिच्छविकालको कृषिव्यवसायमा पनि यसले केही प्रकाश पार्छ। त्यस बेला आकाशखेतीको भर नपरी उब्जनी बढाउनाका लागि कुलोको बन्दोबस्त गरिएको थियो; लिच्छविकालका अंशुवर्मा आदि शासकहरूले कुलो बनाउनामा ध्यान दिएका थिए। कुलोको पानी उपयोग गर्ने कुरामा कचिङ्गल नउठोस् भनी सरकारतर्फबाट व्यवस्था मिलाइदिइन्थ्यो आदि कुरा हामी थाहा पाउँछौं।

'तिलमक' यो शब्द संस्कृत भाषाको होइन भनी माथि भनिसकेको छ। किरात–परिवारको जनभाषाबाट यो प्रचलनमा आएको हो। हाम्रो यता धेरै अघिदेखि यो शब्द प्रचलित भइसकेको हुँदा लिच्छविकालका अभिलेखमा 'कुल्या' शब्दको प्रयोग नगरी 'तिलमक' शब्दकै प्रयोग गरिएको हो। यस शब्दको मूल खोजीको विषय बनेको छ।

नक्साल नारायणचौरको अभिलेखमा तिलमक शब्दको साथै 'लखमक' शब्दको पनि उल्लेख परेको छ। त्यहाँ चारकिल्ला खोल्दा '. . . .पश्चिममवतीर्य ताम्रकुट्टशालागमनमार्गानुसारेण जप्तिखूसंक्रमाभिमुखेन ताम्रकुट्टशालालखमक' भन्ने उल्लेख परेको छ। तिलमक जस्तै लखमक शब्द पनि त्यस बेला प्रचलित थियो भन्ने यसबाट देखिन्छ। नेवारी भाषामा पानीलाई कहने चलतीको

शब्द 'लः' को पूर्वरूप 'लख' हो भन्ने कुरामा शङ्का छैन । 'मक' शब्दको प्रयोग लिच्छविकालका अभिलेखमा विभिन्न रूपमा भएको हामी पाउँछौं । चाँगुको अभिलेखमा स्थानीय बस्तीको नाउँ 'गुङ्दिमक' दिइएको छ ।'गुङ' जङ्गलसहितको डाँडोलाई भनिन्छ । धापासीको अभिलेखमा 'प्रणालीदीमक' ग्रामको उल्लेख परेको छ ।

कति 'तिलमक' हरूका नामको उल्लेख पनि अभिलेखमा आएको छ । का. इ. लगनटोलको अभिलेखमा 'चिशिमण्डा' नामक तिलमकको चर्चा परेको छ । पशुपति वज्रघरको अभिलेखमा 'मेकण्डीदुल्' तिलमकको उल्लेख आएको छ ।

कुलोलाई कहने 'तिलमक' शब्द किरातपरिवारको भाषाको भएको र चिशिमण्डा, मेकण्डीदुल् आदि नामहरू पनि किरातपरिवारकै भाषाबाट रहेका देखिएका हुनाले लिच्छविकालभन्दा अघि नै अर्थात् किरातकालमै यहाँ खेतीको लागि कुलोको बन्दोबस्त थियो भन्ने देखाउँछ । यसरी किरातकालमै नेपाल–उपत्यकामा कृषिव्यवसाय चलिसकेको संकेत हामी यताबाट पाउँछौं ।

यस अभिलेखमा एक ठाउँमा 'गुल्म' शब्दको पनि उल्लेख आएको छ । 'गुल्म' भनेको सुरक्षा-चौकी हो । लिच्छविकालका अभिलेखमा ठाउँ ठाउँमा गुल्मको उल्लेख आएको हुनाले सुरक्षाचौकी-हरू ठाउँ ठाउँमा कायम थिए भन्ने थाहा पाइन्छ ।

-★-

# धर्मपुरको (शिवदेव+अंशुवर्माको) अभिलेख

बाँसबारीबाट पाउभरी जति उत्तर–पश्चिमपट्टि लागेपछि धरमपुरमा पुगिन्छ। त्यहाँ बाटोमै यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३३ अङ्गुल लम्बा, १३$\frac{1}{2}$ अङ्गुल चौडा छ। यहाँ संवत् ५२० छ।

लेभीद्वारा ११ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ३० संख्याको रूपमा यो छापिएको छ *। पूर्णिमा' १८ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. ........... ............. ............
२. ................... .............
३. ...... ...... ......... निवासिनः
४. (प्र)धानपुरस्सरान् ग्रामकुटुम्बिनः कुश(ल)-
५. (प्र)श्नपूर्व्वं समाज्ञापयति विदितम्भवतु भ(वतां)
६. (य)थायङ्ग्रामः पूर्व्वराजकृतप्रसादा..... ......
७. (चा)टभटाप्रवेश्यः सर्व्वकोट्टमर्य्यादोपपन्न ..........
८. ...... सी............ ........... .........
९. ...... सि............ ............ ...........
१०. ...... ...... ............. ............

* लेभी,नोलीद्वारा १४ पङ्क्तिदेखिको मात्र पाठ छपाइएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिको आधारमा त्यसभन्दा माथिल्लो भाग पनि केही पढ्न सकिएको हो।

११. ........................ ........... ................ .....

१२. ................ ................... .........

१३. ............ श्वर ................. ..........

१४. .............. तेभ्यश्च मल्लकर ........... ....

१५. (स्र) मुचिततास्रपणचतुष्टयादूर्द्ध्वं (न्न ग्रा)-

१६. ह्यमिति प्रसादद्वयं समधिकन्दत्तं तदे-

१७. वंवेदिभिर्न्न कैश्चिदिदमप्रमाणङ्कार्य्यं

१८. येप्यस्मदूर्द्ध्वम्भूभुजो भवितारस्तैर-

१९. पि धर्म्मगुरुभिर्ग्गुरुकृतप्रसादानु-

२०. रोधिभिरेव भाव्यमिति समाज्ञापना

२१. दूतकश्चात्र वार्त्तभोगचन्द्रः संवत्

२२. ५२० माघशुक्लद्वादश्याम्

## अनुवाद

....मा बस्ने मुखियालगायत ग्रामका गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस्।

यो गाउँ अधिका राजाले गरेको निगाहअनुसार चाटभटले पस्न नपाउने, कोट्ट (किल्ला) सम्बन्धी सबै स्थितिबन्धेजले युक्त भएको गरिएको थियो; .....

...तिनीहरूबाट पनि मल्लकर.....साबिक चार तामाका पणभन्दा बढी नलिनू भनी दुइटा बढी निगाह गरिएको छ।

यो कुरा थाहा पाएर कसैले पनि यो ननाघ्नू। हामीभन्दा पछि जुन राजाहरू हुनेछन्; तिनीहरूले पनि ऐन कानूनलाई ठूलो संझी अधिका राजाले गरेको निगाहको ख्याल राख्नुपर्छ भन्ने अनुरोध छ।

यहाँ दूतक वार्त्त भोगचन्द्र छन्। संवत् ५२० माघ शुक्ल द्वादशी।

**व्याख्या–**

उठान र बीचको केही भागमा पाप्रा उप्केका हुनाले यो अभिलेख अपूरो छ। यस कारण अहिले यसमा राजाको नाउँ देखिँदैन। तर तल्लो भाग स्पष्ट हुँदा संवत् ५२० चाहिँ देखिन्छ। यस कारण यो अभिलेख शिवदेव अंशुवर्माको हो भन्ने देखिन्छ।

यस अभिलेखमा 'अयं ग्रामः. . . .चाटभटाप्रवेश्यः सर्वकोट्टमर्यादोपपन्नः' भन्ने उल्लेख परेको छ। यसबाट यहाँको बस्तीलाई कोट्टको दर्जामा राखी कोट्टले पाउने सबै सुबिधाहरू दिइएका थिए भन्ने थाहा पाइन्छ। 'चाटभट' नामक अधिकारीको काम गाउँ गाउँमा गई मालपोत उठाउने हुन्थ्यो। यहाँ चाटभटले नपस्नू भनिएको हुनाले मालपोत मिनाहा गरिदिइएको थियो भन्ने थाहा पाइन्छ। यो निगाह पहिलेका राजाले गरिदिइएको हो; त्यो थामी फेरि यो सनद शिलालेख गरिदिइएको हो भन्ने कुरा यसको बेहोराबाट थाहा पाइन्छ।

'मलल' भनेको पाल्तू प्राणिविशेष (राँगो ?) हो; तिनैमा लागेको कर 'मल्लकर' हो भन्ने चर्चा पहिले गरिसकेको छ। यस अभिलेखमा मल्लकर चार तामाका पणभन्दा बढी नलिनू भन्ने बन्देज बाँधेको कुरा पनि परेको छ।

यस अभिलेखमा दूतक वार्त्त (जागीरदार) भोगचन्द्र छन्। यिनको परिचय पाउन सकिएको छैन।

# खोपासीको शिवदेव+अंशुवर्माको अभिलेख

पनौतीभन्दा केही पर खोपासीनामक प्रसिद्ध बस्ती छ। त्यहाँ एउटा देवस्थलमा अहिले यो अभिलेख कुँदिएको शिलापत्र राखिएको छ। यसको अभिलेख कुँदिएको भाग २५ अङ्गुल लम्बा, १६ अङ्गुल चौडा छ। यहाँ संवत् ५२० छ।

लेभीद्वारा १२ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ३१ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति मानगृहादपरिमितगुणसम्पल्लिच्छविकुलानन्दकरो
२. (भ)ट्टारकमहाराजश्रीशिवदेवः कुशली कुर्प्पासीग्रामनिवा-
३. सिनः प्रधानपुरस्सरान्कुटुम्बिनः कुशलमभिधाय समाज्ञा-
४. (प)यति विदितमस्तु वो यथानेन स्वगुणमणिमयूखालोक-
५. (ध्व)स्ताज्ञानतिमिरेण भगवद्भवपादपङ्कजप्रणामानुष्ठा-
६. नतात्पर्योपायात्तायतिहितश्रेयसा स्वभुजयुगबलोत्खाता-
७. (खि)लवैरिवर्ग्गेण श्रीमहासामन्तांशुवर्म्मणा मां विज्ञाप्य मदनु-
८. (ज्ञा)तेन सता युष्माकं सर्व्वाधिकरणाप्रवेशेन प्रसादः कृतः
९. (स)मुपस्थितविचारणीयकार्य्येषु स्वतलस्वामिनैव यूयं विचा-
१०. रणीयाः सर्व्वकार्य्येषु चैकमेव वो द्वारं द्वारोद्घाटनकैलास-
११. ——यात्रयोश्च भवद्भिः प्रत्येकं पञ्चाशज्जातिशुक्लमृत्तिका देया—
१२. (श्चिर)स्थितये चास्य प्रसादस्य शिलापट्टकेन प्रसादः कृतस्त-
१३. देवंवेदिभिरस्मत्पादप्रसादोपजीविभिरन्यैर्व्वा नायं प्रसादो

१४. न्यथा करणीयो यस्त्वेतामाज्ञामुत्क्रम्यान्यथा कुर्य्यात्कारयेद्वा त-
१५. महं मर्य्यादाभङ्गकारिणमतितरान्न मर्षयिष्यामि भाविभिर-
१६. पि भूपतिभिर्द्धर्म्मगुरुभिर्गुरुकृतप्रसादानुवर्त्तिभिरिय-
१७. माज्ञा सम्यगनुपालनीयेति समाज्ञापना ।। दूतकश्चात्र
१८. देशवर्म्मगोमी संवत् ५२० चैत्रकृष्णपक्षे तिथौ पञ्चम्याम्

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट अनगिन्ती गुणहरू भएका, लिच्छविकुललाई आनन्द दिने, गाथमा आराम रहेका, भट्टारक महाराज श्रीशिवदेवबाट कुर्प्पासी (खोपासी) गाउँमा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ ।

आफ्ना गुणरूपी मणिका किरणको उज्यालोले अज्ञानरूपी अन्धकार हटाएका, भगवान् पशुपतिनाथका चरणकमललाई प्रणाम गर्न तत्पर रहेका हुनाले पछिका हित कल्याण गरेका, आफ्ना बुइ बाहुका बलले सारा शत्रुको जरो खनेका, यी श्रीमहासामन्त अंशुवर्माले हाम्रा हजुरमा बिन्ति चढाएर हाम्रो अनुमति लिई (तिमीहरूको ग्राममा) सारा अधिकरण (अड्डा अदालत) हरूले पस्न नपाउने गरी तिमीहरूलाई निगाह गरिएको छ । यो कुरा तिमीहरूलाई थाहा होस् । विचार पुऱ्याउनुपर्ने मुद्दामामिलाहरू आइपरेमा आफ्ना तलस्वामीद्वारा नै तिमीहरूको हेरविचार हुनेछ । सबै कामकार्बाइहरूमा तिमीहरूको लागि एउटै मात्र द्वार (ढोका = तलस्वामीको ढोका) हुनेछ ।

द्वारोद्घाटनयात्रा र कैलास- -यात्रामा तिमीहरूले जनैपिच्छें पचासवटा सेता जातका माटा (कमेरा) बुझाउनू । यो निगाह धेरै काल कायम रहोस् भन्नाको लागि यस निगाहको शिलापत्र गरी निगाह गरिदिइएको छ ।

तसर्थ यस कुरालाई बुझेर हाम्रो निगाहबाट जीविका चलाउनेहरूले र अरू कसैले पनि यो निगाह लाई अन्यथा नगर्नू । जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला; स्थितिबन्धेज नाघ्ने त्यसलाई हामी बिलकुल सहनेछैनौं । पछि हुने राजाहरूले पनि धर्मलाई ठूलो संझी अघिका राजाले गरेको निगाहको ख्याल राखेर यस आज्ञाको राम्रोसंग पालना गर्नुपर्छ भन्ने अनुरोध छ ।

यहाँ दूतक देशवर्मा गोमी । संवत् ५२० चैत्र कृष्ण पञ्चमी ।

**व्याख्या–**

कुर्प्पासी (खोपासी) ग्रामका बासिन्दाहरूलाई प्रशासनसम्बन्धी सबै अधिकार सुम्पी गरिदिइएको यस अभिलेखबाट अंशुवर्माको नीति बुझ्नाको लागि निकै मदत पाइन्छ । यस दृष्टिले यस अभिलेखको महत्त्व रहेको छ ।

लिच्छविकालमा शासनव्यवस्थाको मुख्य केन्द्र 'राजकुल' (राजदरबार) थियो। राजकुलमा विभिन्न द्वार हुन्थे। विभिन्न द्वारमा विभिन्न विभाग रहेका हुन्थे। यो कुरा अंशुवर्माको हाँडिगाउँको अभिलेखबाट केही खुल्छ। त्यसमा राजकुलका विभिन्न अधिकारी र विभागले पाउने भाग नियत गर्दा राजकुलका द्वारहरूको चर्चा यसरी गरिएको छ–

"दक्षिणद्वारस्य पु ३ प १....पश्चिमद्वारस्य पु १ प ४....मानगृहद्वारस्य पु १ प ४ मध्यमद्वारस्य पु १ प ४ उत्तरद्वारस्य पु १ प ४"

यसबाट राजकुलका विभिन्न द्वारको स्थितिको झलक पाइन्छ। यस कुराको राम्रो पुष्टि टिस्टुङको अभिलेखबाट हुन्छ। त्यसमा यस्तो उल्लेख परेको छ–

"पश्चिमद्वारप्रतिबद्धविषयपतितदायुक्तकशौल्किकगौल्मिकादीन् कुशलमाभाष्य समाज्ञापयति"

यहाँ टिस्टुङभेकमा नियुक्त विषयपति (बडाहाकिम), तदायुक्तक (उनीद्वारा नियुक्त अरू अधिकारीहरू), शौल्किक (भन्सारचौकीका अधिकारी), गौल्मिक (सुरक्षाचौकीका अधिकारी) हरू पश्चिमद्वारसंग सम्बद्ध थिए भनी स्पष्टसंग लेखिएको छ। यसबाट राजकुलका विभिन्न द्वारमा विभिन्न विभाग रहन्थे भन्ने स्पष्ट छ।

खोपासी उपत्यकाभन्दा बाहिर पर्ने प्रदेश हो। सरकारी अधिकरणहरू प्रायः राजकुलभित्र रहने हुनाले खोपासीका जनतालाई मुद्दामामिलाको छिनफान गराउनुपरे वा केही निकासा गराउनुपरे राजकुलको द्वारसम्म धाउनुपर्दा दुःख हुने स्पष्ट छ। प्रशासनलाई मूल (केन्द्र) मा मात्र खिचेर नराख्ने, जनतालाई सकभर सुविधा दिलाइदिने अंशुवर्माको नीति थियो। यसो हुनाले सबै सरकारी अधिकरणले गर्ने काम स्थानीय पाञ्चालीलाई नै सुम्पी सनद अभिलेख गरिदिइएको हो। केही गरी स्थानीय ग्रामपाञ्चालीले गर्न नसक्ने काम कार्बाइ मुद्दामामिला आइपुगे भने 'तलस्वामी' कहाँ जानू; उनीद्वारा नै सबै कामकार्बाइ मिलाइदिइनेछ। अब राजकुलका विभिन्न द्वार धाउनुपर्दैन; एकै द्वारमा मात्र गए पुग्छ अर्थात् तलस्वामीकहाँ मात्र गए पुग्छ भन्ने व्यवस्था यहाँ मिलाइएको छ।

खोपासीको यो अभिलेखले तलस्वामीको स्थितिको पनि झलक देखाएको छ। लिच्छविकालको प्रशासनव्यवस्थामा तलस्वामीको पनि उल्लेखनीय स्थान थियो भन्ने यताबाट देखिएको छ। तल र तलस्वामीबारे पहिले विचार गरिसकेको छ।

लिच्छविकालमा केन्द्रद्वारा देखरेख गरिने प्रदेश तथा सामन्तद्वारा देखरेख गरिने प्रदेश गरी नेपालराज्य प्रशासनको दृष्टिले दुइ खण्डमा विभक्त देखिएको छ। केन्द्रद्वारा सोझै शासन गरिने प्रदेश अनेक विषय (जिल्ला) हरूमा विभक्त थिए। प्रत्येक विषयमा स्थानीय प्रसाशन चलाउन विषयपति नियुक्त हुन्थे। टिस्टुङ्गको अभिलेखबाट त्यस भेकमा 'विषयपति' नियुक्त थिए भन्ने थाहा पाइन्छ। खोपासीभेकमा भने त्यसरी विषयपति नियुक्त भएको देखिंदैन। खोपासीभेकसम्म

सोझै केन्द्रद्वारा नै रेखदेख गरिन्थ्यो; अंशुवर्माले चाहिं स्थानीय जनतालाई नै स्वायत्तशासनको अधिकार सुम्पेको यस अभिलेखबाट देखिएको छ ।

खोपासीका जनतालाई स्वशासनसम्बन्धी सबै अधिकार सुम्पिएका छन् तापनि उनीहरूले एक दस्तूर बेहोर्नुपर्ने व्यवस्था यसमा गरिएको छ। त्यसको उल्लेख यसरी गरिएको छ–'द्वारोद्घाटन कैलास. .यात्रयोश्च भवद्भिः प्रत्येकं पञ्चाशज्जातिशुक्लमृत्तिका देयाः '। यसरी द्वारोद्घाटन यात्रा र कैलास. .यात्रा यी दुइ यात्राको उपलक्षमा खोपासीका प्रत्येक परिवारले पचास कमेरा करका रूपमा बुझाउनुपर्ने बन्धेज गरिएको छ । कुथेर आदि सबै अधिकरणले यहाँ पस्न पाउँदैनन् भन्ने व्यवस्था भएको हुनाले भाग, भोग, कर आदि सबै कर माफी गरिएका थिए। त्यसको बदलामा पचास कमेराचाहिं करका रूपमा प्रत्येक गृहस्थीले बुझाउनुपर्ने गरिएको बुझिन्छ । यस्ता माटोको उपयोग विविध रङ तयार गर्ने काममा गरिन्थ्यो ।

द्वारोद्घाटनयात्रा र कैलास. .यात्राबारे इतिहासकारहरू अल्मलिएका देखिन्छन् । अंशुवर्माले बनाउन लाएको कैलासकूटभवनको उद्घाटनको उपलक्ष्यमा चलाइएका यात्रा यी होलान् भन्ने अनुमान केही इतिहासकारहरूले गरेका छन् । तर दरबार बनाउँदा यसको उद्घाटन–दिनलाई लिई प्रत्येक वर्ष जात्रा गर्ने चलनको उल्लेख कतै पाइंदैन । अर्को कुरा मूल अभिलेखमा अहिले 'कैलास. .यात्रा' मात्र देखिन्छ । कैलासकूटभवनसंग नै यसको सम्बन्ध थियो भन्ने निश्चित छैन। योभन्दा ७ वर्ष जति पछिदेखिका अभिलेखमा मात्र कैलासकूटभवनको उल्लेख हामी पाउँछौं । सांगाको संवत् ३२ को अभिलेखमा कैलासकूटभवनको वर्णन गर्दा 'कुतूहलिजनतानिमेषनयनावलोक्य–मानात्कैलासकूटभवनात्' भनी लेखिएको छ । यहाँ कैलासकूटभवनलाई जनता चौचौपूर्वक आँखासम्म झिम्म नगरीकन टोलाएर हेर्छन् भनिएको छ। यसबाट कैलासकूटभवन बनेको त्यसवेला धेरै भएको थिएन; यसैले सो हेर्न जनतामा कुतूहल पैदा हुन्थ्यो भन्ने देखिन्छ । योभन्दा दशौं वर्ष पहिलेदेखि नै कैलासकूटभवन बनिसकेको भए सो हेर्न त्यसरी चौचौ पर्नुपर्ने अवस्था रहँदैनथ्यो।

अंशुवर्माको प्रशस्तिमा एक महत्त्वपूर्ण अन्तर रहेको यस अभिलेखले देखाउँछ। यस प्रसङ्गमा विचारणीय प्रश्न सो छ। यहाँ अंशुवर्माले 'भगवद्भवपादपङ्कजप्रणामानुष्ठानतात्पर्य्योपात्तायति-हितश्रेयसा' भन्ने विशेषण लिएका छन् । अंशुवर्माले एक्लै शासन चलाउन थालेपछिका उनका अभिलेखमा त सबैमा 'भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका' भन्ने भावको विशेषण रहेको पाइन्छ । तर शिवदेवसंगै रही संयुक्त शासनकालमा गरिएका अभिलेखमध्ये खोपासीको यही अभिलेखमा यस्तो विशेषण परेको छ; अरूमा यस्तो विशेषण रहेको छैन। यसरी खोपासीको यस अभिलेखमा पशुपतिनाथको स्मरण गर्नामा विशेष कारण थियो भन्ने सहजै अनुमान गर्न सकिन्छ। यति कुरा गर्नाको तात्पर्य द्वारोद्घाटनयात्रा र कैलास. .यात्राको सम्बन्ध पशुपतिनाथसंग थियो कि भन्ने हो। पशुपतिनाथको मन्दिरको द्वारको उद्घाटनको उपलक्षमा गरिने यात्रा 'द्वारोद्-घाटनयात्रा' र पशुपतिनाथको मन्दिरसंगै रहेको कैलास थुम्कोमा गरिने यात्रा 'कैलास. .यात्रा हो कि जस्तो मलाई लाग्छ। किनभने त्यसताकाका जात्राहरू देवतासंग सम्बन्ध रहेका देखिएका

छन् । बलम्बूको द्वितीय शिवदेवको अभिलेखमा 'यात्रा' चलाउनेबारेमा अलि खुलाएर लेखिएको छ । यात्राको धार्मिक विधानसंग सम्बन्ध रहेको त्यसबाट थाहा पाइन्छ । जस्तै–

"कारणपूजाव्यवशिष्टेन च द्रव्येण भगवतः श्रीपशुपतिभट्टारकस्य प्रतिवर्षमस्मत्पुण्याधिगम-निमित्तं शोभनच्छत्रारोपणा करणीया तमुद्दिश्य शोभना यात्रापि करणीया"

[कारणपूजा (नैमित्तिकपूजा) गरी बचेको पैसाले हाम्रो पुण्य बढोस् भन्नाका लागि भगवान् पशुपतिनाथलाई प्रतिवर्ष सुन्दर छत्र चढाउनू । त्यसको उपलक्ष्यमा राम्रो यात्रा पनि गर्नू ।]

यसबाट पशुपतिनाथको पूजा आदि विशेष उपलक्ष्यमा यात्रा गर्ने चलन त्यस वेला थियो भन्ने थाहा पाइन्छ । नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखमा ज्येष्ठ शुक्ल एकादशीको दिन वराहयात्रा गर्ने कुरा परेको छ । त्यहाँ 'ज्येष्ठशुक्लैकादश्यां वराहयात्रायां सीमाभ्यन्तर. . . .' भन्ने वाक्य परेको छ ।

यस कारण 'द्वारोद्घाटनयात्रा' 'र कैलास' 'यात्राको सम्बन्ध पशुपतिनाथसंग थियो कि जस्तो देखिन्छ; निश्चित रूपमा भने भन्न सकिंदैन ।

यस अभिलेखमा दूतक देशवर्म्मा गोमी छन् । पाटन शङ्खमूल सिकुबहीको अभिलेखबाट यी देशवर्माको केही परिचय पाइन्छ । त्यहाँ 'तदधुना तद्भ्रातुष्पुत्रस्य नित्यधर्माभिरतचेतस्कस्य परमभागवतस्य देशवर्म्मनाम्नः' भन्ने उल्लेख परेको छ । यसबाट यी देशवर्मा बभ्रुवर्माका भतिजा हुन् भन्ने थाहा पाइन्छ । यहाँ देशवर्मालाई 'परमभागवत' भनिएको छ । यसबाट उनी भागवत सम्प्रदायका अनुयायी थिए भन्ने बुझिन्छ । यिनका काका बभ्रुवर्मा भौमगुप्तका पक्षका मानिस थिए । भतिजा देशवर्माले चाहिं अंशुवर्माको पक्ष लिएको देखिन्छ । त्यस कारण यिनी राजाका विश्वासप्राप्त व्यक्तिका रूपमा 'दूतक' बन्न पुगेको देखिन्छ ।

–✶–

# धापासीको शिवदेव+अंशुवर्माको अभिलेख

काठमाडौंबाट १½ कोश जति उत्तरतिर धापासी गाउँ पर्दछ । त्यसको नजीकै चुनदेवी भन्ने ठाउँमा पीपलको बोटमनि चौरभा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ । यसको अभिलेख कुँदिएको भाग २४ अङ्गुल लम्बा, १९ अङ्गुल चौडा छ । यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन् । यसमा संवत् ५२६ छ ।

'पूर्णिमा' ११ अङ्कमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. (स्व)स्ति मानगृहादखण्डमण्डलेन्दुकिरणावदातयशोवितानस्थगि(ता)
२. (खि)लदिङ्मण्डलो लिच्छविकुलकेतुर्भट्टारकमहाराजश्रीशिवदे(वः कु)
३. (श)ली प्रणालीदिमकग्रामनिवासिनः प्रधानपुरस्सरान्कुटु(म्बिनः)
४. कुशलमाभाष्य समाज्ञापयति विदितं भवतु भवतां यथाने(न)
५. पृथुसमरसम्पातनिर्जयाधिगतपराक्रमोपनमितान्य(क्षि-)
६. तिपतिशिरोमणिप्रभाभासितचरणारविन्दयुगलेनाशेष(सा-)
७. मन्तावगाहनि··कृत··न्दच्चक्षुषा श्रीमहासामन्तांशुवर्म्मणा
८. मां विज्ञाप्य मदनुज्ञातेन सता कुर्थोलिङ्गवल्पञ्चापराधमात्राप्र-
९. वेशेनः वः प्रसादः कृतः समुचितकरमात्रसाधनाय तु तद-
१०. धिकृतैः प्रवेष्टव्यमेव चिरस्थितये चास्य शिलापट्टकशासन-
११. मिदन्दत्तं तदेवंवेदिभिरस्मत्पादप्रसादोपजीविभिरन्यै-
१२. र्व्वा न कैश्चिदिदमप्रमाणङ्कार्यं यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा
१३. कुर्य्यात्कारयेद्वा तमहमन्यायकारिणन्न मर्षयिष्यामि भा(वि-)

१४. भिरपि भूपतिभिर्द्धर्म्मगुरुभिर्गुरुकृतप्रसादानुवर्त्तिभिरि-
१५. यमाज्ञा सम्यक्प्रतिपालनीयेति समाज्ञापना दूतकश्चात्र
१६. लच्छागोमी, संवत् ५२६ वैशाखशुक्लदिवापञ्चम्याम्

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट पूर्णिमाको जुन जस्तो सफा कीर्तिको फैलावटले सारा दिशा ढाकेका, लिच्छविकुलका झण्डा जस्ता भएका, गाथमा आराम भएका भट्टारक महाराज श्रीशिवदेवबाट प्रणालीदिमक ग्राममा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ ।

ठूलो लडाइँ हुँदा जितबाजीबाट भएको पराक्रमले नुहाइएका अरू राजाहरूका शिरपेजका मणिका किरणले दुवै पाउ सुहाएका, जम्मै सामन्तहरूलाई हेर्दा..... आँखा भएका श्रीमहासामन्त अंशुवर्माले हाम्रा हजूरमा बिन्ति चढाएर हाम्रो आज्ञा लिई कुथेर, लिङ्ग्वल अधिकरण र पञ्चापराध तहकीकात गर्न (सम्बद्ध अधिकरणले) तिमीहरूकहाँ पस्न नपाउने गरी निगाह गरिदिइएको छ। उचित कर लिनालाई चाहिं (सम्बद्ध अधिकरणका) अधिकारीहरू यहाँ पस्न पाउँछन् । यो कुरा तिमीहरूलाई थाहा होस् ।

यो स्थितिबन्धेज स्थायी पर्नाको लागि यो सनद शिलापत्र गरिदिइएको छ । त्यस कारण यो कुरा थाहा पाएर हाम्रो निगाहबाट जीविका चलाएका (सरकारी कर्मचारी) वा अरू कसैले यस कुराको बखिलाप नगर्नू ।

जसले यो आज्ञा नाघेर अन्यथा गर्ला वा गराउला ; अन्याय गर्ने त्यसलाई हामी सहनेछैनौं । पछि हुने राजाहरूले पनि नियम कानूनलाई ठूलो संझी मान्यजनले गरिदिएको निगाहको ख्याल राखी यो आज्ञाको राम्रो प्रतिपालन गर्नुपर्दछ भन्ने अनुरोध छ ।

यहाँ मार्फत लच्छा गोमी छन् । संवत् ५२६ वैशाख शुक्ल पञ्चमी ।

### व्याख्या–

संवत् ५२६ को यो अभिलेख शिवदेव र अंशुवर्माको संयुक्त शासन कालको अन्त्यतिरको हो । यस अभिलेखमा लडाइँको मैदानमा शत्रुहरूलाई परास्त पारेको, अरू राजाहरूले अंशुवर्मालाई ढोग्न आएको आदि भाव दर्शाउने विशेषण अंशुवर्मामा लागेका छन् । यस्तै विशेषण उनले शुरू शुरूमा लिएका थिए । बीचमा केही काल उनका अभिलेखमा यस्ता भाव झल्काउने विशेषण रहन छोडेका थिए । अब फेरि उनले यी कुरा दर्शाउन आवश्यक संझेको देखिन्छ । यसबाट निकट भविष्यमा हुन लागेको परिवर्तनको संकेत गरेको बुझिन्छ । राजा शिवदेव गद्दीमा रहे तापनि

वास्तव राजा अंशुवर्मा हुन् भन्ने देखाउने अभिप्राय यसभित्र रहेको छ तथा शिवदेवले राज्यत्याग गर्ने विचार गरेको संकेत पनि यताबाट बुझिन्छ ।

अर्को कुरा खोपासीको अभिलेखदेखि अभिलेखको बेहोरामा पनि महत्त्वपूर्ण अन्तर भइसकेको छ। पहिले 'अंशुवर्माले हाम्रा हजूरमा बिन्ति चढाएका हुनाले उनको कुरा राखन र तिमीहरूको दयाले मैले यो सनदपत्र निगाह गरिदिइएको छ' भन्ने भाव देखाउने वाक्य राजातर्फबाट निकालिएको हुन्थ्यो। अर्थात् सनदपत्र राजाको तर्फबाट गरी दिइएको हुन्थ्यो। अब राजासंग साधेर अंशुवर्माको तर्फबाट सनदपत्र गरी दिइन लागियो । यो कुरा खोपासी, धापासी, लेलेको अभिलेखमा परेको बेहोराबाट स्पष्ट थाहा पाइन्छ । खोपासीको अभिलेखमा 'श्रीमहासामन्तांशुवर्म्मणा मां विज्ञाप्य मदनुज्ञातेन सता युष्माकं सर्व्वाधिकरणाप्रवेशेन प्रसादः कृतः' भनिएको छ । धापासीको यस अभिलेखमा पनि यस्तै बेहोरा परेको छ। लेलेको अभिलेखमा 'श्रीमहासामन्तांशुवर्म्मास्मदनुमोदनया शिलापट्टशासनमिदन्दत्तवान्' भन्ने बेहोरा परेको छ। यसबाट अब अंशुवर्मा एक्लैले शासन चलाउने भूमिका बसिसकेको हामी स्पष्ट थाहा पाउँछौं ।

जनतालाई सन्तुष्ट राखन प्रशासनसम्बन्धी अधिकार जनतालाई सुम्पने नीति अंशुवर्माले लिएका थिए भन्ने कुराको चर्चा माथि गरिसकेको छ। यस अभिलेखमा पनि त्यस्तै कुरा परेको छ। धापासीभेकको बस्तीमा (प्रणालीदिमक ग्राममा) कुथेर, लिङ्ग्वल आदि सरकारी अधिकरणले पञ्चापराधको तहकीकात जस्तो ठूलठूला काममा समेत नपस्नू; खाली साबिक कर (भाग, भोग, कर) उठाउन मात्र सम्बद्ध अधिकरण (कुथेर)ले पस्नू भन्ने व्यवस्था यसमा परेको छ। शासन व्यवस्थामा सुधार गरी जनतालाई सुखसुबिधा दिलाउने नीति अंशुवर्माको थियो भन्ने कुरा धापासीको यस अभिलेखले पनि देखाएको छ ।

यस अभिलेखमा दूतक लच्छा गोमी छन् । यसै सालको लेलेको अभिलेखमा पनि दूतक लच्छा गोमी नै छन् । त्यहाँ यिनको दर्जा प्रतिहार (राजदरबारका द्वारे) दिइएको छ। प्रतिहार भए पनि दूतक पनि बन्न पुगेको देखिएको हुनाले यस ताका यिनी शासकका विश्वासपात्र थिए भन्ने देखिन्छ ।

# लेलेको शिवदेव अंशुवर्माको अभिलेख

'लेले' बस्तीको बीचमा बाटोको दक्षिणपट्टि बारीको डीलमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग १ हात १० अङ्गुल लम्बा, १ हात ५ अङ्गुल चौडा छ। यसको शिरोभागमा ठूलो चक्र अङ्कित छ। यहाँ संवत् ५२६ छ।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति मानगृहादपरिमितगुणसमुदयोद्भासितयशा बप्पपादानुद्ध्यातो लिच्छविकुलकेतु-
२. र्भट्टारकमहाराजश्रीशिवदेवः कुशली लेम्बटीद्रङ्गनिवासिनः प्रधानपुरस्सरान्कु-टुम्बिनः कुश-
३. लप्रश्नपूर्व्वं समाज्ञापयति विदितम्भवतु भवतां यथैतस्यां युष्मद्ग्रामसीमा-भ्यन्तरभू-
४. मौ पूर्व्वराजभिरन्यैश्च साधुभिः श्रेयोभिवृद्धये क्षेत्त्राण्यतिसृष्टकान्यासंस्तेषामेव कैश्चि-
५. दप्यनाक्षेपाय चिरस्थितिनिमित्तमनुपरतपुण्यसन्तानोपचीयमानविशदकीर्त्ति-मालामो-
६. दितदिगन्तरः श्रीमहासामन्तांशुवर्म्मास्मदनुमोदनया शिलापट्टशासनमिदन्दत्त-वान् क्षेत्र-

७. परिमाणं सिंहमण्डपे भगवद्वासुदेवब्राह्मणगौष्ठिकानाम्मा २० आरोग्यशालाया मा २००

८. माद्धयवशालायाः मा ७५ प्रदीपगौष्ठिकानाम्मा ६० पश्चिमशालायाः मा ६० पानीयगौष्ठिकानाम्

९. मा ४० विश्वेश्वरस्य मा १० ब्राह्मणगौ(ष्ठिकानाम्मा) १० प्रदीपगौष्ठिकानाम्मा १० पौलम्पानीयगौष्ठिका–

१०. नाम्मा १० मल्लयुद्धगौष्ठिकानाम्मा ६८ धूपगौष्ठिकानाम्मा २ इन्द्रगौष्ठिकानाम्मा ४ उत्तरशाला-

११. याः मा १२ वादित्रगौष्ठिकानाम्मा १०·······रस्य मा ४० प्रदीपगौष्ठिकानाम्मा ८ अर्च्चागौष्ठिकानाम्

१२. मा २ ध्वजगौष्ठिकानाम्मा १७ प्र– –गौष्ठिकानाम्मा २० प्रणालीगौष्ठिकानाम्मा ८ ब्राह्मणसा–

१३. नाल्थ्यगौष्ठिकानाम्मा १० हिंद्धिमशालाया मा····प्रदीपगौष्ठिकानाम्मा ८ प्रवहणगौ-

१४. ष्ठिकानाम्मा २० उत्तरशालायाः मा २० पूर्व्वशालाया मा १० ध्वजगौष्ठिकानाम्मा ११ भूयो ध्वजगौ-

१५. ष्ठिकानाम्मा १० मल्लयुद्धगौष्ठिकानाम्मा ३ अर्च्चनीयगौष्ठिकानाम्मा ४ इन्द्रगौष्ठिकानाम्मा ६

१६. पूर्व्वशालायाः मा १० भगवतश्चूडिकेश्वरस्य पाञ्चालिकै···मानङ्ग्रामस्य पूर्व्वतः मा ४० पश्चिमतश्च

१७. मा ४० तदेतेषां क्षेत्राणान्न केनचिदाक्षेपः पीडा वा कार्य्यो यस्त्वेतामाज्ञामतिक्रम्यान्यथा प्रवर्त्ति-

१८. ष्यते तमहन्न मर्षयितास्मि दूतकश्चात्र प्रतिहारलच्छागोमी संवत् ५२६ आश्वयुजशुक्लदिवा

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट असङ्ख्य गुणहरूले उज्ज्वल कीर्ति फैलिएका, बप्प–(बुवा) को पाउको अनुग्रह पाएका, लिच्छविकुलका झण्डा जस्ता भएका, गाथमा आराम भएका, भट्टारक (गद्दीनशीन) महाराज श्रीशिवदेवबाट लेम्बटी द्रङ्गमा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ ।

तिमीहरूको ग्रामको सीमाभित्रका ठाउँमा पहिलेका राजाहरूले र अरू सज्जनहरूले पुण्य बढोस् भनी जुन खेतहरू दान दिइएका थिए; कसैले पनि तिनीहरूको हिनामिना गर्न नपाओस् भन्नाका लागि र धेरै कालसम्म ती कायम रहून् भन्नाका लागि हरबखत पुण्यको कामको ताँतीले बढ्दै गएको सफा कीर्तिको फैलावटले दिशा ढाकेका श्रीमहासामन्त अंशुवर्माले हाम्रो अनुमति लिई यो सनद शिलापत्र गरिदिएका छन्; यो कुरा तिमीहरूलाई थाहा होस् ।

खेतको हिसाब यस प्रकारको छ–सिंहमण्डपमा भगवन्वासुदेव ब्राह्मणगोष्ठीका गुठियारलाई २० मानिका, आरोग्यशालालाई २०० मानिका, माद्धचवशालालाई ७५ मानेका, प्रदीप (बत्ती) गोष्ठीका गुठियारलाई ६० मानिका, पश्चिमशालालाई ६० मानिका, पानीय (पानी) गोष्ठीका गुठियारलाई ४० मानिका, विश्वेश्वरलाई, १० मानिका ब्राह्मणगोष्ठीका गुठियारलाई १० मानिका, प्रदीपगोष्ठीका गुठियारलाई १० मानिका, पौलम्को पानीय (पानी) गोष्ठीका गुठियारलाई १० मानिका, मल्लयुद्धगोष्ठीका गुठियारलाई ६८ मानिका, धूपगोष्ठीका गुठियारलाई २ मानिका, इन्द्रगोष्ठीका गुठियारलाई ४ मानिका, उत्तरशालालाई १२ मानिका, वादित्र (बाजा) गोष्ठीका गुठियारलाई १० (मानिका) . . . लाई ४० मानिका, प्रदीपगोष्ठीका गुठियारलाई ८ मानिका, अर्चागोष्ठीका गुठियारलाई २ मानिका, ध्वजगोष्ठीका गुठियारलाई १७ मानिका, . . . का गुठियारलाई २० मानिका, प्रणाली (धारा) गोष्ठीका गुठियारलाई ८ मानिका, ब्राह्मणसानात्थ्य गोष्ठीका गुठियारलाई १० मानिका, हिद्धिमशालालाई . . . मानिका, प्रदीपगोष्ठीका गुठियारलाई ८ मानिका, प्रवहण (गाडा) गोष्ठीका गुठियारलाई २० मानिका, उत्तरशालालाई २० मानिका, पूर्वशालालाई १० मानिका, ध्वजगोष्ठीका गुठियारलाई ११ मानिका, फेरि ध्वजगोष्ठीका गुठियारलाई १० मानिका, मल्लयुद्धगोष्ठीका गुठियारलाई ३ मानिका, अर्चनीय गोष्ठीका गुठियारलाई ४ मानिका इन्द्रगोष्ठीका गुठियारलाई ६ मानिका, पूर्वशालालाई १० मानिका, भगवान् चूडिकेश्वरका पाञ्चालीहरूले . . . . मानङ ग्रामको पूर्वतिर ४० मानिका पश्चिमतिर पनि ४० मानिका।

यी खेतहरूमा कसैले हिनामिना गर्ने वा दुःख दिने काम नगर्नू। जसले यो आज्ञा नाघेर अन्यथा गर्ला; त्यसलाई हामी सहनेछैनौं ।

यहाँ दूतक प्रतिहार लच्छा गोमी छन्। संवत् ५२६ आश्विन शुक्ल

## व्याख्या-

लेलेको यस अभिलेखले लिच्छविकालको जनजीवनको एक महत्त्वपूर्ण पक्षबारे निकै प्रकाश पारेको छ। त्यो हो गोष्ठीप्रथा। यस दृष्टिले यो अभिलेख निकै उपयोगी रहेको छ ।

## गोष्ठीप्रथा

स्थानीय प्रशासनसम्बन्धी र जनहितसम्बन्धी काम कुरा मिलाउन जसरी प्रत्येक ग्राममा पाञ्चाली (पञ्चायत) खडा गरिएका थिए; त्यसै गरी धार्मिक र शिक्षा, स्वास्थ्य आदि लौकिक काम कुरा चलाउन त्यस बेला गोष्ठीहरू खडा गरिएका थिए । आवश्यक कुरा मिलेर गर्ने भावना नै गोष्ठीप्रथाको आधार हो। 'गोष्ठी' शब्दबाटै 'गुठी' शब्द बनेको हो। अहिलेसम्म पनि

हाम्रो यहाँ प्रशस्त गुठीहरू चलेर आइरहेका छन्। तर अहिले धार्मिक कुरालाई छाडेर लौकिक जीवनसंग गुठीको त्यतिको सम्बन्ध रहेको छैन। लिच्छविकालमा भने त्यस्तो थिएन। त्यस वेला लौकिक जीवनसंग सम्बन्ध राख्ने गोष्ठीहरू पनि थिए।

धार्मिक कुरा वा लोकको हित हुने काम चलाउन श्रद्धालु राजा, प्रजा चल अचल सम्पत्ति दान गर्दथे। यस्तै आर्थिक सहायताको भरमा गोष्ठीहरू चल्दथे। त्यस वेलाका यस्ता गोष्ठीहरू मुख्य गरी दुइ किसिमका देखिएका छन्। एकथरी आफ्नै परिवारको अधीनमा रहेको; अर्कोथरी अरू नियत व्यक्ति (गौष्ठिक = गोष्ठीको सदस्य = गुठियार) लाई सुम्पेको। पहिलो किसिमको गोष्ठीको लौकिक जीवनमा त्यति ठूलो स्थान थिएन। दोस्रो किसिमको गोष्ठी दानपतिको सन्तानको अधीनमा नरही नियत व्यक्ति र निश्चित व्यवस्था अन्तर्गत रहने हुनाले यस्ता गोष्ठीको तात्कालिक जीवनसंग निकै सम्बन्ध रहन्थ्यो। लोकको हितको लागि बनेका यस्ता गोष्ठी र गोष्ठीका सदस्यहरूको (गौष्ठिकहरूको) लोकमा प्रतिष्ठा थियो। लिच्छविकालका शासकहरूले पनि यस्ता संघट्टनलाई सुबिधा दिई अगाडि बढ्न प्रोत्साहन दिएका थिए।

तात्कालिक लौकिक जीवनमा गोष्ठीको कुन स्थान थियो भन्ने बुझ्नाको लागि पहिले पाटन वलटोलको अभिलेखमा दृष्टि दिनुपरेको छ। हुनत सो अभिलेख लिच्छविकालभन्दा अलिपछिको हो। तैपनि लिच्छविकालकै परम्पराको हुनाले 'गोष्ठी–प्रथा' बारे बुझ्न सो अभिलेख उपयोगी छ। विचारार्थ त्यसको उद्धरण यहाँ दिनुपरेको छ–

"अब्दे याति भुजग्रहाक्षिगुणिते मासे तथा कार्तिके
रुद्राह्वे नृपतौ च शासति भुवं चन्द्रो जयाद्यः सुधीः।
पार्श्वे पट्टिकया सहामलजलद्रोणीमिमां दत्तवान्
मार्गोन्मार्जनगोष्ठिकासु निहितं क्षेत्रञ्च तु रोपणम् ॥
तत्पट्टिकापटलाच्छादनाय च शिवकाचतुष्टयम्।"

(अभिलेख–संग्रह २ भागको १३ पृ)

[ने. सं. २९२ (वि. सं. १२२८) कार्तिक महीनामा राजा रुद्रदेवले शासन गरिरहनुभएको वेलामा, बुद्धिमान् जयचन्द्रले सफा पानी आउने यो जलद्रोणी (टुटेधारा) र नजीकै पाटी बनाई दान गरे। 'बाटो बढार्ने गोष्ठी' मा तीन रोपनी खेत दान गरे। त्यो पाटीको छाना हाल्न चार शिवका (तात्कालिक मुद्राविशेष) दिए।]

यहाँ जयचन्द्र भन्ने व्यक्तिले पाटी, टुटेधारा बनाई त्यस उपलक्ष्यमा 'मार्गोन्मार्जनगोष्ठी = बाटो बढार्ने गुठी' मा तीन रोपनी खेत राखेको कुरा परेको छ। थाकेका बटुवालाई बस्न सुबिधा होस् भनी पाटी बनाउनु, तिर्खाएका व्यक्तिले पानी पिउन पाऊन् भनी धारा बनाउनु पनि लौकिक जीवनसंग सम्बन्ध राख्ने कुरा हो। तर 'पाटी पौवा बनाए धर्म हुन्छ' भन्ने परम्परा प्राचीन कालदेखि चलेर आएको हुनाले धार्मिक भावनाले जयचन्द्रले पाटी–पौवा बनाए भनी भन्न सकिन्छ। तर

जयचन्द्रले 'बाटो बढार्ने गोष्ठी' मा तीन रोपनी खेत राख्नामा चाहिं त्यस वेलाको लौकिक अवस्थाको अलिकता प्रतिबिम्ब परेको छ। हामीले आफू बस्ने ठाउँका बाटाहरू बढारेर सफा राख्नु पर्दछ; यसो भए निरोगी बन्न यताबाट मदत हुन्छ; यो काम एक दुइ जनाले मात्र गर्न खोजेर हुने होइन; एउटा व्यवस्था बाँधी पालो पालो गरी यस कामको देखरेख गरी यो काम चलाउनुपर्छ" भन्ने भावनाले त्यस वेला 'बाटो बढार्ने' गोष्ठीहरू बनेका रहेछन्। यस्ता गोष्ठीहरू चलाउन आयस्ताको आवश्यकता पर्ने हुनाले हुने–पुग्नेले यस्ता गोष्ठीमा केही दिनु असल हो, पुण्यको काम हो भन्ने धारणा पनि त्यस वेला बसेको रहेछ। यसै हुनाले जयचन्द्रले पाटी पौवा बनाउँदा 'बाटो बढार्ने' गोष्ठीमा पनि खेत दान दिएका हुन् भन्ने स्पष्ट छ।

यो सानो उदाहरणले पनि उहिलेका 'गोष्ठीहरू' बारे विचार गर्न निकै मदत दिएको छ। बाटो बढार्ने, मरम्मत गर्ने कामको लागि अलिकता रकम छुट्याइएको कुरा नरेन्द्रदेवको अनन्त लिङ्गेश्वरको अभिलेखमा पनि परेको छ।

लिच्छविकालको लौकिक जीवनमा गोष्ठीको कुन स्थान थियो भन्ने कुरामा लेलेको शिवदेव अंशुवर्माको यस अभिलेखले सबभन्दा बढी प्रकाश पारेको छ। सर्वत्र व्यवस्था बाँधी जनतालाई सुखसुबिधा मिलाइदिने अंशुवर्माको नीति रहेको हुँदा लेम्बटीद्रङ्गको इलाकामा खेत पर्ने विभिन्न अनेक गोष्ठीहरूको आयस्ता तोकिएको कुरा यस अभिलेखमा परेको छ। यी गोष्ठीमध्ये केहीको सम्बन्ध धार्मिक कुरासंग छ। तर पानीयगोष्ठी, प्रणालीगोष्ठी, प्रवहणगोष्ठी, मल्लयुद्धगोष्ठी, अर्चागोष्ठी आदिको सम्बन्ध लौकिक जीवनसंग पनि छ।

जनतालाई पानी खुवाउने बन्दोबस्त मिलाउनाको लागि 'पानीयगोष्ठी' खडा गरिएको देखिन्छ। विशेष गरी ठूलठूला जात्रा, मेला आदि प्रशस्त जनता भेला हुने अवसरमा यस्ता 'पानीयगोष्ठी' सक्रिय हुन्थे। पानी खुवाउने यस्ता गोष्ठी केही अंशमा अझै पनि कायम छन्। मछिन्द्रनाथको भोटो देखाउने जात्रा आदिमा गुठीको तर्फबाट पानी बोकी खुवाउँदै हिंडेको दृश्य अहिलेसम्म देख्न पाइन्छ। यसै गरी स्थायी रूपमा जनतालाई पानी खुवाउने बन्दोबस्त गर्न ठाउँ–ठाउँमा धारा बनाउने, तिनको देखरेख गर्ने काम प्रणालीगोष्ठीको हुन्थ्यो।

त्यस वेला अश्विकवाहिका (बग्गी), प्रवहण (गाडा) आदि यातायातका साधनमध्ये थिए। रथ्या (रथ हिंड्ने सडक), महारथ्या, पन्था, महापथ, हस्तिमार्ग आदि बाटाका भेद थिए। नक्साल गैह्लीधाराको अभिलेखमा त्यस भेकमा बग्गी, गाडा आदिको आवत–जावतमा रोक लाएको कुरा परेको छ। यसरी यातायातसम्बन्धी नियमकानून लागू थिए। यसो हुनाले जनतालाई यातायातको सुबिधा मिलाइदिन 'प्रवहणगोष्ठी' बनेका देखिन्छन्।

मल्लयुद्ध (कुश्ती खेल्नु) पनि मनोरञ्जनको एक साधनको रूपमा पहिलेदेखि चलेर आएको पाइन्छ। लिच्छविकालमा पनि मनोरञ्जनको लागि 'मल्लयुद्ध' गराउने चलन चलेको देखिन्छ। यसै हुँदा जनताको मनोरञ्जनको लागि 'मल्लयुद्ध' गराउने प्रबन्ध मल्लयुद्धगोष्ठीले गर्दथ्यो।

यस अभिलेखमा मल्लयुद्धगोष्ठीको उल्लेख दुइ ठाउँमा आएको छ। पहिलो मल्लयुद्धगोष्ठीलाई ६८ मानिकाको ठूलै रकम छुट्टयाइदिएको छ। दोस्रोलाई भने ३ मानिका मात्र दिइएको छ। यसै ताकाको नघल श्रीघविहारको खण्डित अभिलेखमा 'युद्धोत्सवमनुभूय' भन्ने उल्लेख आएको छ। यस्तै मल्लयुद्धसम्बन्धी उत्सवको चर्चा त्यहाँ गरिएको हो कि भन्ने देखिन्छ।

'अर्चा' शब्दको अर्थ 'पूजा' भन्ने पनि हुन्छ। पुज्नु भन्ने अर्थमा 'अर्च' धातु ज्यादै प्रचलित छ। अतः ह्वाट्ट हेर्दा 'अर्चागोष्ठी' देवत्ताको पूजा आजाको बन्दोबस्त मिलाउने गोष्ठी होला भन्ने देखिन आउँछ। तर पूजा गर्ने गोष्ठी मात्र भन्दा कुरै खुल्दैन। कहाँ, कसको पूजा गर्ने गोष्ठी यो हो भन्ने प्रश्न यहाँ स्वभावतः उठ्छ। यस कारण अर्चागोष्ठीले अर्कै कुरालाई पो बुझाएको छ कि भनी विचार गर्नुपरेको छ। 'अर्चा' शब्दले मूर्ति, सालिकलाई पनि बुझाउँछ। अर्च्चा शब्दको यो पनि एक चल्ती अर्थ हो। 'प्रतिकृतिरर्चा पुंसि' भनी अमरकोशकारले बोलेका छन्। अरू कोशमा पनि अर्चाको अर्थ मूर्ति भनी लेखिएको पाइन्छ। शिलालेखहरूमा पनि 'मूर्ति' भन्ने अर्थमा 'अर्चा' शब्दको प्रयोग भएको पाइन्छ। विशेष गरेर विष्णुमूर्ति भन्ने अर्थमा यो शब्द प्रचलित थियो। भक्तपुर टौमढीटोलमा नारायणचोक भन्ने ठाउँ छ। त्यहाँ तिलमाधव मन्दिरको अगाडि एउटा गरुड-ध्वज रहेको छ। त्यसमा 'नारायणको मूर्ति' भन्नालाई 'श्रीपतिमाधवस्य अर्चा' भनिएको छ† । यसै गरी चाँगुनारायणस्थानको एक अभिलेखमा पनि 'कृष्णस्य विधिवद् भक्त्या विष्णोरर्चा निवेदिता' भनिएको छ ६। यसबाट 'अर्चागोष्ठी' मूर्ति बनाउने गोष्ठी हो भन्ने देखिएको छ।

धार्मिक गोष्ठीहरूमा पनि एक एक कुराको बन्दोबस्तको लागि भिन्नाभिन्नै गोष्ठी बनाइनु विशेष महत्त्व राख्दछ। जस्तै बाजाको मात्र बन्दोबस्तको लागि 'वादित्रगोष्ठी' बनेको थियो। ध्वजाको बन्दोबस्तको लागि ध्वजगोष्ठी, वत्तीको बन्दोबस्तको लागि प्रदीपगोष्ठी, धूपको बन्दोबस्तको लागि धूपगोष्ठी आदि बनेका थिए। भगवद्वासुदेवब्राह्मणगोष्ठी, इन्द्रगोष्ठी, आदि देवताविशेषलाई पूजा गर्ने गोष्ठीको पनि यहाँ उल्लेख परेको छ। ब्राह्मणगोष्ठी आदि वर्गविशेषको गोष्ठीको पनि उल्लेख परेको छ।

मिलेर काम गर्ने भावनाले गोष्ठीप्रथालाई जन्म दियो भन्ने उल्लेख माथि गरेको थिएं। त्यस वेलाका गोष्ठीहरूतिर दृष्टि दिए यो कुरा छर्लङ्गिन्छ। मिलेर गर्नुपर्ने धेरैजसा कुरा गोष्ठीद्वारा गरिएका देखिन्छन्। वेद कण्ठस्थ पारेर त्यसलाई जोगाइराख्ने काम एक व्यक्तिले मात्र गरेर हुने होइन। यसका लागि एक पुस्ताले अर्को पुस्तालाई तालीम दिनु आवश्यक हुन्छ। यसै हुँदा 'तैत्तिरीयशाखागोष्ठी' आदि वेदाध्ययनसम्बन्धी गोष्ठी लिच्छविकालमा बने। बाजा बजाउने काम एक दिनमा सिक्न सकिने होइन। यसका लागि तालीम चाहिन्छ। तालीम लिन नियत समयको दरकार पर्छ। यस कारण बाजा बजाउन सिकाउने गोष्ठीको आवश्यकता रह्यो। ध्वजा घुमाउने पनि तरीका हुन्छ। त्यो सिक्न पनि तालीमको जरूरत पर्छ। धूप बनाउने कला पनि नसिकी त्यसै

---

† 'अभिलेख–संग्रह' दोस्रो भागको ११ पृष्ठ हेर्नुहोस्।

६ 'अभिलेख–संग्रह' दोस्रो भागको १३ पृष्ठ हेर्नुहोस्।

जानिने होइन। केही वर्षको तालीम विना सफल मूर्तिकार बन्न सकिंदैन। इत्यादि कारणले माथि उल्लिखित अनेक किसिमका गोष्ठीहरू बनेका थिए।

यस अभिलेखमा गोष्ठीहरूको पङ्क्तिमा आरोग्यशालाको पनि उल्लेख भएको छ। आरोग्य-शाला (औषधालय)लाई सबभन्दा बढी रकम छुट्याइएको छ। गोष्ठीसरह आयस्ताबाट चल्ने यो आरोग्यशाला सार्वजनिक औषधालय हो भन्ने यताबाट थाहा पाइन्छ। देउपाटनको नरेन्द्रदेवको पालाको एक अभिलेखमा पनि 'ग्लानभैषज्यार्थं दत्तं' भन्ने उल्लेख आएको छ। यसबाट लिच्छविकालमा रोगीहरूको उपचारको लागि सार्वजनिक औषधालय हुन्थे भन्ने सिद्ध भएको छ। चीनिया राजदूत वाङ्युन्चेको वर्णनमा नेपालीहरू ओखतीको काममा सिपालु छन् भन्ने परेको कुरा यस प्रसङ्गमा स्मरणीय छ।

माथि उल्लिखित गोष्ठीहरूका क्षेत्र लेम्बटीद्रङ्गको सीमाभित्रै थिए। यसै गरी अरू द्रङ्ग, ग्रामहरूमा पनि अनेक गोष्ठीहरू थिए। नरेन्द्रदेवको देउपाटन कसाईंटोलको अभिलेखबाट 'नवगृह' (देउपाटन भेकको बस्ती)मा पनि अनेक गोष्ठी थिए भन्ने थाहा पाइन्छ। त्यसमा "याश्च गोष्ठ्यो नवगृहप्रतिबद्धास्ताश्च चाटभटानामप्रवेश्या एव = नवगृहसंग सम्बन्ध राख्ने जुन गोष्ठीहरू छन्, तिनमा पनि चाटभटले पस्न नपाउने गरिएको छ" भन्ने वाक्य परेको छ। यसबाट नवगृहभित्र पनि अनेक गोष्ठी थिए; ती गोष्ठीका खेतहरूमा मालपोत मिनाह गरिएको थियो भन्ने थाहा पाइन्छ। यसरी तात्कालिक सरकारले गोष्ठीप्रथालाई प्रोत्साहन दिएको देखिन्छ।

गोष्ठीहरू त्यस वेलाको जनजीवनसंग सम्बन्ध राख्ने भएका हुनाले तिनीहरूलाई सरकारद्वारा प्रोत्साहन दिइनु आवश्यक थियो। यसैले अंशुवर्माले गोष्ठीका सदस्यको सन्मानको लागि केही रकम नियत गरिदिएका थिए। देवता, विशिष्ट व्यक्ति आदिले पाउने भाग नियत गरी त्यसको विवरण कुँदाई राखेको अंशुवर्माको हाँडिगाउँको अभिलेखबाट यो कुरा थाहा पाइन्छ। त्यहाँ "गौष्ठिकानां पु २ प २ = गौष्ठिकहरूलाई २ पुराण, २ पण दिनू" भन्ने उल्लेख परेको छ। यसबाट गोष्ठी चलाएर बस्ने गौष्ठिकहरूको लोकमा प्रतिष्ठा थियो भन्ने बुझिन्छ।

यसै गरी लिच्छविकालका अरू अभिलेखमा पनि अनेक गोष्ठीहरूको उल्लेख आएको छ।

कुनै गोष्ठी व्यक्तिगत हुन्थे। यस्ता गोष्ठीहरूसंग अरूहरूको सम्बन्ध रहंदैनथ्यो। उदाहरणार्थ पशुपति भस्मेश्वरको माथि गएको अभिलेखलाई देखाउन सकिन्छ। त्यसमा प्रतिहार ध्रुवसङ्घले भद्रेश्वर आदि पाँचवटा शिवलिङ्ग स्थापना गरी गुठी राखेको कुरा परेको छ। त्यहाँ 'स्वजनगोष्ठिकाधीनं कृत्वा' भनी गुठी आफ्नै मानिसको अधीनमा रहनेछ भनी स्पष्टसंग लेखेको छ।

यसरी धर्म, शिक्षा, स्वास्थ्य आदि जनजीवनमा आवश्यक कति कुरा त्यस वेला गोष्ठीद्वारा गरिन्थे। यसै हुनाले जनतालाई सुबिधा होस्; व्यवस्थापूर्वक कामकुराहरू चलून् भनी चिताउने अंशुवर्माले लेम्बटीद्रङ्गभित्र पर्ने गोष्ठीहरूको व्यवस्था मिलाई दिएका हुन्† ।

---

† 'पूर्णिमा' १३ अङ्कमा प्रकाशित 'लिच्छविकालको लौकिक जीवनमा गोष्ठीको स्थान' भन्ने निबन्धमा पनि गोष्ठीबारे विचार गरिएको छ।

लेलेको यो अभिलेख रहेको ठाउँबाट केही पूर्वतिर सरस्वतीकुण्ड ज्ञानकुण्ड भन्ने प्रसिद्ध ठाउँ छ। श्रीपञ्चमीको दिन ज्ञान, बुद्धि बढून् भनी यहाँ स्नान, दर्शन, पूजन गर्न आउनेहरूको भीड लाग्छ। यसबाट यो क्षेत्र उहिले विद्याको केन्द्र थियो कि भन्ने संकेत मिल्छ। यता लेलेको यस अभिलेखमा विद्यासम्बन्धी , पण्डितवर्गसम्बन्धी गोष्ठीहरूको पनि चर्चा आएको छ। यसबाट उपर्युक्त कुराको केही पुष्टि हुन्छ। यस दृष्टिले यस क्षेत्रमा खोजी गरिनु आवश्यक छ‡।

---

‡ स्कन्दपुराण प्रभासखण्डमा बालब्रह्माको पूजाको सन्दर्भमा ब्रह्माका १०८ पीठहरूको उल्लेख आएको छ; त्यसमा' चम्पायाँ गरुडप्रिय:' भनिएकोले चापागाउँको पासमा रहेको सरस्वती-कुण्ड; चापागाउँको ब्रह्माको मूर्ति र त्यस भेकको महत्त्व पुराणमा पनि गाइएको हुनुपर्छ भन्ने श्रीबुद्धिसागर पराजुलीज्यूको भनाइ छ।

# बुङ्मतीको अंशुवर्माको अभिलेख

काठमाडौंको दक्षिणभेकमा बुग्मती भन्ने प्रसिद्ध ठाउँ छ। त्यहाँ मछिन्द्रनाथको मन्दिरबाहिर पोखरीनिर यो अभिलेख कुँदिएको शिलापत्र रहेको थियो। तर हाल यो शिलापत्र त्यहाँ देखिंदैन; पुरिएर कतै रहेको बुझिन्छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट पाठ सच्याई यहाँ दिइएको छ। यहाँ अभिलेख कुँदिएको भाग २३ अङ्गुल लम्बा, १७ अङ्गुल चौडा छ। यसको शिरोभागमा दुइतिर मृग र बीचमा रथचक्र अङ्कित छन्। यहाँ संवत् २९ छ† ।

भगवान्लालद्वारा ६ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ३९ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति कैलासकूटभवनाद्भगवत्पशुपतिभट्टारकपादा-
२. नुगृहीतो बप्पपादानुध्यातः श्रीमहासामन्तांशुवर्मा कुशली
३. बूगायूमीग्रामनिवासोपगता(न्) कुटुम्बिनो यथाप्रधानङ्कुश-
४. लमाभाष्य समाज्ञापयति विदितम्भवतु भवताङ्कुक्कुटसू-
५. कराणां [१]मल्लपो(ता)नां मत्स्यानाञ्चाबाधनेन[२]परितुष्टैरस्माभि-
६. र्भ(ट्टा)धिकरणाप्रवेशेन वः प्रसादः (कृ)तो युष्माभिरप्ये-

---

† नोलीहरूले यस अभिलेखको संवत् ३४ छपाउनुभएको छ। तर यहांको संवत् २९ हो। 'पूर्णिमा' ७ अङ्कका ४–५ पृष्ठ हेर्नुहोस्।

नोलीका पाठ–

१. कराणा– – – नां २.मत्स्यानाञ्चावधानेन

७. त (द्विज्ञा) य[१] … … नीयं यदा च पुनर्धर्मसङ्करारणि

८. (कार्याणि समु) त्पद्यन्ते[२] तदा राजकुलं स्वयम्प्रविचार….

९. …. … … तदेवमधिगतार्थैर्न कैश्चिदयं प्रसादोस्मत्प्र[३]

१०. (सादोपजीवि) भिरन्यैर्वान्यथा कार्यो यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा[४]

११. (कुर्य्यात्कारयेद्वा) … … र्वात्तनो नियतम्पुष्कला मर्यादाब-

१२. … … … …(भाविभिरपि) भूपतिभिः पूर्वराजकृतप्रसादा-

१३. (नुर्वात्तभिरेव भाव्यमिति) स्वयमाज्ञा दूतकश्चात्र महासर्व-

१४. (दण्ड) नायकविक्र (मसेनः) संवत् २९ ज्येष्ठशुक्लदशम्याम्

# अनुवाद

कल्याण होस् । कैलासकूटभवन (दरबार) बाट भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीमहासामन्त अंशुवर्माले बूगायूमी (बुग्मती) ग्राममा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ ।

कुखुरा, सुंगुर, मल्ल (राँगो ?) का बच्चा, र माछाहरूको हेरचाहले खुशी भएका हामीबाट भट्टाधिकरणले पस्न नपाउने गरी तिमीहरूलाई निगाह गरिएको छ । यो कुरा तिमीहरूलाई थाहा होस् ।

तिमीहरूले पनि यो कुरा थाहा पाएर . . . . . . गर्नुपर्छ । जब धर्मसङ्करसम्बन्धी मुद्दामामिला उठ्लान्; तब राजकुल (राजदरबार) ले आफैंले विचार गर्नू ।

यो कुरा थाहा पाएर हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी) र अरू कसैले पनि यसको अन्यथा नगर्नू । जसले यो आज्ञा नाघेर अन्यथा गर्ला वा गराउला; त्यसलाई पक्का कडा सजाय गरिनेछ । . . . . पछि हुने राजाहरूले पनि अघिका राजाले गरेको निगाहको ख्याल राख्नुपर्छ ।

यो मेरो आफ्नै आज्ञा हो । यहाँ दूतक (मार्फत) महासर्वदण्डनायक विक्रमसेन छन् । संवत् २९ ज्येष्ठ शुक्ल दशमी ।

---

नोलीका पाठ–

१. – – – – – – – – २.– – – – – – –

३. – – – – – – – – – – – – – – प्रसादोस्मत्प्र–

४ – – – – – – – – – – – – – – विलङ्घ्यान्यथा

व्याख्या-

शिवदेवद्वारा राज्यत्याग– लेलेको अभिलेखबाट संवत् ५२६ (वि. सं. ६६१) सम्म गद्दीमा शिवदेव राजोचित सन्मानसाथ रहेका देखिन्छन्। तर सो सदनपत्र गरिदिने अंशुवर्मा हुन्। शिवदेव-तर्फबाट नभई सोझै अंशुवर्माको तर्फबाट सो सनदपत्र गरिदिइएको छ । त्यसमा परेको 'श्रीमहा–सामन्तांशुवर्म्मास्मदनुमोदनया शिलापट्टशासनमिदं दत्तवान्' यो वाक्यले उक्त कुरा स्पष्ट पार्छ। यसरी गद्दीमा बसे तापनि शिवदेव राजकाजबाट त्यसै वेला हटिसकेका देखिन्छन्। बुङ्गमतीको यो अभिलेख त्यसको एक वर्षपछिको संवत् २९ (वि. सं. ६६२) को हो। यसमा शिवदेवको उल्लेख परेको छैन। अंशुवर्मा एक्लै सोझै शासकका रूपमा यहाँ देखापरेका छन्। फेरि यो सनदपत्र मानगृह दरबारबाट जारी गरिएको पनि छैन। कैलासकूटभवनबाट यो जारी गरिएको छ। यसपछिका सनदपत्रमा पनि शिवदेवको उल्लेख पाइँदैन। पछि अंशुवर्माको मात्र क्रमशः उन्नति हुँदै गइरहेको हामी देख्छौं ।

यस कारण वि. सं. ६६१ र ६६२ को बीचमा के घटना घट्यो, यो कुरा प्रामाणिक रूपमा थाहा पाउन सकिएको छैन। यस बीच स्वयं गद्दीमा बस्न अंशुवर्मालि नै शिवदेवलाई पन्छाए कि; यस वेला शिवदेवको मृत्यु भयो कि इत्यादि प्रश्न स्वभावतः उठ्छन्। तर सम्पूर्ण शासनाधिकार पहिले नै अंशुवर्माको हातमा आइसकेको हुनाले कार्य–कारणको दृष्टिले विचार गर्दा शिवदेवलाई पन्छाउनुपर्ने कुनै आवश्यकता देखिंदैन । एक्लै सोझै शासन चलाए तापनि अंशुवर्मा केही कालसम्म उही पुरानो 'श्रीमहासामन्त' पदमै रहेका छन्। पहिले भौमगुप्तहरूलाई पन्छाउँदा 'शत्रुलाई सखाप पारेको, सारा सामन्त राजाहरूले ढोग्न आएको' आदि भाव झल्काउने लामा लामा विशेषण अंशुवर्मामा रहेका थिए। अब सोझै शासकका रूपमा उनी रहन लागेपछि पहिलेका त्यस्ता सबै विशेषण हटेका छन्; यो विचारणीय छ ।

यस कारण बलप्रयोगद्वारा शिवदेवलाई पन्छाइएको होइन भन्ने देखिन्छ। यस वेला शिवदेवको मृत्यु भएको भए उनका छोरा वा अरू नजीकका हकवाला लिच्छविकुमार गद्दीमा राखिने थिए। यसो पनि नभएको हुनाले यहाँ अर्कै घटना भएको छ भन्ने अनुमान हुन्छ। यस विषयमा एकथरी वंशावलीमा उल्लिखित कुराले निकै प्रकाश पारेको छ जस्तो मलाई लाग्छ । वंशावलीमा शिवदेवले राज्यत्याग गरेको वर्णन परेको छ। साथै पछि शिवदेवले भिक्षुचर्या लिएको पनि त्यहाँ लेखिएको छ। पाटन यागबहाल र पशुपति वज्रघरको अभिलेखमा 'श्रीशिवदेवविहार' को उल्लेख आएको छ। त्यहाँ निकै बौद्ध भिक्षुहरू रहन्थे । नरेन्द्रदेवले त्यहाँको भिक्षुसंघलाई निकै अधिकारसहितको अग्रहार (बिर्ता) पनि दिएका थिए। राजोचित 'श्री' शब्दले युक्त श्रीशिवदेव-विहार राजा शिवदेवले बनाउन लाएका हुन् भन्ने कुरामा शङ्का छैन।

यसरी राजकाजसंग शिवदेवको सम्बन्ध छुटेको देखिनु, श्रीशिवदेवविहारको उल्लेख तात्कालिक अभिलेखमा पाइनु, शिवदेवले भिक्षुचर्या लिए भन्ने अनुश्रुति चलेर आउनु इत्यादि कुरा विचार गर्दा शिवदेवले राज्यत्याग गरेका थिए भन्ने देखिएको छ ।

शुरूमा भौमगुप्तहरूलाई पन्छाई, लिच्छविकुलकेतु कहलाई आफैं शासन गर्न पुगेको देख्दा शिवदेवको योग्यता देखापरेको थियो। तर यो काम शिवदेवको बुद्धि–बर्कतबाट भएको रहनेछ। यसका सूत्रधार उनका भानिज अंशुवर्मा रहेछन्। यसो हुनाले अंशुवर्माको उदयको साथसाथ बाहिर जतिसुकै राजकीय सन्मान रहे तापनि भित्रभित्रबाट शिवदेव शक्तिहीन स्थापनाका राजा बन्न पुगेका थिए। यो कुरा स्वयं शिवदेवलाई पनि खट्केको प्रतीत हुन्छ। अंशुवर्माको विद्वत्ता, व्यक्तित्व, चातुर्यबाट उनी यति प्रभावित भए कि आखिर उनैलाई नै सबै राजपाट सुम्पिदिए। यसो हुनाले एक अध्याय समाप्त पारी अर्को अध्याय शिवदेवले शुरू गरेका थिए तापनि लिच्छवि-राजवंशको दृष्टिले शिवदेव गौरवशाली व्यक्ति रहेनन्। यसैले लिच्छविवंशको वर्णन गराई राख्न लाएको पशुपतिको अभिलेखमा द्वितीय जयदेवले शिवदेवको नामोल्लेख गर्नु आवश्यक संझेनन्।

यसपछि अंशुवर्माको हातमा विधिवत् शासनाधिकार पूर्ण रूपले आयो। उनले एक्लै नै सोझै शासन गर्न लागे। अंशुवर्माले शिवदेव जीवित छउन्जेल आफूलाई सोझै राजा घोषित गरेनन्। उनी श्रीमहासामन्त पदमै केही काल रहे। यो कुरा बुङ्मतीको यस अभिलेखबाट थाहा पाइन्छ। यसपछिका अरू अभिलेखबाट पनि यो कुरा थाहा पाइन्छ।

## कैलासकूटभवन–

लिच्छवि राजाहरूको राजगद्दी 'मानगृह' दरबारमा थियो। पहिले सनदपत्रहरू मानगृह दरबारबाटै जारी गरिन्थे। तर सोझै शासक बनेपछि अंशुवर्माले लिच्छवि राजासरह मानगृहमा बसी शासन चलाउनु उचित संझेनन्। यसो हुनाले अंशुवर्माले अब सनदपत्र कैलासकूटभवनबाट जारी गर्न थाले। बुङ्मतीको यस अभिलेखमा सर्वप्रथम कैलासकूटभवनको उल्लेख आएको छ। यसरी मानगृहको स्थान नयाँ बनेको कलापूर्ण सुन्दर दरबार कैलासकूटभवनले लियो।

अंशुवर्मापछि जिष्णुगुप्तहरू पनि यही कैलासकूटभवनमा बसे। तर त्यस वेला गद्दीनशीन लिच्छवि राजा ध्रुवदेव, भीमार्जुनदेवचाहिं मानगृह दरबारमै बसे।

विष्णुगुप्तहरूलाई पन्छाई गद्दीमा बसी स्वयं शासन चलाउन थालेपछि नरेन्द्रदेव मानगृह दरबारमा बसेनन्। कैलासकूटभवनमै बसी उनले शासन गरे। पछि नरेन्द्रदेवले भद्राधिवासभवन बनाए। यसपछि उनका सनदपत्र भद्राधिवासभवनबाट जारी गरिए। तर नरेन्द्रदेवपछि उनका छोरा, नाति शिवदेव, जयदेवहरू भद्राधिवासभवनमा बसेनन्। कैलासकूटभवनमै बसी उनीहरूले शासन चलाए।

यताबाट मानगृह, भद्राधिवासभवनभन्दा कैलासकूटभवन भव्य र पाइक पर्ने थियो भन्ने बुझिन्छ। कैलासकूटभवनको वर्णन अभिलेखमा ठाउँ ठाउँमा आएको छ। सांगाको अभिलेखमा क्षिततलतिलकभूतात्कुतूहलिजनतानिमेषनयनावलोक्यमानात्कैलासकूटभवनात्' भन्ने वर्णन परेको

छ । कैलासकूटभवनको निर्माणसमय निश्चित भएको छैन । तर सांगाको अभिलेखभन्दा ३ वर्ष पहिलेको यस अभिलेखमा कैलासकूटभवनको उल्लेख भइसकेको छ । यसको ३ वर्षपछिको सांगाको अभिलेखमा यो दरबार हेर्न जनतामा कुतूहल छ; यो दरबार हेरी जनता आँखै झिम नगरी टोलाइ रहन्छन् भन्ने वर्णन परेको हुनाले कैलासकूटभवनको भव्यता झल्किन्छ । 'क्षितितलतिलकभूतात्' भन्ने विशेषणबाट यस्तो भव्य दरबार अन्त पनि कमै पाइन्थ्यो भन्ने भाव झल्किन्छ । हुन पनि चीन जस्तो समृद्ध र कलाकौशलले पूर्ण देशबाट आएका राजदूत कैलासकूटभवनको सौन्दर्य देखेर छक्क परेका थिए । यस्तो दरबार अन्त मैले देखिनं भन्ने भाव उनले पोखेका थिए । चीनिया राजदूतको वर्णन ताङवृत्तान्तमा टिपिएको छ । त्यसबाट कैलासकूटभवनको झलक हामी पाउँछौं । सो वर्णनको सारांश यस प्रकारको छ–

"दरबारको बीचमा साततले तामाको छाना भएको बुर्जा रहेको छ । यसका दलिन, डडाली, कठबार, खम्बा आदि सबै सुन्दर किम्मती पत्थरले बनेका छन् । बुर्जाका चार सुरमा तामाका नल लागेका छन् । नलका तलतिर सुनौला मकर (गोही छन् ।) मकरका मुखबाट जोडले पानी निस्कन्छ । बुर्जामाथि हालिएको पानी नलबाट तल झर्छ । त्यो पानी छहरा जस्तो भई सुनौला मकरको मुखबाट निस्कन्छ ।"

कैलासकूट भवन बनेको चालीसौं वर्षपछिसम्म पनि यसको शोभा यथावत् रहेको देखिन्छ । नरेन्द्रदेवका अभिलेखमा परेको वर्णनबाट यो कुरा थाहा पाइन्छ । अनन्तलिङ्गेश्वरको उनको अभिलेखमा कैलासकूटभवनको वर्णन यसरी गरिएको छ–

"स्वस्ति कैलासभृङ्गाभाभ्रयनोत्सवकारिणः ।
कैलासकूटभवनात् रम्याज्जगति विश्रुतात् ।।"

यहाँ उल्लिखित 'जगति विश्रुतात्' पदबाट कैलासकूटभवनको ख्याति विदेशमा समेत फैलिएको संकेत पाइन्छ । हुन पनि अंशुवर्माको कल्पनाले साकार रूप लिएको यस भवनको निर्माणले नेपाली वास्तुकला अरू देशमा समेत लोकप्रिय बन्यो । नेपाली यो वास्तुशैली पछि 'प्यागोडाशैली' नामले विदेशमा प्रख्यात भयो ।

नरेन्द्रदेवको पाटन भन्सारचोकको अभिलेखमा पनि कैलासकूटभवनको वर्णन परेको छ । त्यहाँ हिउँले धपक्क ढाकेको हिमालयको टाकुरोसंग कैलासकूटभवनको तुलना गरिएको छ । यसबाट यसो हेर्दा कैलासकूटभवन सेतो देखिन्थ्यो भन्ने बुझिन्छ । यस दरबारको 'कैलासकूट' नामकरणले पनि अंशुवर्माको मानसिक भावनाको केही प्रतिनिधित्व गरेको छ ।

दुःखको कुरो छ । लिच्छविकालको इतिहासमा सयौं वर्षसम्म विशेष स्थान ओगटेको, आफ्नो सौन्दर्यले देश विदेशमा प्रसिद्धि पाएको, नेपाली वास्तुकलाको अद्‌भुत नमूनाको रूपमा रहेको कैलासकूटभवन कहाँनेर थियो भन्ने कुरा अहिलेसम्म निश्चित गर्न सकिएको छैन । तर यसो विचार गर्दा कैलासकूट भवन हाँडिगाउँमा थियो भन्ने देखिएको छ । हाँडिगाउँमा पाइएका

इँटहरूमा अंशुवर्माको नामोल्लेख भएको पाइएको छ । यसबाट पनि उक्त कुराको पुष्टि हुन्छ । यस भेकमा उत्खनन आदि वैज्ञानिक तरीकाले खोजी गर्न सके केही निष्कर्ष निस्कने आशा लिन सकिन्छ ।

## अंशुवर्माको वंश–

सोझै शासन गर्न थालेपछि अंशुवर्माका पहिलेका लामा लामा विशेषण हटे । तिनको स्थानमा पशुपतिनाथप्रति श्रद्धा र भक्ति झल्काउने 'पशुपतिभट्टारकपादानुगृहीत' तथा 'बप्पपादानुध्यात' भन्ने विशेषण उनले लिन थाले । 'बप्पपादानुध्यात' भन्ने विशेषण लिई अंशुवर्माले आफ्नो पैतृक कुल ठूलो थियो भन्ने संकेत गरेका छन् । यस कारण उनको वंशबारे अलिकता विचार गर्नुपरेको छ ।

अंशुवर्मा कुन वंशका हुन् भन्ने कुरामा विद्वान्हरूको मतभेद रहेको छ । गोपालवंशावलीमा अंशुवर्मालाई शिवदेवका भानिज भनी लेखिएको छ; अंशुवर्माबारेमा पाइएको सबभन्दा पुरानो परिचय यही नै हो । यो कुरा सत्य हुनु धेरै सम्भव छ भनी माथि चर्चा गरिसकेको छ । तर यत्तिबाटै चित्त नबुझ्ने हुनाले यस विषयमा अलि बढ्ता विचार गर्नुपर्ने देखिन्छ ।

अंशुवर्माले एक्लै शासन गर्न थालेपछिका उनका केही अभिलेखमा दूतक 'युवराज उदयदेव' को उल्लेख परेको छ । उदयदेव नरेन्द्रदेवका बाबु हुन् भन्ने कुरा जयदेवको पशुपतिको अभिलेखबाट थाहा पाइन्छ । नरेन्द्रदेवले आफूलाई लिच्छविवंशका भनी गर्वसाथ लेखेका छन् । यसो हुनाले नरेन्द्रदेवका बाबु उदयदेव पनि लिच्छवि नै हुन् भन्ने स्पष्ट छ । अंशुवर्माका अभिलेखमा युवराज भन्ने विशेषण उदयदेवमा लाइएको हुनाले उनी अंशुवर्माका छोरा थिए होलान् भन्ने देखिन्छ । जस्तै जिष्णुगुप्तका अभिलेखमा उनका छोरा विष्णुगुप्तलाई युवराज भनिएको छ । यसरी अंशुवर्माका छोरा उदयदेव देखिएका हुनाले अंशुवर्मा पनि लिच्छविवंशकै हुन् भन्ने ऐ. शि. बाबुराम आचार्यहरूको जोडदार तर्क छ । ह्वात्त हेर्दा यो कुरा हो कि जस्तो पनि देखिन्छ । तर शिवदेवदेखि परिवर्तन हुँदै आइरहेको तात्कालिक परिस्थितिको अध्ययन गहिरिएर गर्‍यौं भने यो कुरा होइन भन्ने थाहा पाइन्छ । यस विषयको केही चर्चा माथि गरिसकेको छ तापनि संक्षेपमा यहाँ पनि त्यस कुराको अलिकता चर्चा गर्नु आवश्यक देख्तछु ।

अंशुवर्माको आड पाएर शिवदेवले भौमगुप्तहरूलाई पन्छाए । केही समय अंशुवर्मा अगाडि देखापरेनन् । अनि पहिले श्रीसामन्त रूपमा उनी देखापरे । लगत्तै श्रीमहासामन्त बने । पछि शिवदेवले राज्यत्याग गरेपछि शासनाधिकार सोझै उनको हातमा आयो । तैपनि केही समयसम्म श्रीमहासामन्तकै रूपमा रही उनले शासन चलाए । पछि श्रीमहासामन्त लेख्न छोडी 'अंशुवर्मा' मात्र लेख्न थाले । त्यसै वेला आफ्नो नाउँमा स्वतन्त्र टक पनि ढाल्न लाए । अनि अन्तिम समयमा अंशुवर्मा महाराजाधिराज बने । त्यस वेला उनले आफ्नो नाउँको 'वर्मा' पनि छोडिदिए ; खाली 'अंशु' मात्र लेख्न थाले । यो कुरा उनको टकबाट थाहा पाइन्छ । यसरी अंशुवर्मामा क्रमशः अन्तर आइरहेको स्पष्ट छ । तर आफूभन्दा अघिका कुनै पनि शासकले नलिएको 'महाराजाधिराज'

पद लिए तापनि लिच्छवि राजासरह 'देव' चाहिं उनले लेख्न उचित सम्झेनन् । वर्मा छोडेर बरू 'अंशु' मात्र लेख्न पुगे । फेरि लिच्छवि राजगद्दी रहेको दरबार 'मानगृह' मा पनि उनले बस्न चाहेनन् । अर्कै दरबार 'कैलासकूटभवन' बनाउन लाई उनी त्यहीँ बसी शासन गर्न लागे । अंशुवर्मा लिच्छवि राजवंशकै भएका भए अवश्य पनि उनले आफूलाई 'देव' लेख्थे; मानगृहदरबारमै बस्थे तथा त्यस किसिमसंग श्रीसामन्त, श्रीमहासामन्त, अंशुवर्मा, महाराजाधिराज अंशुको रूपमा क्रमशः बहुरूप लिंदै जानु उनलाई आवश्यक हुने थिए । प्रभावशाली नरहेका उदयदेवको त नामोल्लेख गर्ने द्वितीय जयदेवले अंशुवर्मा जस्ता प्रतापी राजाको नामोल्लेख गर्वसाथ गर्ने थिए ।

यताबाट अंशुवर्मा लिच्छविवंशका होइनन् भन्ने स्पष्ट देखिन्छ । अभिलेखमा आफ्नो वंशबारे अंशुवर्माले कतै कुनै संकेत गरेका छैनन् तापनि आफ्ना टकमा उनले आफ्नो अलिकता संकेत गरेका छन अहिलेसम्म विद्वान्हरूको दृष्टि यस कुरामा नगएको जस्तो मलाई लाग्छ । 'श्र्यंशुवर्मा ' अङ्कित उनका धेरैजसा टकमा सिंहको माथि 'चन्द्र ' चिह्न अङ्कित भएको छ । यसरी आफ्ना टकमा 'चन्द्रचिह्न ' अङ्कित गराई अंशुवर्माले आफ्नो वंश 'चन्द्रवंश' हो भन्ने संकेत गरेका छन् । लिच्छविहरू आफूलाई 'सूर्यवंशी' भनी दावा गर्थे । यसबाट अंशुवर्मा लिच्छविवंशका होइनन्, चन्द्रवंशी कुनै राजघरानाका हुन् भन्ने सिद्ध हुन्छ । अर्को कुरा फर्पिङ्को अभिलेखमा अंशुवर्माको वर्णनमा 'क्षितितलशशिनः' भनीलेखिएको छ । यसबाट पनि उनी चन्द्रवंशी थिए भन्ने संकेत पाइन्छ ।

यसो भए अंशुवर्माका अभिलेखमा 'युवराज उदयदेव' भनी कसरी लेखियो ? अब यस प्रश्नको उत्तर खोज्नु छ । तर यसको उत्तर पनि स्पष्ट छ । लिच्छवि राजवंशप्रति अंशुवर्माको आस्था त छँदै थियो । राजा र प्रजाको विश्वास प्राप्त गर्न सकेका हुनालें नै उनी त्यस अवस्थामा पुग्न सकेका थिए । यसो हुनाले आफूपछि गद्दीमा लिच्छवि कुमार 'उदयदेव' बसून् भन्ने अभिप्रायले उनलाई आफ्ना उत्तराधिकारी छानी 'युवराज'का रूपमा घोषणा गरेका हुन् । उदयदेव अंशुवर्माका छोरा होइनन् ।

जिष्णुगुप्तहरूको पालाको कुराचाहिं भिन्नै थियो । उनीहरू अंशुवर्माको स्थितिमा पुग्न सकेका थिएनन् । तर अंशुवर्मा जस्तै हुने मनसुबा भने उनीहरूको पनि थियो । यसोहुँदा कमजोर लिच्छवि कुमारलाई गद्दीमा राखी 'तत्पुरस्सरः' 'तत्सहितः भनी लेखी उनीहरू संयुक्त राजा हुन पुगेका थिए । गद्दीनशीन राजाको केही भाउ नहुँदा युवराजका रूपमा आफ्ना छोरालाई देखाउने साहस उनीहरूले गरेका थिए । यसको नतीजा विष्णुगुप्तले त भोगे पनि ।

यी कुरा नबुझ्दा यस ताकाका घटनामा धेरैलाई भ्रम भएको देखिन्छ । तल यथास्थानमा यस विषयमा अरू चर्चा गरिएको छ ।

## पाशुपाल्यमा प्रोत्साहन—

राष्ट्रलाई बलियो पार्न आर्थिक अवस्था मजबूत पार्नुपर्छ भन्ने कुरा अंशुवर्माले राम्ररी बुझेका थिए । आर्थिक अवस्था मजबूत पार्ने कुरामध्ये कृषि, पाशुपाल्य, वाणिज्य मुख्य हुन् । यसो हुनाले

कृषि र वाणिज्यका साथसाथै पशुपालनमा पनि वृद्धि होस् भनी अंशुवर्माले चाहेका थिए। बूगायूमी (बुग्मती) ग्रामका बासिन्दाहरूले कुखुरा, सुंगुर, माछा मल्लका बच्चाको हेरचाह राम्ररी गरी उत्पादन बढाएका हुनाले प्रसन्न भई भट्टाधिकरणले यस ग्राममा पस्न नपाउने व्यवस्था बाँधी यो सनदपत्र गरिदिइएको हो। यसबाट पशुपालनमा वृद्धि होस् भन्ने अंशुवर्माको नीति थियो भन्ने थाहा पाइन्छ। यसै गरी पशुपालनको लागि सुबिधा दिई राखिएका तौखेल आदिका उनका अभिलेखबाट पनि उक्त कुरा थाहा पाइन्छ।

## धर्मसंकर–

'धर्मसङ्कर' नहोस् भन्ने कुरामा अंशुवर्माले दृष्टि दिएका थिए भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ। बूगायूमी ग्राममा भट्टाधिकरणले नपस्नू भनी व्यवस्था बाँद्धा 'धर्मसङ्कर' सम्बन्धी कार्य (मुद्दामामिला) उठे भने सोझै राजदरबारबाट विचार गरी तिनको छिनफान गरिदिनू भन्ने व्यवस्था यस अभिलेखमा परेको छ। यसरी 'धर्मसंकर' नहोस् भन्ने कुरामा अंशुवर्मा सावधान थिए भन्ने थाहा पाइन्छ। अंशुवर्माले 'धर्मसङ्कर' नहोस् भन्ने कुरामा त्यसरी किन चाख लिए भन्ने कुरा बुझ्नाको लागि पहिले 'धर्मसङ्कर' भनेको के हो, सो बुझ्नुपरेको छ।

लिच्छविकालमा धार्मिक स्वतन्त्रता थियो। राजा तथा प्रजा आफ्नो श्रद्धाअनुसार बिभिन्न धर्ममा लाग्न सक्दथे। यसैले लिच्छविकालमा एउटै परिवारमा पनि कोही कुनै धार्मिक सम्प्रदायमा श्रद्धा राख्ने, कोही कुनै धार्मिक सम्प्रदायमा श्रद्धा राख्ने पनि देखिएका छन्। पतिको जुन धर्ममा श्रद्धा छ, पत्नीले पनि त्यही धर्ममा श्रद्धा राख्नुपर्छ भन्ने बन्देज थिएन। अझ एउटै व्यक्तिले पनि विभिन्न धार्मिक सम्प्रदायमा श्रद्धा, भक्ति राख्न सक्दथे। लिच्छविकालको धार्मिक इतिहासतिर यसो दृष्टि दिए उक्त कुरा स्पष्ट देखिन्छ। लिच्छविकालका प्रसिद्ध शासक मानदेव, अंशुवर्मा, नरेन्द्रदेवहरूको धर्मप्रतिको भावना मात्र केलाएर हेरे तापनि उक्त कुरा सांजलैसंग थाहा पाउन सकिन्छ।

राजा मानदेवको व्यक्तिगत रूपमा वैष्णव धर्ममा श्रद्धा रहेको थियो। बाबुको अकस्मात् मृत्यु हुँदा टाउको उठाउन खोजेका सामन्तहरूलाई कज्याएर फर्केको खुशियालीमा उनले चाँगु-नारायणको पूजा गरेथे; त्यहाँ गरुडध्वज स्थापना गरेथे। यसको लगत्तै भने जस्तै उनले पशुपति तिलगंगा र लाजिमपाटमा विक्रान्त विष्णुमूर्ति स्थापना गरेथे। पछि मानदेवले थंतुंरीद्रङ्गमा (विष्णुपादुकाको फेदीमा) शिवलिङ्ग स्थापना गरेथे। उनले पछि आफ्नो नाउँमा 'श्रीमानदेवविहार' नामक बौद्ध विहार पनि बनाउन लाए। यसरी त्यस बेला नेपालमा प्रचलित तीनै प्रमुख धार्मिक सम्प्रदायमा मानदेवले श्रद्धा भक्ति देखाएका थिए।

अंशुवर्माको पनि धर्मप्रति यस्तै भावना थियो। व्यक्तिगत रूपमा "शैवधर्म' मा उनको श्रद्धा थियो। तर शासकको हैसियतले उनले शैव, वैष्णव, बौद्ध धर्मलाई समकक्षामा राखी आदर देखाएथे। यो कुरा तल आउने हाँडिगाउँको उनको अभिलेखबाट थाहा पाइन्छ। अंशुवर्माले 'राजविहार' नामक बौद्ध विहार पनि बनाउन लाएथे।

यसै गरी नरेन्द्रदेवले पनि आफूलाई 'पशुपतिभट्टारकपादानुगृहीत' भनी बोलेका छन् । साथै चीनिया राजदूत वाङ्युन्चेले नरेन्द्रदेवको कम्मरपेटीमा 'बुद्धको मूर्ति' अङ्कित भएको देखेथे ।

यति कुराबाट एउटै व्यक्तिले विभिन्न धर्ममा लागेकोलाई 'धर्मसङ्कर' भनेको रहेनछ भन्ने स्पष्ट थाहा पाइन्छ । *नत्र 'धर्मसङ्कर' नहोस् भनी चाहने अंशुवर्मा खुद आफैंले अनेक धर्ममा* श्रद्धा देखाई आफैंले 'धर्मसङ्कर' गर्ने थिएनन् । त्यसो भए धर्मसङ्कर शब्दले के कुरालाई लक्ष्य गरेको हो, सो बुझ्नुपरेको छ । कौटलीय अर्थशास्त्र आदि प्राचीन ग्रन्थमा यस कुराको वर्णन पाइन्छ। कौटलीय अर्थशास्त्रको विनयाधिकरणको 'त्रयीस्थापना' भन्ने प्रकरणमा यो कुरा लेखिएको छ । विचारार्थ त्यसको अलिकता अंश यहाँ उद्धृत गर्नुपरेको छ–

"एष त्रयीधर्मश्चतुर्णां वर्णानामाश्रमाणां च स्वधर्मस्थापनादौपकारिकः । स्वधर्मो ब्राह्मणस्याध्ययनमध्यापनं यजनं याजनं दानं प्रतिग्रहश्चेति । क्षत्रियस्याध्ययनं यजनं दानं शस्त्राजीवो भूतरक्षणं च । वैश्यस्याध्ययनं यजनं दानं कृषिपाशुपाल्ये वाणिज्या च ।शूद्रस्य द्विजातिशुश्रूषा वार्ता कारुकुशीलवकर्म च । . . . . स्वधर्मः स्वर्गायानन्त्याय च । तस्यातिक्रमे लोकः सङ्करादुच्छिद्येत"

यहाँ कौटल्यले चारै वर्णको आफ्नो आफ्नो 'धर्म'को चर्चा गरेका छन् । ब्राह्मणको धर्म– पढ्नु, पढाउनु, यज्ञ गर्नु यज्ञ गराउनु, दान दिनु दान लिनु हो । क्षत्रीको धर्म-पढ्नु, यज्ञ गर्नु, दान दिनु, शस्त्र चलाई जीविका गर्नु प्राणीको रक्षा गर्नु हो । वैश्यको धर्म–पढ्नु, यज्ञ गर्नु, दान दिनु खेतीपाती पशुपालन व्यापार गर्नु हो । शूद्रको धर्म–सेवा गर्नु, खेती पशुपालन व्यापार गर्नु, कालिगडी काम गर्नु, गाना बजाना आदि गर्नु हो ।

'तस्यातिक्रमे लोकः सङ्करादुच्छिद्येत' भनी 'धर्मसङ्कर' भयो भने लोकको नाश हुन्छ भनेर पनि कौटल्यले स्पष्टसंग लेखेका छन् । यो 'आर्यमर्यादा हो । यसलाई नाघ्नु छैन भनेर पनि उनले जोड दिई बोलेका छन् । जस्तै–

"व्यवस्थितार्यमर्यादः कृतवर्णाश्रमस्थितिः ।
त्रय्या हि रक्षितो लोकः प्रसीदति न सीदति ।"

बुङ्मतीको यस अभिलेखमा उल्लिखित 'धर्मसङ्कर' भनेको पनि यही हो भन्ने कुरामा अब शङ्का छैन ।

वर्णव्यवस्थाको मूल आधार पेशा थियो । आफ्नो जातअनुसारको पेशा गर्दै जानाले नै लोकलाई सुखी तुल्याउँछ भन्ने धारणा त्यस बेला थियो । आफूलाई मन परेको धर्ममा लाग्ने स्वतन्त्रता त्यस बेला थियो । तर आफूलाई मन परेको पेशामा लाग्ने स्वतन्त्रता उहिले थिएन । आफ्नो जातको धर्म (पेशा) छोडी अर्कै पेशातिर लागे 'धर्मसङ्कर' *हुन्छ;* यसले लोकको नाश गर्छ भन्ने धारणाले त्यस बेला जरो गाडेको थियो । यसै हुँदा अंशुवर्मा र लिच्छविकालका अरू शासकको आदर्श वर्णव्यवस्था कायम राख्नु रह्यो । कौटल्यले वर्णव्यवस्थालाई 'आर्यमर्यादा' भनेका छन् । अंशुवर्माले

पनि आफूलाई 'अनतिवृत्तार्यमर्यादासेतु' भनी टिस्टुङको अभिलेखमा भनेका छन्। द्वितीय शिवदेवले बलम्बूको अभिलेखमा आफूलाई 'सम्यग्विरचितसकलवर्णाश्रमव्यवस्थः' भनी लेखाई अझ स्पष्ट शब्दमा उक्त कुरा दर्शाएका छन् ।

## भट्टाधिकरण—

वर्णव्यवस्था कायम गर्नु लिच्छविकालका शासकहरूको आदर्श मात्र रहेको होइन; यसका लागि उनीहरूले विशेष व्यवस्था पनि मिलाएका थिए। जनताले आफ्नो जातअनुसारको काम गरोस्; धर्मसङ्कर नहोस् भन्ने कुराको देखरेख गर्न एक भिन्नै अधिकरण नै खडा गरिएको थियो। त्यो हो भट्टाधिकरण। बूगायूमी ग्राममा भट्टाधिकरणको अधिकार छुटाएर सो अधिकार त्यहींकै ग्रामपाञ्चालीलाई सुम्पंदा 'धर्मसङ्कर' हुन जाला कि भन्ने चिन्ता अंशुवर्मालाई भएको यस अभिलेखबाट थाहा पाइन्छ। यस कारण धर्मसङ्कर हुने भयो भने त्यसको विचार सोझै राजकुलबाट गर्नू भन्ने व्यवस्था यस अभिलेखमा गरिएको छ। यसबाट जनताले आफ्नो जातअनुसारको काम गरोस्; धर्मसङ्कर नहोस् आदि कुराको रेखदेख भट्टाधिकरणले गर्दो रहेछ भन्ने थाहा पाइन्छ ।

यङ्गालहिटीको भीमार्जुनदेव जिष्णुगुप्तको अभिलेखमा पनि मल्लकर माफीको प्रसङ्गमा भट्टाधिकरणको उल्लेख आएको छ। बीचको भाग अलि खण्डित हुँदा कुरा स्पष्ट छैन। तर त्यहाँको प्रसङ्गबाट पनि भट्टाधिकरणको काम उपर्युक्त किसिमकै थियो भन्ने पुष्टि हुन्छ ।

नरेन्द्रदेवको पाटन भन्सारचोकको अभिलेखमा 'भट्टमाप्चोकाधिकारयोः प्रावेश्यादवश्यं जनस्य महती पीडा' भन्ने उल्लेख परेको छ। यसबाट भट्टाधिकरणको कानून कडासंग लागू गरिन्थ्यो भन्ने देखिन्छ ।

'भट्ट' यो शब्द संस्कृत 'भर्तृ' शब्दबाट बनेको हो। तर विद्वान् ब्राह्मणलाई बुझाउने शब्दको रूपमा 'भट्ट' शब्द रूढ भएको थियो तथा विद्वत्समाजमा यो शब्द अति प्रचलित र प्रिय बनेको थियो। धर्मसङ्कर आदि नहोस् भन्ने उक्त कुराको देखरेख भट्ट (विद्वान्, पण्डित) मार्फत हुने हुनाले यो अधिकरण 'भट्टाधिकरण' कहलाएको थियो§।

## नयाँ संवत्को प्रचलन—

अंशुवर्माले सोझै शासन चलाउन थालेपछि भएका परिवर्तनमध्ये एक नयाँ संवत्को प्रचलन पनि हो। मानदेवको चाँगुको अभिलेखदेखि देखापर्दै आएको संवत् (शक संवत्) लाई छोडी अंशुवर्माले अर्कै संवत्को प्रयोग गर्न थाले। बुङमतीको यस अभिलेखमा सर्वप्रथम यसको प्रयोग भएको पाइएको छ। यहाँ सो संवत् २९ दिइएको छ। यसरी यो संवत् चलेको यस वेला २९ वर्ष पुगिसकेको थियो भन्ने यसबाट थाहा पाइन्छ। यस कारण यस संवत्का प्रवर्तक स्वयं अंशुवर्मा थिएनन् कि भन्ने यताबाट झल्किन्छ। उनीभन्दा अगाडिका कसैले कुनै प्रसङ्गमा यो नयाँ संवत्को प्रचलन गरेका थिए होलान्। तर यो संवत् चल्न सकेको थिएन, आफूले सोझै शासन गर्न थालेपछि अंशुवर्माले यस संवत्लाई प्रचलनमा ल्याए कि भन्ने यताबाट देखिएको छ। अनि अंशुवर्मापछि पनि यही संवत्को प्रचलन रह्यो ।

---

§ 'पूर्णिमा' २३ अङ्कमा पनि यस विषयमा विचार गरिएको छ ।

पं. भगवान्लाल इन्द्राजीले वि. सं. १९३७ मा यताबाट लगी प्रकाश गराएका १५ वटा लिच्छविकालका अभिलेखमध्ये पशुपति गणेशस्थानको र टुण्डिखेलको अंशुवर्माका अभिलेख पनि थिए। तिनमा ३९ र ४५ संवत्को उल्लेख परेको थियो। यस कारण त्यसै बेलादेखि यो संवत् कुन संवत् हो भन्ने तर्क वितर्क उठिरहेको छ। तर कसैको मत पनि ठीक्क मिल्न आएको छैन। सुमतितन्त्रमा उल्लिखित कुरालाई आधार मानी विचार गर्‍यौं भने सबतिर घटना मिल्छन्। यस कारण सुमतितन्त्रको वर्णन लिच्छविकालको संवत् निर्णय गर्नामा सहायक देखिएको छ। यसको चर्चा माथि पनि गरिसकेको छ। संवत्बारेको विस्तृत विवेचना पछि गरिनेछ। अहिले विचारार्थ सुमतितन्त्रको संवत्विषयक वाक्यको एक अंश यहाँ उद्धृत गरिन्छ—

"शकराजाब्द ४९८ मानन्देवस्य राज्याब्द ३०४'

यसबाट नेपालमा ४९८ सम्म शकसंवत् चल्यो; अनि ४९८ शकदेखि मानदेवसंवत् चल्यो; त्यसको प्रचलन ३०४ वर्षसम्म रह्यो: अनि नेपाल संवत् चल्यो भन्ने थाहा पाइन्छ।

यसरी ४९८ शक अर्थात् वि. सं. ६३३ देखि 'मानदेवसंवत्' को प्रचलन नेपालमा भएको रहेछ भन्ने यताबाट देखिएको छ। शकसंवत् ४२७ मै प्रथम मानदेवको मृत्यु भइसकेको थियो। यस कारण संवत्प्रवर्तक यी मानदेव प्रथम मानदेव होइनन्; द्वितीय मानदेव हुन् भन्ने देखिन्छ। तर द्वितीय मानदेवको अभिलेख आदि प्रमाण भेट्टिएको छैन। यस कारण यस संवत्को नाम 'मानदेवसंवत्' भनी मान्न अलि अप्ठ्यारो छ। तर शकसंवत् ४९८ भन्दा पछि ५१२ भन्दा अघिका बीचका २३ वर्षभित्र के के घटना घटे; अहिलेसम्म राम्ररी थाहा पाउन सकिएको छैन। यसो हुनाले ४९८ शकतिर 'मानदेव' नाम भएका राजा वा संवत् चलाउन सक्ने कुनै विशिष्ट व्यक्ति हुँदै भएनन् भनी ठोकेर भन्न सकिंदैन। अर्को कुरा—केवलपुरको अभिलेखमा श्रीमहीदेवपछि उल्लिखित 'श्रीमानदेव' को हुन्? यस प्रश्नको समाधान पनि हुन सकेको छैन। यसो हुनाले केवलपुरको अभिलेखमा उल्लिखित 'श्रीमानदेव' संवत्प्रवर्तक द्वितीय मानदेव हुने सम्भावना नभएको होइन।

जे होस्, अरू निश्चित प्रमाण नपाइन्जेल सुमतितन्त्रलाई नै आधार बनाउनुपरेको छ। चाँगुनारायणको अंशुवर्माको अभिलेखमा वार, नक्षत्र समेतको उल्लेख पाइएको हुनाले तिथि-मितिको गणना गरी संवत् निर्णय गर्ने आधार पाइएको पनि छ। यस कारण निकट भविष्यमै यसको टुङ्गो लाग्ने आशा लिन सकिन्छ।

यस अभिलेखमा दूतक महासर्वदण्डनायक विक्रमसेन छन्। अंशुवर्माको सांगाको अभिलेखमा पनि दूतक यिनी नै छन्। त्यहाँ उनलाई 'राजपुत्र' भनिएको छ। यसबाट विक्रमसेन कुनै राज-वंशसंग सम्बन्ध राख्ने क्षत्रिय थिए भन्ने थाहा पाइन्छ। सर्वदण्डनायक जस्तो उच्च पद यिनले पाएका र दूतकका रूपमा पनि देखिएका हुनाले राजपुत्र विक्रमसेन त्यस बेला अंशुवर्माका विश्वस्त व्यक्ति थिए भन्ने थाहा पाइन्छ।

★

# हाँडिगाउँको अंशुवर्माको अभिलेख

हाँडिगाउँको प्रसिद्ध डबलीको कुनामा यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको अभिलेख कुँदिएको भाग २९ अङ्गुल लम्बा, १७ अङ्गुल चौडा छ। यसको शिरोभागमा एकातिर शङ्ख र अर्कोतिर चक्र अङ्कित छन्। यहाँ संवत् ३० छ।

लेभीद्वारा १३ संख्याको यो रूपमा छापिएको छ। नोलीद्वारा ३५ संख्याको रूपमा यो छापिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको यसको प्रतिलिपि पाठ सच्याउन सहायक छ।

## मूलपाठ

१. (स्वस्ति कैलासकू)टभवनात्परहितनिरतप्रवृत्तितया कृतयुग-
२. ......रानुकारी भगवत्पशुपतिभट्टारकपादानुध्यातो
३. बप्पपादपरिगृहीतः श्रीमहासामन्तांशुवर्मा कुशली करिष्यमा-
४. णप्रसादांस्तन्मर्यादापणग्रहणाधिकृतांश्च वर्तमानान्भवि-
५. ष्यतश्च समाज्ञापयति विदितम्भवतु भवतां सर्वत्र राजप्रासा-[१]
६. देषु कृतप्रसादैर्मर्यादानिमित्तं यावन्तः पणा देयास्तेषाम-
७. यथोचितदानेन मा भूदुभयेषां पी(डे)ति[२] मया पूर्व्वराजानुवृ-
८. त्त्या यथोचितप्रदानाय शासनोपनिबन्ध[३]...... लिखितो यत्र
९. श्रीदेव्याः पु३ प १ अग्ने[४]: पु ३ प १ श्रीकुलदेवस्य पु ३ प १..... (पु) ३ प १ षष्ठीदे-
१०. वकुलस्य पु ३ प १ श्रीभट्टारकपादानाम्प्रत्येकं पु २५ महाबलाध्यक्ष-
११. स्य पु २५ प्रसादाधिकृतस्य पु २५ अभिषेकहस्ति(नः) पु ३ प १ अभिषे-

---

नोलीका–पाठ १. राजप्रसादेषु। २. सा... ी...। ३. ......। ४. अरो:

१२. काश्वस्य पु ३ प १ धावकगोंच्छिजाकस्य[१] पु ३ प १ भाण्डना(यक)स्य[२] पु २ प २

१३. चामरधारस्य पु २ प २ ध्वजमनुष्यस्य पु २ प २ देवकुल-नां[३] पु २

१४. प २ पानीयकर्मान्तिकस्य पु २ प २ पीठाध्यक्षस्य पु २ ..... णां पु २

१५. प २ पुष्पभुवाकवाहस्य पु २ प २ नान्द्रीशङ्खवादयोः[४] पु २५ भट-

१६. नायकस्य पु ६ प २ अश्वस्यार्घे पु ६ प २ दक्षिणद्वारस्य पु ३ प १ ....

१७. –टस्य पु १ प ४ प्रतोल्याः पु १ प ४ पश्चिमद्वारस्य पु १ प ४ आ-स्य पु–

१८. प ४ मानगृहद्वारस्य पु १ प ४ मध्यमद्वारस्य पु १ प ४ उत्तरद्वारस्य पु १ प ४

१९. सम्मार्जयिञ्चाः पु १ प ४ यदि यात्रायां विश्वसिकनायकयोः पु २०,

२०. ५ तदेवंवेदिभिरस्मत्पादप्रतिबद्धजीवनैरन्यैर्वा न कैश्चि–

२१. दयम्प्रसादोन्यथा करणीयो भविष्यद्भिरपि भूपतिभिर्गुरुकृत--

२२. प्रसादानुवर्त्तिभिरेव भाव्यमिति स्वयमाज्ञा संवत् ३० ज्येष्ठशुक्लषष्ठयाम्

# अनुवाद

कल्याण होस्। कैलासकूटभवन (दरबार) बाट अर्काको हित गर्ने बानी परेको हुनाले सत्ययुग ...अनुसरण गर्ने, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीमहासामन्त अंशुवर्माले अहिले बहाल रहेका र पछि बहाल हुनेसमेत निगाह गरिन लागेका (निगाहको भाग पाउनेहरू) र सो तोकिएका मर्यादाका पण लिने अधिकारीहरूसमेतलाई आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् –

सबै राजदरबारहरूमा निगाहपूर्वक नियुक्त गरिएकाहरूले मर्यादाको निमित्त जति पण दिनुपर्ने हो; ती ठीकसंग नदिनाले दुवैथरी (लिने र दिने) लाई मर्का नपरोस् भन्नाको लागि सरकारी कितापखानामा....पहिलेका राजाहरूले गरेबमोजिम उचित (साविकबमोजिम) दिनाको लागि मैले लेखाइराखेको छु। जसअनुसार–

श्रीदेवीलाई ३ पुराण १ पण, अग्निलाई ३ पुराण १ पण, श्रीकुलदेवतालाई ३ पुराण १ पण, षष्ठीदेवकुल (मन्दिर) लाई ३ पुराण १ पण, श्रीभट्टारक (गद्दीनशीन राजा) प्रत्येकलाई २५ पुराण, महाबलाध्यक्षलाई २५ पुराण, प्रसादाधिकृत (सनद आदि निगाहको काममा खटिएका=दूतक) लाई २५ पुराण, राज्याभिषेकको हात्तीलाई ३ पुराण १ पण, राज्याभिषेकको घोडालाई ३ पुराण १ पण, धावक (हल्करा) गोंछिजाकलाई ३ पुराण १ पण, भाण्डनायक (भँडारी) लाई २ पुराण २ पण चमरेलाई २ पुराण २ पण, निशानेलाई २ पुराण २ पण, पुजारीलाई २ पुराण २ पण,

नोलीका–पाठ १. गोंच्छिढाकस्य। २. भाण्डभा(रक)स्य ३. दे···ा नां
४. नन्दीशङ्खवादयोः पु···

पानीयकर्मान्तिक (कलधाराको पानीको बन्दोबस्त गर्ने) लाई २ पुराण २ पण, पीठ (सिंहासन) को हेरचाह गर्ने नाइकेलाई २ पुराण (२ पण) . . . लाई २ पुराण २ पण, फूल . . . . बोक्नेलाई २ पुराण २ पण, नान्दी (मङ्गल बाजा) बजाउने र शङ्ख फुँक्नेलाई २५ पुराण, भटनायक (सेनापति) लाई ६ पुराण २ पण, घोडाको मूल्यको लागि ६ पुराण २ पण, दक्षिणढोकालाई ३ पुराण १ पण, . . . . . . लाई १ पुराण ४ पण. सडकलाई १ पुराण ४ पण, पश्चिम ढोकालाई १ पुराण ४ पण, . . . लाई . . . पुराण ४ पण, मानगृहको ढोका लाई १ पुराण ४ पण, माझको ढोकालाई १ पुराण ४ पण, उत्तर ढोकालाई १ पुराण ४ पण, बढार्ने आइमाईलाई १ पुराण ४ पण, जात्रा भएको वेलामा विश्वासिक (कामको जिम्मा लिएका) र नाइकेलाई २५ पुराण दिनू।

तसर्थ यो कुरा थाहा पाई हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी) हरूले र अरू कसैले पनि यो निगाह अन्यथा नगर्नू। पछि हुने राजाहरूले पनि अघिका राजाले गरेको निगाहको ख्याल राख्नुपर्छ। यो मेरो आफ्नै आज्ञा हो ।

संवत् ३० ज्येष्ठ शुक्ल षष्ठी ।

## व्याख्या–

हाँडिगाउँको अंशुवर्माको यस अभिलेखबाट तात्कालिक राजादरबारको केही झलक पाइन्छ तथा राजदरबारका जागीरदारहरूले दर्शनभेटको रूपमा बुझाउनुपर्ने 'मर्यादापण' बारे पनि यसबाट प्रकाश पर्छ। यस कारण यस अभिलेखको महत्त्व निकै रहेछ।

यसमा राजदरबारको वर्णन सोझै परेको छैन; राजदरबारसम्बन्धी विभिन्न देवता, व्यक्ति आदिले पाउने भाग निश्चित गरी त्यसको विवरण यसमा लेखी राखिएको छ। यसो हुँदा अलि स्पष्ट छैन। तर यसै ताकाका भारतका प्रसिद्ध कवि बाणले कादम्बरीमा, हर्षचरितमा राजदरबारको जुन चित्रण गरेका छन्; सो वर्णनसँग दाँजेर पढ्यौं भने केही कुरा खुल्छन्। यसबाट अंशुवर्माको दिनचर्या आदिको केही झलक हाम्रो सामुन्ने आउँछन् ।

कादम्बरीमा राजाको दिनचर्याको वर्णन गर्दै जाँदा कवि बाणले स्नानपछि देवमन्दिरमा गई पूजा गरेको, त्यताबाट फर्की अग्निशालामा गई होम गरेको त्यताबाट फर्की भोजन गरेको उल्लेख गरेका छन् । जस्तै–

"एवञ्च क्रमेण निर्वर्त्तिताभिषेको . . . . . देवगृहमगमत् । उपरचितपशुपतिपूजनश्च निष्क्रम्य देवगृहान्निर्वर्तिताग्निकार्यः . . . . . आहारमवनिपो निवर्त्तयामास।"

हाँडिगाउँको यस अभिलेखमा शुरूमा 'श्रीदेव्याः पु ३ प १ अग्नेः पु ३ प १ श्रीकुलदेवस्य पु ३ प १' भनी सबभन्दा पहिले 'श्रीदेवीलाई भाग छुट्याइएको छ। राजोचित 'श्री' युक्त देवता लिच्छवि राजाहरूका 'इष्टदेवता' हुन् भन्ने देखिन्छ। देवीपछि 'अग्नि' लाई भाग छुट्याइएको

हुनाले बाणले कादम्बरीमा वर्णन गरे जस्तै लिच्छविकालका शासकहरू पनि पहिले इष्टदेवताको पूजा गर्थे; अनि अग्निशालामा गई केही होम गर्थे भन्ने देखिएको छ। इष्टदेवताबाहेक राजकुलमा 'कुलदेवता' पनि हुन्थे। कादम्बरीमा राजकुमार पढाइ सिद्धचाई घर फर्केको अवसरमा 'अद्य प्रसन्नाः कुलदेवताः' भनी यसको उल्लेख गरिएको छ। यस अभिलेखमा पनि इष्टदेवता सरह नै कुलदेवता-लाई पनि भाग नियत गरिएको छ। यहाँ 'कुलदेवता' को अगाडि राजोचित 'श्री' पनि लागेको छ। यसबाट राजदरबारभित्रका कुलदेवता यी हुन् भन्ने थाहा पाइन्छ।

इष्टदेवता, कुलदेवतापछि 'षष्ठीदेवकुल' को उल्लेख यस अभिलेखमा आएको छ। त्यस ताका राजदरबारभित्र षष्ठीदेवीको पूजा हुन्थ्यो भन्ने कुरा कादम्बरीबाट पनि देखिन्छ। राजकुमारको जन्म भएको खबर सुनी राजा सुत्केरीघरमा पसेको वर्णनको प्रसङ्गमा कवि बाणले षष्ठीदेवीको उल्लेख यसरी गरेका छन्–

"पार्थिवस्तु....हारिद्रद्रवविच्छुरणपिञ्जराम्बरधारिणीं भगवतीं षष्ठीदेवीं कुर्वता... अन्यानि सूतिकागृहमण्डनमङ्गलानि सम्पादयता पुरन्ध्रिवर्गेण समधिष्ठितम्.....सूतिकागृह–मपश्यत् ।"

षष्ठीदेवी मातृकाविशेष हुन्। वाचस्पत्यमा षष्ठीदेवीको परिचय यसरी दिइएको छ–

'मातृकासु पूज्यतमा सा च षष्ठी प्रकीर्तिता ।'

षष्ठीदेवकुल मध्यकालमा र वर्तमानकालमा समेत प्रतिष्ठित 'सिठी' देवताको पूर्वरूप हो भन्ने देखिएको छ। 'सिठी' पर्व राष्ट्ररक्षा आदिको दृष्टिले महत्त्वपूर्ण पर्व रहेको थियो। उपत्यकामा 'सिठी' देवताका मन्दिर अहिलेसम्म छन्। काठमाडौं जैसीदेवलनिरको 'सिठी' देवताको मन्दिर केही प्रसिद्ध छ।

राजदरबारभित्रका उपर्युक्त देवताको भाग तोकेपछि श्रीभट्टारकपादले पाउने भाग २५ पुराण यहाँ तोकिएको छ। 'श्रीभट्टारकपादानाम्प्रत्येकं पु २५, भनी यहाँ भनिएको हुनाले गद्दीनशीन राजा र उत्तराधिकारी (युवराज) समेत लिइएको बुझिन्छ। प्रत्येक भट्टारक (गद्दीनशीन) राजालाई भनी 'प्रत्येक' पद प्रयोग गरिएको हुनाले सन्मानको लागि भूतपूर्व राजाहरूलाई पनि भाग पन्छाएको हो कि भन्ने आभास पनि नपाइने होइन। तर भूतपूर्वहरूलाई समेत भाग तोक्नु अलि प्रासङ्गिक देखिदैन ।

यसपछि 'महाबलाध्यक्ष'लाई भाग नियत गरिएको छ। उनले पाउने भाग गद्दीनशीनसरह नै २५ पुराण छ। 'बल' शब्दले फौजलाई बुझाउँछ। फौजका सबभन्दा माथिल्लो दर्जाका अधिकारी प्रधानसेनापति उहिले 'महाबलाध्यक्ष' कहलाउँथे। यहाँ महाबलाध्यक्षलाई राजासरह भाग तोकिएको हुनाले लिच्छविकालमा महाबलाध्यक्ष पद महत्त्वपूर्ण हुन्थ्यो भन्ने थाहा पाइन्छ। अर्को कुरा-राजदरबारसंग सोझै सम्बन्ध रहने व्यक्तिको प्रसङ्गमा यहाँ महाबलाध्यक्षको उल्लेख आएको

हुनाले प्रधान सेनापति पनि राजदरबारभित्रै रहन्थे भन्ने देखिन्छ। उता चीनिया वृत्तान्तमा दरबारभित्रै हजारौं सैनिक रहने प्रबन्ध थियो भन्ने उल्लेख परेको पाइन्छ। यस अभिलेखबाट पनि उक्त कुराको केही पुष्टि हुन्छ।

महाबलाध्यक्षपछि 'प्रसादाधिकृत' लाई भाग तोकिएको छ। उनलाई पनि राजासरह नै २५ पुराण दिइएको छ। यसबाट यो पनि महत्त्वपूर्ण पद थियो भन्ने स्पष्ट छ। 'प्रसादाधिकृत'पदले कुन अधिकारीलाई बुझाएको हो, यो विचारणीय छ। राजाद्वारा निगाहपूर्वक जनतालाई गरिदिएको व्यवस्थालाई त्यस वेला 'प्रसाद' भनिन्थ्यो। यस वेलाका अभिलेखमा सर्वत्र यसको उल्लेख पाइन्छ। "शिलापट्टकेन वः प्रसादः कृतः, भाविभिरपि भूपतिभिः पूर्वराजकृतप्रसादानुवर्त्तिभिर्भवितव्यम्; मनसापि प्रसादातिक्रमसाहसाध्यवसायो न कर्तव्यः" इत्यादि। राजाबाट भएको यस्तो 'प्रसाद' जनतासम्म पुऱ्याउने अधिकारी दूतक कहलाउँथे। यहाँ 'प्रसादाधिकृत' भनी दूतकलाई भनेको देखिन्छ। दूतक पदमा यही नै व्यक्ति नियुक्त हुनुपर्छ भन्ने थिएन; राजाका विश्वासप्राप्त विभिन्न पदाधिकारी दूतक बनाइएका देखिन्छन्। दण्डनायक, महादण्डनायक, प्रतिहार, महाप्रतिहार, महाबलाध्यक्ष, वार्त्त, वार्त्तपुत्र, राजपुत्र, महासामन्त आदि अनेक पदाधिकारी दूतक बनाइएका देखिएका छन्। पछि पछि त दूतक पदमा 'युवराज' नियुक्त गरिने चलन चलेको थियो। यसबाट 'दूतक' पद महत्त्वपूर्ण थियो भन्ने स्पष्ट छ। यसो विचार गर्दा यहाँ 'प्रसादाधिकृत' भनी दूतक पदमा नियुक्त अधिकारीलाई नै लक्ष्य गरेको देखिन्छ। यसबाट कुनै पदाधिकारी दूतक नियुक्त गरिएपछि ती व्यक्ति राजदरबारमै रहन्थे कि भन्ने पनि अनुमान हुन्छ।

लिच्छविकालमा राज्याभिषेक धूमधामसंग हुन्थ्यो भन्ने देखिएको छ। राज्याभिषेक गर्दा सिन्दूरजात्रा गरिन्थ्यो; त्यस वेला चढिने हात्ती घोडा पछिसम्म पनि सन्मानसाथ राखिन्थे भन्ने यस अभिलेखबाट थाहा पाइन्छ। यहाँ 'अभिषेकहस्ती' र 'अभिषेकाश्व' ले पाउने भाग नियत गरिएको छ।

यहाँ भाग पाउनेहरूको सूचीमा 'धावकगेञ्च्छिम्जाक'ले ३ पुराण १ पण पाउने कुरा लेखिएको छ। सरकारी चिठीपत्र लाने ल्याउने व्यक्तिलाई 'धावक' (हल्करा) भनिन्थ्यो। छिटो छिटो दौडी यो काम तामेल गरिने हुनाले 'धावक' कहलाएको हो। यहाँ धावकपदको पूर्वप्रचलित विशिष्ट नाम 'गेञ्च्छिजाक' दिइएको छ। यो शब्द संस्कृत भाषाको होइन; किरातपरिवारको भाषाको हो। यसबाट गेञ्च्छिम्जाक कहिने धावक (हल्करा) को पद किरातकालदेखि नै प्रचलित भई आएको देखिन्छ।

भाण्डनायक— राजदरबारको भण्डारको देखरेख गर्ने अधिकारी 'भाण्डनायक' कहलाउँथे। भाण्डनायक पद लिच्छविकालमा त्यति ठूलो देखिंदैन। किनभने यहाँ भाण्डनायकलाई २ पुराण २ पण मात्र भाग छुट्याइएको छ। मध्यकालमा चाहिं भण्डारीको सन्मान अलि बढी रहेको थियो।

चामरधार— राजकीय चिह्नहरूमा चमर पनि एक मानिएको छ। राजाको आसपासमा चमर हम्कनेहरू रहन्थे। हर्षचरित र कादम्बरीमा यसको वर्णन धेरै ठाउँमा आएको छ। 'चामरधार' भनी यस्तै चमर हम्कने व्यक्तिलाई लक्ष्य गरिएको हो। चामरधारले सन्मानस्वरूप पाउने दस्तूर २ पुराण २ पण यहाँ तोकिएको छ। मध्यकालमा पनि राजदरबारमा चमर हम्कने व्यक्ति हुन्थे। गोपालवंशावलीमा राजदरबारको वर्णनको प्रसङ्गमा 'चामरग्राह' को उल्लेख आएको छ।

राजचिह्नमा चमरका साथै छत्र पनि एक मुख्य मानिन्थ्यो। यहाँ छत्र लिने अधिकारीको चाहिं उल्लेख आएको छैन। लिच्छविकालका अरू अभिलेखमा पनि राजच्छत्रको उल्लेख आएको छैन। लिच्छविकालपछिका राजा जयदेवको राज्याभिषेकको वर्णनमा राजसामग्रीको रूपमा हीरा जडेको छत्र, सुनौला दण्ड भएको छत्र आदि अनेक किसिमका छत्रको उल्लेख आएको छ। तर हाँडिगाउँको यस अभिलेखमा भने छत्र लिने व्यक्तिको उल्लेख आएको छैन।

ध्वजमनुष्य—राजकीय ध्वजा बोक्ने मानिसलाई 'ध्वजमनुष्य' भनिएको हो। ध्वजमनुष्य-लाई २ पुराण २ पण भाग नियत गरिएको छ। लिच्छवि राजा मानदेवको एक थरी 'श्रीमानाङ्क' मुद्रामा सिंहले 'ध्वज' समातिरहेको दृश्य अङ्कित छ। यसबाट लिच्छलिकालको राजकीय ध्वज कस्तो थियो भन्ने संकेत पाइन्छ। नेपालको वर्तमान राष्ट्रिय झण्डाको पूर्वरूप सो थियो भन्ने देखिन्छ।

पानीयकर्मान्तिक— कारखानाविशेषमा काम गर्ने कालिगडविशेषलाई 'कर्मान्तिक' भनिन्थ्यो। पानीविषयको काम गर्ने कर्मान्तिक 'पानीयकर्मान्तिक' कहलाउँथ्यो। यसै गरी वस्त्रकर्मान्तिक, आकरकर्मान्तिक आदि हुन्थे। कवि बाणले कादम्बरी, हर्षचरितमा पानीयकर्मान्तिकको उल्लेख ठाउँठाउँमा गरेका छन्। वस्त्रकर्मान्तिक आदिको उल्लेख पनि तिनमा परेको छ।

चीनिया राजदूतले कैलासकूटभवनको वर्णन गर्दा त्यसमा लागेका नल, मकर, मकरको मुखबाट फोहरा जस्तो गरी निस्कने पानीको पनि चर्चा गरेका छन्। यस्तो बन्दोबस्त मिलाउन विशेष कालिगडीको आवश्यकता पर्नु स्वाभाविक छ। यसै हुँदा पानीयकर्मान्तिक दरबारमा रहेको देखिन्छ। यस अभिलेखमा पानीयकर्मान्तिकलाई २ पुराण २ पण सन्मानस्वरूप भाग नियत गरिएको छ। यसबाट चीनिया राजदूतले गरेको कैलासकूटभवनको वर्णनको पुष्टि केही अंशमा हाम्रो अभिलेखबाट पनि भएको छ।

राजदरबारमा राजाको स्नानको लागि 'स्नानगृह' विशेष रूपमा बनेको हुन्थ्यो। कवि बाणले राजदरबारको स्नानगृहको सुन्दर वर्णन कादम्बरीमा गरेका छन्। स्नानगृहको रेखदेख पनि पानीयकर्मान्तिकले गर्दथे।

पीठाध्यक्ष— यसपछि 'पीठाध्यक्ष'लाई २ पुराण . . . पण तोकिएको कुरा यहाँ परेको छ। राजासनलाई 'पीठ' भनिन्थ्यो। पीठ अनेक किसिमका हुन्थे। मुख्य पीठ 'सिंहासन' कहिन्थ्यो।

थानकोटको अभिलेखमा 'सिंहासनाध्यासिकुलकेतु' भन्ने विशेषण लिच्छवि राजा भीमार्जुनदेवमा रहेको छ। यसबाट त्यस वेला सिंहासन रहन्थ्यो भन्ने थाहा पाइन्छ। दरबारभित्रका विभिन्न मण्डपहरूमा राजा बस्ने 'पीठ' रहन्थे। स्नानगृहमा समेत विशेष किसिमको पीठ रहन्थ्यो। यस्तै राजकीय पीठहरूको बन्दोबस्तको लागि 'पीठाध्यक्ष' नियुक्त भएको देखिन्छ।

अनि यस अभिलेखमा 'पुष्पभुवाकवाह' नामक पदाधिकारीको उल्लेख आएको छ। त्यसताका राजकीय शिरपेच फूलद्वारा पनि सिंगार्ने चलन थियो। साथै दरबारमा पनि फूलको सजावट हुन्थ्यो। यस कारण पुष्पवाह नामक अधिकारी नियुक्त भएको बुझिन्छ। यहाँ पुष्पको साथ 'भुवाक' शब्द पनि रहेको छ। यसको मतलब अहिले बुझिएन। लेभीद्वारा सवाक पाठ छापिएको छ। मूलसंग रुजू गरी हेर्दा 'भुवाक' पाठ देखियो।

नान्दीवाद– यसपछि नान्दीवाद र शङ्खवाद दुइ अधिकारीलाई गरी निकै ठूलो भाग २५ पुराण छुट्याइएको छ। प्राचीन परम्पराअनुसार राजाको दैनिक कार्यक्रम नान्दी (मङ्गलबाजा, मङ्गलगान) द्वारा शुरू गरिन्थ्यो। यस कुराको उल्लेख प्राचीन ग्रन्थमा पाइन्छ। लिच्छवि राजाहरू पनि त्यही परम्पराअनुसार दैनिक कार्यक्रम नान्दीबाट शुरू गर्दा रहेछन् भन्ने कुरा यहाँ 'नान्दीवाद' नामक अधिकारी नियुक्त गरिएकोबाट थाहा पाइन्छ।

नान्दीको रूपमा गाना पनि गाइन्थ्यो; यसको लागि विशेष मङ्गल बाजा पनि बजाइन्थ्यो। बाणले कादम्बरीमा नान्दीबाजा बजाइएको वर्णन गरेका छन्। यहाँ पनि 'नान्दीवाद' शब्दको प्रयोग गरिएको हुनाले लिच्छविकालमा पनि नान्दीको लागि विशेष बाजा बजाइन्थ्यो भन्ने थाहा पाइन्छ।

शङ्खवाद– राजदरबारमा विशेष उपलक्ष्यमा शङ्ख फुकिन्थ्यो। राजकीय प्रस्थान आदिको सूचना शङ्खध्वनिद्वारा गरिन्थ्यो। यस कुराको उल्लेख कादम्बरी, हर्षचरितमा ठाउँ ठाउँमा आएको छ। लिच्छविकालमा पनि यो चलन थियो। यस कारण शङ्ख फुँक्ने अधिकारी नै नियुक्त भएको देखिन्छ।

भटनायक– यसपछि 'भटनायक'लाई ६ पुराण २ पण भाग नियत गरिएको छ। भटनायक भनेको सेनापति हो। राजदरबारभित्रै सैनिकहरू रहन्थे भने चर्चा पहिले गरिसकेको छ। तर यहाँ उल्लिखित भटनायक राजाका अङ्गरक्षक सैनिकहरूका नाइके हुन् भन्ने देखिन्छ। चीनिया राजदूतले राजाका आसपासमा रहने शस्त्रधारी सैनिकहरूको चर्चा गरेका छन्। यसो हुनाले राजदरबारका अरू अधिकारीसरह सन्मानस्वरूप मर्यादापण छुट्याइएको देखिन्छ।

राजदरबारमा विभिन्न द्वार थिए; विभिन्न द्वारमा विभिन्न विभाग रहन्थे भन्ने चर्चा पहिले गरिसकेको छ। त्यस कुराको पुष्टि यस अभिलेखले गर्दछ। यसमा राजदरबारका दक्षिणद्वार, पश्चिमद्वार, उत्तरद्वार र मध्यद्वारलाई भाग तोकिएको छ। मानगृहद्वारको पनि बेग्लै भाग नियत

गरिएको छ। द्वारहरूमा 'दक्षिणद्वार' अलि विशिष्ट थियो भन्ने यताबाट बुझिन्छ। यहाँ अरू द्वारभन्दा अलि बढी दक्षिणद्वारलाई तोकिएको छ।

राजदरबारभित्रको प्रतोली (रथ हिँड्ने मूल सडक) लाई पनि १ पुराण ४ पण भाग छुट्याइएको छ। दरबारमा बढार्ने आइमाईलाई पनि १ पुराण ४ पण दिइएको छ।

यात्रा भएको वेलामा मात्र पाउने गरी विश्वासिक र यात्राको नायकलाई गरी २० पुराण दिने व्यवस्था पनि यसमा परेको छ। मछिन्द्रनाथको रथयात्रा आदिमा यात्राका नाइके अहिलेसम्म पनि नियुक्त गरिएको पाइन्छ। यसको मूल लिच्छविकालसम्म पुगेको रहेछ।

यस अभिलेखमा 'सर्वत्र राजप्रासादेषु कृतप्रसादैर्मर्यादानिमित्तं यावन्तः पणा देयाः' भन्ने वाक्य परेको छ। यसबाट यसताका राजदरबार अनेक थिए भन्ने बुझिन्छ। मानगृह र कैलासकूटभवन यी दुइ दरबारको नामोल्लेख त यही अभिलेखमा परेको छ। चाँगुको अभिलेखमा दक्षिणराजकुल र पुण्डिराजकुलको उल्लेख आएको छ। हालै हनूमान्ढोकानिर पाइएको अभिलेखबाट त्यहाँ पनि एक प्राचीन लिच्छविदरबार थियो भन्ने थाहा पाइन्छ। त्यस अभिलेखमा 'चिरन्तनं लिच्छविराजकारितं पुरातनैर्वृत्तिभटैरुपेक्षितम्.....भवनं' भन्ने उल्लेख आएको छ। यसरी नयाँ र पुराना गरी यस वेला राजदरबार अनेक थिए भन्ने देखिन्छ।

राजदरबारसंग सम्बन्ध राख्ने विभिन्न देवता, विभिन्न व्यक्ति आदिले पाउने भाग नियत गरिएको यो अभिलेख अवश्य पनि राजदरबारको आसपासमा राखिएको हुनुपर्छ भन्ने तर्क स्वभावतः उठ्छ। यसबाट कैलासकूटभवन यतै हाँडिगाउँतिरै थियो कि भन्ने अनुमान हुन्छ। हाँडिगाउँ भेकमा अंशुवर्माको नामाङ्कित केही ईंट पनि पाइएका छन्। पुरातत्त्वविभागको संग्रहमा ती छन्। यसबाट पनि उक्त अनुमान गर्ने आधार प्राप्त भएको छ। वंशावलीमा चाहिं अंशुवर्माको दरबार देउपाटन मध्यलखुमा थियो भनी लेखिएको छ। यसको चर्चा पहिले गरिसकेको छ।

यस विषयमा विचारणीय कुरा अर्को पनि छ। हाँडिगाउँ–डबलीमा रहेको यो सनदपत्रमा दूतकको उल्लेख परेको छैन। सोझै अंशुवर्माद्वारा नै यो जारी गरिएको छ। यसै गरी यो अभिलेखसंगै रहेको अर्को अभिलेखमा पनि दूतकको चर्चा छैन। राजदरबारनिरै नै यी अभिलेख राख्न लाइएका हुनाले यहाँ दूतकको आवश्यकता नरहेको बुझिन्छ। यसबाट पनि कैलासकूटभवन हाँडिगाउँभेकमै थियो कि भन्ने देखिन्छ।

जे होस्; कैलासकूटभवन कहाँ थियो भन्ने कुराको खोजतलाश यस्तै कुराको आधारमा गर्दै जानु अत्यन्त जरूरी भएको छ जस्तो मलाई लाग्छ। जसबाट नेपालको एक गौरवपूर्ण कुरामा प्रकाश पर्न सकोस्।

*

# भट्टुवालको अंशुवर्माको अभिलेख

टिस्टुङ्ग गाउंबाट एक पाउ जति उत्तर–पूर्वमा भट्टुवाल भन्ने ठाउँ छ। त्यहाँ कोलटार भन्ने खेतमा यो शिलापत्र रहेको छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर फूलबुट्टासहित शङ्ख अङ्कित छन्। यसको अभिलेख कुँदिएको भाग २७ अङ्गुल लम्बा, २३ अङ्गुल चौडा छ। असुरक्षित अवस्थामा रहेको हुनाले यो बीच बीचमा खिइएको छ। टिस्टुङ्गको तल आउने अभिलेख र यसको विषय उही छ। यसो हुनाले त्यसको आधारमा यसको पाठ पूरा गर्न सकिएको छ।

'अभिलेख–प्रकाश' को १३ पृष्ठमा श्रीहेमराज शाक्यद्वारा यसको अलिकता अंश छापिएको छ। 'टिस्टुङ्ग–चित्तलाङभेकको ऐतिहासिक सामग्री' का १६–१७ पृष्ठमा प्रा. हेमन्त राणा र मैले यो छपाएका छौं।

## मूलपाठ

१. स्वस्ति नैपालेभ्यः सकलजगद्विसारिकीर्त्तिरनतिवृत्तार्य्यमर्य्या-
२. दासेतुर्भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानु-
३. ध्यातः श्रीमहासामन्तांशुवर्म्मा कुशली कुण्डशुल्कतापनाधिकृता-
४. न्पुरतःकृत्वाः पश्चिमद्वारप्रतिबद्धविषयपतितदायुक्तकशौल्किक-
५. गौल्मिकादीङकुशलमाभाष्य समाज्ञापयति विदितम्भवतु भव-
६. तां यथास्माभिरेषां...... नग्रामीणानां लोहचामरमृगरो-
७. मकस्तूरिकाकृतताम्रभाण्डान्यनिर्हार्य्याण्यवास्य तदन्यद्रव्याण्या-
८. दायोपक्रयात्र्थमितो निर्ग्गच्छताम्प्रसाद्धचोपक्रयञ्चान्तः प्रविश-
९. तां शुल्कतापनादियथादेयम्प्रतिमुक्तमेवंवेदिभिरस्मत्प्र-
१०. तिबद्धजीवनैरन्यैर्वा न कैश्चिदप्ययम्प्रसादोन्यथा कार्य्यो
११. यस्त्वेतामाज्ञामतिवर्त्यान्यथा प्रवर्तिष्यते तमहन्नरपतिकृत-

१२. मर्य्यादाभेदिनन्न मर्षयिष्यामि भविष्यद्भिरपि भूपतिभिः
१३. सुकृतविपाकोपनत...... मिच्छद्भिर्ग्गुरुकृतप्रसादा-
१४. नुयायिभिरेव भवितव्यमिति समाज्ञापना दूतकोत्र महाराज
१५. विप्रवर्म्मा संवत् ३१ प्रथम (पौष)...पञ्चम्याम्

## अनुवाद

नेपालीहरूलाई कल्याण होस्। सारा संसारमा कीर्ति फैलिएका, आर्यमर्यादा (वर्णाश्रमव्यवस्था) का बन्देजलाई ननाघेका, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, श्रीमहासामन्त अंशुवर्माले कुण्ड शुल्क तापनका अधिकृतलगायत पश्चिमद्वारसंग सम्बन्ध राख्ने विषयपति तदायुक्तक शौल्किक गौल्मिक आदिलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस्।

अनिर्हार्य (सरकारी स्वीकृतिविना निकासी गर्न नपाइने) फलाम, चमर, ऊन, कस्तूरी, तामाका भाँडा–कुँडाहरूलाई छोडेर अरू वस्तुहरू लिई बिक्रीको लागि यताबाट गएका र बिक्री गरिसिद्ध्याई फर्केका.....न ग्रामका बासिन्दाहरूलाई साबिकबमोजिम बुझाउनुपर्ने शुल्क तापनि आदि दस्तूर हामीबाट माफी गरिदिइएको छ।

यो कुरा थाहा पाएर हाम्रो तर्फबाट जीविका चलाउनेहरूले (सरकारी कर्मचारीहरूले) वा अरू कसैले पनि यो निगाह अन्यथा नगर्नू। जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला; राजाले बाँधेको स्थिति बन्देज नाघ्ने त्यसलाई हामी सह्नेछैनौं। पछि हुने राजाहरूले पनि असल कर्मको असल फल चाहेर अघिका मान्यजनले गरेको निगाह थाम्नुपर्छ। यस्तो आज्ञा छ।

यहाँ दूतक महाराज विप्रवर्मा। संवत् ३१ प्रथम (पौष)...पञ्चमी।

[७४ संख्या]

# टिस्टुङ्गको अंशुवर्माको अभिलेख

टिस्टुङ्ग गाउँमा पाठशालाको सामुन्नेको चौरमा यो शिलापत्र रहेको छ। यसको शिरोभागको बीचमा कलश र दायाँ बायाँ चक्र र शङ्ख अङ्कित छन्। यसको अभिलेख कुँदएको भाग २६ अङ्गुल लम्बा, १९ अङ्गुल चौडा छ। यसको तल्लो भाग खण्डित छ।

'अभिलेख–प्रकाश' को ६–१० पृष्ठमा श्रीहेमराज शाक्यद्वारा यो छापिएको छ। मूलबाट पढी धेरै पाठ सच्याई 'टिस्टुङ्ग–चितलाङ्भेकको ऐतिहासिक सामग्री'को १५–१६ पृष्ठमा हेमन्त राणा र मैले पनि यो छपाएका छौं।

## मूलपाठ

१. स्वस्ति नैपालेभ्यः सकलजगद्विसारिकीर्त्तिरन-
२. तिवृत्तार्य्यमर्य्यादासेतुर्भगवत्पशुपतिभट्टा-
३. रकपादानुगृहीतो बप्पपादानुद्ध्यातः श्रीमहासा-
४. मन्तांशुवर्मा कुशली कुण्डशुल्कतापनाधिकृता-
५. न्पुरतःकृत्वा पश्चिमद्वारप्रतिबद्धविषयप-
६. तितदायुक्तकशौल्किकगौल्मिकाडीङ्कुशलमाभाष्य
७. समाज्ञापयति विदितम्भवतु भवतां यथास्मा-
८. भिरेषां तेस्तुङ्गग्रामीणानाम् लोहचामरमृग–
९. रोमकस्तूरिकाकृतताम्रभाण्डान्यनिर्हार्य्याण्यत्रास्य
१०. तदन्यद्रव्याण्यादायोपक्रयार्त्थमितो[1] निर्गच्छता-
११. म्प्रसाद्धयोपक्र(य)ञ्चान्तः प्रतिशतां शुल्कतापनादियथा-
१२. देयम्प्रतिमुक्तमेवंवेदिभिरस्मत्प्रतिबद्धजीवनै-
१३. रन्यैर्व्वा न कैश्चिदप्ययम्प्रसादोन्यथा कार्य्यो यस्त्वे-
१४. तामाज्ञामतिवर्त्त्यान्यथा प्रवर्तिष्यते तमहन्नरप-
१५. (ति)कृतमर्य्यादाभेदिनं न मर्षयिष्यामि भविष्यद्भि-
१६. (रपि भू)पतिभिः सुकृतविपाकोपनत......
१७. .......... .......... ..........

## अनुवाद

नेपालीहरूलाई कल्याण होस्। सारा संसारमा कीर्ति फैलिएका, आर्यमर्यादा (वर्णाश्रमव्यवस्था) का बन्देजलाई ननाघेका, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीमहासामन्त अंशुवर्मालि कुण्ड शुल्क तापनका

---

१. कुँद्नेको भ्रमवश यहां 'य' बढी र एघाह्रौं पङ्क्तिमा 'य' छुटाई कुँदिएको छ।

अधिकृतलगायत पश्चिमद्वारसंग सम्बद्ध विषयपति, तदायुक्तक, शौल्किक गौल्मिक आदिलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस।

अनिर्हार्य (सरकारी स्वीकृतिविना निकासी गर्न नपाइने) फलाम, चमर, ऊन, कस्तूरी, तामाका भाँडाकुँडाहरूलाई छोडेर अरू वस्तुहरू लिई बिक्रीको लागि यताबाट गएका र बिक्री गरिसिद्धचाई फर्केका तेस्तुङ्ग (टिस्टुङ्ग) ग्रामका बासिन्दाहरूलाई साबिकबमोजिम बुझाउनुपर्ने शुल्क तापन आदि दस्तूर हामीबाट माफी गरिदिइएको छ।

यो कुरा थाहा पाएर हाम्रो तर्फबाट जीविका चलाउनेहरूले (सरकारी कर्मचारीहरूले) वा अरू कसैले पनि यो निगाह अन्यथा) नगर्नू। जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला; राजाले बाँधेको स्थिति बन्देज नाघ्ने त्यसलाई हामी सहनेछैनौं। पछि हुने राजाहरूले पनि असल कर्मको फलअनुसार....... .... ....

## व्याख्या–

भट्टुवाल र टिस्टुङ्गका अभिलेख एकै बेहाराका छन्। यस कारण व्याख्या यहाँ एकै ठाउँमा दिइएको छ। टिस्टुङ्गको अभिलेखमा संवत् भएको भाग खण्डित छ। तर भट्टुवालको अभिलेखमा संवत् ३१ छ। भट्टुवाल र टिस्टुङ्गका यी अभिलेखको बेग्लै महत्त्व रहेको छ। अंशुवर्माको आदर्श, बाहिरतिर फैलिंदै गएको उनको यश कीर्तिबारे यी अभिलेखबाट केही थाहा पाइन्छ। विशेष गरेर अंशुवर्माको आर्थिकनीतिबारेमा यी अभिलेखले महत्त्वपूर्ण प्रकाश पारेका छन्। साथै त्यस वेलाको प्रशासनको ढाँचाबारेमा पनि यी अभिलेखले केही प्रकाश पारेका छन्।

कौटल्यले 'वर्णाश्रमव्यवस्था' लाई 'आर्यमर्यादा' अर्थात् आर्यहरूको विशेष स्थितिबन्देज भन्ने संज्ञा दिएका छन्। कौटल्यको विचारधाराको प्रभाव अंशुवर्मामा परेको हुँदा अंशुवर्माको दृष्टिमा पनि वर्णाश्रमव्यवस्था आदर्श व्यवस्था ठहरियो। यी अभिलेखमा अंशुवर्माले 'अनतिवृत्तार्य–मर्य्यादासेतु' भनी लेखाउन लगाई आफूलाई वर्णव्यवस्थाका पूरा समर्थकका रूपमा देखाएका छन्। वर्णव्यवस्थासम्बन्धी अंशुवर्माको नीतिको चर्चा माथि पनि गरिसकेको छ।

अनेक शास्त्रको अध्ययन गर्ने विद्वान्, प्रतिभाशाली व्यक्ति हुँदा तथा नेपालराष्ट्रको शासनाधिकार क्रमशः आफ्नो हातमा पारी जनतालाई सुखी र सन्तुष्ट पारी राम्ररी शासन चलाउन सकेका हुनाले अंशुवर्माको प्रसिद्धि विदेशमा समेत फैलिन थालेको थियो। यस कुराको संकेत यी अभिलेखमा परेको 'सकलजगद्विसारिकीर्ति' पदले दिन्छ।

त्यस वेलाको प्रशासनव्यवस्थाअनुसार राष्ट्र मुख्य गरी दुइ खण्डमा विभक्त थियो; एक सोझै केन्द्रद्वारा शासन गरिने 'देश' अर्को केन्द्रको अधीनमा रही सामन्तद्वारा शासन गरिने 'देश'। पश्चिममा गोरखासम्मको प्रदेशमा केन्द्रद्वारा नै सोझै शासन गरिन्थ्यो भन्ने कुरा गोरखामा

पाइएका अभिलेखबाट थाहा पाइएको छ । कालिगण्डकोपारि मात्र सामन्तराज्यको उल्लेख पाइएको छ। यसै गरी पूर्वमा दोलखासम्म सोझै केन्द्रद्वारा नै शासन गरिन्थ्यो कि भन्ने देखिएको छ।

विषयपति– केन्द्रद्वारा सोझै शासन गरिने 'देशमा' अनेक विषय(जिल्ला) हरू थिए। प्रत्येक विषयमा स्थानीय प्रशासन चलाउन एक विषयपति नियुक्त हुन्थे। यो कुरा भट्वाल टिस्टुङ्गका यी अभिलेखबाट थाहा पाइएको छ। यी अभिलेखमा भट्वाल, टिस्टुङ्गका विषयपति, तदायुक्तक, शौल्किक, गौल्मिक आदि सरकारी अधिकारीहरूलाई सम्बोधन गरिएको छ ।

'देश'लाई अनेक विषयमा विभक्त गरी त्यहाँ विषयपति नियुक्त गरी शासन चलाउने चलन तात्कालिक भारतमा पनि प्रचलित थियो। भारतका अभिलेखहरूमा विषयपतिको उल्लेख धेरै ठाउँमा आएको छ। यसै गरी नेपालमा पनि विषयपति नियुक्त गरिन्थे भन्ने कुरा यी अभिलेख-बाट सिद्ध भएको छ। यसबाट लिच्छविकालको शासनव्यवस्थामा महत्त्वपूर्ण प्रकाश परेको छ ।

तदायुक्तक– एक जना ठूला अधिकारी राजाद्वारा नियुक्त भएपछि तलका अरू आवश्यक कर्मचारीहरू ती ठूला अधिकारीद्वारा नै नियुक्त गर्ने चलन थियो। यहाँ 'तदायुक्तक' भनी टिस्टुङ्गमा नियुक्त विषयपतिद्वारा नियुक्त गरिएका अरू सरकारी कर्मचारीलाई लक्ष्य गरेको बुझिन्छ ।

शौल्किक– शुल्क (भन्सार) उठाउन ठाउँ–ठाउँमा 'शुल्कशाला' रहेका हुन्थे। शुल्क उठाउने काममा नियुक्त अधिकारी 'शौल्किक' कहलाउँथे। यी अभिलेखबाट भट्वाल टिस्टुङ्गमा पनि यस बेला शुल्कशाला थियो भन्ने थाहा पाइन्छ ।

गौल्मिक– सुरक्षाको लागि ठाउँ–ठाउँमा 'गुल्म' (चौकी) पनि रहेका हुन्थे । गुल्ममा नियुक्त अधिकारी 'गौल्मिक' कहलाउँथे । बाटो–घाटोमा व्यापारीहरूको सुरक्षाको काम पनि 'गुल्म' ले गर्ने हुनाले यस्ता चौकीहरूले पनि व्यापारीहरूसंग केही कर उठाउँथे। सो कर 'गुल्म' नै कहलाएको थियो । कौटलीय अर्थशास्त्रमा 'पण्याध्यक्ष' प्रकरणमा व्यापारीहरूसंग लिइने करको पङ्क्तिमा 'गुल्म' को पनि उल्लेख आएको छ। (कौ. अ. २।१६) दिव्यावदानमा राजा कनकवर्णले व्यापारीहरूसंग कर नलिने विचार गर्दा 'यन्न्वहं सर्ववणिजोऽशुल्कान् अगुल्मान् मुञ्चेयम् = सारा व्यापारीहरू उपर शुल्क र गुल्म माफी गरिदिन्छु' भनी बोलेका छन्। यसबाट व्यापारीहरूसंग 'गुल्मकर' उठाइन्थ्यो भन्ने थाहा पाइन्छ। यी अभिलेखबाट यसबेला भट्वाल टिस्टुङ्गमा पनि 'गुल्म' (सुरक्षाचौकी) थियो भन्ने थाहा पाइन्छ।

उहिले भारततिर जाने बाटोमध्ये टिस्टुङ्ग भई जाने बाटो पनि एक चल्तीको बाटो हुनाले यस भेकमा शुल्कशाला, गुल्म आदि रहेका देखिन्छन्। बाटाको यही सुविधाले गर्दा भट्वाल, टिस्टुङ्गका बासिन्दाहरूमा व्यापार–व्यवसाय लिनेहरू पनि धेरै भएको यस अभिलेखबाट बुझिन्छ।

अंशुवर्माको व्यापारनीति–किरातकालदेखि नै नेपाली ऊनको विदेशमा ठूलो माग थियो।

नेपालमा बनेका 'भिङ्गिसी' र 'अपसारक' कहलाएका सुन्दर दुइ थरी कपडा अन्तका भन्दा असल छन् भनी कौटल्यले 'कोशप्रवेश्यरत्नपरीक्षा' प्रकरणमा लेखेका छन्† । भारतका व्यापारीहरू ऊन किन्न नेपालमा आएको उल्लेख मूलसर्वास्तिवादविनयमा परेको छ* । नेपाली कस्तूरी, चमरले पनि विदेशमा ख्याति पाएका थिए । यसैले नेपाली कस्तूरी, चमरको वर्णन भारतीय वाङ्मयमा अनेक ठाउँमा आएको छ । यसै गरी नेपाली फलाम, तामा पनि असल कहलाएका थिए । 'युक्तिकल्पतरु' नामक ग्रन्थमा नेपाली तरवारको श्रेष्ठताको वर्णन परेको छ‡ ।

यसो हुनाले फलाम, चमर, ऊन, कस्तूरी, तामाका भाँडाकुँडा आदि पहिलेदेखि नै प्रशस्त मात्रामा बाहिर निकासी गरिन्थे । यी पदार्थको निकासीमा सरकारी नियन्त्रण पनि राखिएको थियो । उक्त पदार्थलाई यी अभिलेखमा 'अनिर्हार्य्य' (सरकारी स्वीकृतिविना निकासी गर्न नपाइने) घोषित गरिएको छ । प्रशस्त मात्रामा निकासी हुने यी पदार्थबाहेक अरू पदार्थको पनि निकासी होस्; विदेशसंग नेपालको व्यापार अझ बढोस् भन्ने नीति अंशुवर्माको थियो । यसै हुँदा उनले उक्त अनिर्हार्य्य पदार्थबाहेक अरू पदार्थको निकासीमा भन्सार माफी गरिदिएको कुरा यी अभिलेखमा परेको छ । यसबाट अंशुवर्मा 'अर्थविशेषज्ञ' पनि थिए भन्ने देखिएको छ ।

टिस्टुङ्गको अभिलेखको तल्लो भाग अलिकता खण्डित छ । यसो हुनाले त्यसमा दूतक आदि अहिले छैनन् । भटुवालको अभिलेखको चाहिं तल्लो भाग खण्डित छैन । त्यसमा दूतक महाराज विप्रवर्मा रहेको छ । शिवदेव अंशुवर्माका धर्मस्थली, बूढानीलकण्ठ, टोखाको अभिलेखमा पनि विप्रवर्म्मा गोमी दूतकका रूपमा देखिएका छन् । तर त्यहाँ विप्रवर्माको अगाडि कुनै विशेष पद रहेको छैन । यहाँ भने उनको पदवी 'महाराज' रहेको छ । अंशुवर्माले आफ्ना विश्वासपात्र व्यक्ति विप्रवर्म्मालाई पछि 'महाराज' पदवीले विभूषित पारेको यताबाट बुझिन्छ ।

भटुवालभेकमा पनि लिच्छविकालमा टिस्टुङ्गमा जस्तै भिन्नै बस्ती रहेछ । सो बस्ती पनि भारत जाने बाटोमा परेको हुनाले टिस्टुङ्गवासीलाई जस्तै यहाँका बासिन्दालाई पनि उही व्यापार सुबिधा दिइएको रहेछ । तर अहिले भटुवालभेकमा पुरानो बस्ती छैन । पछि कुनै कारणवश सो बस्ती नष्ट भएको बुझिन्छ ।

---

† "पिच्छिलमार्द्रमिव च सूक्ष्मं मृदु च श्रेष्ठम् ॥१०५॥ अष्टप्लोतिसङ्घात्या कृष्णा भिङ्गिसी वर्षवारणमपसारक इति नैपालकम् ॥१०६॥" (२ अधि. ११ अ.)

(चिल्लो, अतिमिहिन र नरम ऊनी कपडा उत्तम हुन्छ । आठ टुक्रा गांसी बनाइएको, कालो, वर्षाबाट बच्न समेत काम लाग्ने भिङगिसी र अपसारक भनी प्रसिद्ध नेपालमा बनेका ऊनी कपडा उत्तम छन् ।)

* लेभीको 'नेपाल' तेस्रो भागको १८१–८५ पृष्ठ हेर्नुहोस् ।

‡ 'लिच्छवि संस्कृति'को १५१ पृष्ठ हेर्नुहोस् ।

# भक्तपुर इनाय्टोलको अंशुवर्माको अभिलेख

भक्तपुर, इनाय्टोल माहेश्वरीपीठनिर यो अभिलेख कुँदिएको ढुङ्गा रहेको छ। यो अभिलेख खण्डित छ। अहिले बचेको अभिलेख कुँदिएको भाग १५ अङ्गुल लम्बा, ८ अङ्गुल चौडा छ। यहाँ संवत् ३१ छ।

गौतमवज्र वज्राचार्यद्वारा यो अभिलेख प्रकाशित हुँदैछ।

## मूलपाठ

(माथिल्लो भाग खण्डित)

१. .... यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा प्रवर्तिष्यते.....
२. मर्यादाज्ञाव्यतिक्रमकारिणो... ... ...
३. रपि भूपतिभिर्धर्मगुरुतया गुरुकृतप्रसादानु(व)
४. र्त्तिभिरेव भवितव्यमिति स्वयमाज्ञा दूतकोत्र राजपु-
५. त्रस्थितिवर्मा संवत् ३१ द्वितीयपौषशुक्लाष्टम्याम्

## अनुवाद

....जसले यो आज्ञा नाघेर अन्यथा गर्ला...मर्यादा र आज्ञा नाघ्ने (त्यसलाई सहनेछैनौं।) ....पछि हुने राजाहरूले पनि नियम कानूनलाई ठूलो संझी मान्य जनले गरेको निगाहको ख्याल राख्नुपर्छ।

यो मेरो आफ्नै आज्ञा हो। यस बातका दूतक (मार्फत) राजपुत्र स्थितिवर्मा छन्। संवत् ३१ द्वितीयपौष शुक्ल अष्टमी।

**व्याख्या-**

यस अभिलेखको माथिल्लो भाग धेरै नै नष्ट भइसकेको छ। यस कारण यस अभिलेखमा के विषय परेको थियो; सो बुझ्न नसकिने भएको छ। यसमा संवत् ३१ रहेको हुनाले अंशुवर्माले कुनै व्यवस्था बाँधी यो अभिलेख राख्न लाएका हुन् भन्ने थाहा पाइन्छ । यसमा दूतक राजपुत्र स्थितिवर्मा छन्। यिनी अंशुवर्माका कुनै नातेदार थिए कि भन्ने देखिन्छ ।

इनायटौलमा यो अभिलेख पाइएको हुनाले लिच्छविकालमै भक्तपुरको पनि आबादी बढ्दै गइरहेको संकेत यसबाट पाइन्छ। यस दृष्टिले यो अभिलेख खण्डित भए पनि केही उपयोगी रहेको छ ।

यसमा द्वितीयपौषको उल्लेख परेको छ। संवत् ३४ को पाटन सुनधाराको अभिलेखमा प्रथम-पौषको उल्लेख आएको छ। यसरी लिच्छविकालको अधिमास–पद्धतिबारे विचार गर्न पनि यस अभिलेखबाट केही मदत पाइन्छ ।

-*-

# चाँगुनारायणको अंशुवर्माको अभिलेख

चाँगुनारायणको सुनको कवचको मनि रहेको सुवर्णपत्रमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ८ अङ्गुल लम्बा, १½ अङ्गुल चौडा छ। यसका अक्षर साना छन्: तर सुन्दर छन्। यहाँ संवत् ३१ दिइएको छ।

ऐश्वर्यधर शर्माको प्रबन्धले, चाँगुनारायणका पुजारीको सौजन्यले यसको प्रतिलिपि उतार्न पाइएको हो। म र ऐश्वर्यधर शर्मा मिली यो पाठ पढिएको हो।

## मूलपाठ

१. ॐ एकोत्रिंशत्तमे वर्षे वर्तमाने स्वसंस्थया
माघशुक्लत्रयोदश्याम्पुष्येण सवितुर्दिने १
२. कालेन शीर्णमवलोक्य समस्तमाद्यं
हैमं हरेर्भगवतः कवचं सताक्ष्यम्
३. तस्मान्निदर्शनमवाप्य जगद्धितार्थं
सञ्चस्कृवान्नरपतिः पुनरंशुवर्मा २

## अनुवाद

भगवान् नारायणको पहिलेको सुनको कवच र गरुड कालक्रमले जीर्ण भएको देखेर राजा अंशुवर्माले संवत् ३१ माघ शुक्ल त्रयोदशी आदित्यवार पुष्यनक्षत्रको दिन संसारको हित होस् भनी पुरानै नमूनाबमोजिम सम्पूर्ण जीर्णोद्धार गर्नुभयो।

**व्याख्या--**

अंशुवर्माको यो अभिलेख सानो छ तापनि तात्कालिक कुरा बुझ्न निकै उपयोगी छ। यस अभिलेखमा चाँगुनारायणको मूर्तिको पुरानो सुनको कवच र गरुड जीर्ण भएको हुनाले अंशुवर्मले

त्यसको जीर्णोद्धार गरेको कुरा परेको छ। यसबाट चाँगुनारायणको मूर्तिबारे विचार गर्ने आधार प्राप्त भएको छ। हाम्रो यहाँ बराबर भूकम्प आदि भइरहने हुनाले पुराना मन्दिर, देवमूर्ति आदिको बराबर क्षति भइरहन्थ्यो। फेरि वङ्गालका सुलतान शमसुद्दीनको भयङ्कर आक्रमणले पनि यहाँका पशुपतिनाथ आदि प्रसिद्ध देवमूर्तिहरूलाई प्रशस्त क्षति पुऱ्याएको थियो। यसो हुनाले पुराना मूर्ति साबूत रूपमा पाउनु निकै गाह्रो छ। शमसुद्दीनको आक्रमणको मार चाँगुनारायण स्थानमा पनि परेको थियो भन्ने संकेत यहाँ रहेको मानदेवको स्तम्भलेख दुइ टुक्रा भएको घटनाले दिइरहेको छ। तर यसो हो तापनि वर्तमान चाँगुनारायणको मूर्ति पुरानै हो रहेछ भन्ने कुरा सो मूर्तिको सुनको कवचमै जोडिएर रहेको यो सुवर्णपत्रले देखाएको छ। यसबाट लिच्छविकालको मूर्तिकलाबारे विचार गर्ने अर्को प्रामाणिक साधन प्राप्त भएको छ।

अघिको सुनको कवच र गरुड पूर्ण रूपमा जीर्ण भएको हुनाले मैले फेरि जीर्णोद्धार गरें भनी अंशुवर्माले यहाँ लेखाएको हुनाले अंशुवर्माभन्दा केही शताब्दी अघि नै चाँगुनारायणको स्थापना भइसकेको संकेत पाइन्छ। मानदेवले चाँगुनारायणको पूजा गरी गरुडध्वज चढाएको कुराले पनि चाँगुनारायणको स्थापना उनीभन्दा पहिले नै भइसकेको थियो भन्ने दर्शाउंछ। हाम्रो यहाँ परम्पराबाट संग्रह हुँदै आएका गोपालराजवंशावली आदि वंशावलीहरूमा चाँगुनारायण आदि प्रसिद्ध चार नारायणको स्थापना मानदेवभन्दा ९ पुस्ता अगाडिका राजा हरिदत्तले गरेको कुरा परेको छ। इचंगुनारायणस्थानको ने. सं. ३२० को विजयकामदेवको पालाको अभिलेखमा पनि हरिदत्त राजाले नारायण स्थापना गरेको कुरा परेको छ। केवलपुरको अभिलेखमा वसुराजले इचंगुनारायणको लागि गूठी आदिको बन्दोबस्त मिलाइदिएको कुरा परेको छ। वंशावलीअनुसार वसुराज हरिदत्तका छोरा हुन्। यसबाट् पनि चार नारायणको स्थापना हरिदत्तले गरेका हुन् कि भन्ने देखिएको छ †। अर्को कुरा—हाम्रो यहाँ कार्तिक शुक्ल द्वादशीको दिन चार नारायण–स्थानमा वार्षिक मेला लाग्ने परम्परा अहिलेसम्म कायम छ। अनन्तलिङ्गेश्वरको नरेन्द्रदेवको अभिलेखमा चार नारायणमध्ये एक नारायणको स्थापना भएको दिन 'कार्तिकशुक्लद्वादश्याम्भगवतो लोकपालस्वामिनः प्रतिष्ठादिने' भनी उल्लेख गरिएको छ। यसबाट चार नारायण स्थापनासम्बन्धी कुरा विचार गर्ने आधार पाइन्छ। फेरि शिवदेवभन्दा अगाडि राजकीय धर्मको रूपमा वैष्णव धर्म रहेको थियो। त्यस वेलाका सनद शिलापत्रमा अङ्कित शङ्ख, चक्र आदि वैष्णव धर्मचिह्नले उक्त कुरा दर्शाइरहेका छन्। अंशुवर्मादेखि मात्र शैवधर्म राजकीय धर्मको रूपमा रहन लागेको थियो। यति कुराबाट लिच्छविकालमा उठानमा यहाँ वैष्णव सम्प्रदायको प्रचार बढी रहेको ज्ञात हुन्छ। यसो हो तापनि लिच्छविकालमा यहाँ विविध धार्मिक सम्प्रदायले समान रूपमा फस्टाउने अवसर पाएका थिए; धार्मिक सम्प्रदायमा राजा तथा प्रजा भेदभाव राख्तैनथे भन्ने कुराको चर्चा पहिले गरिसकेको छ। आफूलाई 'भगवत्पशुपतिपादानुध्यात' भनी घोषणा गर्ने अंशुवर्माले चाँगुनारायणको कवच र गरुडको जीर्णोधार गरेको यस घटनाले पनि उपर्युक्त कुराको पुष्टि हुन्छ।

---

† यस विषयको चर्चा तल पनि गरिएको छ।

अंशुवर्माको उदय कसरी भयो; उनले श्रीसामन्त, श्रीमहासामन्त, अंशुवर्मा, महाराजाधिराज अंशुका रूपमा कसरी आफ्नो उन्नति गर्दै लगे भन्ने कुराको चर्चा माथि केही गरिसकेको छ; यसको केही चर्चा तल पनि यथास्थानमा गरिएको छ। संवत् २९ को बुङ्मतीको अभिलेखदेखि उनी एक्लै शासन गर्दछन्। राजाकै रूपमा उनी कैलासकूटभवनबाट सनदपत्रहरू जारी गर्दछन्। तर ती सनदपत्रहरूमा उनलाई सोझै 'राजा' भनिएको छैन। उनको विधिवत् घोषित पद यस वेलासम्म 'श्रीमहासामन्त' मात्र हो। चाँगुनारायणको यस सुवर्णपत्रमा भने अंशुवर्मालाई 'नरपति' शब्द प्रयोग गरिएको छ। यसबाट अंशुवर्माको अवस्था अझ स्पष्ट भएको छ। वास्तवमा उनी शिवदेवकै समयदेखि नै राजाकै रूपमा थिए। तर 'प्रकृतिकोप' हुन नपाओस् भन्ने विचारले सरकारी सनदपत्रहरूमा चाहिं उनले सोझै राजा भनी आफूलाई लेखाएनन्। देवताको पादपीठमा रहेको यस सुवर्णपत्रमा चाहिं 'नरपति' भनी लेखाए।

## वारको उल्लेख–

यस अभिलेखको सबभन्दा महत्त्वपूर्ण कुरा यसमा संवत् तिथिमितिको क्रममा वार, नक्षत्र समेतको उल्लेख हुनु हो। अहिलेसम्म पाइएका लिच्छविकालका अभिलेखमा यसरी वारको उल्लेख पाइएको थिएन। वारको उल्लेख नहुँदा लिच्छविकालका संवत्बारे गणना गरी निर्णय गर्ने आधार पाइएको थिएन। यस अभिलेखमा भने संवत् ३१ माघ शुक्ल त्रयोदशीका साथै आदित्यवार पुष्यनक्षत्रसमेतको उल्लेख परेको छ। अब यस अभिलेखको आधारमा अंशुवर्मादेखि व्यवहारमा आएको संवत्को निर्णय गर्ने काममा सम्बद्ध विशेषज्ञहरूको दृष्टि जानुपरेको छ। संवत्को निर्णय गर्दा सर्वप्रथम लिच्छविकालमा प्रचलित अधिकमास–पद्धतिको विवेचना हुनु आवश्यक छ जस्तो मलाई लाग्छ। यो साल (संवत् ३१ मा) पौषमा अधिकमास परेको थियो भन्ने कुरा भक्तपुर इनाय्टोलको अभिलेखबाट थाहा पाइन्छ। साथै त्यस वेला प्रचलित संवत् कार्तिकादि थियो कि चैत्रादि थियो; संवत्निर्णय क्रममा यस कुरामा पनि विद्वान्हरूले ध्यान दिनुपरेको छ[१]।

★

१. संवत्को निर्णयको लागि श्रीशङ्करमान राजवंशीले यस अभिलेखको तिथिमितिको गणना अनेक किसिमले गर्नुभएको छ। उहांले एउटा निष्कर्ष पनि निकाल्नुभएको छ। तर यस विषयमा अझ गहन अन्वेषण हुनु जरूरी छ जस्तो लागेकोले उहांले गर्नुभएको गणनाको विवरण यहां दिइएन।

# हाँडिगाउँको अंशुवर्माको अभिलेख

हाँडिगाउँ थटोलको प्रसिद्ध डबलीमा यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ । यसको अभिलेख कुँदिएको भाग ३५ अङ्गुल लम्बा, १८ अङ्गुल चौडा छ । यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन् । यहाँ संवत् ३२ छ ।

लेभीद्वारा १४ संख्याको रूपमा यो छापिएको छ । नोलीद्वारा ३६ संख्याको रूपमा यो छापिएको छ । 'पूर्णिमा' १४ अङ्कमा मैले पनि यो छपाएको छु ।

## मूलपाठ

१. स्वस्ति कैलासकूटभवनाद........ ........ .....
२. नो भगवत्पशुपतिभट्टारक(पादानुगृहीतो बप्पपादानुध्या-)
३. तः श्रीमहासामन्तांशुवर्मा कु(शलो)...... ...... .....
४. गृहिक्षेत्रिकादिकुटुम्बिनो य(थार्हम्प्रतिमा)न्यानु(दर्शयति वि)
५. दितम्भवतु भवताङ्गृहक्षेत्रादिश्रावणिकादान...... ......
६. भिरयम्मर्यादाबन्धः कृत एतेन भवद्भिर्व्यवहर्तव्यं यत्र (भगव)
७. तः पशुपतेः पु[१] ६ प २ दोलाशिखरस्वामिनः पु ६ प २ ....
८. गुंविहारस्य पु ६ प २ श्रीमानविहारस्य पु ६ प २ श्रीरा(ज)
९. विहारस्य पु ६ प २ खर्जूरिकाविहारस्य पु ६ प २ म (ध्य)
१०. मविहारस्य पु ६ प २ सामान्यविहाराणां पु ३ प १ रामेश्व-
११. रस्य पु ३ प १ हंसगृहदेवस्य पु ३ प १ मानेश्वरस्य पु ३
१२. प १ साम्बपुरस्य पु ३ प १ वाग्वतीपारदेवस्य पु ३ प १ धारा-
१३. मानेश्वरस्य पु ३ प १ पर्वतेश्वरदेवस्य पु ३ प १ नरसिंह–
१४. देवस्य पु ३ प १ कैलासेश्वरस्य पु ३ प १ भुम्भुक्किकाजलश–

१. यस अभिलेखमा नोलीहरूले 'छ' को अङ्कलाई सात पढ्नुभएको छ । पूर्णिमा १४ अं. १२४ पृ.

१५. यनस्य पु ३ प १ तदन्यदेवकुलानाम् पु २ प २ श्रीभट्टारक–
१६. पादानाम् पु ६ प २ सपेलापाञ्चाल्याः पु ६ प २ सामान्य–
१७. पाञ्चाल्याः पु ३ प १ राजकुलवस्तुना नियुक्तमनुष्यस्य
१८. पु २ प २ गौष्ठिकाणां पु २ प २ कृतप्रसादस्य १ ब्राम्हणा (नां)
१९. पु १ सामान्यमनुष्याणाम्पु ... ... ... यं व्यवहारप ... ...
२०. न चायम्मर्यादाबन्धः कैश्चि (दप्यन्यथा करणी) यो यतः
२१. प्रजाहितार्थोद्यतशुद्धचेतसां (शुव) र्मणा श्रीकलहाभिमानिना
२२. कथम्प्रजा मे सुखिता भवेदि (ति प्रियव्य) वस्थेयमकारि धीमता
२३. संवत् ३२ आषाढशुक्लत्रयोदश्याम् ।

# अनुवाद

कल्याण होस् । कैलासकूटभवन (दरबार) बाट. . . . . . भगवान् पशुपतिनाथको (पाउको अनुग्रह पाएका, बुवाको पाउको अनुग्रह पाएका) गाथमा आराम रहेका श्रीमहासामन्त अंशुवर्मालि घरवाला, खेतवाला आदि गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ । तिमीहरूलाई थाहा होस् ।

घर, खेत आदिमा लाग्ने 'श्रावणिका' (साउने तिरो) को . . . . यो स्थितिबन्धेज बाँधेका छौं । तिमीहरूले यसैबमोजिम व्यवहार गर्नू । जसमा–

भगवान् पशुपतिलाई ६ पुराण २ पण, दोलाशिखरस्वामी (चांगुनारायण) लाई ६ पुराण २ पण, गुंविहारलाई ६ पुराण २ पण, श्रीमानविहारलाई ६ पुराण २ पण, श्रीराजविहारलाई ६ पुराण २ पण, खर्जूरिकाविहारलाई ६ पुराण २ पण, मध्यमविहारलाई ६ पुराण २ पण, अरू सामान्य विहारहरूलाई ३ पुराण १ पण, रामेश्वरलाई ३ पुराण १ पण, हंसगृहदेवलाई ३ पुराण १ पण, मानेश्वरलाई ३ पुराण १ पण, साम्बपुरलाई ३ पुराण १ पण वाग्वतीपारिका देवलाई ३ पुराण १ पण, धारामानेश्वरलाई ३ पुराण १ पण, पर्वतेश्वरलाई ३ पुराण १ पण, नरसिंहदेवलाई ३ पुराण १ पण, कैलासेश्वरलाई ३ पुराण १ पण, भुम्भुक्किकाजलशयनलाई ३ पुराण १ पण, अरू देवमन्दिरलाई २ पुराण २ पण, श्रीभट्टारक (गद्दीनशीन राजा) लाई ६ पुराण २ पण, सपेलापाञ्चालीलाई ६ पुराण २ पण, अरू सामान्य पाञ्चालीलाई ३ पुराण १ पण, राजकुलको वस्तुद्वारा नियुक्त मानिसलाई २ पुराण २ पण, गौष्ठिक (गोष्ठीका सदस्य = गुठियार) हरूलाई २ पुराण २ पण, (राजाद्वारा) निगाह गरिएको मानिसलाई १ पुराण, ब्राह्मणहरूलाई १ पुराण अरू सामान्य मानिसहरूलाई . . . ।

व्यवहारमा चलेको पणसम्बन्धी यस्तो स्थितिबन्धेज बाँधेका छौं । कसैले पनि यो स्थितिबन्धेज अन्यथा नगर्नू । किनभने–

सच्चा मन लाएर दुनियाँको हित गर्न उद्योग गरिरहेका, बुद्धिमान् श्रीकलहाभिमानी अंशुवर्माद्वारा 'कसरी मेरा दुनियाँ सुखी होलान्' भनी यो प्यारो व्यवस्था बाँधिएको हो।

संवत् ३२ आषाढ शुक्ल त्रयोदशी ।

## व्याख्या–

यो अभिलेखसंगै रहेको अर्को अभिलेखमा अंशुवर्माले राजदरबारमा जागीर पाएकाहरूले मर्यादाको निमित्त बुझाउनुपर्ने पण र तिनको वितरण गर्ने नियम बाँधेका थिए। त्यसको दुइवर्षपछि यसमा प्रत्येक गृहस्थीबाट घर-खेतअनुसार उठाइने श्रावणिकादान (साउन्या कर) को वितरण गर्ने नियम बाँधेका छन्। यसमा नेपालका त्यस बेलाका प्रसिद्ध देवता, विहार आदि तथा लोकमा विशिष्ट स्थान राख्ने पाञ्चाली, गौष्ठिक, ब्राह्मण आदिले सन्मानस्वरूप पाउने भाग नियत गरिएको छ। अघिल्लो अभिलेखले राजदरबारसम्बन्धी कुरामा प्रकाश पारेको थियो। यस अभिलेखले लिच्छविकालका धार्मिक लौकिक कुरामा प्रकाश पारेको छ। यस कारण यो अभिलेख पनि तात्कालिक कुरा बुझ्न अति उपयोगी छ ।

## धर्मप्रति समान आदर–

राष्ट्रको एकता कायम गर्न अंशुवर्माले गरेका प्रबन्धमध्ये धार्मिक समानताको नीति पनि एक हो। पहिलेदेखि नै नेपालमा विभिन्न धार्मिक सम्प्रदायले विकास गर्ने अवसर पाउँदै आएको थियो। विभिन्न धार्मिक सम्प्रदायप्रति राजा र प्रजाले समान आदरभाव लिएका हुनाले हाम्रो यहाँ धार्मिक कटुता थिएन। तर गुप्त आभीरको हातमा शासनाधिकार गएताका धार्मिक क्षेत्रमा एक सम्प्रदायले अर्को सम्प्रदायलाई होच्याउने भावना अलि देखापारेको थियो। यो कुरा राष्ट्रलाई हितकर छैन भन्ने अंशुवर्माले बुझेका थिए। यसो हुनाले नेपालमा चलेका विभिन्न धार्मिक सम्प्रदायमा समान आदर देखाउने नीति अंशुवर्माको रह्यो। त्यो कुरा यस अभिलेखले स्पष्टसंग देखाउँछ। यहाँ शैव, वैष्णव, बौद्ध आदि विभिन्न धार्मिक सम्प्रदायलाई समकक्षमा राखी भाग नियत गरिएको छ। व्यक्तिगत रूपमा अंशुवर्माको शैवधर्मप्रति बढी श्रद्धा थियो; उनी शैवसम्प्रदायका अनुयायी थिए। सो कुरा यस अभिलेखमा 'भगवत्पशुपतिभट्टारक (पादानुगृहीत)' भन्ने विशेषण उनमा रहेको हुनाले थाहा पाइन्छ। तर शासकको हैसियतले धार्मिक सम्प्रदायमा उनले समान आदर देखाएका छन् ।

लोकमा रहेको प्रसिद्धि, लोकप्रियता आदिको आधारमा देवताको वर्गीकरण तीन तहमा गरिएको छ। पशुपतिनाथ, चाँगुनारायण, गुंविहार आदि विहारलाई विशिष्ट श्रेणीमा राखिएको छ। तिनीहरूलाई ६ पुराण २ पण भाग छुट्याइएको छ। मानेश्वर, वाग्वतीपारदेव, विहारलाई दोस्रो श्रेणीमा राखिएको छ। तिनलाई विशिष्ट श्रेणीका देवताले पाउने भागको आधा अर्थात् ३ पुराण १ पण भाग तोकिएको छ। यस अभिलेखमा नामोल्लेख भएकाबाहेक अरू देवतालाई २ पुराण २ पण भाग नियत गरिएको छ ।

यस अभिलेखमा नामोल्लेख भएका देवतामध्ये सबैको परिचय पाउन सकिएको छैन । तैपनि यहाँ तिनको संक्षिप्त चर्चासम्म गरिन्छ ।

पशुपतिनाथ– यस अभिलेखमा उल्लिखित पशुपति वर्तमान पशुपतिनाथ नै हुन् भन्ने कुरा निश्चित छ । पशुपतिनाथको स्थापना कहिले भएको हो; थाहा पाउन सकिएको छैन । पशुपतिको स्थापना अंशुवर्माबाट भयो कि भन्ने तर्क एक ताका उठेथ्यो । तर पशुपति भस्मेश्वरको अभिलेखबाट यस कुराको खण्डन भएको छ । सो अभिलेख संवत् ४५५ को हो । त्यसमा पशुपति क्षेत्रमा पाँच शिवलिङ्ग स्थापना गरेको कुरा परेको छ । यसबाट त्यस वेला यो ठाउँ 'पशुपतिक्षेत्र' भनी कहलाइसकेको स्पष्ट थियो । पशुपतिको स्थापना योभन्दा धेरै अघि नभएको भए यसो हुनु सम्भव छैन ।

दोलाशिखरस्वामी– यहाँ उल्लिखित 'दोलाशिखरस्वामी' चाँगुनारायण हुन् । मानदेवको चाँगुको स्तम्भलेखमा त्यस ठाउँलाई 'दोलाद्रि' भनिएको छ । प्रायः वैष्णव सम्प्रदायका देवतालाई 'स्वामी' भन्ने चलन थियो । मानदेवको चाँगुको अभिलेखबाट उनीभन्दा धेरै अघिदेखि त्यहाँ चाँगुनारायणको अस्तित्व थियो भन्ने थाहा पाइन्छ । नेपालका प्रसिद्ध चार नारायणमध्ये एक चाँगुनारायण पनि हुन् । गोपालवंशावलीको कथनअनुसार चार नारायणको स्थापना हरिदत्त राजाले गरेको बुझिन्छ । इचंगुको अभिलेखमा पनि हरिदत्तको उल्लेख आएको छ । हरिदत्त वृषदेवभन्दा अघिका हुन् ।

गुंविहार– पाँच विशिष्ट विहारमध्ये 'गुंविहार' को उल्लेख सबभन्दा पहिले गरिएको छ । 'गुंविहार' को विशिष्टता यताबाट पनि प्रकट हुन्छ । स्वयम्भूको विहार 'गुंविहार' हो भनी केही इतिहासकारले अनुमान गरेका छन् । तर यो सत्य होइन । साँखु वज्रयोगिनीको विहार 'गुंविहार' हो । अहिले वज्रयोगिनीको नामले यो ठाउँ प्रसिद्ध छ । तर वज्रयोगिनीको स्थापना हुनुभन्दा पहिले यो ठाउँ 'गुंविहार' नामले प्रसिद्ध थियो । अहिलेसम्म पनि यहाँको विहारलाई 'गुंविहार' नै भनिन्छ । मल्लकालका ठ्यासफुहरूमा पनि यहाँको गुंविहारको उल्लेख आएको छ† । वज्रयोगिनीको मन्दिरसंगै रहेको 'चैत्य' गुंविहारको मुख्य चैत्य हो। यहाँ अरू विहारमा जस्तै वज्राचार्यहरूको व्रतबन्ध (भिक्षुचर्याग्रहण–विधान) गरिन्छ ।

श्रीमानविहार– राजकीय 'श्री' विशेषणसहितको यो विहार राजा मानदेवले बनाउन लाएका हुन् । गोपालवंशावलीमा राजा मानदेवले विहार बनाउन लाएको कुरा परेको छ । यो विहार पाटनभेकमा थियो । पाटन यागवहालको नरेन्द्रदेवको अभिलेखमा चारकिल्ला खोल्दा 'श्रीमानदेवविहारखर्जूरिकाविहारक्षेत्रयोः संधि' भन्ने उल्लेख आएको छ । विशिष्ट विहारको रूपमा 'श्रीमानविहार' को उल्लेख यहाँ परेको हुनाले राजा मानदेवले भव्य विहार बनाउन लाएको देखिन्छ ।

श्रीराजविहार– राजकीय 'श्री' सहितको यो विहार पनि कुनै राजा वा राजा सरहका

† 'पूर्णिमा' ६ अङ्कको ६ पृष्ठ हेर्नुहोस् ।

शासकले बनाएका हुन् भन्ने देखिन्छ । गोपालवंशावलीमा दुइ जनाले राजविहार बनाएको उल्लेख गरिएको छ। एक ठाउँमा 'राजा श्रीधर्म्मदेव।....तेन....राजविहार धमरेचैत्यभटारिके प्रतिष्ठितम्' भनी लेखिएको छ । साथै अंशुवर्माले पनि राजविहार बनाउन लाएको कुरा 'श्रीअंशुवर्मा....तेन च राजविहार कृतं' भनी लेखिएको छ। यहाँ उल्लिखित विशिष्ट विहार 'राजविहार' कसले बनाएकोचाहिं हो; निश्चय गर्नु गाह्रो छ । अंशुवर्माले बनाउन लाएको राजविहार नै यो हो कि भन्ने मलाई लाग्छ । पाटन यागबहालको अभिलेखमा चारकिल्ला खोल्दा श्रीराजविहारको पनि उल्लेख आएको छ। यसबाट यो पनि पाटनतिर थियो भन्ने बुझिन्छ।

खर्जूरिकाविहार– विशिष्ट विहारको रूपमा खर्जूरिकाविहारको पनि यहाँ उल्लेख परेको छ। यसलाई पनि ६ पुराण २ पण भाग छुट्याइएको छ। खर्जूरिका विहार कसले बनाएको हो; थाहा पाउन सकिएको छैन। पाटन यागवहालको अभिलेखमा यसको उल्लेख आएको छ। यस कारण खर्जूरिकाविहार पनि पाटनमै थियो भन्ने देखिन्छ ।

मध्यमविहार– यो पनि विशिष्ट विहार थियो । मध्यमविहार पनि पाटनमै थियो । यो कुरा पाटन यागबहालको अभिलेखबाट थाहा पाइन्छ ।

रामेश्वर– यिनलाई ३ पुराण १ पण भाग छुट्याइएको छ। यिनीबारे केही थाहा पाइएको छैन। ।

हंसगृहदेव– नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखमा 'हंसगृहद्रङ्ग' र त्यहाँका प्रतिष्ठित देवता लोकपालस्वामीको उल्लेख आएको छ। ती नारायणको भव्य पूजा–आजाको बन्दोबस्त पनि त्यहाँ गरिएको छ। यस अभिलेखमा 'हंसगृहदेव' भनी तिनै नारायणलाई भनिएको देखिन्छ। नेपाल–उपत्यकाका प्रसिद्ध चार नारायणमध्ये एक यी हुन् ।

मानेश्वर– यसपछि मानेश्वरलाई ३ पुराण १ पण भाग पन्छाइएको छ। राजा मानदेवले स्थापना गरेको शिवलिङ्ग 'मानेश्वर' कहलाएको बुझिन्छ। पछि मानेश्वर स्थापना गरिएको बस्ती नै 'मानेश्वर' कहलाएको थियो। नक्साल नारायणचौरको अभिलेखमा द्रङ्गको दर्जामा राखिएका सात ग्राममध्ये एक 'मानेश्वर' थियो। त्यस अभिलेखमा चारकिल्ला खोल्दा 'मानेश्वर– राजाङ्गणालीदक्षिणेन=मानेश्वरको राजाङ्गणको सीमादेखि दक्षिणपट्टि' भन्ने उल्लेख आएको छ। यसबाट मानेश्वरमा राजभवन पनि थियो तथा मानेश्वर नक्सालकै आसपासमा थियो भन्ने थाहा पाइन्छ। यसो विचार गर्दा 'मानेश्वर' लाजिम्पाटमा थियो कि भन्ने मलाई लाग्छ। किनभने राजपत्तनको अपभ्रंश भई 'लाजिमपाट' कहलाएको हो । मानेश्वरमा अरू पनि देवमन्दिर थिए । नरेन्द्रदेवको यङ्गालहिटीको अभिलेखमा मानेश्वरमा रहेको भुवनेश्वर देवकुलको हेरचाहको काम दक्षिणकोलीग्रामद्रङ्गलाई सुम्पिदिएको कुरा परेको छ ।

साम्बपुर– यहाँ साम्बपुरलाई ३ पुराण १ पण भाग तोकिएको छ। यहाँ कुन देवता

थियो; अलि स्पष्ट हुन सकेको छैन। 'साम्बपुर' नामले शिवपार्वतीको मन्दिर यहाँ थियो कि भन्ने देखिन्छ। देवताकै नामबाट यहाँको बस्ती पनि प्रसिद्ध भएको थियो। नक्साल नारायण-चौरको अभिलेखमा द्रङ्गको दर्जा दिइएका सात ग्राममध्ये एक 'साम्बपुर' पनि हो। त्यहाँ चारकिल्ला खोल्दा मानेश्वरको पश्चिम र दक्षिणतिर साम्बपुरको उल्लेख आएको छ।

वाग्वतीपारदेव– यसपछि यस अभिलेखमा वाग्वतीपारदेवलाई ३ पुराण १ पण छुट्याइएको छ। 'वाग्वतीपारदेव' पदले कुन देवतालाई लक्ष्य गरेको हो; अलि स्पष्ट छैन। वाग्वती नदीको लामो तीरमा अनेक देवमन्दिर हुनु सम्भव छ। तर त्यसवेलाको प्रचलन विचार गर्दा पशुपति वाग्वतीपारिको तिलगङ्गाको मानदेवले स्थापना गरेको त्रिविक्रममूर्तिलाई लक्ष्य गरी 'वाग्वती-पारदेव' भनिएको बुझिन्छ। नरेन्द्रदेवको पाटन गैह्रीधाराको अभिलेखमा 'पशुपतौ वाग्वतीपूर्वकूले' भन्ने उल्लेख आएको छ।

धारामानेश्वर– लाजिमपाटतिरको एक मानेश्वरको उल्लेख माथि परेको छ। अलि तल अर्को मानेश्वरको पनि उल्लेख आएको छ। तिनलाई पनि ३ पुराण १ पण भाग तोकिएको छ। यिनलाई 'धारामानेश्वर' भनिएको छ। यसरी यी अर्का मानेश्वर कहाँका हुन् भन्ने प्रश्न उठेको छ। राजा मानदेवले थंतुरीद्रङ्गमा (बूढानीलकण्ठस्थानभन्दा केही परि विष्णुपादुकाको फेदीमा) पनि एक शिवलिङ्ग स्थापना गरेका थिए। धारामानेश्वर भनी तिनैलाई भनेको हो कि भन्ने अनुमान हुन्छ।

पर्वतेश्वरदेव– यहाँ पर्वतेश्वरदेवलाई ३ पुराण १ पण भाग नियत गरिएको छ। यिनको परिचय पाउन सकिएको छैन।

नरसिंहदेव– यिनलाई ३ पुराण १ पण भाग तोकिएको हुनाले यिनी पनि त्यसवेलाका प्रसिद्ध देवतामध्ये थिए भन्ने थाहा पाइन्छ। तर यिनको परिचय पाउन सकिएको छैन। बूढानील-कण्ठ स्थानलाई उहिले 'नरसिंह' भनिन्थ्यो। यस कारण त्यतैका देवताविशेष यी होलान्।

कैलासेश्वर– यिनको पनि परिचय पाउन सकिएको छैन। पशुपति कैलासथुम्कोमा रहेका महादेवविशेष यी हुन् कि भन्ने अनुमान हुन्छ।

भुम्भुक्किकाजलशयन–यहाँ नामोल्लेख भएका देवतामध्ये पछिल्ला भुम्भुक्किकाजलशयन हुन्। 'जलशयन' पद जोडिएको हुनाले यी नारायण हुन् भन्ने देखिन्छ। 'भुम्भुक्किकाजलशयन'को अपभ्रंश 'भुइजसी' भएको हो; यस कारण यी बूढानीलकण्ठनारायण हुन् भन्ने तर्क केही इतिहासकारले गरेका छन्। तर 'भुम्भुक्किकाजलशयन'को अपभ्रंश 'भुइजसी' भएको हो भन्ने तर्क उपपत्तियुक्त छैन। बूढानीलकण्ठस्थानको मध्यकालका अभिलेख र तात्कालिक ठ्यास–फुहरूमा यस स्थानलाई 'भोयुवजल' भनिएको पाइन्छ। फेरि वर्तमान जलशयन नारायणमूर्तिको स्थापना विष्णुगुप्तले गरेका हुन् भन्ने कुरा निश्चित छ। यस विषयमा तल यथास्थानमा विस्तृत चर्चा गरिएको छ।

देवताहरूलाई भाग नियत गरिसकेपछि यहाँ श्रीभट्टारकपाद (गद्दीनशीन राजा)लाई ६ पुराण २ पण भाग तोकिएको छ। अनि पाञ्चालीलाई भाग नियत गरिएको छ। यहाँ 'सपेला' नामक पाञ्चालीलाई चाहिं विशिष्ट श्रेणीमा राखिएको छ र त्यसलाई ६ पुराण २ पण दिइएको छ। योबाहेक अरू सामान्य पाञ्चालीलाई चाहिं त्यसको आधा भाग छुट्याइएको छ। लिच्छवि कालको शासनव्यवस्थामा पाञ्चालीको विशिष्ट स्थान रहेको थियो। यसै हुनाले पाञ्चालीलाई पनि सन्मानस्वरूप भाग नियत गरी दिई अंशुवर्माले त्यस पद्धतिलाई प्रोत्साहन दिएका हुन्। यो कुरा बुझ्न अब पाञ्चालीको पाइए जति परिचय यहाँ दिनुपरेको छ† ।

## पाञ्चाली (पञ्चायत) पद्धतिको परिचय–

संघराज्यको परम्परामा हुर्केका लिच्छवि, वृजिक, कोली आदिको निकै बसोबास यहाँ भएको र तिनको सहवास पाएका हुनाले त्यस वेला यहाँका बासिन्दाहरू छुट्टाछुट्टै जीवन बिताउनुभन्दा परस्परमा मिली एउटा संघट्टनको अन्तर्गत रही जीवन बिताउन अभ्यस्त बनेका थिए। आवश्यक काम कुरा मिली गर्ने, मिलेर रहने यही भावना पाञ्चालीपद्धतिको आधार बनेको थियो; यही भावनाले यस पद्धतिलाई हुर्कायो; अनि लिच्छविकालको शासनव्यवस्थामा यसले विशिष्ट स्थान पायो ।

पाञ्चाली शब्दको व्युत्पत्ति–'पञ्च' शब्द र 'आली' शब्द मिलेर 'पाञ्चाली' यो शब्द बनेको छ। पाँच जना वा पाँचभन्दा बढी व्यक्तिसमूहलाई बुझाउनुपर्दा पञ्च शब्दको प्रयोग हुन्छ। आली शब्दले सीमा, इलाकालाई बुझाउँछ। लिच्छविकालका अभिलेखमा सीमा, इलाका भन्ने अर्थमा आली शब्दको प्रयोग ठाउँ ठाउँमा आएको छ। उदाहरणार्थ पशुपति वज्रघरको नरेन्द्रदेवको अभिलेखलाई देखाउन सकिन्छ। त्यहाँ भिक्षुसंघलाई दिएको गाउँको चार किल्ला खुलाउँदा पश्चिमपट्टिको सीमा भन्नालाई 'पश्चिमाली' दक्षिणतिरको सीमा भन्नालाई दक्षिणाली पूर्वपट्टिको सीमा भन्नालाई 'पूर्वाली' शब्दको प्रयोग गरिएको छ। यसै गरी नक्साल नारायणचौरको अभिलेख आदिमा पनि यही अर्थमा 'आली' शब्दको प्रयोग भएको छ। यसबाट आलीशब्दले सीमा, इलाकालाई बुझाउँथ्यो भन्ने निश्चित छ। यस अर्थमा यो शब्द पछिसम्म पनि प्रचलित भएको छ। कर्णालीप्रदेशका पुण्यमल्लहरूका अभिलेखमा पनि 'जग्गाको निश्चित भाग' लाई कहन आलिका शब्दको प्रयोग भएको छ। शाहकालका लालमोहरहरूमा पनि जग्गाको चार किल्ला खुलाउँदा 'आली साँध' को उल्लेख पाइन्छ। यसै अर्थअनुसार 'पञ्चको इलाका' भन्ने बुझाउन 'पाञ्चाली' शब्द बनेको छ । 'पाञ्चाली' शब्दले निश्चित इलाकालाई बुझाउने हुनाले फलाना पाञ्चालीका बासिन्दा भनी सम्बोधन गरिएको पनि पाइन्छ। उदाहरणार्थ बूढानीलकण्ठस्थानको अभिलेखलाई देखाउन सकिन्छ । त्यहाँ. . . "श्रीशिवदेवः. . . . . आङलाबकसपितानरसिंहोभयपाञ्चालीनिवासिनो यथाप्रधानङ्ग्रामकुटुम्बिन. . . . समाज्ञापयति" भनिएको छ ।

---

† लिच्छविकालको पाञ्चाली–पद्धतिको बारेमा 'पूर्णिमा' १२ अङ्कमा पनि विचार गरिएको छ।

यसै अर्थको आधारमा पञ्चको निश्चित इलाकाको बन्दोबस्त गर्ने 'पञ्चहरूको सभा' भन्ने अर्थमा पनि 'पाञ्चाली' शब्द रूढ भएको छ।

ग्रामपाञ्चाली– लिच्छविकालमा शासन व्यवस्थित रूपमा चलाउन ग्राम, तल, द्रङ्गको रूपमा स्थानविभाजन गरिएको थियो तथा प्रशासनाधिकार मूल (केन्द्र)मा मात्र सीमित नराखी स्थानीय जनतालाई निकै मात्रामा सुम्पिएको थियो। यसरी त्यस बेला स्वायत्तशासनलाई प्रश्रय दिइएको थियो। विशेष गरेर अंशुवर्माले जनतालाई अधिकार सुम्पेका थिए। यसो हुनाले प्रत्येक ग्राममा आवश्यक काम कुरा चलाउन एउटा व्यवस्था हुनु जरूरी थियो। ग्रामसम्बन्धी उक्त आवश्यकताको पूर्ति 'पाञ्चाली' नामक स्थानीय 'पञ्चहरूको सभा' ले गर्दथ्यो। यसो हुनाले प्रत्येक ग्राममा 'पाञ्चाली' को संघट्टन गरिएको हुन्थ्यो। अभिलेखमा प्रसङ्गवश आएको अनेक पाञ्चालीहरूको उल्लेखले यस कुराको पुष्टि गर्दछ।

अनेक ग्राम मिली 'द्रङ्ग' को रूप लिएपछि त्यस्ता द्रङ्गभित्र अनेक पाञ्चाली कायमै रहन्थे। उदाहरणार्थ यूपग्रामद्रङ्ग, दक्षिणकोलिग्रामद्रङ्ग आदिलाई देखाउन सकिन्छ। यूपग्रामद्रङ्गभित्र अनेक पाञ्चालीहरू खडा थिए। पाटन मीननाथको अभिलेखमा तेग्वल, यूग्वल, गीग्वल, जाज्जे,-ल्ल नामक पाँच पाञ्चालीको उल्लेख परेको छ। यो पाञ्चालीले कुलोको पानी यति उपयोग गर्नू भन्ने व्यवस्था मिलाइदिएको प्रसङ्गमा ती पाँच पाञ्चालीको उल्लेख आएको हो। पाञ्चालीको इलाका निश्चित हुन्थ्यो। यसो हुनाले आफ्नो आफ्नो इलाको हितको लागि तत् तत् पाञ्चालीले दावी गर्ने हुनाले कहिलेकहीं कलह उठ्न जान्थ्यो। तर कलह बढ्न नपाओस् भनी सोझै राजाको भित्री इजलासले देखरेख गर्ने प्रवन्ध गरिएको थियो। यूपग्रामद्रङ्गमा यीबाहेक अरू पनि पाञ्चालीको नामोल्लेख पाइएको छ। यसै गरी दक्षिणकोलिग्रामद्रङ्गमा पनि अनेक पाञ्चाली कायम भएका थिए। यस कारण यङ्गालहिटीको अभिलेखमा 'दक्षिणकोलीग्रामनिवासिनः. . . .सर्वपाञ्चाली-कुटुम्बिनः = दक्षिणकोलीग्राममा बस्ने. . .सबै पाञ्चालीभित्रका गृहस्थीहरूलाई" भन्ने उल्लेख परेको छ।

जुन ठाउँको 'पाञ्चाली' हो; त्यही ठाउँको नाउँले सो 'पाञ्चाली' को नामोल्लेख गर्ने चलन थियो। जस्तै पाटन च्यासलटोलको अभिलेखमा लोप्रिङग्रामको पाञ्चालीलाई लोप्रिङपाञ्चाली भनिएको छ। पाटन सुनधाराको अभिलेखमा माटिङ ग्रामको पाञ्चालीलाई 'माटिङग्रामपाञ्चाली' भनिएको छ। यसै गरी नरसिंहपाञ्चाली, भृङ्गारेश्वरपाञ्चाली, जोल्प्रिङ पाञ्चाली आदि नामकरण भएको पाइन्छ।

पाञ्चालीको संघट्टन– प्रत्येक पाञ्चालीमा अनेक सदस्य हुन्थे। ती सदस्य 'पाञ्चालिक' कहलाउँथे। पाञ्चालिक कसरी बनाइन्थे भन्ने कुरा पत्ता लाउन सकिएको छैन। तर पाञ्चालीको संघट्टन नियमपूर्वक हुन्थ्यो; पाञ्चालीसम्बन्धी नियम ताम्रपत्रमा लेखिराखिएको हुन्थ्यो; पाञ्चालीमा केही सदस्यको नियुक्ति राजाद्वारा गरिन्थ्यो भन्ने कुराको स्पष्ट संकेत देउपाटन कसाईंटोलको अभिलेखबाट हामी पाउँछौं। त्यहाँ लिच्छवि राजा नरेन्द्रदेवले ताम्रपत्रमा लेखिएको

व्यवस्थाको आधारमा नवगृह (देउपाटन भेकको बस्ती) को पाञ्चालीमा वृजिकरथ्याका बासिन्दा मधुसूदन स्वामीलाई सदस्यका रूपमा नियुक्त गरेको उल्लेख परेको छ । विचारार्थ त्यहाँको अलिकता अंश यहाँ उद्धृत गर्नुपरेको छ–

"......महाराजाधिराजश्रीनरेन्द्रदेवः......समाज्ञापयति....नवगृह....स्थिति-मर्यादोपपन्नत्वं...प्रसादः कृत.....कैश्चिदपि नवगृहम्प्रविश्याल्पतरापि बाधा न कर्तव्या इह यत्किञ्चिन्महत्कार्यमुत्पद्यते तच्च स्वयम्पाञ्चालिकैर्निर्णेतुन्न शक्यते तदा तदन्तरासनेन विचार-यितव्यं .....या च व्यवस्था ताम्रशासने लिखिताभूत्तयैव व्यवस्थया वृजिकरथ्यानिवासी मधुसूदनस्वामी पाञ्चालिकसामान्य इति"

(....महाराजाधिराज श्रीनरेन्द्रदेवबाट आज्ञा भएको छ । .....नवगृहको...स्थिति-बन्धेज बाँध्ने काम गरी अनुग्रह गरिएको छ ।....कसैले पनि नवगृहमा पसेर अलिकता पनि दुःख दिनु हुँदैन । .....यहाँ नवगृहमा कुनै ठूलो मुद्दामामिला आइपर्दा पाञ्चालिकहरूले त्यसको छिनफान गर्न सकेनन् भने त्यसवेला 'अन्तरासन' ले त्यसको विचार गर्नुपर्छ ।.....

सनद ताम्रपत्रमा जुन व्यवस्था लेखिएको थियो; त्यही व्यवस्थाअनुसार वृजिकरथ्यामा बस्ने मधुसूदन स्वामी पाञ्चालिकका समानाधिकारी (पाञ्चालीका सदस्य) बनाइका छन् । )

यताबाट पाञ्चालीको संघट्टन नियमपूर्वक हुन्थ्यो भन्ने सिद्ध हुन्छ । यङ्गालहिटीको अभिलेख र भृङ्गारेश्वरको अभिलेखबाट ब्राह्मणलगायत विभिन्न जातका व्यक्ति पाञ्चालीका सदस्य हुन्थे भन्ने थाहा पाइन्छ । भृङ्गारेश्वरको अभिलेखमा 'ब्राह्मणपुरस्सराणां च पाञ्चालिकानां = ब्राह्मणलगायत पाञ्चालिकहरूको' भन्ने उल्लेख परेको छ । यङ्गालहिटीको अभिलेखमा 'ब्राह्मण प्रधानपुरःसरान् सर्वपाञ्चालीकुटुम्बिनः = ब्राह्मण, प्रधानलगायत सबै पाञ्चालीभित्रका गृहस्थी-हरूलाई (पाञ्चालीका सदस्य र अरू बासिन्दाहरूलाई) भन्ने उल्लेख परेको छ । यसबाट *पाञ्चालीका सदस्यमध्ये एक 'प्रधान' (मुखिया) पनि हुन्थे भन्ने थाहा पाइन्छ । प्रत्येक ग्राममा* 'प्रधान' छानिएका हुन्थे भन्ने कुरा अरू अभिलेखबाट पनि थाहा पाइन्छ । ग्रामवासीलाई सम्बोधन गर्दा 'प्रधानपुरस्सरान्' भनिएको हुन्छ । 'प्रधान' शब्दले ग्रामपाञ्चालीका प्रधान सदस्यलाई कहेको हो ।

पाञ्चालीको काम मुख्य गरी दुइ किसिमका देखिएका छन् । पाञ्चालीको पहिलो काम आफ्नो इलाकामा भएका झैझगडा मिलाइदिने मुद्दामामिला छिनी दण्ड गर्ने आदि स्थानीय प्रशासन चलाउने हुन्थ्यो । पाञ्चालीको अर्को काम आफ्नो इलाकाको जनताको हितका लागि कुलो पानीको बन्दोबस्त गर्नु, पाटी पौवा देवमन्दिरको निर्माण र तिनको हेरचाह गर्नु आदि सार्वजनिक काम हुन्थ्यो । आवश्यक परेको वेलामा कुनै राजकीय काम लाउँदा पाञ्चालीमार्फत जनताले गर्दथ्यो । त्यस्तो काम गरिदिने, जनहितको काम गर्ने पाञ्चालीउपर राजाबाट कर माफी आदि अनुग्रह गरिन्थ्यो ।

यी कुरा राम्ररी बुझ्नाको लागि अभिलेखको उल्लेखसहित विचार गर्नुपरेको छ। माथि उद्धृत नरेन्द्रदेवको देउपाटन कसाईंटोलको अभिलेखबाट आफ्नो इलाकामा परेको मुद्दामामिला पाञ्चालिकहरू नै छिन्दथे; पाञ्चालिकले छिन्न नसकेको मुद्दा मात्र माथिल्लो तहमा जान्थ्यो भन्ने स्पष्ट बुझिन्छ। किनभने त्यहाँ 'इह यत्किञ्चिन्महत्कार्यमुत्पद्यते तच्च स्वयम्पाञ्चालिकैर्निर्णेतुन्न शक्यते तदा तदन्तरासनेन विचारयितव्यं' भनी स्पष्ट खुलाएर लेखिएको छ। यस कुराको पुष्टि अरू अभिलेखबाट पनि हुन्छ। उदाहरणार्थ ज्ञानेश्वर र नक्साल नारायणचौरको अभिलेखलाई देखाउन सकिन्छ। ती दुवै अभिलेख खण्डित छन्। तैपनि बचेको भागबाट पनि पाञ्चालीबारेमा निकै कुरा बुझिन्छन्। विचारार्थ ती अभिलेखको अलिकता अंश यहाँ उद्धृत गरिन्छ—

"......सीमापरिच्छिन्नस्यास्य स्थानस्य.....विधारणादिपीडाहेतोर्न कैश्चिद.... पाञ्चालिकैरेव गृहीतो राजकुलस्यार्पणीय....दण्डार्हस्य उत्तमसाहस....तेषां पणपुराण देया......पाञ्चालिकानां प्रदातव्या यस्तु द्रव्यं न प्रयच्छेत्....षट्पणपुराणा....."

(ज्ञानेश्वरको अभिलेखबाट)

(......चार किल्ला छुट्टयाइएको यो ठाउँको.....छेकथुन आदि दुःख दिन कसैले पनि ....पाञ्चालिकहरूले नै समातेर राजदरबारमा बुझाउनू.....दण्ड गर्नुपर्नेलाई उत्तमसाहस (दण्ड गर्नू)....तिनीहरूलाई दिनुपर्ने पणपुराण....पाञ्चालिकहरूलाई दिनू। जसले दिनुपर्ने रकम दिंदैन....६ पणपुराण (दण्ड गर्नू....)

नक्साल नारायणचौरको अभिलेखमा पाञ्चालीबारे यस्तो उल्लेख परेको छ—

"......भट्टाधिकारप्रभृतीनां सर्व्वाधिकाराणामप्रवेश....सीमनि समुपस्थितकार्याणां स्थान.....कार्याणां च स्वयं पाञ्चालिकानामेव न्यायावलोकम................व्यवहारपरिनिष्ठितजातं द्रव्यस्य षड्भागं पाञ्चालिकानां दातव्यं यस्तु द्रव्यं न प्रयच्छेत्स्वस्थानवास्तव्यस्यान्यस्थानीयस्य च धारणकस्यात्रैव रोधोपरोधो भवेत्। यस्तु कुदृष्टमिति कार्यमस्य ततो रोगमाचौ दौवारिकस्यावेदनीयं तेनापि श्रीमत्पादीयान्तरासनकरणे यथामासं रोपणीयम्...प्रतिवर्षं स्थानदौवारिकस्य पणपुराणसहस्रमेकं पाञ्चालिकैर्देयम्....."

(......भट्टाधिकरण आदि सबै अधिकरणले पस्न नपाउने गरिएको छ। ...यस इलाकाभित्र आइपरेका मुद्दामामिलाहरू र स्थानीय...मुद्दामामिलाहरूको स्वयं पाञ्चालिकहरूले नै न्यायपूर्वक हेरी छिनफान गर्नू। ....मुद्दामामिला छिन्दा उठेको रकमको ६ भागको १ भाग पाञ्चालिकहरूलाई दिनू। जसले दिनुपर्ने रकम दिंदैन; यस इलाकामा बस्ने वा अर्को इलाकामा बस्ने भए पनि नतिर्नेलाई छेकथुन यहीं गर्नू। जसले मुद्दा राम्ररी हेरिएन भन्ने (उजूरी गर्छ,) अनि उसको मुद्दा रोगमाचौ दौवारिककहाँ दर्ता गराउनू। उनले पनि महीनादिनभित्रमा राजाको भित्री इजलासमा जाहेरी गरी निकासा गराइदिनू।...प्रतिवर्ष स्थानदौवारिकलाई पाञ्चालिकहरूले एक हजार पणपुराण बुझाउनू।)

यसबाट स्थानीय मुद्दामामिला छिन्ने काम पाञ्चालिकहरू गर्दथे। ग्राम पाञ्चालीले मुद्दा छिनेकोमा चित्त नबुझे राजकुलमा गई उजूरी गर्न पाइन्थ्यो। मुद्दा मामिला छिन्दा उठेको रकमको छ भागको एक भाग पाञ्चालिकहरूले पाउँथे; पाञ्चालिकहरूले निकै ठूलो रकम स्थानदौवारिक–लाई बुझाउनुपर्थ्यो। अपराधीलाई छेकथुन गर्ने काम पनि पाञ्चालीले गर्दथ्यो आदि कुरा यताबाट थाहा पाइन्छ।

चोरी, हत्या, परस्त्रीगमन, राजद्रोह आदि ठूलठूला अपराध 'पञ्चापराध' भित्र पर्दथे। माथि गएको बूढानीलकण्ठको अभिलेखमा 'पञ्चापराध' को निमित्त सरकारी अधिकारीहरूले यहाँ नपस्नू भनी स्थानीय पाञ्चालीलाई सो अधिकार सुम्पिएको छ। भृङ्गारेश्वरको अभिलेखमा सारा सरकारी अधिकरणले गर्ने काम स्थानीय पाञ्चालीलाई नै सुम्पिएको छ। अरू अभिलेखमा पनि ग्रामपाञ्चालीलाई प्रशासनसम्बन्धी अधिकार सुम्पिएको पाइन्छ। 'लेख्यदान' सम्बन्धी अधिकार पनि पाञ्चालीले पाएको थियो। यसरी मुद्दामामिला छिन्ने र अरू प्रशासनसम्बन्धी केही काम पनि पाञ्चालीले गर्दथ्यो भन्ने थाहा पाइन्छ।

पाञ्चालीको अर्को काम आफ्नो इलाकाको सुखसुबिधाको लागि कुलो पानीको बन्दोबस्त गर्नु, देवमन्दिर आदिको निर्माण र तिनको हेरचाह गर्नु आदि हुन्थ्यो। सरकारद्वारा बनाइदिएका कति कुराको हेरचाहको भारा पाञ्चालीलाई नै सुम्पिएको हुन्थ्यो। कुनै व्यक्तिले धारा आदि बनाई त्यसको हेरचाहको काम पाञ्चालीलाई सुम्पिदिएको उल्लेख पाइन्छ। इत्यादि कुरालाई देखाउने धेरै अभिलेख पाएका छन्। तिनमा केहीको संक्षिप्त चर्चा मात्र यहाँ गरिन्छ।

पाटन सुनधाराको अभिलेखमा अंशुवर्माले माटिङग्रामको देवमन्दिरको जीर्णोद्धार गरी त्यसको हेरचाहको लागि आयस्ताको समेत बन्दोबस्त गरिदिई माटिङ ग्रामपाञ्चालीलाई सो सुम्पिदिइएको छ।

पशुपति गणेशस्थानको अभिलेखमा अंशुवर्माले आफ्नी बहिनी, भान्जीहरूले स्थापना गरेका शूरभोगेश्वर, लडितमहेश्वर, दक्षिणेश्वरको हेरचाहको काम अधःशालाको पाञ्चालीलाई सुम्पेको कुरा परेको छ।

वटुको अभिलेखमा त्यहाँको पाञ्चालीले धारा बनाएको हुनाले प्रसन्न भएर अंशुवर्माले कर माफी गरिदिएको, पञ्चापराधसम्बन्धी मुद्दा पनि पाञ्चालिकले नै हेर्न पाउने गरिदिएको कुरा परेको छ।

बलम्बू मालटारको अभिलेखमा धारा बनाएको हुनाले स्थानीय पाञ्चालीलाई जिष्णुगुप्तले निगाह गरिदिएको कुरा परेको छ।

मीननारायण भैरव ढोकाको अभिलेखमा कुलो जीर्णोद्धार, देवताको पूजा गर्ने आदि काम गीटा पाञ्चालीलाई सुम्पेको उल्लेख परेको छ।

बलम्बूको अभिलेखमा जिष्णुगुप्तले जोलिप्रङग्राममा धारा बनाई त्यसको हेरचाहको काम जोलिप्रङग्रामपाञ्चालीलाई सुम्पेको तथा कर माफी गरिदिएको कुरा परेको छ।

सुनागूठी भृङ्गारेश्वरको अभिलेखमा देवता बनाउन ठूलो ढुङ्गा तानेर ल्याइदिएको हुनाले स्थानीय पाञ्चालीलाई विष्णुगुप्तले प्रशासनसम्बन्धी अधिकार सुम्पेको उल्लेख छ।

यसै गरी अरू अभिलेखमा पनि यस्ता उल्लेख पाइन्छन्। कुनै पाञ्चालीको अधीनमा साझा बारी, जग्गा जमीन पनि हुन्थे। यसको उल्लेख ठाउँ ठाउँमा आएको छ। उदाहरणार्थ पाटन च्यासलटोलको अभिलेखलाई देखाउन सकिन्छ। त्यसमा 'लोंप्रिपाञ्चालीवाटिकायाः पश्चिमोत्तर–ङ्गत्वा.... पुनुपाञ्चालिकाक्षेत्रस्य च पश्चिमोत्तरङ्गत्वा..... लोंप्रिप्राञ्चालिकाक्षेत्रस्य पश्चिमोत्तरङ्गत्वा' भन्ने उल्लेख परेको छ।

लिच्छविकालमा पाञ्चालीपद्धतिले जनजीवनमा बलियो जग हालेको हुनाले लिच्छवि शासकहरू बिलाएपछि पनि यस पद्धतिले आफ्नो अस्तित्व केही मात्रामा कायम नै गरिराख्यो। राजकाजमा भएको आमूल परिवर्तनले पनि यस पद्धतिलाई समाप्त गर्न सकेन। यसो हुँदा मध्यकालमा पाञ्चालीपद्धति केही अंशमा चलेर आइ नै रह्यो।

यसरी लिच्छविकालको शासनपद्धतिमा पाञ्चालीको पनि विशेष स्थान रहेको हुनाले अंशुवर्माले 'पाञ्चाली'लाई सन्मानस्वरूप भाग नियत गरिदिएका हुन्।

लिच्छविकालको जनजीवनमा 'गोष्ठीप्रथा' को पनि ठूलो स्थान थियो भन्ने कुराको चर्चा पहिले गरिसकेको छ। यसै हुँदा गोष्ठीका सदस्य गौष्ठिकहरूलाई पनि पाञ्चालीसरह २ पुराण २ पण भाग तोकिएको छ।

लिच्छवि शासकहरूले वर्णव्यवस्था लागू गरेका हुनाले पठन–पाठनमा जिन्दगी बिताउने ब्राह्मणवर्गको समाजमा बढी सन्मान थियो। यहाँ पनि ब्राह्मणहरूलाई सन्मानस्वरूप १ पुराण भाग नियत गरिएको छ।

यहाँ 'सामान्य मनुष्य' भनी राजाद्वारा 'पाञ्चाली' आदिमा समानाधिकारी रूपमा नियुक्त मनुष्यलाई भनिएको बुझिन्छ। त्यस्तालाई 'पाञ्चालिकसामान्य' भनिएको पाइन्छ। 'कृतप्रसाद' भनी राजाद्वारा विशेष निगाह गरिएको अधिकारीलाई भनेको बुझिन्छ।

हाँडिगाउँको यस अभिलेखको अन्त्यमा रहेको पद्यबाट अंशुवर्माको आदर्शबारे निकै प्रकाश पर्छ। यस कारण यस विषयमा पनि अलि विचार गर्नुपरेको छ।

## 'श्रीकलहाभिमानी' उपनाम–ग्रहण–

संसारमा सुखको कुनै निश्चित परिभाषा छैन। जुनसुकै काममा पनि आफूखुशी डुबेर लाग्दा

त्यसबाट मानिस सुखको अनुभव गर्छ। अज्ञ विद्याविषयक काममा मन लाउँदा झन् अनुपम सुखको अनुभव हुने हुन्छ। यसैले 'अकामहत श्रोत्रियलाई जुन सुख हुन्छ; त्यस्तो सुख संसारमा अरू कसैलाई हुँदैन' भनी पहिलेका आचार्यहरूले बोलेर गएका छन् §।

अंशुवर्माले चाहिं 'रातोदिन अनेक शास्त्रको अध्ययन गर्दा तथा व्यवस्था बाँद्धा (ऐन तर्जुमा गर्दा) मलाई अपार आनन्द लाग्छ भनी पशुपतिको अभिलेखमा बोलेका छन्। हुन पनि अंशुवर्मा जति विद्याव्यसनी र व्यवस्था बाँध्न तल्लीन शासक लिच्छविकालमा अरू कोही देखिएका छैनन्। अहिलेसम्म पाइएका उनका जम्मैजसा अभिलेखमा कुनै न कुनै व्यवस्था बाँधेको पाइन्छ। विद्याव्यसनले गर्दा उनको प्रसिद्धि टाढासम्म फैलिएको थियो। उनी मरेर गएपछि पनि उनी विद्वान् थिए भन्ने प्रसिद्धि कायम थियो। यो कुरा चीनिया यात्री युआनच्वाङ्गको यात्रावर्णनबाट थाहा पाइन्छ। युआनच्वाङ्गले यात्रा आरम्भ गरेको वेलामा अंशुवर्माले यस संसारबाट विदा लिइसकेका थिए। तैपनि नेपालमा भरखर भएर गएका राजा अंशुवर्मा विद्यामा ठूलो आदर गर्ने थिए भनी युआनच्वाङ्गले वर्णन गरेर गएका छन्। यसबाट अंशुवर्माको विद्याप्रेमको प्रसिद्धिले युआनच्वाङ्गको मनमा असर पारेको थियो भन्ने स्पष्ट छ। हाम्रो यहाँ पनि अंशुवर्मा विद्वान्, व्यवस्था बाँध्ने राजा थिए भन्ने अनुश्रुति पछिसम्म चलेर आएको थियो। यो कुरा स्थितिमल्लको समयमा संग्रह गरिएको गोपालवंशावलीको वर्णनबाट थाहा पाइन्छ।

ठूलो आदर्श भएका अथवा ठूलो आदर्श देखाउन चाहने राजाहरू आफ्नो आदर्श मिल्दो उपनामले प्रसिद्ध भएका उदाहरण इतिहासमा निकै पाइन्छन्। भारतका प्रसिद्ध मौर्यराजा अशोक 'प्रियदर्शी' नामले प्रख्यात छन्। 'म प्राणी मात्रको असल चाहन्छु; यसैले मनुष्यजातिको साथसाथै पशुजातिपनि सुखी बनोस् भनी मैले मनुष्यचिकित्साशाला र पशुचिकित्साशाला बनाउन लाएको छु' आदि कुरा गुफा, चट्टान, स्तम्भ, शिला आदिमा जतातत्तै अशोकले कुँद्न लाएका छन्। यसैले उनको आदर्शअनुसार 'प्रियदर्शी' नाम मिल्दो छ। यसै गरी आफ्नो आदर्शअनुसार द्वितीय चन्द्रगुप्त 'विक्रमादित्य' नामले, उत्तरभारतका राजा हर्षवर्द्धन 'शीलादित्य' नामले प्रसिद्ध छन्।

यसै गरी विद्याप्रेमी हाम्रा अंशुवर्माले पनि आफ्नो आदर्शअनुसार 'श्रीकलहाभिमानी' भन्ने उपनाम लिएका थिए। यो कुरा तात्कालिक अभिलेखबाट थाहा पाइन्छ। 'श्रीकलहाभिमानी' उपनामको पहिलो उल्लेख हाँडिगाउँको यस अभिलेखमा भएको छ। यहाँ अंशुवर्मा नामको साथै 'श्रीकलहाभिमानी' उपनामको पनि उल्लेख भएको छ। जस्तै—

"प्रजाहितार्थोद्यतशुद्धचेतसां (शुव)र्मणा श्रीकलहाभिमानिना।
कथम्प्रजा मे सुखिता भवेदि (ति) प्रिवव्यवस्थेयमकारि धीमता ॥।"

पछि पछि त खाली 'श्रीकलहाभिमानी राजा' भन्ने बित्तिकै अंशुवर्मालाई बुझाएको देखिन्छ। पछिका अभिलेखमा 'श्रीकलहाभिमानी राजा' मात्रै भनिएको पाइन्छ। पशुपति वनकालीको

---

§ तैत्तिरीयोपनिषद्को २ बल्ली ८ अनुवाक हेर्नुहोस्।

अभिलेखमा 'भार्य्या श्रीकलहाभिमानिनृपते:' भन्ने उल्लेख परेको छ। फर्पिङको अभिलेखमा राजा श्रीकलहाभिमानि....स श्रीमान् कलहाभिमानिनृपतिः सर्वज्ञतामाप्नुयात्' भन्ने उल्लेख आएको छ। मूलकोटको खण्डित अभिलेखमा पनि 'श्रीकलहाभिमानिनृपति:' को उल्लेख छ। जिष्णुगुप्तको पालाको नीलवाराहीको अभिलेखमा पनि 'श्रीकलहाभिमानिनृपतिभ्रातृस्नुषा' को उल्लेख आएको छ।

यसरी अंशुवर्माले 'श्रीकलहाभिमानी' भन्ने उपनाम लिएका थिए; पछि उनी त्यही उपनामले प्रसिद्ध भए भन्ने कुरा निश्चित भएको छ। अब अंशुवर्माको आदर्शसंग 'श्रीकलहाभिमानी= लक्ष्मीसंग कलह गर्न गर्व गर्ने' भन्ने यो उपनाम कसरी मिल्दो भयो भन्ने कुराको पनि अलिकता विचार गर्नुपरेको छ।

विद्या पढ्नु र पैसा कमाउनुको बाटो बेग्लाबेग्लै हुन्छ। यसैले लक्ष्मी र सरस्वतीको मेल संयोगले कसैकसैमा मात्र हुन आउँछ। अरू सब थोक परिपञ्चलाई छोडी आफ्नो जीवनको धेरै भाग बिताइसकेपछि मात्र मानिसले अलिकता सच्चा विद्या हासिल गर्छ। यसरी कठिन परिश्रमले आफ्नो जिन्दगीको धेरै भाग खर्च गरेर कमाएको विद्याले त्यस मानिसमा स्वत: केही आत्मगौरवको भाव जगाइदिन्छ तथा त्यसले गर्दा अरूको सामुन्ने झुक्न नसक्ने अवस्थामा उसलाई पुर्‍याइदिन्छ। पैसा भन्ने कुरा पनि सजिलैसंग जम्मा गर्न सकिने कुरा होइन। पैसा कमाउन पनि अनेक परिपञ्चको आवश्यकाता रहन्छ तथा जिन्दगीको केही भाग त्यस काममा खर्च गर्नुपर्ने हुन्छ। विद्या पढ्नामा तल्लीन भएका विद्वान्‌को हातबाट यस्तो काम हुनु गाह्रो हुन्छ। फेरि धनी मानिसमा पनि एक किसिमको गर्वको भावना पैदा भएको हुन्छ। उसलाई धनी मात्र बनेर नपुगी 'म विद्वान् धर्मात्मा दानी छु' भनी लोकमा प्रख्याति फैलियोस् भन्ने इच्छा पनि धनीमा पैदा हुने हुन्छ। यसैले विद्वान्‌लाई गरीब देखेर ऊ पैसाको बलले किन्ने प्रयास गर्छ। यसरी प्राय: लक्ष्मी र सरस्वतीको कलह हुने गर्छ। यस अवस्थामा लक्ष्मीको अगाडि झुक्ने सरस्वतीको केही भाउ हुंदैन। यसैले विद्यालाई सच्चा विद्याकै रूपमा जोगाई राख्न चाहने विद्वान्‌ले लक्ष्मीसंगको कलहलाई पनि सहर्ष स्वागत गर्न सक्ने स्थितिमा आफूलाई पुर्‍याउनु आवश्यक हुन आउँछ।

यसै हुँदा विद्याप्रेमी अंशुवर्माले पनि 'श्रीकलहाभिमानी=लक्ष्मीसंग कलह गर्न गर्व गर्ने' अर्थात्' सरस्वतीका भक्त भन्ने उपनाम लिन मन पराएको देखिन्छ। "मैले पैसा कमाएको छैन; तर यस कुरामा मलाई ग्लानि छैन; बरु गर्व छ" भन्ने भाव पनि यसबाट अंशुवर्माले झल्काएका छन् ‡।

## आचार्य कौटल्यको विचारको प्रभाव—

आचार्य कौटल्यको अर्थशास्त्र राजशास्त्रमध्ये एक उत्कृष्ट ग्रन्थ मानिएको छ। त्यसमा

‡ 'पूर्णिमा' १ अङ्कमा 'श्रीकलहाभिमानी राजा' भन्ने मेरो निबन्ध छापिएको छ।

भावुक दृष्टिकोणले विचार नगरी विद्वत्तापूर्ण वास्तव दृष्टिकोणले राजकाजको विवेचना गरिएको छ। यसै हुँदा हाम्रा विद्वान् शासक अंशुवर्मालाई पनि कौटल्यको विचारधाराले प्रभाव पारेको देखिएको छ। कौटलीय अर्थशास्त्र र अंशुवर्माका अभिलेखहरू अलि गहिरिएर विचार गरे यो कुरा स्पष्ट बुझिन्छ। हाँडिगाउँको यस अभिलेखले पनि उक्त कुराको पुष्टि गर्छ। राजाको दिनचर्याको वर्णन गर्दै जाँदा अन्त्यमा आचार्य कौटल्यले उत्तम शासकको 'आदर्श र कर्तव्य' को चर्चा यसरी गरेका छन्–

"प्रजासुखे सुखं राज्ञः प्रजानां च हिते हितम् ।
नात्मप्रियं हितं राज्ञः प्रजानां तु प्रियं हितम् ।१।१९।३९।।"

कौटल्यको यही विचारको प्रभावमा परी अंशुवर्माले पनि हाँडिगाउँको यस अभिलेखको अन्त्यमा-

"प्रजाहितार्थोद्यतशुद्धचेतसां (शुव) र्मणा श्रीकलहाभिमानिना ।
कथम्प्रजा मे सुखिता भवेदि (ति प्रि) यव्यवस्थेयमकारि धीमता ।"

यसो लेखाएका हुन्

वर्णव्यवस्था वैदिकपरम्परासम्मत व्यवस्था हो; यो आर्यमर्यादा पनि हो; यसको विपरीत धर्मसङ्कर पैदा भयो भने लोकको नाश हुन्छ भनी आचार्य कौटल्यले 'त्रयीस्थापना' प्रकरणमा जोड दिई लेखेका छन्। अंशुवर्माले पनि धर्मसङ्कर नहोस् भन्नाका लागि विशेष व्यवस्था मिलाएका थिए। टिस्टुङको अभिलेखमा 'अनतिवृत्तार्यमर्यादासेतु' भन्ने विशेषण आफूमा लगाई अंशुवर्माले कौटल्यको विचारको स्पष्ट अनुसरण गरेको देखिन्छ। यसको चर्चा माथि गरिसकेको छ।

'राजव्यसन' आइपरेको वेलामा शक्तिशाली मन्त्री भारादारले सारा अधिकार अँठ्याई स्वयं राजा बन्नू; आएको मौका छोड्नुहुँदैन भन्ने आचार्य भारद्वाजको मत थियो [1]। तर कौटल्यले यसो गर्नुहुँदैन; यसबाट जनता भड्किने सम्भावना हुन्छ; यसो गर्नु उचित कुरा पनि होइन; फेरि राजा बन्न सफलै भइन्छ भन्ने कुनै निश्चित छैन भन्ने भाव यसरी प्रकट गरेका छन्–

"प्रकृतिकोपकमधर्मिष्ठमनैकान्तिकं चैतदिति कौटल्यः" ५।६

---

१. आचार्य भारद्वाजको मत यस प्रकारको छ–

"प्रम्रियमाणे वा राजन्यमात्यः कुल्यकुमारमुख्यान् परस्परं मुख्येषु वा विक्रामयेत्। विक्रान्तं प्रकृतिकोपेन घातयेत् । कुल्यकुमारमुख्यानुपांशुदण्डेन वा साधयित्वा स्वयं राज्यं गृहणीयात्। राज्यकारणाद्धि पिता पुत्रान् पुत्राश्च पितरमभिद्रुह्यन्ति किमङ्ग पुनरमात्यप्रकृतिर्ह्येकप्रग्रहो राज्यस्य । तत् स्वयमुपस्थितं नावमन्येत। स्वयमारूढा हि स्त्री त्यज्यमानाभिशपतीति लोकप्रवादः।

कालश्च सकृदभ्येति यं नरं कालकांक्षिणम् ।
दुर्लभः स पुनस्तस्य कालः कर्म चिकीर्षतः ।। कौ. अ. ५ अधि. ६ अ.

कौटल्यको यस विचारको असर अंशुवर्मामा प्रशस्त मात्रामा परेको थियो। यसै हुँदा प्रकृतिकोप नहोस् भन्ने कुरामा उनले बडो सूक्ष्मदृष्टि दिएका थिए। सारा अधिकार आफ्नो हातमा आएपछि पनि एकैचोटि आफूलाई राजा घोषित नगरी क्रमशः श्रीसामन्त, श्रीमहासामन्त, श्रचंशुवर्मा, महाराजाधिराज श्रचंशुका रूपमा माथि चढ्दै जानामा पनि कौटल्य–दर्शनले नै उनलाई मार्गदर्शन गरेको थियो। आफूपछि लिच्छविकुमार उदयदेव गद्दीमा बसून् भनी उनलाई 'युवराज' घोषित गर्नामा पनि कौटल्यको विचारले काम गरेको थियो। यस विषयमा 'युवराज वा क्रमेण राज्यभार-मारोप्य राजव्यसनं ख्यापयेत्' ५।६ भनी कौटल्यले बोलेको कुरा स्मरणीय छ।

अरू पनि यस्ता उदाहरण देखाउन सकिन्छ। अंशुवर्माको टकमा बाछोसहित गाई अङ्कित गराइनुमा समेत कौटल्यको उक्तिको असर परेको हो कि भन्ने देखिएको छ। कौटल्यले राजाको दिनचर्याको वर्णन गर्दै जाँदा 'सवत्सां धेनुं च प्रदक्षिणीकृत्योपस्थानं गच्छेत् १।१८' भनी लेखेका छन्।

यी अलिकता उदाहरणबाट पनि हाम्रा विद्वान् अंशुवर्मामा आचार्य कौटल्यको विचार–धाराले प्रभाव पारेको थियो भन्ने स्पष्ट देखिएको छ जस्तो मलाई लाग्छ।

★

[७८ संख्या]

# साँगाको अंशुवर्माको अभिलेख

भक्तपुरबाट दुइ कोश जति पर प्रसिद्ध बस्ती सांगा रहेको छ। सांगाबजारभन्दा अलि पूर्वतिर खेतमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३३ अङ्गुल लम्बा, १८ अङ्गुल चौडा छ। यसको शिरोभागमा दुइ चक्र अङ्कित छन्। यहाँ संवत् ३२ छ।

लेभीद्वारा १५ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ३७ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' ७ अङ्कमा गौतमवज्र वज्राचार्यद्वारा पनि यो छापिएको छ।

## मूलपाठ

१. कर्णालङ्काररौद्रश्वसदहिपवनव्यस्तपर्यस्त (के) शं[१]
२. प्रत्यग्रच्छेदतापा (न्वि) तरुधिरशिरोमालभा...... [२]
३. उच्चैर्मुक्ताट्टहासम्परिविगलदसृङ्नागचर्मोत्तरी (यं) [३]
४. पायात्तद्रूपमैशं हिमगिरितनयाभीतभीतेक्षितं वः [४]
५. स्वस्ति क्षितितलतिलकभूतात्कुतूहलिजनतानिमेष-
६. नयनावलोक्यमानात्कैलासकूटभवनात्प्रजाहित-
७. समाधानतत्परो भगवत्पशुपतिभट्टारकपादा-
८. नुगृहीतो बप्पपादानुध्यातः श्रीमहासामन्तांशुवर्मा

---

नोलीका पाठ–

१. – – लङ्काररौद्रेश्वर – – पवनव्यस्त – – – – –
२. प्रत्याश्रम – – – – – – – रुचिरशिरोमालभा – – – – (।)
३. उच्चैर्मुक्ताट्टहास – – – – – दसृङ्नागचर्मोत्तरी–
४. पायात्तद्रूपमेषा हिमगिरितनया – तिते – – – – (॥)

९. कुशली शङ्गाग्रामनिवासिनः कुटुम्बिनः प्रधानपु-
१०. रस्सरान् कुशलमाभाष्य समाज्ञापयति विदितम्भव-
११. तु भवतामस्माभिः हाम्हुं वस्तु[१] द्वादश तैलघटाः कूम्हुं
१२. वस्तु[२] च पञ्च भवताम्पीडाकरमित्यवगम्य युष्मत्पी-
१३. डापनोदार्थमद्याग्रेण प्रतिमुक्तास्तदेवमवसाय
१४. नातः परेणैतद्वस्तु तैलङ्कस्यचिद् देयं भविष्यद्भिरपि
१५. भूपतिभिः पूर्वराजकृतप्रसादानुवर्त्तिभिरेव भवि-
१६. तव्यमिति स्वयमाज्ञा दूतकश्चात्र सर्वदण्डनायको
१७. राजपुत्रविक्रमसेनः संवत् ३२ भाद्रपदशुक्लदिवा १
१८. तैल्यशालासु[३] करणीयं ...... धिकरणविर्वाजि[४]
१९. तानि ॥

# अनुवाद

कानमा गहनाको रूपमा लाइराखेका डरलाग्दा सर्पहरूको फुत्कारको हावाले जटा छ्याप्त-व्याप्त भएको, भरखरै काटिएको ताततातो रगत चुहिरहेको मुण्डमाला लाएको, ठूलो स्वरले खित्का छोडेर हाँसिरहेको , रगत चुहिरहेको हात्तीको छाला ओढेको, पार्वतीले डराई डराईकन हेरिएको महादेवको रूपले तिमीहरूलाई रक्षा गरोस् ।

कल्याण होस् । पृथ्वीतलको टीका जस्तो भएको, कुरिकुरि लागेका दुनियाँहरूले आँखा झिम नगरेर हेरिएको कैलासकूटभवन (दरबार) बाट दुनियाँको हित हुने काममा लागेका, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम भएका, श्रीमहासामन्त अंशुवर्माबाट शङ्गा (सांगा) ग्राममा बस्ने गृहस्थीहरूलाई यथोचित कुशल मङ्गल सोधेर आज्ञा भएको छ ।

तिमीहरूको दुःख बुझेर हाम्हुं भन्ने वस्तु, तेलका बाह्र घडा,कूम्हुं भन्ने वस्तु पाँच तिमीहरूको सुबिधाको लागि आजदेखि छोडिदिएका छौं । यो कुरा तिमीहरूलाई थाहा होस् । यो कुरा बुझेर अबदेखि यी वस्तु र तेल कसैलाई बुझाउनुपर्दैन ।

पछिका राजाहरूले पनि पहिलेका राजाहरूले गरेर गएको निगाहको ख्याल राख्नुपर्दछ । यो मेरो आफ्नै आज्ञा हो ।

---

नोलीका पाठ–

१. ढह्मुं (वस्तु)    २. च्यस्तु

३. ––शाला सुकरणीयं–इह    ४. अधिकरणविभाजितानि

यहाँ दूतक सर्वदण्डनायक राजपुत्र विक्रमसेन छन्। संवत् ३२ भाद्र शुक्ल प्रतिपदा।

तैल्यशाला (कोल) मा गर्नुपर्ने काम .......... अधिकरणबाट छुटाइएका छन्।

**व्याख्या-**

यस अभिलेखको उठानमा मङ्गलाचरणको रूपमा सर्पको कुण्डल तथा मुण्डमाला आदि लाएका महादेवको रौद्र रूपको वर्णन गरिएको छ। यो शिलालेख रहेको ठाउँभन्दा अलिकता पर *विकटेश्वर महादेवको मन्दिर छ। त्यहाँको हाल रहेको शिवलिङ्गको आकार–प्रकार हेर्दा* प्राचीन मूर्ति जस्तो देखिदैन। तर यस शिलालेखमा रौद्ररूपको महादेवको वर्णन परेको र यो ठाउँ विकटेश्वर महादेवको स्थान भनी अहिलेसम्म पनि प्रसिद्ध भएको हुनाले लिच्छवि-कालमा यो शिलालेख रहेको ठाउँको आसपासमा यहाँ वर्णन गरिएअनुसारको महादेवको मूर्ति थियो कि भन्ने अनुमान हुन्छ।

यो सनदपत्र कैलासकूट भवनबाट जारी गरिएको छ। भव्य ढङ्गले बनाइएको हुनाले सो नयाँ दरबारको शोभा देखेर मानिसहरू छक्क पर्थे; यो राजदरबार हेर्ने कुतूहल जनतामा यस वेला पनि उत्तिकै थियो भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ। कैलासकूटभवनको चर्चा माथि गरिसकेको छ।

राजाको कर्तव्य प्रजाको हित गर्नु हो भन्ने आदर्श अंशुवर्माको थियो। 'प्रजाहितसमाधानतत्पर' भन्ने विशेषण लगाई यस अभिलेखमा पनि सो कुरा व्यक्त गरिएको छ।

यस ताका सांगाभेकमा तैल्यशाला (कोल) हरू थिए। त्यहाँ तेलको उत्पादन गर्ने काम हुन्थ्यो। ती कोलका धनीले केही वस्तु (जिनिसरूपमा बुझाइने करविशेष) र बाह्र घडा तेल करको रूपमा सरकारलाई बुझाउनुपर्थ्यो। तेल उत्पादनलाई प्रोत्साहन दिन अंशुवर्माले सो रकम माफी गरिदिएको कुरा यस अभिलेखमा परेको छ। यताबाट लिच्छविकालमा साँगा भेकमा तेलको व्यवसाय राम्रोसंग चलेको थियो भन्ने देखिन्छ।†

यहाँ 'वस्तु' को रूपमा सरकारलाई बुझाउनुपर्ने चीजको नाउँ हाम्हुं, कूम्हुं दिइएको छ। तैल्यशाला (कोल) को प्रसङ्गमा आएको 'हाम्हुं' वस्तु तिल हो भन्ने बुझिन्छ। नेवारीभाषामा तिललाई अहिले 'हामो' भनिन्छ। कूम्हुं' को अर्थ भने खुल्न सकेको छैन।

---

† सांगामा अहिलेसम्म पनि केही मात्रामा तेलको उत्पादन हुन्छ। तैल्यशालाको अस्तित्व अलि कायमै छ।

# पाटन सुनधाराको अंशुवर्माको अभिलेख

पाटन सुनधारामा यो अभिलेख कुँदिएको शिलापत्र रहेको थियो। हाल यो शिलापत्र राष्ट्रिय संग्रहालयमा लगी राखिएको छ। यसको अभिलेख कुँदिएको भाग २९ अङ्गुल लम्बा १६ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ३४ छ।

सेसिल बेन्डालद्वारा २ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ३८ संख्याको रूपमा पनि यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति कैलासकूटभवनाद्भगवत्पशुपति (भट्टारकपादा)
२. नुगृ (हीतो) बप्पपादानुध्यातः श्री (महासामन्तांशुवर्म्मा)
३. कुशली वर्तमानभविष्यतो मा.................(कु)
४. शलमाभाष्य समाज्ञापयति विदितम्भवतु भवतां (यथास्माभि)
५. र्माटिन्देवकुलमर्धविनिपतितेष्टकापङ्क्तिविवरप्रविष्ट-
६. नकुलकुलाकुलितमूषिकासार्थदूरविघटितनिरव-
७. शेषद्वारकपाटवातायनादिजीर्णदारुसंघातं यत्नतः
८. प्रतिसंस्कार्यं तस्य दी (र्घं) तरपश्चात्कालसौस्थित्यनिमित्तं ...
९. तदक्षयनीविप्रतिबद्धमेवं माटिङग्रामस्य दक्षिणतो राज-
१०. भोग्यतामापन्नं विंशतिकया चतुःषष्टिमानिकापिण्डकं क्षे-
११. त्रन्दक्षिणपश्चिमतश्च षण्मानिकापिण्डकम्माटिङग्रामपा-
१२. ञ्चालिकेभ्यः प्रतिपादितमेवंवेदिभिर्न कैश्चिदस्मत्पाद-
१३. प्रतिबद्धजीवनैरन्यैर्वायन्धर्माधिकारोन्यथा करणीयो
१४. यस्त्वेतामाज्ञामुल्लङ्घ्यान्यथा कुर्यात्कारयेद्वा तं वयन्न म-

१५. र्षयिष्यामो भविष्यद्‌भिरपि भूपतिभिर्धर्मगुरुभिर्धर्माधि-

१६. कारप्रतिपालनादृतैर्भवितव्यम् संवत् ३४ प्रथमपौष-

१७. शुक्लद्वितीयायाम् (दू)तकोत्र महाबलाध्यक्षविन्दुस्वामी

# अनुवाद

कल्याण होस् । कैलासकूटभवनबाट भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, श्रीमहासामन्त अंशुवर्माले अहिले बहाल रहेका र पछि बहाल हुनेसमेत......लाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ।

टुटे फुटेका इँटका अन्तरबाट पसेका न्याउरीमूसा र मूसाका बथानले भताभुङ्ग पारिदिएको ढोकाका खापा झ्यालहरू केही बाँकी नरहेको, काठपातहरू जीर्ण भइसकेको माटिङ (ग्राम) को देवमन्दिरलाई जनतसंग जीर्णोद्धार गरेर सो देवमन्दिर पछि पछि धेरै कालसम्म राम्रो हालतमा रहिरहोस् भन्नाका लागि माटिङ ग्रामको दक्षिणतर्फ रैकरको रूपमा रहेको चौसट्ठी बीस (१२८०) मानिका कूत आउने खेत र दक्षिण–पश्चिमतर्फ ६ बीस(१२०) मानिका कूत आउने खेत कोइला-काँटा गरी माटिङ्‌ग्रामका पाञ्चालिकहरूलाई सुम्पिएको छ । यो कुरा तिमीहरूलाई थाहा होस् ।

तसर्थ यो कुरा थाहा पाएर हाम्रो तर्फबाट जीविका चलाउनेहरूले (सरकारी कर्मचारीहरूले) र अरूहरूले पनि कसैले यो धर्मको कामलाई अन्यथा नगर्नू। जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला; त्यसलाई हामी सहनेछैनौं। पछि हुने राजाहरूले पनि नियम कानूनलाई ठूलो संझेर धर्मका कामको पालना आदरपूर्वक गर्नुपर्छ।

संवत् ३४ प्रथमपौष शुक्ल द्वितीया। यस बातका दूतक महाबलाध्यक्ष विन्दुस्वामी छन्।

**व्याख्या-**

अंशुवर्मा अरूभन्दा अलि बेग्लै खालका शासक थिए। उनको सोचाइ, कामकार्बाइ अरूको भन्दा अलि भिन्नै किसिमको थियो। धर्ममा उनको श्रद्धा, भक्ति थियो। तर अरू शासकहरूले जस्तै उनले देवतास्थापना गरेको, नयाँ देवमन्दिरको निर्माण गरेको उदाहरण देखापरेको छैन। बरु पुराना देवमन्दिरको जीर्णोद्धार, तिनको सुरक्षा आदिमा भने उनले ध्यान दिएका थिए। अघिका राजाहरूले गरेर गएका कीर्तिहरूको सुरक्षा, हेरचाह गरिदिनू भनी आचार्य कौटल्यले बोलेका छन्। अंशुवर्माले यसैको अनुसरण गरेको देखिन्छ। यस कुराको पुष्टि यस अभिलेखले पर्छ।

माटिङ ग्राममा पुरानो देवमन्दिर थियो। जीर्ण हुँदा सो देवमन्दिर भत्किएको थियो; यसका झ्याल, ढोकासमेत नष्ट भइसकेका थिए। सो कुरा अंशुवर्मामा जाहेर भयो। अनि उनले

सो देवमन्दिरको जीर्णोद्धार राम्ररी गराए । हेरचाहको प्रबन्ध नभए पछि सो देवमन्दिर फेरि बिग्रने सम्भावना हुँदा हेरचाहको लागि निकै ठूलो 'कोश' खडा गरियो र सो मन्दिरको हेरचाहको अभिभारा माटिङ्ग्रामपाञ्चालीलाई सुम्पिदिइयो । यस अभिलेखमा यही कुरा परेको छ ।

यसरी नयाँ नयाँ देवमन्दिर बनाउनुसट्टा पहिलेदेखि भएकाले सुरक्षा हुनु राम्रो हो भन्ने विचार अंशुवर्माको देखिन्छ । लिच्छविराजाको पुरानो दरबारको जीर्णोद्धार गरेको कुराले पनि अंशुवर्माको उक्त विचारको केही पुष्टि गर्छ । चाँगुनारायणको सुनको कवच र गरुडको जीर्णोद्धार गरेको कुरा-बाट पनि उक्त नीतिको झलक पाइन्छ ।

हाम्रो यहाँ बीस, बीसको दरले गिन्ती गर्ने चलन केही अंशमा अहिले पनि चलेको पाइन्छ । विशेष गरेर आइमाईहरू यसरी गिन्ती अझै गर्दछन् । श्री ५ पृथ्वीनारायण शाहको उपदेशमा परेको 'बाह्रबीसको गांठो पारिदिञ्या' आदि उल्लेखले त्यस वेला बीस, बीस गरी गणना गर्ने चलन लोकमा प्रचलित थियो भन्ने देखाउँछ । बीस, बीस गरी गिन्ती गर्ने यो चलन लिच्छविकालमा पनि प्रचलित थियो भन्ने देखिन्छ । यस अभिलेखमा परेको 'विंशतिकया चतुःषष्टिमानिकापिण्डकं क्षेत्रम्' यस वाक्यले उक्त कुरा देखाउँछ । यो चलनको पुष्टि अरू अभिलेखबाट पनि हुन्छ । पाटन मङ्गलवजारको भारविको अभिलेख, नघल श्रीघविहारको अभिलेख, देउपाटनको नरेन्द्रदेवको पालाको अभिलेख आदिमा पनि यो कुरा परेको छ ।

यस अभिलेखमा परेका अरू विषयको चर्चा माथिका अभिलेखमा परिसकेका हुनाले यहाँ दोहऱ्याउनु आवश्यक देखिदैन ।

# ज्याबहालनिरको अभिलेख

काठमाडौं जैसीदेवल र ज्याबहालको बीचमा सडककै छेउमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग २८ अङ्गुल लम्बा, १५ अङ्गुल चौडा छ। यसको शिरोभाग खण्डित छ। यहाँ संवत् ५३५ छ।

भगवान्लालद्वारा ४ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ४० संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ...... देव ... ......
२. ... ...... न पुण्यो ......
३. .. ......यं वः प्रसादीकृ (तः) ...
४. ...... नुज्ञः फृथूल्क्षेत्रम्पूर्व ..
५. ... मङ्गलस्य क्षेत्रम् ततो भरताश्र (म) ...
६. .... तुलक्षेत्रम्ततस्तेग्वल्प्रा ... ...
७. आदित्यगुप्तस्य क्षेत्रम् पूर्वद.... ......
८. ... दृाक्षेत्रम् ततस्तेग्वलनारायण .. ...
९. —स्तेग्वलप्रदीपगौष्ठिकानाम् तस्य भूमेर्दक्षिण ...
१०. मेर्दक्षिणराजकुलस्य दक्षिणपश्चिमेन .....
११. वीपाञ्चालिकानाम् पश्चिमेन पर्वत ......
१२. ...पश्चिमोत्तरेण पर्वतभूमिर्दक्षिण ... ...

१३. . . . परिक्षिप्तेयम्भूमिरित्यवगम्य न कैश्चिदस्म-
१४. त्पादोपजीविभिरयम्प्रसादोन्यथा करणीयो य(स्त्वेता)-
१५. माज्ञामनादृत्यान्यथा कुर्यात्कारयेद्वा तमहमुत्पथ(गा-)
१६. मिनं नियतमनुशासितास्मि भविष्यद्भिरपि भूप(तिभिर्गु)
१७. रुकृतप्रसादानुवर्त्तिभिरेव भवितव्यमिति दूत(कश्चा)
१८. त्र राजपुत्रविक्रमसेनः संवत् ५३५ श्रा(व)
१९. (ण)शुक्लदिवासप्तम्याम् ॥

# अनुवाद

.....देवबाट ..... ..... तिमीहरूलाई निगाह गरिएको छ। ..... ..... (यसको सीमा–) ....फुथूल खेतदेखि पूर्वतिर.....मङ्गलको खेत, त्यसदेखि भरताश्रम .....तुलखेत, त्यसदेखि तेग्वल ........... आदित्यगुप्तको खेतदेखि पूर्वदक्षिणतिर... ......ट्राखेत, त्यसदेखि तेग्वल नारायणस्थान, ..........तेग्वलप्रदीपगौष्ठिकहरूको, त्यसको खेतदेखि दक्षिण ..... .....दक्षिणराजकुलको दक्षिण–पश्चिमतिर ..... .. वीपाञ्चालिकहरूको इलाकादेखि पश्चिमपट्टि पहाड ........पश्चिम र उत्तर तिर पहाडको भूमि, दक्षिण ..........

यति चार किल्ला छुट्याइएको यो भूमिबारे थाहा पाई हाम्रोतर्फबाट जीविका गर्ने (सरकारी कर्मचारी) हरू कसैले यो निगाह अन्यथा नगर्नू।

जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला; बेफाइदा गर्ने त्यसउपर अवश्य पनि हामी अनुशासनको कारबाइ गर्नेछौं। पछि हुने राजाहरूले पनि अघिका राजाले गरेको निगाहको ख्याल राख्नुपर्छ।

यस बातका दूतक (मार्फत) राजपुत्र विक्रमसेन छन्। संवत् ५३५ श्रावण शुक्ल सप्तमी।

**व्याख्या-**

यस अभिलेखको माथिल्लो केही भाग र छेउ–छेउको पनि अलिकता भाग खण्डित छ। यसो हुनाले यो अभिलेख कसको हो; यसमा मुख्य के विषय परेको थियो; सो अस्पष्ट छ। जग्गाको चारकिल्ला खोलिएको कुरा यसमा देखिएको हुनाले जग्गा दान दिई यो अभिलेख गरिदिइएको बुझिन्छ।

यस अभिलेखको बेहोरा विचार गर्दा यो अंशुवर्माले गरिदिएको होइन भन्ने देखिन्छ। यसमा संवत् ५३५ दिइएको छ। मानदेवको चाँगुको अभिलेखदेखि शिवदेवको लेलेको अभिलेखसम्ममा

देखिएको संवत् नै यो पनि हो। अंशुवर्मालि एक्लै सोझै शासन गर्न थालेपछि आफ्ना अभिलेखमा यस संवत्को प्रयोग गरेका थिएनन्। यस अभिलेखमा फेरि यस संवत्को (शक संवत्को) उल्लेख कसरी भयो; यो प्रश्न बडो विचारणीय छ।

फेरि यस अभिलेखको उठानमा 'देव' दुइ अक्षर अहिलेसम्म बचेका छन्। यसबाट यो अभिलेख शिवदेवले गरिदिएका हुन् कि भन्ने देखिएको छ। अंशुवर्मालाई सारा अधिकारी सुम्पी राजकाजबाट शिवदेव हटेका थिए तापनि उनी यस वेलासम्म राजदरबारमै थिए भन्ने यताबाट झल्किन्छ। राजकाजबाट हटिसकेका थिए तापनि दानपत्र रूपको यो अभिलेखचाहिं आफ्नै तर्फबाट शिवदेवले राख्न लाएको बुझिन्छ। अर्को कुरा—यस वेलासम्म दूतकका रूपमा युवराज उदयदेवको उल्लेख आएको छैन। यसको लगत्तैपछि मात्र दूतकका रूपमा युवराज उदयदेव देखापर्छन्। यसबाट शिवदेव राजरदरबारमै रहुन्जेल अंशुवर्माले आफ्ना उत्तराधिकारीका रूपमा युवराजको घोषणा नगरेको बुझिन्छ। शिवदेवले राजदरबार छोडी भिक्षुचर्या लिएपछि मात्र अंशुवर्माले उदयदेवलाई 'युवराज' घोषित गरेको यस प्रसङ्गबाट देखिएको छ।

भरताश्रम— यस अभिलेखमा दान दिइएको जग्गाको चारकिल्ला खोल्दा उल्लिखित कुराले त्यस वेलाको धार्मिक विषयमा पनि अलिकता प्रकाश पारेको छ। उक्त प्रसङ्गमा यहाँ 'भरताश्रम' को चर्चा आएको छ। यसबाट लिच्छविकालमा यस भेकमा ऋषिमुनिको आश्रमको अवशेष रहेको देखिन्छ। बलम्बूको एउटा अभिलेखमा 'गौतमाश्रम' उल्लेख आएको छ। गोपालवंशावलीमा यहाँ किरातहरूको शासन कायम हुनुभन्दा पहिले नै गौतम आदि ऋषिमुनिहरूको आश्रम कायम भएको वर्णन परेको छ। लिच्छविकालका अभिलेखमा पनि भरताश्रम, गौतमाश्रम आदिको उल्लेख पाइएको हुनाले गोपालराजवंशावलीको कथन केही सत्य हो कि भन्ने अनुमान हुन्छ।

यसै प्रसङ्गमा यहाँ 'तेग्वलका नारायण' को पनि उल्लेख आएको छ।

दक्षिणराजकुल— जग्गाको चार किल्ला खुलाउँदा यस अभिलेखमा 'दक्षिणराजकुलस्य दक्षिणपश्चिमेन' भन्ने उल्लेख परेको छ। यसबाट यो अभिलेख रहेको ठाउँको उत्तर–पूर्वपट्टि 'दक्षिणराजकुल' भन्ने दरबार थियो भन्ने थाहा पाइन्छ। यो हुलिया हनूमान्ढोकानिरको दरबारसंग ट्वाक्क मिल्छ। हनूमान्ढोकानिर हालै पाइएको अंशुवर्माको ताकाको अभिलेखबाट त्यहाँ लिच्छविराजाहरूको पुरानो दरबार थियो; अंशुवर्माले त्यसको जीर्णोद्धार गराएका थिए भन्ने देखिएको छ। सो राजदरबार 'दक्षिणराजकुल' हो भन्ने यताबाट देखिएको छ। दक्षिणराजकुल–को अधीनमा रहेको खेतको उल्लेख चाँगुको अभिलेखमा आएको छ।

यस अभिलेखमा दूतक राजपुत्र विक्रमसेन छन्। बुङ्गमती र साँगाको अंशुवर्माको अभिलेखमा पनि दूतक यिनै विक्रमसेन छन्। त्यहाँ यिनको दर्जा 'सर्वदण्डनायक' दिइएको छ। यस अभिलेखमा भने विक्रमसेनको सरकारी दर्जाको उल्लेख परेको छैन। यस वेला यिनको सर्वदण्डनायक पद झिकिसकियो कि भन्ने यसबाट अनुमान हुन्छ।

—★—

# पाटन नबहिलको अंशुवर्माको अभिलेख

हाल यो शिलालेख छाउनी राष्ट्रिय–संग्रहालयमा रहेको छ । तर राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिमा 'यो अभिलेख पाटन नबहिलटोलको हो' भनी लेखिएको छ । यहाँ संवत् अहिले देखिदैन ।

टामस ओ. व्यालिन्जरद्वारा यस अभिलेखको चित्र छापिएको छ । 'अभिलेख–संग्रह' ५ भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति (कैलासकूटभवना)द्भगवत्पशुपतिभट्टारकपा(दा)
२. नु (ध्यातो) ब(प्पपादानुगृहीतः) श्रीमहासामन्तांशुवर्मा कु(श)
३. (ली)–ङखुल ... (ग्राम)निवासोपगतान् (कुटुम्बि)
४. (नो य)थाप्र(धान) ङ्कु (शलमाभाष्य)समा(ज्ञाप)यति (विदितम्भवतु)
५. (भ)वतां मीर्मेलीतीशङ्करनारायणस्य .....
६. स सम्यक्प्रतिपालनात्पश्चिमाधिक(रण) .....
७. तकम्प्रतिमुच्य पश्चिमाधिकरण ... ....
८. श्यङकृत्वा प्रतिसंस्कृत्य मया वः स ... ...
९. म्प्रसादः कृतस्तदेवमधिगतार्थैर्न (कैश्चिद्) .....
१०. पीडा विधेया यस्त्वेतामाज्ञां ... ...
११. न्न मर्षयिष्यामि भविष्यद्भिर(पि भूपतिभिः पूर्व्वराज)
१२. कृतधर्माधिकारपालनादृतै(र्भवितव्यं दूतकोत्र)
१३. महासामन्त भोगवर्मा । संवत् ... ...

# अनुवाद

कल्याण होस् । (कैलासकूटभवनबाट) भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बुवाको पाउको अनुग्रह पाएका, गाथमा आराम भएका श्रीमहासामन्त अंशुवर्माले.....ग्राममा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ । तिमीहरूलाई थाहा होस्–

....मीर्मेलीती शङ्करनारायणको.....राम्ररी हेरचाह गर्नाले पश्चिमाधिकरण.... को छुटाएर पश्चिमाधिकरण ......पक्का गरी सुधार गरी हामीबाट तिमीहरूलाई .... .....निगाह गरिएको छ ।

तसर्थ यो कुरा थाहा पाई.....कसैले पनि दुःख नदिनू । जसले यो आज्ञा (नटेरेर अन्यथा गर्ला वा गराउला, त्यसलाई हामी) सहनेछैनौं । पछि हुने राजाहरूले पनि अघिका राजाहरूले गरेको धर्मका कामको (स्थितिबन्धेजको) आदरपूर्वक पालना गर्नुपर्छ ।

(यस बातका दूतक) महासामन्त भोगवर्मा । संवत् ..........

## व्याख्या–

यस अभिलेखमा संवत् फुटिसकेको छ । दूतकमा युवराज उदयदेव देखापरेका छैनन् । अंशुवर्माको 'श्रीमहासामन्त' पद नै यहाँ रहेको छ । यस कारण यो अभिलेख यहाँ दिइएको हो ।

अघिका राजाहरूले गरेर गएको कीर्तिको लोप हुन नपाओस् भन्ने कुरामा अंशुवर्माले ध्यान दिएका थिए । यसो हुनाले उनले पुराना देवमन्दिर, दरबार आदिको जीर्णोद्धार निकै गराएका थिए । यस अभिलेखले पनि उक्त कुराको पुष्टि गरेको छ । मीर्मेलीती भन्ने ठाउँको शङ्करनारायणको मन्दिरको जीर्णोद्धार गरी त्यसको काम स्थानीय जनतालाई नै सुम्पिदिएको तथा पश्चिमाधिकरणको अधिकार छुटाइदिएको कुरा यस अभिलेखमा परेको छ । छेउको केही भाग खण्डित हुँदा कुरा अलि अस्पष्ट छ । तर प्रसङ्गबाट उक्त कुरा बुझ्न सकिन्छ ।

## पश्चिमाधिकरण –

लिच्छविकालका अनेक अधिकरणमध्ये एक पश्चिमाधिकरण पनि हो । यस अधिकरणले गर्ने कामको विवरण पाउन सकिएको छैन । तर देवमन्दिरहरूको हेरचाह, धार्मिक काम कुरासम्बन्धी, झैझगडाको छिनफान आदि काम पनि पश्चिमाधिकरणभित्र पर्दोरहेछ भन्ने कुरा अभिलेखबाट थाहा पाइएको छ । पशुपति गणेशस्थानको अंशुवर्माको अभिलेखमा उनका बहिनीहरूले स्थापना गरिएका शूरभोगेश्वर आदि शिवलिङ्गको हेरचाहको काम त्यहींको पाञ्चालीलाई सुम्पिएको छ तथा त्यहाँ पश्चिमाधिकरणको अधिकार छुटाएको कुरा परेको छ । त्यसबाट पश्चिमाधिकरणको

कामबारे केही थाहा पाइन्छ । पाटन नबहिलको यस अभिलेखबाट पनि पश्चिमाधिकरणको काम त्यस्तै थियो भन्ने कुराको पुष्टि हुन्छ ।

नक्साल नारायणचौरको अभिलेखमा 'पश्चिमाधिकरण' को अगाडि 'श्री' शब्द जोडिएको छ । यसै गरी सो अभिलेख र ज्ञानेश्वरको अभिलेखमा 'पूर्वाधिकरण' मा पनि श्री' जोडिएको छ । लिच्छविकालमा 'श्री' शब्द महत्त्वपूर्ण थियो । यस कारण यी दुइ अधिकरणमा जोडिएको 'श्री' शब्दले यी अधिकरणको राजकीय सम्बन्ध दर्शाएको छ । ज्ञानेश्वरको अभिलेखमा 'दक्षिण-राजकुलस्य (पू)र्वाधिकरण' भन्ने उल्लेख परेको हुनाले पूर्वाधिकरण राजदरबारभित्र रहेको थियो भन्ने थाहा पाइन्छ । यसै गरी पश्चिमाधिकरण पनि राजदरबारभित्रै थियो भन्ने बुझिन्छ । यताबाट राजदरबारको पूर्वभागमा रहेको अधिकरण 'पूर्वाधिकरण' र पश्चिमभागमा रहेको अधिकरण 'पश्चिमाधिकरण' भनी कहलाएका हुन् भन्ने बुझिन्छ † ।

यस अभिलेखमा दूतक भोगवर्मा छन् । उनको दर्जा यहाँ महासामन्त दिइएको छ । संवत् ५१६ तिरका अभिलेखमा पनि दूतकका रूपमा भोगवर्माको उल्लेख आएको छ । तर त्यसवेला उनले सरकारी विशेष दर्जा पाएका थिएनन् । अहिले आएर अंशुवर्माले उनलाई 'महासामन्त' जस्तो उच्च पदवीले विभूषित पारेका छन् । पशुपतिको अभिलेखमा अंशुवर्माका भानिज भोगवर्माको उल्लेख परेको छ । यहाँ उल्लिखित भोगवर्मा पनि उनै हुन् भन्ने देखिन्छ । आफ्ना भानिज तथा विश्वस्त व्यक्ति पनि हुँदा भोगवर्मालाई अंशुवर्माले 'महासामन्त' दर्जा दिएको देखिन्छ ।

---

† 'पूर्णिमा' २३ अङ्कमा पनि यस विषयमा विचार गरिएको छ ।

# तौखेलको अंशुवर्माको अभिलेख

टिस्टुङ्ग गाउँबाट एक कोश जति पूर्व–दक्षिणमा तौखेल भन्ने गाउँ छ। त्यहाँ पाटीनिर यो शिलापत्र रहेको छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यसको अभिलेख कुँदिएको भाग ३२ अङ्गुल लम्बा, २४ अङ्गुल चौडा छ। यसमा दुइ चार अक्षरबाहेक अरू भाग स्पष्ट छ। यहाँ संवत् ३७ दिइएको छ।।

'टिस्टुङ्ग–चितलाङभेकको ऐतिहासिक सामग्री' मा प्रा. हेमन्त राणा र मैले यो अभिलेख छपाएका छौं।

## मूलपाठ

१. ॐ स्वस्ति कैलासकूटभवनादनिशमशेषसत्वसुखस-
२. मुदयोपपादनाहितचित्तसन्ततिर्भगवत्पशुपतिभट्टा-
३. रकपादानुगृहीतो बप्पपादानुध्यातः श्रीमहासामन्तांशुवर्मा
४. कुशली चुस्तुङग्रामकुटुम्बिनः प्रधानपुरस्सरान्कुशलमाभा-
५. ष्य समाज्ञापयति विदितम्भवतु भवतां युष्मदीयग्रामभू-
६. मौ महती महिषीपोडेत्यतस्तत्पोडापरिजिहीर्षया परिव-
७. र्तनिमित्तमस्माभिरियम्भूमिः पूर्वेण चुस्तुन्नदी दक्षिणेन
८. खातकः पश्चिमेन पर्वतचूडामुत्तरेण चुप्रिङनदीत्येतत्सीम-
९. मध्योपनिपातिनी भवताङ्ग्रामसन्निवेशार्थम्प्रसादीकृता भ-
१०. वद्भिरपि तेस्तुंशुल्म्हुंङव्रम्हुंङाङ्करणीयञ्जङ्गशतत्रयन्देय-
११. त्तदेवंविदितार्थैरस्मत्पादप्रसादोपजीविभिरन्यैर्वा न कैश्चि-
१२. दयम्प्रसादोन्यथा करणीयो यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा

१३. कुर्यात्कारयेद्वा तं वयन्न मर्षयिष्यामो भविष्यद्भिरपि भूप-
१४. तिभिर्धर्मगुरुतया पूर्वराजकृतप्रसादानुपालनावहितमा-
१५. नसैर्भवितव्यमिति स्वयमाज्ञापना दूतकश्चात्र युवरा-
१६. जोदयदेवः संवत् ३७ फाल्गुनशुक्लदिवापञ्चम्याम् ॥

# अनुवाद

कल्याण होस् । कैलासकूटभवनबाट हरबखत सारा प्राणीलाई सुखहरू गरिदिनामा मन लगाएका, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बुवाको पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, श्रीमहासामन्त अंशुवर्माले मुखियालगायत चुस्तुङ ग्रामका गृहस्थीहरूलाई कुशल–मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् ।

तिमीहरूको गाउँमा भैंसीसम्बन्धी ठूलो कष्ट परिरहेको छ भन्ने थाहा पाएर सो कष्ट हटाउन हामीबाट गाउँ अन्त सार्नाको लागि जग्गानिगाह गरी दिइएको छ। यसको चार किल्ला–पूर्वतिर चुस्तुङ नदी, दक्षिणतिर पोखरी, पश्चिमतिर पहाडको चुली, उत्तरतिर चुप्रिङ नदी रहेको छ।

तिमीहरूले पनि तेस्तुङ, शुल्ह्म्ुङ, ब्रम्हुङहरूलाई करको रूपमा तीन शय जङ्ग बुझाउनू ।

यो कुरा थाहा पाई हाम्रोतर्फबाट जीविका चलाउनेहरूले (सरकारी कर्मचारीहरूले) वा अरू कसैले पनि यो निगाहको बर्खिलाप गर्न हुँदैन। जसले यो आज्ञा नटेरेर यसको बर्खिलाप गर्ला वा गराउला; त्यसलाई हामी सहनेछैनौं। पछि हुने राजाहरूले पनि ऐन कानूनलाई ठूलो संझी अघिका राजाले गरेको निगाह थाम्नामा राम्ररी मन लाउनुपर्छ। यो मेरो आफ्नै आज्ञा हो।

यहाँ दूतक युवराज उदयदेव। संवत् ३७ फाल्गुन शुक्ल पञ्चमी ।

## व्याख्या–

यस अभिलेखको उठानमा अंशुवर्माको आदर्शलाई दर्शाउने वाक्य परेको छ। 'हरबखत प्राणीको सुखको लागि म तत्पर रहन्छु' भन्ने भाव कहाँ व्यक्त गरिएको छ। यसै आदर्शअनुसार तौखेलका बासिन्दाहरूको सुखको लागि व्यवस्था मिलाइदिएको कुरा यस अभिलेखमा परेको छ। तौखेलको पुरानो नाउँ चुस्तुङ रहेछ । चुस्तुङवासीहरू भैंसी पाल्ने व्यवसाय गर्दा रहेछन्। कुनै कारणवश भैंसी पाल्ने व्यवसायमा दुःख बाधा परेको कुरा अंशुवर्मामा जाहेर भएपछि उनले सो कष्ट हटाउन पुरानो बस्ती छोडी अर्को नयाँ बस्ती बसाउन जग्गा दिएको कुरा यस अभिलेखमा परेको छ।

यसरी बस्ती किन सार्नुपऱ्यो; भैंसी पाल्ने व्यवसायमा के कस्तो दुःख, बाधा आइपऱ्यो; यो कुरा यस अभिलेखबाट खुल्दैन। तर अनुश्रुतिको भरमा अहिलेसम्म चलेर आएको कुराबाट यस विषयमा केही प्रकाश पर्छ। "हामीहरूको पुरानो बस्ती ऊ त्यो वनको छेउमा थियो; त्यहाँ चोर डाँकाको भय भइरहन्थ्यो; बाघको बिगबिगी रहन्थ्यो; यसैले हामीहरू त्यताबाट यहाँ सरेका हौं, त्यहाँ पनि यस्तै शिलालेख थियो; तर त्यो बस्ती पुरिइसकेको हुनाले अहिले भेट्टाउन सकिंदैन" भनी तौखेलवासीहरू भन्दछन्। उनीहरूले लक्ष्य गरेको ठाउँमा छान-बीन गर्न सकिएन। तर यस अभिलेखमा बस्ती सरेको कुरा परेको हुनाले उक्त अनुश्रुति सत्य थियो भन्ने देखिन्छ। वनको छेउछाउमा भैंसी पाल्ने व्यवसाय गरी रहंदा बाघ, चोर-डाँकाको भय हुनु सम्भव छ। यस अभिलेखमा 'महिषीपीडा' भनी उक्त कुरालाई नै लक्ष्य गरिएको देखिन्छ।

जे होस्; अंशुवर्माको यस अभिलेखले आर्थिक उन्नति गर्ने उनको लक्ष्यबारे केही प्रकाश पार्छ। आर्थिक उन्नतिको लागि अंशुवर्माले कृषि, पशुपालन, व्यापार तीनै कुरामा ध्यान दिएका थिए। उनका अरू अभिलेखबाट यो कुरा थाहा पाइन्छ। 'महिषीपालन' व्यवसायको सुरक्षामा दृष्टि दिई गरिदिइएको यो सनदपत्रले पनि उक्त कुराको पुष्टि गरेको छ। लिच्छविकालका अहिलेसम्म भेट्टिएका अरू अभिलेखमा महिषपालनको स्पष्ट चर्चा पाइएको थिएन। यस अभिलेखले त्यस बेला भैंसी पाल्ने व्यवसाय पनि राम्ररी चलेको थियो भन्ने कुरा सिद्ध गरेको छ।

अर्को कुरा टिस्टुङ्ग-चितलाङभेकमा तौखेल, ह्लु, कुन्छा आदि गाउँका पूरै बासिन्दाहरू अहिलेसम्म गोपालवंशी (ग्वाला) छन्। टिस्टुङ्ग, पापुङ, पुलगाउँ, शिखरकोटतिर पनि गोपालवंशीहरू निकै छन्। उपत्यकाभित्र थानकोट र मातातीर्थभेकमा पनि गोपालवंशीहरू छन्। यिनीहरूको जातिशास्त्रको दृष्टिले अध्ययन हुनु आवश्यक देखिएको छ। किनभने नेपालको प्राचीन इतिहाससंग गोपालवंशीहरूको सम्बन्ध रहेको छ। हाम्रा वंशावलीकारहरूले नेपाल-उपत्यकालाई आबाद गरी यहाँ सभ्यताको शुरू गर्नेहरूमा गोपालवंशीलाई पनि लिएका छन्। गोपालवंशावलीकारले गोपालहरूको शैवधर्मसंग सम्बन्ध देखाएका छन्। तौखेलभेकमा गोपालवंशीहरूको मुख्य देवता अहिलेसम्म 'चम्पकेश्वर' महादेव रहेको कुरा यस प्रसङ्गमा विचारणीय छ।

यस अभिलेखमा संवत् ३७ छ। दूतकचाहिं युवराज उदयदेव छन्। यसबाट अंशुवर्माले यस बेला आफ्ना उत्तराधिकारीका रूपमा उदयदेवलाई युवराज घोषित गरिसकेको थाहा पाइन्छ।

★

# वटुको अंशुवर्माको अभिलेख

काठमाडौं वटुटोलमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग २८ अङ्गुल लम्बा, २० अङ्गुल चौडा छ। यसको शिरोभाग खण्डित भइसकेको छ। यहाँ संवत् पनि अहिले देखिंदैन।

संस्कृत–सन्देश १।८ मा म र ज्ञानमणि नेपालले यो अभिलेख छपाएका छौं। नोलीद्वारा ४३ संख्याको रूपमा यो छापिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट यसको पाठ पढ्न मदत पाइन्छ।

## मूलपाठ

१. (ॐ स्वस्ति कैलासकूटभवनात्) ... ...
२. ...दिङमण्ड (लो) भगवत्पशुपतिभट्टारकपादा (नुध्यातो)
३. (बप्पपा) दपरिगृहीतः श्रीमहासामन्तांशुवर्मा कु (शली) ....
४. (पा) ञ्चालिकान्यथाप्रधानङ्कुशलमाभाष्य समाज्ञापय (ति) ....
५. ... शालाप्रणालीकर्मपरितोषितैरस्माभि ... ...
६. ... वासिन :.... ब्रंशामल्लपोतसूकरकराणां ...
७. .... चाक... डम्मुक्त्वा पञ्चापराधेनास्य ...
८. ... पण्यानि मृद्भाण्डानि तथैव कर्तु ... ...
९.. ... ...क ... म्बहिरनतिवाह्य वि ...
१०. ...कृ (तस्तदे) वंदेदिभि (रस्म) त्पादप्रतिबद्धजीवनैर (न्यैर्वा न)
११. (कैश्चि) द (यम्प्र) सादोन्यथा करणीयो यस्त्वेतामाज्ञामुल्लङ्घ्या (न्यथा)
१२. (कु) र्यात्कारये (द्वा) ... ... नियतं पुष्कला म ..

१३. ... ..भविष्य(द्भिरपि भूप)तिभिर्गुरुकृतप्रसादा(नुव)-
१४. (र्तिभिरे)व (भ)वितव्यमिति स्वयमाज्ञा दूतकश्चात्र युवराज
१५. (उदयदेवः संवत्) ...आषाढशुक्लदिवापञ्चम्याम्

# अनुवाद

(कल्याण होस् । कैलासकूटभवनबाट) .... .... दिशाको छेउछेउसम्म (कीर्ति फैलिएका) भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प(बुवा)को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीमहासामन्त अंशुवर्माले....मुखियालगायत पाञ्चालीका सदस्यहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ–

....शालाको धारा बनाउने कामले खुशी भएका हामीबाट..... ....मल्लका बच्चा र सुंगुरउपरको कर.... .... माफी गरी पञ्चापराधद्वारा यसको... .... बिक्रीको लागिका माटाका भाँडाहरू त्यस्तै गर्न ........ बाहिर ननघाएर..... (निगाह)गरिएको छ ।

यो कुरा थाहा पाएर हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी) हरूले वा अरू कसैले पनि यो निगाह अन्यथा नगर्नू। जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला; (त्यसलाई) अवश्य पनि ठूलो (सजाय गरिनेछ।)पछि हुने राजाहरूले पनि अघिका राजाले गरेको निगाहको ख्याल राख्नुपर्दछ। यो मेरो आफ्नै आज्ञा हो ।

यस बातका दूतक (मार्फत) युवराज (उदयदेव)। ...आषाढ शुक्ल पञ्चमी ।

**व्याख्या–**

असुरक्षित अवस्थामा त्यसै रहेको हुनाले यस अभिलेखको धेरै भाग पढ्न नसकिने भइसकेको छ। यसो हुँदा यस अभिलेखमा परेको विषय अलि अस्पष्ट भएको छ। तर बचेको भागबाट जनतालाई सुबिधा गरिदिने अंशुवर्माको नीतिको केही संकेत पाउन सकिन्छ ।

वटुभेकको पाञ्चालीले धारा बनाएको हुनाले प्रसन्न भई अंशुवर्माले सो पाञ्चालीका जनतालाई मल्लपोतकर, सूकरकर माफी गरिदिएको, पञ्चापराधसम्बन्धी मुद्दा हेर्ने अधिकार स्थानीय पाञ्चालीलाई नै सुम्पेको कुरा यस अभिलेखमा परेको छ। यसमा 'पण्यानि मृद्भाण्डानि' पद पनि देखिएका छन् । यसबाट यस भेकमा माटाका भाँडा बनाउने व्यवसाय लिच्छविकालमा कायम थियो भन्ने देखिन्छ। माटाका भाँडा बनाउने सो व्यवसाय बढोस् भनी अंशुवर्माले चाहेको देखिन्छ ।

यस अभिलेखमा अहिले संवत् देखिँदैन। यहाँ अंशुवर्मा श्रीमहासामन्तकै रूपमा देखिएका छन् । तर दूतकका रूपमा युवराज उदयदेव देखापरिसकेका छन् । यहाँ अहिले 'युवराज' मात्र

देखिन्छ; उदयदेवको नाम फुटिसकेको छ। परन्तु यसपछिका अरू अभिलेखको आधारमा यहाँ उल्लिखित युवराज उदयदेव नै हुन् भन्ने कुरा सहजैसंग भन्न सकिन्छ। यी उदयदेव लिच्छवि राजा नरेन्द्रदेवका बाबु हुन्। पशुपतिको द्वितीय जयदेवको अभिलेखबाट यो कुरा थाहा पाइन्छ। फेरि लिच्छविराजपरिवारको नाउँमा मात्र रहने 'देव' पद जोडिएको हुनाले पनि यी युवराज उदयदेव लिच्छविकुमार हुन् भन्ने थाहा पाइन्छ। अंशुवर्मा लिच्छविवंशका होइनन्। यसको चर्चा पहिले गरिसकेको छ। यस कारण उदयदेव अंशुवर्माका छोरा होइनन् भन्ने स्पष्ट छ।

अंशुवर्मालाई आचार्य कौटल्यको विचारले प्रशस्त प्रभाव पारेको थियो। यसको चर्चा माथि गरिसकेको छ। कौटल्यकै वचनको अनुसरण गरी अंशुवर्माले उदयदेवलाई आफ्ना उत्तराधिकारी बनाई उनलाई 'युवराज' घोषित गरेका हुन्। यसभन्दा अघि यसरी युवराजको घोषणा गर्ने चलन थिएन। अंशुवर्मादेखि मात्र यस्तो चलन चलेको देखिन्छ।

—~—

# नक्साल भन्सारहिटीको अंशुवर्माको अभिलेख

नक्साल गैह्रीधारा (भन्सारहिटी) को पर्खालमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग २५ अङ्गुल लम्बा, २२ अङ्गुल चौडा छ। यसको शिरोभागमा बसिरहेको सुन्दर साँढे अङ्कित छ। यहाँ संवत् फुटिसकेको छ।

संस्कृतसन्देश १।६ मा ऐ. शि. बाबुराम आचार्य र श्रीगुरु पं. नयराज पन्तद्वारा यो अभिलेख छापिएको छ। नोलीद्वारा ४२ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति कैलासकूटभवनादनन्यनरपतिसकरानतिप–
२. रपुण्याधिकारस्थितिनिबन्धनोन्नीयमानमनस्समाधानो भ–
३. गवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः
४. श्रीमहासामन्तांशुवर्मा कुशली जोञ्जोन्दिङ्ग्रामनिवासिनः प्रधा-
५. नपुरस्सरान्कुटुम्बिनः कुशलमाभाष्य समाज्ञापयति विदि-
६. तम्भवतु भवताम्नोलीशालाप्रणालीकर्मपरितोषितैरस्माभिः
७. लिङ्ग्वल्षण्ढाश्विकवाहिकागन्त्रीबलीवर्दानामप्रवेशेन वः प्रसा-
८. दः कृतस्तदेवमधिगतार्थैर्न कैश्चिदेष प्रसादोन्यथा कर-
९. णीयो यस्त्वेतामाज्ञां विलङ्घ्यान्यथा कुर्यात्कारयेद्वा तं वयन्न
१०. मर्षयिष्यामो भविष्यद्भिरपि (भूपतिभिः पू)र्वराजकृतप्र-
११. सादानुवर्तिभि(रेव भवितव्यञ्चिरस्थितये चास्य) प्रसादस्य
१२. शिलापट्टकशासने(न प्रसादः कृत इति स्वयमाज्ञा दू)तकश्चात्र
१३. युवराजोदयदेवः (संवत्) ... .... अष्टम्याम्

# अनुवाद

कल्याण होस् । कैलासकूट भवनबाट अरू राजालाई हात जोडी प्रणाम गर्न अघि नसर्ने, न्यायनिसाफको स्थितिबन्देज बाँध्नाले (ऐन तर्जुमा गर्नाले) सुधिंदै गएको मनको अठोट भएका, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा)को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, श्रीमहासामन्त अंशुवर्माले जोञ्जोम्दिङ ग्राममा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ।

नीलीशाला (नक्साल)को धारा बनाउने कामले खुशी भएका हामीबाट लिङ्ग्वल (अधिकरण)-ले पस्न नपाउने गरी तथा साँढे, बग्गी, गाडा गोरूको आवत जावतलाई रोकिदिएर तिमीहरूलाई निगाह गरिएको छ। यो कुरा तिमीहरूलाई थाहा होस् ।

तसर्थ यस कुरालाई बुझेर कसैले पनि यस निगाहलाई अन्यथा नगर्नू। जसले यस आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला, त्यसलाई हामी सहनेछैनौं। पछि हुने राजाहरूले पनि पहिलेका राजाहरूले गरेको निगाहको ख्याल राख्नुपर्छ। यो कुरा धेरै कालसम्म कायम रहोस् भन्नाका लागि सनद शिलापत्र गरिदिई निगाह गरिएको छ।

यस बातका दूतक (मार्फत) युवराज उदयदेव। संवत् . . . . . . . . अष्टमी ।

**व्याख्या–**

सफल परराष्ट्रनीति–यस अभिलेखमा अंशुवर्माले एक उल्लेखनीय घोषणा गरेका छन्; जसबाट अंशुवर्माको महत्त्व अझ बढेको छ। यस दृष्टिले यो अभिलेख निकै उपयोगी ठहरेको छ। शासनव्यवस्थामा सुधार, जनहितकार्यलाई प्रोत्साहन, आर्थिक उन्नति आदि गर्नुको साथसाथै अंशुवर्माले सफल परराष्ट्रनीतिको सञ्चालन पनि गरेको देखिएको छ। नेपाल राज्यको अवस्था दुइ ढुङ्गाको बीचको तरुलको जस्तो रहेको छ। दुइतिरबाट स्थिति सह्माल्न सकिएन भने आफू अँचेटिने सम्भावना नेपाललाई भइरहन्छ। अंशुवर्माको समयमा पनि उत्तरतिर भोटमा स्रङ्चन्गम्पो र दक्षिणतिर उत्तरभारतमा हर्षवर्द्धन राज्य बढाउन लागेका थिए। त्यस अवस्थामा नेपाललाई स्वतन्त्र राख्न भित्रबाट नेपाललाई मजबूत पार्नुको साथै परराष्ट्रनीति सफलतापूर्वक सञ्चालन गर्नु आवश्यक थियो। अंशुवर्माले नेपाललाई स्वतन्त्र राख्न चाहिंदो व्यवस्था मिलाएका थिए। यसो हुँदा अरू राजाको सामुन्ने शिर नुहाउनुपर्ने अवस्था अंशुवर्मालाई आइपरेको थिएन। यो कुरा यस अभिलेखमा 'अनन्यनरपतिसकरानतिपर=अरू राजालाई हात जोडी ढोग्न अघि नसर्ने' भनी लेखाएर उनले स्पष्ट पारेका छन् ।

त्यस वेला आफूभन्दा ठूला राजालाई अघि सरी ढोग्न जाने चलन थियो । यसैले आफ्नो स्वतन्त्र अवस्थालाई दर्शाउन शासकहरू 'मैले कसैलाई ढोग्नुपरेको छैन' भन्ने भावका कुरा

लेखाउँथे। मन्दसोरको स्तम्भलेखमा यशोधर्मले 'स्थाणोरन्यत्र येन प्रणतिकृपणतां प्रापितं नोत्तमाङ्गम्=महादेवबाहेक अरूको सामुन्ने जसले शिर झुकाएनन्' भनी लेखाएका छन्†। हर्षवर्द्धनसंग मैत्रीसम्बन्ध राखेर आफ्नो स्वतन्त्रता रक्षा गर्न चाहने आसामका भास्करवर्मले 'अयमस्य च शैशवादारभ्य संकल्पः स्थेयान् स्थाणुपादारविन्दद्वयादृते नाहमन्यं नमस्कुर्यामिति= महादेवका चरणसिबाय म अरू कसैलाई प्रणाम गर्दिन भनी उहाँले केटाकेटीदेखि नै दृढ अठोट गर्नुभएको छ' भनी हर्षकहाँ सन्देश पठाएथे। (हर्षचरित सप्तम उच्छ्वास)। यसै गरी 'अनन्यनरपति-सकरानतिपर' भनी लेखाई अंशुवर्मले आफ्नो स्वतन्त्रतालाई स्फूर्तिसाथ घोषणा गरेका छन्। अंशुवर्माको सफल परराष्ट्रनीतिको परिणाम यो हो भन्ने स्पष्ट छ।

अंशुवर्मामा लागेका विशेषणहरू सार्थक छन्। खाली प्रशस्तिको लागि मात्र ती लिइएका छैनन्। बखतअनुसार फेरी फेरी लिइएका उनका विशेषणले तात्कालिक परिस्थितिलाई संकेत गरेको पाइन्छ। यस कारण उपर्युक्त विशेषणद्वारा अंशुवर्मले 'नेपाललाई स्वतन्त्र पारिराखेको छु' भन्ने कुराको घोषणा गरेका हुन् भन्ने स्पष्ट थाहा पाइन्छ।

नियम–कानूनअनुसार व्यवस्थित ढङ्गले शासन गर्नाले नै प्रजालाई सुखी तुल्याउँछ भन्ने अंशुवर्माको विचार थियो। यसो हुनाले उनी स्थितिबन्देज बाँध्नामा लागेका थिए। आफ्नो यो विचार यहाँ उनले 'पुण्याधिकारस्थितिनिबन्धनोन्नीयमानमनस्समाधान' भनी व्यक्त गरेका छन्। पशुपति गणेशस्थानको अभिलेखमा 'अनिशि निशि चानेकशास्त्रार्थविमर्शावसादितासद्दर्शनतया धर्माधिकारस्थितिकारणमेवोत्सवमनतिशयम्मन्यमानः' भनी लेखाई उनले यो विचार अझ स्पष्ट शब्दमा प्रकट गरेका छन्।

जोञ्जोन्दिङ ग्रामका बासिन्दाहरूले सार्वजनिक धारा बनाएका हुनाले प्रसन्न भई अंशुवर्मले उनीहरूलाई केही सुबिधा गरिदिई यो अभिलेख राख्न लाएका हुन्। लिच्छविकालका चार मुख्य अधिकरणमध्ये एक 'लिङ्ग्वल' हो। यस अभिलेखमा लिङ्ग्वल अधिकरणले गर्ने काम स्थानीय बासिन्दालाई सुम्पिएको छ। साथै सो धाराको सुरक्षाको लागि उक्त ठाउँमा बग्गी, गाडा, गोरू आदिको आवत–जावत रोकिदिइएको छ। यसबाट त्यसवेलाका यातायातका साधन, नियम आदिबारे हामी केही थाहा पाउँछौं। बग्गी, गाडा आदिको सवारी त्यस वेला प्रचलित थियो; सवारीसम्बन्धी नियम–कानून लागू थिए; निषिद्ध इलाकामा सवारी चलाउन पाइँदैनथ्यो; इत्यादि कुरा यताबाट थाहा पाइन्छ। लिच्छविकालमा बाटो–घाटोको पनि राम्रो प्रबन्ध थियो। अभिलेखहरूमा रथ्या महारथ्या, पन्था महापथ, हस्तिमार्ग आदि बाटोको उल्लेख पाइन्छ।

यस अभिलेखमा संवत् फुटिसकेको छ। यहाँ दूतक युवराज उदयदेव छन्। अंशुवर्माको पद 'श्रीमहासामन्त' छ। यसो हुनाले यहाँनिर यो अभिलेख दिइएको हो।

o—o

---

† राजबलि पाण्डेको 'हिस्टोरिकल यॉन्ड् लिटररी इन्स्क्रिप्शन्ज्' को १३७ पृष्ठ हेर्नुहोस्।

# देउपाटनको अंशुवर्माको अभिलेख

पशुपतिनाथको मन्दिरदेखि पश्चिमपट्टि देउपाटनमा गणेशमूर्तिसंगै यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३३ अङ्गुल लम्बा, १७ अङ्गुल चौडा छ। यसको शिरोभागमा साँढे अङ्कित गरिएको छ। यहाँ संवत् ३९ छ।

भगवान्लालद्वारा ७ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ४१ संख्याको रूपमा यो छापिएको छ। संस्कृत–सन्देश २।१–२–३ मा म र ज्ञानमणि नेपाले पनि यो छपाएका छौं।

## मूलपाठ

१. ॐ स्वस्ति कैलासकूटभवनादनिशि निशि चानेकशा-
२. स्त्रार्थविमर्शावसादितासद्दर्शनतया धर्माधिका-
३. रस्थितिकारणमेवोत्सवमनतिशयम्मन्यमा-
४. नो भगवत्पशुपति (भट्टारक) पादानुगृहीतो बप्प-
५. पादानुध्यातः श्रचंशुवर्मा कुशली पश्चिमाधिक-
६. रणवृत्तिभुजो वर्त्तमानान् भविष्यतश्च यथार्ह-
७. ङ्कुशलमाभाष्य समाज्ञापयति विदितम्भव-
८. तु भवताम्पशुपतौ भगवाञ्छूरभोगेश्वरोस्मद्भ-
९. गिन्या श्रीभोगवर्मजनन्या भोगदेव्या स्वभर्तृ राज
१०. पुत्रशूरसेनस्य पुण्योपचयाय प्रतिष्ठापितो
११. यश्च तद्दुहित्रास्मद्भागिनेय्या भाग्यदेव्या प्रतिष्ठा-
१२. पितो लडितमहेश्वरो यश्चैतत्पूर्वजैः प्रतिष्ठापि-

१३. (तो) दक्षिणेश्वरस्तेषामधःशालापाञ्चालिकेभ्यः प्रतिपा-
१४. लनायातिसृष्टानामस्माभिः पश्चिमाधिकरणस्याप्र-
१५. वेशेन प्रसादः कृतो यदा च पाञ्चालिकानां यत्किञ्चन
१६. कार्यमेतद्गतमुत्पत्स्यते यथाकालं नियमितं व-
१७. स्तु परिहापयिष्यन्ति तदा स्वयमेव राजभिरन्तरा-
१८. सनेन विचारः करणीयो यस्त्वेतामाज्ञामतिक्रम्यान्यथा
१९. प्रवर्तिष्यते तं वयन्न मर्षयिष्यामो भाविभिरपि भूप-
२०. तिभिर्धर्मगुरुतया पूर्वराजकृतप्रसादानुवर्तिभि-
२१. रेव भवितव्यमिति स्वयमाज्ञा दूतकश्चात्र युवरा-
२२. जोदयदेवः संवत् ३९ वैशाखशुक्लदिवादशम्याम्

## अनुवाद

कल्याण होस् । कैलासकूटभवनबाट रातोदिन अनेकन शास्त्रकै अर्थ विषयमा छलफल गर्दा गर्दा खराब विचार हटिसकेको हुँदा धर्म (न्याय निसाफ) का कामको बरबन्दोबस्त बाँध्नु नै ठूलो उत्सव सम्झने, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीअंशुवर्माले अहिले बहाल रहेका र पछि बहाल हुनेसमेत पश्चिमाधिकरणमा वृत्ति खाने (जागीरदार) हरूलाई यथोचित कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ ।

हाम्री बहिनी श्रीभोगवर्माकी मुमा भोगदेवीले आफ्ना पति राजपुत्र शूरसेनको पुण्यको बढिबढाउको लागि पशुपतिमा स्थापना गरिएका शूरभोगेश्वर, उनकी छोरी हाम्री भान्जी भाग्यदेवीले स्थापना गरिएका लडितमहेश्वर र उनका पुर्खाले स्थापना गरिएका दक्षिणेश्वरसमेतको बरबन्दोबस्तको काम अधःशालाका पाञ्चालिकहरूलाई सुम्पिएको हुनाले त्यहाँ पश्चिमाधिकरणको अधिकार छुटाएर हामीबाट निगाह गरिएको छ । यो कुरा तिमीहरूलाई थाहा होस् ।

जहिले पाञ्चालिकहरूको यसबारेमा केही मुद्दामामिला पर्ला अथवा तिनीहरू बखत बखतमा गर्नुपर्ने कामलाई छोडाउनन्, त्यस वेला आफै राजाबाट 'अन्तरासन' (भित्री इजलास) मा त्यसको विचार गर्नुपर्छ ।

जसले यो आज्ञालाई नटेरेर अन्यथा गर्ला; त्यसलाई हामी सहनेछैनौं । पछि हुने राजाहरूले पनि नियम कानूनलाई ठूलो सम्झी पहिलेका राजाहरूले गरेको निगाहको ख्याल राख्नुपर्छ । यो मेरो आफ्नै आज्ञा हो ।

यस बातका दूतक (मार्फत) युवराज उदयदेव । संवत् ३९ वैशाख शुक्ल दशमी ।

**व्याख्या–**

यस वेला अंशुवर्माको अवस्थामा निकै अन्तर आइसकेको छ । बीसौं वर्ष पहिलेदेखि भने जस्तै उनले लिंदै आएको 'श्रीमहासामन्त' पद अब छोडिसकेका छन् । अब उनी खाली 'श्र्यंशुवर्मा' मात्र रहन लागेका छन् । यो कुरा यस अभिलेखबाट थाहा पाइन्छ । यसरी अंशुवर्माको तह अझ बढेको छ ।

'श्रीमहासामन्त' छँदै नै उनी एक किसिमले राजाको तहमा पुगिसकेका थिए । त्यसै वेला राजासरह उनले सनदपत्रहरू जारी गर्ने गरिसकेका थिए । त्यहाँ 'भाविभिरपि भूपतिभिः पूर्वराज-कृतप्रसादानुर्वातिभिर्भवितव्यम्' भनी लेखाई आफूलाई राजाको पङ्क्तिमा राखिसकेका थिए । तर विधिवत् 'भट्टारकमहाराज' आदि पदचाहिं उनले अहिलेसम्म लिएका छैनन् । महासामन्त पद छोडी 'श्र्यंशुवर्मा' मात्र लेख्न पुगेका छन् ।

अर्को कुरा–यसै ताका अंशुवर्माले आफ्नो नाममा स्वतन्त्र टक ढाल्न लगाए । यो कुरा उनका 'श्र्यंशुवर्मा' अङ्कित टकहरूले बताउँछन् । यसरी एकातिर आफ्नो नाउँमा टक ढाल्न लगाई आफूलाई लिच्छवि राजासरह स्वतन्त्र राजाका रूपमा देखाएका छन् । अर्कोतिर 'भट्टारकमहा-राज' आदि पद भने उनले लिएका छैनन् । यसरी अंशुवर्माले आफ्नो स्थितिको सन्तुलन अलि अनौठो ढङ्गले मिलाएका छन् । यसभित्र कौटल्यको विचारधाराले काम गरिरहेको छ भन्ने कुराको चर्चा पहिले गरिसकेको छ ।

अंशुवर्मा एक कुशल शासक मात्र थिएनन्; उनी अध्ययनशील विद्वान् व्यक्ति पनि थिए । यसो हुनाले अनेक शास्त्रको सकभर बढी अध्ययन गर्नु तथा स्थितिबन्धेज बाँध्नु उनको आदर्श रहेको थियो । एक समर्थ राजाको लागि बिहानदेखि बेलुकासम्मको कार्यक्रम निर्धारित रहन्थ्यो । सो कार्यक्रमअनुसार राजाले शास्त्रको अध्ययन मात्र गरी रहनु सम्भव हुँदैन । उनले अरू पनि आवश्यक काम गर्नुपर्थ्यो । विचारार्थ कौटल्यले निर्धारित गरेको राजाको दिनचर्याको सारांश यहाँ दिइन्छ–

"बिहान– ६ देखि ७।३० बजेसम्म पुलीसविभाग र अर्थविभागको कुरा सुन्ने
७।३० देखि ९ बजेसम्म बिन्तिपत्र सुन्ने
९ देखि १०।३० बजेसम्म नुहाउने, खाने, पुस्तक हेर्ने
१०।३० देखि १२ बजेसम्म नगदको जाँच गर्ने, हाकिमहरूसंग भेट्ने

दिउँसो– १२ देखि १।३० बजेसम्म मन्त्रिपरिषद्को बैठक
१।३० देखि ३ बजेसम्म आरामी गर्ने वा विचार गर्ने
३ देखि ४।३० बजेसम्म कवाजमा जाने
४।३० देखि ६ बजेसम्म सेनापतिसंग बसी रक्षाविभागको विचार गर्ने; साँझमा सन्ध्या गर्ने

बेलुका– ६ देखि ७।३० बजेसम्म गुप्तीविभागलाई भेट्ने
७।३० देखि ९ बजेसम्म नुहाउने, खाने, पुस्तक हेर्ने
९ देखि ३ बजेसम्म बाजाको आवाजसाथै सुत्ने र बाजाको आवाजसंगै उठ्ने; निद्रा खुलेमा विचार गर्ने

बिहान– ३ देखि ४।३० बजेसम्म सल्लाह गर्ने र जासूसहरूलाई खटाउने
४।३० देखि ६ बजेसम्म गुरु पुरोहित, वैद्य, ज्योतिषी, भान्सेहरूलाई भेट्ने र र दान धर्म गर्ने

कौटलीय अर्थशास्त्र १ अधिकरणको १८ अध्यायमा यो कुरा परेको छ। अवस्था हेरी यसमा फेरफार गर्ने अनुमति पनि कौटल्यले दिएका छन् ।

अंशुवर्मा भने यस ताका अरू काम छोडेर भए पनि अनेक शास्त्रको अध्ययन गरी ऐन तर्जुमा गर्नामा व्यस्त रहेको देखिन्छ। यो कुरा यस अभिलेखबाट बुझिन्छ। यहाँ 'अनिशि निशि चानेकशास्त्रार्थविमर्शावसादितासद्दर्शनतया धर्माधिकारस्थितिकारणमेवोत्सवमनतिशयम्मन्यमान' भनी त्यसै कारणले लेखाएको बुझिन्छ ।

यस अभिलेखबाट अंशुवर्माका नातेदारहरूको केही परिचय पाइन्छ । अंशुवर्माकी दिदी वा बहिनी भोगदेवी थिइन् । भोगदेवीको विवाह राजपुत्र शूरसेनसंग भएको थियो । यी शूरसेन दूतकका रूपमा देखा परेका सर्वदण्डनायक विक्रमसेनका नातेदार देखिन्छन्। शूनसेनका भोगदेवीतर्फबाट छोरा भोगवर्मा जन्मेका थिए। भोगवर्मा निकै अगाडि दूतकका रूपमा देखा परेका हुनाले भोगदेवी अंशुवर्माकी बहिनी नभएर दिदी थिइन् कि भन्ने अनुमान हुन्छ। भोगवर्मा मावलीमै हुर्केको बुझिन्छ। किनभने बाबु शूरसेनको नाउँको अनुकृतिमा 'भोगसेन' नाम नरही 'भोगवर्मा' नाम रहेको छ । यहाँ भोगवर्माको अगाडि राजोचित 'श्री' लागेको हुनाले उनको प्रतिष्ठा पहिलेभन्दा बढेको बुझिन्छ । अंशुवर्माकी भान्जी (शूरसेनकी छोरी) भाग्यदेवी थिइन् । यहाँ पशुपतिमा शिवलिङ्ग स्थापना गरेको देखिएको हुनाले उनका पुर्खा पनि यहीं आई रहन लागेको वा यतातिर उनीहरूको घनिष्ठ सम्बन्ध रहेको बुझिन्छ ।

अंशुवर्माकी दिदी भान्जी र तिनका पुर्खाले स्थापना गरिएका शूरभोगेश्वर, लडितमहेश्वर, दक्षिणेश्वरको हेरचाहको काम पश्चिमाधिकरणबाट छुटाएर अधःशालाको पाञ्चालीलाई सुम्पिएको कुरा यसमा परेको छ । यी देवताका विषयमा केही गडबडी उठ्यो भने सोझै राजाद्वारा 'अन्तरासन' मा त्यसको विचार गर्नू भन्ने व्यवस्था यहाँ परेको छ । अब 'अन्तरासन' बारे यहां केही विचार गर्नुपरेको छ ।

### अन्तरासन, परमासन–

लिच्छविकालमा शासनपद्धति व्यवस्थित थियो । आवश्यक काम कुराहरू मिलाउन

अनेक 'अधिकरण' (अड्डा, अदालत) कायम थिए। शासनाधिकार 'मूल ' (केन्द्र) मा मात्र सीमित थिएन; विभिन्न तह्मा शासनाधिकार बाँडिएको थियो। प्रत्येक ग्राममा स्थानीय प्रशासन चलाउन 'पाञ्चाली' कायम गरिएका थिए। यी ग्रामपाञ्चाली आदि स्थानीय संघट्टनद्वारा हुन नसकेका काम–कुरा प्रतिहार (द्वारे) मार्फत राजदरबारमा आइपुग्थे। कसैलाई पीरमर्का परे पनि राजद्वारमा गई उजूरी गर्न पाइन्थ्यो। राजदरबारभित्रै अनेक अधिकरण थिए। राजद्वारमा आइपुगेका कति कुराको छिनफान ती सम्बद्ध अधिकरणले नै गर्दथे।

यी अधिकरणहरूबाहेक लिच्छविकालको शासनव्यवस्थामा सर्वोच्च स्थान राख्ने अर्को महत्त्वपूर्ण अधिकरण राजदरबारमा थियो; जसले राष्ट्रको शासनसम्बन्धी सबै कुराको देखरेख गर्दथ्यो। त्यसलाई अभिलेखमा 'अन्तरासन' 'परमासन' संज्ञा दिइएको छ। राजाको अध्यक्षतामा बस्ने यो राजसभा हो। यो कुरा यो अभिलेखबाट खुल्छ। यहाँ 'स्वयमेव राजभिरन्तरासनेन विचारः करणीयः' भनिएको छ। लिच्छविकालको शासनव्यवस्थाको केन्द्रस्थल नै अन्तरासन, परमासन हो भने पनि हुन्छ।

'अन्तरासन, परमासन' को परिचय यो अभिलेखबाहेक अरू अभिलेखबाट पनि पाइन्छ। नरेन्द्रदेवको देउपाटन कसाईंटोलको अभिलेखमा स्थानीय पाञ्चालीले छिनफान गर्न नसकिने कुनै ठूलो मुद्दामामिला आइपर्‍यो भने 'अन्तरासन' ले त्यसको विचार गर्नू भन्ने कुरा परेको छ। त्यहाँको वाक्य यस प्रकारको छ–

'इह यत्किञ्चिन्महत्कार्यमुत्पद्यते तच्च स्वयम्पाञ्चालिकैर्निर्णेतुन्न शक्यते तदा तदन्तरासनेन विचारयितव्यम्'

पाटन गैह्लीधाराको नरेन्द्रदेवको अभिलेखमा पनि यस्तै किसिमको कुरा परेको छ। वज्रेश्वर-मण्डलीभित्र कुनै पनि सरकारी अधिकरणले नपस्नू त्यहाँ कुनै मुद्दामामिला उठ्यो भने 'परमासन' ले विचार मात्र गर्नू भन्ने उल्लेख त्यसमा परेको छ।

पाटन यागबहाल र पशुपति वज्रघरको नरेन्द्रदेवको अभिलेखमा पनि 'यदि कदाचिदार्यसंघ-स्याशक्यं कार्यमुत्पद्येत तदा परमासनेन विचारणीयम्' भनिएको छ।

पाटन मीननाथको अभिलेखमा कुलो पानी बाँडेर लिने कुरामा पाञ्चालीमा कलह उठ्यो भने त्यसको विचार अन्तरासनले गरिदिनू भन्ने उल्लेख परेको छ।

यस विषयमा नक्साल नारायणचौरको अभिलेखबाट पनि निकै प्रकाश पर्छ। पाञ्चालीले मुद्दा छिनेको चित्त नबुझे दौवारिकमार्फत राजाका 'अन्तरासन' करणमा उजूरी गर्न पाइन्थ्यो। एक महीनाभित्र यस्ता कुराको छिनफान गरिन्थ्यो भन्ने त्यसबाट थाहा पाइन्छ। त्यहाँको एक अंश यस प्रकारको छ–

"ततो . . . दौवारिकस्यावेदनीयं तेनापि श्रीमत्पादीयान्तरासनकरणे यथामासं रोपणीयम् ।

यति कुराबाट 'अन्तरासन, परमासन' लिच्छविकालको शासनव्यवस्थाको मुख्य केन्द्र थियो भन्ने कुरा थाहा पाइन्छ ।

अन्तरासन र परमासन एउटै होइन; यी भिन्नाभिन्नै हुन्; अन्तरासनभन्दा पनि माथिल्लो राजसभा 'परमासन' होला भन्ने अनुमान केही इतिहासकारले गरेका छन् । अब यसबारे पनि अलिकता विचार गर्नुपरेको छ। माथि चर्चा गरिएका अभिलेखबाट अंशुवर्माको समयसम्म 'अन्तरासन' नामको मात्र उल्लेख पाइन्छ; नरेन्द्रदेवले पनि उठानमा 'अन्तरासन' शब्दको नै प्रयोग गरेका थिए; पाटन गैह्रीधारादेखिका नरेन्द्रदेवका अभिलेखमा 'परमासन' शब्दको प्रयोग हुन थाल्यो; नरेन्द्रदेवपछिका राजाका अभिलेखमा फेरि 'अन्तरासन' शब्दको नै प्रयोग हुन थाल्यो भन्ने थाहा पाइन्छ। यसरी अन्तरासनलाई 'परमासन' भन्ने संज्ञा नरेन्द्रदेवले दिएका रहेछन् भन्ने यताबाट स्पष्ट बुझिन्छ। द्वैतशासन समाप्त गरी एकलौटी शासन कायम गर्न नरेन्द्रदेव सफल भएका हुँदा उनको महत्त्वाकाङ्क्षा बढेको थियो । यसो हुँदा 'भट्टारक' पदले सन्तुष्ट नभई त्यसमा 'परम' पद थपी उनी 'परमभट्टारक' कहलाएका थिए । साथै यसै बेलादेखि अन्तरासनलाई 'परमासन' संज्ञा दिएका थिए । 'परम' शब्दसंग नरेन्द्रदेवको विशेष लगाव थियो। उनी 'परममाहेश्वर' पनि कहलाएका थिए। तर उनीपछिका राजाहरूले भने पहिलेदेखि प्रचलित 'अन्तरासन' शब्द नै रुचाए तथा प्रयोग गरे । यसरी 'अन्तरासन' र 'परमासन' भिन्नाभिन्नै होइनन्; एउटै राजसभाको नामान्तर मात्र हुन् भन्ने स्पष्ट छ।

अब कुन कुन बेला 'अन्तरासन' 'परमासन'को बैठक कुन कुन दरबारमा बस्यो भन्ने कुराको पनि अलिकता विचार गर्नुपरेको छ। यसबाट तात्कालिक परिस्थिति बुझ्न केही मदत पाइन्छ ।

वृषदेवहरूले कुन दरबारमा बसी शासन चलाएका थिए; सो थाहा पाउन सकिएको छैन। थानकोटको वसन्तदेवको अभिलेखमा सर्वप्रथम 'मानगृह' दरबारको उल्लेख पाइएको छ। अंशुवर्माभन्दा अघिका लिच्छवि राजाको मुख्य मुकाम 'मानगृह' रहेको हुनाले मानदेवको पालादेखि अंशुवर्माको पालासम्म 'अन्तरासन' को बैठक पनि 'मानगृह' दरबारमै बस्थ्यो भन्ने स्पष्ट छ। आफू स्वतन्त्र शासक बनेपछि अंशुवर्माले कैलासकूटभवनबाट शासन गर्न थाले। यसो हुनाले यस ताका 'अन्तरासन' को बैठक 'कैलासकूट' भवनमा बस्न थाल्यो। अंशुवर्मापछि जुन परिवर्तन भयो, त्यसबेला 'अन्तरासन' को बैठक कहाँ बस्दथ्यो; यसको निर्णय गर्न अलि गाह्रो छ। गद्दीनशीन लिच्छवि राजा ध्रुवदेव, भीमार्जुनदेवको मुकाम 'मानगृह' मा थियो । जिष्णुगुप्त, विष्णुगुप्तले चाहिं 'कैलासकूट' भवनमा बसी शासन चलाएका थिए। यसबेला राजगद्दी त मानगृहमै थियो। यो कुरा थानकोटको अभिलेखबाट थाहा पाइन्छ। अन्तरासनको बैठकचाहिं यस बेला कहाँ बस्थ्यो ? गद्दीनशीन राजाको मुकाम रहेको मानगृहमा बस्तथ्यो कि सबै अधिकार हत्याएर बसेका जिष्णुगुप्तहरूको मुकाम भएको कैलासकूटभवनमा बस्तथ्यो ? यो कुरा अभिलेखबाट चाहिं

स्पष्ट खुल्दैन। तात्कालिक परिस्थिति विचार गर्दा त्यस वेला 'अन्तरासनको' बैठक कैलासकूटभवनमै बस्तथ्यो कि भन्ने बुझिन्छ।

विष्णुगुप्तहरूलाई पन्छाइसकेपछि नरेन्द्रदेव 'मानगृह' मा बसेनन्। कैलासकूटभवनमा बसी उनले शासन चलाए। यसो हुनाले अन्तरासन, परमासनको बैठक त्यस वेला कैलासकूटभवनमै बस्तथ्यो भन्ने स्पष्ट छ। तर यस वेला राजगद्दी भने मानगृहमै थियो भन्ने देखिएको छ। आफ्नो अन्तिम समयतिर नरेन्द्रदेवले नयाँ दरबार 'भद्राधिवासभवन' बनाए। 'भद्रासन' शब्दले 'राजगद्दी' लाई बुझाउंछ। नयाँ दरबारको नाम 'भद्राधिवास' रहेको हुनाले यस वेलादेखि 'राजगद्दी' पनि यहीं रहेको देखिन्छ। तर भद्राधिवास भवन कैलासकूट भवन जति भव्य र आकर्षक हुन सकेको देखिदैन। यसै हुँदा नरेन्द्रदेवपछि उनका उत्तराधिकारीहरू भद्राधिवास भवनमा बसेनन्। उनीहरू कैलासकूट भवनमा रहन लागे। 'अन्तरासन' को बैठक यहीं हुन थाल्यो। शायद राजगद्दी पनि कैलासकूट भवनमै सारियो कि भन्ने देखिएको छ। यसो हुँदा मानगृह, भद्राधिवासभवनको उल्लेख पछिका अभिलेखमा पाइंदैन।

यसरी विभिन्न समयमा विभिन्न राजदरबारमा अन्तरासनको बैठक र राजगद्दी सरिरहेका यी घटना चाखलाग्दा छन्।

-★-

# किसिपिंडीको अंशुवर्माको अभिलेख

किसिपिंडी लाछीटोलमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ । यसको अभिलेख कुँदिएको भाग २८ अङ्गुल लम्बाइ १८ अङ्गुल चौडा छ । यसको शिरोभागमा बसिरहेको साँढे अङ्कित छ । यहाँ संवत अहिले देखिंदैन ।

नोलीद्वारा ४४ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. (स्व) स्ति ... ... ... ... ...
२. .. यानुग्राह्याभिराधन.. भगवत्पशुपतिभट्टारकपादा (नुगृही)
३. तो बप्पपादानुध्यातः (ऽयं) शुवर्मा कुशलो मिग.... प्रतिबद्ध....
४. –निवासिनः कुटुम्बि (नो यथा) प्रधानङ्कुशलमाभाष्य समाज्ञापयति
५. विदि (तम्भवतु भ) वतां य... युष्मद्ग्रामसीमा .. ...
६. ... अस्माभिर्युष्मद्ग्रामेत्र प्र (साद) ... म ... तदेवंवेदिभिर (स्म)
७. त्पादोपजीविभिरन्यैर्वा न कैश्चिदयम्प्रसादो (न्यथा) कर (णी) यो (य) स्त्वेतामा-
८. ज्ञामुल्लङ्घ्यान्यथा कुर्यात्कारयेद् वामर्षयितव्यो भविष्यद्भिरपि भूप-
९. तिभिः पूर्व्व (राजकृतप्रसादानुव) र्त्तिभिरेव भाव्यञ्चिरस्थि (तये) चास्य (प्र)
१०. सादस्य शि (लापट्टकशासन) मिदन्दत्तमि (ति स्व) यमा (ज्ञा दू) तकश्चा-
११. (त्र युवरा) जश्री ... ... ...

## अनुवाद

कल्याण होस् । ... ......... भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीअंशुवर्माले मिग.....संग संबद्ध

चिचित...... (ग्राममा) बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ ।

तिमीहरूको ग्रामको जुन सीमा छ, ......तिमीहरूको यस ग्राममा हामीबाट निगाह गरिएको छ। .....यो कुरा तिमीहरूलाई थाहा होस् ।

तसर्थ यो कुरा थाहा पाई हाम्रोतर्फबाट जीविका गर्नेहरूले वा अरू कसैले यो निगाह अन्यथा नगर्नू। जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला; (त्यसलाई हामी) सहनेछैनौं। पछि हुने राजाहरूले पनि अघिका राजाले गरेको निगाहको ख्याल राख्नुपर्छ । यो निगाह धेरै कालसम्म कायम रहोस् भन्नाका लागि सनद शिलापत्र गरी दिइयो। यो मेरो आफ्नै आज्ञा हो ।

यस बातका दूतक (मार्फत) युवराज श्री (उदयदेव) ........

**व्याख्या–**

यस अभिलेखमा अहिले संवत् देखिंदैन। तर महासामन्त पद छोडी 'अंशुवर्मा' का रूपमा शासन चलाउन थालेपछिको यो अभिलेख हो। यस कारण यसलाई यहाँ राखिएको हो ।

किर्सिपिंडीभेकको एक ग्रामको सीमा–निर्धारण गरी सो ग्रामका बासिन्दाहरूलाई केही निगाह गरिदिएको कुरा यसमा परेको छ। तर केही अक्षर खण्डित हुँदा यस अभिलेखको मुख्य विषय अस्पष्ट भएको छ। यस कारण यस अभिलेखबाट कुनै प्रकाश पर्न सकेन ।

यसमा दूतकको नाउँ पनि पूरा देखिंदैन। 'जश्री...' मात्र अहिले देखिन्छ। तर यसबाट युवराज श्रीउदयदेव नै हुन् भन्ने देखिन्छ। माथि गएका अभिलेखमा युवराजको नाउँमा राजोचित 'श्री' जोडिएको थिएन। यसमा चाहिं 'श्री' रहेको छ। यसबाट युवराज उदयदेवको सम्मान अझ बढेको बुझिन्छ ।

–~–

# वनकालीको अभिलेख

पशुपति वनकालीमा यो अभिलेख कुँदिएको ढुङ्गा रहेको छ। यहाँ संवत् देखिंदैन । नोलीद्वारा ४६ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. ... ...प्रासादपिण्डं स्थलं सद्भिस्त्यामृतवर्मणा
... ... प... ... ... शिलापट्टकम् ।
२. (भर्तुः पुण्य) विवृद्धये भवगतिक्लेशक्षयायात्मनः
भार्य्या श्रीकलहाभिमानिनृपतेर्लब्ध्वा प्रसादोदय (म्)

## अनुवाद

......अमृतवर्माले .......... .......... मन्दिरको इलाकालाई राम्रो पर्खालले..... . ...शिलापत्र (राखियो) ।

श्रीकलहाभिमानी राजाकी पत्नीले उहाँबाट निगाह पाएर पतिको पुण्य बढोस् तथा आफ्नो मोक्ष होस् भनी..... (देवता स्थापना गर्नुभयो) ।

**व्याख्या-**

केही भाग खण्डित हुँदा यस अभिलेखमा परेको कुरा राम्ररी बुझिंदैन । श्रीकलहाभिमानी राजाकी रानीले आफ्ना पतिको पुण्य बढोस् भनी तथा आफ्नो मोक्ष होस् भनी देवता स्थापना गरेको बुझिन्छ। तर कुन देवता हुन्; बुझ्न सकिएको छैन ।

विद्याध्ययनशील अंशुवर्माले आफ्नो आदर्शअनुरूप 'श्रीकलहाभिमानी = लक्ष्मीसंग कलह

गर्न गर्व गर्ने' अर्थात् सरस्वतीका भक्त भन्ने उपनाम लिएका थिए। पछि उनी यही उपनामले प्रसिद्ध भएका थिए। यसको कुराको पुष्टि यस अभिलेखले पनि गरेको छ।

यस अभिलेखमा उल्लिखित अमृतवर्मा को हुन्; थाहा पाउन सकिएको छैन। उनले यहाँ रहेको देवमन्दिरको वरपर पर्खाल बनाउन लाएको बुझिन्छ। शायद अमृतवर्मा अंशुवर्माका नातेदार होलान्।

--~--

# फर्पिङको अंशुवर्माको पालाको अभिलेख

हाल यो शिलालेख ललितपुर भण्डारखालमा (पुरातत्त्व–बगैंचामा) राखिएको छ। तर यो शिलालेख फर्पिङ दक्षिणकाली जाने बाटोमा खेतमा पाइएको हो भन्ने सुनिन्छ। यो अभिलेख खण्डित छ। अहिले यहाँ संवत् देखिंदैन।

'अभिलेख–संग्रह' नवौं भागमा संशोधन–मण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ॐ स्वतनुवसुशिरःकरादिदानैरुपकृतमर्थिजनस्य येन सकल....
२. सन्तप्तस्य कलीश्वरैरतिशठैर्नित्यङ्गुणद्वेषिभिर्लोकस्यास्य सुखावहो म.....
३. स श्रीमान्कलहाभिमानिनृपतिः सर्वज्ञतामाप्नुयात् । येनैकेन कलावपि स्थिरधिया ...
४. तेनेयं स्वयशोमरीचिविमलस्फीताम्भुवि स्यन्दिनीं राज्ञा श्रीकलहाभिमानि ...
५. प्रविष्टा पातालम्पुनरपि परावृत्य तरसा द्रवीभूता कीर्तिः प्रचुरय...
६. आर्यावासस्य भूषा प्रणिधिविरहिता नित्यमन्यार्थवृत्ति ...
७. कुर्वाणेवोपमानङ्क्षितितलशशिनस्तस्य राज्ञः कृपाया (:) ...
८. सकलजगदुदन्याशान्तये शीततोयामिह यतिवरवासे पातयित्वा प्रणालीम्

## अनुवाद

जसले (बोधिसत्त्वले) आफ्नो शरीर, धन, शिर, हात आदि दान दिएर माग्न आएका मनुष्यको उपकार गर्नुभयो। . .

गुणको द्वेष गर्ने कलिकालका राजाहरूले सधैं पिरिएको यस लोकलाई सुख दिने ........ उहाँ श्रीकलहाभिमानी राजा सर्वज्ञ हुनुहोस्। स्थिर बुद्धि भएका जसले कलिकालमा पनि एक्लै

नै.....पृथ्वीभर आफ्नो सफा कीर्ति फैलिएको.....उहाँ श्रीकलहाभिमानी राजाले यो.....

पातालमा पसेर त्यताबाट बेगले फर्केर आई फैलिएको कीर्ति.......

आर्यावासको (बौद्ध विहारको) गहना जस्तो भएको, प्रणिधि (एकाग्रता पैदा गर्न नसके तापनि सधैं अरूको उपकार मात्र गर्ने......पृथ्वीतलको चन्द्रमा जस्ता उहाँ (श्रीकलहाभिमानी) राजाको निगाहको नमूना देखाउने जस्तो.....सारा संसारको प्यास बुझाउन यहाँ असल भिक्षुहरूको वासस्थानमा (विहारमा) धारा बनाएर ....

## व्याख्या–

यस अभिलेखको केही भाग खण्डित छ तापनि तात्कालिक अलिकता कुराको प्रकाश यसले पारेको छ। अंशुवर्मालाई त्यस वेलाका बौद्ध धर्मानुयायीहरूले कुन रूपमा हेरेका थिए भन्ने कुराको संकेत यस अभिलेखबाट पाइन्छ ।

लिच्छविकालको समाजलाई अनुप्राणित गर्ने विचारधारा श्रुति, स्मृति, पुराण, दर्शन आदि र आफ्नै परम्पराको आधारमा रहेको देखिएको छ। साथै बौद्ध जातक कथाले पनि त्यस वेलाको समाजलाई केही प्रभावित पारेको देखिएको छ। चाबहिलको अभिलेखको व्याख्याको प्रसङ्गमा पनि यसको अलिकता चर्चा गरिसकेको छ।

भगवान् बुद्धले शील–सदाचारमा विशेष जोड दिएका थिए। पुनर्जन्ममा बौद्ध धर्मको विश्वास थियो। यस्तै कुराको आधारमा जातककथाहरूको उत्पत्ति भयो। पाँच शयभन्दा बढी जातक-कथाहरू प्रचलित छन्। प्रत्येक जातककथामा सच्चरित्रको असल फल र असच्चरित्रको खराब फल प्रायः रोचक ढङ्गले दर्शाइएको पाइन्छ। साथै लोकको उपकारको लागि तन मन धनसमेत दान दिने बोधिसत्त्वहरूका चरित्रका चित्रण पनि जातक कथामा परेका छन्। यसो हुँदा जातक कथाले पनि जनतामा केही असर पारेको पाइन्छ। यो कुरा यस अभिलेखले पनि दर्शाएको छ। यहाँ उठानमा धनसम्पत्ति, आफ्नै जीउसमेत दान दिने बोधिसत्त्वहरूको संझना गरिएको छ।

यसपछि श्रीकलहाभिमानी राजा (अंशुवर्मा) को गुणगान गरिएको छ। अंशुवर्माको उदयले बौद्ध धर्मानुयायीहरूलाई पनि सान्त्वना मिलेको थियो। आभीर गुप्त शासकहरूको धार्मिक नीतिले गर्दा धार्मिक क्षेत्रमा केही वैमनस्य देखापरेको थियो। यसबाट बौद्ध भिक्षुहरू केही चिन्तित भएका देखिन्छन्। अंशुवर्माको उदयपछि उनले लिएको धार्मिक नीतिले गर्दा उनीहरू अंशुवर्माप्रति कृतज्ञ थिए। यो कुरा यस अभिलेखले देखाएको छ। यहाँ अंशुवर्माको तारीफ गर्दा 'गुणको द्वेष गर्ने कलिकालका खराब शासकले पिरिएको लोकलाई तिमीले सुख दियौ' भनिएको छ।

फर्पिङभेकमा त्यस वेला बौद्धविहार थियो; सो बौद्धविहारमा अंशुवर्माले धारा बनाउन लाएका थिए; यो कुरा यस अभिलेखबाट बुझिन्छ। यहाँ धाराको वर्णन गर्दा 'राजाको कृपाको नमूना' जस्तो भनी लेखिएको छ।

# गोकर्णको अंशुवर्माको अभिलेख

यो अभिलेख गोकर्णेश्वर महादेवको मन्दिरदेखि ईशानपट्टिको सानो देवलभित्र चन्दन घोट्ने ढुङ्गामा कुँदिएको छ भनी राष्ट्रिय अभिलेखालयमा रहेको यसको प्रतिलिपिमा लेखिएको छ। तर उक्त स्थानमा गई हेर्दा यो शिलापत्र पत्ता लाउन सकिएको थिएन। यसो हुनाले अभिलेखालयमा रहेको प्रतिलिपिको आधारमा यसको पाठ पढेको थिएं। हाले ऐश्वर्यधर शर्मा र गौतमवज्र वज्राचार्य-द्वारा यस अभिलेखको मूल ढुङ्गा पत्ता लागेको छ। गोकर्णेश्वरको मन्दिरदेखि केही पूर्वोत्तरतिर एक मन्दिरनिर यो भूईंमा छापी राखिएको रहेछ। यसको छेउको अलिकता भागसिवाय अरू पढ्न नसकिने भइसकेको छ। यसमा अहिले संवत् पनि देखिंदैन।

"कान्तिपुर–शिलालेख–सूची'मा शङ्करमान राजवंशीद्वारा यसको अलिकता अंश छापिएको छ। मोहनप्रसाद खनालद्वारा पनि हाल यो छापिएको छ।

## मूलपाठ

१. ... ... ...
२. ... ... (व)ज्रयान
३. ... ... पादानुगृहीत
४. ... ... अयं गुरवर्मा
५. ... ... नाङ्कुशल
६. ... ... तिबुद्धिभि-
७. ... ... सम्पदा
८. ... ... भूवैरयभट्टा
९. ... ... ट्ग्राम
१०. ... ... दिवस

११. भू...  नन  ...  माद...

१२. ...  ...  रपि  प्रतिवर्ष

१३. ...  शुक्लपञ्चम्याम्प्रातरेव स्नातानु-

१४. ...  ...  गृहालङ्कारभूतो...

१५. ...  ...  ...

# अनुवाद

...... ..... (व)ज्रयान.... ..... (पशुपतिनाथका) पाउको अनुग्रह पाएका ....... ..... अंशुवर्माले .... ..... कुशल मङ्गल (सोधेर आज्ञा गर्नुभएको छ।)

.....बुद्धि भएकाहरूले...., .... सम्पत्ति ..... (स्वयम्)भूचैत्य भट्टा(रक) ................ टु ग्राम .....दिन ...पनि...प्रतिवर्ष ........... शुक्लपञ्चमीको दिन बिहान नै स्नान गरी ............

**व्याख्या–**

चन्दन घोट्दा यस अभिलेखका अक्षर पनि धेरै मात्रामा घोटिइसकेका छन्। यसो हुनाले छेउका अलिकता अक्षर मात्र अहिले बचेका छन्। तर बचेको भागमा 'अंशुवर्मा' भन्ने उल्लेख परेको हुनाले अंशुवर्माले 'अंशुवर्मा' का रूपमा शासन चलाउन लागेको बेलाको अभिलेख यो हो भन्ने थाहा पाइन्छ। यहाँ 'बुद्ध' '(स्वयम्)भूचैत्यभट्टा(रक)' आदि पद बचेका छन्। यसबाट बौद्ध चैत्यसंग यस अभिलेखको सम्बन्ध छ भन्ने थाहा पाइन्छ। गोकर्णेश्वर महादेवनिर यो अभिलेख पाइएको छ तापनि ती महादेवसंग यस अभिलेखको सम्बन्ध रहेको छैन। अंशुवर्माले बौद्ध चैत्यसम्बन्धी कुनै व्यवस्था बाँधी यो अभिलेख राख्न लाएको बुझिन्छ।

यस अभिलेखको उठानमा '–ज्रयान' अक्षर देखिन्छन्। यी अक्षरले 'वज्रयान' लाई लक्ष्य गरेका छन्। यस बेला भारतमा वज्रयानको उदय भरखर हुँदै थियो। नेपालमा पनि वज्रयानको प्रवेश भइसकेको संकेत यस अभिलेखले दिएको छ। पछि वज्रयान नेपालमा निकै लोकप्रिय बन्यो। यसो हुनाले नेपाल वज्रयानको एक प्रमुख स्थल नै बन्यो। नेपाल-उपत्यका मात्र होइन; पहाडीभेकमा समेत यसको प्रचार भयो। लिच्छविकालमै गोरखामा 'वज्रभैरव' को स्थापना भइसकेको थियो†। नेपालबाटै भोटमा पनि वज्रयान फैलिएको थियो।

यसरी थोरै भाग मात्र बचेको भए तापनि नेपालमा बौद्ध धर्मको इतिहासबारे विचार गर्न यस अभिलेखबाट पनि केही मदत हुने भएको छ। साथै अंशुवर्माको धार्मिक नीतिबारे पनि यसबाट केही प्रकाश पर्छ।

—৵—

† गोरखाको उक्त अभिलेख तल आउँदैछ।

# फर्पिङको अभिलेख

ललितपुर भण्डारखाल (पुरातत्त्व–बगैंचा) मा हाल यो अभिलेख राखिएको छ। फर्पिङबाट यो अभिलेख ल्याइएको हो भन्ने सुनिन्छ। यसको अभिलेख कुदिएको भाग ३० अङ्गुल लम्बा, ७ अङ्गुल चौडा छ। यसको केही भाग खण्डित छ। यहाँ संवत् ४३ छ।

'पूर्णिमा' ६ अङ्कमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ...... ...... ......

२. (मा) त्रा जयवार्तिकया मान २ सुगृहीतनामा ... ... ... दायतनं शासितुश्च कुमारविजयिनः ... लय ... ... ... ... ...

३. २० मानिका प्रयच्छेत् छत्राच्छादनपुष्पसिन्दूरदीपवादित्राद्युपयोगाय द्वादश १२ मानिकाः यच्च दीप ... ... ... ... ...

४. यथाभिलिखितमासदिवसविपर्यये चासति -प- प्रत्यायेन कथञ्चन करणीयं इति व्यजिज्ञपत् संवत् ४३ ज्येष्ठ कृष्ण ... ...

## अनुवाद

आमा जयवार्तिकाले २ मानिका .... राम्रोसंग नाउँ चलेका .... शासिता कुमारविजयीको मन्दिर... .....२० मानिका दिनू। छत्र चढाउनालाई, फूल सिन्दूर बत्ती तथा बाजाको लागि १२ मानिका अरू पनि बत्ती ....

लेखेबमोजिम महीना दिनमा तल–माथि नगरीकन ....आयस्ताले कुनै तरहले चलाउनू भन्ने बिन्ति छ।

संवत् ४३ ज्येष्ठ कृष्ण..............................

## व्याख्या–

यो अभिलेख खण्डित हुनाले यसमा अहिले राजाको नाम देखिदैंन। यहां संवत् ४३ छ। यस कारण अंशुवर्माको ताकाको अभिलेख यो हो भन्ने थाहा पाइन्छ। अभिलेख राख्नेको नाम पनि अहिले देखिदैंन। उनको आमाको नाउँचाहिं जयवार्तिका थियो भन्ने यताबाट थाहा पाइन्छ।

धर्म प्रवर्त्तन गर्ने व्यक्तिलाई 'शासिता' भनिन्छ। तर पछि 'शास्ता' (शुद्ध रूप शासिता हो) शब्दले भगवान् बुद्धलाई कहन थालेको थियो। अमरकोशमा पनि 'मुनीन्द्रः श्रीधनः शास्ता मुनिः शाक्यमुनिस्तु यः' १।१।१४ भनी बुद्धको पर्यायरूपमा 'शास्ता' शब्द दिइएको छ। बुद्धले 'मार' उपर विजय गरेका हुनाले उनी 'मारविजयी' कहलाएका थिए। यस अभिलेखमा 'मारविजयी शासिता' को मन्दिरको उल्लेख परेको हुनाले यस अभिलेखको सम्बन्ध बौद्ध देवतासंग छ भन्ने देखिन्छ। बुद्धको पूजाआजाको लागि गुठी राखेको कुरा यसमा परेको छ।

फर्पिङभेकमा लिच्छविकालमा बौद्ध धर्मको प्रचार बढी थियो भन्ने देखिएको छ। माथि गएको फर्पिङको अभिलेखमा अंशुवर्माले फर्पिङको बौद्ध विहारमा धारा बनाउन लाएको वर्णन परेको छ। यसमा अर्को बुद्ध–मन्दिरको चर्चा परेको छ।

# हनूमान्ढोकाको अभिलेख

काठमाडौं हनूमान्ढोकामा देगुतलेको मन्दिरको पेटीमा यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। पेटी बनाउन यो ढुङ्गा उपयोग गरिएको हुनाले अभिलेखको धेरै भाग खण्डित भइसकेको छ। अहिले जम्मा पाँच पङ्क्ति देखिएका छन्। तर तिनमा पनि धेरै अक्षर खण्डित छन्। यहाँ अहिले संवत् देखिंदैन। यहाँको लिपि अंशुवर्माको ताकाको छ।

गौतमवज्र वज्राचार्यद्वारा यो अभिलेख प्रकाशित हुँदैछ।

## मूलपाठ

१. विविधशकुन्तपशु ... ङ्कृतयुद्धरुहः ... ... तक किरातवर्षधर .. करः . यः
२. चिरन्तनं लिच्छविराजकारितं पुरातनैर्व्वृत्तिभटैरुपेक्षि (तं)
३. ... ... ... ... ... ... ... ... ... ... ... रुहः
४. ... ... ... ... ... ... ... ... ... क्षेत्रम् भग्नक
५. ... ... ... ... ... ... ... ... ... पुनः पुनर्व्वसुः ॥

## अनुवाद

अनेक थरी चरा पशुहरू हुङ्कार गरी जुध्ने ठाउँ बनेको ...किरात....लिच्छविराजाले बनाएको पुरानो (दरबार) वृत्ति (जागीर) पाएका पुराना सैनिकहरूले वास्ता नगर्दा (जीर्ण हुन थाल्यो।) ........खेत भग्न भएको ....फेरि पुनर्वसु नक्षत्र ......।

**व्याख्या–**

यस अभिलेखमा अहिले संवत् देखिंदैन। अभिलेख राख्न लाउनेको नाम पनि यसमा देखापरेको छैन। यस कारण यो अभिलेख कसको हो भन्ने प्रश्न स्वभावतः उठ्छ। यसको निर्णय गर्ने आधार

यहाँको लिपि मात्र भएको छ। लिपिको आधारमा यो अभिलेख अंशुवर्माको हो भन्ने देखिएको छ। किनभने अंशुवर्माका अरू अभिलेख र यस अभिलेखको लिपि–कुँदाइ समान रहेको छ। लिपिको विकास–शैलीमा बीस तीस वर्षको अन्तर त्यति स्पष्ट रूपमा देखापर्दैन। तर कुँदाइँको परीक्षण राम्ररी गरियो भने अझ आसन्न समय पत्ता लाउन सकिन्छ। जसरी हस्ताक्षरको आधारमा लेखकको लेख पत्ता लाउन सकिन्छ; त्यसै गरी लिपि कुँदाइँको समानताको आधारमा अभिलेखको समय पत्ता लाउन निकै मदत पाइन्छ। यस आधारमा यो अभिलेख अंशुवर्माकै हो भन्ने मलाई लागेको छ।

आफूभन्दा अघिका शासकहरूको कीर्तिको रक्षा गरिदिने नीति अंशुवर्माको रहेको थियो। यस अभिलेखमा पनि लिच्छवि राजाको पुरानो दरबारको जीर्णोद्धार गरिदिएको कुरा परेको छ। सो पुरानो दरबारको देखरेखको लागि केही सैनिक त नियुक्त थिए। तर तिनीहरूले उपेक्षा गरेका हुनाले सो दरबार भग्नावस्थामा पुग्यो; त्यहाँ चराचुरुङ्गीहरूको वासस्थान बन्न थाल्यो; साँढे आदि पशु जुध्ने ठाउँ बन्यो। यो कुरा थाहा पाई अंशुवर्माले सो दरबारको जीर्णोद्धार गरिदिएको देखिएको छ।

यहाँनिर यो दरबार कुनचाहिं हो भन्ने प्रश्न उठ्छ। यो दरबार 'मानगृह' त अवश्य होइन। अंशुवर्माको समयमा मानगृह जीर्ण भइसकेको थिएन। यस कारण मानगृहभन्दा पुरानो दरबार यो हो भन्ने स्पष्ट छ। यहाँ 'चिरन्तन' शब्द प्रयोग गरिएको हुनाले पनि यो दरबार पुरानो थियो भन्ने थाहा पाइन्छ। चाँगुको शिवदेव अंशुवर्माको अभिलेखमा दक्षिणराजकुलको खेतको उल्लेख आएको छ। हुगलनिरको संवत् ५३५ को अभिलेखमा 'दक्षिणराजकुलस्य दक्षिणपश्चिमेन' भन्ने उल्लेख परेको छ। यसबाट दक्षिणराजकुल यसै भेकमा थियो भन्ने संकेत पाइन्छ। यस कुराको आधारमा अंशुवर्माले जीर्णोद्धार गरेको पुरानो दरबार 'दक्षिणराजकुल' हो जस्तो मलाई लाग्छ। प्रसिद्ध कोलीग्रामको दक्षिणभाग 'दक्षिणकोलीग्राम' कहलाएको थियो। कोलीग्रामकै दक्षिणतिर पर्ने हुनाले यो दरबार पनि 'दक्षिणराजकुल' कहलाएको अनुमान हुन्छ। अर्को कुरा अंशुवर्माभन्दा केही अगाडि प्रशासनमा दक्षिणराजकुलको कुनै स्थान रहेको देखिएको छैन। अंशुवर्मापछि भने दक्षिण राजकुलको पनि प्रशासनमा स्थान रहन लागेको थियो। यो कुरा ज्ञानेश्वरको तल आउने अभिलेखबाट थाहा पाउन पाइन्छ। त्यहाँ दक्षिणराजकुलभित्रको सरकारी अधिकरणको चर्चा परेको छ।

लिच्छविकालमा सैनिक आदि ठूला सरकारी अधिकारीलाई नगद रूपमा तलब दिने चलन थिएन; उनीहरूलाई जागीर रूपमा 'वृत्ति' दिइन्थ्यो। यस कुराको चर्चा पहिले गरिसकेको छ। यस अभिलेखमा दरबारमा नियुक्त 'वृत्तिभट'को उल्लेख आएको हुनाले उक्त कुरा अझ स्पष्ट भएको छ।

यस अभिलेखको अर्को महत्त्वपूर्ण कुरा यसमा स्पष्ट रूपमा 'किरात' को उल्लेख हुनु हो। मानदेवको दरबारमा 'केवुम्वाट' आदि किरात अधिकारी थिए भन्ने कुरा विष्णुपादुकाको

फेदीको अभिलेखबाट देखिएको थियो । तर स्पष्ट रूपमा 'किरात' शब्दको उल्लेख अन्त पाइएको थिएन । यहाँ स्पष्ट उल्लेख भएको हुनाले लिच्छविकालमा यहाँ किरात थिए भन्ने कुरा प्रमाणित भएको छ ।

यस अभिलेखमा दरबार जीर्णोद्धार गरी प्रतिष्ठा गरेको दिनको तिथिमिति खुलाएर दिइएको थियो भन्ने बुझिन्छ । शायद यहाँ वारको पनि उल्लेख पनि हुँदो हो । तर खण्डित हुँदा 'पुनर्व्वसु' बाहेक अरू नदेखिने भइसकेको छ । जेहोस्; खण्डितै भए पनि यो अभिलेख तात्कालिक केही कुरा बुझ्न उपयोगी रहेको छ ।

-★-

# दुम्जाको अंशुवर्माको अभिलेख

पूर्व २ नं. मा सुनकोशी र रोसीको दोभानमा दुम्जा कुशेश्वर महादेवको प्रसिद्ध मन्दिर छ। सो मन्दिरबाट उत्तर–पूर्वपट्टि सत्तलपछाडि यो अभिलेख कुँदिएको ढुङ्गा रहेको छ। यो अभिलेख खण्डित छ। यसमा अहिले संवत् देखिदैन।

'अभिलेख–संकलन' मा श्रीमोहनप्रसाद खनालद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ... ... ... ... ...कीर्ति... ... ...
२. ... ... ... ...श्रीकलहाभिमानी नृपः ...
३. ... ... ... ... ...पुण्य...मा... ...

## अनुवाद

....कीर्ति (फैलिएका) .....श्रीकलहाभिमानी राजाले.....पुण्य ......

**व्याख्या–**

यस अभिलेखको धेरै भाग खण्डित भइसकेको छ तापनि बचेको भागमा 'श्रीकलहाभिमानी नृपः' स्पष्ट देखिन्छ। यस कारण अंशुवर्माको पालाको अभिलेख यो हो भन्ने थाहा पाइन्छ। अंशुवर्मा पछि यही नामले प्रख्यात भएका थिए भन्ने चर्चा माथि गरिसकेको छ।

यस अभिलेखमा के विषय परेको थियो; सो बुझिदैन। तर पूर्व २ नं. मा पाइएको यस अभिलेखले लिच्छविकालमा नेपालराज्य उपत्यका र आसपासमा मात्र सीमित थिएन भन्ने सिद्ध गरेको छ। यस दृष्टिले यस अभिलेखको महत्त्व कम छैन।

–★–

# टुण्डिखेलको अंशुवर्माको अभिलेख

काठमाडौं टुण्डिखेलमा महाकालको मन्दिरदेखि उत्तरपट्टि उहिले पुरानो ढुङ्गेधारा थियो । त्यही धारामा यो अभिलेख कुँदिएको छ । पछि टुण्डिखेलको विस्तार गर्दा यो धारा पुरियो । यसमा संवत् ४५ छ ।

भगवान्लालद्वारा ८ संख्याको रूपमा यो छापिएको छ । नोलीद्वारा ४८ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. संवत् ४५ ज्येष्ठ शुक्ल ... ...
२. श्र्यंशुवर्म्मप्रसादेन पितुः पुण्यविवृद्धये
कारिता सत्प्रणालीयं वार्त्तेन विभुवर्म्मणा

## अनुवाद

श्रीअंशुवर्माको निगाहबाट वार्त्त विभुवर्माले (आफ्ना) बाबुको पुण्य बढोस् भनी यो असल धारा बनाउन लाए ।

संवत् ४५ ज्येष्ठ शुक्ल . . . . .

**व्याख्या–**

अंशुवर्माका पालाका अहिले पाइएका मितिसहितका अभिलेखमा यो अन्तिम हो । अंशुवर्माद्वारा वार्त्त (विशेष वृत्ति = जागीर पाएका) बनाइएका विभुवर्माले आफ्ना बाबुको पुण्य बढोस् भनी धारा बनाइएको कुरा यसमा परेको छ ।

यस अभिलेखमा 'श्र्यंशुवर्मप्रसादेन' भन्ने उल्लेख परेको हुनाले यस बेलासम्म 'श्रीअंशुवर्मा'का रूपमा उनले शासन चलाइरहेको देखिन्छ। यसको लगत्तैपछि अंशुवर्मा 'भट्टारक महाराजाधिराज' बने। अर्थात् उनी विधिवत् राजसिंहासनमा बसे; पहिलेका कुनै लिच्छवि राजाले पनि नलिएको 'महाराजाधिराज' पद उनले लिए। यो कुरा उनको टक, चितलाङको र पाटन छिन्नमस्ताको अभिलेखबाट थाहा पाइन्छ। उनको पछिल्लो एकथरी टकमा 'महाराजाधिराजस्य श्र्यंशोः' अङ्कित छ। चितलाङ र पाटन छिन्नमस्ताको अभिलेखमा 'भट्टारकमहाराजाधिराजश्र्यंशुवर्मा' को उल्लेख परेको छ। यसरी अन्तिम समयमा अंशुवर्मा राजगद्दीमा बसेको र महाराजाधिराज कहलाएको कुरा निश्चित छ। तर यो घटना संवत् ४५ ज्येष्ठपछि मात्र भएको हो; यस बेलासम्म (संवत् ४५ ज्येष्ठसम्म) चाहिं उनी 'श्र्यंशुवर्मा' का रूपमा शासन गर्दै थिए भन्ने यस अभिलेखबाट थाहा पाइन्छ।

सन्मानको दृष्टिले 'वार्त्त' पद त्यस बेला महत्त्वपूर्ण थियो। अंशुवर्माद्वारा 'वार्त्त' बनाइएका विभुवर्मा उनका नातेदार थिए कि भन्ने अनुमान हुन्छ। विभुवर्माको निश्चित परिचय पाउन सकिएको छैन।

# नघल श्रीघःविहारको अभिलेख

काठमाडौं काठेंसिम्भूको ठूलो चैत्यपछाडि दक्षिण–पश्चिमपट्टि कोंबहाल ( कुम्भविहार ) छ। त्यहाँ लहरै ५ वटा ठूलठूला र एउटा सानो गरी जम्मा छ वटा घडा देवताका रूपमा राखिएका छन्। ती घडाहरूको आसनको रूपमा एउटा ठूलो ढुङ्गो राखिएको छ। सो ढुङ्गाको १६ अङ्गुल लम्बा, १० अङ्गुल चौडा बीचको भागमा यो अभिलेख कुँदिएको छ। घडा राख्न अभिलेखलाई वास्ता नगरीकन ढुङ्गा ताछेको हुनाले अभिलेखको धेरैजसो भाग लुप्त भइसकेको छ। घडाको अन्तरमा संयोगले अलिकता भाग बचेको छ। यहाँ संवत् देखिदैन। लिपि अंशुवर्माको ताकाको छ।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ... ... ... ... ... युद्धोत्सवमनुभूय ... ...
२. ... ... ... ... ... ... भवितव्यञ्चिचरस्थितये च
३. ... ...नामदनुत्तमश्च क्षेत्रे पिण्डकसंख्येति कर्तव्य .......
४. .....(लि)ख्यते माथङग्रामदक्षिणेन वाटिकापिण्डकं विंशतिकया मा
५. ... ...विंशतिकया ... ...णाकार गुडशत १ पश्चिमेन वाटिका
६. ... ... ... ... ... ... ... ... ... क्षेत्रपिण्डकं विंशतिकया
७. ... ... ... ... ... ... ... विंशतिकया मा
८. ... ... ... ... ... ... ... न्यना ...

## अनुवाद

.......जुधाईको उत्सव हेरेर............... हुनुपर्छ। धेरै कालसम्म रहोस्

भन्नाका लागि . . .   . . . .   . . . . . .खेतको पिण्डक (कुत) को लगत, गर्नुपर्ने कामको बेहोरा. . . . .लेखिन्छ। माथङ्ग ग्रामको दक्षिणतिर बारीको कुत बीस बीस गरी . . . . .मानिका . . . . .बीस बीस गरी . . . . . . . . . . चाकुका शय डल्ला। पश्चिमतिर बारी . . . . . . खेतको कुत बीस बीस गरी . . . . . . .बीस बीस गरी . . . . . . . . . .

**व्याख्या-**

यस अभिलेखमा राजाको नाम पनि देखिदैन ; संवत् पनि देखिदैन। यहाँको लिपि अंशुवर्माको ताकाको छ। यस कारण यो अभिलेख यहाँ दिइएको हो ।

बहिले बचेको भागको उठानमा 'युद्धोत्सवमनुभूय' भन्ने उल्लेख परेको छ। यसले 'गोयुद्धोत्सव' लाई लक्ष्य गरेको बुझिन्छ । लिच्छविकालमा दक्षिणकोलीग्राममा धूमधामसंग 'गोयुद्धोत्सव' गरिन्थ्यो । यसको उल्लेख थानकोटको भीमार्जुनदेव + जिष्णुगुप्तको अभिलेखमा आएको छ । सो गोयुद्धोत्सवको लागि हलोपिच्छे कर लागेको उल्लेख पनि सो अभिलेखमा परेको छ। नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखमा पनि गोयुद्धको उल्लेख आएको छ । गोयुद्धको पताका (झण्डा विशेष) पनि हुन्थ्यो भन्ने पनि त्यसबाट थाहा पाइन्छ। यसरी त्यस वेला 'गोयुद्ध' धार्मिक यात्राको रूपमा तथा मनोरञ्जनको रूपमा पनि गराइन्थ्यो भन्ने देखिन्छ। यस कारण यस अभिलेखमा परेको 'युद्धोत्सव' यस्त 'गोयुद्धोत्सव' होला भन्ने अनुमान गर्न सकिन्छ। यस्तै उत्सव राम्ररी चलाउन आयस्ताको बन्दोबस्त गरेको कुरा यसमा परेको छ ।

आयस्ताको विवरण खुलाउँदा एउटा जग्गाबाट 'गुडशत१' एक शय चाकुका डल्ला कुत बुझाउने कुरा यसमा परेको छ। यसबाट लिच्छविकालको कुतप्रथाको अलिकता झलक पाइन्छ। लिच्छविकालमा तथा मल्लकालसम्म पनि नेपाल-उपत्यकामा ऊखुको खेती हुन्थ्यो। विशेष गरेर उपत्यकाको उत्तरी भागमा टोखा, टुप्याक, टुसालतिर ऊखुको खेती हुन्थ्यो। यी ठाउँका उपर्युक्त नाम टु (ऊखु) को सम्बन्धले रहेका हुन्। 'टुसाल' नामले यहाँ सखर, चाकु बनाउने व्यवसाय चलेको थियो भन्ने देखाउँछ। टुकुचा (इक्षुमती) खोलाको नामकरण पनि ऊखुको सम्बन्धबाट हुन गएको हो ।

बीस बीस गरी गिन्ती गर्ने चलन लिच्छविकालमा चलेको थियो भन्ने कुराको पुष्टि यस अभिलेखबाट पनि भएको छ। यहाँ खेतको कुतको लगत दिंदा बीस बीस गरी दिइएको छ ।

o—o

# ललितपुर चपःटोलको अभिलेख

ललितपुर चपःटोल इलाननीमा एउटा बुद्धको मूर्ति रहेको छ । त्यसैको पादपीठमा यो अभिलेख कुँदिएको छ । यसको अभिलेख कुँदिएको भाग २ हात १० अङ्गुल लम्बा, ८ अङ्गुल चौडा छ । यहाँ संवत् अहिले देखिदैन ।

'अभिलेख–संग्रह' पाँचौं भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. ... ... ... ... ... ... ... ... ...

२. देयधर्म्मोयम्परमोपासिकायाः विशिष्टधर्म्मपालभोगिन्या मृगिन्याः यदत्र पुण्यं तद्भवतु समातापितृभर्त्तृ पूर्व्वङ्गमानां सर्व्वसत्वानां

३. निश्शेषदुःखविनिवर्त्तये स्वात्मानश्चाग्रप्रवरतरामृतकायप्रतिलाभाय भूयात्, गन्धकुटीप्रातिसंस्करणाय तदप्रयोजने च चातुर्व्विंश-

४. महायानप्रतिपन्नार्य्यभिक्षुणीसङ्घपरिभोगायाक्षयणीवी प्रतिपादिता पनप्फुनाम-पश्चिमप्रदेशे भूमिशत १०० पिण्डमान्या पञ्चाश ५०

५. भूय ग्रामदक्षिणप्रदे(शे) भूमि षष्टि ६० पिण्डमान्या षट्त्रिङ्शं ३६ गृहप्रस्थ षष्ठश्शताय ॥

## अनुवाद

परमोपासिका (बौद्ध धर्मको ठूलो भक्ति गर्ने), धर्मपालकी मुख्य भिन्निनी मृगिनीले गरेको दान–धर्म यो हो । यसबाट भएको पुण्यले (आफ्ना) आमा, बाबु, पतिसहित सारा प्राणीका सबै किसिमका दुःख हटून्; आफूलाई पनि माथिल्लो ज्यादा असल अमृतकाय (मोक्ष) प्राप्ति होस् ।

गन्धकुटी (विहारविशेष) को मरम्मत गर्नाको निमित्त तथा सो काम नपरेमा चातुर्विश–महायान सम्प्रदायका आर्यभिक्षुणीको संघलाई खुवाउन कोइलाकाटाँ गरी गूठी राखियो। पनप्फु भन्ने ठाउँको पश्चिमतिर शय १०० भूमि, पचास ५० मानिका कुत, फेरि (सोही) ग्रामको दक्षिणतिर साठी ६० भूमि, छत्तीस ३६ मानिका कुत। छ शय गृहप्रस्थ (घरव्यवहारमा चलेको पाथी ?)

## व्याख्या–

यो अभिलेखको पहिलो पङ्क्ति नबुझिने भइसकेको छ। यसो हुनाले यहाँ अहिले संवत् पनि देखिंदैन; राजाको नाम पनि देखिंदैन। यस कारण यसको ठीक समय–निर्धारण गर्न अलि गाह्रो छ। यहाँको लिपि अंशुवर्माको ताकाको छ। यसभन्दा अलि अघिको हुनु पनि सम्भव छ।

बौद्धधर्म उत्पत्तिकालदेखि नै संघको रूपमा रहेको थियो। यसका प्रवर्तक भगवान् बुद्धले नै यसलाई संघपद्धतिमा ढालेका थिए। पछि बौद्ध धर्मका अनेक शाखा प्रशाखा निस्के। लिच्छविकालमा यहाँ महायान सम्प्रदायको बौद्ध धर्मको बढी प्रचार भएको देखिन्छ। शासक तथा दुनियाँले पनि बौद्ध धर्मप्रति आदर देखाएका हुनाले लिच्छविकालमा नेपाल–उपत्यका र आसपासमा अनेक बौद्धविहार कायम भए। ती बौद्ध विहारमा भिक्षुहरूको संघ बनेका हुन्थे। यस वेलाका अभिलेखमा यस्ता भिक्षुसङ्घको उल्लेख आएको छ। साथै भिक्षुणीहरूका संघ पनि हुन्थे। यो कुरा यस अभिलेखबाट थाहा पाइन्छ। यहाँ धर्मपाल भन्ने व्यक्तिकी भोगिनी मृगिनीले यहाँको गन्धकुटी (विहार विशेष) को मरम्मत गर्न भिक्षुणीसंघलाई भोजन गराउन जग्गा गूठी राखिदिएको कुरा परेको छ। यसबाट महायान सम्प्रदायका भिक्षुणीहरूको संघ त्यस वेला थियो भन्ने सिद्ध हुन्छ। का. इ. मुसुंबहालको अभिलेखमा पनि भिक्षुणीसङ्घको उल्लेख परेको छ।

—~—

# स्वयम्भूको अभिलेख

स्वयम्भूनाथको ठूलो चैत्यअगाडि पूर्व–उत्तर दिशामा रहेको प्रतापपुरको तल्लो तलाको उत्तर–पूर्व कुनामा रहेको ढुङ्गामा यो अभिलेख कुँदिएको छ। सो ढुङ्गा कुनै देवताको पादपीठ जस्तो देखिन्छ। यसको अभिलेख कुँदिएको भाग १ हात ६ अङ्गुल लम्बा, ५½ अङ्गुल चौडा छ। यहाँ संवत् देखिंदैन।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ...... ......निश्शेषं सान्द्र..सम्बुद्धञ्जगदेकगु(रु)....म्
२. .....यत्पुण्यं सञ्चितम्मया तेनेयञ्जनता कृत्स्ना बौद्धम्पदमवाप्नुयात्
३. ...... ......न-द्धस्य वलेपश्चिमप्रदेशे क्षेत्रमस्य पिण्डकं वर्त्तमानविंश-
तिक (या)..... मा २६
४. चार्द्ध मा......तण्डुलश्चार्द्धमा.......मा ६ उपलेपनधूपदीपानाम्मा ३
५. ....... ...... ........

## अनुवाद

......जम्मै गम्भीर .......संसारका मुख्य गुरु (उपदेश दिने) भएका बुद्धलाई... (नमस्कार छ।) .....यसबाट जुन पुण्य मैले पाएं; त्यसबाट सारा जनताले बुद्धत्व प्राप्त गरून्।

....वले भन्ने ठाउँको पश्चिमतिरको खेतको कुत अहिले व्यवहारमा चलेको बीस बीसको वरले........ .....२६ मानिका ...... आधा मानिका .......चामल

आधा मानिका........६ मानिका, उपलेपन (चन्दनादि लिप्नु), धूप, बत्तीको लागि ३ मानिका .........

**व्याख्या–**

यो अभिलेख खण्डित हुँदा यहाँ राजाको नाम, संवत् आदि अहिले देखिदैन। यसको लिपि अंशुवर्माको ताकाको छ। यसैले यहाँ दिइएको हो।

नेपाल–उपत्यकाका प्रसिद्ध बौद्ध चैत्यमध्ये स्वयम्भूचैत्यको विशिष्ट स्थान रहेको छ। वृषदेवको समयमा यहाँ ठूलो चैत्य बन्यो भनी गोपालवंशावलीमा लेखिएको छ। मानदेवको समयको अभिलेख यहाँ पाइएको छ। त्यसमा वृषदेवदेखिको वर्णन परेको हुनाले गोपालवंशावलीको कथनको केही पुष्टि हुन्छ। अंशुवर्माको ताकाको यो अभिलेखले पनि लिच्छविकालमा स्वयम्भू प्रसिद्ध बौद्ध स्थल बनिसकेको संकेत गर्छ।

खण्डित हुँदा यो अभिलेख राख्नेको नाउँ थाहा पाइँदैन। बुद्धमूर्तिको पूजा–आजाको लागि गूठी राखिदिएको कुरा यसमा परेको छ।

–★–

# काठमाडौं बण्डाहिटीको अभिलेख

काठमाडौं ढोकाढलबाट केही पश्चिमपट्टि लागेपछि बण्डाहिटी भन्ने ढुङ्गेधारा आउँछ। त्यही धाराको शिरानमा देवताको पादपीठमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १ हात ९ अङ्गुल लम्बा, २½ अङ्गुल चौडा छ। अभिलेख खण्डित हुँदा यहाँ संवत् देखिदैन।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधन–मण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ....... ...... ........ ......सर्व्वसत्त्वो

२. बुद्धो भवेत् क्षेत्रञ्च भूमि १० भगवतोस्यावलोकितेश्वरस्य धूप दीपेन मा २ आर्य्यसङ्घस्य च मा ५

## अनुवाद

....(यसबाट) सारा प्राणीले बुद्धत्व प्राप्त गरोस्। १० भूमि खेत (गुठी राखियो)। यी भगवान् अवलोकितेश्वरकहाँ धूप बत्ती बाल्न २ मानिका, आर्यसङ्घलाई ५ मानिका।

**व्याख्या–**

संवत्, राजाको नाउँ यसमा नदेखिएको हुनाले यसको समय आँक्ने आधार यसको लिपि मात्र भएको छ। यसको लिपि अंशुवर्माको ताकाको छ।

बुद्धत्व प्राप्त गर्ने अवस्थामा पुगिसकेर पनि संसारका सारा प्राणीको उद्धार नभएसम्म निर्वाण हुन्न भनी संकल्प गरी लोकको उद्धारमा लागेका करुणामय बोधिसत्त्व 'अवलोकितेश्वर, कहिन्छन्। लिच्छबिकालमा अवलोकितेश्वर निकै लोकप्रिय बनेको देखिएको छ। यस अभिलेखमा पनि यस्तै अवलोकितेश्वरको पूजा र भिक्षुसङ्घको भोजनको लागि केही जग्गा गुठी राखेको कुरा परेको छ।

# ललितपुर त्यागलटोलको अभिलेख

ललितपुर त्यागलटोलको गहिरीधाराबाट अलिकता उत्तरतिर लागेपछि एउटा चोक जस्तो ठाउँ आउँछ। त्यहाँ एउटा सानो चैत्य छ। त्यस चैत्यको बीच भागमा चारैतिर दुइ दुइ पाटामा दुइ दुइ पङ्क्ति गरी यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग कहीमा ८ अङ्गुल लम्बा, डेढ अङ्गुल चौडा छ। यहाँ संवत् छैन।

'पूर्णिमा' ५ अङ्कमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

(उत्तर पाटामा)

१. ॐ अक्षोभ्यमक्षोभ्यशिताग्रमूर्ति न्तथागतं स्तौम्यभितोभिरम्यम्
२. समन्तभद्रम्भुवि भद्रकारिण न्तथैव सन्निर्मलकीर्तिमालिनम्

(पश्चिम पाटामा)

३. याव............म्भक्त्याद्य तन्नमत शाक्यमुनिम्मु (नीशम्)
४. मैत्र्यार्द्ध....................ङ्गुह्याधिपं विमलवज्रधरं सहाब्जम्

(दक्षिण पाटामा)

५. सद्धर्मरत्नकुसुमस्तवकाचिताङ्ग म्बुद्धं समन्तकुसुमन्नमताब्जवत्याम्
६. मञ्जुश्रियम्परमधर्मविदङ्कुमार न्नित्यञ्च सुस्थितमतिङ्करुणैकतानम्

(पूर्व पाटामा)

७. महाप्रज्ञालोकक्षतभवमहामोहतिमिरं सुखावत्यां वन्दे सततममिताभञ्जिनरविम्
८. सलोकेशं लोकोद्भवभयहरम्पङ्कजधर म्महास्थामप्रा (प्तं)..पास्निग्धमन (सम्)

## अनुवाद

नीलो वर्णको मूर्ति भएका, सबैतिर रमाइला भएका, शान्त अक्षोभ्य तथागतको स्तुति गर्छु। संसारको कल्याण गर्ने विमलकीर्ति समन्तभद्रको पनि स्तुति गर्दछु।

. . . . . अब मुनीश्वर शाक्यमुनिलाई भक्तिपूर्वक प्रणाम गर। मैत्री भावना भएका, गुह्यका अधिपति, शुद्ध वज्र लिएका, कमलसहित भएका . . . लाई पनि प्रणाम गर।

सच्चा धर्मरत्नरूपी फूलका गुच्छाले जीउ ढाकिएका, अब्जवती भुवनमा रहेका समन्तकुसुम बुद्धलाई प्रणाम गर। ठूलो धर्मका कुरा जान्ने, बुद्धि ठीक रहेका, दयालु कुमार मञ्जुश्रीलाई पनि सधैं प्रणाम गर।

महाप्रज्ञाको प्रकाशले संसारको महामोहरूपी अन्धकार हटाएका, संसारमा हुने भय नाश पार्ने, कमल लिएका, मायालु मन भएका महास्थामप्राप्त लोकेश्वरसहितका सुखावती भुवनमा रहेका अमिताभ बुद्धलाई सधैं प्रणाम गर्दछु।

## व्याख्या–

यसमा संवत् र राजाको उल्लेख परेको छैन। यहाँको लिपि अंशुवर्माको ताकाको छ।

बुद्ध र बोधिसत्त्वको स्तुति रूपमा लेखिएको यस अभिलेखले लिच्छविकालमा नेपालमा प्रचलित महायानी बौद्ध धर्मबारे केही प्रकाश पार्छ। महायान–सम्प्रदायका 'सद्धर्मपुण्डरीक' आदि नौवटा ग्रन्थ 'नव व्याकरण' का रूपमा हाम्रो यहाँ अहिलेसम्म पनि पाठ गरिन्छन्। लिच्छविकालमा पनि सद्धर्मपुण्डरीक आदि महायानी ग्रन्थहरूको अध्ययन हुन्थ्यो भन्ने कुरा यस अभिलेखले देखाएको छ।

अनेक बुद्ध र बोधिसत्त्वको सिर्जना महायान–सम्प्रदायको देन हो। यस अभिलेखमा पनि अक्षोभ्य, शाक्यमुनि, अमिताभ आदि बुद्धहरू र समन्तभद्र, मैत्रेय, मञ्जुश्री, महास्थामप्राप्त आदि बोधिसत्त्वहरूको उल्लेख परेको छ। पद्मपाणि लोकेश्वरको पनि यसमा उल्लेख छ। अक्षोभ्य बुद्धको वर्ण नीलो मानिन्छ। यस अभिलेखमा पनि अक्षोभ्यलाई 'शितप्रमूर्ति' भनिएको छ। हाम्रो यहाँ मञ्जुश्री बोधिसत्त्वको ठूलो ख्याति अहिलेसम्म पनि छ। 'सरस्वती' का रूपमा पनि उनको पूजा गर्ने चलन चलेको छ। यस अभिलेखमा पनि 'परमधर्मविद्' 'सुस्थितमति' आदि भनी उनको स्तुति गरिएको छ। सुखावती-भुवनमा अमिताभ तथागत धर्मदेशना गर्दछन्; अमिताभका परिषद्मा अवलोकितेश्वर, महास्थामप्राप्त बोधिसत्त्व रहन्छन् भन्ने प्रचलित छ। यस अभिलेखमा पनि यस कुराको वर्णन गरिएको छ।

यसरी सद्धर्मपुण्डरीक आदि महायानी बौद्ध ग्रन्थले यो अभिलेख राख्नेलाई प्रभावित पारेको स्पष्ट बुझिन्छ। ती ग्रन्थमा प्रतिपादित कुरा यस अभिलेखमा बुद्ध र बोधिसत्त्वको स्तुतिको रूपमा केही पारिएको छ।

यस बेला 'आदिबुद्ध'को सिर्जना भइसकेको थियो; आदि बुद्ध 'स्वयम्भू' पनि कहलाएका थिए। गोकर्णको अंशुवर्माको अभिलेखमा '(स्वयं) भू चैत्यभट्टारक' को उल्लेख आएको छ। साथै वज्रयानको प्रवेश पनि त्यसै ताका यहाँ भइसकेको थियो। —÷—

# ललितपुर मङ्गलबजारको अभिलेख

ललितपुर मङ्गलबजारमा भीमसेनमन्दिर अगाडि यो अभिलेख कुँदिएको ढुङ्गा रहेको थियो। हाल 'राष्ट्रिय संग्रहालय' छाउनीमा लगी यो ढुङ्गा राखिएको छ। यस अभिलेखको बीचमा बुद्धमूर्ति छ। त्यसको दुइतिर मृग अङ्कित छन्। मृगसंगै भक्त, भक्तिनी अङ्कित छन्। अभिलेखको धेरै भाग नबुझिने भइसकेको छ। यहाँ संवत् देखिंदैन।

नोलीद्वारा ४५ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. त्वोत्रसङ्घाय .... ...... ......
१.(क) -अनादिनिबन्धनम् संसारस्य ... ......
२. ....योः पूजार्थमाश्वयुजः कृष्ण ..... ......
२.(क) ......त पु....रपदं प निमित्ता....
३. डिचिचदिमृदेशे ....
३.(क) ...... ......भिध......रक्षेत्रवसा-
४. .... ...... ......
४.(क) ..... ...... ...... ति...राजानं
५. ना ... ... ... ... ...
५.(क) ...... ... ......खितस्य
६. ...... ..... .....
६.(क) ..... ..... ......त ४०॥
७. कूप...... ... ......

७.(क) ...... ......त्वाखाद्यतो

८. -भिः ...... ......

८.(क) ...... .......श-ज-

९. दश मानिका.......... .......

९(क) .......... ....... तो मानेभ्या

१०. ......हार स .... ..

१०(क) ..... .... प्रदेशे क्षेत्र ...चतुर्विंशतिकया १०

११. ..... खृङप्रदेशे क्षेत्र.... .... ...

११.(क) ...... ..प्रदेशे क्षेत्र......विंशत्या दश मानि(का)

## अनुवाद

....सङ्घलाई .... .....संसारको अनादिकालदेखिको बन्धन.....पूजाको लागि आश्विन कृष्णमा ....निमित्त.....डिचिचदि भन्ने ठाउँमा.....भन्ने.....खेत ......राजालाई ......लेखिएको..... .....४०।......कूवा......दश मानिका........ ......भन्ने ठाउँमा खेत ....... .......चौबीस चौबीस गरी १००......खृङ भन्ने ठाउँमा खेत.........भन्ने ठाउँमा खेत बीस बीस गरी दश मानिका......

**व्याख्या--**

यस अभिलेखमा पनि राजाको नाउँ र संवत्को उल्लेख छैन। यसको लिपिचाहिं अंशुवर्माको ताकाको छ।

अभिलेखको धेरै भाग अस्पष्ट हुँदा यसमा परेको कुरा पनि अस्पष्ट छ। बीचमा बुद्धमूर्ति, बौद्धधर्मचिह्न अङ्कित भएको हुनाले यस अभिलेखको सम्बन्ध बौद्ध देवतासंग छ भन्ने थाहा पाइन्छ। अभिलेखमा पनि 'सङ्घ' शब्दको उल्लेख आएको छ। यो कुनै भिक्षुसङ्घ हो भन्ने देखिन्छ। खेतहरू गूठी राखेको चर्चा पनि यसमा परेको छ। एक ठाउँमा 'कूप' को पनि उल्लेख आएको छ। यसबाट बुद्धको पूजाआजा, भिक्षुसङ्घको लागि भोजन, पानी आदिको बन्दोबस्त मिलाई गूठी राखी कुनै दानपतिले यो अभिलेख राख्न लाएको देखिन्छ।

-★-

# ललितपुर बहिलीटोलनिरको अभिलेख

ललितपुर बहिलीटोलमा भित्तामा जलद्रोणीमाथि रहेको खण्डित ढुङ्गामा यो अभिलेख कुँदिएको छ। यसको धेरै भाग खण्डित छ। यहाँ संवत् देखिंदैन।

नोलीद्वारा ४७ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. मुङ्गं दिशां काम्बरभा . . . . . . न . . . . . .
२. एता स्थिर्तिं यो विगणय्य भि . . . . .
३. स्फटिकमिव[१] विलीनं चं . . . . . . .

## मूलवाद

. . . . यो स्थितिबन्देज थाहा पाएर जसले . . . . . स्फटिक जस्तै बिलाएर गएको . . . . .

व्याख्या–

यस अभिलेखको एक अंश मात्र अहिले बचेको हुनाले यसको कुरा खुल्दैन। कुनै स्थितिबन्देज बाँधी पद्यमा लेखाइराखेको महत्त्वपूर्ण अभिलेखकै एक अंश यो हो भन्ने देखिन्छ। संवत्, राजाको नाम आदि पनि अहिले देखिंदैन। यहाँको लिपि भने अंशुवर्माको ताकाको छ।

—~—

नोलोको पाठ–१. सङ्गिकमिव

# ठिमीको अभिलेख

यो अभिलेख ठिमीमा पाइएको हो भनी लेभीद्वारा ५ संख्याको रूपमा छापिएको छ। हाल ठिमीमा यो अभिलेख कहाँनिर रहेको छ; थाहा पाउन सकिएन। नोलीद्वारा ४६ संख्याको रूपमा यो छापिएको छ। यहाँ संवत् देखिंदैन। यहाँको लिपि अंशुवर्माको ताकाको छ भन्ने नोलीको भनाइ छ।

## मूलपाठ

..... .....

१. यना...... .....
२. मशेषनै..... ......
३. गुरोर्व्वासु देवस्य. .......
४. र्त्थे भूयादित्यस्मा(भि)......
५. णानुस्मरणमि .....
६. : द्भि सर्वैरनुसमम्.....
७. स्तावदाकृष्टव्योयम्
८ वासौ न सम्पन्नातिक.....
९. तिक्....धान्यमानि

(केही पङ्क्ति पढ्न नसकिने)

१०. द्भिरपि
११. (स्व)यमाज्ञा दूतकश्चा(त्र)देवप.....

# अनुवाद

.....जन्मै......गुरु वासुदेवको .....लागि होस् भनी हामीबाट .....संज्ञना .....सबैले प्रतिवर्ष.....ताम्र पछं ......यो सम्पत्ति......गर्नुहुंदैन ।...... मानिका धान........

यो मेरो आफ्नै आज्ञा हो। यस बातका दूतक देवप.....

## व्याख्या–

खण्डित हुँदा यस अभिलेखमा परेको कुरा अहिले नबुझिने भएको छ। राजाको नाम भएको माथिल्लो भाग र तल संवत् रहने भाग पनि खण्डित छ। यस कारण यो अभिलेख कसको हो भन्ने निर्णय गर्न अलि गाह्रो छ। यसको लिपि अंशुवर्माको ताकाको छ । 'स्वयमाज्ञा' भन्ने वचन यसमा परेको हुनाले राजाद्वारा राख्न लाएको अभिलेख यो हो भन्नेचाहिं निश्चित छ ।

यसमा 'गुरोर्व्वासुदेवस्य' भन्ने उल्लेख आएको छ । तल 'धान्यमानि(का)'को पनि उल्लेख छ। यसबाट वासुदेवको पूजा–आजाको लागि बन्दोबस्त मिलाई यो अभिलेख राखिएको हो भन्ने देखिन्छ । लिच्छविकालमा नेपालमा बढी प्रचलित धार्मिक सम्प्रदायमध्ये एक वैष्णव सम्प्रदाय पनि हो। उठानका लिच्छवि राजाहरू प्रायः वैष्णव धर्मका अनुयायी थिए । यो कुरा सनव शिलालेखको शिरोभागमा अङ्कित वैष्णव–धर्मसम्बन्धी चिह्नबाट हामी थाहा पाउँछौं। यसो हुनाले वैष्णव सम्प्रदायको प्रचार हुनु स्वाभाविक थियो । यस बेला ठिमी भेकमा पनि वासुदेवको मन्दिर रहेको यस अभिलेखबाट बुझिन्छ । लेलेको अभिलेखमा वासुदेवका भक्त ब्राह्मणहरूको गोष्ठीको उल्लेख आएको छ। यसै गरी ठिमी भेकमा पन यस्तो गोष्ठी थियो भन्ने अनुमान हुन्छ ।

—ʌʌ—

# नक्सालको अभिलेख

नक्साल ढुङ्गेधारामा एक विष्णुमूर्ति रहेको थियो। त्यसैको पादपीठमा यो अभिलेख कुँदिएको छ। हाल यो विष्णुमूर्ति राष्ट्रिय संग्रहालयमा राखिएको छ। यसको अभिलेख देखिने भाग २६ अङ्गुल लम्बा ३ अङ्गुल चौडा छ। अक्षर खिइएका हुनाले थोरै भाग मात्र पढ्न सकिने अवस्थामा छ। यहाँ संवत् देखिदैन।

'पूर्णिमा' ९ अङ्कमा गौतमवज्र वज्राचार्यद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ... ... ... ... ...
२. ... ... ... ... ...

.....सदृशमुच्छ्वासवातोद्भवात् मध्ये तोयनिधेः प्रचण्डपवनप्रोद्धूतचैलाग्रतो द....

## अनुवाद

.....उच्छ्वासको हावाबाट भएको, समुद्रको बीचमा कडा हुरीले लुगा उडाइएको....

**व्याख्या--**

यस अभिलेखको एक पाउ जति मात्र अहिले पढ्न सकिएको छ। यतिबाट पनि प्रौढ संस्कृत–पद्यमा यो अभिलेख लेखिएको थियो भन्ने कुरा व्यक्त हुन्छ। अंशुवर्माको ताकाको लिपिमा लेखिएको यस अभिलेखबाट यस ताका वैष्णवधर्मको प्रचार थियो भन्ने संकेत पाइन्छ। साथै कलाको दृष्टिले पनि यस अभिलेखको केही महत्त्व छ।

# भेल्बूको अभिलेख

बलम्बूको पश्चिमपट्टि च्यार्चा खोल्सोको पारि 'भेल्बू' भन्ने खेतको फाँट छ । त्यहाँ खेतमा पानी लाउन खाँद खन्दा जमीनभित्र यो शिलालेख पाइएको हो भन्ने त्यहाँका मानिसको भनाइ छ । अहिले यो शिलालेख बलम्बू महालक्ष्मीको मन्दिरअगाडि ल्याई राखिएको छ । यो शिलालेख चारैतिरबाट खण्डित छ । बीचको भागमा मात्र अक्षर बाँकी छन् । अहिले पाइएकोमा अभिलेख कुँदिएको भाग २६ अङ्गुल लम्बा १० अङ्गुल चौडा छ । यसमा अहिले संवत् देखिदैन ।

'पूर्णिमा' ५ अङ्कमा संशोधनमण्डलद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. ......सं व.....
२. .....स्मदनुमोदन.....
३. .....(सा)मन्तचन्द्रवर्मगो(मि)
४. .....चिरतरकालस्थितये क्षे.....
५. .......ङ्ग्रामनिवासिभ्यः खडब्रंशै......
६. .......शासनन्त्वनेककालप्रवृत्त.....
७. ......भिर्भवद्भिर्यथोपनीयमान.......
८. .......नामुपनेयास्तैश्चानुपाल्यमानै......
९. .......म्प्रतिवस्तव्यं सीमा चास्य पूर्वेण.......
१०. .....दक्षिणेन बद्राली दक्षिणपश्चिमेन.......
११. .....(उत्त)रपश्चिमेन थंसम्प्रिन्देवक्षेत्राली......
१२. .....स एव राजपथः हस्विमविल्लोग्रामस्य......
१३. .......त्र सीमान इत्येतत्सीमान .....नग्र(हारे)
१४. ...... ...... पीडा कार्या.....
१५. ........ .... (न म)र्षयिष्यामो.....
१६. ..... .... ... ... मन्यथा का...

# अनुवाद

...हाम्रो अनुमति लिई ....सामन्त चन्द्रवर्मा गोमीले .....यो धेरै कालसम्म कायम रहोस् भन्नाको लागि....ङग्रामका बासिन्दाहरूलाई खडभ्रंश ..... ....सनदचाहिं धेरै कालदेखि चलेर आएको ...... .....तिमीहरूले जसरी बुझाएर आएका थियौ; (त्यसै गरी तिनीहरूलाई) बुझाउनू। तिनीहरूद्वारा हेरचाह गरिएका छँदा (सुखसंग बस्नू)।

यसको सीमा यस प्रकारको छ—पूर्वतिर....दक्षिणतिर बद्राली, दक्षिण पश्चिमतिर.... उत्तर—पश्चिमतिर थंसम्प्रिम् देवताको खेतको आली सांध, ...... ...त्यही नै मूलसडक हस्विमबिल्ली ग्रामको ..... ....

यति सीमाभित्रको .....अग्रहार (बिर्त्ता) मा ....(कसैले) दुःख नदिनू। जसले या आज्ञा नटेरेर अन्यथा गर्ला; त्यसलाई हामी सहनेछैनौं।.....अन्यथा गर्ने ...... ...

## व्याख्या–

खण्डित भएको हुँदा यस अभिलेखमा राजाको नाउँ, संवत्, मुकाम आदि अहिले देखिंदैनन्। यहाँको लिपि अंशुवर्माको ताकाको छ।

यस अभिलेखमा सामन्त चन्द्रवर्मा गोमीको उल्लेख परेको छ। तल आउने पाटन छिन्नमस्ताको संवत् ४८ को अभिलेखमा पनि सामन्त चन्द्रवर्माको उल्लेख आएको छ। यसबाट पाटन भेकको प्रशासन सामन्त चन्द्रवर्मा गोमीको हातमा रहेको थियो भन्ने बुझिन्छ। सामन्त चन्द्रवर्माले गरेको जाहेरीमुताबिक विद्वान्‌हरूलाई अग्रहार दिई यो अभिलेख गरिदिइएको हो। अहिले बचेको भागबाट यो कुरा थाहा पाइन्छ।

## 'चान्द्र' व्याकरणको रचना–

सामन्त चन्द्रवर्मा गोमी एक प्रशासक मात्र थिएनन्। एक प्रसिद्ध व्याकरण ग्रन्थका रचयिताका रूपमा पनि उनी देखापरेका छन्। यहाँ यस विषयमा पनि अलिकता विचार गर्नुपरेको छ।

गोपालवंशावलीकारले अंशुवर्माको वर्णन गर्दा 'व्याकरणादिशास्त्रचर्चता प्रवर्तते=व्याकरण आदि शास्त्रको चर्चा हुन थाल्यो' भनी लेखेका छन्। भाषावंशावलीकारले पनि अंशुवर्माको वर्णन गर्दै जाँदा 'नेपालमा व्याकरण शास्त्र पढन्या पढाउन्या रीत चलाया' भनी लेखेका छन्। कर्कप्याट्रिक यहाँ आउँदा भक्तपुरमा उनलाई त्यहाँका पण्डितहरूले एउटा व्याकरण देखाएका थिए; सो व्याकरण अंशुवर्मादेखि प्रचलित भएर आएको हो भन्ने पण्डितहरूको भनाइ छ भनी कर्कप्याट्रिकले आफ्नो पुस्तकमा लेखेका छन्। प्रसिद्ध चीनिया यात्री युआनच्वाङ्गले पनि अंशुवर्माले शब्दविद्या (व्याकरण) सम्बन्धी ग्रन्थरचना गर्न लाएका थिए भन्ने वर्णन गरेका छन्। अंशुवर्माले बनाउन लाएको व्याकरणको प्रसिद्धि भारतमा पनि फैलिसकेको थियो भन्ने यसबाट बुझिन्छ।

यति कुराबाट अंशुवर्माको समयमा हाम्रो यहाँ व्याकरण शास्त्र बनेको थियो भन्ने कुरा स्पष्ट देखिएको छ। नत्र विभिन्न समयमा विभिन्न ठाउँमा लेखिएका उपर्युक्त ग्रन्थहरूमा एकै भावको कुरा पर्ने थिएन। यसो हुनाले सो व्याकरण कुन हो भनी खोजी गर्नु आवश्यक छ। यस विषयमा विचार गर्दा अंशुवर्माको पालामा बनेको व्याकरण 'चान्द्रव्याकरण' हो भन्ने देखिएको छ। सो व्याकरण चन्द्रवर्मा गोमीले बनाएको हुनाले 'चान्द्रव्याकरण' भनी कहलाएको हो। यो कुरा सो ग्रन्थको उपसंहारवाक्यबाट थाहा पाइन्छ। यता अंशुवर्माको समयमा सामन्त चन्द्रवर्मा गोमी प्रसिद्ध व्यक्ति थिए भन्ने कुरा भेल्बूको यस अभिलेखबाट र पाटन छिन्नमस्ताको अभिलेखबाट थाहा पाइएको छ। छिन्नमस्ताको अभिलेखमा चन्द्रवर्मा गोमीले अंशुवर्माप्रति ठूलो आदर प्रकट गरेका छन्। यसबाट उनी अंशुवर्माका कृपापात्र व्यक्ति थिए तथा उनी अंशुवर्माप्रति कृतज्ञ थिए भन्ने थाहा पाइन्छ।

यसरी अंशुवर्माको समयमा यहाँ व्याकरण बन्यो भन्ने प्रसिद्धि विदेशसम्म पनि फैलिनु; चन्द्रवर्मा गोमीले बनाएको हुनाले 'चान्द्रव्याकरण' नाम रहनु; अंशुवर्माको समयमा यहाँ सामन्त चन्द्रवर्मा गोमीको उल्लेख अभिलेखमा पाइनु यी कुराबाट 'चान्द्रव्याकरण' हाम्रो यहीं बन्यो भन्ने अनुमान गर्ने प्रशस्त आधार रहेको छ भन्ने कुरा स्पष्ट छ।

अर्को कुरा—हाम्रो यहाँ जति चान्द्रव्याकरणका प्राचीन हस्तलिखित प्रति पाइन्छन्; त्यति भारतमा पाइँदैनन्। हाम्रो यहाँ राष्ट्रिय अभिलेखालयमा मात्रै पनि दशौं प्रति 'चान्द्रव्याकरण' छन्। पछिल्लो लिच्छवि लिपिमा लेखिएका चान्द्रव्याकरणका केही प्रति पनि राष्ट्रिय अभिलेखालयमा छन्। तर ती प्रति पूरा छैनन्। अहिलेभन्दा आठशय वर्ष जति पहिले लेखिएको चान्द्रव्याकरण पनि त्यहाँ छ। अरू प्रति पनि प्रायः स्थितिमल्लभन्दा अघि लेखिएका छन्। केसरपुस्तकालय आदिमा पनि पुराना चान्द्रव्याकरण छन्। यीबाहेक व्यक्तिगत संग्रहमा पनि चान्द्रव्याकरण पाइएका छन्। यसबाट हाम्रो देशमा चान्द्रव्याकरण निकै लोकप्रिय बनेको स्पष्ट छ।

यसरी सबैतिरबाट विचार गर्दा 'चान्द्रव्याकरण' हाम्रा सामन्त चन्द्रवर्मा गोमीले नै बनाएका हुन् भन्ने देखिन आएको छ। यस विषयमा अझ बढी खोजी हुनु आवश्यक छ। भोटतिरको ग्रन्थमा चान्द्रव्याकरणका रचयिता चन्द्रवर्मा गोमीको जीवनीको उल्लेख छ भन्ने सुनिन्छ। त्यसको छानबीन गर्न सके यस विषयमा बढी प्रकाश पर्ने सम्भवना छ।

यो अभिलेख पाइएको भेल्बूमा अहिले कुनै बस्ती छैन। चारैतिर खेतका फांट मात्र छन्। परन्तु उहिले यहाँ बस्ती थियो भन्ने संकेत यहाँको संस्थानले दिन्छ। यो अभिलेख भेट्टिएको ठाउँदेखि चार पाँच शय गजसम्मको गिर्जामा कान्ला, कुलेसा, गोरेटा बाटा, ढिस्कामा जतातत्तै राम्ररी पोलिएका ईंटका झिगटीका टुक्राहरू देखापर्छन्। खेतखन्दा ईंट छापिएको ठाउँ बराबर भेटिन्थ्यो भन्ने पनि त्यहाँका बूढापाकाको भनाइ छ।

–†–

# चितलाङको उदयदेवको अभिलेख

चितलाङ गणेशस्थानमा यो अभिलेख कुंदिएको शिलापट्ट रहेको छ। यसको शिरोभागमा त्रिशूल अङ्कित छ। यसको अभिलेख कुँदिएको भाग २४ अङ्गुल लम्बा, १७ अङ्गुल चौडा छ। यहाँ संवत् ४५ दिइएको छ।

यो अभिलेख यहाँ छ भन्ने कुरा श्रीहेमराज शाक्यले पत्ता लाउनुभएको हो। 'अभिलेख–प्रकाश' को १२ पृष्ठमा यसको चर्चा परेको छ। 'टिस्टुङ्ग–चितलाङभेकको ऐतिहासिक सामग्री' को १९ पृष्ठमा प्रा. हेमन्त राणा र मैले यो अभिलेख छपाएको छौं।

## मूलपाठ

१. ..... ..... ... ......
२... .. ... भगवत्पशुपतिभट्टारकपादानुगृहीतो ब-
३. (प्पपा) दानुध्यातो भट्टारकमहाराजाधिराजश्रीउदयदेवः कु-
४. (शली) .... निवासिनः कुटुम्बिनो यथाप्रधानङ्कुशलमाभाष्य
५. (समा) ज्ञापयति विदितमस्तु वो यो युष्मदीयतलप्रतिबद्ध ....
६. ........ भट्टारकमहाराजाधिराजश्रयंशुवर्मपादै ...... पाञ्चा-
७. लिकानामग्रहारोयं प्रसादीकृतोभूत् .... स्माभिरेष ... पाञ्चा-
८. लिकानां यथासुखम्परिभोगार्थमग्रहार ... प्रसादीकृत (श्चिर-)
९. स्थितये चाभिलेख्य ..... शासनमिदन्दत्तं सीमा चास्य ......
१०. ... .... .... खातक ... गुंशिखर-
११. .... .... या ..... स एव खातक इत्येतत्सीमपरिक्षिप्त ...
१२. .... ..... न्यैर्वा न कैश्चि (दल्पापि) पीडा विधेया य-
१३. स्त्वेतामाज्ञामतिक्रम्यान्यथा कुर्या (त्कारयेद्वा) .... ...

१४. ....मर्षयिष्यामो भविष्यद्भिरपि भूपतिभिरस्मत्कृतप्रसादोन्य-
१५. (था न) करणीय इति..... . ... ... दूतकश्चात्र सर्व-
१६. ..... ...... ... संवत् ४५...षाढकृष्णद्वादश्याम्

# अनुवाद

..... .... ....भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बुवाको पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, भट्टारक महाराजाधिराज श्रीउदयदेवबाट ...बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस्।

......तिमीहरूको तलअन्तर्गत रहेको... ......भट्टारक महाराजाधिराज श्रीअंशुवर्माबाट .....पाञ्चालिकहरूलाई यो अग्रहार (बिर्ता) निगाह गरी दिइएको थियो... हामीबाट .....पाञ्चालिकहरूले सुखसंग भोगचलन गर्न पाउने गरी यो अग्रहार निगाह गरी दिइएको छ। धेरै कालसम्म कायम रहोस् भन्नाको लागि.....सनद शिलापत्रमा लेखी दिइयो।

यसको चारकिल्ला यस प्रकारको छ– ....पोखरी .....गुं डाँडो, ..... ....त्यही पोखरी। यति इलाकाभित्रको .....(यस जग्गामा सरकारी कर्मचारी) वा अरू कसैले पनि अलिकता पनि दुःख दिनु हुँदैन। जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला; ..... (त्यसलाई हामी) सहनेछैनौं। पछि हुने राजाहरूले पनि हामीबाट भएको निगाह अन्यथा गर्नु-हुँदैन।

यहाँ दूतक सर्व (दण्डनायक) .....। संवत् ४५.....आषाढ कृष्ण द्वादशी।

## व्याख्या-

चितलाङको यो अभिलेख अनेक दृष्टिले महत्त्वपूर्ण रहेको छ। यसको केही भाग खण्डित छ तापनि यसमा राजाको नाम स्पष्ट देखिन्छ। संवत् भएको भाग अलि खिइएको छ। तर अलि गहिरिएर हेर्दा यहाँको संवत् ४५ हो भनी ठम्याउन सकिन्छ। यस कारण चितलाङको यस अभिलेख-बाट लिच्छविकालको राजनैतिक इतिहासको एक प्रमुख प्रश्नको समाधान भएको छ।

## अंशुवर्माको अवसान--

जनताले सुख पाऊन् भनी अंशुवर्माले अनेक व्यवस्था बाँधेर गए; उनको शासनकालमा राष्ट्रमा शान्ति सुरक्षा कायम रह्यो; शासनमा स्थिरता रह्यो; आर्थिक उन्नति भयो; विद्याको प्रसार बढ्यो; कलाको क्षेत्रमा नयाँ प्रयोग भयो; विदेशमा नेपालको प्रतिष्ठा फैलियो। तर अंशुवर्माको अवसान कसरी भयो? यो कुरा रहस्यमय नै बनेको थियो। कालगतिले नै उनको मृत्यु भयो कि अधिकार हथ्याउन आभीर गुप्तहरूले अवसर पाई कुनै तरहले उनलाई पन्छाए?

यो खुल्न सकेको थिएन। साथै अंशुवर्मालि युवराज घोषित गरिएका उदयदेवले गद्दीमा बस्न पाए कि पाएनन्; यो प्रश्न पनि उठेको थियो। तर यो अभिलेखले उपर्युक्त तर्क–वितर्कको समाधान गरिदिएको छ। यस अभिलेखमा 'भट्टारकमहाराजाधिराज' का रूपमा उदयदेवको उल्लेख आएको छ। तथा भूतपूर्व 'भट्टारकमहाराजाधिराज' का रूपमा अंशुवर्माको उल्लेख आएको छ। संवत् ४५ को टुण्डिखेलको अभिलेखबाट अंशुवर्मा त्यस बेलासम्म जीवित थिए भन्ने थाहा पाइन्छ। त्यसै सालको यस अभिलेखमा भूतपूर्व रूपमा उल्लेख भएको हुनाले संवत् ४५ मै अंशुवर्माको मृत्यु भएको रहेछ; उनको मृत्यु कालगतिले नै भएको रहेछ; उनी जीवित छउन्जेल गुप्त आभीरहरूले टाउको उठाउन सकेनन्; उनको योजनाअनुसार उनीपछि युवराज उदयदेव नै महाराजाधिराजका रूपमा गद्दीमा बसे भन्ने कुरा यस अभिलेखबाट स्पष्ट भएको छ।

अंशुवर्माभन्दा अगाडिका मानदेव आदि लिच्छवि राजाहरू 'महाराज' मात्र कहलाएका थिए; 'महाराजाधिराज' कहलाएका थिएनन्। आफ्नो अन्तिम समयमा आएर अंशुवर्मा नेपालको इतिहासमा सर्वप्रथम 'महाराजाधिराज' बने। महाराजाधिराज अङ्कित अंशुवर्माको टकले पनि उक्त कुराको पुष्टि गर्छ। यसरी अंशुवर्माको भित्र रहेको महत्त्वाकाङ्क्षा अन्तिम समयमा साकार बन्न पुग्यो। अंशुवर्मापछि उनका उत्तराधिकारी बनेका उदयदेव पनि स्वभावतः महाराजाधिराज कहलाए। यसरी लिच्छवि राजाहरूमा महाराजाधिराज कहलाउने उदयदेव पहिला हुन्। उदयदेव त्यति योग्य शासक साबित भएनन्। यसो हुनाले फेरि गुप्त आभीरहरूले टाउको उठाउने मौका पाए। उदयदेव यहाँ टिक्न सकेनन्। आत्मरक्षाको लागि उनले भोटमा शरण लिनुपरेको थियो।

अंशुवर्माभन्दा अघि राजकीय धर्मको रूपमा वैष्णवसम्प्रदाय रहेको थियो। अंशुवर्माचाहिं शैवमार्गी थिए। उनका उत्तराधिकारी उदयदेव पनि शैवसम्प्रदायका अनुयायी भए। यो कुरा यस अभिलेखबाट थाहा पाइन्छ। यहाँ उनले आफूलाई 'भगवत्पशुपतिभट्टारकपादानुगृहीत' भनी लेख्न लाएका छन्। साथै यस शिलापट्टको शिरोभागमा महादेवको प्रमुख चिह्न 'त्रिशूल' अङ्कित गरिएको छ। त्रिशूल अङ्कित एक मात्र अभिलेख यो छ। यसपछि क्रमशः शैवधर्मले राजकीय धर्मको रूप लियो।

अंशुवर्मालि चित्तलाङभेकको पाञ्चालीलाई 'अग्रहार' (बिर्ता) दिएका थिए। उदयदेवले सो थामिदिएको कुरा यस अभिलेखमा परेको छ। यसबाट लिच्छविकालमा उपत्यकाबाहिर पनि पाञ्चाली (पञ्चायत) व्यवस्था कायम थियो भन्ने कुरामा प्रकाश परेको छ। साथै पाञ्चालीको अधीन साझा जग्गा–जमीन हुन्थे भन्ने कुराको पनि पुष्टि यसबाट भएको छ।

यसरी चितलाङको यो अभिलेख अनेक दृष्टिले उपयोगी रहेको छ।

# छिन्नमस्ताको ध्रुवदेव+जिष्णुगुप्तको अभिलेख

ललितपुर मङ्गलबजार नजीकै तःश्याटोलमा छिन्नमस्तादेवीको मन्दिर छ। त्यहीं यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३१ अङ्गुल लम्बा, अङ्गुल २३ चौडा छ। यसको शिरोभागमा सुन्दर माछा अङ्कित छ। यहाँ संवत् ४८ छ।

भगवान्लालद्वारा ६ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ५० संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' २१ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. ॐ स्वस्ति मानगृहा(द्) [१] ..... दितचित्तसन्तति [२] भट्टारकमहाराज-
२. श्रीध्रुवदेवसहितो [३] निरस्तमात्सर्यविशुद्धबुद्धिः [४] प्रजाहितैषी निरवद्यवृत्तः
३. पुण्यान्वयादागतराज्यसम्पत् समस्तपौरार्चितशासनो [५] यस्स कैलासकूटभ-
४. वनाद्भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः श्रीजिष्णुगुप्तः
५. कुशली थम्बूगाङशुल्मूलवाटिकाग्रामेषु निवासमुपगतान्कुटुम्बिनः कुशल-
६. माभाष्य समाज्ञापयति विदितमस्तु भवताम्भट्टारकमहाराजाधिराजश्र्यंशु-
७. वर्मपादैर्युष्मदीयग्रामाणामुपकाराय योसौ तिलमक आनीतोभूत्प्र--
८. तिसंस्काराभावाद्विनष्टमुद्वीक्ष्य सामन्तचन्द्रवर्मविज्ञप्तैरस्माभिस्तस्यै-
९. व प्रसादीकृतस्तेन चास्मदनुज्ञातेन युष्मद्ग्रामाणामेवोपकाराय प्र-

---

नोलीका पाठ–

१. ..........  २. ..........
३. श्रीध्रुवदेव(पुरस्सरः)  ४. ..........
५. समस्तपौराश्रितशासनो

१०. तिसंस्कृतोस्य चोपकारस्य पारम्पर्याविच्छेदेन चिरकालोद्वहना-
११. य युष्माकं वाटिका अपि प्रसादीकृतास्तदेताभ्यो यथाकालम्पिण्ड-
१२. कमुपसंहृत्य भवद्भिरेव तिलमकप्रतिसंस्कारः करणीय एतद्ग्राम-
१३. त्रयव्यतिरेकेण चान्यग्रामनिवासिनान्न केषाञ्चिन्नेतुं लभ्यतेस्य च
१४. प्रसादस्य चिरस्थितये शिलापट्टकशासनमिदन्दत्तमेवंवेदिभिर्न
१५. कैश्चिदयम्प्रसादोन्यथा करणीयो यस्त्वेतामाज्ञामतिक्रम्यान्यथा तिलम-
१६. (क) न्नयेत्तस्यावश्यन्दण्डः पातयितव्यो भविष्यद्भिरपि भूपतिभिः पूर्वरा-
१७. जकृतप्रसादानुवर्त्तिभिरेव भवितव्यमिति अपि चात्र वाटिकानामुद्देश (:)
१८. (थ) म (बू) ग्रामस्य दक्षिणोद्देशे पूर्वेणारामं विं मा २ तिलमकस्य पश्चिमप्रदेशे मा
१९. ....(दे) बकुलं पूर्वेण मा ४ मूलवाटिकाग्रामस्योत्तरतः अशिङ्कोप्रदेशे मा ८
२०. ....प्रदेशे मा १ गाङ्शुल्ग्रामं पश्चिमेन कडम्प्रिङ्प्रदेशे मा ४ कङ्कुलंप्रदेशे
२१. मा ४ स्वयमाज्ञा संवत् ४८ कार्तिक शुक्ल २ दूतको युवराजश्रीविष्णुगुप्तः

## अनुवाद

कल्याण होस्। मानगृह (दरबार) बाट...........मन भएका, भट्टारक (गद्दीनशीन) महाराज श्रीध्रुवदेवका साथ रहने, मात्सर्य हटिसकेका हुनाले सफा बुद्धि भएका, प्रजाको हित चाहने, निखुरी चरित्र भएका, शुद्ध कुलक्रमले राज्य गर्ने अधिकार पाएका, सारा शहरियाहरूले हुकूम तामेल गरिएका, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीजिष्णुगुप्तले कैलासकूट भवन (दरबार) बाट थम्बू, गाङ शुल, मूलवाटिका ग्रामहरूमा बस्ने गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ।

भट्टारक (गद्दीनशीन) महाराजाधिराज श्रीअंशुवर्माले तिमीहरूका ग्रामको उपकारको लागि जुन कुलो ल्याउनुभएको थियो; मरम्मत नगरिएको हुनाले सो कुलो बिग्रिदै गएको देखेर सामन्त चन्द्रवर्माले यो कुरा हामीमा जाहेर गरेका हुनाले हामीले यस काममा उनैलाई निगाह गरी खटाएका थियौं । उनले पनि हाम्रो आज्ञाअनुसार तिमीहरूका ग्रामको उपकारको लागि कुलोको जीर्णोद्धार गरे । यो उपकार नटुटीकन धरै कालसम्म कायम होस् भन्नाको लागि तिमीहरूलाई बारी पनि निगाह गरी दिइएका छन्। तसर्थ यी बारीबाट ठीक समयमा कुत उठाई तिमीहरूले नै कुलोको मरम्मत गर्नू। यी तीन ग्रामबाहेक अरू ग्रामका बासिन्दाहरू कसैले पनि (त्यो कुलो) लान पाइंदैन। यो कुरा तिमीहरूलाई थाहा होस् ।

यो निगाह धेरै कालसम्म कायम रहोस् भन्नाका लागि यो सनद शिलापत्र गरी दिइएको छ। यो थाहा पाई कसैले पनि निगाह अन्यथा नगर्नू। जसले यो आज्ञा नटेरेर कुलो अन्त लैजाला; त्यसलाई अवश्य सजाय गरिनेछ। पछि हुने राजाहरूले पनि अघिका राजाहरूले गरेको निगाह थाम्नुपर्छ ।

बारी रहेका ठाउँहरू यस प्रकारका छन्–थम्बू गाउँको दक्षिणमेकमा पूर्वतिरको बारी बीस बीस गरी २ मानिका, कुलोको पश्चिमपट्टि . . . . . मानिका, देवमन्दिरको पूर्वपट्टि ४ मानिका, मूलवाटिका गाउँको उत्तरतिर अशिङ्को भन्ने ठाउँमा ८ मानिका, . . . . . भन्ने ठाउँमा १ मानिका गाङशुल गाउँको पश्चिमपट्टि कडम्प्रिङ भन्ने ठाउँमा ४ मानिका, कङ्कुलम् भन्ने ठाउमा ४ मानिका।

यो मेरो आफ्नै आज्ञा हो। संवत् ४८ कार्तिक शुक्ल द्वितीया । दूतक (मार्फत) युवराज श्रीविष्णुगुप्त ।

## व्याख्या–

अंशुवर्माको अवसानपछि भौमगुप्तका नाति जिष्णुगुप्त अगाडि बढे । उदयदेवलाई पन्छाई ध्रुवदेवलाई गद्दीमा राखी आफ्ना पितामह भौमगुप्तले जस्तै उनले शासन गर्न लागे। तर पहिलेको र अहिलेको अवस्थामा अन्तर आइसकेको हुनाले बाजे र नातिको अवस्थामा पनि निकै अन्तर रहेको थियो। सारा अधिकार आफ्नो हातमा लिई राजोचित 'श्री' पदले विभूषित भई भौमगुप्तले शासन चलाएका थिए तापनि उनी महाप्रतिहार र सर्वदण्डनायक पदमै थिए। अब जिष्णुगुप्तले चाहिं ती पद लिएका छैनन्। राजाका साथ 'तत्पुरस्सर' लेख्न लाउन सक्ने संयुक्त राजाका रूपमा उनी देखापरेका छन्। भौमगुप्तको भिन्नै मुकामको उल्लेख सनदपत्रमा रहँदैनथ्यो। जिष्णुगुप्तले लिच्छवि राजालाई मानगृहमा राखी आफूचाहिं कैलासकूटभवनमा बसी अंशुवर्माले जस्तै शासन गर्न लागे। यसरी अंशुवर्माले तयार पारेर गएको अवस्थाबाट जिष्णुगुप्तले पनि पूरा लाभ उठाए। तर अंशुवर्मा जस्तै स्वयं महाराजाधिराज बनी सोझै एक्लै शासन गर्ने आँट भने जिष्णुगुप्तले गरेनन्। आँट गरेको भए यसको नतीजा राम्रो हुने पनि देखिदैन। किनभने केही पछि नै विष्णुगुप्त-लाई नरेन्द्रदेवले पन्छाएको र जनताले नरेन्द्रदेवको साथ दिएको घटनाबाट यसको अनुमान गर्न सकिन्छ। यो कुरा जिष्णुगुप्तले पनि देखेका थिए। यसै हुँदा जिष्णुगुप्तले बुद्धि पुऱ्याएर लिच्छवि ध्रुवदेवलाई गद्दीमा राखी शासन चलाएका थिए। तर जिष्णुगुप्तको महत्त्वाकाङ्क्षाचाहिं कम थिएन। परिस्थिति अनुकूल भएको भए उनी स्वयं गद्दीमा बस्ने सम्भावना थियो। उनको यस्तै महत्त्वाकाङ्क्षा बुझेर उनका पक्षका मानिसले स्वतन्त्र राजाका रूपमा उनको वर्णन गरेका पनि छन्। तर संयुक्त राजाका रूपमा रहेका थिए तापनि स्वयं जिष्णुगुप्तले चाहिं सनदशिलापत्रमा 'भट्टारक महाराज' आदि पद भने लिएका छैनन्। तर आफ्ना छोरालाई भने 'श्रीयुवराज' घोषणा गरेका छन्। साथै स्वतन्त्र राजामा लाग्ने विशेषण जिष्णुगुप्तमा लागेका छन्। यो कुरा यही अभिलेखबाट पनि थाहा पाइन्छ। यहाँ जिष्णुगुप्तले आफूलाई 'प्रजाहितैषी' भनेका छन्। भौमगुप्तहरूले नै अधिकार हथ्याई शासन गरेका हुनाले 'पुष्यान्वयादागतराज्यसम्पत्' भनी लेखाई जिष्णुगुप्तले राज्य-मा पुर्ख्यौंली हक जताएका छन्। फेरि 'समस्तपौरार्चितशासन' भनी लेखाई जनताले उनको साथ दिएको दावा जिष्णुगुप्तले गरेका छन्। यसरी ध्रुवदेव देखावा राजा मात्र हुन्; वास्तव राजा मै हुँ भनी जिष्णुगुप्तले यहाँ स्पष्टसंग दर्शाएका छन्। पछि पछि उनको महत्त्वाकाङ्क्षा अझ बढ्दै गएको थियो । अंशुवर्माले जस्तै जिष्णुगुप्तले पनि आफ्नो नाउँमा स्वतन्त्र टकसम्म

पनि ढाल्न लाएका थिए। अन्तिम समयमा उनले लिच्छवि राजासरह आफ्नो नाउँमा 'देव' पद पनि जोडेका थिए। यो कुरा थानकोटको अभिलेखबाट थाहा पाइन्छ। यस कुरामा उनी अंशुवर्माभन्दा पनि एक पाइला अगाडि बढेका छन्। तर पछि अंशुवर्माले जस्तै सोझै गद्दीमा बस्ने काम भने जिष्णुगुप्तले गरेनन्। उनको अन्तिम समयसम्म पनि गद्दीमा भीमार्जुनदेव नै थिए। तल यथास्थानमा जिष्णुगुप्तबारे अरू चर्चा गरिएको छ।

ललितपुरभेकको प्रदेशको देखरेख गर्न सामन्त चन्द्रवर्मा नियुक्त थिए। भूतपूर्व राजा अंशुवर्माप्रति उनको ठूलो श्रद्धा थियो। यसैले अंशुवर्माले गरेर गएको कीर्तिको लोप हुन नपाओस् भन्ने कुरामा उनको दृष्टि गएको थियो। अंशुवर्माले ललितपुरभेकका जनतालाई सुबिधाको लागि कुलो बनाउन लाएका थिए; मरम्मत नहुँदा सो कुलो बिग्रन लागेको थियो। यस कारण सामन्त चन्द्रवर्मा गोमीले ध्रुवदेव र जिष्णुगुप्तकहाँ जाहेर गरी सो कुलोको जीर्णोद्धार गरे; अनि पछि फेरि सो कुलो बिग्रन नपाओस् भनी आयस्ताको बन्दोबस्त गरी स्थानीय थम्बू, गाङशुल र मूलवाटिका ग्रामका बासिन्दालाई हेरबार गर्ने अभिभारा सुम्पेको कुरा अभिलेखमा परेको छ।

ललितपुर शहरको विकास अनेक प्राचीन ग्रामहरू मिलेर भएको थियो। यस कुराको चर्चा माथि गरिसकेको छ। लिच्छविकालका कति ग्राम पछि टोलका रूपमा परिणत भएका थिए। यस अभिलेखमा उल्लिखित 'थम्बू' ग्रामको उल्लेख पछि मल्लकालमा थम्बूटोलको रूपमा पाइएको छ। लिच्छविकालको गुल्लतङ्ग ग्राम पछि गुइत टोलको रूपमा परिवर्तित भयो। यसै गरी ललितपुर भेकका अरू ग्राम पनि टोलका रूपमा परिवर्तित भएका देखिएका छन्।

यस अभिलेखमा परेका बाँकी विषयको चर्चा माथि गएका अभिलेखमा परिसकेको हुनाले यहाँ दोहऱ्याउनु आवश्यक देखिँदैन।

# मालटारको ध्रुवदेव+जिष्णुगुप्तको अभिलेख

बलम्बूबाट पाउभर जति पश्चिम–उत्तरतिर मालटार नामक ठाउँ छ । त्यहाँ खतमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ । यसको अभिलेख कुँदिएको भाग २६ अङ्गुल लम्बा, अङ्गुल २३ चौडा छ । यहाँ संवत् ४९ छ ।

नोलीद्वारा ५१ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. स्वस्ति मानगृहा .... .... लिच्छवि (कु)
२. (ल) केतुर्भट्टारकमहाराजश्रीध्रुवदेव .... .... या सन्निवेश वि-
३. .... यितस–सदनुवि ....... (कैलासकूटभ) वनाद् विशुद्धपुण्य-
४. --तचित्तसन्ततिः पराकृतापाय .... .... धर्मस्थितिपूतशासनः
५. समस्त .... .... (भगवत्पशुपतिभट्टार) कपादानुगृहीतो ब--
६. प्पपादानुध्यातः (श्रीजिष्णुगुप्त कुशली) .... वृत्तिभुजस्तदधिकृतांश्च
७. .... शलं .... (विदितम्भवतु) भवतां माग्वलग्रामकुटु-
८. (म्बि) .... .... .... पभुज्यमानमस्माभिः
९. .... ...... ...... प--राथ पातितां प्रणालीं
१०. .... ...... तः ख... क्षि ... प्रवेशेन माग्गोलग्रामपाञ्चा-
११. (लिकानां) प्रसाद .... विदित .... वा न कैश्चिदस्मप्रसा-
१२. (द) .... .... यो... स्मदा (ज्ञां) विलङ्घ्यान्यथात्वमापादयेत्तद
१३. .... .... .... भवितारस्तैरपि पूर्व्व
१४. --गुरु .... .... .... नुमोदनानुपालनीय
१५. .... मवश्यं .... ..... ...न--य संवत् ४९
१६. (मा) घकृष्णद्वादश्यां दूतक .... .... युवराजश्रीविष्णुगुप्त इति

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट ...... .....लिच्छविकुलका झण्डास्वरूप भएका, भट्टारक (गद्दीनशीन) महाराज श्रीध्रुवदेव र........... कैलासकूट भवनबाट असल शासन भएका ,.........भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका ....श्रीजिष्णुगुप्तले वृत्ति खाने (जागीरदार) र त्यहाँका अधिकारीहरूलाई पनि कुशलमङ्गल (सोधेर आज्ञा गर्नु भएको छ।) तिमीहरूलाई थाहा होस् ।

माग्वल गाउँका गृहस्थीहरू .......भोगचलन गरेर आएको, हामीबाट ....... धारा बनाएको (हुनाले) .......पस्न नपाउने गरी माग्गोल ग्रामका पाञ्चालिकहरूलाई निगाह गरिएको छ । यो कुरा थाहा पाई हाम्रोतर्फबाट जीविका गर्ने (सरकारी कर्मचारी) कसैले पनि (यो अन्यथा नगर्नू ।) जसले हाम्रो आज्ञा नाघेर अन्यथा गर्ला, (त्यसलाई हामी सहनेछैनौं ।) ....पछि हुने राजाहरूले पनि अघिका राजाले गरेको निगाह अवश्य थाम्नुपर्छ ।

...संवत् ४९ माघ कृष्ण द्वादशी। दूतक (मार्फत) युवराज श्रीविष्णुगुप्त।

## व्याख्या–

असुरक्षित अवस्थामा रहेको हुनाले यो अभिलेख ज्यादै खिइएको छ । यसको निकै भाग पढ्न नसकिने भएको छ। तर बचेको भागबाट तात्कालिक अलिकता कुरा बुझ्न सकिन्छ ।

अंशुवर्माले तयार पारेको अवस्थाबाट जिष्णुगुप्तले पनि लाभ उठाएका थिए भन्ने कुराको चर्चा पहिले पनि गरिसकेको छ। प्रकृतिकोप नहोस्; प्रजा सन्तुष्ट होऊन् भन्ने कुरामा जिष्णुगुप्तले अंशुवर्माकै बाटो पछ्याएका थिए । यसो हुनाले जिष्णुगुप्तको कार्यकालमा पनि जनतालाई सुख–सुबिधा दिलाउने केही काम भएका थिए । यस अभिलेखमा माग्वल ग्रामको पाञ्चालीले सार्वजनिक धारा बनाएको हुनाले प्रसन्न भई सो ग्रामपाञ्चालीलाई प्रशासनसम्बन्धी केही अधिकार सुम्पिएको कुरा परेको छ। यसरी जिष्णुगुप्तले पनि स्वायत्तशासनलाई प्रोत्साहन दिएका थिए ।

धार्मिक कुरामा पनि अंशुवर्माको केही प्रभाव जिष्णुगुप्तमा परेको थियो। पशुपतिनाथको स्थापना यहाँ निकै अघि भएको थियो तापनि अंशुवर्माको समयमा आएर पशुपतिनाथको आदर सन्मान झन् बढ्यो । अंशुवर्माले एक्लै शासन गर्न थालेपछि प्रत्येक अभिलेखमा आफूलाई 'भगवत्पशुपतिभट्टारकपादानुगृहीत' भनी लेखाउन थालेका थिए; उनका अभिलेखमा शिरोभागमा पनि प्रायः शैवधर्मसम्बन्धी चिह्न अङ्कित हुन लागेको थियो । यसरी अंशुवर्माको समयदेखि शैवधर्म राजकीय धर्मको रूपमा देखापरेको थियो। यस बेला भारततिर पनि पशुपतिनाथको प्रसिद्धि फैलिन लागेको थियो। यसै हुँदा जिष्णुगुप्तले पनि शैव धर्मप्रति आफ्नो भक्ति देखाए। यस अभिलेखमा र उनका अरू अभिलेखमा पनि 'भगवत्पशुपतिभट्टारकपादानुगृहीत' भनी आफूलाई लेखाएको हुनाले उक्त कुरा थाहा पाइन्छ ।

–~–

# मीननारायणनिरको ध्रुवदेव+जिष्णुगुप्तको अभिलेख

काठमाडौं जैसीदेवलतिरबाट पचली जाने बाटोमा मीननारायणको मन्दिर छ । त्यसको नजीकै बाटोमा यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ । यसको अभिलेख कुँदिएको भाग ४० अङ्गुल लम्बा, २१ अङ्गुल चौडा छ । यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन् । यहाँ अहिले संवत् देखिदैन ।

भगवान्लालद्वारा १० संख्याको रूपमा यो अभिलेख छापिएको छ । नोलीद्वारा ५२ संख्याको रूपमा यो छापिएको छ । 'पूर्णिमा' २१ अङ्कमा मैले पनि यो छपाएको छु ।

## मूलपाठ

१. ॐ देहा .... व-या वञ्चितो दूरमात्मा पौरस्त्यं ....
२. -भिमुखहसिता[१] लो .... रादिम् एतच्चान्यत्विरह्नस्त्वयि परवश ....
३. न्दनीयास्य[२] सन्ध्या .... जलैर्वः स्वकरमपहरन्त्यब्धिजा सश्वरा (श्रीः)
४. स्वस्ति मानगृहा ..... दितचित्तसन्ततिलिच्छविकुलकेतुर्भट्टारक (महा)
५. राजश्रीध्रुवदेवपुरस्सरः सकलजननिरुपद्रवोपायसंविधानार्पित (मा)-
६. नसः कैलासकूटभवनाद् भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्प (पा)-
७. दानुध्यातः श्रीजिष्णुगुप्तः कुशली, दक्षिणकोलीग्रामे गीटापाञ्चालिका-
८. .... गान्कुशलेनाभाष्य समनुदर्शयति विदितम्भवतु भवताम् ....
९. .... समधिगतनयविधिज्ञानादुपात्तायती रूपेणानुपमो .... ....
१०. ... ख्यातो भूशम्पूजितः[३], इत्येवम्प्रथितोपि यः प्रियहितम्प्रत्या ....

---

नोलीका पाठ–

१. भिमुख...... २. नीयो ३......

११. . . . . न्वितो . . . . क्षितौ [१] बलवत: शत्रून्बभञ्ज स्वयम् इत्थम्(भू)
१२. (तेन) . . . . . . (ते)नास्मदनुमोदितेन तदात्वायति
१३. . . .ष्ठान . . . व्याप्रियमाणे(न लो)कानुग्रहप्रवृत्तचेतसा महासा(मन्त)
१४. श्रीजोवदेवेन[२] यथायन्तिजनमको भवतामन्येशाञ्चोपकारायाभू–
१५. . . . पिण्डकदशभागम्प्रत्याकलय्य भवद्‌भिरेवोपसंहर्तव्यः
१६. . . .श्वरस्वामिनः पूजा पाञ्चालीभोजनञ्च दिवसनियमेन . . .
१७. – तिलमकप्रतिसंस्कारश्च कालानतिक्रमेणैव कार्य इत्येषो
१८. स्य पुण्याधिकारो व्यवस्था चास्मत्प्रसादोपजीविभिरन्यैर्वा न कैश्चिदप्य–
१९. न्यथा करणीया यः कश्चिदेतामाज्ञामतिलङ्घ्यान्यथा कुर्यात्कारयेद्वा
२०. तस्या(स्मदा)ज्ञातिक्रमकृतोवश्यमेव दण्डो विधातव्यो येप्यस्म(दूर्ध्व)
२१. (म्भू)भुजो भविष्यन्ति तैरप्यात्मीय इव पुण्याधिकारेस्मत्कृतप्र . . .
२२. . . . स्य रक्षायामनुपालने च (सतत)मवहितैर्भवि(तव्यम्)
२३. . . . स्य देव . . . . . .
२४. . . . त्र इति . . .

# अनुवाद

. . . . .हुनाले टाढैबाट आफू ठगिएं; . . . . .पूर्वतिरको . . . . .हाँसेकी . . . . . .तिमीमा बढी लहसिएको हुनाले . . . . . .यो र अरू दिनको तीन पटक . . . . .सन्ध्यावन्दन गर्नुपरेको छ . . पानीद्वारा . . . . . .हात झिक्ने भएकी विष्णुसहित लक्ष्मीले तिमीहरूको कल्याण गरून् ।

कल्याण होस् । मानगृह (दरबार)बाट . . . . . .चित्त भएका, लिच्छविकुलका झण्डास्वरूप भएका भट्टारक महाराज श्रीध्रुवदेव र उहाँका अघिसरा भई काम गर्ने, सारा जनतालाई उपद्रव नभएको पार्ने उपाय गर्नामा मन लाएका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीजिष्णुगुप्तले कैलासकूट भवन (दरबार)बाट दक्षिणकोलिग्राममा गीटापाञ्चालिकहरूलाई . . . . .कुशलमङ्गल सोधेर बाटो देखाउनुहुन्छ । तिमीहरूलाई थाहा होस् ।

. . . . . . . . . . . .नीतिका कुरा थाहा पाएका हुनाले भविष्य सपारेका, बेजोड रूप भएका, . . . . . . . .नाउँ चलेका, खूप सन्मान पाएका, यसरी प्रसिद्ध भए पनि जसले

---

नोलीको पाठ

१. . . . . . . . . . २.—देवेन

(रा. अ. मा रहेका दुइ प्रतिलिपिमध्ये एउटामा 'श्रीजीवदेवेन' पाठ देखिन्छ ।)

(आफ्नो) प्यारो र हित हुने कुरालाई (वास्ता गरेनन्) ।. . . . . . . . . .पृथ्वीमा ठूलठूला शत्रुहरूलाई आफैंले सिद्ध्याए । यस किसिमका, वर्तमान र भविष्य. . . . .सपार्नामा लागेका, लोकप्रति अनुग्रह गर्नामा मन लाएका, महासामन्त श्रीजीवदेवले हाम्रो अनुमति लिई तिमीहरूको र अरूहरूको पनि उपकारको लागि जुन यो कुलो बनाएका थिए ।. . . . . .कुतको दश भागको एक भाग उठाई तिमीहरूले नै यो सिद्ध्याउनू ।. . . . . .नियत दिनमा. . . .श्वर स्वामीको पूजा गर्नू; पाञ्चालीलाई भोज पनि खुवाउनू; ठीक वेलामा कुलोको मरम्मत पनि गर्नू ।

यो पुण्यको काम र स्थितिबन्देज हाम्रो तर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी)-हरूले वा अरू कसैले पनि अन्यथा नगर्नू । जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला, हाम्रो आज्ञा नाघ्ने त्यसलाई पक्का सजाय गरिनेछ । हामीपछि जुन राजाहरू हुनेछन्, तिनीहरूले पनि आफ्नो जस्तो संज्ञी पुण्यको काममा हामीले गरेको निगाहको रक्षा र थाम्नामा लाग्नुपर्छ ।. . . देव. . . . . . . . .

## व्याख्या—

यस अभिलेखको उठानमा लक्ष्मी र विष्णुलाई लिएर रचिएको एक प्रौढ पद्य परेको छ । बीच बीचमा खण्डित हुनाले त्यस पद्यको भाव राम्ररी बुझिंदैन । सन्ध्यावन्दनको ताकाको कुरालाई लिई सो पद्य रचिएको देखिन्छ । यस अभिलेखको शिरोभागमा पनि वैष्णव धर्मसम्बन्धी शङ्ख र चक्र अङ्कित छन् । यस अभिलेखमा तल '. . .श्वरस्वामिनः पूजा कर्तव्या ' भनेर पनि लेखिएको छ । यसबाट यो अभिलेख रहेको ठाउँको आसपासमा लिच्छविकालमा कुनै नारायणमन्दिर थियो भन्ने देखिन्छ ।

यसपछि ध्रुवदेव र जिष्णुगुप्तको चर्चा यस अभिलेखमा परेको छ । जनतामा अशान्ति नफैलियोस् भन्ने कुरामा जिष्णुगुप्त दत्तचित्त थिए भन्ने कुरा उनमा लाइएको 'सकलजननिरुपद्रवोपायसंविधानार्पितमानस' यस विशेषणले दर्शाएको छ ।

ललितपुर भेकको प्रशासनको देखरेखको लागि सामन्त चन्द्रवर्मा नियुक्त भए जस्तै कान्तिपुर-भेकको प्रशासनको देखरेखको लागि महासामन्त श्रीजीवदेव नियुक्त थिए । यो कुरा यस अभिलेखबाट थाहा पाइन्छ । सामन्त चन्द्रवर्माभन्दा महासामन्त श्रीजीवदेव बढी शक्तिशाली देखिन्छन् । यस अभिलेखमा राजाको तर्फबाट आफ्नो वर्णन गराउन जीवदेवले सकेका हुनाले उक्त कुरा बुझिन्छ । नीति जानेका, राम्रा, नाउँ चलेका, स्वार्थ नहेर्ने, लोकको हित गर्नामा लागेका आदि भनी उनको वर्णन यहाँ गरिएको छ । साथै 'बलवतः शत्रून् बभञ्ज स्वयम्' भनी यहाँ लेखाइएको हुनाले उदयदेव-लाई धपाई ध्रुवदेवलाई गद्दीमा राख्ने काण्डमा यी जीवदेवले जिष्णुगुप्तको साथ दिएको अनुमान हुन्छ । यिनमा राजोचित 'श्री' लागेको र यिनको नाममा 'देव' जोडिएको हुनाले महासामन्त श्रीजीवदेव लिच्छविराजवंशकै देखिन्छन् । यसो हुनाले पनि यिनको प्रतिष्ठा बढेको बुझिन्छ ।

आकाश–खेतीको भर नपरी कुलो बनाई खेती–पाती बढाउने कुरामा लिच्छविकालका शासकहरूले दृष्टि दिएका थिए। यसो हुनाले यस वेलाका अभिलेखमा 'तिलमक' (कुलो) को निर्माण गरेको कुराको उल्लेख धेरै पाइन्छ। यस अभिलेखमा पनि राजा ध्रुवदेव र जिष्णुगुप्तको अनुमति लिई महासामन्त श्रीजीवदेवले कुलो बनाएको कुरा परेको छ। साथै सो कुलोको मरम्मत आदिको लागि आयस्ताको बन्दोबस्त यसमा गरिएको छ। यसै प्रसङ्गमा स्थानीय वैष्णव देवता '.......श्वरस्वामी' को पूजा गर्ने, पाञ्चालीलाई भोज खुवाउने कुरा पनि यस अभिलेखमा परेको छ।

–★–

# आदेश्वरको ध्रुवदेव+जिष्णुगुप्तको अभिलेख

इचङ्गुनारायणस्थानदेखि दक्षिण–पूर्वतिर आदेश्वर–स्थान रहेको छ। त्यहाँ यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग २५ अङ्गुल लम्बा, २४ अङ्गुल चौडा छ। यसको शिरोभागमा बसिरहेको बसाहा अङ्कित छ। यहाँ अहिले संवत् देखिदैन।

नोलीद्वारा ५३ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति मानगृहादनेकदिगन्तरप्रथितपृथुपराक्रमो लिच्छविकुलालङ्कारभूतो भट्टार--

२. कमहाराजश्रीध्रुवदेवस्तत्पुरःसरः कैलासकूटभवनादसुलभनृपतिगुणावभासि-

३. तसकलमहीमण्डलो भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः

४. श्रीजिष्णुगुप्तः कुशली छोगुंयुबीसामातलञ्जुग्रामेषु निवासमुपगतान्कुटुम्बिनः प्रधानपु-

५. रःसरान्कुशलेना(भा)ष्य समाज्ञापयति विदितं भवतु भवतां राज-पुत्रनन्दवर्मणा

६. स्वपितू राजपुत्रजिष्णुवर्मणो मातुर्वत्सदेव्या भ्रातृणाञ्च श्रीभीमवर्मप्रभृतीनां स्व-

७. र्लोकसुखोपभोगपरम्पराविच्छेदहेतोर्भगवतो नाथेश्वरस्य प्रतिष्ठानं यत्तदस्यै-

८. व प्रतिपादनाय विज्ञप्तैरस्माभिस्तलञ्जुग्राम[१] . . . . . . दक्षिणपश्चिमोत्तरा-

---

नोलीको पाठ–

१. रसा . . . सलञ्जुग्रामेषु

९. णामद्रिशृङ्गाणाम्पानीय[1] ... ... स ... ... को-
१०. ट्टङ्कृत्वा प्रतिपादितमेवं (वेदि) भि[2] परिपालनीय-
११. ... प्यत्र पा ... त्र .... ....
१२. प्रत--प्रतिप ... ... ... ... ञ्च--क्षपयैरति ... ... ...
१३. --विपाक ... ... ... तदनुष्ठानमर्हन्तीति[3] नियमोस्य
१४. ... ... ... (दूतकश्चात्र) युवराजश्रीविष्णुगुप्त इति

# अनुवाद

कल्याण होस् । मानगृहबाट दिशाको छेउ–छेउसम्म फैलिएको ठूलो पराक्रम भएका, लिच्छविकुलका गहना भएका, भट्टारक (गद्दीनशीन) महाराज श्रीध्रुवदेव र उहाँका अघिसरा भई काम गर्ने, राजामा हुनुपर्ने दुर्लभ गुणहरूले पृथ्वीलाई सिंगारेका भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, श्रीजिष्णुगुप्तले कैलासकूटभवनबाट छोगुं, युबीसामा , तलञ्जु गाउँहरूमा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस् ।

राजपुत्र नन्दवर्मलि आफ्ना बाबु राजपुत्र जिष्णुवर्माको, आमा वत्सदेवीको, श्रीभीमवर्मा आदि दाजुभाइहरूको स्वर्गमा सुखभोगको परम्परा नटुटोस् भन्नाको लागि भगवान् नाथेश्वरको जुन.....ठाउँ हो; सो नाथेश्वरलाई नै चढाउन बिन्ति चढाएका हुँदा हामीबाट तलञ्जु ग्राम.. ग्राम.....दक्षिण, पश्चिम, उत्तरतिरका पहाडका टाकुराका पानी .....कोट्ट (किल्ला) बनाई सुम्पिएको छ। यो कुरा थाहा पाई ......पालना गर्नुपर्छ।.............. कर्मको फल ............. गर्नु योग्य छ भन्ने नियम ............

यस बातका दूतक (मार्फत) युवराज श्रीविष्णुगुप्त ।

व्याख्या–

राजा ध्रुवदेव र जिष्णुगुप्तद्वारा छोगुं युवीसामा र तलञ्जुग्रामका बासिन्दाहरूलाई सम्बोधन गरी यो अभिलेख राख्न लाइएको हो। यहाँ उल्लिखित 'छोगुं' नामले लिच्छविकालको आर्थिक कुरामा अलिकता प्रकाश पार्छ। लिच्छविकालका अभिलेखमा धानको उल्लेख त प्रशस्त पाइन्छ। जग्गाको कुत तोक्दा प्रायः धानकै उल्लेख आएको छ। यसबाट नेपाल–उपत्यकामा लिच्छविकालमा

नोलीको पाठ–

१. नामतिसृ(ष्टे)न २. .....भि.... ३. तदनुष्ठ—र्ह—ति..यमोस्य

मुख्य गरी धानको खेती हुन्थ्यो भन्ने थाहा पाइन्छ। अभिलेखमा गहुँको सोझै उल्लेख भने कतै आएको छैन। यस कारण लिच्छविकालमा यहाँ गहुँको खेती हुन्थ्यो कि हुँदैनथ्यो भन्ने प्रश्नको उत्तर पाउन मुश्किल थियो। तर यस अभिलेखमा उल्लिखित ग्रामको 'छोगुं' नामले उहिलेदेखि यहाँ गहुँको खेती पनि हुन्थ्यो भन्ने देखाएको छ। 'छो' भनेको गहुँको हो; नेवारी आदि यहाँका भाषामा यो शब्द अहिलेसम्म यही अर्थमा प्रचलित छ। 'गूं' भनेको डाँडो हो। लिच्छविकालका अभिलेखमा 'गूं' को उल्लेख धेरै ठाउँमा आएको छ। नेवारी आदि भाषामा अहिलेसम्म पनि यो शब्द कायम छ। विशेषरूपमा गहुँको खेती हुने डाँडोमा बसेको बस्ती हुँदा 'छोगुं' ग्राम कहलाएको देखिन्छ। यताभेकमा 'छोढ्वं' भन्ने ठाउँ अहिलेसम्म छ। यस भेकका डाँडोमा अन्तभन्दा गहुँको खेती अझै बढी हुन्छ। यो कुरा यस प्रसङ्गमा चाखलाग्दो छ।

आदेश्वरको महादेव अहिलेसम्म पनि केही प्रसिद्ध छन्। उहिले यहाँका महादेव 'नाथेश्वर' कहलाएका थिए। राजपुत्र नन्दवर्माले आफ्ना बाबु राजपुत्र जिष्णुवर्मा,आमा वत्सदेवी र श्रीभीमवर्मा आदि दाजुभाइहरूको स्वर्गवास होस् भन्ने उद्देश्यले नाथेश्वर महादेवलाई केही जग्गा चढाउन बिन्ति गरेका हुनाले सो मञ्जूर गरी उपर्युक्त ग्रामलाई कोट्ट (किल्ला) को रूपमा परिणत गरी सुबिधा गरिदिएको कुरा यस अभिलेखमा परेको छ। तल्लो भाग अलि फुटेको हुनाले कुरा अलि स्पष्ट हुन सकेको छैन तापनि उक्त कुरा बुझ्न सकिन्छ।

—~—

# केवलपुरको ध्रुवदेव+जिष्णुगुप्तको अभिलेख

काठमाडौंबाट आठ कोश जति पश्चिमतिर केवलपुर पर्दछ। त्यहाँ बसाहा डाँडो भन्ने ठाउँमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३७ अङ्गुल लम्बा, २२ अङ्गुल चौडा छ। यसको शिरोभागमा बसिरहेको बसाहा अङ्कित छ। यहाँ अहिले संवत् देखिदैन ।

'इतिहास–प्रकाश' १ अङ्कमा योगी नरहरिनाथद्वारा यो छापिएको छ। नोलीद्वारा ५४ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. ॐ स्वस्ति मानगृहात्सकलसत्त्वानुग्रहाहितमनोनिरभिमानर-
२. मणीयचरितलिच्छविकुलकेतुभट्टारकमहाराजश्रीध्रुव-
३. देवपुरस्सरः प्रजाहितोद्युक्तविशुद्धमानसः प्रभाव(शौर्य)प्र-
४. णतारिमण्डलः गुणैरुपेतोनुपमैरिहात्मवान् प्रिय....
५. मपि चन्द्रमा इव सोयमित्थम्भूतः कैलासकूटभवनाद्भगव-
६. त्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः श्रीजिष्णु-
७. गुप्तः कुशली नुप्पुन्नद्रङ्गनिवासिनः प्रधानपुरस्सरान्कुटुम्बिनः
८. कुशलाग्रेसरं समाज्ञापयति विदितमस्तु वो भट्टारकमहारा-
९. जश्रीवसुराजश्रीमहीदेवश्रीमानदेवश्रीगणदेवास्मत्पितामह-
१०. हश्रीभूमगुप्त इत्येतैः पूर्वराजभिरस्मद्गुरुभिः परानुग्रहप्र-
११. वृत्तितया शिलापट्टकशा(सन-)तयेन वो यः प्रसादविशे(षं)-
१२. रनुग्रहः कृतोभूद्बान्ध.....नि च द्वादशभागवस्तुतो या--

१३. नि प्रसादीकृतानि कै(श्चि)... तया राजभोग्यतामापादितान्य-
१४. स्माभिर्भवत्साहाय्यादिकर्मपरितुष्टैः शतद्वयन्नुप्पुन्ने भगव-
१५. न्नारायणस्वामिनो भवद्भिरेव कारणपूजादिप्रवर्तनार्थम्प्रतिपा-
१६ दितन्दशशतानि भवतामेव पूर्वराजकृतव्यवस्थया प्रतिमुच्य
१७. दङखुट्टार्थादिकरणीयप्रतिमोचनार्थं लिङ्ग्वलशोल्लादीनामप्रवे-
१८. शाय पूर्वराजशासनेषु ये प्रसादास्तेषां सर्वेषामेव (युष्म)-
१९. दतिसृष्टानामनुमतिशासनमिदमस्माभिरपि प्रसादी(कृत-)
२०. मेवंवेदिभिर्भवद्भिरस्मत्प्रसादप्रतिबद्धजीवनैरन्यैर्वा (न कैश्चि-)
२१. दियमाज्ञान्यथा करणीया यस्त्वेतामाज्ञामतिक्र(म्यान्यथा करि-)
२२. ष्यते कारयिष्यते वा तस्योत्पथव(र्तिनः) ... ... ...
२६. ... दण्ड——वि... ये .... ......

... ... ...

# अनुवाद

कल्याण होस्। मानगृह (दरबार)बाट सारा प्राणीउपर दया गर्नामा मन लाएका, अभिमान नभएका, राम्रो चरित्र भएका, लिच्छविकुलका झण्डास्वरूप भएका, भट्टारक (गद्दीनशीन) महाराज श्रीध्रुवदेव र उहाँका अघिसरा भई काम गर्ने, प्रजाको हित गर्नामा लागेको शुद्ध मन भएका, प्रभाव (कोश र दण्डद्वारा भएको शक्ति) र शुन्याईले शत्रुहरूलाई नुहाएका, बेजोड गुणहरू भएका, आत्मवत्ता (आफ्नो हित चिन्ने हुनु) भएका, प्यारो.... चन्द्रमा जस्तै (दुनियाँलाई आनन्द दिने), यस किसिमका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा)को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीजिष्णुगुप्तले कैलासकूटभवन (दरबार)-बाट नुप्पुन्न द्रङ्गमा बस्ने, मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस्।

भट्टारक (गद्दीनशीन) महाराज श्रीवसुराज, श्रीमहीदेव, श्रीमानदेव, श्रीगणदेव, हाम्रा बाजे श्रीभूमगुप्त आदि हाम्रा मान्य अघिका राजाहरूले अरूहरूको अनुग्रह गर्ने बानी भएका हुनाले.....सनद शिलापत्र गरिदिई विशेष निगाहद्वारा जुन अनुग्रह गरिएको थियो; ...... बाह्र भागको एक भाग वस्तुद्वारा जुन निगाह गरिएका थिए; ..... .....हुनाले ती सरकार लागेका थिए। तिमीहरूको सहायता आदि कामले खुशी भएर हामीबाट नुप्पुन्न (द्रङ्ग)मा भगवान् नारायणस्वामीको नैमित्तिक पूजा आदि तिमीहरूद्वारा नै चलाउनाको लागि दुइ शय तिमीहरूलाई दिइएको छ। दश शय (एक हजार) तिमीहरूलाई अघिका राजाले गरेको स्थितिबन्देजअनुसार माफी गरी, दङखुट्टार्था आदि गर्नुपर्ने काम (विष्टि)माफ गरी, लिङ्ग्वल शोल्ल आदि अधिकरणले

पस्न नपाउने गर्नाको लागि अघिका राजाले गरिदिएका सनदहरूमा जुन जुन निगाह तिमीहरूलाई गरिदिइएका थिए; ती सबै थामी यो सनद–पत्र हामीबाट पनि निगाह गरी दिइएको छ।

यो कुरा थाहा पाई तिमीहरू र हाम्रोतर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी)–हरूले वा अरू कसैले पनि यो आज्ञा अन्यथा नगर्नू। जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला; बेकाइदा गर्ने त्यसलाई . . . . सजाय (गर्नेछौं) ।

. . . . .        . . . . . . . . .        . . . . . .

**व्याख्या**–

यस अभिलेखको तल्लो भाग खण्डित हुनाले यसमा अहिले संवत् देखिँदैन । यस अभिलेखको बेहोरा विचार गर्दा ध्रुवदेव र जिष्णुगुप्तको संयुक्त शासनकालको उठानतिरको अभिलेख यो हो भन्ने देखिन्छ ।

लिच्छविकालमा नेपाल–उपत्यका राम्ररी आबाद भइसकेको थियो। व्यापारका केन्द्ररूपका विकसित बस्ती 'द्रङ्गहरू' यहाँ अनेक थिए । यसै गरी उपत्यकाबाहिर पनि त्यस्ता द्रङ्ग थिए भन्ने कुराको संकेत यस अभिलेखबाट पाइएको छ। केवलपुर पश्चिम १ नं. धादिङ जिल्लाभित्र पर्दछ। पश्चिम जाने मूल बाटो उहिले यता पर्दथ्यो। यसो हुनाले यहाँको 'नुप्पुन्न' बस्ती विकसित हुँदै गयो । वर–परका बस्तीका मानिसहरू यहाँ आई बन्द–व्यापार गर्दथे । यसरी गुलजार भई एक किसिमको शहरको रूप लिएपछि 'नुप्पुन्न' ले द्रङ्गको दर्जा पायो । यस अभिलेखको आधारमा हामी उक्त कुरा बुझ्न सक्छौं। यसरी लिच्छविकालमा नेपाल–उपत्यकाबाहिरको अवस्थाबारे यस अभिलेखले केही महत्त्वपूर्ण प्रकाश पारेको छ।

'नुप्पुन्न' निकै पुरानो बस्ती थियो। अघिका लिच्छवि राजाहरूले यस बस्तीका बासिन्दाहरूलाई सुबिधा गरिदिई अनेक सनदपत्र गरिदिएका थिए । ती केही भूतपूर्व राजाहरूको नामोल्लेख पनि यस अभिलेखमा परेको छ। तिनमा पहिला राजाको नाम 'वसुराज' दिइएको छ। 'भट्टारकमहाराजश्री' कहलाएका यी वसुराज अवश्य पनि गद्दीनशीन लिच्छवि राजा हुन्; यसमा शङ्का छैन । तर पशुपतिको द्वितीय जयदेवको अभिलेखमा भने वसुराजको उल्लेख परेको छैन। लिच्छवि–वंशको वर्णन गराई राखिएको त्यस अभिलेखमा प्रथम जयदेवभन्दा पछिका वृषदेवभन्दा अघिका बाह्र राजाको नामोल्लेख गरिएको छैन। यस कारण त्यसमा वसुराजको उल्लेख नभएको हो। गोपालवंशावली र अरू संक्षिप्तवंशावली, भाषावंशावलीमा जयदेवपछिका वृषदेवअघिका राजाहरूको नामोल्लेख पाइन्छ। नाममा अलि विकृति, क्रममा अलि तलमाथि भएता पनि ती वंशावलीबाट यस ताकाका राजाहरूबारे विचार गर्न केही मदत पाइन्छ । गोपालवंशावलीहरूमा वृषदेवभन्दा केही पुस्ता अघिका हरिदत्तका छोरा वसुदत्त थिए भनी लेखिएको छ। यिनै वसुदत्त नै वसुराज हुन् भन्ने देखिन्छ। विचारार्थ गोपालवंशावलीको एक अंश यहाँ उद्धृत गरिन्छ–

"राजा श्रीहरिदत्तवर्मा वर्ष ४६, तेन हि चतुशिखरप्रदेशे भगवत्विष्णुभट्टारकस्य देवालयम्

सम्पूर्णं कृतवान्। राजा श्रीवसुदत्तवर्मा वर्ष ३७॥" (गो. रा. वं. २४ पत्रबाट)

यही कुरा अरू संक्षिप्त वंशावली र भाषावंशावलीमा पनि परेको छ। नेपाल–उपत्यकाका प्रसिद्ध चार नारायणका मन्दिरको निर्माण हरिदत्तले गरेका थिए भनी सबै वंशावलीकारले एकै मुखले बोलेका छन्। इचंगुको ने.सं. ३२० को एक अभिलेखमा पनि 'श्रीहरिदत्तभूपतिकृतन्नाराय(णं)' भन्ने उल्लेख परेको छ।

वसुराजपछि यस अभिलेखमा 'श्रीमहीदेव' ले नुप्पुन्नद्रङ्गलाई केही सुविधा गरिदिएको कुरा परेको छ। यी महीदेव प्रसिद्ध प्रथम मानदेवका छोरा हुन्। पशुपतिको अभिलेखबाट यो कुरा थाहा पाइन्छ। महीदेवको शासनकाल एक वर्षभन्दा छोटो थियो। यिनका छोरा वसन्तदेवको सीतापाइलाको अभिलेखबाट महीदेवले त्यस भेकमा केही बन्दोबस्त मिलाइदिएका थिए भन्ने थाहा पाइन्छ। त्यसै गरी नुप्पुन्नद्रङ्गमा पनि महीदेवले जनतालाई केही सुविधा गरिदिई सनदपत्र राखिदिएको यस अभिलेखबाट थाहा पाइएको छ। यस कारण 'महीदेव गद्दीमा बसे कि बसेनन्' भन्ने शङ्काको निर्मूल यस अभिलेखले पनि गरिदिएको छ।

महीदेवपछि मानदेवको चर्चा यस अभिलेखमा परेको छ। यी मानदेव को हुन् भन्ने प्रश्न यहाँनिर खडा भएको छ। महीदेवका बाबु मानदेव यी भएका भए महीदेवभन्दा पहिले यिनको उल्लेख हुनुपर्थ्यो। त्यसो नभई महीदेवभन्दा पछि यिनको उल्लेख आएको हुनाले 'मानदेवसंवत्' चलाउने द्वितीय मानदेव यी हुन् कि भन्ने अनुमान हुन्छ।

यहाँ उल्लिखित 'श्रीभूमगुप्त' लिच्छवि राजा गणदेव आदिलाई गद्दीमा राखी सर्वाधिकार हातमा लिई ३३ वर्षभन्दा बढी समयसम्म एक टङ्कारले शासन गर्ने प्रसिद्ध सहायक शासक भौमगुप्त नै हुन्। यिनी जिष्णुगुप्तका बाजे थिए। यो कुरा यस अभिलेखमा 'अस्मत्पितामह' भनी लेखिएको हुनाले थाहा पाइन्छ। जिष्णुगुप्तले राज्यमा आफ्नो पुर्ख्यौली हकको दाबा गरेका थिए। पाटन छिन्नमस्ताको अभिलेखमा 'पुण्यान्वयादागतराज्यसम्पत्' भनी यो कुरा स्पष्टसंग नै उनले लेखाएका पनि छन्। यसो हुँदा उनले आफ्ना बाजे भौमगुप्तलाई पनि 'पूर्वराज=अघिका राजा' को पङ्क्तिमा यहाँ राखेका हुन्। शासनको दृष्टिले हेर्ने हो भने भौमगुप्त वास्तवमा राजा नै हुन्; उनले राजोचित 'श्री' पनि लिएका थिए। तर आफूलाई विधिपूर्वक राजाको घोषणा भने उनले कहिल्यै गर्न सकेका थिएनन्। यस कारण उनलाई सोझै वैध राजाको पङ्क्तिमा राख्न सकिँदैन। तर जिष्णुगुप्तले आफू राजासरह भई राज्य गर्न उनलाई पनि राजाको पङ्क्तिमा राख्नु आवश्यक सम्झेका थिए। यसै हुँदा यहाँ भौमगुप्तलाई पनि पूर्वराजको पङ्क्तिमा राखिएको हो। परन्तु भट्टारकमहाराजश्रीवसुराजश्रीमहीदेवश्रीमानदेवश्रीगणदेव' सम्म लेखिसकेपछि 'अस्मत्पितामह' भन्न नाता देखाएर मात्र 'श्रीभूमगुप्त' को उल्लेख गरिएको हुनाले उनी 'भट्टारकमहाराज' चाहिँ होइनन् भन्ने संकेत पनि यहाँ गरिएको छ।

यसरी भूतपूर्व राजाहरूको उल्लेख परेको हुनाले विशेष गरेर वृषदेवभन्दा अगाडिका

'वसुराज'को अस्तित्वको पुष्टि यताबाट भएको हुनाले यो अभिलेख निकै उपयोगी ठहरेको छ ।

नुप्पुन्न द्रङ्गका बासिन्दाहरूले जिष्णुगुप्तलाई सहायता गरेका हुनाले प्रसन्न भई यो सनद शिलापत्र गरिदिइएको हो भन्ने भाव यस अभिलेखमा परेको 'भवत्साहाय्यादिकर्मपरितुष्टैः' पदले देखाउँछ । के काममा कुन किसिमको सहायता गरिदिइएको थियो भन्ने चाहिं यहाँ स्पष्ट छैन । तर उदयदेवलाई धपाई शासनाधिकार हत्याउने काममा यो सहायता गरिएको हुनुपर्छ भन्ने प्रसङ्ग–बाट अनुमान गर्न सकिन्छ । यसै हुँदा नुप्पुन्न द्रङ्गका बासिन्दाहरूलाई सन्तुष्ट पार्न यो विशेष निगाह गरिदिइएको देखिन्छ ।

'नुप्पुन्ने भगवन्नारायणस्वामिनो भवद्भिरेव कारणपूजादिप्रवर्तनार्थं शतद्वयं प्रतिपादितम्' भनी यस अभिलेखमा लेखिएको छ । केवलपुरमा अहिले कुनै नारायणस्थान छैन । यस कारण यहाँ उल्लिखित नारायण कहाँका हुन् भन्ने प्रश्न स्वभावतः उठ्छ । यसो अलि गहिरिएर सोचेको खण्डमा यहाँ उल्लिखित नारायण प्रसिद्ध चार नारायणमध्येका इचंगुनारायण हुन् भन्ने थाहा पाइन्छ । केवलपुर इचंगुनारायणस्थानकै पारिपट्टि पर्दछ । लामीडाँडाको सिलसिला इचंगु-नारायणस्थानको नजीकैसम्म नै आएको छ । लिच्छविकालमा स्थानको विभाजन प्रशासनको दृष्टिले 'द्रङ्ग' को अन्तर्गत पारी गरिएको हुन्थ्यो । इचंगुनारायणस्थान त्यस बेला नुप्पुन्नद्रङ्गको इलाकाअन्तर्गत रहेको बुझिन्छ । यस कारण यहाँको नायरायणस्थानको कारणपूजा आदिको अभिभारा नुप्पुन्नद्रङ्गका बासिन्दाहरूलाई सुम्पियो र यो अभिलेख पनि नुप्पुन्नद्रङ्गकै मुख्य बस्तीमा राख्न लाइयो । चार नारायणको स्थापना निकै अघि भइसकेको देखिएको छ । वसुराजका पिता हरिदत्तले चार नारायणस्थानको निर्माण गराई यिनको प्रतिष्ठा बढाएको कुरा हाम्रो यहाँ परम्पराबाट चलेर आइरहेको छ ।

प्रशस्त जग्गाजमीन दिनुका साथै नुप्पुन्नद्रङ्गका बासिन्दाहरूलाई प्रशासनसम्बन्धी केही अधिकार पनि सुम्पिएको थियो; लिङ्ग्वल शोल्ल आदि अधिकरणले यहाँ पस्न नपाउने गरिएको थियो; बङ्खुट्टारथा आदि प्राचीनकालदेखि प्रचलित केही विष्टि पनि माफ गरिएको थियो ।

# बलम्बूको भीमार्जुनदेव+जिष्णुगुप्तको अभिलेख

बलम्बू गाउँको बाहिर उत्तरपट्टि सानो चौर जस्तो ठाउँ छ। त्यहीं यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको अभिलेख कुँदिएको भाग २९ अङ्गुल लम्बा, २२ अङ्गुल चौडा छ। यहाँ संवत् ५५ छ।

नोलीद्वारा ५५ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. (ॐ स्वस्ति मानगृहाद्)... ...नो नयनाभिरामो
२. (लिच्छ)विकुलकेतुर्भट्टारकमहाराजश्रीभीमार्जुन-
३. (देवस्त)त्पुरस्सरः कैलासकूटभवनादति..[१]..
४. ... ... य ... लक्ष्मीपरिष्वङ्गो भगवत्पशुप-
५. तिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः श्रीजि-
६. ष्णुगुप्तः कुशलो गीनुङ्गवृत्तिभुजो दिग्वारवृत्तिभुजश्च य-
७. थार्हम्प्रतिमान्यानुदर्शयति विदितं भवतु भवता-
८. मस्माभिर्जोल्प्रिङ्ग्रामे स्वादुशुचिशोतलसलिलाम्मो-[२]
९. हजनिकीम्पातयित्वा प्रणालीमस्या एवानुपालनहेतोः गीनु-
१०. ङ्भूमौ[३]सरलारामङ्कारयित्वा ..ण्डुदेवकुलदिग्वारवस्तुस-

---

नोलीको पाठ–

१. दभिमतपुण्य.... २. स्त्रावजनिकीम् ३. –मास....

११. हितं जोलिप्रङग्रामपाञ्चालिकानां चैलकरं[१] प्रतिमुच्य प्रसादीकृतं
१२. तस्याश्च गीनुङवृत्तेः सीमा पश्चिमेन [२]ल्हागुंमार्गखातकः, उत्तरे-
१३. ण [३]तैंडोस्थलदक्षिणखातकः, पूर्वेण नतिदुल्दक्षिणेन [४]कंश्म-
१४. शानखतकः । तत एव [५](ल्हागुं) मार्गखातक इत्येतत्सीमपरिक्षि-
१५. प्तायाम्भूमावस्मत्प्रसादोप(जीवि)भिर(न्यै)र्वा न कैश्चिदप्यल्पापि पीडा
१६. करणीया ये त्वेतामाज्ञामतिक्रम्यान्यथा[६] कुर्युः कारयेयु-
१७. र्वा तानत्यर्थमेव वयन्न मर्ष(यिष्यामो)भविष्यद्भिरपि भूपतिभिः
१८. पूर्वभूपतिधर्माधिकारानुपालनादृतैर्भवितव्यं चिरकालस्थित-
१९. ये चास्य धर्माधिकारस्य शिलापट्टकशासनमिदं दत्तमिति स्वयमाज्ञा
२०. दूतकश्चात्र युवराजश्रीविष्णुगुप्तः संवत् ५५ प्राश्वयुजशुक्लपञ्चम्याम्

# अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट ......     .....राम्रा, लिच्छविकुलका झण्डास्वरूप भएका, भट्टारक (गद्दीनशीन) महाराज श्रीभीमार्जुनदेव र उहाँका अघिसरा भई काम गर्ने...लक्ष्मीले वास गरेका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प(बुवा)-को पाउको अनुग्रह पाएका, गाथमा आराम भएका श्रीजिष्णुगुप्तले कैलासकूटभवन (दरबार) बाट गीनुङ वृत्ति पाएका र विग्वार वृत्ति पाएका (जागीरदार) हरूलाई यथोचित मान गरेर बाटो देखाउनुभएको छ। तिमीहरूलाई थाहा होस् ।

हामीले जोलिप्रङ ग्राममा स्वादिलो सफा चीसो पानी आउने आनन्द दिने धारा बनाएर यसैको बचावटको लागि सल्लोको बगैंचा बनाएर....ण्डुदेवमन्दिर र विग्वारवस्तुसहित जोलिप्रङ ग्रामका पाञ्चालीभित्रका बासिन्दाहरूलाई चैलकर (कपडाको उत्पादनमा लागेको कर) माफी गरिदिई निगाह गरिदिइएको छ। सो गीनुङ वृत्तिको सीमा यस प्रकारको छ—

पश्चिमपट्टि ल्हागुं जाने बाटोको पोखरी, उत्तरपट्टि तैंडोस्थलं—दक्षिणको पोखरी, पूर्वपट्टि नतिदुल्, दक्षिणपट्टि कंश्मशानको पोखरी, अनि त्यहो ल्हागुं जाने बाटोको पोखरी।

यति चारकिल्लाभित्रको यस भूमिमा हाम्रो निगाहले जीविका गर्ने(सरकारी कर्मचारी)-हरूले वा अरू कसैले पनि अलिकता पनि दुःख दिनु हुँदैन। जसले यो आज्ञा नटेरेर अन्यथा गर्लान्

नोलीको—पाट

१. तैलकरं    २. ल्हाशुं-
३. तैं. ोस्थणं    ४. कंशुशान
५. ततःस.......क    ६. मा (ज्ञामुल्लङ)घ्यान्यथा

वा गराउलान्; तिनीहरूलाई अवश्य पनि हामी सहनेछैनौं। पछि हुने राजाहरूले पनि अधिका राजाहरूले गरेर गएको धर्मको स्थितिबन्देजलाई आदरपूर्वक थाम्नुपर्छ। यो धर्मको स्थितिबन्देज धेरै कालसम्म कायम होस् भन्नाको लागि यो सनद शिलापत्र गरिदिइएको छ। यो मेरो आफ्नै आज्ञा हो। यस बातका दूतक (मार्फत) युवराज श्रीविष्णुगुप्त।

संवत् ५५ आश्विन शुक्ल पञ्चमी।

## व्याख्या–

संवत् ५५ को यस अभिलेखमा गद्दीनशीन राजाका रूपमा भीमार्जुनदेव देखापरेका छन्। यसबाट यस वेला ध्रुवदेवको मृत्यु भइसकेको बुझिन्छ। ध्रुवदेव र भीमार्जुनदेवमा के नाता पर्दथ्यो; सो स्पष्ट हुन सकेको छैन। गद्दीमा भीमार्जुनदेव बसे तापनि जिष्णुगुप्तको स्थितिमा भने कुनै अन्तर आएको छैन। उनी पूर्ववत् नै संयुक्त राजाका रूपमा शासन गरिरहेका छन्।

वृत्ति–यो अभिलेख गीनुङवृत्ति पाउने र दिग्वार वृत्ति पाउने अधिकारीहरूलाई सम्बोधन गरी राखिएको छ। लिच्छविकालमा सरकारी अधिकारीहरूलाई नगदको रूपमा तलब दिने चलन थिएन। उनीहरूलाई वृत्ति (जागीर) को रूपमा निश्चित जग्गा दिइन्थ्यो। यस कुराको चर्चा पहिले गरिसकेको छ। यस अभिलेखबाट उक्त कुराको पुष्टि हुन्छ। 'वृत्ति' भनेको जागीरको रूपमा दिइने निश्चित जग्गा हो भन्ने यताबाट स्पष्ट थाहा पाइन्छ। यस अभिलेखमा 'गीनुङवृत्ति' को चार-किल्लासमेत खुलाइदिइएको छ।

गीनुङवृत्तिको जग्गाभित्र बस्ने जनताको सुबिधाको लागि जिष्णुगुप्तले राम्रो धारा बनाइ-दिएको कुरा यस अभिलेखमा परेको छ। साथै त्यस भेकका जनतालाई अरू पनि केही सुबिधा गरिदिएको कुरा यसमा परेको छ।

चैलकर– किरातकालदेखि नै नेपालमा कपडा बुन्ने व्यवसायको जग बसेको थियो। लिच्छवि-कालमा पनि कपडा बुन्ने व्यवसाय कायमै रह्यो। यसैले त्यस वेलाका अभिलेखमा ठाउँ–ठाउँमा 'चैलकर' को उल्लेख आएको छ। कपडालाई संस्कृतमा 'चैल' भनिने हुनाले 'चैलकर' कपडाको उत्पादनमा लागेको कर हो भन्ने निश्चित छ। यस अभिलेखमा जोलिप्रङ ग्रामपाञ्चालीका बासिन्दा-हरूलाई 'चैलकर' माफी गरिदिएको कुरा परेको छ। थानकोटको जिष्णुगुप्तको अभिलेखमा पनि 'चैलकर' माफी गरिदिएको कुरा परेको छ। यसबाट बलम्बू, थानकोटभेकमा कपडा बुन्ने व्यवसाय बढी चलेको संकेत पाइन्छ।

श्मशान– यस अभिलेखमा गीनुङवृत्तिको चारकिल्ला खुलाउँदा श्मशानको उल्लेख आएको छ। बनेपाको शिवदेव+अंशुवर्माको अभिलेखमा पनि श्मशानको उल्लेख आएको छ। यस अभिलेखमा श्मशानको नाम 'कंश्मशान' दिइएको छ। यसबाट निकै अघिदेखि यहाँ श्मशान थियो भन्ने संकेत पाइन्छ। यसरी लिच्छविकालका अभिलेखमा श्मशानको उल्लेख ठाउँ ठाउँमा आएको हुनाले

त्यस वेलाको लोकव्यवहारको अलिकता झलक यताबाट पाइन्छ। त्यस वेला मानिसको मृत्यु हुँदा श्मशानमा लगी दाहक्रिया गरिंदो रहेछ भन्ने यसले देखाउँछ।

खातक– 'पुष्करिण्यां तु खातं स्यादखातं देवखातकम्' अमरकोशको यस उक्तिअनुसार 'खातक' भनेको पोखरी हो। वाचस्पत्य आदि कोशमा 'खातक' को पर्याय 'परिखा' (खाई) भनेर पनि दिइएको छ। बलम्बूको यस अभिलेखमा गीनुङ्वृत्तिको चार किल्ला खोल्दा अनेक 'खातक'को उल्लेख आएको छ। यहाँ उल्लिखित 'खातक' खाई होइन, पोखरी हो भन्ने कुरा प्रसङ्गबाट थाहा पाइन्छ। किनभने'वृत्ति'रूपको जग्गामा 'खाई' को उल्लेख प्रसङ्गप्राप्त छैन। थानकोटको अभिलेखमा 'उत्तरेण तत्पर्वतशिखरमूर्धनि खातक' भन्ने उल्लेख आएको छ। पहाडको माथिल्लो भागमा खाईको आवश्यकता नदेखिने हुनाले पनि खातक भनी यहाँ पोखरीलाई नै भनिएको हो भन्ने देखिन्छ। यताबाट लिच्छविकालमा बलम्बू भेकमा धेरै पोखरीहरू थिए भन्ने कुरा हामी थाहा पाउँछौं।

–★–

# यङ्गालहिटीको भीमार्जुनदेव+जिष्णुगुप्तको अभिलेख

काठमाडौं लगनटोल यङ्गालहिटीमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३७ अङ्गुल लम्बा, १९ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र दुइतिर शङ्ख अङ्कित छन्। यसमा अहिले संवत् देखिदैन।

नोलीद्वारा ५८ संख्याको रूपमा यो अभिलेख छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति मानगृहादभिनवोदितदिवसकराधिकतर-
२. दीप्तयशोंशुमाली लिंच्छविकुलतिलको भट्टारकमहाराज-
३. श्रीभीमार्जुनदेवस्तत्सहितश्च नरपतिगुणसम्पद्भूषितो
४. भूरि–जागत– शशिशुभ्राङ्कीर्तिमुच्चैर्दधानः मुदितज-
५. (न)..नमान्य ... रायप्रमथितरिपुपक्षो देशसौख्यैक-
६. चित्तो, भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानु-
७. ध्यातः श्रीजिष्णुगुप्तः कुशली दक्षिणकोलीग्रामनिवासिनो
८. ब्राह्मणप्रधानपुरःसरान् सर्वपाञ्चालीकुटुम्बिनः कुशलमभि-
९. धाय समाज्ञापयति विदितम्भवतु भवतां यो युष्माकम्म-
१०. ल्लकरः पूर्व(राजभि)श्चतुर्भिस्ताम्रिकपणैः प्रतिमु-
११. क्तोभूदस्माभि ··· ··· (प)णाः प्रतिमुक्ता मल्लपोतकानाम-
१२. पि मर्यादा ... ... लङ्कृत्य यन्निष्क्रमणन्तदपि प्रतिमुक्त-
१३. म्भट्टाधिकरण ... ... वस्तु(ना) च यूयन्नानुस्मर-
१४. णीया इत्य ... ... प्रसादीकृतं शक्तवाटकरणीय-

१५. स्तु (च)तुर्भि(स्ताम्रिक)पणैः प्रतिमुक्तो...त्पन नदीदेवकुलप्रासाद-
१६. स्य–त्य... ...ि- पुरुष.. ... जातीय
१७. कालधर... यज्यते स ...द्भिर ......कृता...
१८. धनीय. .. सादाशी ... य इ-प..
१९. वः प्र(सादः) कृ(त) ... .... (द)
२०. क्षिणकोली ... ...
२१. ष्यते ... ...
२२. त्रिभि ... ... ...
२३. नीय ... ... ...
२४. ति. इ ... ... ...

## अनुवाद

कल्याण होस् । मानगृह (दरबार) बाट भरखर उदाएको सूर्यको किरण (घाम)भन्दा बढ्ता चहकिलो कीर्ति भएका, लिच्छविकुलका टीका जस्ता भएका भट्टारक (गद्दीनशीन) महाराज श्रीभीमार्जुनदेव र उहाँका साथमा रही काम गर्ने, राजामा हुनुपर्ने गुणहरूले सिंगारिएका... चन्द्रमाको किरण (जून) जस्तो सफा कीर्ति भएका, जनतालाई खुशी पारेका....मान गर्ने लायक......शत्रुहरूलाई सखाप पारेका, देशलाई सुखी बनाउन एकचित्त भई लागेका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा)को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीजिष्णुगुप्तले दक्षिणकोलीग्राममा बस्ने बाह्मण, मुखियालगायत सबै पाञ्चालीभित्रका गृहस्थीहरूलाई (पाञ्चालीका सदस्य र अरू बासिन्दाहरूलाई ) कुशल –मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् ।

पहिलेका राजाहरूबाट तिमीहरूलाई मल्लकरमा चार तामाका पण माफी गरिदिइएको थियो; हामीबाट (अहिले).......पण माफी गरिदिइएको छ । मल्लका बच्चाहरूको पनि स्थितिबन्देज....... .......जुन निस्कनु, त्यो पनि माफी गरिएको छ । भट्टाधिकरणले.... ..... वस्तुद्वारा तिमीहरूउपर संज्ञना राख्न पाइंदैन (तिमीहरूसंग ती वस्तु लिन पाइंदैन) भन्ने निगाह गरिएको छ। शक्तबाट–करणीयमा (विष्टिरूपको करविशेषमा) चार तामाका पण माफी गरिदिइएको छ। ......... ........नदी देवमन्दिरको ... ....... ......निगाह गरिएको छ। ..... .....दक्षिणकोलीग्राम ......

**व्याख्या–**

लिच्छविहरू आफूलाई 'सूर्यवंशी' भन्दथे। पशुपतिको जयदेवको अभिलेखमा 'सूर्यवंश' को

नामान्तर लिच्छविवंश हो भनी स्पष्टसंग लेखिएको छ। यसो हुनाले यस अभिलेखमा भीमार्जुनदेवको वर्णन गर्दा 'सूर्यको किरण जस्तो कीर्ति भएका' भनी लेखिएको छ। जिष्णुगुप्तहरूचाहिं आफूलाई 'चन्द्रवंशी' भन्दथे। थानकोटको अभिलेखमा आफूलाई 'सोमान्वयभूषणः' भनी जिष्णुगुप्तले स्पष्टसंग लेखाएका छन्। यसै हुँदा यस अभिलेखमा जिष्णुगुप्तको वर्णन गर्दा 'चन्द्रमाको किरण जस्तो कीर्ति भएका' भनी लेखिएको छ। यसरी शासक–खलकलाई सूर्यवंशी र चन्द्रवंशी दुइ शाखामा विभक्त गर्ने परिपाटी लिच्छविकालमै देखापरिसकेको थियो।

भीमार्जुनदेव स्थापनाका राजा मात्र हुन्; यस वेला हर्ताकर्ता भई शासन चलाउने वास्तव राजा त जिष्णुगुप्त हुन् भन्ने कुरा यस अभिलेखबाट पनि थाहा पाइन्छ। यहाँ भीमार्जुनदेव र जिष्णु-गुप्तमा लागेका विशेषणहरू दाँजेर विचार गऱ्यौं भने उक्त कुरा स्पष्ट देखिन्छ।

यस वेलासम्ममा दक्षिणकोलीग्रामको विकास एक किसिमको शहरको रूपमा भइसकेको थियो। यसो हुनाले दक्षिणकोलीग्राममा अनेक पाञ्चाली कायम थिए। दक्षिणकोलीग्रामका ती सबै पाञ्चालीहरूलाई सम्बोधन गरी यो अभिलेख लेखिएको छ। यसमा मल्ल र मल्लका बच्चामा लागेको करको दर कमी गरी सुबिधा गरिदिएको कुरा परेको छ। पहिले मल्लकर १६ पण जति लिइन्थ्यो; जिष्णुगुप्तभन्दा अघिका शासकले दक्षिणकोलीग्रामभित्र मल्लकरमा कमी गरिदिएका थिए। अब जिष्णुगुप्तले पनि त्यसमा केही कमी गरिदिए। यहाँ भट्टाधिकरणले उठाउने वस्तुविशेष पनि माफी गरिदिइएको छ। साथै 'शक्तबाट' नामक स्थानीय विष्टिरूपको करविशेषमा पनि चार तामाका पण माफी गरिदिइएको कुरा यसमा परेको छ।

दक्षिणकोलीग्राम उपत्यकाका प्रमुख बस्तीमध्ये पर्ने हुनाले त्यहाँका जनतालाई हात लिन जिष्णुगुप्तले यसरी सुबिधा गरिदिएको बुझिन्छ। यस अभिलेखको तल्लो भाग फुटेको हुनाले त्यहाँनिरको कुरा अलि अस्पष्ट छ।

–★–

# पशुपति छत्रचण्डेश्वरको अभिलेख

पशुपतिनाथको मन्दिरसंगै दक्षिण–पूर्वपट्टि छत्रचण्डेश्वरको मूर्ति छ। सो मूर्तिमै जोडी राखिएको स्तम्भमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग ३६ अङ्गुल लम्बा, ९ अङ्गुल चौडा छ। यहाँ अहिले संवत् देखिंदैन।

भगवान्लालद्वारा ११ संख्याको रूपमा यो अभिलेख छापिएको छ। नोलीद्वारा ५९ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १४ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. सम्यग्ज्ञानादियुक्तः सक-
२. (ल)गुणगणं क्षोभयित्वा प्र-
३. (धा)नम् ब्रह्मादिस्थावरान्त-
४. ञ्जगदिदमखिलं योसृज-
५. द्विश्वरूपम्। आजीव्यं सर्व्व-
६. पुंसाङ्गिरितरुगहनं यः करो-
७. त्येकरूपम् पायात्सोद्य प्रस-
८. न्नः स्मरतनुदहनश्छत्रच-
९. ण्डेश्वरो वः। स्वस्ति जिष्णुगुप्त-
१०. स्य प्रवर्द्धमानविजयराज्ये आ-
११. चार्यभगवत्प्रनर्द्दनप्राणकौ-
१२. शिकेन भगवतः श्छत्रण्डेश्वरस्य
१३. –कूग्रामे प्रणालिकायाश्च ख-
१४. (ण्ड)स्फुटितसमाधानार्थमुद्दि-

१५. (श्य) मुण्डशृङ्खलिकपाशुपताचा-
१५. र्यपर्षदि वाराहस्वामि उम
१७. सोम–ऋसोमखड्गुकानाञ्च अशी-
१८. (ति)–पिण्डकमानिकानां भू प्रतिपादि–
१९. ताः (ता)साम्प्रदेशा लिख्यन्ते पिखू–
२०. ग्रामे मा १० षाफनादूलके मा २०
२१. पागुमके मा ५ पोग्रामे मा २ खू-
२२. लप्रिङ्ग्रामे मा ६ भूयो मा १५ वि-
२३. ङ्शतिकयैते अथान्याश्चतुर्विम्शतिकया
२४. –यच्च के ... अत्र विंशतिमानिका
२५. –मासवद-शेषाः शृङ्खलिकपा-
२६. ...मा- वाराहस्वामिप्रभृतिभि-
२७. ...योक्तव्या पालनयोज्यं देश-
२८. ...कि-न स्तम्भलिखित

... ... ... ...

... ... ... ...

# अनुवाद

सबै गुणहरू (सत्त्व, रजः र तमः) को जमोठ भएको प्रकृतिलाई खलबल्याएर जसले ठुङ्ग आरपातलगायत ब्रह्मासम्मको अनेक रूप भएको सारा संसारलाई बनाउनुभयो; मानिसहरूको जीवन चलाइदिने पहाड, रूख र वनलाई जसले एकै नाससंग बनाइरहनुभएको छ; कामदेवको शरीरलाई भस्म गराउने, सम्यग्ज्ञान आदिले परिपूर्ण भएका उहाँ छत्रचण्डेश्वरले खुशी भएर तिमीहरूलाई रक्षा गरून् ।

कल्याण होस् । जिष्णुगुप्तको उन्नति गर्दै गइरहेको विजयराज्यमा आचार्य भगवत्प्रनर्दन प्राण-कौशिकले भगवान् छत्रचण्डेश्वर र–कूग्राममा रहेको धाराको टुटफुट हुँदा मरम्मतको लागि मुण्डशृङ्खलिक (मुण्डमाला लाउने) पाशुपत सम्प्रदायका आचार्यहरूको संघलाई र वाराहस्वामी, उपसोम –ऋसोम खड्गुकहरूलाई समेत गरी असी मानिका कुत आउने खेत दान दिइयो । तिनका ठाउँ लेखिन्छन्–

पिखू ग्राममा १० मानिका, षाफनादूलकमा २० मानिका, पागुंमकमा ५ मानिका, पोग्राममा २ मानिका, खूलप्रिङ्ग्राममा ६ मा निका फेरि १५ मानिका, यी बीस बीसको हिसाबले दिइएका

छन् । अब अरू चौबीस चौबीसको हिसाबले......          ...... यहाँ २० मानिका, ....
जम्मै शृङ्खलिक पा(शुपत) ......वाराहस्वामी आदिले काममा लाउनुपर्छ । पालन.....
.....स्तम्भमा लेखियो ।

**व्याख्या–**

यस अभिलेखमा गद्दीनशीन राजाको नामोल्लेख भएको छैन । 'जिष्णुगुप्तको विजयराज्यमा' भन्ने उल्लेख मात्र यस अभिलेखमा परेको छ । यसबाट ङ्वाट्ट हेर्दा यस वेला जिष्णुगुप्तले स्वतन्त्र राजाका रूपमा एक्लै नै राज्य गरे कि भन्ने देखिन्छ । तर थानकोटको जिष्णुगुप्तको अभिलेखबाट अन्तिम समयसम्म पनि गद्दीमा भीमार्जुनदेव नै थिए भन्ने देखिएको हुनाले जिष्णुगुप्तले स्वतन्त्र राजाका रूपमै एक्लै राज्य गरेका थिएनन् भन्ने स्पष्ट थाहा पाइन्छ । कति भने गद्दीनशीन राजा स्थापनाका मात्र थिए; सबै राजकाज यस वेला जिष्णुगुप्तले नै चलाएका थिए, जिष्णुगुप्तले स्वतन्त्र राजाले जस्तै आफ्नै नाममा टकसमेत ढाल्न लाएका थिए । उनका पक्षमा मानिसहरूले जिष्णुगुप्तको महत्त्वाकाङ्क्षा बुझेका थिए । यसो हुँदा उनलाई प्रसन्न पार्न स्वतन्त्र राजाको रूपमा उनी एक्लैको वर्णन यहाँ गरिएको हो ।

भक्तिप्रधान शैवधर्ममा पछि निकै अन्तर आयो; साधना र अनुष्ठानको महत्त्व बढ्यो; अनेक सम्प्रदायको जन्म भयो; तिनमा पाशुपत सम्प्रदाय पनि एक मुख्य सम्प्रदाय हो । लिच्छविकालमा विशेष गरेर अंशुवर्माको समयदेखि यसको लोकप्रियता हाम्रो यहाँ निकै बढ्यो । पशुपतिको आसपासमा र अन्त पनि ठाउँ–ठाउँमा पाशुपत सम्प्रदायका मण्डली (संघ) कायम हुन थाले । नरेन्द्रदेवको पाटन गैह्रीधाराको अभिलेखमा पशुपति वाग्वतीपारि रहेको पाशुपत–मण्डलीको उल्लेख आएको छ । यस अभिलेखमा पनि 'मुण्डशृङ्खलिकपाशुपताचार्यपरिषद्' को उल्लेख छ । अरू पाशुपत–संघको उल्लेख पनि अभिलेखमा आएको छ ।

भगवत्प्रनर्दन प्राणकौशिक त्यस वेलाका पाशुपत सम्प्रदायका प्रतिष्ठित आचार्य थिए । अर्को अभिलेखमा उनलाई 'वर्णाश्रमोद्वासित' भनी लेखिएको हुनाले उनी घर–बार त्यागका संन्यासी थिए भन्ने थाहा पाइन्छ । साथै छत्रचण्डेश्वरको, धाराको मरम्मत गर्न पाशुपत आचार्य-संघलाई जग्गा दान दिएका हुनाले उनी सम्पन्न थिए भन्ने देखिन्छ । शायद यिनले जिष्णुगुप्तको दरबारमा प्रतिष्ठा पाएका थिए कि भन्ने अनुमान हुन्छ ।

मृत्युउपर विजय पाउन योगी, संन्यासीहरूले साधनाका अनेक मार्ग अपनाएका थिए । यसै प्रसङ्गमा मुण्डमाला लाउने संन्यासीहरू देखापरे । साथै मुण्डमाला लाउने उग्ररूपका महादेवको सिर्जना गरियो । अंशुवर्माको सांगाको अभिलेखमा 'रगत टप टप चुहुने मुण्डमाला'लाएका महादेवको स्तुति गाइएको छ ।

यस अभिलेखबाट लिच्छविकालमा सोमसिद्धान्तका अनुयायीहरूको अस्तित्वको पनि संकेत पाइन्छ । पाशुपतसम्प्रदायका अरू शाखाले पनि यहाँ प्रश्रय पाएको देखिएको छ ।

# पशुपति छत्रचण्डेश्वरको अभिलेख

पशुपतिनाथको मन्दिरसंगै दक्षिण–पूर्वपट्टि छत्रचण्डश्वरको मूर्ति छ। त्यसको पादपीठमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग २९ अङ्गुल लम्बा, ३ अङ्गुल चौडा छ। यसमा संवत् छैन।

नोलीद्वारा ६० संख्याको रूपमा यो छापिएको छ। राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिबाट यसको पाठ पढ्न मदत पाइन्छ।

## मूलपाठ

१. ॐ सम्यग्धर्मपदानुरक्तमतिमद्वर्णाश्रमोद्वासितो[१]

१.(क) आचार्यो भगवत्प्रनर्दन इह श्रद्धान्वितोचीकरत्

२. --पाति गुणानुरक्षितजने[२] श्रीजिष्णुगुप्ते महीम्

२.(क) शम्भोरावरणं[३] सुरासुरगुरोस्संसारपाशच्छिदः ॥

## अनुवाद

ॐ। गुणद्वारा जनताको रक्षा गरेका, श्रीजिष्णुगुप्तले शासन गरिरहनुभएको वेलामा धर्ममा राम्ररी रतिएको बुद्धि भएका, वर्णाश्रमदेखि प्रव्रजित (संन्यासी) आचार्य भगवत्प्रनर्दनले देवता र दैत्यका गुरु भएका, संसाररूपी पाशोलाई चुंडाल्ने महादेवकहाँ यहाँ पर्खाल लाउनुभयो।

---

नोलीका पाठ–

१. ॐ सम्यग्धर्मपदानुरक्तपरम..........

२. कृत्वा पाणि–नु––f...

३. – – – वरणं

व्याख्या–

माथि गएको स्तम्भलेखमा जस्तै यस अभिलेखमा पनि आचार्य प्रनर्दनले शासकका रूपमा जिष्णुगुप्तको मात्र चर्चा गरेका छन्। यसबाट आचार्य प्रनर्दन जिष्णुगुप्तप्रति कृतज्ञ थिए; उनका पक्षपाती थिए भन्ने संकेत पाइन्छ। घर–बार छोडेका संन्यासी उनी थिए तापनि सम्पन्न थिए भन्ने कुरा यस अभिलेखबाट पनि थाहा पाइन्छ। यस अभिलेखमा उनले पशुपतिनाथको चारैतिर पर्खाल लाएको कुरा लेखिएको छ।

मल्लकालको अन्तिम समयतिरसम्म पनि पशुपतिनाथका पुजारी संन्यासी हुन्थ। यस परम्पराको आधार लिच्छविकालसम्म पुगेको थियो कि भन्ने देखिएको छ। आचार्य प्रनर्दन पशुपतिनाथका पुजारी नियुक्त गरिएका थिए कि भन्ने अनुमान हुन्छ। यसै हुँदा उनले पशुपतिनाथको चारैतिर पर्खालले बार्न लाएको बुझिन्छ। साथै संन्यासी भईकन सम्पन्न हुनामा पनि यही कारण रहेको बुझिन्छ।

—०—

# नीलवाराहीको अभिलेख

भ. पु. इ. बोडेबाट पाउभर जति उत्तरतिर नीलवाराहीको प्रसिद्ध स्थान छ। त्यहाँ देवताको मूर्तिसंगै भुइँमा सुताएर यो अभिलेख कुँदिएको ढुङ्गा राखिएको छ। यो अभिलेख खण्डित छ। आधाभन्दा बढी भाग अहिले त्यहाँ छैन। अहिले पाइएको खण्ड १६ अङ्गुल लम्बा, ७ अङ्गुल चौडा छ। पाप्रो उप्केको हुनाले यसमा पनि केही अक्षर नष्ट भइसकेका छन।

'पूर्णिमा' १३ अङ्कमा मैले यो अभिलेख छपाएको छु।

## मूलपाठ

१. ... ... ... र्य्या श्रीकलहाभिमानिनृपतिभ्रातृस्नुषा

२. ... ... किरणाङ्कीर्त्तिं वितत्याभवन्मृत्योर्यो वन एव कण्ठवि

३. ... भट्टा ...। याप्रिङग्रामे स्थितवति रिपून्मूलनादीक्षितेच्छे कोशम्फैन्य (?)

४. ... भास्वद्गुणगणवति क्ष्मापतौ जिष्णुगुप्ते ॥ आपिप्यायियिषुस्तमूर्जित-
गुणप्रोन्मीलिता

५. ... तेनात्मजम् भक्त्या सम्यगचीकरद्बुधमनःस्वच्छाम्प्रणालीमिमां लक्ष्मीं स-
ज्जनसंश्रया

६. ... ... ... पञ्चाशन्मानिकामितपिण्डकम् वैद्यमद्गुदिवासिभ्यो भक्त्या
लुन्श्रीप्रदेशजम्

७. ... क कं ट कं रविः। दुप्रङगामनिवासिभ्यो गौष्ठिकेभ्योथ मानिकाः

८. ... ... ... ... तैः शीर्णा वेदयितव्या च वैद्यमद्गुदिवासिभिः

९. ... ... ... ... दिवा अयने ॥

# अनुवाद्

. . . . . .श्रीकलहाभिमानी राजाका भाइकी बुहारी . . . . . . । सफा कीर्ति फिंजाएर . . . जवानीमै मृत्यु भयो ।

याप्रिङ ग्राममा बसेका, शत्रुलाई सखाप पार्नाले मनसाय प्रकट भएका, . . . . . .ठूलठूला गुणहरू भएका जिष्णुगुप्तले शासन गरिरहनुभएको वेलामा . . . . . .

उहाँको भलो होस् भन्ने चाहने भएकी, असल गुणहरू भएकी . . . . . .तिनले छोराद्वारा विद्वान्को मन जस्तै सफा यो धारा भक्तिपूर्वक राम्ररी बनाउन लाइन् . . . . . . ।

५० मानिका कुत आउने लुन्श्री प्रदेशको खेत तिनले वैद्यमद्गुदिमा बस्नेहरूलाई दिइन् । . . .अनि डुप्रङ ग्राममा बस्ने गौष्ठिक (गोष्ठीका सदस्य=गुठियार) लाई . . .मानिका दिइन् ।

यो धारा बिग्रयो भत्क्यो भने तिनीहरूले र वैद्यमद्गुदिमा बस्नेहरूले हेरविचार गर्नुपर्छ ।

## व्याख्या–

प्रौढ पद्यमा लेखिएको यो अभिलेख सम्पूर्ण पाइएको भए यसको महत्त्व अर्कै हुने थियो । बचेको यति भागबाट पनि तात्कालिक अलिकता कुरामा प्रकाश पार्ने सामर्थ्य यस अभिलेखमा अझै बाँकी रहेको छ ।

अंशुवर्माले आफ्नो आदर्शअनुसार 'श्रीकलहाभिमानी=लक्ष्मीसंग कलह गर्न गर्व गर्ने' भन्ने उपनाम लिएका थिए । पछि उनी यही नाउँले प्रसिद्ध भएका थिए । यस कुराको पुष्टि यस अभिलेखमा उल्लिखित 'श्रीकलहाभिमानीनृपति' पदले पनि गरेको छ ।

यस ताका संयुक्त राजाका हैसियतले हर्ताकर्ता भई जिष्णुगुप्तले शासन गरिरहेका थिए । गद्दीनशीन राजा भीमार्जुनदेव नाम मात्रका राजा थिए । यसो हुनाले यस अभिलेखमा जिष्णुगुप्तको मात्र प्रशंसा गरिएको हो; उनलाई राजोचित 'क्ष्मापित' विशेषण यहाँ लाइएको छ । यो अभिलेख राख्न लाउने परिवार जिष्णुगुप्तको पक्षपाती रहेको देखिन्छ ।

यस अभिलेखमा धारा बनाएको कुरा परेको छ तथा सो धाराको मरम्मतको लागि गूठी राखिदिएको कुरा परेको छ । नीलवाराहीसंग यस अभिलेखको सम्बन्ध देखिदैन । नीलवाराही-स्थानको दक्षिणपट्टि पुरानो धारा थियो; अहिले सो पुरिएको छ भन्ने सुनिन्छ । सोही धारासंग यस अभिलेखको सम्बन्ध हुनुपर्दछ भन्ने अनुमान हुन्छ ।

–†–

# थानकोटको भीमार्जुनदेव+जिष्णुगुप्तको अभिलेख

थानकोट नारायणटोलमा पाटीनिर यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ४८ अङ्गुल लम्बा, २१ अङ्गुल चौडा छ। यस अभिलेखको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ५७ छ† ।

लेभीद्वारा १६ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ५६ संख्याको रूपमा यो प्रकाशित भएको छ। 'पूर्णिमा' ८ अङ्कमा गौतमवज्र वज्राचार्यद्वारा पनि यो छापिएको छ।

## मूलपाठ

१. ॐ तर्जन्या कर्णकण्डूत्युपशमनसुखोन्मीलितार्धेक्षणस्य[१]
२. श्रीनिःसङ्गोपगूढस्तनकलशयुगस्पर्शरोमाञ्चितस्य[२]
३. मायासुप्तौ स्थितस्य स्फुटजलधिजलक्षालिताङ्गस्य शौरेः[३]
४. भूयात्पर्यस्तहस्तस्थगितमुखशशि श्रेयसे जृम्भितं वः[४]

---

† यस अभिलेखको संवत्को अङ्क अलि अस्पष्ट छ। यस कारण यसको संवत्बारे केही भ्रम पर्न गएको थियो। नोलीले यहांको संवत् ५९ पढ्नुभएको छ। तर यहां संवत् ५७ हो भन्ने टुङ्गो लागिसकेको छ। 'पूर्णिमा' २० अङ्कका १८२–८३ पृष्ठ हेर्नुहोस्।

नोलीका पाठ–

१. ॐ तर्ज–कर्णकण्ठ–प– –हसुखोन्मीलिता–––
२. श्रीनिःस्वंगपगूढस्तनकलशयुगस्याग–––––
३. –––स्थित–––जलधिजलक्षालिताङ्गस्य शौ–
४. ––त्पर्य–––स्थगितसुखगति श्रेयसे जृम्भितं वः

५. स्वस्ति मानगृहात्सिङ्घासनाध्यासिकुलकेतुभट्टारकश्रीभीमा(र्जु)-

६. नदेवस्तत्पुरःसरः कैलासकूटभवनात्सोमान्वयभूषणो

७. भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः श्री–

८. जिष्णुगुप्तदेवः कुशली थेञ्चो[1]ग्रामनिवासिनः कुटुंबिनो यथा--

९. प्रधानङ्कुशलमाभाष्य समाज्ञापयति विदितम्भवतु भवतां (य)

१०. (था)स्मज्येष्ठप्रपितामहमानगुप्तगोमिकारितपुष्किरिणीमु-

११. द्दिश्य ग्रामस्योत्तरेण पर्वतभूमिश्चोखुपरानामधेयचैलकर-

१२. म्प्रतिमुच्य दत्ता तस्याश्च कालान्तरेण शासनान्तर्भावमभूत्त-

१३. (द)वेत्य प्रपितामहकृतज्ञतयास्माभिरिदं शिलापट्टकशास-

१४. (नञ्चि)रतरकालस्थितये दत्तं सीमा चास्य उत्तरपूर्वेण पूर्वे-

१५. ण शिखरोपर्यधोगोमिखातकमनुसृत्य पश्चापानीय-

१६. पातः पूर्वदक्षिणे येब्रंखरो दक्षिणेन थम्बिदुल् ततोनुसृत्य

१७. दक्षिणेनैव सुरिसिबत्ती दक्षिणेन नदी दक्षिणपश्चिमेन श-

१८. लङ्खा पश्चिमेन खातकस्ततोनुसृत्य पहञ्चो ततो लुम्बञ्चो उत्तरे-

१९. ण तत्पर्वतशिखरमूर्धनि खातकस्ततो यावत्स एवोत्तरपूर्व-

२०. खातक इति अन्यश्चास्माभिः प्रयोजनान्तराराधितैर्भवतां ग्राम-

२१. णिवासिनां कुटुम्बिनाम्प्रसादविशेषो दत्तो दक्षिणकोलिग्रामे

२२. गोयुद्धे गोहले गोहले यद्देयमासीत्तस्यार्धम्प्रतिमुक्तं सिं-

२३. करे च येन कार्षापणन्देयन्तेनाष्टौ पणा देया येनाष्टौ

२४. पणा देयं तेन पणचतुष्टयं मल्लकरे च पणचतुष्ट-

२५. यन्देयमिति यस्त्वेतामाज्ञामुल्लंघ्यास्मत्प्रसादोपजी-

२६. व्यन्यो वा कश्चिदन्यथा कुर्यात्कारयेद्वा तम्वयन्न (म)-

२७. र्षयिष्यामो भविष्यद्भिरपि भूपति(भि): पूर्वराज(कृ)

२८. तज्ञतया धर्मापेक्षया चेदं शासनं प्रतिपालनी-

२९. यं दूतकश्चात्र युवराजः श्रीविष्णुगुप्तः

३०. संवत् ५७ कार्ति(क)[2]शुक्लदिवाद्वितीयायाम्

---

नोलीका पाठ–

१. – ञ्चेग्राम

२. ———शुक्ल

# अनुवाद

चोरी झौंलाले कान कन्याउँदा भएको सुखले आधा आँखा चिम्लिरहेका, लक्ष्मीलाई अंगाल्दा दुइ स्तनको स्पर्शले रोमाञ्चित भएका , समुद्रको सफा पानीले जिउ भिजेका, अर्धनिद्रामा रहेका विष्णुले हर्षुङ्गोले मुख छोपीकन गरिएको हाइले तिमीहरूको भलो गरोस् ।

कल्याण होस् । मानगृह (दरबार) बाट गद्दीनशीन कुलका झण्डा जस्ता भएका भट्टारक (गद्दीनशीन) श्रीभीमार्जुनदेव र उहाँका अघिसरा भई काम गर्ने, कैलासकूटभवनबाट भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा)को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, चन्द्रवंशी श्रीजिष्णुगुप्तदेवले थेञ्चोग्राममा बस्ने मुखियालगायत गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् ।

हाम्रा जेठा बराज्यू मानगुप्त गोमीले बनाउनुभएको पोखरीको निमित्त ग्रामको नजीकै उत्तरतिर रहेको डाँडो 'चोख्परा' भन्ने चैलकर (कपडाको उत्पादनमा लागेको कर) माफी गराएर दिइएको थियो। तर त्यो जग्गा कालान्तरमा सरकार लाग्यो। त्यो कुरा थाहा पाएर हामीले आफ्ना बराज्यूको कृति संझेर धेरै कालसम्म रहिरहोस् भन्ने विचारले यो सनद शिलालेखमा कुँदाएर राखियो ।

यसको सीमा यस प्रकारको छ—उत्तरपूर्व र पूर्वपट्टि डाँडोको चुचुरोमनितिरको 'गोमी' पोखरीको किनारै किनार पानी खस्ने ठाउँसम्म पूर्वदक्षिणपट्टि येब्रंखर, दक्षिणपट्टि थम्बिदुल, त्यतैतिरबाट लागी दक्षिणपट्टि सुरिसिंवत्ती, दक्षिणपट्टि खोला, दक्षिण–पश्चिमपट्टि शलङखा, पश्चिमपट्टि पोखरी त्यतैतिरबाट लागी पहञ्चो त्यसपछि लुम्वञ्चोसम्म, उत्तरपट्टि त्यही डाँडोमाथिको पोखरी, त्यतैतिरबाट लागी उही उत्तरपूर्वको पोखरीसम्म ।

कामविशेषले प्रसन्न भएका हामीबाट तिमीहरूको ग्राममा बस्ने गृहस्थीहरूलाई अर्को विशेष निगाह पनि गरिदिइएको छ। दक्षिणकोलीग्राममा हुने गोयुद्धमा एक एक हलो जग्गामा जो बुझाउनु पर्ने थियो; त्यसको आधा माफी गरिएको छ। 'सिं' भन्ने करमा पनि जसले १ कार्षापण बुझाउनु-पर्थ्यो; त्यसले ८ पण बुझाउनू । जसले आठ पण बुझाउनुपर्थ्यो; त्यसले चार पण बुझाउनू। मल्लकरमा पनि ४ पण बुझाउनू।

हाम्रो यस आज्ञालाई हाम्रो निगाहबाट जीविका चलाउने (सरकारी कर्मचारी) वा अरू कसैले नटेरेर अन्यथा गर्ला वा गराउला; त्यसलाई हामी सहनेछैनौं । पछिका राजाहरूले पनि पहिलेका राजाहरूले गरेर गएको कृतिलाई संझेर तथा धर्मको वास्ता राखेर यस आज्ञाको प्रतिपालना गर्नुपर्छ ।

यस बातका दूतक (मार्फत) युवराज श्रीविष्णुगुप्त। संवत् ५७ कार्तिक शुक्ल द्वितीया ।

व्याख्या--

यस अभिलेखको उठानमा अर्धनिद्रामा रहेका भगवान् विष्णुको सफल चित्रण गरिएको एक मङ्गलाचरण–पद्य रहेको छ। कविताको दृष्टिले सो पद्य सुन्दर छ। यस्ता कविता लेख्न सक्ने विद्वान् त्यस बेला थिए भन्ने यसबाट देखिएको छ। अभिलेख कुँद्नेको असावधानीले गर्दा गद्यभागमा भने यहाँ अलि अशुद्धि पर्न गएको छ।

जिष्णुगुप्तको शासनकालको यो अन्तिम अभिलेख हो। यसको चार महीना जति पछिको मालिगाउँको अभिलेखबाट त्यस बेला जिष्णुगुप्तको ठाउँ उनका छोरा विष्णुगुप्तले लिइसकेका थिए भन्ने थाहा पाइन्छ। यस बेला जिष्णुगुप्तको महत्त्वाकाङक्षा पराकाष्ठामा पुगेको यस अभिलेखबाट झल्कन्छ। यहाँ जिष्णुगुप्तको नाउँमा 'देव' पद पनि जोडिएको छ। योभन्दा अघिका जिष्णुगुप्तका अभिलेखमा 'देव' जोडिएको थिएन। 'देव' पद त्यस बेला लिच्छवि राजपरिवारमा मात्र लाग्थ्यो। 'राजा भट्टारको देवः' अमरकोशको यस उक्तिअनुसार गद्दीका अधिकारी व्यक्ति मात्र 'देव' कहलाउँथे। अंशुवर्माले लिच्छवि राजाहरूले पनि नलिएको 'महाराजाधिराज' पद लिएका थिए तापनि उनले आफ्नो नाउँमा लिच्छवि राजपरिवारसरह 'देव' पद कहिल्यै पनि जोडेका थिएनन्। अहिले अन्तिम समयमा आएर जिष्णुगुप्तले चाहिं आफूलाई 'देव' पनि लेखाए। यसबाट उनको महत्त्वाकाङक्षाबारे हामी थाहा पाउँछौं। अर्कोतिर गद्दीनशीन भीमार्जुनदेवमा साबिक रूपमा रहेको 'महाराज' पद खोसिएको छ। उनलाई यहाँ 'भट्टारक' मात्र भनिएको छ। यसमा पनि रहस्य लुकेको बुझिन्छ। अरू अभिलेखमा भीमार्जुनदेवलाई 'लिच्छविकुलकेतु' भनिएको पाइन्छ। यस अभिलेखमा भने त्यसो नभनी 'सिंहासनाध्यासिकुलकेतु' भनिएको छ। यसमा पनि केही रहस्य छ भन्ने देखिन्छ। भीमार्जुनदेव गद्दीका हकदार होइनन्; जिष्णुगुप्तले उनलाई बलैले गद्दीमा राखेका हुन् भन्ने खालको गाइँ गुइँ त्यस बेला चलेको अनुमान हुन्छ। यसै हुँदा उनी गद्दीका हकदारचाहिं हुन् भन्ने दर्शाउन जिष्णुगुप्तले उनलाई 'सिंहासनाध्यासिकुलकेतु' भनी लेखाउन लाएको बुझिन्छ। साथै यस अभिलेखमा जिष्णुगुप्तले आफूलाई 'सोमान्वयभूषण' लेखाएका छन्। "हामी चन्द्रवंशी राजखलकका हौं; यस कारण राजा बन्न योग्य छौं भन्ने दर्शाउने अभिप्रायले उक्त कुरा लेखाएको बुझिन्छ।

जिष्णुगुप्तका बराज्यू मानगुप्त गोमीले थेञ्चो–ग्रामको नजीकै उत्तरतिर रहेको डाँडोमा एउटा पोखरी बनाएका थिए। यस अभिलेखमा उल्लिखित ठाउँको हुलियाको आधारमा विचार गर्दा सो पोखरी दहचोक–डाँडोको प्रसिद्ध पोखरी 'इन्द्रदह' हो भन्ने देखिएको छ। त्यस पोखरीको हेरचाहको लागि सो डाँडो चैलकर माफी गरी थेञ्चो ग्रामका बासिन्दाहरूलाई सुम्पिएको थियो। केही कालपछि सो डाँडो सरकार लाग्यो। अहिले जिष्णुगुप्तले आफ्ना बराज्यूको कृति थाम्नाको लागि फेरि बन्धेज बाँधी यो सनदपत्र गरिदिएका हुन्। यसै प्रसङ्गमा थेञ्चो ग्रामका बासिन्दाहरूलाई सन्तुष्ट पार्न अरू विशेष निगाह पनि गरिदिइएको कुरा यसमा परेको छ।

गोयुद्धीकर–लिच्छविकालमा मनोरञ्जनको लागि उत्सवको रूपमा साँढे जुधाउने चलन चलेको देखिन्छ। नरेन्द्रदेवको अनन्तलिङ्गेश्वरको अभिलेखबाट साँढे जुधाउँदा पताका (झण्डाविशेष) पनि रहन्थ्यो भन्ने थाहा पाइन्छ। त्यसवेला दक्षिणकोलीग्राममा यस्तो साँढे जुधाउने उत्सव विशेष रूपमा हुँदो रहेछ। यस उत्सवको उपलक्ष्यमा थेञ्चोग्रामका बासिन्दाहरूले पनि गोयुद्धकरको रूपमा केही बुझाउनुपर्दो रहेछ। अबदेखि थेञ्चो ग्रामका बासिन्दाहरूले दक्षिणकोलीग्राममा हुने सो गोयुद्धोत्सवको लागि बुझाउनुपर्ने कर आधा मात्र बुझाए पुग्छ भन्ने निगाह यहाँ गरिएको छ।

लिच्छविकालमा यहाँ खेत खन्न हलोको प्रयोग गरिन्थ्यो भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ। यहाँ हलोपिच्छे लाग्ने कर पनि आधा मात्र बुझाए पुग्छ भनी निगाह गरिएको छ।

सिंकर–यहाँ कर माफीको प्रसङ्गमा थेञ्चो ग्रामका बासिन्दाले 'सिंकर' मा पनि आधा मात्र बुझाए पुग्छ भनिएको छ। 'सिं' यो संस्कृतभाषाको शब्द होइन। तात्कालिक जनभाषाबाट रूढ भई यो शब्द प्रचलित भएको हो। किराती, नेवारी, तामाङ आदि भाषामा यो शब्द अद्यापि प्रचलित छ। यसको अर्थ दाउरा, काठ भन्ने हो। यसबाट 'सिंकर' दाउरा, काठमा लागेको कर हो भन्ने बुझिन्छ। लिच्छविकालभन्दा अघिदेखि अर्थात् किरातकालदेखि प्रचलित यो सिंकर लिच्छविकालमा पनि यथावत् कायम रहेको देखिन्छ।

चोख्परा चैलकर–कपडाको उत्पादनमा लागेको कर चैलकर हो। यस अभिलेखमा कपडामा लागेको करको स्थानीय रूढ नाउँ 'चोख्परा' भन्ने छ। 'चो' संस्कृत शब्द होइन। 'डाँडो' भन्ने अर्थमा 'चो' शब्द किरातपरिवारको भाषामा प्रचलित छ। यही अर्थमा 'चो' शब्दको प्रयोग लिच्छविकालका अभिलेखमा पनि धेरै ठाउँमा भएको छ। यहाँ 'पर्वतभूमिश्च खपरानामधेय-चैलकरम्प्रतिमुच्य दत्ता' भनी चैलकर माफी गरी डाँडो दिइएको हुनाले पनि उक्त कुराको पुष्टि हुन्छ। यसरी 'चोख्परा' नाउँ भएको यो चैलकर पनि लिच्छविकालभन्दा अघिदेखि अर्थात् किरातकालदेखि नै प्रचलित भएको देखिन्छ। साथै दहचोकभेकमा कपडा बुन्ने व्यवसाय त्यस वेलादेखि चलेर आएको यताबाट बुझिन्छ।

कार्षापण–यस अभिलेखमा कर आधा माफी गरिदिएको प्रसङ्गमा जसले कार्षापण तिर्नुपर्थ्यो; त्यसले आठ पण तिरे पुग्छ; जसले आठ पण तिर्नुपर्थ्यो, त्यसले चार पण तिरे पुग्छ भनिएको छ। यसबाट लिच्छविकालमा १६ पणको १ कार्षापण हुँदो रहेछ भन्ने थाहा पाइन्छ। यसरी लिच्छवि कालको मुद्राको अलिकता परिभाषा यताबाट खुल्न आएको छ।

–★–

# मालिगाउँको विष्णुगुप्तको अभिलेख

काठमाडौं मालिगाउँमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको थियो। हाल राष्ट्रिय-संग्रहालय छाउनीमा यो राखिएको छ। यसको अभिलेख कुँदिएको भाग ३७ अङ्गुल लम्बा, २१ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित गरिएका छन्; खिइएका हुनाले ती अलि अस्पष्ट छन्। यहाँ संवत् ५७ छ‡।

'इतिहास-प्रकाश' १ अङ्कमा योगी नरहरिनाथ जनकलाल ढकालद्वारा यो छापिएको छ। नोलीद्वारा ५७ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १५ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. (ॐ स्वस्ति) कैलासकूटभ(वनाद्) ... ...
२. ... वय ... ...
३. ... ... ...
४. ... ... ...
५. ... ... ...
६. ... ... ...
७. ... ... ...
८. ... ... ...
९. .. मा ... कारेण ... ...
१०. ... व केवलमि .. भिः .. हित ...
११. –ण व्यवस्थेयमुपदा–त–पत्यावुपरते नष्टे प्रव्रजितेपि वा पतितेपि-[१]–

‡ नोलीले यहांको संवत् ५९ छपाउनुभएको छ। तर शुद्ध पाठ ५७ हो।

नोलीको पाठ– १. –त–रिप. य——ष्ठे प्रश्रवि–पि–पति–पि

१२. दृष्टे--योषितामपरः पति इत्येव ..मादिभिः कारणैरपरैरपि का-[१]
१३ रणान्तरैर्विवाहात्पतनकालं सङ्ग्रहणेनापरं पतिमुपयाता[२] नि-
१४. रपत्या योषितो ज्ञातिभिः -व .. या ... यदि परिभ्रश्यान्यत्पत्यन्तर-
१५. मुपाददत एवं द्वितीयं सङ्ग्रह(मुप)याता नि(:पु)त्रवत्यो भविष्यन्ति तास्‌ मा
१६. प्चोकाधिकारोयं यथाव्यवस्थम्प्रवर्तयितव्यस्तास्वप्यतीतास्‌ यतीसारूप्य-
१७. कन्तन्नाम्ना परिभाषितञ्च धनं तम्माप्चोकवृत्तिभुजा ग्राह्यं ततोपि पुरुषप-
१८. रितोषमभावयित्वा बहुशोपि व्यपेतलज्जाः प्रखलस्वभावाश्चारित्रधर्मा(पग)[३]
१९. (ता) युवत्यः सन्तोषहीना प्रथमे विरक्ता रागानुषक्ताः पुरुषं भजन्ते
२०. तापि यदि पुत्रवत्यो भविष्यन्ति नैव माप्चोकाधिकारभागधेया
२१. यास्त्वेतामतीतानेकनरपतिकृतव्यवस्थानुगामिनीमस्मद्व्यवस्थाम-
२२. न्यथा कुर्यात्तं वयमत्यर्थं न मर्षयिष्यामो भाविभिरपि भूपतिभिरिदमस्म-
२३. त्कृतं देशपीडापरिहारनिष्ठं शासनमात्मीयमिव पूर्व्वराजगुरुतया[४]
२४. सम्यगनुपालनीयमिति समाज्ञापना संवत्‌ ५७ फाल्गुनशुक्ल-
२५. सप्तम्यां दूतकश्चात्र श्रीयुवराजश्रीधरगुप्तः

# अनुवाद

(कल्याण होस्‌ ।) कैलासकूटभवनबाट ......... ......... .....
यो व्यवस्था ........लोग्ने मरेमा, हराएमा, जोगी भएमा वा पतित भएमा......आइ-माईहरूको अर्को लोग्ने ......इत्यादि कारण र अरू कारणद्वारा विवाहपछि पतित भई अरू लोग्ने लिन्छन्‌; यसरी दोस्रो संग्रह (ल्याइते स्वास्नी) हुन पुगेर पनि निस्सन्तान हुन्छन्‌ भने तिनीहरूमा माप्चोक अधिकरणले लाग्ने कानून लाउनू । तिनीहरूको शेषपछि यतीसारूप्य नाउँले तोकिएको धन माप्चोकका जागीरदारले लिनू ।

तैपनि लोग्नेबाट सन्तुष्ट नभई धेरैबाजी लाज पचाएका, खराब स्वभावका, चरित्र धर्मबाट च्युत भएका, पहिलो लोग्नेदेखि विरक्त भएका, कामवासनातिर झुकेका असन्तुष्ट युवतिहरू अरू लोग्ने लिन्छन्‌ र तिनीहरूको सन्तान भयो भनेचाहिं माप्चोक अधिकरणले कार्बाइ गर्नुपर्दैन ।

---

नोलीका पाठ १. —मादि–: कारणैरपरै.....
२. संग्रहं येनापरं
३. धर्मायमिता— ४. पूर्वगुरुतया

पहिलेका अनेक राजाहरूले बाँधेको स्थितिबन्धेजअनुसार हामीले बाँधेको यस स्थितिलाई जसले अन्यथा गर्ला; त्यसलाई हामी अवश्य सहनेछैनौं। पछि हुने राजाहरूले पनि देशवासीको मर्का हटाउन हामीबाट गरिदिइएको यो सनदलाई आफ्नै जस्तो ठानी अघिका राजाहरूको कदर गरी राम्ररी थाम्नुपर्छ भन्ने आज्ञा छ ।

संवत् ५७ फाल्गुन शुक्ल सप्तमी। यहाँ दूतक श्रीयुवराज श्रीधरगुप्त।

## व्याख्या-

यस अभिलेखको माथिल्लो भाग धेरै नै खण्डित छ। यस कारण अब यस अभिलेखमा शासकको नाउँ देखिँदैन। यहाँ संवत् ५७ स्पष्ट देखिन्छ। दूतक श्रीयुवराज श्रीधरगुप्त छन्। विष्णुगुप्तको यङ्गालहिटी र भृङ्गारेश्वरको अभिलेखमा पनि दूतक युवराज श्रीधरगुप्त छन्। यसबाट श्रीधरगुप्त विष्णुगुप्तका छोरा हुन् भन्ने थाहा पाइन्छ। यहाँ दूतक युवराज रहेको हुनाले यो अभिलेख पनि विष्णुगुप्तको नै हो भन्ने कुरामा शङ्का छैन। यो भन्दा चार महीना जति पहिलेको थानकोटको अभिलेखमा संयुक्त राजाका रूपमा जिष्णुगुप्तको र युवराजका रूपमा विष्णुगुप्तको उल्लेख परेको छ। यसबाट संवत् ५७ को कार्तिक र फाल्गुनको बीचमा जिष्णुगुप्तको मृत्यु भएको र उनको स्थान विष्णुगुप्तले लिएको बुझिन्छ ।

अन्तिम समयमा जिष्णुगुप्त 'देव' कहलाएका र गद्दीनशीन राजालाई ग्रँचेटेर अघि बढेका थिए भन्ने कुराको चर्चा माथि गरिसकेको छ। बाबुको अनुसरण गरी विष्णुगुप्त अझ बढी अगाडि बढेको कुरा यस अभिलेखले देखाएको छ। यहाँ उठानमा "कैलासकूटभवन' यति अक्षर बचेका छन्। यसबाट यो सनदपत्र कैलासकूटभवनबाट जारी गरिएको हो भन्ने थाहा पाइन्छ। यसरी गद्दीनशीन राजालाई मिची उनको नामोल्लेखसम्म नगरी स्वयं विष्णुगुप्तले नै राजाका हैसियतले यो सनदपत्र गरिदिइएको देखिन्छ। यस वेला पनि गद्दीमा चाहिं राजा भीमार्जुनदेव नै थिए भन्ने कुरा यङ्गालहिटी र भृङ्गारेश्वरको अभिलेखबाट थाहा पाइन्छ। गद्दीनशीन राजालाई जानाजान मिची विष्णुगुप्तले राज्य चलाएको यताबाट देखिएको छ। तर यसको परिणाम राम्रो निस्केन ।

राजनैतिकभन्दा पनि सामाजिक इतिहासको दृष्टिले यस अभिलेखको महत्त्व बढी छ। यसमा विधवा–विवाह, पुनर्विवाहसम्बन्धी स्थितिबन्धेजको उल्लेख परेको छ।

लिच्छविकालमा शासक र उच्च वर्गमा सती जाने वा सतीव्रतमा रहने प्रथा प्रचलित थियो। साथै केही वर्गमा विधवाविवाह पुनर्विवाह गर्ने प्रथा पनि प्रचलित थियो। अघिदेखि प्रचलित यस प्रथालाई लिच्छविकालका शासकहरूले पनि कायम नै रहन दिएका थिए। यस प्रथालाई विष्णुगुप्तले पनि कानूनी मान्यता दिएको कुरा यस अभिलेखमा परेको छ ।

लोग्ने मरेमा, हराएमा, जोगी भएमा, पतित भएमा.....यी र अरू यस्तै कारणले

पुर्नविवाह गरी सन्तान भएमा माथ्योक्त अधिकरणले कार्बाइ नगर्नू; सन्तान भएन भने मात्र साबिकबमोजिम कार्बाइ गर्नू भनी यहाँ भनिएको छ। यसरी पतिको मृत्यु भएपछि पनि विवाहको स्वीकृति दिइएको यस वचनले त्यस वेला केही वर्गमा विधवाविवाह प्रचलित थियो भन्ने स्पष्ट दर्शाएको छ। साथै स्त्रीको दोस्रो, तेस्रो विवाहको पनि उल्लेख यहाँ परेको हुनाले त्यस वेला विवाहसम्बन्धविच्छेद, पुर्नविवाह पनि प्रचलित थियो भन्ने स्पष्ट देखिन्छ।

लोग्ने विदेशतिर लागेमा, पतित भएमा, नपुंसक भएमा, राजद्रोही भएमा, ज्यानमारा भएमा पतित्याग गर्ने स्वीकृति कौटल्यले पनि दिएका छन्। जस्तै–

"नीचत्वं परदेशं वा प्रस्थितो राजकिल्विषी।
प्राणाभिहन्ता पतितस्त्याज्यः क्लीवोपि वा पतिः॥" कौ. अ. ३।२

तर विधवाविवाहको स्वीकृति धर्मशास्त्रहरूमा दिइएको कम पाइन्छ। नारदस्मृतिमा भने विधवाविवाहको पनि स्वीकृति दिइएको छ–

"नष्टे मृते प्रव्रजिते क्लीबे च पतिते पतौ।
पञ्चस्वापत्सु नारीणां पतिरन्यो विधीयते ॥१५।९७

नारदस्मृति नेपालमा मध्यकालसम्म पनि बढी प्रचलित थियो; यो यस प्रसङ्गमा विचारणीय छ।

लिच्छविकालका शासकहरू नेपाली समाजलाई वर्णव्यवस्थाअनुसार, शास्त्रोक्त विधानअनुसार ढाल्न चाहन्थे। यसो हुनाले विधवाविवाह पुर्नविवाहको चलन उनीहरूको दृष्टिमा राम्रो लागेको थिएन। धेरै अघिदेखि प्रचलित यस चलनलाई कानूनी मान्यता यहाँ दिइएको छ तापनि यस चलनको निन्दा पनि यहाँ गरिएको छ। यसबाट यो चलन शासकहरूलाई मन परेको थिएन; तर अघिदेखि लोकव्यवहारमा प्रचलित हुँदा उनीहरूले यसलाई रोक्न पनि सकेका थिएनन् भन्ने थाहा पाइन्छ। जे होस्; लिच्छविकालमा विधवाविवाह, पुर्नविवाह केही अंशमा प्रचलित थियो भन्ने यताबाट निश्चित हुन्छ।

# यङ्गालहिटीको भीमार्जुनदेव+विष्णुगुप्तको अभिलेख

काठमाडौं लगनटोल यङ्गालहिटीमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३६ अङ्गुल लम्बा, १८ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत ६४ छ।

नोलीद्वारा ६१ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १६ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. ॐ अनन्तनागाधिपभोगभासुरे जलाशये शान्ततमम्मनोहरम्
२. मुरारिरूपं यदशेत देहिनां शिवाय तद्वो विदधातु मङ्गलम्॥
३. स्वस्ति मानगृहात्सकलजननिरुपद्रवोपायसम्विधानैक-
४. चित्तसन्तानो लिच्छविकुलकेतुर्भट्टारकमहाराजश्रीभीमार्जुन-
५. देवस्तत्सहितः श्रीमत्कैलासकूटभवनादपरिमिताभिमत-
६. नृपतिगुणकलापाविष्कृतमूर्तिरनवदातज्ञानमयू-
७. खापसारितसकलरिपुतिमिरसञ्चयो भगवत्पशुपतिभट्टार-
८. कपादानुगृहीतो बप्पपादानुध्यातः श्रीजिष्णुगुप्तः कुशली भवि-
९. ष्यतो नेपालभूभुजो यथार्हम्प्रतिमान्यानुदर्शयति विदितम-
१०. स्तु भवतां सकलजगदवसानोदयैककारणस्योदारतरम-
११. हिमावाप्तिनिधानभूतस्य भगवतो विष्णोर्जलशयनरूपनि-
१२. ष्पादनयोग्यवृहच्छिलाकर्षणव्यापारपरितुष्टैरस्माभिर्दक्षिणको-

१३. लीग्रामस्य पूर्वमेव द्रङ्गचतुर्भागत्वेन प्रविभक्तस्यैतत्स ीमनिवा-
१४. सिनाम्पदककेयूरनूपुरान् वर्जयित्वान्यैः प्रसादाभरणपरिभो-
१५. गैः प्रसादः कृतो येषाञ्चैतत्स्थाननिवासिनाम्प्रसादाभरणानि पूर्व-
१६. प्रभृत्येव विद्यमानानि तेषामयमधिकोस्मत्प्रसादो ये वा पुनरे-
१७. तद्द्रङ्गचतुर्भागसीमाभ्यन्तरवर्तिनश्चौरपरदारहत्याराजद्रोहका-
१८. पराधमवाप्नुयुस्तेषामेवामुनापराधेन दोषवतां यदात्मी-
१९. यमेव गृहक्षेत्रगोधनादिद्रव्य(न्त)देव राजकुलाभाव्यमेतद्दो[१]–
२०. षाभिशस्तानां ये दायादास्तेभ्यो ... ... (ना)न्यायेनाल्पमपि[२] ... क्र–
२१. ष्टव्यमित्येष च भवता ... ... मस्मत्कृतप्रसादोपकारा–
२२. र्थो भविष्यद्भिरपि भूप(तिभि) ... ... स्वकृतनिर्विशिष्टमिव
१३. मन्यमानैस्तथैवानुपालनीयः ... ... र .. तास्तैरपि नैषा–
२४. मल्पापि बा(धा) विधेया यदि पुनरेतवाज्ञातिक्रमणेनान्यथा[३] प्रवर्ति–
२५. ष्यन्ते नि(तरामे)व ते न मर्षयितव्या इति प्रतिमानना[४] संवत् ६४
२६. फाल्गुनशुक्लद्वितीयायाम् दूतकश्चात्र श्रीयुवराजश्रीधरगुप्तः ॥

# अनुवाद

शेष नागराजको शरीरले चहकिलो भएको पोखरीमा प्राणीको कल्याणको लागि सुतेका विष्णुको अतिशान्त सुन्दर मूर्तिले तिमीहरूको मङ्गल गरोस् ।

कल्याण होस् । मानगृह (दरबार) बाट सारा मानिसको दुःख बाधा हटाउनामा हरबखत चित्त लाएका, लिच्छविकुलका झण्डास्वरूप भएका, भट्टारक (गद्दीनशीन) महाराज श्रीभीमार्जुनदेव र उहाँको साथमा रही काम गर्ने, राजामा हुनुपर्ने असङ्ख्य असल गुणहरूले जीउ सुहाएका, उत्तम सफा ज्ञानरूपी किरणले सारा शत्रुरूपी अन्धकार हटाएका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीविष्णुगुप्तले श्रीकैलासकूटभवन (दरबार) बाट पछि हुने नेपालका राजाहरूलाई यथोचित सन्मान गरेर बाटो देखाउनुभएको छ । तपाईंहरूलाई आज्ञा होस् ।

भगवान् विष्णुको जलशायी मूर्ति बनाउन लायकको ठूलो ढुङ्गा तानेर ल्याउने कामले खुशी

---

नोलीका पाठ–

१. राजकु – – – – ो २. – – – न्यायेनायमपि
३. पुनरेतदाज्ञा – – – नान्यथा ४. प्रति(पालना)

भएका हामीबाट पहिले नै डुङ्गको चार भागको एक भागको रूपमा इलाका छुट्ट्याइएको दक्षिणकोली ग्रामको यस सीमाभित्र बस्नेहरूलाई कल्ली, बाजू, पाउजेबलाई छोडेर अरू गहना लाउन पाउने गरी निगाह गरियो। यो ठाउँमा बस्ने जसलाई पहिले नै गहना लाउन हुने गरी निगाह गरिएको थियो; तिनलाई हामीबाट गरिएको यो बढी निगाह हो।

डुङ्गको चार भागको एक भाग रूपको यो इलाकामा बस्ने जसले चोरी गर्नु, अर्काकी स्वास्नी हर्नु, ज्यान मार्नु, राजद्रोह गर्नु यी अपराध गर्लान्; यी अपराधद्वारा दोषी ठहरिएका तिनको आफ्नै अंशको घर–खेत गाई वस्तु आदि सम्पत्ति मात्र राजदरबार लाग्नेछ; यी अपराधद्वारा दोषी ठहरिएका तिनका दायाद (अंशियार) हरूबाट अलिकता पनि जबर्दस्तीसंग लिइनेछैन।

हामीबाट निगाहपूर्वक गरिएको यो उपकारको कुरा पछि हुने राजाहरूले पनि....... आफूले गरेको जस्तै ठानी........थाम्नुपर्छ। ...... ......(अधिकारी)–हरूले पनि यिनीहरूलाई अलिकता पनि दुःख नदिनू। यदि यो आज्ञा नाघेर कारबाइ गरे भने तिनीहरूलाई बिलकुल सहनेछैनौं। यस्तो अनुरोध छ।

संवत् ६४ फाल्गुन शुक्ल द्वितीया। यस बातका दूतक (मार्फत) श्रीयुवराज श्रीधरगुप्त।

**व्याख्या-**

**बूढानीलकण्ठ नारायणको स्थापना–**

विष्णुगुप्तले यस अभिलेखमा आफूलाई 'भगवत्पशुपतिभट्टारकपादानुगृहीत' भनी लेखेका छन्। यसरी उनले महादेवमा आफ्नो श्रद्धा व्यक्त गरेका छन्। साथै विष्णुमा पनि विष्णुगुप्तको ठूलो श्रद्धा देखिन्छ। वर्तमान बूढानीलकण्ठ नारायणको प्रसिद्ध मूर्ति विष्णुगुप्तले नै बनाउन लाएका हुन्। यो र भृङ्गारेश्वरको अभिलेख, गोपालवंशावली आदि सामान केलाएर हेर्‍यौं भने यो कुरा हामी स्पष्ट बुझ्न सक्छौं।

यस अभिलेखमा जलशयनविष्णुको ठूलो मूर्ति बनाउन लायकको ठूलो ढुङ्गा तानेर ल्याइदिएका हुनाले प्रसन्न भएर दक्षिणकोलीग्रामका बासिन्दाहरूलाई केही सुविधा गरिदिएको कुरा परेको छ। यस अभिलेखको उठानमा जलशयन नारायणको स्तुति पनि परेको छ। यसबाट विष्णुगुप्तले ठूलो जलशयन नारायण बनाउन लाएका थिए भन्ने थाहा पाइन्छ। यसै गरी भृङ्गारेश्वरको विष्णुगुप्तको अभिलेखबाट पनि उक्त कुरा थाहा पाइन्छ। तर सो जलशयन नारायणमूर्ति कहाँनिर बनाउन लाएका थिए भन्ने कुराचाहिं यताबाट खुल्दैन। गोपालवंशावलीबाट यो कुरा खुल्छ। त्यसबाट विष्णुगुप्तले स्थापना गरेका जलशयन नारायण वर्तमान बूढानीलकण्ठ नारायण नै हुन् भन्ने थाहा पाइन्छ। विचारार्थ गोपालवंशावलीको सो भाग यहाँ उद्धृत गर्नु–परेको छ–

"राजा श्रीविष्णुगुप्त.......तेन......उत्तप्रवतात् मधे नरशिंहस्थाने महच्छिलामय-विष्णुजलशयन, अतिसुन्दर आवाससहितम् कृतवान्" (गोपालवंशावली २२ पत्रबाट)

(राजा श्रीविष्णुगुप्तले......उत्तर पहाडको फेदीमा नरसिंहस्थानमा अतिसुन्दर ढुङ्गाका ठूला जलशायी विष्णु स्थापना गर्नुभयो; मन्दिर पनि बनाउनुभयो ।)

यहाँ उत्तर पहाडको फेदीमा नरसिंहस्थानमा विष्णुगुप्तले जलशयन विष्णु स्थापना गरे भनी लेखिएको छ। बूढानीलकण्ठस्थानलाई त्यस ताका नरसिंहस्थान भनिन्थ्यो। यो कुरा बूढानीलकण्ठ नारायणस्थानमै रहेको शिवदेव अंशुवर्माको अभिलेखबाट थाहा पाइन्छ। सो अभिलेखमा 'नरसिंह' पाञ्चालीको उल्लेख परेको छ।

यति कुराबाट वर्तमान बूढानीलकण्ठ नारायणको मूर्ति विष्णुगुप्तले स्थापना गरेका हुन् भन्ने सिद्ध भएको छ।

अंशुवर्माको हाँडिगाउको अभिलेखमा 'भुम्भुक्किकाजलशयन' देवताको उल्लेख आएको छ। बूढानीलकण्ठस्थानलाई नेवारीमा अहिले 'भुयुजसी' भनिन्छ। भुम्भुक्किकाजलशयनको अपभ्रंश 'भुयुजसी' भएको हो; यस कारण अंशुवर्माको समयमै बूढानीलकण्ठ नारायणको स्थापना भइसकेको देखिएको हुनाले सो मूर्ति विष्णुगुप्तले स्थापना गरेका हुन् भन्ने कुरामा शङ्का छ भनी केही इतिहासकारले उक्त कुरामा आपत्ति उठाएका छन्। यस कारण यस विषयमा पनि केही विचार गर्नुपरेको छ।

नेवारी भाषामा अपभ्रंश हुँदा 'भुम्भुक्किका' को भुयु हुन आउँदैन। अपभ्रंश हुँदा त, न, आदि वर्णलोप हुने पद्धति नेवारी भाषामा रहेको छ। तर कण्ठ्य अक्षरको लोप ज्यादै कम मात्र हुन्छ। यस आधारमा 'भुम्भुकिका'को 'भुयु' भएको होइन भनी भन्न सकिन्छ। त्यसो भए 'भुयुजसी' यो नाम कताबाट बन्यो भन्ने प्रश्नको उत्तर खोज्नु आवश्यक छ। बूढानीलकण्ठस्थानका अभिलेख र अरू ठ्यासफूबाट यसको पनि निर्णय हुन्छ। विचारार्थ यहाँ अलिकता उद्धरण दिनुपरेको छ–

"श्रीश्रीश्रीभोयुवजरसेन नार्नजुस........श्री३शिवलिङ्गस्थापना याङ"

(नारायणस्थानभित्र पर्खालमा टाँसिराखेको शिलालेखबाट)

(श्री ३ भोयुवजलसेन नारायणस्थानमा........श्री ३ शिवलिङ्ग स्थापना गरियो।)

"सम्वत् ७९८ कार्तिक शुक्ल ॥ त्रयोदशी रेवतीनक्षत्र आदित्यवार थ्व कुन्हु भोयुजलसेनस श्रीश्रीनृपेन्द्रमल्लदेवप्रभु थाकुलस माम इन्द्रमती राणीन फले प्रतिष्ठा याङा दिन ॥"

(तात्कालिक ठ्यासफुबाट)

(ने. सं. ७९८ (वि. सं. १४७३) कार्तिक शुक्ल त्रयोदशी आदित्यवार रेवतीनक्षत्र, यस दिन

भोयुजलसेनमा श्रीश्रीनृपेन्द्रमल्लदेव प्रभु ठाकुरकी आमा इन्द्रमती रानीले पाटीको प्रतिष्ठा गर्नुभयो।)

"सम्वत् ८३५ वैशाष......श्री ३ भोयुजलसेनस अनेग थास दुदुधारा चासेचोङ"
(ऐतिहासिक घटनावलीबाट)

(ने. सं. ८३५. (वि. सं. १७७२) वैशाखमा......श्री ३ भोयुजलसेनमा अनेक ठाउँमा दूधको धारा बगिरह्यो )

'भोयु' 'भोयुव' शब्दको अर्थ सेतो, स्वच्छ भन्ने हुन्छ। यसैको अपभ्रंश 'भुयु' भएको हो भन्ने यताबाट थाहा पाइन्छ। यस कारण भुम्भुक्किकाको अपभ्रंश 'भुयु' भएको होइन भन्ने निश्चित छ।

बूढानीलकण्ठ नारायणको विशाल मूर्ति एउटै ढुङ्गाद्वारा बनाइएको छ। अनेक ढुङ्गाका अङ्ग प्रत्यङ्ग जोडी यो बनाइएको होइन। यसो हुनाले यत्रो विशाल मूर्ति बनाउन विशाल ढुङ्गाको आवश्यकता हुनु स्वाभाविक थियो। यस कारण यो मूर्ति बनाउँदा तदुचित ढुङ्गा प्राप्त गर्नु नै पहिलो समस्या रहेको बुझिन्छ। यस अभिलेखमा 'विष्णोर्जलशयनरूपनिष्पादनयोग्यबृहच्छिलाकर्षण-व्यापारपरितुष्टैरस्माभिः.........' भनिएको छ। भृङ्गारेश्वरको अभिलेखमा पनि '.......आश्चर्यभूत....... .. रूपनिष्पादनयोग्यशिलाकर्षणम्प्रतिनियुक्तं भृङ्गारग्राम-पाञ्चालिकैः........' भनी उही भाव प्रकट गरिएको छ। ढुङ्गा तानेर ल्याउँदा भृङ्गारेश्वर र यङ्गालभेकका जनताले विशेष परिश्रम गरेको उल्लेख अभिलेखमा आएको हुनाले दक्षिणभेकबाट ढुङ्गा ल्याई यो मूर्ति बनाइएको देखिन्छ। पछिसम्म पनि उपत्यकाका आसपासका क्षेत्रमध्ये दक्षिणभेकमा पर्ने 'कोटखा'को ढुङ्गा मूर्ति बनाउन उत्तम ठहरिएको उल्लेख पाइन्छ। कोटखा–ढुङ्गा भनी कहलाएको ढुङ्गा र बूढानीलकण्ठ–नारायणमूर्तिको ढुङ्गामा सादृश्य देखिन्छ। यसो हुनाले त्यतैभेकको ढुङ्गाले यो मूर्ति बनाइएको हो कि जस्तो मलाई लाग्छ।

दक्षिणकोलीग्रामका बासिन्दाहरूले नारायणमूर्ति बनाउन लायक ठूलो ढुङ्गा तानेर ल्याइदिएका हुनाले प्रसन्न भएर विष्णुगुप्तले उनीहरूलाई केही विशिष्ट गहना लाउन पाउने अधिकार सुम्पेको कुरा यस अभिलेखमा परेको छ। त्यस बेला शासकवर्ग र जनतामा केही कुरामा समान अधिकार थिएन। शासक–वर्गले लाउने केयूर, नूपुर, पदक आदि केही गहना लाउने अधिकार जनतालाई थिएन।

सुनको कल्ली आदि केही गहना साधारण जनताले लाउन नपाउने नियम पछि राणाकालसम्म पनि थियो।

यस अभिलेखबाट लिच्छविकालको न्यायव्यवस्थाबारे पनि अलिकता कुरा थाहा पाइन्छ। त्यस बेला दण्डविधान अलि कडा थियो भन्ने बुझिन्छ। चोरी–डकैती, ज्यान मार्नु, राजद्रोह आदि

ठूला अपराध गर्नेउपर कडा दण्ड गरिन्थ्यो। यस्ता अपराधमा अपराधीलाई मात्र होइन; त्यसको परिवारलाई नै दण्ड गरिन्थ्यो। यो कुरा यस अभिलेखबाट र भृङ्गारेश्वरको अभिलेखबाट थाहा पाइन्छ। यहाँ जलशयन नारायण मूर्ति बनाउन लायक ढुङ्गा तानेर ल्याइदिएका हुनाले प्रसन्न भएर अबदेखि यस ठाउमा बस्नेहरूले चोरी, ज्यान मार्नु, राजद्रोह आदि ठूलठूला अपराध गरे भने खाली अपराधीलाई मात्र दण्ड गरिनेछ; तिनका अंशियारउपर कार्वाइ गरिनेछैन भन्ने निगाह गरिएको छ। यसबाट निगाह गरिएको सीमित ठाउँबाहेक अन्यत्र यस्ता ठूला अपराध गर्नेको परिवारैउपर दण्ड गरिन्थ्यो भन्ने स्पष्ट छ। यो कुरा नरेन्द्रदेवको पाटन यागबहालको अभिलेखबाट पनि थाहा पाइन्छ। चोरी, ज्यान मार्नु आदि पञ्चापराध गर्नेको पूरै परिवारलाई दण्ड गर्ने उल्लेख त्यसमा परेको छ।

राजद्रोह जस्ता अपराध लागेमा परिवारैलाई दण्ड गर्ने चलन पछि शाहकालसम्म पनि चलेको थियो ‡।

-★-

‡ 'पूर्णिमा' १६ अङ्कका ३५३–५४ पृष्ठ हेर्नुहोस्।

# भृङ्गारेश्वरको भीमार्जुनदेव+विष्णुगुप्तको अभिलेख

सुनागुठी भृङ्गारेश्वर महादेवको मन्दिर सामुन्ने यो अभिलेख कुँदिएको शिला रहेको छ। यसको अभिलेख कुँदिएको भाग २७ अङ्गुल लम्बा २१ अङ्गुल चौडा छ। यसको शिरोभागमा फूल अङ्कित छ। यहाँ संवत् ६५ छ।

नोलीद्वारा ६२ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १६ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. ॐ सम्यक्प्रभावगुणविस्तरमन्त्रभाजां न ज्ञेयतामुपगतो नृसुरासुराणाम्[१]
२. तोयाशये भुजगभोगवरप्रसुप्तो विष्णुः सवो दिशतु दिव्यसुखानि नित्यम्[२]
३. स्वस्ति मानगृहादमलिनकुशलविपाको[३]पनतसम्पल्लिच्छविकुलकेतुर्भट्टार-
४. कमहाराजश्रीभीमार्जुनदेवस्तत्सहितः कैलासकूटभवनादतिमात्रवस्तुपरि-
५. प्रापणोत्सवोपगतहर्षाभिनमस्यमानचरणयुगलो[४] भगवत्पशुपतिभट्टा-
६. रकपादानुगृहीतो बप्पपादानुध्यातः श्रीविष्णुगुप्तः कुशली भविष्यतो नेपाल-

---

नोलीका पाठ–

१. —प्रभावगुणविस्तर————————न्दसुरासुराणाम् (।)

२. ——भुजगभोगवर——————दिव्यसुखानि नित्यम् (॥)

३. विशालो ४. स्थापनोत्सव--भहर्षाभिनम्रश्रीमानचरण–गुणो

७. (भूभु)जो यथार्हं प्रतिमान्यानुदर्शयत्यस्तु वः समधिगतमसुरासुरनमस्कृतात्य-

८. ... ... ... ... गुणसमधिरूढप्रसादवेगैरस्माभिराश्चर्यभूत-

९. ... ... (रू)पनिष्पादनयोग्यशिलाकर्षणम्प्रतिनियुक्तैर्भृङ्गार[1]ग्रामपाञ्चा-

१०. (लिकैः)... ... ... परया तुष्टया कशष्ठीविष्टिभारानयनप्रति–रा-

११. ... ... ... ... .. मप्रवेशेन प्रसादः कृतो माप्चोकवस्तुना य-

१२. ... त ... ... द्यस्ततोपि-पाञ्चा ... वप्रति ... ...या...गृ-

१३. हीतव्य-न्य--विचारणीयमत्वाधिकरण[2] ... णान्न ... क्ता

१४. ... मन्तरेण सर्वकार्याणामेवास्मरणमित्ये... प्रसादो दत्तश्चौरपरदारह-

१५. त्याराजद्रोहकापराधांश्च प्राप्नुवतो[3] यदचिन्त्यङ्कुर ...लोप्रतिबद्धगृहक्षेत्र-

१६. गवादिना स्वद्रव्येणैव[4] ...जयितव्यस्तद्दायादेभ्यो[5] नात्रापहारः कर्तव्य इत्ययं

१७. वः प्रसादो दत्त एवंवेदिभिरेतेष्वधिकारेष्वधिकृतैर्नैषामल्पापि बाधा विधे(या)

१८. ये पुनरेतदाज्ञासमतिक्रमेण प्रवर्तिष्यन्ते तान्वयन्न मर्षयिष्यामो येपि मदू-

१९. र्ध्वम्भूभुजो[6] भविष्यन्ति तैरप्येते धर्माधिकारोपयोगपरितोषकृताः प्रसादविशे-

२०. षाः स्वकृता इव मन्यमानैरस्माभिर्यथानुपाल्यन्ते तथैवानुपालनीया इति प्रति-

२१. मानना[7] संवत् ६५ फाल्गुनशुक्लद्वितीयायाम् दूतकश्चात्र श्रीयुवराजश्रीधरगुप्तः

# अनुवाद

ठूलो प्रभाव गुण मन्त्रशक्ति भएका मानिस(ऋषि मुनि),र देवता दैत्यहरूले पनि अत्तोपत्तो पाउन नसकिएका, पोखरीमा शेष नागको जीउमा सुतेका उहाँ विष्णुले तिमीहरूलाई सधैं दिव्य सुख दिऊन् ।

कल्याण होस् । मानगृह (दरबार) बाट पवित्र, उत्तम कर्मले गर्दा सम्पत्ति पाएका, लिच्छवि कुलका झण्डास्वरूप भएका, भट्टारक (गद्दीनशीन) महाराज श्रीभीमार्जुनदेव र उहाँको साथमा रही काम गर्ने, प्रशस्त वस्तु पुऱ्याइएका हुनाले उत्सव भएको हुँदा(प्रजाले) हर्षसाथ दुइ पाउ ढोगिएका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका श्रीविष्णुगुप्तले पछि हुने नेपालका राजाहरूलाई यथोचित सन्मान गरेर बाटो देखाउनुभएको छ । तपाईंहरूलाई थाहा होस् ।

---

नोलीका पाठ— –ीव

१. नृंङमरिग्राम २. ––व्य–न्य––विचारणीय– करण

३. ––वतोये – वि – ङ्गरग् ४. –– दि––द्रव्येणैव ५. ––देभ्यो

६. भूपा ७. प्रतिपालना

.......दैत्य, देवताहरूले नमस्कार गरिएका.....गुणले गर्दा अत्यन्त निगाह गर्नामा लागेका हामीले आश्चर्यको.....मूर्ति बनाउन लायकको ढुङ्गा तान्नामा लाएका भृङ्गार ग्रामका पाञ्चालिकहरूले (पाञ्चालीका सदस्य र अरू बासिन्दाहरूले) ...... ......ठूलो खुशीसाथ कशष्ठी विष्टि (झारा)को भारी ल्याउने काममा..... ......पस्न नपाउने गरी निगाह गरियो। माप्चोकका वस्तुद्वारा जसले.....पाञ्चालिक...........लिनु–पर्छ । ......... ..... विचार गर्नुपर्ने ठानी अधिकरण..... .....बाहेक अरू सबै मुद्दामामिलामा (सरकारी अधिकरणले) पस्न नपाउने गरी निगाह गरियो। चोरी गर्नु, अर्काकी स्वास्नी हर्नु, राजद्रोह गर्नु आदि अपराध गर्नेहरूको .....तिनकै अंशको घर खेत गाईवस्तु आदि सम्पत्ति जफ्त गर्नू, तिनका अंशियारहरूबाट यहाँ केही नहर्नू भन्ने निगाह तिमीहरूलाई गरिएको छ ।

यो कुरा थाहा पाई यी अधिकारमा खटिएका अधिकारीहरूले यिनीहरूलाई अलिकता पनि दुःख नदिनू। जसले यो आज्ञा नाघेर कामकार्बाइ गर्लान्, तिनलाई हामी सहनेछैनौं। हामीभन्दा पछि हुने राजाहरूले पनि धर्माधिकारको उपयोगले सन्तुष्ट भई गरिएका यी विशेष निगाहहरू आफ्नै जस्तै ठानी हामीले गरे जस्तै गरी थाम्नुहोला भन्ने अनुरोध छ ।

संवत् ६५ फाल्गुन शुक्ल द्वितीया। यस बातका दूतक (मार्फत) श्रीयुवराज श्रीधरगुप्त ।

## व्याख्या–

जलशयन नारायणमूर्ति बनाउन लायक ठूलो ढुङ्गा तानेर ल्याइदिएका हुनाले प्रसन्न भई विष्णुगुप्तले दक्षिणकोलीग्रामका बासिन्दालाई अनुग्रह गरिदिएको ठीक एक वर्षपछि सोही दिन भृङ्गारग्रामपाञ्चालीका बासिन्दाहरूलाई पनि अनुग्रह गरी यो सनद शिलापत्र गरिदिइएको हो । यस अभिलेखको उठानमा पनि जलशयन नारायणको स्तुति परेको छ । 'आश्चर्यभूत..... रूपनिष्पादनयोग्यशिलाकर्षणम्प्रतिनियुक्तं भृङ्गारग्रामपाञ्चालिकै........' भन्ने उल्लेख यस अभिलेखमा पनि परेको हुनाले भृङ्गारेश्वरभेकका बासिन्दाहरूले पनि बूढानीलकण्ठ नारायणमूर्ति बनाउन ढुङ्गा तानेर ल्याइदिएका रहेछन् भन्ने थाहा पाइन्छ ।

त्यस वेला सामूहिक रूपमा गर्नुपर्ने काम 'विष्टि' को रूपमा पाञ्चालीमार्फत जनताद्वारा गराइन्थ्यो । प्रत्येक पाञ्चालीको इलाका निश्चित हुन्थ्यो । यसो हुनाले भृङ्गारपाञ्चालीका बासिन्दाहरूले तानेर ल्याई निर्दिष्ट ठाउँसम्म पुर्‍याइदिएपछि दक्षिणकोलीग्राम पाञ्चालीका बासिन्दाहरूले त्यसलाई बूढानीलकण्ठस्थानतिर लगिदिएको बुझिन्छ। शायद उक्त दुइ पाञ्चाली-बाहेक अरू पाञ्चालीले पनि यसमा भाग लिएको हुन सक्छ ।

यस उपलक्ष्यमा भृङ्गारग्रामपाञ्चालीलाई र दक्षिणकोलीग्रामपाञ्चालीलाई गरिदिइएको अनुग्रहमा अलि फरक छ। दक्षिणकोलीग्रामपाञ्चालीलाई विशिष्ट गहना लाउन पाउने अधिकार

दिइएको छ। भृङ्गार ग्रामपाञ्चालीलाई भने सो अधिकार दिइएको छैन। यसबाट यी दुइ बस्तीको बीचमा रहेको अन्तरबारे हामी केही थाहा पाउँछौं। दक्षिणकोलीग्राम विकसित बस्ती थियो; यो द्रङ्ग बनेको थियो। यसो हुनाले यहाँका बासिन्दाहरू सम्पन्न हुँदै गएका थिए। उनीहरूको माग विशिष्ट गहना लाउन पाए हुन्थ्यो भन्ने थियो। यस कारण उनीहरूलाई त्यही अधिकार दिइयो। भृङ्गारग्रामपाञ्चालीको आर्थिक अवस्था त्यो तहमा थिएन। यस कारण उनीहरूको माग विशिष्ट गहना लाउन पाऔं भन्ने थिएन। बरू प्रशासनसम्बन्धी सुबिधा पाए हुन्थ्यो भन्ने उनीहरूको माग थियो। यसो हुनाले उनीहरूलाई स्वायत्तशासनसम्बन्धी अधिकार यस सनदपत्रमा दिइएको छ। पञ्चापराधसम्बन्धी मुद्दामा अपराधीलाई मात्र सजाय गर्ने; तिनका अंशियारलाई सजाय नगर्ने अनुग्रह भने दुवै पाञ्चालीलाई समान रूपमा गरिदिइएको छ।

गोधन– यस अभिलेखमा र माथि गएको यङ्गालहिटीको अभिलेखमा साधारण जनताको सम्पत्तिको प्रसङ्गमा घर खेतको साथै 'गोधन' को उल्लेख आएको छ। यताबाट लिच्छविकालमा गृहस्थीहरू गाई पाल्दथे भन्ने थाहा पाइन्छ। वस्तु भाउ पाल्नु पनि आम्दानीको एक बाटो हुँदा गाई आदिलाई 'धन' को रूपमा गणना गरिदिएको हो।

—~—

# चाँगुनारायणको विष्णुगुप्तको अभिलेख

चाँगुनारायणको मन्दिरमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३२ अङ्गुल लम्बा, ८ अङ्गुल चौडा छ। अहिले प्राप्त ढुङ्गामा संवत् तिथिमिति देखिदैन।

ऐश्वर्यधर शर्माको प्रबन्धले, चाँगुनारायणका पुजारीको सौजन्यले यसको प्रतिलिपि उतार्न पाइएको हो। म र ऐश्वर्यधर शर्मा मिली यो पाठ पढिएको हो।

## मूलपाठ

१. ॐ निर्भेदं यद्विकारैः समनुगतमिवोपाधिभेदोपचारा-
दज्ञानभ्रान्तिभाजामविषयमबहिःसाधनाधीनतृप्ति
२. भक्तिश्रद्धाप्रसादस्थिरकरणमनोभावनाभ्याससगम्य-
म्पायात्तद् भूतभर्तुः सकलगुणगणातीततत्त्वम्पदं वः ॥
३. याङ्कीर्तेः केतुभूतां सरितमिह पुरानीतवान्भोगवर्मा
द्वारे दोलासुरेन्द्रक्षितिधरशिखराध्यासिनः शार्ङ्गपाणेः
४. दृष्ट्वा कालेन जीर्णां विषमगिरितटेष्वध्वनो विप्रकर्षा-
त्संस्काराधानवित्तव्ययविधुरतया छिन्नवारिप्रवाहाम् ॥
५. भूयः शैलेन्द्रकुक्षेरमृतरसपयोवाहिनीमापशान्ता-
माकृष्यातिप्रयत्नात्सकलजनहिताधाननिम्नान्तरात्मा
६. राज्ञे श्रीजिष्णुगुप्तक्षितितलशशिने कल्पयामास पित्रे
— ा ... प्रणालीद्वितय ... ... विष्णुगुप्तः ॥

## अनुवाद

उपाधिभेदले गर्दा विकार लिएको जस्तो छ तापनि जो निर्विकार छ; अज्ञान भ्रान्ति भएकाहरूको

लागि जो विषय नै छैन; जसलाई बाहिरी साधनाले तृप्त पार्न सकिंदैन; सारा गुणभन्दा बाहिरको तत्त्वरूपको जो छ; भक्ति श्रद्धा र सफापनले स्थिर भएको इन्द्रिय र मनोभावनाको अभ्यासले मात्र जान्न सकिने जो छ; त्यस्तो विष्णुपदले तिमीहरूको रक्षा गरोस् ।

उहिले भोगवर्मालि यहाँ दोलाशिखरस्वामी (चाँगुनारायण) को द्वारमा कीर्तिको झण्डास्वरूप भएको जुन खोला (धारा) ल्याउनुभएको थियो; केही कालपछि टाढा बाटो हुनाले र मरम्मतको लागि खर्चको प्रबन्ध नहुनाले अडचाङ खङ्चाङ पहाडको फेदमै पानीको मुहान टुट्न गई जीर्ण भएको देखेर विष्णुगुप्तले पृथ्वीतलका चन्द्रमा जस्ता आफ्ना बुवाको कल्याण होस् भनी फेरि पहाडको फेदैदेखि ठूलो प्रयत्नले तानेर ल्याई अमृत जस्तो मीठो सफा पानी आउने. . . . . दुइटा धारा बनाउन लाउनुभयो ।

व्याख्या–

नेपालका वैष्णव सम्प्रदायका देवतामा चाँगुनारायणको प्रमुख स्थान रहेको थियो । यसो हुँदा यहाँ श्रद्धालु भक्तजनहरू दर्शन पूजनको लागि गइरहन्थे; यहाँ मेला पनि लाग्थ्यो; चाँगु-नारायणस्थान 'वनदुर्ग' को रूपमा रहेको हुनाले यसको आसपासमा केही बस्ती पनि थिए । यसो हुनाले यहाँ पानीको खाँचो हुनु स्वाभाविक थियो । यस्तै खाँचोलाई बुझेर भोगवर्माले (अंशुवर्माका भानिजले) निकै टाढादेखि पानीको मुहान मिलाई यहाँ चाँगुनारायणको मन्दिरको ढोकैनिर धारा बनाइदिएका थिए; यसरी कीर्ति राखेर गएका थिए । तर केही कालपछि पानीको मुहान बन्द हुँदा सो धारा बिग्रिएछ । अनि विष्णुगुप्तले फेरि धारा बनाई यो अभिलेख राख्न लाएका हुन् । विष्णुगुप्तको वैष्णव धर्मप्रति बढी झुकाव थियो । यसो हुनाले चाँगुनारायणको धाराको पुनर्निर्माणतिर उनको ध्यान गएको बुझिन्छ† ।

अंशुवर्माले तयार गरेको अवस्थाबाट जिष्णुगुप्तहरूले पूरा फाइदा उठाएका थिए; उनीहरू लिच्छविराजासंगै संयुक्त राजा हुन पुगेका थिए भन्ने कुराको चर्चा पहिले गरिसकेको छ । यस अभिलेखले पनि उक्त कुराको पुष्टि गरेको छ । यहाँ जिष्णुगुप्तलाई स्पष्ट रूपमा 'राजा' भनिएको छ । सनदपत्ररूपका अरू अभिलेखमा यति स्पष्ट रूपमा राजा भनिएको पाइंदैन । यद्यपि प्रसङ्गबाट उक्त कुरा बुझिन्छ । यस अभिलेखले चाहिं जिष्णुगुप्तहरूको अवस्थालाई अझ स्पष्ट पारेको छ ।

यस अभिलेखको संवत् भएको भाग प्राप्त भएको छैन । तर जिष्णुगुप्तको नाउँमा विष्णुगुप्तले धाराको पुनर्निर्माण गराएको कुरा यसमा परेको हुनाले यहाँनिर यो अभिलेख दिइएको हो ।

यस अभिलेखबाट वैष्णव धर्मको दार्शनिक पक्षको केही झलक पाइन्छ । साथै कविताको दृष्टिले यो अभिलेख प्रौढ छ । इत्यादि कारणले गर्दा यो अभिलेख तात्कालिक केही कुरा बुझ्न उपयोगी रहेको छ ।

–★–

† जयस्थितिमल्लले पनि वि. सं. १४४२ मा चांगुमा धारा बनाएका थिए । गोपालवंशावलीमा यसको वर्णन परेको छ । (गो. वं. ६२ पत्र हेर्नुहोस्)

# टेबहालको अभिलेख

काठमाडौं टेबहालमा दक्षिणपट्टि पर्खालमा एउटा जलद्रोणी रहेको छ। त्यसैमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १३ अङ्गुल लम्बा, ३ अङ्गुल चौडा छ। यहाँ संवत् छैन।

संस्कृत-सन्देश २।१-२-३ मा घनश्याम + ऐश्वर्यधर + गौतमवज्र + कुमारधरद्वारा यो छापिएको छ। नोलीद्वारा ६३ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. रत्नत्रयम्भगवदार्य्यमुदारवर्ण्ण मुद्दिश्य सत्वपरिभोगनिमित्तमेतो
२. कूपञ्जलद्रवणिकाञ्च शुभाय पित्रोः शाक्यो यतिर्विहितवान्प्रियपालनामा

## अनुवाद

(आफ्ना) आमा बाबुको कल्याण होस् भनी प्रियपाल नाउँ भएका शाक्य भिक्षुले उज्ज्वल कीर्ति भएका उहाँ ठूला रत्नत्रय (बुद्ध, धर्म, सङ्घ) लाई लख गरेर प्राणीहरूको उपभोगको निमित्त यो कूवा र टुटेधारा बनाए।

**व्याख्या**–

यस अभिलेखमा संवत् पनि छैन; राजाको नामोल्लेख पनि छैन। यस कारण यसको समय निश्चित गर्ने आधार यसको लिपि मात्र रहेको छ। यसको लिपि अंशुवर्मा र नरेन्द्रदेवको बीचको ताकाको छ। यस कारण यसलाई यहाँ राखिएको हो।

जनतालाई दैनिक उपभोगको लागि आवश्यक कुरामध्ये पानी पनि एक हो। यस कारण

जनहितकार्य गरी पुण्य कमाउन चाहनेहरू धारा आदि बनाउन लाउँथे। मुहानदेखि नै विशेष प्रबन्ध गरी पानी ल्याउनुपर्ने हुनाले सामान्य व्यक्तिले प्रणाली (धारा) बनाउन सक्नु सम्भव थिएन। साधारण उपयोगको लागि 'जलद्रोणी' सजिलो र किफायत पनि हुनाले 'जलद्रोणी' लोकप्रिय बन्यो। लिच्छविकाल र मध्यकालमा बनेका अनेक जलद्रोणी हाम्रो यहाँ अहिलेसम्म भेट्टिन्छन्। प्रियपाल शाक्य भिक्षुले बनाउन लाएको जलद्रोणी टेबहालमा अहिले छँदैछ। यस ताका भारतमा पनि 'जलद्रोणी' प्रचलित थियो। कवि बाणले कादम्बरीमा जलद्रोणीको वर्णन ठाउँठाउँमा गरेका छन्।

बौद्ध धर्मका प्रवर्तक भगवान् बुद्ध शाक्य वंशका थिए। यस कारण बौद्ध समाजमा शाक्य वंशका अरू व्यक्तिको पनि केही प्रतिष्ठा थियो। शाक्य वंशका व्यक्ति भिक्षु बन्दा उनलाई अलि विशिष्ट दृष्टिले हेरिन्थ्यो तथा तिनीहरू शाक्यभिक्षु कहलाएका थिए। यस अभिलेखबाट भिक्षु प्रियपाल शाक्यवंशका थिए भन्ने थाहा पाइन्छ। चाबहिलको अर्को अभिलेखमा पनि शाक्य–भिक्षुको उल्लेख आएको छ। मध्यकालका अभिलेखमा पनि शाक्य वंशजहरूको अनेक उल्लेख पाइन्छ। यसबाट लिच्छविकालमा यहाँ शाक्यहरूको बसोबास थियो भन्ने थाहा पाइन्छ। बुद्धको अन्तिम समयतिर कपिलवास्तुका निकै शाक्यहरू यहाँ पसेको वर्णन बौद्ध वाङ्मयमा पाइन्छ।

-★-

# चाबहिलको अभिलेख

चाबहिलको प्रसिद्ध बौद्ध चैत्यको पश्चिम भागमा एक मण्डलाकार ढुङ्गामा यो अभिलेख कुँदिएको छ। यसको छेउको अलिकता भाग खण्डित छ। यहाँ अहिले देखिने अभिलेख कुँदिएको भाग १६$\frac{1}{2}$ अङ्गुल लम्बा, १ अङ्गुल चौडा छ। यहाँ संवत् देखिंदैन।

'पूर्णिमा' २४ अङ्कमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. देयधर्मोयं शाक्यभिक्षोर्बन्धुभद्रस्य मातापितृपूर्वङ्गमं कृत्वा सर्वसत्वानां...

## अनुवाद

.......आमा बाबुलगायत सारा प्राणीको......लागि शाक्यभिक्षु बन्धुभद्रले गरेको दान-धर्म यो हो।

**व्याख्या–**

एक पङ्क्तिको यस अभिलेखमा संवत्, राजाको नाउँ परेका छैनन्। शाक्यवंशका भिक्षु बन्धुभद्रले दानधर्म गरी यो अभिलेख कुँदाएका हुन्। धर्मधातु मण्डल मात्र स्थापना गरिएको हो कि अरू दानधर्म पनि गरिएको थियो; अभिलेख खण्डित हुँदा बुझिंदैन। लिच्छविकालमा शाक्यहरू यहाँ थिए भन्ने कुराको संकेत यस अभिलेखले पनि गर्छ। यस विषयको चर्चा माथि पनि गरिसकेको छ। नेपालमा महायानी बौद्ध धर्मबारे अध्ययन गर्न चाहनेहरूलाई यस अभिलेखले पनि तात्कालिक अलिकता कुरा बुझ्न मदत गर्छ।

–★–

# ललितपुर यम्पिबहिको अभिलेख

ललितपुर करुणचोक यम्पिबहिमा रहेको जलद्रोणी जस्तो ढुङ्गामा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग २० अङ्गुल लम्बा, २ अङ्गुल चौडा छ। यहाँ संवत् छैन।

नोलीद्वारा ६४ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ॐ महाप्रतिहारवार्त्तसुजातप्रभ[१]विहारस्य

## अनुवाद

ॐ। महाप्रतिहार वार्त्त सुजातप्रभविहारको

**व्याख्या–**

एक वाक्य पनि पूरा नभएको, संकेतरूपको यस अभिलेखको विषय अलि स्पष्ट छैन। तर जलद्रोणीमा यो अभिलेख कुँदिएको हुँदा विहारवासीहरूलाई पानीको सुबिधा मिलाइदिई यो अभिलेख कुँदाइएको हो भन्ने थाहा पाइन्छ।

लिच्छविकालको शासनव्यवस्थामा प्रतिहारको ठूलो स्थान थियो; राजा र प्रजाको सम्बन्ध प्रतिहारमार्फत हुन्थ्यो; प्रतिहारहरूमा मुख्य महाप्रतिहार कहलाउँथे; तिनी राजाका हजुरिया र अङ्गरक्षक पनि हुन्थे। यसो हुनाले महाप्रतिहार त्यस वेला महत्त्वपूर्ण सरकारी पद थियो। राजाद्वारा विशेषरूपमा वृत्ति (जागीर) पाएकाहरू 'वार्त्त' कहलाउँथे। यसरी महाप्रतिहार वार्त दुवै पद पाएका "सुजातप्रभ' त्यस वेलाका प्रतिष्ठित सरकारी मानिस थिए भन्ने देखिन्छ। यिनको बौद्ध धर्ममा श्रद्धा रहेको देखिन्छ। यसैले आफ्नै नाउँमा विहार बनाउन लाए। लिच्छविकालमा यहाँ बौद्ध धर्म फस्टाउनामा यस्तै दानपतिहरूको निकै हात रहेको थियो।

—ʌʌ—

नोलीको पाठ– १. सुजातप्रभु–

# भन्सारचोकको नरेन्द्रदेवको अभिलेख

ललितपुर–दरबारको भन्सारचोकमा यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको अभिलेख कुँदिएको भाग २१ अङ्गुल लम्बा, १७ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र वृइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ६७ छ।

संस्कृत–सन्देश २।१–२–३– मा ऐ. शि. बाबुराम आचार्य श्रीगुरु पं. नयराज पन्तद्वारा यो छापिएको छ। नोलीद्वारा ६७ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. (ॐ स्वस्ति) कैलासकूटभवनाद्भुवनप्रकाशाज्ज्योत्स्नावमृष्टहिमवच्छि-
२. (खराग्र) दीप्तेः। आसागरप्रसृतशुभ्रयशोध्वजानां राज्ञाङ्कुलाम्बरशशी भु-
३. (वि लि) च्छवीनाम्॥ वल्गद्वीरपदातिकुन्तविशिखप्रोताश्वनागाकुले शक्तया
४. (न्यस्पृहणी) यया रणमुखे संज्ञावशेषान् द्विषः। कृत्वा लोकहितोद्यमप्रभ–
५. (वया) कीर्त्या दिशो भासयन्नन्योन्याविहतान् प्रजासु विदधद्धर्मार्थकामान्मुदा
६. भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातो भट्टारक-
७. महाराजाधिराजश्रीनरेन्द्रदेवः कुशली इहत्यान्भूमिभुजो वर्तमाना-
८. न्भविष्यतश्च प्रतिमान्यानुदर्शयति विदितमस्तु भवतां कस्मिंश्चिद्वस्तुन्युप-
९. कृतमवेत्य तत्प्रत्युपकारोत्कण्ठितमतिभिरस्माभिर्यूपग्रामद्रङ्गस्य स-
१०. वंतलसहितस्य भट्टमाप्चोकाधिकारयोः प्रा(ब)ल्यादवश्यं जनस्य महती
११. पीडेत्यनयोरेवाधिकारयोरप्रवेशेन प्रसादः कृतस्तदेवं विदितार्थैरे-
१२. तदधिकारद्वयाधिकृतैरन्यैर्वास्मत्पादप्रतिबद्धजीवनैरल्पापि बाधा न का-
१३. र्या यस्त्वेतामाज्ञामनादृत्यान्यथा कुर्यात्कारयेद्वा तस्यावश्यमस्मत्तस्तीव्रतरो

१४. दण्डः पतिष्यत्यस्मदूर्ध्वम्भाविभिरपि भूपतिभिस्सुकृतकरणैकसाधना-
१५. मूर्जितामप्रतिजन्म राज्यश्रियमनुबुभूषद्भिरिह कीर्त्यायुरारोग्यकल्याण-
१६. राज्यश्रीसमुदयमीहमानैः प्रेत्य च शाश्वतन्दिव्यमिच्छद्भिः सुखमनु-
१७. भवितुं दिक्षु चाभितः शरदाप्यानोडुराजामलकिरणमालावभास्यमानप्रालेयम-
१८. हीधरोत्तुङ्गशिखरामलं यशस्तन्वद्भिराचन्दार्कं स्वप्रतिपादितानां शासनानां स्थिति-
१९. मिच्छद्भिः पूर्वभूपतिषु सगौरवैर्भू त्वेयमाज्ञा सम्यक्प्रतिपालनीयापि चैत-
२०. त्प्रत्युपकृतन्न बहुमन्यमानैरस्माभिः पुनरप्येषां पोटलजाधिकारम्प्रतिमुच्य
२१. प्रसादीकृतमेवमर्थं विदित्वैतदधिकृतैर्न कैश्चिदेतद्गता पीडा कर्तव्या यस्तु कु-
२२. र्यात्सोस्माभिर्न मृष्यते तथैव भूपतिभिरप्यनुमोदनीयं चिरस्थितये चास्य
२३. प्रसादस्य शिलापट्टकशासनेन प्रसादः कृत इति स्वयमाज्ञा दूतकश्चात्र
२४. (कुमारा)मात्यप्रियजीवः संवत् ६७ पौषशुक्लपञ्चम्याम्

# अनुवाद

कल्याण होस्। जूनले टल्केको हिमालयको टाकुरो मैं झलझल गर्ने, संसारमा प्रसिद्ध कैलासकूट भवनबाट समुद्रसम्म सफा कीर्तिरूपी ध्वजा (झण्डा) फर्फराएका लिच्छवि राजाहरूको कुलमा जन्मेका, जोशिएर अघि बढेका वीर पैदल सिपाहीहरूका भाला र बाणहरूले घाइते भएका हुँदा हात्ती घोडाहरू तर्सिएर छ्यासब्यास भएको लडाईंको मोर्चामा अरूको लागि लोभ लाग्दो पराक्रमद्वारा शत्रुहरूलाई सखाप पारीकन दुनियाँको भलो गर्नुतिर लागेका, त्यताबाट भएको कीर्ति दिशाको छेउछेउसम्म फैलिएका, दुनियाँमा धर्म अर्थ कामसम्बन्धी कुरालाई परस्परमा बाधा नपुऱ्याउने पारीकन आनन्दसंग चलाउने भएका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) बाट अनुग्रह पाएका, गाथमा आराम रहेका, भट्टारक (गद्दीनशीन) महाराजाधिराज श्रीनरेन्द्रदेवबाट अहिलेका र पछि हुने यहाँका राजाहरूलाई सन्मानसाथ बाटो देखाउनुभएको छ। तपाईंहरूलाई थाहा होस्।

कुनै कुरामा उपकार गरेको थाहा पाई त्यसको बदलामा उपकार गर्न चाहेर हामीबाट सबै तलसहितको यूपग्रामद्रङ्गमा भट्ट र माप्चोकको अधिकार लागू गरी राख्दा जनतालाई अवश्य पनि ठूलो मर्का परिरहेको छ भनीकन यी दुइ अधिकार झिकिदिएर निगाह गरिएको छ। त्यस कारण यो कुरा थाहा पाई यी दुइ अधिकारका अधिकारीहरूले वा हाम्रोतर्फबाट जीविका चलाउने अरूहरूले अलिकता पनि दुःख नदिनू। जसले यो आज्ञा नटेरेर अन्यथा गर्ला वा गराउला; त्यसउपर हामीबाट कडा सजाय गरिनेछ।

हामीभन्दा पछि हुने राजाहरूले सत्कर्मद्वारा आर्जेको राज्यलक्ष्मी जन्मैपिच्छे पाउने इच्छा राखेर इहलोकमा कीर्ति आयु आरोग्य कल्याण र राज्यलक्ष्मीको बढिबढाउ होस् भन्ने चाहेर परलोकमा पनि स्थायी स्वर्गीय सुख अनुभव गर्न खोजीकन चारै दिशामा शरद् ऋतुको पूर्ण चन्द्रमाको सफा जूनले टल्केको हिमालय पहाडको अग्लो टाकुरो जस्तै सफा कीर्ति फैलाई चन्द्र सूर्य रहेसम्म आफूले बाँधेका स्थितिबन्धेजका सनद कायम रहून् भन्ने चाहीकन अघिका राजाहरूको कदर गरी यो आज्ञा राम्ररी पालना गर्नुपर्छ ।

फेरि यत्ति उपकार गरेर चित्त नबुझेको हुनाले हामीबाट यिनीहरूलाई पीटल्जा–अधिकार पनि झिकिदिई निगाह गरिएको छ । यो थाहा पाई यसका कुनै अधिकारीहरूले पनि यस विषयमा दुःख नदिनू । जसले दुःख दिन्छ; त्यसलाई हामी सहनेछैनौं । त्यसै गरी राजाहरूले पनि यो थाम्नू । यो निगाह धेरैकालसम्म कायम रहोस् भनीकन सनद शिलापत्र गरी निगाह गरिएको छ । यो मेरो आफ्नै आज्ञा हो ।

यस बातका दूतक (मार्फत) कुमारामात्य प्रियजीव । संवत् ६७ पौष शुक्ल पञ्चमी ।

**व्याख्या–**

**द्वैतशासनको अन्त–**

अंशुवर्माको अवसानपछि राजा उदयदेव धेरै वर्ष यहाँ टिक्न सकेनन् । उनले आत्मरक्षाको लागि भोटमा शरण लिनुपरेको थियो । उदयदेवका छोरा नरेन्द्रदेव हुन् । पशुपतिको जयदेवको अभिलेखबाट यो कुरा थाहा पाइन्छ । नरेन्द्रदेवको बाल्यकाल विदेशमै बितेको देखिन्छ । तर नरेन्द्रदेव साहसी र योग्य व्यक्ति भई निस्के । यसैले आफ्नो पुर्ख्यौली राज्याधिकार फिर्ता लिन नरेन्द्रदेवले उद्योग गर्न थाले । यसमा नेपाली जनताले नरेन्द्रदेवको साथ दिए । यस काममा भोट–सरकारबाट पनि उनले मदत पाए । यसरी पूरा तयारी गरी उनी अगाडि बढे; भीमार्जुनदेव विष्णुगुप्तको सरकार हटाउन उनी सफल पनि भए । यसरी वसन्तदेवको अन्तिम समयदेखि भने जस्तै शुरू भएको द्वैतशासनको अन्त नरेन्द्रदेवको हातबाट भयो ।

संवत् ६५ (वि. सं. ६९८) सम्मको भीमार्जुनदेव विष्णुगुप्तको अभिलेख पाइन्छ । संवत् ६७ (वि. सं. ७००) देखि नरेन्द्रदेवका अभिलेख पाइएका छन् । यसरी वि. सं. ६९८ र ७०० को बीचमा नरेन्द्रदेवले यो क्रान्ति गरेका थिए भन्ने देखिएको छ । वि. सं. ७०० मा चीनिया राजदूत वाङयुन्चे यहाँ आउँदा गद्दीमा नरेन्द्रदेव थिए । यताबाट पनि नरेन्द्रदेवको राज्यारोहणको समयको अन्दाज गर्न सकिन्छ ।

नरेन्द्रदेवले ३६ वर्षभन्दा बढी लामो कालसम्म स्वतन्त्र रूपमा स्वयं शासन चलाए । यस बीच

कुनै सरकारी ठूला कर्मचारीले टाउको उठाउन सकेनन् । अंशुवर्मले गुप्त आभीरहरूको हातबाट शासनाधिकार खोसेर लिएका थिए तापनि उनीहरूलाई सर्वात्मना पन्छाउन सकेका थिएनन् । एक थरी गोमीहरू त उनका विश्वासप्राप्त व्यक्तिका रूपमा रहेका थिए । तर अब नरेन्द्रदेवको उदयपछि आभीरहरूको शक्ति निकै गल्यो । फेरि उनीहरूले टाउको उठाउन सकेनन् ।

पहिले लिच्छवि राजाहरूले 'महाराज' पद मात्र लिएका थिए । अन्तिम समयमा अंशुवर्मा 'महाराजाधिराज' कहलाए । अंशुवर्मापछि गद्दीमा बसेका उदयदेव पनि 'महाराजाधिराज' कहलाए । तर उनीपछिका ध्रुवदेव भीमार्जुनदेव 'महाराजाधिराज' कहलाएनन् । उनीहरूको पद 'महाराज' मात्र रह्यो । गुप्त आभीरहरूलाई हटाई शासनाधिकार आफ्नो हातमा लिएपछि नरेन्द्रदेवले चाहिं 'महाराजाधिराज' पद नै लिए । यसपछि उनका उत्तराधिकारीहरू पनि महाराजाधिराज नै कहलाए ।

यसरी स्वयं राम्ररी शासन चलाउने प्रसिद्ध लिच्छवि राजामा मानदेवपछि नरेन्द्रदेव नै पर्दछन् । यस कुरामा नरेन्द्रदेवले आत्मगौरव देख्नु स्वाभाविक थियो । यसै हुँदा नरेन्द्रदेवको यस अभिलेखमा र अरू अभिलेखमा लिच्छविवंशको गौरव गाइएको पाइन्छ । नरेन्द्रदेवको उदयले लिच्छविराजवंशको गौरव बढेको हुनाले पशुपतिको अभिलेखमा जयदेवले उनको विशेष वर्णन गराएका छन् ।.

यस अभिलेखको उठानमा ठूलो लडाईंको मैदानमा शत्रुहरूलाई सखाप पारेको चर्चा परेको छ । यसबाट नरेन्द्रदेवले आभीर गुप्तहरूलाई हटाउन ठूलो लडाईं लड्नुपरेको थियो भन्ने संकेत पाइन्छ । यस संघर्षमा यूपग्रामद्रङ्ग र त्यसको अन्तर्गत रहेका अरू बस्तीका जनताले नरेन्द्रदेवको साथ दिएका थिए । यो कुरा यस अभिलेखबाट थाहा पाइन्छ । यहाँ 'तिमीहरूले मेरो उपकार गरेका हुनाले त्यसको बदलामा मैले यो उपकार गरिदिएको छु' भन्ने कुरा परेको छ । उपर्युक्त कुरालाई लक्ष्य गरी त्यसो भनिएको हो भन्ने कुरा प्रसङ्गबाट थाहा पाइन्छ ।

लिच्छविकालमा जनता निकै संघट्टित थिए । यसो हुनाले शासकहरूलाई जनता सन्तुष्ट पारी राख्नु आवश्यक थियो । रविगुप्त, भौमगुप्त, अंशुवर्मा, जिष्णुगुप्त, विष्णुगुप्तहरूले जनतालाई हात लिन स्वायत्तशासनसम्बन्धी अधिकार जनतालाई सुम्पेको कुराको चर्चा माथि गरिसकेको छ । शासनाधिकार आफ्नो हातमा आउने बित्तिकै नरेन्द्रदेवले पनि त्यही काम गर्नुपर्‍यो । लोकको हित हुने काम गरिनेछन् भन्ने घोषणा उनले यस अभिलेखमा गरेका छन् तथा भट्ट माप्चोक पीटलजा अधिकरणले गर्ने कामसम्बन्धी अधिकार स्थानीय जनतालाई सुम्पेको कुरा यसमा परेको छ ।

यसरी लिच्छविकालका शासकहरूले स्वशासनसम्बन्धी अधिकार जनतालाई सुम्पंदै जांदा यसको परिणामस्वरूप मध्यकालसम्म पुग्दा अनेक सरकारी अधिकरणको स्वतः आवश्यकतै रहेन

र मध्यकालको शासनव्यवस्था प्रायः अधिकरणविनाको जस्तो हुन पुग्यो। मध्यकालमा सरकारी अधिकरणहरूको विशेष उल्लेख नपाइनामा यो कुरा प्रमुख कारण रहेको छ।

लिच्छविकालको सेनामा हात्ती, घोडा चढी लड्ने सैनिक पनि हुन्थे भन्ने कुरा यस अभिलेखबाट पनि थाहा पाइन्छ। पैदल सैनिक त प्रशस्त थिए। त्यस वेला प्रचलित हतियारमध्ये धनुर्बाण, भाला आदि थिए भन्ने पनि यस अभिलेखबाट थाहा पाइन्छ।

-★-

# यङ्गालहिटीको नरेन्द्रदेवको अभिलेख

काठमाडौं लगनटोल यङ्गालहिटीमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३२ अङ्गुल लम्बा, २१ अङ्गुल चौडा छ। यसको शिरोभागमा बीचमा चक्र र दुइतिर शङ्ख अङ्कित छन्। यहाँ संवत् ६७ छ§।

नोलीद्वारा ६६ संख्याको रूपमा यो छापिएको छ।'पूर्णिमा'२३ अङ्कमा मैले पनि यो छपाएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति कैलासकूटभवनाच्छरदाप्यानशशाङ्कामलमयूखनिकरावभास्यमानहिमव-
२. दुत्तुङ्गशिखरावदातयशोमालावतंसिताशेषदिङ्मण्डलो य एष शौर्यनीतिगुणैर्गुण –
३. रकलितैरात्मानमुद्भासिभिः शक्त्या बाहुबलं मतिं स्मृतिमतीं शास्त्रागमैर्भूरिभिः, मर्यादा स्थि
४. तिर्भिर्दिशोपि यशसा राज्यश्रिया मेदिनीर्जात्या लिच्छविराजवंशमनघं योलङ्कुरोत्युच्चकैः ॥
५. भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातो भट्टारकमहाराजाधिरा-
६. जश्रीनरेन्द्रदेवः कुशली भविष्यतो नेपालराजा[१]न्सम्यक्प्रतिमान्यानुदर्शयति विदित–

§ नोलीले यहांको संवत्को अङ्क ६६ छपाउनुभएको छ। तर शुद्ध पाठ ६७ हो।
नोलीको पाट– १. नेपालराज्ञः

७. मस्तु भवतां यथा दक्षिणकोलीग्रामद्रङ्गस्य सर्वतलग्रामैः सहितस्य पूर्वराज–
भिर्मानेश्व-

८. रे (भु) वनेश्वरदेवकुलं यथाकल्पिताग्रहारादिप्रत्यायं पालनोपभोगाय
प्रति (पा) दितं

९. केनापि च हेतुना श्रीभूमगुप्तेनाक्षिप्तं [१]राजकुलभोग्यमभूत् तदिदमधुना
पूर्वमर्यादा–

१०. स्थितिप्रवर्तनादृतमनोभिः सततञ्च [२]प्रजानां श्रेयसे स्यैव सर्वतलग्रामसहि-

११. तस्य दक्षिणकोलीग्रामद्रङ्गस्य तदेव भुवनेश्वरदेवकुलं यत्र तत्रावस्थितक्षेत्रवा-

१२. टिकागृहपण्याकारै[३]र्य्यथापूर्वभुज्यमानस्तेमभिस्त्रिभिः कोङ्कोबिल्वमार्ग
हुस्प्रिन्दुङग्रामैरेभि-

१३. रग्रहारत्वेनोत्सृष्टै श्चाटभटाप्रवेशैः सर्वकोट्टमर्यादास्थितिमद्भिश्च सहितं
प्रतिमुक्त–

१४. मित्येवञ्च विदितार्थैरप्येतदग्रहारत्रयनिवासिभिर्यथाकल्पितं पिण्डकादि-
प्रत्यायम–

१५. स्योपनयद्भिरकुतोभयैराज्ञाश्रवणविधेयैर्भवितव्यं भूयोप्यनेनैव न्यायेन शीताटयां

१६. शिवगलदेव (कुलं) यथापूर्वकल्पितक्षेत्रपिण्डकादिप्रत्यायम्पालनोपभोगायैव
सर्वत-

१७. ल (ग्रा) मसहितस्यैवास्य द्रङ्गस्य (प्र) ति (मु) क्तमेवंविदितार्थैर्न ही–
नानवमन्यमानैरन्योन्य-

१८. प्रीतिदृढीकृतस्नेहानुबन्धै[४]... ... पुरुषैस्तलसमेतैस्तदुभयमेव[५] प्रति–

१९. पालयद्भिः सततमस्म... वर्तितव्यत्र केश्चिदस्मत्पादोपजीविभिरन्यैर्वा
स्वल्पा–

२०. पि पीडा कार्य्या यस्त्वेतामाज्ञामुल्लङ्घ्यान्यथा कुर्यात्कारयेद्वा तस्य वयं
राजशासनव्यतिक्रम–

२१. कारिणस्तीव्रं दण्डम्पातयिष्यामो भाविभिरपि भूपतिभिरिह यशःकल्याणा-
युरारोग्यराज्य–

---

नोलीका पाठ– १. राजतल २. . . . . . . . .
३. धण्याकारै
४. प्रीतिवृद्धिकृतस्नेहानुग्रहै ५. पुरुषैस्त . . . . . . . त्रयमेव

२२. श्रियां वृद्धिमीहमानैरमुत्र च स्वर्गे शाश्वतीं स्थितिमिच्छद्भिः पूर्वराजकृतेषु प्रसादेषु पा–
२३. लनादृतैर्भाव्यञ्चिरस्थितये चास्य प्रसादस्य शिलापट्टक(शासनेन प्रसादः) कृत इति
२४. समाज्ञापना दूतकश्चात्र कुमारामात्यप्रियजीवः संवत् ६७ भाद्रपदशुक्ल द्वितीयायाम्

## अनुबाद

कल्याण होस्। कैलासकूट भवन (दरबार) बाट शरद् ऋतुको पूर्ण चन्द्रमाका सफा किरणहरूले (जूनले) सुहाएको हिमालयको अग्लो टाकुरो जस्तो सफा कीर्तिद्वारा सारा दिशाहरू झलमलल पारेका उहाँ नीतिद्वारा शुन्याईंलाई सिंगार्नुहुन्छ; असंख्य उज्ज्वल गुणहरूद्वारा आफूलाई सिंगार्नुहुन्छ; शक्तिद्वारा बाहुबललाई सिंगार्नुहुन्छ; स्मरणशक्ति भएको बुद्धिलाई अनेक शास्त्र आगमहरूले सिंगार्नुहुन्छ; स्थितिबन्धेजद्वारा मर्यादा (रीतिस्थिति) लाई सिंगार्नुहुन्छ; कीर्तिद्वारा दिशाहरूलाई सिंगार्नुहुन्छ; राज्यलक्ष्मीद्वारा पृथ्वीलाई सिंगार्नुहुन्छ; जातिद्वारा पवित्र ठूलो लिच्छवि–राजवंशलाई सिंगार्नु हुन्छ; यस्ता, भगवान् पशुपतिनाथको पाँउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, भट्टारक (गद्दीनशीन) महाराजाधिराज श्रीनरेन्द्रदेवले पछि हुने नेपालका राजालाई राम्ररी सन्मान गरी बाटो देखाउनुभएको छ। तपाईंहरूलाई थाहा होस्।

अग्रहार (बिर्त्ता)आदिको आयस्ता निश्चित गरिएको मानेश्वरको भुवनेश्वर देवमन्दिर सबै तल र ग्रामसहित दक्षिणकोलीग्रामद्रङ्गलाई हेरचाह गर्न र चलनचलती गर्न पाउने गरी सुम्पेको रहेछ; कुनै कारणवश श्रीभूमगुप्तबाट हरिदा सरकारद्वारा आफैं चलाइने गरिराखेकोमा पहिलेदेखि चलेर आएका रीतिस्थितिहरू साबिकबमोजिम चलून् भनी चाहेर हामीबाट अहिले प्रजाको कल्याणको लागि सबै तल र ग्रामसहित भएको दक्षिणकोलीग्राम द्रङ्गलाई नै सो भुवनेश्वर देवमन्दिर सुम्पिएको छ । साथै यता-उता रहेका खेत बारी घर जिनिससहित भएका साबिकबमोजिम भोग चलन गरिआएका सीमा भएका कोङको बिल्वमार्ग हुस्प्रिन्दुङ यी तीन बिर्त्तारूपका ग्रामहरू पनि चाटभटले पस्न नपाउने गरी, कोट्टसम्बन्धी सबै स्थितिबन्धेजले युक्त गरी सुम्पिएका छन् ।

यो कुरा थाहा पाई यी तीन बिर्त्ता जग्गाका बासिन्दाहरूले तोकिएअनुसारका कुत आदि आयस्ता यसलाई (दक्षिणकोलीग्रामद्रङ्गलाई) बुझाई निर्धक्क भई लाए अह्राएको काम गरी रहनू ।

फेरि यसै गरी शीताटीमा पहिलेदेखि खेत, कुत आदि आयस्ता निश्चित भएको शिवगल् देवमन्दिर हेरचाह गर्न र चलनचलती गर्न पाउने गरी सबै तल र ग्रामसहित भएको यही द्रङ्गलाई सुम्पिएको छ ।

यो कुरा थाहा पाई सानालाई नदबाई परस्परमा प्रेमपूर्वक दया माया गरी.....तीनै कुराको पालना गरी सधैं हाम्रो.......रहनुपर्छ। हाम्रो तर्फबाट जीविका गर्नेहरूले वा अरू कसैले पनि अलिकता पनि दुःख नदिनू। जसले यो आज्ञा नाघेर अन्यथा गर्ला वा गराउला; राजाको हुकूम नमान्ने त्यसलाई हामी कडा सजाय गर्नेछौं। पछि हुने राजाहरूले पनि इहलोकमा कीर्ति, कल्याण, आयु आरोग्य र राज्यलक्ष्मीको बढिबढाउ होस् भन्ने चाहेर परलोक स्वर्गमा पनि स्थिर भई रहन चाहेर अधिका राजाहरूले गरिदिइएका निगाह आदरपूर्वक थाम्नुपर्छ। यो निगाह धेरै कालसम्म कायम होस् भन्नाको लागि सनद शिलापत्र गरी निगाह गरिएको छ। यस्तो आज्ञा छ।

यस बातका दूतक (मार्फत) कुमारामात्य प्रियजीव। संवत् ६७ भाद्र शुक्ल द्वितीया।

**व्याख्या–**

नेपालका लिच्छविकालका विकसित बस्तीमध्ये यूपग्रामद्रङ्ग पछि दक्षिणकोलीग्रामद्रङ्गको स्थान थियो। यी दुवै द्रङ्गअन्तर्गत अनेक तल, ग्रामहरू थिए। क्रान्तिकालमा यूपग्रामद्रङ्गभेकका जनताले नरेन्द्रदेवलाई साथ दिए जस्तै दक्षिणकोलीग्रामद्रङ्गभेकका जनताले पनि उनलाई साथ दिएको संकेत यस अभिलेखबाट पाइन्छ। यसो हुनाले दक्षिणकोलीग्रामद्रङ्गका जनतालाई पनि केही अधिकार दिएर सन्तुष्ट पार्न खोजिएको यस अभिलेखबाट थाहा पाइन्छ।

नक्सालभेकको लिच्छविकालको एक बस्ती 'मानेश्वर' हो। त्यहाँ 'भुवनेश्वर' नामक प्रसिद्ध देवमन्दिर थियो। सो देवमन्दिरको अधीनमा अनेक बिर्ताहरू पनि थिए। देवमन्दिरको हेरचाह र आयस्ताको भोगचलन गर्ने अधिकार पहिलेदेखि दक्षिणकोलीग्रामद्रङ्गलाई सुम्पिएको थियो। तर भौमगुप्तले सो खोसेर सरकारतर्फबाट चलाउने गरिदिएका थिए। खाई पाई आएको अधिकार खोसिएको हुँदा यसबाट दक्षिणकोलीग्रामद्रङ्गले आफ्नो अपमान भएको जस्तो ठानेको देखिन्छ। यो कुरा थाहा पाई नरेन्द्रदेवले मानेश्वरमा रहेको सो भुवनेश्वर देवमन्दिर, त्यससंग सम्बद्ध सबै आयस्ता दक्षिणकोलीग्रामद्रङ्गलाई नै सुम्पेको कुरा यस अभिलेखमा परेको छ।

यस प्रसङ्गमा ती बिर्ता गद्दीनशीन लिच्छवि राजाले खोसेका होइनन्; यो खोस्ने काम भौमगुप्तले गरेका हुन् भनी दर्शाई आभीर गुप्तहरूप्रति दक्षिणकोलीग्रामद्रङ्गका जनताको अनास्था पैदा गर्न यहाँ भौमगुप्तको नामोल्लेख गरिएको छ। यहाँ 'भौमगुप्त' नलेखी 'भूमगुप्त' लेखिएको छ। केवलपुरको अभिलेखमा पनि 'भूमगुप्त' नै लेखिएको छ। यस कुराको आधारमा यी 'भूमगुप्त' भौमगुप्तका बाबु हुन् भन्ने तर्क गरिएको पाइन्छ। तर तात्कालिक अभिलेखहरूको विचार गर्दा यो कुरा सत्य देखिंदैन। अर्को कुरा बाबुको नामबाट 'तस्यापत्य' भन्ने अर्थमा तद्धित प्रत्यय गरी छोराको नामकरण गर्ने चलन लिच्छविकालमा हाम्रो यहाँ प्रचलित देखिंदैन। यस कारण भौमगुप्तलाई नै पछिकाहरूले 'भूमगुप्त' भनी लेख्न थालेका हुन् भन्ने यताबाट देखिन्छ।

मानेश्वरको देवमन्दिरको हेरचाहको अभिभारा दक्षिणकोलीग्रामद्रङ्गलाई सुम्पे जस्तै गरी बलम्बूभेकको शीताटीमा रहेको शिवगल देवमन्दिरको हेरचाहको अभिभारा पनि दक्षिणकोलीग्रामद्रङ्गलाई नै सुम्पेको कुरा यस अभिलेखमा परेको छ।

यसरी नरेन्द्रदेवले दक्षिणकोलीग्रामद्रङ्गका जनतालाई सन्तुष्ट पार्न खोजेको यताबाट स्पष्ट देखिन्छ।

## कुमारामात्य–

माथि गएको ललितपुर भन्सारचोकको नरेन्द्रदेवको अभिलेखमा पनि दूतक कुमारामात्य प्रियजीव छन्; यस अभिलेखमा पनि दूतक कुमारामात्य प्रियजीव नै छन्। अंशुवर्माले उदयदेवलाई युवराज घोषित गरी उनलाई दूतकका रूपमा राखेदेखि दूतक पदमा 'युवराज' रहने चलन चलेको थियो। तर नरेन्द्रदेवका यी अभिलेखमा दूतकका रूपमा युवराजको उल्लेख नभएको हुनाले यस वेलासम्म नरेन्द्रदेवका छोरा नजन्मिसकेको अथवा छोरा समर्थ नभइसकेको देखिन्छ। संवत् ८३ देखिका नरेन्द्रदेवका अभिलेखमा भने दूतक युवराज नै रहेका छन्।

युवराजले पाउने दूतकको स्थान यस वेला कुमारामात्य प्रियजीवले पाएका हुनाले प्रियजीव नरेन्द्रदेवका मनपरेका र भरपर्दा व्यक्ति थिए भन्ने थाहा पाइन्छ। साथै 'कुमारामात्य' पद महत्त्वपूर्ण हुन्थ्यो भन्ने संकेत पनि यसबाट पाइन्छ। यस कारण अब 'कुमारामात्य' बारे केही विचार गर्नुपरेको छ।

लिच्छविकालका अभिलेखमा कुमारामात्यको उल्लेख हामी सर्वप्रथम नरेन्द्रदेवका यिनै अभिलेखमा पाउँछौं। यसभन्दा अघिका अभिलेखमा यस पदको उल्लेख पाइंदैन। गुप्तकालदेखि यताका भारतका अभिलेखमा भने 'कुमारामात्य' को उल्लेख धेरै ठाउँमा पाइन्छ। विद्वान्हरूले आफ्नो आफ्नो विचारअनुसार 'कुमारामात्य' को विभिन्न अर्थ गरेका छन्। संक्षेपमा ती अर्थ यस प्रकारका छन्–

(१) 'कौमारादारभ्य येऽमात्यास्ते' अर्थात् कुमारावस्थादेखि नै अमात्य भई काम गर्दै आएकालाई 'कुमारामात्य' भन्दछन्।

(२) 'कुमारश्चासावमात्यः कुमारामात्यः' अर्थात् राजकुमारले नै अमात्यको काम गर्दा तिनलाई 'कुमारामात्य' भन्दछन्।

(३) 'कुमारस्यामात्यः कुमारामात्यः' अर्थात् राजकुमारका अमात्य

अब यी अर्थमध्ये कुनचाहिं ठीक हो भन्ने कुराको परीक्षा गरी एउटा टुङ्गो लाउनुपरेको छ। पहिले पहिलो अर्थबारे विचार गरौं। कुमारावस्थाका व्यक्तिलाई अमात्य बनाउने कुराको उल्लेख

प्राचीन अर्थशास्त्र, स्मृति आदिमा हामी कतै पाउँदैनौं। अमात्य कस्तालाई बनाउने भन्ने विषयमा उहिलेका अर्थशास्त्रकारहरूले विभिन्न दृष्टिबाट विचार गरेका छन्। यस विषयमा 'अमात्योत्पत्ति' भन्ने प्रकरणमा आचार्य कौटल्यले आफूभन्दा अगाडिका आचार्यहरूको मतको समेत उद्धरण दिई विवेचना गरेका छन्। तर त्यहाँ कुमारावस्थाका व्यक्तिलाई अमात्य बनाउने कुराको उल्लेख छैन। मनुस्मृति, याज्ञवल्क्यस्मृति आदि ग्रन्थमा पनि कुमारावस्थाका व्यक्तिलाई अमात्य वा मन्त्री बनाउने उल्लेख कतै परेको छैन। हुन पनि शास्त्र पढेका, कामको खूप अनुभव भएका आदि गुण भएकालाई अमात्य बनाउँदा मात्र काम राम्ररी चल्न सक्ने हुनाले अनुभवै नपाएका कुमारावस्थाका व्यक्तिलाई अमात्य बनाउँदा काम राम्ररी चल्नु सम्भव छैन। यस कारण 'कुमारामात्य' को अर्थ 'कुमारावस्थादेखि अमात्य बनाइएका' भन्ने अर्थ ठीक छैन भन्ने स्पष्ट देखिन्छ।

अब राजकुमारले नै अमात्यको काम गर्दा तिनलाई 'कुमारामात्य' भन्दथे भन्ने दोस्रो अर्थको विषयमा विचार गरौं। समुद्रगुप्तको प्रयागको स्तम्भलेखका रचयिता कवि हरिषेणलाई त्यस अभिलेखमा 'कुमारामात्य' भनी लेखिएको छ तथा त्यसै अभिलेखमा हरिषेणले आफूलाई समुद्रगुप्तका दास (सेवक) भनेका छन्। जस्तै—

"एतच्च काव्यमेषामेव भट्टारकपादानां दासस्य समीपपरिसर्प्पणानुग्रहोन्मीलितमतेः खाद्यट-पाकिकस्य महादण्डनायकध्रुवभूतिपुत्रस्य सान्धिविग्रहिक कुमारामात्य महादण्डनायकहरिषेणस्य"

(उहाँ परमभट्टारक (गद्दीनशीन समुद्रगुप्त) को दास भएका, नजीकमा पुग्न पाउनुरूपी अनुग्रहले बुद्धि सप्रेका, खाद्यटपाकिक (भान्साको रेखदेख गर्ने अधिकारी) महादण्डनायक ध्रुवभूतिका छोरा, सान्धिविग्रहिक (परराष्ट्रविभागका मुख्य अधिकारी) कुमारामात्य महादण्डनायक हरिषेणको काव्य यो हो।)

यसबाट ध्रुवभूतिका छोरा कुमारामात्य हरिषेण राजकुमार थिएनन्, उनी समुद्रगुप्तका सेवक मात्र थिए भन्ने स्पष्ट छ। यस कारण 'राजकुमार'ले नै अमात्यको काम पर्दा तिनलाई कुमारामात्य भन्दथे भन्ने दोस्रो अर्थ पनि ठीक छैन।

अब तेस्रो अर्थतिर दृष्टि दिनुपरेको छ। एकराजतन्त्र शासनपद्धतिमा राजापछिको स्थान कुमार (युवराज) को रहन्थ्यो। युवराजले राज्यको शासनको केही भार पनि बोक्दथे। यस कुराको उल्लेख हामी प्राचीन कालदेखि पाउँछौं। उदाहरणार्थ रामचन्द्रलाई युवराज बनाउन लाग्दाखेरि को वाल्मीकीय रामायणको वर्णनलाई लिन सकिन्छ। "धेरै कालदेखि राजकाजको भार बोक्दा बोक्दा म थाकें; यस कारण युवराज रामलाई केही कार्यभार सुम्पेर म केही विश्राम लिन चाहन्छु भनी त्यहाँ राजा दशरथले सभासद्हरूको सामुन्ने बोलेका छन्। त्यहाँका वाक्य यस प्रकारका छन्—

"ततः परिषदं सर्वामामन्त्र्य वसुधाधिपः ।
हितमुद्धर्षणं चैवमुवाच प्रथितं वचः ॥१॥

विदितं भवतामेतद् यथा मे राज्यमुत्तमम् ।
पूर्वकैर्मम राजेन्द्रैः सुतवत्प्रतिपालितम् ॥४॥
मयाप्याचरितं पूर्वैः पन्थानमनुगच्छता
प्रजा नित्यमनिद्रेण यथाशक्त्यभिरक्षिताः ॥६॥
राजप्रभावजुष्टां च दुर्वहामजितेन्द्रियैः ।
परिश्रान्तोस्मि लोकस्य गुर्वीं धर्मधुरं वहन् ॥९॥
सोहं विश्राममिच्छामि पुत्रं कृत्वा प्रजाहिते ।
सन्निकृष्टानिमान्सर्वाननुमान्य द्विजर्षभान् ॥१०" (अयोध्याकाण्ड, २सर्ग)

(त्यसपछि सभाका सबै सदस्यलाई सम्बोधन गरी राजा (दशरथ)ले हित हुने, खुशी तुल्याउने, र उदार बोली यसरी बोल्नुभयो–तपाईंहरूलाई थाहै छ; हाम्रा पुर्खाहरूले यो असल राज्यलाई आफ्नै छोरालाई जस्तै पालना गर्नुभएको थियो; पुर्खाले हिंडेको बाटोमा हिंडेर मैले पनि हरबखत होशियार भईकन सकभर प्रजाको रक्षा गरेको छु । इन्द्रिय नजितेकाहरूले बोक्न नसकिने यो गह्रौं राज्यभार बोकेर म थाकें । त्यसैले यहाँ उपस्थित भएका सबै विद्वान्हरूको अनुमति लिएर छोरा (रामचन्द्र) लाई दुनियाँको हित हुने यस काममा लाएर म विश्राम लिन चाहन्छु ।)

कवि कालिदासले पनि यस कुराको उल्लेख ठाउँ–ठाउँमा गरेका छन् । तिनमा एउटा उदाहरण यहाँ दिइन्छ –

"ततः प्रजानां चिरमात्मना धृतां नितान्तगुर्वीं लघयिष्यता धुरम् ।
निसर्गसंस्कारविनीत इत्यसौ नृपेण चक्रे युवराजशब्दभाक् ॥३५॥
नरेन्द्रमूलायतनादनन्तरं तदास्पदं श्रीर्युवराजसंज्ञितम् ।
अगच्छदंशेन गुणाभिलाषिणी नवावतारं कमलादिवोत्पलम् ॥३६॥
(रघुवंश, तृतीयसर्ग)

(त्यसपछि धेरै कालदेखि आफूले बोकेको प्रजाको ज्यादै गह्रुंगो भारलाई हलौं पार्ने इच्छाले राजाले यी कुमार स्वभाव र संस्कार (शिक्षा दीक्षा)ले गर्दा विनीत छन् भनी यिनलाई 'युवराज' बनाए ।

"राजा" भन्ने मुख्य पदपछिको 'युवराज' भन्ने त्यो पदमा गुण मन पराउने राज्यलक्ष्मी एक कमलबाट नयाँ फुलेको अर्को कमलमा शोभा सरे जस्तै गरी सरिन् ।)

यसरी कुमार (युवराज)ले पनि राज्यको शासनको केही भार बोक्ने हुनाले तिनलाई काममा सहायता दिने अमात्यको आवश्यकता हुनु स्वाभाविक छ । यहाँनिर पुगेपछि 'कुमारामात्य' को अर्थ खुले जस्तो भएको छ । कुमारलाई शासनकार्यमा मदत गर्ने अमात्य नै 'कुमारामात्य' कहलाएका

हुन् भन्ने धारणा यताबाट बस्न आउँछ । हाम्रो यस धारणालाई वैशालीमा पाइएको सरकारी छापले पुष्टि गरेको छ । सो छापमा यस्तो लेखिएको छ–

"श्रीयुवराजभट्टारकपादीयकुमारामात्याधिकरणस्य"‡

(श्रीयुवराज भट्टारकको मातहतमा रहेको कुमारामात्याधिकरणको)

यसबाट युवराजलाई शासनसम्बन्धी कार्यमा मदत गर्न 'कुमारामात्याधिकरण' भन्ने एक छुट्टै अधिकरण नै कायम भएको हुन्थ्यो भन्ने स्पष्ट भएको छ ।

कुनै कुनै अभिलेखमा अधिकारीहरूको पङ्क्तिमा 'राजामात्य' र 'कुमारामात्य' दुवैको उल्लेख परेको पाइन्छ । यसबाट पनि राजाको सहायताको लागि नियुक्त अमात्य 'राजामात्य' र कुमारको सहायताको लागि नियुक्त अमात्य 'कुमारामात्य' भनी कहलाएका हुन् भन्ने थाहा पाइन्छ ।

यति कुराबाट 'कुमारामात्य' पदको उत्पत्ति कुमारलाई शासनकार्यमा सहायता गर्ने अमात्यका रूपमा भएको हो भन्ने निश्चित हुन्छ । कुमार राजा बनेपछि पनि अघिदेखि आफूलाई सहायता गर्दै आएका विश्वस्त अमात्यलाई यो पदले विभूषित पारी नै राख्ने चलन पनि चल्यो । यसरी यो पद राजाका विश्वस्त अमात्यलाई कहने रूढ शब्द जस्तो पनि बन्न पुगेको थियो ।

कुमारामात्यको कुनै निश्चित काम हुँदैनथ्यो; राजाले जिम्मा लाइदिएको विभिन्न काम कुमारामात्यले गर्दथे । माथि उद्धृत समुद्रगुप्तको प्रयागको स्तम्भलेखबाट हरिषेण 'कुमारामात्य' साथै सान्धिविग्रहिक, महादण्डनायक पनि देखिन्छन् । करमदाण्डाको कुमारगुप्तको पालाको अभिलेखबाट पृथिवीषेण पहिले कुमारामात्य र मन्त्री थिए; पछि उनले महाबलाधिकृत (प्रधान सेनापति) पनि भई काम गरेको देखिन्छ† । दामोदरपुरको कुमारगुप्तको पालाको अभिलेखमा कुमारामात्य वेत्रवर्माले विषयपति (बडाहाकिम) को काम गरेको उल्लेख परेको छ§ । नरेन्द्रदेवका यी अभिलेखमा कुमारामात्य प्रियजीवले राजाको आज्ञा जनतासम्म पुऱ्याउने दूतकको काम गरेका

---

‡ 'आर्कियोलोजिकल सर्भे अफ् इन्डिया, आन्युएल रिपोर्ट' १९०३–४ को १०७ पृष्ठ हेर्नु होस् ।

† "...महाराजाधिराजश्रीचन्द्रगुप्तस्य मन्त्री कुमारामात्यशिखरस्वाम्यभूत्तस्य पुत्रः पृथिवीषेणो महाराजाधिराजश्रीकुमारगुप्तस्य मन्त्री कुमारामात्योऽनन्तरं च महाबलाधिकृतः ..."

§ "परमदैवतपरमभट्टारकमहाराजाधिराजश्रीकुमारगुप्ते पृथिवीपतौ तत्पादपरिगृहीतस्य पुण्ड्रवर्द्धनभुक्तावुपरिकचिराततदत्तस्य भोगेनानुवहमानककोटिवर्षविषये तन्नियुक्तककुमारामात्यवेत्रवर्म्मणि अधिष्ठानाधिकरणञ्च नगरश्रेष्ठिधृतिपालसार्थवाहबन्धुमित्रप्रथमकुलिकधृतिमित्रप्रथमकायस्थशाम्बपालपुरोगे संव्यवहरति"

छन् । आवश्यकताअनुसार राजाले जिम्मा लाइदिएको विभिन्न काम कुमारामात्यले गर्दथे भन्ने थाहा पाइन्छ* ।

नरेन्द्रदेव राजा बनिसकेपछि पनि प्रियजीवलाई 'कुमारामात्य' पदले विभूषित पारिराखेको हुनाले प्रियजीवले नरेन्द्रदेव कुमार छँदैदेखि नै उनलाई सहायता गर्दै आएको बुझिन्छ । शायद भोटमा रहंदा पनि उनी नरेन्द्रदेवसंगै थिए; त्यहाँबाट फर्केर आई राज्याधिकार फिर्ता लिनामा पनि उनले नरेन्द्रदेवलाई साथ दिएको हुनुपर्छ । यसै हुँदा उनी नरेन्द्रदेवका विश्वासप्राप्त व्यक्ति बन्न पुगेको देखिन्छ ।

-†-

* 'पूर्णिमा' ११ अङ्कका १३–१७ पृष्ठमा पनि 'कुमारामात्य' बारे विचार गरिएको छ ।

[१२५ संख्या]

# देउपाटनको नरेन्द्रदेवको पालाको अभिलेख

*काठमाडौं देउपाटनमा बारीभित्र रहेको एउटा जलहरीमा यो अभिलेख कुँदिएको छ। यसको* अभिलेख कुँदिएको भाग ३९ अङ्गुल लम्बा, १० अङ्गुल चौडा छ। यहाँ संवत् ६९ छ।

नोलीद्वारा ६५ संख्याको रूपमा यो अभिलेख छापिएको छ। राष्ट्रिय–अभिलेखालयमा रहेको प्रतिलिपिबाट यसको पाठ सच्याउन मदत पाइएको छ।

## मूलपाठ

१. संवत् ६९ ज्येष्ठकृष्णदिवासप्तम्यां परमभट्टारकश्रीनरेन्द्रदेवस्य साग्रं वर्षशतं समाज्ञापयतः चुहुङ्गपेडचाय[१]...

२. [२]नर्प्रिग्रामग्रामस्य दक्षिणतस्तिलमकस्य च दक्षिणपूर्वतः क्षेत्रं.....शालङ्का वास्तव्यब्राह्मणविश्वसेनस्य[३] पत्न्या सुवर्ण-

३. गोमिन्या ७ [४]प्रत्यायम्महाबलाद्ध्यप्रसाद- लेख्यं रामस्वामिना दूतकेन दान- पाशुपताचार्य्यदक्षिणतिलडुकस्य

४. तेनापि[५] दानशृङ्खलिकपाशुपतानां ग्लानभैषज्यार्थं[६] दत्तं वर्षकस्तत्रैव ग्रामे...[७] म्पिण्डकं विंशतिकया धान्यमा

५. १४ पु ७ [८]अस्य करणीयम्.....धान्यकुडा १ [९]गच्छिजानामिलगतिवल वाहिकगुप्त.....शारिकावास्तव्य [१०] अमात्यभगवचन्द्र

---

नोलीका पाठ–

१. चुहुङ्ग्रामे ज्याय–– २ कुटुम्बि– ३. शालङ्कास्तस्य प्रसादाधिशासनस्य पत्त–
४. २ प्रत्ययम ५.–मि ६. ग्लाननैः सस्यारिदत्त ७.–म्पि––– ८. ण्ढा ४ प्रत्य–
यस्य ९. शिञ्छिजानामि– १०.च स्तव्य सुमात्य

६. [1]तत्रैव निवासिन चन्द्रकस्य अत्र साक्षिका ज्ञेया[2] चुहुंगपेडानियुक्तस्य धनवृद्धिसहितेन ।

# अनुवाद

संवत् ६९ ज्येष्ठ कृष्ण सप्तमीको दिन परमभट्टारक श्रीनरेन्द्रदेवले शयभन्दा बढी समयसम्म (लामो कालसम्म) शासन गरिरहेको वेलामा चुहुङ्गपेड्या य......नर्रम्र ग्रामसमूहको दक्षिणतिर, तिलमक (कुलो)को पनि दक्षिण र पूर्वतिरको खेत....शालङ्कामा बस्ने ब्राह्मण विश्वसेनकी पत्नी सुवर्ण गोमिनीले ७ आयस्ता आउने गरी महाबलाध्यक्ष प्रसाद....को लेख-सहित गरी रामस्वामीमार्फत दानपाशुपताचार्य तिलडुकलाई दान दिएकी थिइन्; तिनले पनि (सो खेत) दानशृङ्खलिक पाशुपतहरू बिरामी भएमा औषधापचारको लागि दान दिइदिए ।

त्यही गाउँमा......कुत बीस बीस गरी १४ मानिका धान, ७ पुराण । यसको गर्नुपर्ने... १ कुडव धान । गिच्छिजा नामिल गतिवल वाहिकगुप्त....शरिकामा बस्ने अमात्य भगवच्चन्द्र त्यही बस्ने चन्द्रक यसका साक्षीहरू हुन् भनी जान्नू । चुहुंगपेडामा नियुक्त गरिएकाको धनको व्याजसहित गरी (यो खेत दिइएको छ ।)

**व्याख्या–**

यो अभिलेख अलि अशुद्ध संस्कृतमा लेखिएको छ; वाक्यरचना पनि राम्रो छैन । यस कारण यहाँको कुरा अलि अस्पष्ट छ । प्रसङ्गबाट भाव बुझ्न सकिन्छ ।

यहाँ नरेन्द्रदेवको प्रशस्तिमा 'परमभट्टारक' पद प्रयोग गरिएको छ । माथि गएका नरेन्द्रदेवका अभिलेखमा उनले महाराजाधिराज पद लिएका थिए तापनि त्यति वेलासम्म उनी 'भट्टारक' मात्र कहलाएका थिए । लगत्तैपछि उनी 'परमभट्टारक' कहलाए भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ । 'भट्टारक' पद चाहिं पछि युवराजले पाउने भयो ।

पशुपतिक्षेत्रमा यस ताका पाशुपत सम्प्रदायका अनेक मण्डलीहरू थिए भन्ने देखिएको छ । तीमध्ये एक दानपाशुपतहरूको मण्डली पनि थियो। दानपाशुपत सम्प्रदायको के विशिष्टता रहन्थ्यो; यो कुरा खुल्न सकेको छैन । ब्राह्मण विश्वसेनकी पत्नी सुवर्ण गोमिनीले दानपाशुपतका आचार्यलाई केही जग्गा दान दिएकी थिइन्; आचार्य दक्षिणतिलडुकले सो जग्गा आफ्नो अधीनमा नराखी दानपाशुपतहरूको औषधोपचारको लागि छुट्याइदिएको कुरा यस अभिलेखमा परेको छ ।

लिच्छविकालमा गुठीको रूपमा सञ्चालन गरिने आरोग्यशाला थिए । शिवदेव अंशुवर्माको लेलेको अभिलेखमा यस्तो आरोग्यशालाको उल्लेख आएको छ । यहाँ पशुपतिक्षेत्रमा पनि त्यस्तो आरोग्यशाला थियो भन्ने कुरा यस अभिलेखबाट देखिन्छ । जनताको औषधोपचारको लागि ठाउँ ठाउँका रहेका यस्तै सार्वजनिक आरोग्यशालाहरू देखेर चीनिया राजदूत वाङ्युन्चेले नेपालीहरू ओखतीको काममा सिपालु छन् भनी लेखेको बुझिन्छ ।

---

नोलीका पाठ–१. f व २. चुहुम्ग्रामे

# देउपाटन कसाईंटोलको नरेन्द्रदेवको अभिलेख

काठमाडौं, देउपाटन कसाईं टोलमा यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ । यसको अभिलेख कुँदिएको भाग ३६ अङ्गुल लम्बा, २३ अङ्गुल चौडा छ । यसको शिरोभागमा चक्र अङ्कित छ। यहाँ संवत् ७१ छ ।

नोलीद्वारा ६८ संख्याको रूपमा यो छापिएको छ। "पूर्णिमा' ६ अङ्कमा गौतमवज्र वज्राचार्य-द्वारा पनि यो छापिएको छ ।

## मूलपाठ

(१–१० पङ्क्ति पढ्न नसकिने)

११. ...... ...... भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानु-
१२. ध्यातः परमभट्टारकमहाराजाधिराजश्रीनरेन्द्रदेवः कुशली सर्व[१] ........
१३ ...वृत्तिभुज[२]...धिकृत...भविष्यतश्च[३] यथार्हंङ्कुशलमभिधाय[४]
१४. समाज्ञापयति विदितम्भवतु भवतां[५]... ......
१५. ·.... नवगृह..... स्थितिमर्यादोपपन्नत्वञ्चाटभटानाम[६]-
१६. प्रवेशश्च[७] प्रसादः कृतस्तदित्थम[८]भूतार्थवेदिभिर्भवद्भिरन्यतरान्यतराधिका[९]
१७. राधिकृतैस्तथान्यैरस्मत्प्रसादानुबद्धजीवनैः कैश्चिदपि नवगृहम्प्रविश्या-

---

नोलीका पाठ–

१. ——— २. ——— ३. — च ४ ———य—ङ्—मा——
५. ——च्चर—— ६. सु—तो–स्थितिम्—प——ञ्चहततटा—— ७. प्र——
८. एवं ९. ———धि——

१८. ल्पतरापि बाधा न कर्तव्या यस्त्विमामविलङ्घनीयामास्माकीनामाज्ञामना-
१९. दृत्यान्यथा कुर्यात्कारयेद्वा तं वयं राजाज्ञाप्रतीपगामिनमत्यर्थन्न मर्षयि-
२०. ष्यामो येपि चास्मदूर्ध्वम्भूपतयो भवितारस्तैरपि सम्यक्प्रजानुपालनार्जि-
२१. [१]तस्‌ चरितमभीष्टानां सम्पदां कारणम्मन्यमानैरिह कल्याणायुरारोग्य-
२२. राज्यश्रियामुपचयायामुत्रापि चाभ्युदयाय धर्मगुरुतया पूर्वराजप्र-
२३. सादानुवर्तनम्प्रति सततमवहितमनोभिर्भाव्यञ्चिरकालस्थितये चास्य
२४. प्रसादस्य शिलापट्टकशासनञ्च प्रसादीकृतमिति स्वयमाज्ञापि चान्य-
२५. दिह यत्किञ्चिन्मह[२]त्कार्यमुत्पद्यते तच्च स्वयम्पाञ्चालिकैर्निर्णेतुन्न शक्यते त-
२६. दा तदन्तरासनेन विचारयितव्यं याश्च गौष्ठ्यो नवगृहप्रतिबद्धास्ताश्च
२७. चाटभटानामप्रवेश्या एव या च व्यवस्था[३] ताम्रशासने लिखिताभूत्तयै-
२८. व व्यवस्थया वृजिकरथ्यानिवासी[४] मधुसूदनस्वामी पाञ्चालिकसामान्य इति
२९. दूतकश्च दण्डनायकनृपदेवः संवत् ७१ कार्तिकशुक्लद्वितीयायाम्

# अनुवाद

... ... ... ... ... ... ... ... ... ... ... ...

भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा)को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, परमभट्टारक महाराजाधिराज श्रीनरेन्द्रदेवबाट सबै ....वृत्ति खाने, अहिले बहाल रहेका र पछि बहाल हुने अधिकारीहरूलाई यथोचित कुशल मङ्गल सोधेर आज्ञा भएको छ ।

नवगृह......स्थितिबन्धेज बाँध्ने काम र चाटभटले पस्न नपाउने गरी अनुग्रह गरिएको छ भन्ने कुरा तिमीहरूलाई थाहा होस् । यसरी यो कुरालाई ठीकठीकसंग बुझेका तिमीहरूले, अरू अधिकरणका अधिकारीहरूले तथा अरू हाम्रो निगाहबाट जीविका चलाउने (सरकारी कर्मचारी) कसैले पनि नवगृहमा पसेर अलिकता पनि दुःख दिनुहुँदैन । जसले नाघ्न नहुने हाम्रो यस आज्ञालाई नटेरेर अन्यथा गर्ला वा गराउला; राजाज्ञाको विरुद्ध हिँड्ने त्यसलाई हामीबाट कुनै हालतमा पनि सहने काम हुनेछैन ।

हामीभन्दा पछि हुने राजाहरूले पनि दुनियाँहरूलाई राम्ररी प्रतिपालना गर्नाले कमाएको असल चरित्रलाई आफ्नो उन्नतिको कारण संझेर यस लोकमा कल्याण, आयु, आरोग्य र राज्यको

नोलीका पाठ–

१. प्रजानुपालना इति सुचरितम् २. विहर्यम्(कि)ञ्चिन्महत्

३. याश्चास्यावस्था ४.– ि का—निवासी

बढिबढाउ तथा परलोकमा पनि सद्गतिको लागि नियम कानूनलाई महत्त्व दिई अघिका राजाहरूले गरेको अनुग्रह थाम्नामा सधैं मन दिनुपर्छ। यो स्थितिबन्धेजलाई स्थायी पार्नाको लागि सनद शिलापत्र गरी निगाह गरिएको छ। यो स्वयं राजाको आज्ञा हो।

अर्को कुरा—यस नवगृहमा कुनै ठूलो मुद्दामामिला उठ्यो र त्यसको छिनफान स्वयं पाञ्चालिकहरूले गर्न सकेनन् भन्ने त्यस वेला आफैं राजाबाट भित्री इजलासमा (अन्तरासनमा) त्यसको विचार गर्नुपर्छ।

नवगृहसंग सम्बन्ध राख्ने जुन गोष्ठीहरू छन्; तिनमा पनि चाटभटले पस्न नपाउने गरिएको छ। सनद ताम्रपत्रमा जुन व्यवस्था लेखिएको थियो; त्यही व्यवस्थाअनुसार वृजिकरथ्यामा बस्ने मधुसूदनस्वामी पाञ्चालिकका समानाधिकारी (पाञ्चालीका सदस्य) नियुक्त गरिएका छन्।

मार्फत दण्डनायक नृपदेव। संवत् ७१ कार्तिक शुक्ल द्वितीया।

## व्याख्या–

लिच्छविकालमा देउपाटनको आसपासको प्रदेश 'नवगृह' कहलाएको थियो। मल्लकालसम्म पनि त्यस भेकलाई 'नवगृह' भन्ने चलन हराइसकेको थिएन। ने. सं. ५२३ (वि. सं. १४५९) मा देउपाटनमा लेखिएको एक ग्रन्थमा 'नवगृह' को उल्लेख आएको छ। जस्तै –

"देवपत्तननगरे श्रीनवगृहस्थाने श्रीयुवुकुनिह्मंगृहाधिवास्तव्यश्रीभूतचिकित्सकव्यैद्यउदयब्रह्मकस्य पुस्तक स्वयमेवार्थेन लिखितमिदं।

सम्वत् ५२३ कार्त्तिककृष्णचतुर्दश्यां. . . .बृहस्तीवासरे राजाधिराजपरमेश्वरश्रीमत्श्रीश्रीजुवराजजयधर्म्ममल्लदेवस्य विजयराज्ये"

यसबाट 'नवगृह' देउपाटनमा पर्दथ्यो भन्ने सिद्ध हुन्छ। नवगृहको स्थितिबन्धेज बाँधी गरिदिएको यो शिलालेख देउपाटनमा पाइएको हुनाले पनि उक्त कुराको पुष्टि हुन्छ।

यस अभिलेखको माथिल्लो केही भाग खिइएको हुँदा 'नवगृह'का बासिन्दाहरूलाई नरेन्द्रदेवले के अधिकार सुम्पेका थिए; सो अलि अस्पष्ट छ।'. . . .स्थितिमर्यादोपपन्नत्वम्' मात्र अहिले देखिन्छ। प्रसङ्ग विचार गर्दा 'कोट्टस्थितिमर्यादोपपन्नत्वम्' हो कि भन्ने अनुमान हुन्छ। त्यस वेला 'कोट्ट' तहका बस्तीलाई अरू बस्तीभन्दा बढी सुबिधा प्राप्त थियो। यसै हुँदा 'नवगृह' बस्तीलाई पनि 'कोट्ट' सरह सुबिधा दिइएको देखिन्छ।

गाउँ–गाउँ गई सरकारी मालपोत उठाउन जाने सैनिक रूपका सरकारी मानिस 'चाटभट' कहिन्थे। नवगृहमा चाटभटले पस्न नपाउने अनुग्रह गरिएको छ भन्ने उल्लेख यस अभिलेखमा

परेको हुनाले नवगृहका बासिन्दाहरूलाई नरेन्द्रदेवले मालपोत माफी गरिदिएको बुझिन्छ। साथै नवगृहसंग सम्बन्ध राख्ने गोष्ठीहरूका अन्त रहेका जग्गामा समेत मालपोत मिनाहा गरिदिइएको कुरा यसमा परेको छ।

यस अभिलेखबाट लिच्छविकालको पाञ्चालीव्यवस्थामा महत्त्वपूर्ण प्रकाश पर्छ। त्यस वेला पाञ्चालीको संघट्टन नियमपूर्वक हुन्थ्यो; पाञ्चालीसम्बन्धी नियम ताम्रपत्रमा लेखिराखिएको हुन्थ्यो; पाञ्चालीले छिन्न नसकेको मुद्दा अन्तरासन (राजाको भित्री इजलास) ले हेर्दथ्यो; इत्यादि कुरा यस अभिलेखबाट थाहा पाइन्छ। ताम्रपत्रमा लेखिएको व्यवस्थाको आधारमा नवगृहको पाञ्चालीमा वृजिकरथ्यामा बस्ने मधुसूदन स्वामीलाई सदस्यका रूपमा नरेन्द्रदेवले नियुक्त गरेको कुरा यसमा उल्लिखित छ। यस दृष्टिले यो अभिलेख निकै उपयोगी रहेको छ।

## वृजिकरथ्या–

वृजिजनपदमा जन्मेको, भएको, वृजिजनपदबाट आएको आदि अर्थ 'वृजिक' शब्दले बुझाउँछ। अष्टाध्यायीमा 'मद्रवृज्योः कन्' ४।२।१३१ भन्ने सूत्र रहेको छ। यसबाट पाणिनिकालिक भारतमा 'वृजि' जनपदको उदय भइसकेको देखिन्छ। बौद्ध वाङमयमा त वज्जि (वृजि) गणराज्यको उल्लेख प्रशस्त पाइन्छ। त्यस ताका भारतमा प्रसिद्ध षोडश महाजनपदमध्ये एक वृजिजनपद हो‡। वृजिकहरूको शासनव्यवस्था, परस्परको मेलमिलाप देखेर भगवान् बुद्ध प्रभावित भएका थिए†। आचार्य कौटल्यले पनि आफ्नो अर्थशास्त्रमा संघराज्यको प्रकरणमा वृजिक तथा लिच्छविको उल्लेख गरेका छन्*।

यसरी भारतमा वृजिकहरूको उल्लेख प्रशस्त पाइन्छ तापनि हाम्रो यता भने वृजिकहरूको सोझै उल्लेख पाइएको छैन। तर नरेन्द्रदेवको यस अभिलेखमा 'वृजिकरथ्या' को उल्लेख आएको हुनाले यसबारे विचार गर्ने एउटा आधार पाइएको छ। 'रथ्या' भनेको रथ हिंड्न हुने फराकिलो सडक हो। वृजिकहरूको बसोबास भएको टोल हुनाले सो 'वृजिकरथ्या' कहलाएको हो। यसबाट वृजिकहरूले पनि केही संख्यामा नेपाल–उपत्यकामा आई बसोबास गरेका थिए भन्ने देखिन्छ§।

---

‡ "...इमेसं सोडसन्नं महाजनपदानं...अङ्गानं मगधानं कासीनं कोसलानं वज्जिनं मल्लानं चेतीनं वत्सानं कुरुनं पञ्चालानं मच्छानं सूरसेनानं, अस्सकानं अवन्तीनं गान्धारानं कम्बोजानं..."

(अङगुत्तरनिकायको उपोसथवग्गबाट)

† दीघनिकायको महापरिनिब्बाणसुत्त हेर्नुहोस्।

* "लिच्छविकवृजिकमल्लकमद्रककुकुरकुरुपाञ्चालादयो राजशब्दोपजीविनः"

(कौ. अ. १ अधि. ११ अ.)

§ गौतमवज्र वज्राचार्यद्वारा 'पूर्णिमा' ६ अङ्कमा प्रकाशित 'वृजिकरथ्या' भन्ने निबन्ध हेर्नुहोस्।

यूपग्रामद्रङ्ग, दक्षिणकोलीग्रामद्रङ्गका जनतालाई जस्तै नवगृहका जनतालाई पनि स्वशासन-सम्बन्धी अधिकार सुम्पी सन्तुष्ट राख्ने नीति नरेन्द्रदेवले लिएका थिए भन्ने कुरा यस अभिलेखबाट बुझिन्छ ।

यस अभिलेखमा दूतक दण्डनायक नृपदेव छन् । दूतक बनाइएका हुनाले यिनी नरेन्द्रदेवका विश्वासपात्र व्यक्ति थिए भन्ने थाहा पाइन्छ । लिच्छविवंशका व्यक्तिको नाममा मात्र जोडिने 'देव' पद यिनको नाममा पनि जोडिएको हुनाले यी नृपदेव लिच्छविवंशका थिए भन्ने देखिन्छ । नरेन्द्रदेवको उदयपछि अब महत्त्वपूर्ण सरकारी पदमा लिच्छवि नै रहन लागेको संकेत यताबाट पाइन्छ ।

o—o

# नक्सालको नरेन्द्रदेवको पालाको अभिलेख

नक्साल भगवतीबहालमा यो अभिलेख कुँदिएको जलद्रोणी (टुटेधारा) रहेको छ। यसको अभिलेख कुँदिएको भाग २५ अङ्गुल लम्बा, ६ अङ्गुल चौडा छ। यहाँ संवत् ७८ छ।

'संस्कृत–सन्देश' २।१–२–३ मा ऐ. शि. बाबुराम आचार्य श्रीगुरु पं. नयराज पन्तद्वारा यो छापिएको छ। नोलीद्वारा ६९ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ॐ शौर्योत्साहपराक्रमाभयनयत्यागप्रतापादिभिः
श्लाघ्यैः स्वामिगुणैरनन्यसुलभैः संस्पर्धयेवान्विते
२. पृथ्वीं पाति नरेन्द्रदेवनृपतौ वंशक्रमाभ्यागतां
संत्यक्तस्वसुखोद्यमे परहितव्यापारनिम्नात्मनि
३. तत्पादाब्जप्रसादादुपनतविभवो विष्णुदेवः कृतात्मा
लोकस्य ब्राह्मणादेस्त्रिषवणविधिवन्मार्जनादिप्रपूर्त्यै
४. पाषाणद्रोणमेतं सुविहितसलिलोद्धारयन्त्रोदपानं
कृत्वा तत्पुण्यबीजाद् बहुतरसुकृतारम्भमाशास्त भूयः
५. संवत् ७८ कार्त्तिकशुक्लनवम्याम्[प्र]युगादौ[१]

## अनुवाद

शुन्याइँ, उत्साह, पराक्रम, निडरपन, नीति, दान, प्रताप, आदि मालिकमा हुनुपर्ने अन्त नपाइने प्रशंसनीय गुणहरू तँछाड् मछाड् गरे झैं गरी जहाँ रहन्छन्; आफ्ना सुखसयलको धन्दालाई

नोलीको पाठ– १ . . .

छोडेर अरूको उपकारकै काममा दिलोज्यान लाउने उहाँ महाराजाधिराज नरेन्द्रदेवबाट कुलको क्रमैसंग आएको पृथ्वीलाई पालना गरिरहनुभएको समयमा उहाँकै पाउको निगाहबाट ऐश्वर्य कमाएका आत्मवत्ता भएका (आफ्नो हित हुने कुरा बुझ्ने) विष्णुदेवले ब्राह्मणलगायत दुनियाँहरूको त्रिकाल स्नान र विधिपूर्वक नुहाइ–धुवाइको काम चलोस् भन्नाको लागि पानी झिक्ने यन्त्र (अरघट्ट) र कुवा (इनार) समेत राम्रोसंग बनेको यो ढुङ्गाको धारा (टुटेधारा) बनाएर त्यस पुण्यको बीउबाट फेरि धर्मका कामको उत्पत्तिको आशा राखेका छन्।

संवत् ७८ कार्तिक शुक्ल नवमी, सत्ययुगादि ।

**व्याख्या-**

नरेन्द्रदेवको उदयले अति प्रसन्न हुने व्यक्तिहरूमा विष्णुदेव पनि पर्दछन् । यस अभिलेखमा विष्णुदेवले नरेन्द्रदेवको गुणगान प्रशस्त गरेका छन् । नरेन्द्रदेवका व्यक्तिगत गुणको वर्णनको साथै नरेन्द्रदेवको राज्यप्राप्ति वैध थियो भन्ने कुरा पनि यहाँ लेखिएको छ।

'नरेन्द्रदेवको पाउको निगाहले ऐश्वर्य कमाएका' भन्ने विशेषण यहाँ विष्णुदेवमा रहेको छ। यसबाट नरेन्द्रदेवको दरबारमा यिनले प्रवेश पाएका थिए भन्ने झल्किन्छ। अर्को कुरा लिच्छविहरूको नाममा मात्र जोडिने 'देव' पद यिनको नाममा पनि जोडिएको हुनाले यी विष्णुदेव पनि लिच्छवि-वंशकै थिए भन्ने देखिन्छ। यसो हुँदा पनि नरेन्द्रदेवको उदयमा विष्णुदेवद्वारा हर्ष बढाइँ गरिएको हो। आभीर गुप्तहरूको हातबाट लिच्छवि नरेन्द्रदेवको हातमा शक्ति आएपछि अब 'सत्ययुग' लाग्यो भन्ने प्रख्यापनसम्म पनि यस अभिलेखमा गरिएको छ। जे होस्, नरेन्द्रदेवको उदयले गर्दा दूतक, दण्डनायक आदि ठूलठूला पदमा लिच्छविहरू नै रहन लागेको हामी पाउँछौं।

तात्कालिक समाजको अलिकता झलक पनि यस अभिलेखबाट पाइन्छ। 'लोकस्य ब्राह्मणादेः' भन्ने उल्लेख यहाँ परेको हुनाले त्यस वेला वर्णव्यवस्था कायम थियो भन्ने संकेत पाइन्छ। त्रिकाल स्नान गर्नेहरू पनि त्यस वेला हुँदा रहेछन्। पुगिसरी आएकाहरूको आदर्श लोकहित हुने कीर्ति बढीसेबढी बनाएर जान सकौं भन्ने हुँदो रहेछ ।

–★–

# ललितपुर गैह्रीधाराको नरेन्द्रदेवको अभिलेख

ललितपुर गैह्रीधारानजीकै यो अभिलेख कुँदिएको शिलापट्ट रहेको थियो। हाल यो शिलापट्ट पुरातत्त्वबगैंचामा राखिएको छ। यसको अभिलेख कुँदिएको भाग ३६ अङ्गुल लम्बा, २१ अङ्गुल चौडा छ। यहाँ संवत् ८३ छ‡। यसको शिरोभागमा बसिरहेको साँढे अङ्कित छ।

बेण्डालद्वारा ३ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ७० संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १४ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. स्वस्ति कैलासकूटभवनाद .... ......
२. (वत्पशु) पतिभट्टारकपादानुगृहीतो बप्पपादानु (ध्यातः)
३. पर (मभ) ट्टारकमहाराजाधिराजश्रीनरेन्द्रदेवः कुशली
४. .......नः सर्वाधिकरणाधिकृतान्[१]... ...
५. ... वर्तमानान्भविष्यतोपि यथार्हङ्कुशल[२]–
६. म्पृष्ट्वा समाज्ञापयति विदितमस्तु भवतां यथा [३]
७. महाप्रतिहारचन्द्रवर्मविज्ञापितैरस्माभिस्तत्प्रतिमान्य[४]

---

‡ यस अभिलेखको संवत् नोलीहरूले '८२' छपाउनुभएको छ। तर यहांको संवत् '८३' हो। 'पूर्णिमा' २० अङ्कको १८५ पृष्ठ हेर्नुहोस्।

नोलीका पाठ–

१. .......f................
२. ............य..............
३. ............पा–नि म. f............
४. ................तर..........तप

८. .......पशुपतौ वाग्वतीपूर्वकूले[१] भगवद्वज्रेश्वरमण्ड

९. ल्यां ..........सर्वाधिकरणानामप्रवेशेनास्या.........प्र

१०. ............ ......गणप्रसादीकृतमनेनास्याम्मदनु[२]–

११. ज्ञातेनात्मनः [३] श्रेयोभिवृद्धये धार्मिकगणानामतिसृष्टम्

१२. प्रतिपालनम्प्रति ज्ञानयोगकर्मयोगरतैः शीलाचार–[४]

१३. परैर्वस्तव्यन्तैरपि यथाकालमनतिक्रम्य देवानाम्[५]

१४. स्नपनगन्धपुष्पधूपप्रदीपवर्षवर्धनवर्षाकाल–

१५. वादित्रजपकादिका कारणपूजा कर्तव्या मण्डल्याञ्च

१६. उपलेपनसम्मार्जनप्रतिसंस्कारादिकङ्कृत्वा यद्यस्ति

१७. परिशेषन्तेन द्रव्येण भगवन्तं वज्रेश्वरमुद्दिश्य

१८. पाशुपतानाम्ब्राह्मणानाञ्च यथासम्भवम्भोजनङ्कार[६]–

१९. णीयन्तदन्यच्च कालान्तरेण यदि कदाचिद्दानपति–

२०. त्वेन प्रार्थयन्ते आपत्सु तत्कालम्बुध्वा दानपतीनां

२१. धान्यानाञ्चतुर्विंशतिर्मानिका देया अतोधिकन्दानप–

२२. तिभिर्न ग्राह्यं यदि चात्र कार्यमुत्पद्यते परमासने–

२३. न विचारमात्रङ्करणीयन्न तु द्रव्यस्याक्षेपस्तदेव–

२४. मवगत्य सर्वाधिकरणाधिकृतैरन्यैर्वा न कैश्चिदय–

२५. मस्मत्प्रसादोन्यथा कर्तव्यो ये त्वस्मदाज्ञां व्यतिक्रम्य वर्तन्ते

२६. वयन्तेषान्न मर्षयामो येप्यस्मदूर्ध्वम्भवितारो राजा–

२७. नस्तैरपि पूर्वनृपतिकृतप्रसादप्रतिपालनादृ–

२८. तैर्नान्यथा करणीयो स्वयमाज्ञा दूतकश्चात्र भट्टारक–

२९. श्रीयुवराजस्कन्ददेवः संवत्[७] ८३ भाद्रपदशुक्लदिवा

३०. (ष)ष्ठ्याम् ॥

# अनुवाद

कल्याण होस् । कैलासकूट भवन (दरबार)बाट......भगवान् पशुपतिनाथका पाउको

---

नोलीका पाठ–

१. ..........................न्द्रले २.........मनेनास्य..न्तु

३. –– नात्मनः ४. प्रतिपालनप्रतिज्ञा – – – कर्मयोगर.....

५. – – – – – प्यन्तरा – – – कालमनतिक्रम्य प्रधान

६. ङ्करणीयन्‍ ७. संवत् ८२

अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, परमभट्टारक महाराजाधिराज श्रीनरेन्द्रदेवले अहिले बहाल रहेका र पछि बहाल हुने सबै अधिकरणका अधिकारी–हरूलाई यथोचित कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् ।

महाप्रतिहार चन्द्रवर्माले हामीमा बिन्ति चढाएका हुनाले उनको कुरा राख्न हामीबाट पशुपतिमा वाग्वतीको पूर्व किनारमा रहेको भगवान् वज्रेश्वरको मण्डलीमा सबै अधिकरणले पस्न नपाउने गरी निगाह गरिएको छ । हाम्रो आज्ञा लिई यिनले (चन्द्रवर्माले) आफ्नो पुण्य बढोस् भनी यस मण्डलीका धार्मिक संघहरूलाई दान दिएका छन् ।

ज्ञानयोग र कर्मयोगमा लागेकाहरूले सदाचारमा रही यसको हेरविचार गर्नू । तिनीहरूले नियत समय ननघाई देवताको स्नान गराउनु, सुगन्धी वस्तु चढाउनु, फूल चढाउनु, बत्ती बाल्नु, वर्षवर्द्धन गर्नु, वर्षाकालमा बाजा बजाउनु, जप गर्नु आदि निमित्त पूजा गराउनू। मण्डलीमा लिप्नु, बढार्नु, मरम्मत गर्नु आदि काम गरेर जो बच्छ; त्यो पैसाले भगवान् वज्रेश्वरलाई लक्ष्य गरी पाशुपतहरूलाई र ब्राह्मणहरूलाई सकिने जति भोजन गराउनू ।

पछि कुनै वेला यदि दानपति (दाता) को हैसियतले कसैले आपत् परेको वेलामा केही माग्यो भने अवस्था विचार गरेर दानपतिलाई २४ मानिका धान दिनू। योभन्दा बढी दानपतिले लिन पाइंदैन ।

यदि यहाँ मुद्दामामिला पऱ्यो भने परमासन (राजाको भित्री इजलास) ले छानबीन मात्र गर्नू। पैसा जफ्त गर्नु भने हुँदैन।

यो कुरा थाहा पाई सबै अधिकरणका अधिकारीहरूले तथा अरू कसैले पनि यो हाम्रो निगाह अन्यथा नगर्नू। जसले हाम्रो आज्ञा नाघ्लान्, तिनलाई हामी सहनेछैनौं। पछि हुने राजाहरूले पनि पहिलेका राजाहरूले गरेर गएको निगाह आदरपूर्वक थाम्नुपर्छ; अन्यथा गर्नुहुँदैन । यो मेरो आफ्नै आज्ञा हो ।

यहाँ दूतक (मार्फत) भट्टारक श्रीयुवराज स्कन्ददेव। संवत् ८३ भाद्र शुक्ल षष्ठी ।

## व्याख्या-

### धार्मिकगण (संघ) --

लिच्छविकालमा ग्रामपाञ्चालीको रूपमा, गोष्ठीको रूपमा अनेक स्थानीय संघ कायम थिए । यस्ता सम्बद्ध संघको अन्तर्गत रही परस्परमा मिलिजुली जीवन चलाउनु नै लिच्छविकालको लौकिक जीवनको प्रमुख विशिष्टता थियो भन्ने कुराको चर्चा पहिले गरिसकेको छ। मिलिजुली

काम गर्ने यो भावनाले लिच्छविकालमा धार्मिक क्षेत्रमा पनि असर पारेको थियो । यसो हुनाले लिच्छविकालमा विभिन्न धार्मिक सम्प्रदायहरू संघका रूपमा संघट्टित थिए ।

ग्रामपाञ्चाली आदि स्थानीय संघलाई स्वशासनसम्बन्धी उचित अधिकार दिने लिच्छविकालका शासकहरूको नीतिअनुसार उनीहरूले धार्मिक संघहरूलाई पनि प्रशासनसम्बन्धी केही अधिकार दिएका थिए । यस कुराको झलक नरेन्द्रदेवको यस अभिलेखबाट पनि पाइन्छ । पशुपति वाग्वतीपारि रहेको पाशुपत सम्प्रदायको मण्डली (जमघट हुने धार्मिक स्थल) लाई प्रोत्साहन दिन नरेन्द्रदेवले सो मण्डलीको इलाकामा सबै सरकारी अधिकरणले पस्न नपाउने, आवश्यक काम कुरा सोही धार्मिक संघद्वारा मिलाउने अधिकार दिइएको कुरा यस अभिलेखमा परेको छ। यहाँ 'धार्मिकगणानाम्' शब्दको प्रयोग गरिएको हुनाले धार्मिक संघहरू अनेक थिए भन्ने झल्किन्छ ।

यी धार्मिक संघहरूमा कमजोरी नआओस् भन्ने उद्देश्यले ज्ञानयोग र कर्मयोगमा लागी, शीलाचारको प्रतिपालन गरी रहनू भनी यहाँ नरेन्द्रदेवले धार्मिक संघलाई निर्देशन दिएका छन् । यो कुरा विचारणीय छ ।

शैव र बौद्ध दुवै धार्मिक सम्प्रदायमा अनुष्ठान, तन्त्रमन्त्रले भिन्नभिन्नबाट बढी स्थान पाएपछि एक सम्प्रदायको अर्को सम्प्रदायमा असर परेको देखिएको छ । यस कुराको शास्त्रीय अनुसन्धान हुनु जरूरी छ।

वज्रेश्वरमण्डलीमा गरिने कारणपूजाको विवरण यस अभिलेखमा दिइएको छ तथा वज्रेश्वरको पूजाको अवसरमा भोज खुवाउँदा पाशुपत र ब्राह्मणहरूसमेतलाई खुवाउने चर्चा परेको छ।

यस अभिलेखमा दूतक युवराज स्कन्ददेव छन् । केही वर्षपछि नै यी स्कन्ददेवको मृत्यु भएको बुझिन्छ । संवत् ९५ को च्यासलटोलको नरेन्द्रदेवको अभिलेखमा युवराज शौर्यदेवको उल्लेख आएको छ ।

–★–

[१२९ संख्या]

# अनन्तलिङ्गेश्वरको नरेन्द्रदेवको अभिलेख

भक्तपुर सूर्यविनायकदेखि दक्षिणपट्टि पाटन लुभु शहरदेखि पूर्वउत्तरपट्टि रहेको डाँडोमा अनन्तलिङ्गेश्वरको मन्दिर छ। सो अनन्तलिङ्गेश्वरको पूर्वपट्टि ओर्ल्हने सिढीनिर यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको अभिलेख कुँदिएको भाग २ हात लम्बा, २१ अङ्गुल चौडा छ। यसको शिरोभागमा साँढे अङ्कित छ। यहाँ संवत्मा दशस्थानी अङ्क ८० देखिन्छ। एकस्थानी अङ्क देखिदैन। यस कारण यहाँको संवत् ८० देखि ८९ को बीचको देखिन्छ।

'अभिलेख–संग्रह' पहिलो भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति कैलासभृङ्गाभान्नयनोत्सवकारिणः कैलासकूटभवनात्

२. रम्याज्जगति विस्तृतात्। राज्ञां मर्णिलिच्छविवंशजानां योभूद्गुणैस्सर्वजनाति-गण्यैः

३. शक्तित्रयापूरितमण्डलश्रीः शशीव संलक्ष्यतरो नृपाणाम् स विनयनयप–

४. राक्रमालङ्कृतमूर्तिर्भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातो भ–

५. ट्टारकमहाराजाधिराजश्रीनरेन्द्रदेवः कुशली नेपालसीमान्तःपातिनः सर्वाधि-काराधिकृ–

६. तान् वर्तमानान् भविष्यतश्च समाज्ञापयति विदितमस्तु भवतां हंसगृहद्रङ्गस्य .... पश्चिमको–

७. –ग्रामसहितस्य चाटभटाप्रवेशः शरीरकोट्टोभयानेकमर्यादोपपन्नः कश्चित्प्रसा–

८. दशासनपट्टकोभूत्स च पूर्वराजविभ्रमतो नष्टोधुनास्माभिश्चिरन्तनव्यवस्थानुपाल-

९. नजातादरै (:) स एव प्रसादश्चिरस्थितये शिलापट्टकाभिलेख्येन प्रसादीकृतोत्र

१०. च मर्यादा कुलपतिना देया कार्तिकशुक्लैकादश्याम्मार्गसंस्कारार्थन्त-
११. ण्डुलमानिका ४ द्वादश्याम्भगवतो लोकपालस्वामिनः प्रतिष्ठादिने तत्रै-
१२. व ब्राह्मणजनस्य शान्त्युदकम्पणानां पुराणम् २५ द्रङ्गसीमाभ्यन्तरस्था-
१३. नाम्ब्राह्मणप्रमुखानाम्माचाण्डालेभ्यो धृताशनसमितादिभोजनम् आनर-
१४. स्तम्भानामेकैकस्य संस्थापनार्थम् तण्डुलमानिका ५४ गोयुद्धपताकावस्तु-
१५. पुराण २५ क्रियाकरणम्भगवतो लोकपालस्वामिनः पावनार्थन्धान्यमानिकाः
१६. ४० देवस्थापकस्य भुक्तिकाधान्यमानिका ..... ... ...दकभुक्तिका-
धान्यमानिकाः
१७. २४ देवभृत्यानान्दशानामेकतो भुक्तिकाधान्यमानिका १४० दासीनां विंशती-
१८. नामेकतो मानिकाशतत्रयं षष्टयुत्तर......त... मानिकाशतद्वयं चत्वारिंशद्मा
१९. निकाधिकं भासक्षेत्रेणैव....... ...... च यत्पूरणीयं मानिका-
२०. शतं त्रिशदुत्तरं तत्कुलपते ... ... ... ... देवभृत्यानाम्पुराण १२०
२१. दासीनाम्पुराण ८० मृत्तिका .... ... ..... ... ... का ५ पणपुराण ६०
२२. अङ्गनशोधनार्थन्तण्डुलमा...... ...... शोधनार्थङकोङकोग्रामपाञ्चा-
२३. लिकानान्तण्डुलमानिका...... ...... ...... १ माघशुक्लद्वादश्याम्
२४. द्रङ्गसीमाभ्यन्तरस्थानां ...... ...... ...... यथाग्रचफा
२५. ल्गुनमासेन क्षेत्रमणि... ... ... ... ... ... ... ...ज्येष्ठशुक्लैकाद-
२६. श्यां वराहयात्रायां सीमाभ्यन्तर ...... ...... ......
२७. सीनान्तण्डुलमानिका ...... ...... ......
२८. मण्या तन्धि ...... ...... .....
२९. अर्चनानिमित्तम् ...... ...... ......
३०. काः १२ इन्द्रो ...... ..... ......
३१. यजभवन ...... ...... ......
३२. दक्षिण ...... ...... ......
३३. ...... ...... .....
३४. ...... ...... .....
३५. पालनीयं ...... .....
३६. ...... ...... .....
३७. पूर्वराजप्र ... ... ... ... पालनपरैरेव ... ...
३८. शास्त्रानुशी... ... ...यतः पूर्वदत्तां द्विजातिभ्यो य(त्नाद्रक्ष) युधिष्ठिर

३९. महीं महीभुजां श्रेष्ठ दानाच्छ्रे योनुपालनमिति संवत् ८०......
४०. कृष्णदिवादशम्याम् दूतकश्चात्र श्रीयुवराज -- देवेति

## अनुवाद

कल्याण होस् । कैलासको टाकुरो जस्तो भएको, आँखालाई आनन्द दिने, राम्रो, संसारमा प्रसिद्ध भएको कैलासकूटभवन (दरबार) बाट

जुन राजा अरू सबै मानिसलाई माथ गर्ने गुणहरूद्वारा लिच्छविकुलका राजाहरूमा मणि जस्तै हुनुहुन्छ; प्रभुशक्ति मन्त्रशक्ति उत्साहशक्तिद्वारा मण्डलको लक्ष्मीलाई परिपूर्ण पारेका हुनाले चन्द्रमा झैं राजाहरूको हेरिरहुँ जस्तो हुनुहुन्छ ।

विनय (कर्तव्यको शिक्षा), नीति, पराक्रमले गर्दा जीउ सुहाएका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) बाट अनुग्रह पाएका, गाथमा आराम रहेका उहाँ भट्टारक महाराजाधिराज श्रीनरेन्द्रदेवबाट नेपालको सीमाभित्र पर्ने सारा अधिकारणहरूका अहिले बहाल रहेका र पछि बहाल हुनेसमेत अधिकारीहरूलाई आज्ञा भएको छ। तिमीहरूलाई थाहा होस् ।

पश्चिम को-ग्रामसहितको हंसगृहद्रङ्गमा चाटभटले पस्न नपाउने गरी शरीर र कोट्ट (किल्ला) दुवैसम्बन्धी अनेक स्थितिबन्धेजले युक्त भएको सनदपत्र गरिदिइएको थियो । पहिलेका राजाको बेहोशीले सो सनदपत्र लुप्त भयो। पुराना स्थिति साबिकबमोजिम कायम राख्न चाहिने हामीबाट अहिले सो सनद धेरै कालसम्म कायम होस् भनी शिलापत्रमा कुँदाएर निगाह गरिएको छ।

यसको बेहोरा यस प्रकारको छ–कुलपतिले कार्तिक शुक्ल एकादशीको दिन बाटोको सुधारको लागि चार मानिका चामल दिनू । भगवान् लोकपालस्वामीको प्रतिष्ठा भएको दिन द्वादशीमा त्यहीं ब्राह्मणहरूलाई शान्ति स्वस्तिको....लागि २५ पणपुराण दिनू। यस द्रङ्गको सीमाभित्र रहेका ब्राह्मणलगायत चाण्डालसम्मलाई घृताशनसमितादि भोजन र प्रत्येक व्यक्तिको एक एकको स्तम्भ राख्नाको लागि ५४ मानिका चामल । गोयुद्धपताका (साँढे जुधाई गरिने उत्सवको झण्डा) को लागि २५ पुराण।

भगवान् लोकपाल स्वामीको विधिविधान– सफासुग्घरको लागि ४० मानिका धान, देवता स्थापना गर्नेलाई.....मानिका भुक्तिका धान, ..... ...... लागि २४ भुक्तिका धान, दस जना देवदासहरूलाई जम्मा १४० मानिका भुक्तिका धान, बीस देवदासीहरूलाई जम्मा ३६० मानिका, .......२४० मानिका, भास खेतबाट नै ......... जुन पूरा गर्नुपर्ने १३० मानिका, त्यो कुलपतिको .........

देवदासहरूलाई १२० पुराण, दासीहरूलाई ८० पुराण, माटो.......६० पणपुराण, आँगन सफासुग्घर गर्न .......मानिका चामल.......सफासुग्घरको लागि कोङ्को ग्रामपाञ्चालीलाई ......मानिका चामल,........माघ शुक्ल द्वादशीको दिन द्रङ्गको सीमाभित्र रहेकाहरूको ...... .....फाल्गुन महीनाको शुरूमा क्षेत्रमणि ......... ज्येष्ठ शुक्ल एकादशीको दिन वराहयात्रामा सीमाभित्रका ...... .... वासीहरूलाई मानिका चामल...... ..... पूजाको निमित्त .....१२, इन्द्र .......पालना गर्नुपर्छ ।......

(पछिका राजाहरूले) .....अघिका राजाले बाँधेका स्थितिबन्धेज कायम राख्नुपर्छ । शास्त्रमा पनि भनिएको छ–राजामा श्रेष्ठ हे युधिष्ठिर, अघिका राजाहरूले ब्राह्मणलाई दान दिएको जग्गा कोशिशसाथ रक्षा गर्नुहोस् । दान दिनुभन्दा पहिलेको दान थामिदिनु उत्तम हो ।

संवत् ८०.....कृष्ण दशमी । यस वातका दूतक (मार्फत) श्रीयुवराज (स्कन्द)देव ।

## व्याख्या--

उठानका लिच्छवि राजाहरूको व्यक्तिगत रूपमा प्रायः वैष्णव धर्ममा श्रद्धा थियो; यस कारण त्यस वेला राजधर्मको रूपमा वैष्णव धर्मले स्थान पाएको थियो । यो कुरा सनदशिलापत्रको शिरोभागमा अङ्कित वैष्णव धर्मसम्बन्धी चिह्नबाट थाहा पाइन्छ । अंशुवर्माको शैवधर्मप्रति श्रद्धा थियो; उनले आफ्नो प्रशस्तिमैं 'भगवत्पशुपतिभट्टारकपादानुध्यात' भनी लेख्ने गर्न थालेका थिए । अंशुवर्मापछि जिष्णुगुप्तहरूले पनि आफूलाई 'पशुपतिभट्टारकपादानुध्यात' भनी लेखाए । नरेन्द्रदेव शक्तिमा आएपछि उनले पनि त्यसैं गरे । यसरी अब शैवधर्म राजधर्मको रूपमा रहन लाग्यो । नरेन्द्रदेवले व्यक्तिगत रूपमा शैव धर्मप्रति आस्था देखाए तापनि विभिन्न धर्मप्रति नरेन्द्रदेवको उदार नीति रहेको थियो । शैव सम्प्रदायलाई जस्तैं वैष्णव, बौद्ध आदि धार्मिक सम्प्रदायलाई उनले उत्तिकै प्रोत्साहन दिएको घटनाबाट उक्त कुरा थाहा पाइन्छ ।

अनन्तलिङ्गेश्वरभेकमा लिच्छविकालमा 'हंसगृह' नामक प्रसिद्ध बस्ती थियो । व्यापारको केन्द्रको रूपमा यो बस्ती विकसित भएको हुँदा 'द्रङ्ग' कहलाएको थियो । ब्राह्मणलगायत चाण्डाल-सम्मका विभिन्न जातका मानिसहरूको बसोबास यहाँ थियो ।

हंसगृहद्रङ्गभित्र लोकपास्वामीको मन्दिर थियो । नेपालका प्रसिद्ध देवतामा यी लोकपालस्वामी पनि पर्दथे । अंशुवर्माको हाँडिगाउँको अभिलेखमा 'हंसगृहदेवस्य पु ३ प १' भनी हंसगृहका देवतालाई तीन पुराण एक पण सन्मानस्वरूप भाग तोकिएको छ । यस अभिलेखबाट हंसगृहका लोकपालस्वामीको पूजा-आजा, वार्षिक यात्रा आदि धूमधामसंग हुन्थ्यो भन्ने थाहा पाइन्छ । यहाँको धार्मिक विधानको देखरेखको लागि एक जना कुलपति नै नियुक्त हुन्थे । देवमन्दिरमा सफाइ आदि तथा आरतीको वेला नृत्य आदिको लागि दसौं देवदास, बीसौं देवदासीहरू रहेका हुन्थे ।

कार्तिक शुक्ल द्वादशी लोकपालस्वामीको प्रतिष्ठादिन थियो । सो प्रतिष्ठादिनको उपलक्ष्यमा विशेष उत्सव हुन्थ्यो । इत्यादि कुरा यस अभिलेखबाट थाहा पाइन्छ ।

त्यस ताका वैष्णव देवतालाई 'स्वामी' भन्ने चलन थियो । अंशुवर्माको हाँडिगाउँको अभिलेखमा चाँगुनारायणलाई 'दोलाशिखरस्वामी' भनिएको छ । केवलपुरको अभिलेखमा (इचंगुनारायणलाई) 'नारायणस्वामी' भनिएको छ । साँखु दुगाहिटीको अभिलेखमा वामनस्वामीको उल्लेख छ । यस आधारमा विचार गर्दा यहाँ उल्लिखित 'लोकपालस्वामी' वैष्णव देवता हुन् भन्ने निश्चित हुन्छ ।

यहाँ लोकपालस्वामीको प्रतिष्ठादिन 'कार्तिकशुक्लद्वादशी' भन्ने उल्लेख परेको छ । यसबाट लोकपालस्वामीको परिचय पाउने एक आधार भेट्टाइन्छ । हाम्रो यहाँ अहिलेसम्म पनि 'कार्तिक शुक्ल द्वादशी' को दिन चार नारायणको दर्शन गर्ने मेला लाग्दछ । यस परम्पराको जग लिच्छविकालमा कायम भएको रहेछ । वृषदेवभन्दा केही पुस्ता अघिका राजा हरिदत्तले चार नारायणको प्रतिष्ठा गरेका हुन् भन्ने कुरा परम्पराबाट चलेर आइरहेको छ । इचंगुको ने. सं. ३२० को अभिलेखमा गोपालवंशावली आदि वंशावलीमा यस कुराको चर्चा परेको छ । यताबाट हंसगृहका 'लोकपालस्वामी' चार नारायणमध्ये एक रहेछन् भन्ने संकेत पाइन्छ ।

यस अभिलेखको तल्लो भाग निकै खण्डित हुँदा हंसगृहमा हुने उत्सव, जात्रा आदि पूर्णरूपमा बुझ्न नसकिने भइसकेको छ । तर बचेको भागबाट लिच्छविकालमा यहाँ वराहयात्रा आदि यात्रा हुन्थे; 'गोयुद्ध' उत्सव हुन्थ्यो भन्ने थाहा पाइन्छ । गोयुद्ध उत्सव लिच्छविकालमा लोकप्रिय देखिन्छ । दक्षिणकोलीग्रामद्रङ्गमा हुने गोयुद्धको चर्चा माथि गरिसकेको छ । गोयुद्धोत्सवमा पताका (झण्डाविशेष) पनि रहन्थ्यो भन्ने यस अभिलेखबाट थाहा पाइन्छ ।

लिच्छविकालमा विकसित बस्ती हंसगृहद्रङ्ग कारणवश पछि उजाड भयो । अहिले यस भेकमा विशेष बस्ती छैन ।

-★-

# वटुकभैरवको अभिलेख

ललितपुर वटुकभैरवको मन्दिरनिर यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको शिरोभागमा दुइतिर मृग र बीचमा धर्मचक्र अङ्कित छन्। यहाँ संवत् ८९ छ।

नोलीद्वारा ७१ संख्याको रूपमा यो छापिएको छ। यसको पाठ रुजू गर्न सकिएन।

## मूलपाठ

१. ...... प्र ......सरङ्ग—मौ पोतशि- - त्तौ-स.ि भ—
२. ......न... ... वलै-म्-स्थितं यस्य वः पायात्
३. ......रः......सरङ्ग......रम.... दूराद... राजनि—
४. · . . . .धि-धरणिमण्डल..... स-भां-द- -स्थि-राज्य
५. भद्राधिवासशिल... ...वा.... .... ..... ... ...
६. —पला—जि. ि कृत .... ... ..... ... ... ... ...
७. —प्रसम्क् ...... ........ ......... ....... ... ...
८. —पतिना.. ... .... ..... ... ..... ..... ... ...
९. भट्ट... ... ... ..... .... ...... .... .... .....
१०. —वे.... .... ...... .... ..... ... .... ... ... ...
११. ... ... ... ... .. ... ...... ... ...
१२. ........ ........ ........ ........
१३. ........ ........ ..... ... .....
१४. ....... ..... .... ... दोप—रिभि
१५. . . . . . . . . . . . . . . . . . . . . . .त्तभ त्र . . . . . . .
१६. . . . . . . . . . . . . . . . . . . . . . . . . .स्मदूर्ध्वं भ

१७. .........पत...............एवं स्थितमित्यस्म

१८. -- द्रक्षासंविधानं... ... शासनं पूर्वनृपतेः

१९. -ति-स्म महीपतिः......... पुण्य-निष्ठानां स्थैर्यम्प्र

२०. --दा...........दूतकश्चात्र राजपुत्रजनार्दनवर्मा

२१. संवत् ८९...............दिवात्रयोदश्याम् ॥

# अनुवाद

.......रहेको जसको......ले तिमीहरूको रक्षा गरोस् । ....टाढाबाट..... टाढाबाट......पृथ्वीमण्डल.....राज्य......राम्ररी.....भट्ट......हामीभन्दा पछि हुने (राजाहरूले पनि) ....यसरी हामीबाट स्थितिबन्धेज बाँधेको भनी यो थाम्नुपर्छ । जुन राजाले अघिका राजाका सनदका रक्षा गर्छन्, ....पुण्यको काममा लागेकाको.....स्थिर भई..... .....

यस बातका दूतक (मार्फत) राजपुत्र जनार्दनवर्मा। संवत् ८९.....त्रयोदशी ।

**व्याख्या-**

यो अभिलेख ज्यादै खिइएको र बीचमा खण्डित पनि भएको हुँदा अहिले केही अक्षर मात्र पढिएका छन् । यसो हुँदा यसमा के विषय परेको थियो; ठम्याउन गाह्रो भएको छ । बचेको भागबाट धार्मिक विधानसम्बन्धी कुनै व्यवस्था बाँधी यो अभिलेख राखिएको हो भन्ने बुझिन्छ । यस अभिलेखको शिरोभागमा धर्मचक्र र मृग अङ्कित गरिएका हुँदा बौद्धधर्मसंग यसको सम्बन्ध रहेको अनुमान हुन्छ ।

यसमा संवत् ८९ देखिन्छ। यस कारण यो अभिलेख नरेन्द्रदेवको हो भन्ने निश्चित छ। यसमा दूतक राजपुत्र जनार्दनवर्मा छन् । संवत् ८३ को पाटन गैह्रीधाराको अभिलेखमा दूतक भट्टारक श्रीयुवराज स्कन्ददेव रहेका थिए। यस बेला भने उनको मृत्यु भइसकेको बुझिन्छ । अनि संवत् ९५ को च्यासलटोलको अभिलेखमा अर्को युवराज शौर्यदेव दूतक रहेका छन् । यसबाट स्कन्ददेवको मृत्युपछि केही वर्षसम्म नरेन्द्रदेवका युवराज घोषित गरिने सन्तान भएनन् भन्ने बुझिन्छ ।

भद्राधिवासभवन-यस अभिलेखमा 'भद्राधिवास' शब्दको उल्लेख आएको छ । शायद यस शब्दले नरेन्द्रदेवले बनाउन लाएको नयाँ दरबारलाई लक्ष्य गरेको हुन सक्छ । किनभने यसको लगत्तै पछिका नरेन्द्रदेवका सनदपत्रहरू 'भद्राधिवास' भवनबाट जारी गरिएका पाइन्छन् । नरेन्द्रदेवले आफ्ना नयाँ दरबारको नाम भद्राधिवास किन राखे; यो विचारणीय छ। लिच्छवि राजाहरूको मूल राजगद्दी मानगृहमा थियो। मानगृहभन्दा कैलासकूट भवन भव्य र पाइक पर्ने हुँदा नरेन्द्रदेवले कैलासकूटभवनमा बसी शासन चलाए। तर पछि भद्राधिवास भवन बनाएपछि नरेन्द्रदेवले राजगद्दी पनि यहीं सारेको देखिन्छ। यसै हुँदा यसको नाम 'भद्राधिवास' भन्ने रहेको बुझिन्छ। 'भद्रासन' शब्दले राजगद्दीलाई बुझाउँछ ।

# बलम्बूको अभिलेख

बलम्बूमा हालसालै बनेको 'प्रणिधिपूर्णविहार' नामक विहार छ । त्यहाँ रूख लगाउन खन्दा यो शिलापत्र भेट्टिएको हो भन्ने सुनिन्छ। यसको आधाभन्दा बढी माथिल्लो भाग खण्डित छ। अहिले पाइएको भागमा आठ पङ्क्ति मात्र बाँकी छन् । अहिले पाइएको भागको अभिलेख कुँदिएको अंश २२ अङ्गुल लम्बा, ११ अङ्गुल चौडा छ। यहाँ संवत् ९० छ।

ब्यालिन्जरद्वारा यो अभिलेखको चित्र प्रकाशित भएको छ । 'अभिलेख-संग्रह' ५ भागमा हामीले यो छपाएका छौं ।

## मूलपाठ

... ... ... ... ...

१. इत्येवंविदितार्थै(रस्म)त्पादोपजीविभि(रन्यैर्वायं प्रसादो नान्य)
२. था करणीयो यस्त्वेतामाज्ञामुत्क्रम्यान्यथा कुर्यात्कारयेद्वा तमह–
३. मत्यर्थन्न मर्षयिष्यामि ये वास्मदूर्ध्वम्भवितारो भूमिपतय–
४. स्तैरपि पारम्पर्यमेवंस्थितमित्यस्मत्प्रसादप्रतिपालनसं–
५. विधानपरैरेव भाव्यमिति स्वशासनश्चिरस्थित्यै लोक–
६. द्वयविशुद्धये रक्षितव्य्यं नृपैर्यत्नात्पूर्वभूपतिशासन–
७. मिति स्वयमाज्ञा दूतकश्चात्र रुद्रचन्द्रगोमीति
८. संवत् ९० वैशाखशुक्लदिवादशम्याम्

## अनुवाद

........यो कुरा थाहा पाएर हाम्रो तर्फबाट जीविका गर्नेहरूले (सरकारी कर्मचारी-हरूले) वा अरू कसैले पनि यो निगाह अन्यथा नगर्नू। जसले यो आज्ञालाई मटेरेर अन्यथा गर्ला वा

गराउला; त्यसलाई हामी पक्का सहनेछैनौं । हामीभन्दा पछि हुने राजाहरूले पनि परम्पराले चलेर आएको भनी हाम्रो निगाह थाम्नुतिर लाग्नुपर्छ ।

आफ्नो सनद धेरै कालसम्म रहोस् भनी, इहलोक परलोक सुध्रोस् भनी राजाहरूले अघिका राजाहरूका सनद कोशिशसाथ रक्षा गर्नुपर्छ। यो मेरो आफ्नै आज्ञा हो ।

यहाँ दूतक (मार्फत) रुद्रचन्द्र गोमी। संवत् ९० वैशाख शुक्ल दशमी ।

## व्याख्या–

यस अभिलेखको माथिल्लो भाग पाइएको छैन; तल्लो भाग मात्र हाल पाइएको छ। यस कारण यसमा के विषय परेको थियो, सो बुझिदैन। यहाँ संवत् ९० स्पष्ट देखिने हुनाले यो अभिलेख नरेन्द्रदेवको हो भन्ने चाहिं निश्चित छ ।

अघिका राजाहरूले गरिदिएका सनदहरूको पालना पछि हुने राजाहरूले गर्नुपर्दछ; यसो गरे मात्र इहलोक, परलोक दुवै सप्रन्छन् भनी यस अभिलेखमा जोड दिई लेखिएको छ। यसबाट कुनै विशेष व्यवस्था बाँधी यो सनदपत्र गरिदिइएको बुझिन्छ ।

यसमा दूतक रुद्रचन्द्र गोमी रहेका छन्। गुप्त आभीरहरू पन्छाइएपछि नरेन्द्रदेवका विश्वासपात्र व्यक्तिका रूपमा देखापरेका 'गोमी' यिनै एक जना मात्र हुन्। यसताका नरेन्द्रदेवका छोरा थिएनन्। यस कारण दूतक पदमा 'युवराज' को उल्लेख नभएको हो ।

—★—

# च्यासलटोलको नरेन्द्रदेवको अभिलेख

ललितपुर च्यासलटोलमा गणेशस्थानसंगै यो शिलापत्राभिलेख रहेको छ। यसको अभिलेख कुँदिएको भाग २४ अङ्गुल लम्बा, २१ अङ्गुल चौडा छ। यसको शिरोभागमा साँढे अङ्कित छ। यहाँ संवत् ६५ छ।

नोलीद्वारा ७२ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ॐ स्वस्ति भद्राधिवासभवनात् ... ...
२. ... ...बप्प ... ...... ....
३. ... ... ल ... ... ......
४. ... ... ... ... ......
५. .... ... ... ......
६. ... ... ... ... ......
७. ... ... ... ... ......
८. ... ... लकरल...... ......
९. ......वर्तमानान्भविष्यतश्च......(कुश)
१०. (ल)माभाष्य समाज्ञापयति विदितम्भवतु (भव)
११. (तां य)थैषाङ्गणिगुल्मकोमालिहि.....माशी...
१२. ....ञ्चाटभटानामप्रवेश्येन ... त्वनास...
१३. ... ... तुष्टैः प्रसादः कृत एवमधिगतार्थै–
१४. (र)स्मत्पादोपजीविभिरन्यैर्वा न कैश्चिदयम्प्रसा–
१५. (दो)न्यथा करणीयो य इमामाज्ञामुल्लङ्घ्यान्यथा (कु)

१६. र्यात् कारयेद्वा सोस्माभिर्न मर्षणीयो ये चास्मदू (र्ध्व)
१७. (भ) वितारो भूमिपालास्तैरपि पूर्वराजप्रसादसं-
१८. रक्षणप्रवणमानसैरेव भाव्यमिति स्वयमाज्ञा
१९. दूतकश्चात्र श्रीयुवराजशौर्यदेवः संवत् ९५
२०. पौषशुक्लदिवादशम्याम्‌॥

# अनुवाद

कल्याण होस् । भद्राधिवास भवन (दरबार) बाट ...... .....(परमभट्टारक महाराजाधिराज नरेन्द्रदेवबाट)......अहिले बहाल रहेका र पछि बहाल हुनेहरूलाई कुशल मङ्गल सोधेर आज्ञा भएको छ । तिमीहरूलाई थाहा होस् । जस्तै यी गणिगुल्म.......मा चाटभटले पस्न नपाउने गरी ......खुशी भएर निगाह गरिएको छ ।

यो कुरा थाहा पाई हाम्रो तर्फबाट जीविका चलाउनेहरूले वा अरू कसैले यो निगाह अन्यथा नगर्नू । जसले आज्ञा नाघेर अन्यथा गर्ला वा गराउला, त्यसलाई हामी सहनेछैनौं । हामीभन्दा पछि हुने राजाहरूले पनि अधिका राजाले गरेको निगाह थाम्नुपर्छ । यो मेरो आफ्नै आज्ञा हो ।

यस बातका दूतक (मार्फत) श्रीयुवराज शौर्यदेव । संवत् ९५ पौष शुक्ल दशमी ।

**व्याख्या–**

यस अभिलेखको उठानको भागमा पाप्रा उप्केका हुनाले अहिले यसमा राजाको नाम देखिंदैन । तर यहाँ संवत् ९५ स्पष्ट देखिन्छ; यो सनदपत्र भद्राधिवासभवनबाट जारी गरिएको छ । यसबाट यो अभिलेख नरेन्द्रदेवको हो भन्ने निश्चित हुन्छ ।

ललितपुर च्यासलटोलभेकको कुनै ग्राममा चाटभटले पस्न नपाउने गरी निगाह गरिएको कुरा यसमा परेको छ । यसबाट स्थानीय जनतालाई मालपोत माफी गरी सुबिधा गरिदिएको बुझिन्छ ।

यस अभिलेखमा दूतक युवराज शौर्यदेव छन् । यिनी नरेन्द्रदेवका माहिला छोरा देखिन्छन् । यसभन्दा अघि स्कन्ददेव युवराज घोषित गरिएका थिए । स्कन्ददेवको मृत्यु भएको हुँदा अहिले शौर्यदेवलाई युवराज घोषणा गरिएको हो । तर नरेन्द्रदेव छँदै यी शौर्यदेवको पनि मृत्यु भएको देखिन्छ । यसो हुँदा नरेन्द्रदेवपछिको अन्तिम समयको अभिलेखमा युवराज शिवदेवको उल्लेख पाइन्छ । नरेन्द्रदेवपछि गद्दीमा यिनी नै बसे ।

–★–

# यागबहालको नरेन्द्रदेवको अभिलेख

ललितपुर यागबहालमा यो शिलापत्राभिलेख रहेको छ। यसको अभिलेख कुँदिएको भाग ४० अङ्गुल लम्बा २१ अङ्गुल चौडा छ। यहाँ संवत् १०३ छ।

लेभीद्वारा २० संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ७४ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १४ अङ्कमा मैले पनि यो अभिलेख छपाएको छु।

## मूलपाठ

१. (ॐ स्वस्ति) भद्राधिवासभवनादप्रतिहतशासनो भगवत्पशुपतिभट्टारकपादानु-
गृहीतो

२. (ब)प्पपादानुध्यातो लिच्छविकुलकेतुः परममाहेश्वरपरमभट्टारकमहाराजा-
धिराज-

३. (श्री)नरेन्द्रदेवः कुशली गुल्लंतङ्ग्ग्रामनिवासिनः प्रधानपुरस्सरान् सर्वकुटुम्बिनः
(कु)

४. शलमाभाष्य समाज्ञापयति विदितम्भवतु भवतां यथायं ग्रामो भगवत्पशुपतौ (स्व)

५. कारितमहाप्रणालीनामशाठ्येन सर्वेतिकर्तव्यानामनुष्ठानार्थं विष्टया-
ज्ञानुविधायि (त्वे)-

६. न चाटभटानामप्रवेश्येन शरीरकोट्टमर्यादोपपन्नः शरीरसर्वकरणीयप्र (ति)—

७. मुक्तः कुटुम्बी (?) बहिर्देशगमनादिसर्वविष्टिरहितो गुर्विणीमरणे गर्भोद्धरणाय

८. (प)णशतमात्रदेयेन सक्षतगोष्ठापमृगापचारे सपणपुराणत्रयमात्रदेयेन (च)

९. युक्तश्चौरपरदारहत्यासम्बन्धादिपञ्चापराधकारिणां शरीरमात्रं राजकुलाभा-

१०. व्यन्तद्गृहक्षेत्रकलत्रादिसर्वद्रव्याण्यार्यसङ्घस्येत्यनेन च सम्पन्नःश्रीशिवदेवविहा-

११. (रे) चर्तुर्दिशार्यभिक्षुसङ्घायास्माभिरतिसृष्टः सीमा चास्य पूर्वोत्तरेण विहारा-
१२. -प्रणालीभ्रमस्ततो दक्षिणमनुसृत्य गोमिभूधञ्चोप्रदेशे वाग्वतीनदीभा-
१३. -नुसृत्य गोत्तिलमकसंगमस्तत उत्तरङ्गत्वा श्रीमानदेवविहारखर्जुरिका (वि)
१४. (हा) रक्षेत्रयोः संधिस्ततःपश्चिमङ्गत्वा खारेवालगञ्चो ततः पश्चिममनु (सृत्य)
१५. (म) ध्यमविहारस्य पूर्वदक्षिणकोणपार्श्वालिमार्गेणोत्तरङ्गत्वा प्रणाल्याः पूर्वो-
१६. (त्त) रानुसारेण कुण्डलक्षेत्रस्य दक्षिणपूर्वकोणे महापथस्ततो मार्गानुसा (रे) -
१७. णोत्तरङगत्वाभयरुचिविहारस्य पूर्वप्रा (कार) स्ततः पूर्वोत्तरमनुसृत्य वार्तक-
१८. ल्याणगुप्तविहारस्य दक्षिणपूर्वप्राकारो ततः पूर्वोत्तरमनुसृत्य चतुर्भा-
१९. लटसनविहारस्य पूर्वदक्षिणकोणस्तत उत्तरम्पश्चिमञ्चानुसृत्योत्तरप-
२०. श्चिमकोणे बृहत्पथस्तत्पूर्वोत्तरङ्गत्वा कम्बीलम्प्रा तत उत्तरपूर्वमनुसृत्य
२१. श्रीराजविहारेन्द्रमूलकयोः पानीयमार्गसंघात (खातकस्तस्योत्तरपूर्वेण)
२२. (बृ) हन्मार्गस्य दक्षिणवाटिकाया दक्षिणाल्यनुसारेण पूर्वदक्षिणञ्चानुसृत्य प-
२३. -थस्ततो यावत्स्वल्पप्रणाल्यां परिगेस्पुल्लीपार्श्वे मार्गस्ततस्तमेव मार्गन्दक्षिणे-
२४. (ना) नुसृत्य स एव विहारस्ततः प्रणालीभ्रम इत्येतत्सीमपरिक्षिप्तेस्मिन्नग्र (हा)
२५. (रे य) दि कदाचिदार्यसंघस्याशक्यं कार्यमुत्पद्येत तदा परमासनेन विचा (रणी)
२६. यमित्येवमवगतार्थैरस्मत्पादोपजीविभिरन्यैर्वायम्प्रसादोन्यथा न क (र)
२७. (णीयो यस्त्वन्यथा कु) र्यात्कारयेद्वा सोस्माभिस्सुतरान्न मर्षणीयो
२८. (ये चास्मदूर्ध्वम्भवितारो भूमिपा) लास्तैरप्युभयलोकनिरवद्यसुखार्थिभिः पू-
२९. (र्वराजवि) हि (तोयं विशिष्टः प्रसाद इ) ति प्रयत्नत (स्सम्यक्परि) पालनीय
एव यतो (ध)
३०. (र्मशास्त्र) व (च) नं (बहुभि) र्वसुधा दत्ता (राजभि) स्स (गरादिभिः ।
यस्य यस्य यदा भूमिस्त)
३१. स्य तस्य तदा (फलम्) ...... ...... ......
३२. संवत् (१०) ३ ज्यैष्ठ (शु) क्लसप्तम्याम्

# अनुवाद

कल्याण होस्। भद्राधिवास भवन (दरबार) बाट बेरोकटोक शासन (हुकूम) भएका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, लिच्छविकुलका झण्डास्वरूप भएका, गाथमा आराम रहेका, परममाहेश्वर, परमभट्टारक, महाराजाधिराज श्री-

नरेन्द्रदेवले गुल्लंतङ्ग ग्राममा बस्ने मुखियालगायत सबै गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् ।

भगवान् पशुपतिको क्षेत्रमा आफूले बनाएको ठूलो धारामा कपट नगरीकन गर्नुपर्ने सबै काम गराउनाको लागि विष्टि लाउन, खटनपटन गर्न पाउने गरी, चाटभटले पस्न नपाउने, शरीर र कोट्ट (किल्ला) सम्बन्धी स्थितिबन्धेजले युक्त भएको, शरीरले गर्नुपर्ने सबै काम गर्नुनपर्ने गरिएको, आबादीसहितको, विदेश जानुपर्दा आदिमा लाग्ने सबै विष्टि (झारा) माफ गरिएको गर्भिणीको मृत्यु हुँदा गर्भ झिक्नाको लागि शय पण मात्र दिए पुग्ने, गोठमा धाइते मृगको (वस्तुभाउको) हेरचाह नगरेमा (?) तीन पुराण र तीन पण मात्र दिए पुग्ने, चोरी गर्नु अर्काकी स्वास्नी हर्नु, ज्यान मार्नु तथा यस्ता अपराध गर्नेहरूसंग सम्बन्ध राख्नु आदि पञ्चापराध गर्ने अपराधीको शरीरचाहिं राजदरबार लाग्ने तिनका घरखेत जहान–बच्चा आदि सबै धनसम्पत्ति आर्यसंघले नै पाउने गरी यो ग्राम श्रीशिवदेवविहारमा चारैतिरबाट आइबसेका आर्यभिक्षुको संघलाई हामीबाट दान दिइएको छ ।

यसको सीमा यस प्रकारको छ– पूर्व उत्तरतिर विहारको. . . . धारा. . . . त्यताबाट दक्षिण-तिर लागी गोमिभूधञ्चो भन्ने ठाउँमा वाग्वती नदीको. . . . . तिर लागी गोत् तिलमक (कुलो)को जोर्नी, त्यताबाट उत्तरतिर लागी श्रीमानदेवविहार र खर्जुरिकाविहारको खेतको दोसाँध, त्यताबाट पश्चिमतिर गई खारेवालगञ्चो, त्यताबाट पश्चिमतिर लागी मध्यमविहारको पूर्वदक्षिण कुनाको नजीकैको आली साँधको बाटोदेखि उत्तरतिर लागी धाराको पूर्वउत्तरतिरबाट कुण्डलक्षेत्रको दक्षिण पूर्व कुनामा मूल सडक, त्यताबाट बाटैबाटो उत्तरतिर गई अभयरुचिविहारको पूर्वपट्टिको पर्खाल, त्यताबाट पूर्व–उत्तरतिर लागी वार्तकल्याणगुप्तविहारको दक्षिण र पूर्वका पर्खाल, त्यताबाट पूर्व–उत्तरतिर लागी चतुर्भालटनसनविहारको पूर्व दक्षिण कुना, त्यताबाट उत्तरपूर्वतिर लागी श्रीराजविहार र इन्द्रमूलकको पानी जाने बाटो (ढल) को दोसाँधको पोखरी, त्यसको उत्तरपूर्वतिर मूल सडकको दक्षिणतिरको बगैंचाको दक्षिण आलीसाँधतिरबाट पूर्वदक्षिणतिर लागी. . . . . सडक, त्यताबाट सानो धारासम्म परिगेस्पुल्लीनजीकैको बाटो, त्यताबाट त्यही बाटोको दक्षिणतिर लागी त्यही विहार, त्यताबाट धारा ।

यस इलाकाभित्रको यो अग्रहार (बिर्ता जग्गा) मा यदि कुनै वेला आर्यसंघले छिन्न नसकिने मुद्दामामिला उठ्यो भने त्यस वेला परमासन (राजाको भित्री इजलास) मा विचार गर्नू ।

यो कुरा थाहा पाई हाम्रा कर्मचारीहरूले वा अरू कसैले पनि यो निगाह अन्यथा नगर्नू । जसले यो आज्ञा नाघेर अन्यथा गर्ला वा गराउला; त्यसलाई हामी बिलकुल सहनेछैनौं । हामीपछि जुन राजाहरू हुनेछन्; तिनीहरूले पनि दुवै लोक (इहलोक, परलोक)मा उत्तम सुख चाहेर अघिका राजाले गरेको यो विशिष्ट निगाह भन्ने संझेर कोशिशसाथ राम्ररी थाम्नुपर्छ । किनभने धर्मशास्त्रमा लेखिएको छ– सगर आदि धेरै राजाहरूले पृथ्वीको पालना गरिकेसका छन् । जस जसको पालामा जुन भूमि छ; त्यस वेला त्यसको फल तिनलाई नै हुन्छ । . . . . . . . .

संवत् १०३ ज्येष्ठ शुक्ल सप्तमी ।

# वज्रघरको नरेन्द्रदेवको अभिलेख

पशुपति वज्रघरनिर पहिले यो शिलापत्राभिलेख रहेको थियो। हाल यो अभिलेख 'राष्ट्रिय-संग्रहालय' छाउनीमा लगी राखिएको छ। यसको अभिलेख कुँदिएको भाग ४३ अङ्गुल लम्बा, १९ अङ्गुल चौडा छ। यहाँ संवत् १०३ छ।

भगवान्लालद्वारा १३ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ७३ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १४ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. ॐ स्वस्ति भद्राधिवास (भवनादप्रतिहतशासनो भगवत्प) शुपतिभट्टारकपादानु-
२. गृहीतो बप्पपा (दानुध्यातो लिच्छविकुलकेतुः प) रममाहेश्वरपरमभट्टा-
३. रकमहाराजाधिराज (श्रीनरेन्द्रदेवः कुशली)—ञ्चगर्तग्रामे प्रधानपुरस्सरा-
४. न्सर्वकुटुम्बिनः कुशल (माभाष्य समाज्ञाप) यति विदितम्भवतु भवतां यथाय—
५. ङ्ग्रामो भगवत्पशुपतौ स्वकारितमहाप्रणालीनामशाठ्येन सर्वेतिकर्तव्याना-
६. मनुष्ठानार्थं विष्टचाज्ञानुविधायित्वेन चाटभटानामप्रवेश्येन शरीरकोट्टमर्या-
७. दोपपन्नः शरीरसर्वकरणीयप्रतिमुक्तः कुटुम्बी (?) बहिर्देशगमनादिसर्ववि-
८. ष्टिरहितो गुर्विणीमरणे गर्भोद्धरणाय पणशतमात्रदेयेन सक्षतगोष्ठापमृ-
९. गापचारे सपणपुराणत्रयमात्रदेयेन च युक्तश्चौरपरदारहत्यासम्बधादि-
१०. पञ्चापराधकारिणां शरीरमात्रं राजकुलाभाव्यन्तद्गृहक्षेत्रकलत्रादिसर्वद्रव्या-
११. ण्यार्यसंघस्येत्यनेन च सम्पन्नः श्रीशिवदेवविहारे चतुर्दिशार्यभिक्षुसङ्घायास्मा-
१२. भिरतिसृष्टः सीमा चास्य पूर्वोत्तरेण श्रेष्ठदुल्मूर्ध्नि प्रीतुब्रुमध्यमाली तस्याः किञ्चित्पू-

१३. र्वेण वृहदाल्या दक्षिणमनुसृत्य चुह्वङ्गभूमिम्पूर्वदक्षिणेन वेष्टयित्वा म्हुप्रिङगामी
१४. मार्गस्तन्दक्षिणमनुसृत्य सरलवनगामी मार्गस्तम्पश्चिममनुसृत्य म्हुप्रिम्पाञ्चा-
१५. लिकक्षेत्रपश्चिमकोणाद्दक्षिणपश्चिममनुसृत्य श्रीखर्जुरिकाविहारस्य सर्वो-
१६. परिपक्षेत्रपश्चिमाल्या दक्षिणङ्गत्वा पृच्छिम्रूदक्षिणेश्वराम्बुतीर्थक्षेत्राणां सन्धिः
१७. ततश्च दक्षिणमनुसृत्य शशिक्षेत्रपूर्वदक्षिणकोणात्किञ्चित्पश्चिमङ्गत्वा मित्तम्ब्रूपू-
१८. र्वाल्या दक्षिणमनुसृत्य तत्सर्वदक्षिणाल्या पश्चिमङ्गत्वा किञ्चिदुत्तरञ्च ततः पश्चिम-
१९. मनुसृत्य च निम्बूदक्षिणपश्चिमकोणाद्दक्षिणङ्गत्वा लोप्रिङग्रामेन्द्रगौष्ठिकक्षेत्र-पूर्व-
२०. दक्षिणकोणात्किञ्चित्पश्चिमङ्गत्वा म्हुप्रिम्पाञ्चालिकक्षेत्रपश्चिमाल्या दक्षिणमनुसृत्य
२१. ......... .....भूमेरुत्तरपूर्वकोणे म्हुप्रिङगामी बृहत्पथस्तम्पश्चिममनुसृत्य म्हुंप्रिलो-
२२. प्रि—स्तिस्रोतोधोनुसृत्य मेकण्डिदुल्तिलमकसङ्गमस्तत्पश्चिमोर्ध्वमधिरुह्य कन्दर-
२३. ........ .....नुसारेणोत्तरपश्चिममनुसृत्य पानीयपातो यावल्लोप्रिङगा-मिनम्मार्गम् . .
२४. ...... ......शिखरक्षेत्रसर्वदक्षिणाल्या पश्चिमङ्गत्वा लोप्रि... तक्षेत्रन्ततः
२५. प(श्चिमम)नुसृत्योत्तरञ्च वृहदारामस्य पूर्वमुखे महापथस्तत (उ)त्तरङ्गत्वा वृह-
२६. दा(राम)स्य पूर्वोत्तरकोणादधोवतीर्य वनपर्यन्तमुपादाय फंशिन्प्रल्स्रोतस्तदु-
२७. त्तरमनुसृत्य स्रोत.......मसस्रोतोनुसारेण ब्रह्मतीर्थसंवेद्यन्नदीवाग्वसीपूर्व्व—
२८. मनुसृत्य (उत्त) रङ्गत्वा कन्दराग्रानुसारेण श्रेष्ठिदुल्मूर्ध्नि सैव प्रीतुब्रुमध्यमालीत्ये
२९. (तत्सीमपरिक्षिप्तेस्मिन्) नग्रहारे यदि कदाचिदार्यसङघस्याशक्यङकार्यमु(त्प) द्येत
३०. तदा परमा(सनेन वि)चारणीयमापणकरोधिकमासतुलादण्डादिश्च सर्वं एवा-
३१. र्यभिक्षु(संघस्ये)त्येवमवगतार्थैं रस्मत्पादोपजीविभिरन्यैर्वायम्प्रसादोन्यथा न
३२. कर (णीयो यस्त्वेता) माज्ञामुल्लङघ्यान्यथा कुर्यात्कारयेद्वा सोस्माभिः सुतरान्न मर्षणीयो

३३. ये चास(मदूर्ध्वम्भवि)तारो भूमिपालास्तैरप्युभयलोकनिरवद्यसुखार्थिभिः पूर्वरा-

३४. राजविहितोयं विशिष्टः प्रसाद इति प्रयत्नतस्सम्यक्परिपालनीय एव यतो

३५. धर्मशास्त्रवचनम्बहुभिर्वसुधा दत्ता राजभिस्सगरादिभिः यस्य यस्य यदा भूमि-

३६. स्तस्य तदा फलमिति स्वयमाज्ञा दूतकश्चात्र भट्टारकश्रीशिवदेवः

३७. संवत् १०३ ज्यैष्ठशुक्लदिवात्रयोदश्याम् ।।

# अनुवाद

कल्याण होस्। भद्राधिवास भवन (दरबार) बाट बेरोकटोक शासन (हुकूम) चलेका, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, लिच्छविकुलका झण्डास्वरूप भएका, गाथमा आराम रहेका, परममाहेश्वर, परमभट्टारक महाराजाधिराज श्रीनरेन्द्र-देवले –ञ्चगर्तग्राममा बस्ने मुखियालगायत सारा गृहस्थीहरूलाई कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् ।

भगवान् पशुपतिको क्षेत्रमा आफूले बनाएको ठूलो धारामा कपट नगरीकन गर्नुपर्ने सबै काम गराउनाको लागि विष्टि लाउन खटनपटन गर्न पाउने गरी, चाटभटले पस्न नपाउने, शरीर र कोट्ट (किल्ला) सम्बन्धी स्थितिबन्धेजले युक्त भएको, शरीरले गर्नुपर्ने सबै काम गर्नु नपर्ने गरिएको, आबादीसहितको, विदेश जानुपर्दा आदिमा लाग्ने सबै विष्टि (झारा) माफ गरिएको, गर्भिणीको मृत्यु हुँदा गर्भ झिक्नाको लागि शय पण मात्र दिए पुग्ने, गोठमा घाइते मृग (वस्तुभाउ) को हेरचाह नगरेमा (?) तीन पुराण र तीन पण मात्र दिए पुग्ने, चोरी गर्नु अर्काकी स्वास्नी हर्नु ज्यान मार्नु तथा यस्ता अपराध गर्नेहरूसंग सम्बन्ध राख्नु आदि पञ्चापराध गर्ने अपराधीको शरीरचाहिं राजदरबार लाग्ने , तिनका घर–खेत जहान–बच्चा आदि सबै धनसम्पत्ति आर्यसङ्घले नै पाउने गरी यो गाउँ श्रीशिवदेवविहारमा चारैतिरबाट आई बसेका आर्यभिक्षुको संघलाई हामीबाट दान दिइएको छ ।

यसको सीमा यस प्रकारको छ– पूर्वोत्तरतिर श्रेष्ठिवुल्को शिरानमा प्रीतुब्रुको माझको आली सांध, त्यसको केही पूर्वतिर ठूलो आली साँधदेखि दक्षिणतिर लागी चुह्वङ्ग भूमिलाई पूर्व र दक्षिणतिरबाट बेरेर म्हुप्रिङ्ग जाने बाटो, त्यसको दक्षिणतिर लागी सल्लोको वन जाने बाटो, त्यसको पश्चिमपट्टि लागी म्हुप्रिङ्ग पाञ्चालीको खेतको पश्चिम कुनाबाट दक्षिण पश्चिमतिर लागी श्रीखर्जुरिकाविहारको सर्वोपरिप खेतको पश्चिम आली साँधबाट दक्षिणतिर लागी पुच्छिब्रू दक्षिणेश्वर र अम्बुतीर्थका खेतको दोसाँध, त्यताबाट पनि दक्षिणतिर लागी शशिखेतको पूर्व दक्षिण कुनाबाट केही पश्चिमतिर लागी मित्तम्ब्रूको पूर्व आली सांधबाट दक्षिणतिर लागी त्यही सर्व (खेत) को दक्षिण

आली सांधबाट पश्चिमतिर र केही उत्तरतिर लागी त्यताबाट पश्चिमतिर लागी निम्बुको दक्षिण पश्चिम कुनाबाट दक्षिणतिर लागी लोप्रिङ ग्रामको इन्द्रगौष्ठिकहरूको खेतको पूर्व दक्षिण कुनाबाट केही पश्चिमतिर लागी म्हुप्रिङ पाञ्चालिकाको खेतको पश्चिम आली सांधबाट दक्षिण लागी . . . भूमिदेखि उत्तर पूर्व कुनामा म्हुप्रिङ जाने मूल बाटो, त्यताबाट पश्चिमतिर लागी म्हुप्रि लोंप्रि . . . . पानीको धारतिर लागी मेकण्डिडुल् कुलोको जोर्नी, त्यताबाट पश्चिमतिर उकालो लागी गुफा . . . . अनुसार उत्तर पश्चिम लागी पानी खस्ने ठाउँ, लोप्रिम् जाने सडकसम्म . . . . डाँडोको खेतको सर्व दक्षिण आली साँधदेखि पश्चिमतिर लोंप्रि . . . खेत, त्यसदेखि पश्चिमतिर र उत्तरतिर लागी ठूलो बगैंचाको पूर्व शिरानमा मूलबाटो, त्यताबाट उत्तरतिर लागी ठूलो बगैंचाको पूर्व–उत्तर कुनाबाट तलतिर श्रोह्लीं वनको छेउसम्म पुगी फंशिन्प्रल् सोतो, त्यसको उत्तरतिर लागी सोतो . . . सोतोको पछि लागी ब्रह्मतीर्थ संवेद्यनदी र वाग्वतीको पूर्वतिर लागी, उत्तर लागी गुफाको अघिल्लो भागबाट गई श्रेष्ठिडुल्को शिरानमा त्यही प्रीतुङ्को माझको आली साँध ।

यी इलाकाभित्रको यो अग्रसर (बिर्ता जग्गा) मा यदि कुनै वेला आर्यसङ्घले छिन्न नसकिने मुद्दामामिला उठ्यो भने त्यस वेला परमासन (राजाको भित्री इजलास) मा विचार गर्नू । आपणकर (पसलमा लागेको कर), अधिकमास तुलादण्ड (आषाढ र पौषमा नाप–तौल, ढक तराजू आदिको परीक्षा गर्दा तल–माथि परे गरिने दण्ड) आदि सबै राजकीय आम्दानी आर्य-भिक्षुसङ्घलाई नै सुम्पिएको छ ।

यो कुरा थाहा पाई हाम्रा कर्मचारीहरूले तथा अरू कसैले पनि यो निगाह अन्यथा नगर्नू । जसले यो आज्ञा नाघेर अन्यथा गर्ला या गराउला, त्यसलाई हामी बिलकुल सहनेछैनौं । हामीपछि जुन राजाहरू हुनेछन्, तिनीहरूले पनि दुवै लोक (इहलोक र परलोक) मा उत्तम सुख चाहेर अघिका राजाहरूले गरेको यो विशिष्ट निगाह भनेर कोशिशसाथ राम्ररी थाम्नुपर्छ । किनभने धर्मशास्त्रमा लेखिएको छ–सगर आदि धेरै राजाहरूले पृथ्वीको पालना गरिसकेका छन् । जस जसको पालामा जुन भूमि छ; त्यस वेला त्यसको फल तिनलाई नै हुन्छ । यो मेरो आफ्नै आज्ञा हो ।

यस बातका दूतक (मार्फत) भट्टारक शिवदेव । संवत् १०३ ज्येष्ठ शुक्ल त्रयोदशी ।

## व्याख्या–

पाटन यागबहाल र पशुपति वज्रघरका माथि दिइएका दुवै अभिलेखमा परेको मुख्य विषय उही नै छ । यस कारण यी दुवै अभिलेखको व्याख्या यहाँ एकै ठाउँमा दिइएको हो ।

यी अभिलेख नरेन्द्रदेवका अन्तिम समयतिरका हुन् । यी अभिलेखमा 'भगवत्पशुपतिभट्टारक-पादानुगृहीत' भन्ने विशेषणका साथै 'परममाहेश्वर' भन्ने विशेषण पनि नरेन्द्रदेवमा लागेको छ । यसबाट व्यक्तिगत रूपमा नरेन्द्रदेव शैवधर्मानुयायी थिए भन्ने स्पष्ट बुझिन्छ । तर अरू धार्मिक

सम्प्रदायमा पनि नरेन्द्रदेवको उदार भावना थियो । यसको चर्चा माथि पनि गरिसकेको छ । यी अभिलेखले पनि उक्त कुरा देखाउँछन् । यी अभिलेख श्रीशिवदेवविहारको भिक्षुसंघलाई विशेष अधिकारसहित अग्रहार (बिर्ता) दिई गरिदिइएका हुन् । यसबाट बौद्धधर्ममा पनि नरेन्द्रदेवले श्रद्धा प्रकट गरेको देखिन्छ । चीनिया राजदूत वाङ्युन्चेले नरेन्द्रदेवको कमरपेटीमा बुद्धमूर्ति कुँदिएको देखेका थिए । यो कुरा यस प्रसङ्गमा स्मरणीय छ ।

यहाँ शिवदेवविहारमा राजोचित 'श्री' जोडिएको छ । यसबाट यस विहारको सम्बन्ध राजासंग छ भन्ने संकेत पाइन्छ । चारैतिरबाट आई भिक्षुहरू यहा रहन्थे भन्ने वर्णन यी अभिलेखमा परेको हुनाले यो विहार प्रतिष्ठित थियो भन्ने थाहा पाइन्छ । लिच्छवि राजा शिवदेवले राज्यत्याग गरेपछि यो विहार बनाउन लाएको देखिन्छ भन्ने कुरा माथि लेखिसकेको छ । यसरी आफ्ना पुर्खाले बनाउन लाएको विहार हुनाले नरेन्द्रदेवले यस विहारको भिक्षुसंघलाई विशेष आर्थिक सहायता दिएको देखिन्छ ।

पशुपतिभेकमा नरेन्द्रदेवले केही ढुङ्गे धाराहरू बनाएका थिए भन्ने यी अभिलेखबाट थाहा पाइन्छ । यी धाराहरूको हेरचाहको अभिभारा पनि सोही शिवदेवविहारको भिक्षुसङ्घलाई सुम्पिएको छ । पशुपतिभेकमा पाशुपत सम्प्रदायका धार्मिक सङ्घ थिए । तिनलाई उक्त धाराहरूको हेरचाहको अभिभारा नसुम्पी शिवदेवविहारको भिक्षुसंघलाई सो अभिभारा सुम्पिएको हुनाले शिवदेवविहार पनि यतै पशुपतिभेकमै थियो कि भन्ने अनुमान हुन्छ । हाम्रो यस अनुमानको पुष्टि केही अंशमा गोपालराजवंशावलीबाट हुन्छ । त्यसमा राजा शिवदेवले 'खासौ' चैत्य बनाएको वर्णन परेको छ । जस्तै—

"राजा श्रीशिवदेव. . . . . . .तेन प्रतिष्ठित विहारग्रभकृतम् खासौचेत महाकूटम्"

(गो. वं. २१ पत्रबाट)

(राजा श्रीशिवदेवले विहारभित्र ठूलो खासौचैत्य बनाए ।)

चाबहिलभन्दा अलि माथिको प्रसिद्ध 'बौद्ध' चैत्यलाई अहिलेसम्म पनि 'खासति' चैत्य भनिन्छ । चन्द्रमान जोशीसंग रहेको ठ्यासफूमा ने. सं. ७९८ मा एक जना लामाले त्यहाँ सुनको गजुर चढाएको वर्णन परेको छ । त्यहाँ पनि यस चैत्यलाई 'खासे' चैत्य भनिएको छ । जस्तै —

"संवत् ७९८ वैशाख कृष्ण :। एकादशी उत्नभद्रनक्षेत्र सोमवार थ्व कुन्हु खासेचितस लंलिपा धाथा रामान, श्री २ प्रतापमल्लन छास्य तया छत्व थं छोयाव ह्लद दयाव चोङ गजुलि कोपुयाव गजुलि छाया दिन । श्रीश्रीजयनृपेन्द्रमल्ल बिज्यातकाव लुया चपकुसा तम्रो जुरो, स्वह्म फुकीजं बिज्यातकु ।।"

(ने. सं. ७९८ (वि. सं. १७३३) वैशाख कृष्ण एकादशी उत्तरभाद्रनक्षत्र सोमवारको दिन

खासे चैत्यमा लंपिपा भन्ने लामाले श्रीश्रीप्रतापमल्लले चढाउनुभएको छत्र माथि सारी अघिको गजुर फेरी अर्को गजुर चढाए। श्रीश्रीजयनृपेन्द्रमल्ल र अरू भाइ (पार्थिवेन्द्रमल्ल, महीपतेन्द्रमल्ल) सहित तीनै जना जानु भएको थियो। सुनको छत्र चढाइयो ।)

यति कुराबाट श्रीशिवदेवविहार वर्तमान 'बौद्ध' को विहार हो कि भन्ने देखिएको छ। यो विहारमा यता उताका बौद्धहरू आएर बसे तापनि हुने सुबिधा थियो। तर भोट जाने मूल बाटोमा यो विहार रहेको हुनाले पछि यो लामा बौद्धहरूको हातमा रहन गएको देखिन्छ। जे होस्; यस कुराको निर्णयको लागि बढी खोजी हुनु आवश्यक छ।

श्रीशिवदेवविहारको भिक्षुसंघलाई –ञ्चगर्तग्राम र गुल्लतङ्ग ग्राम बिर्त्ताको रूपमा दिएको कुरा यी अभिलेखमा परेको छ। बिर्त्ता दिंदा विवरण खुलाएर दिइएको हुनाले तात्कालिक केही कुरा बुझ्न यी अभिलेख उपयोगी छन् ।

लिच्छविकालमा जनताले प्रशासनसम्बन्धी सुबिधा निकै पाएका थिए तापनि आवश्यक परेको बेलामा केही सामूहिक रूपमा गर्नुपर्ने सरकारी काम अनिवार्य रूपमा सित्तै गर्नुपर्थ्यो। यसलाई 'विष्टि' भनिन्थ्यो। विष्टिका रूपमा काम गर्नु गाह्रो हुने हुनाले भिक्षुसङ्घलाई बिर्त्ता रूपमा दिइएका उक्त ग्राममा विष्टि नलाग्ने अनुग्रह गरिएको छ। यहाँ विष्टि माफी गरिदिएको प्रसङ्गमा 'बहिर्देशगमनाबिसर्वविष्टिरहित:' भन्ने उल्लेख परेको छ। यसबाट सरकारी काजको लागि विदेशतिर जानुपर्दा पनि विष्टि लाग्दो रहेछ भन्ने थाहा पाइन्छ। का. इ. लगनटोलको अभिलेखमा उल्लिखित 'भोट्टविष्टि' को अर्थ अब यसबाट खुल्न आएको छ। यसको चर्चा तल यथास्थानमा गरिनेछ।

गर्भिणी आइमाई मर्दा गर्भसमेत दाह गरिंदैनथ्यो। सरकारी अधिकारीको सामुन्ने गर्भ झिकिन्थ्यो; अनि मात्र दाह गरिन्थ्यो। यसका लागि उक्त गर्भिणीका सम्बद्ध व्यक्तिले शय पण सरकारलाई बुझाउनुपर्थ्यो । यी अभिलेखमा अरू अनेक रकम माफी गरिएका छन् तापनि गर्भिणी मर्दा गर्भ झिक्न लाग्ने शय पणचाहिं बुझाउनुपर्ने व्यवस्था गरिएको छ। नक्साल नारायणचौरको अभिलेखमा पनि 'सगर्भनारीमरणे पणशतमेकम्' भनी यस कुराको चर्चा गरिएको छ।

बिरामी भएका बस्तुभाउको वास्ता नगरेमा ३ पुराण ३ पण दण्डको रूपमा बुझाउनुपर्ने कुरा यी अभिलेखमा परेको छ। यसबाट पशुपालनप्रति सरकार सावधान थियो भन्ने संकेत पाइन्छ। तर अहिले पढिएको पाठमा अलि शङ्का हुँदा यस विषयमा निश्चित रूपमा केही भन्न सकिंदैन ।

देशकालअनुसार मानिसको धारणा अलि बदलिन्छ। यसो हुनाले अपराधको परिभाषामा पनि केही अन्तर आएको पाइन्छ। लिच्छविकालमा चोरी गर्नु ठूलो अपराधमा कहलाएको थियो।

पछि पछि भने चोरीलाई त्यति ठूलो अपराधको स्थान दिन छोडेको देखिन्छ। त्यस वेला चोरी गर्नु, अर्काकी स्वास्नी हर्नु, ज्यान लिनु, तथा यस्ता अपराध गर्नेलाई साथ दिनु एकै तहका ठूला अपराध कहलाएका थिए। चौरपरदारहत्यासम्बन्धादिपञ्चापराधकारिणाम्' भन्ने उल्लेख यहाँ परेको हुनाले 'पञ्चापराध' भनेर त्यस वेला यिनै अपराधलाई भनिन्थ्यो भन्ने थाहा पाइन्छ। भीमार्जुनदेव विष्णुगुप्तका यङ्गलहिटी र सुनागुठीको अभिलेखमा राजद्रोहलाई पनि यिनै पञ्चापराधको श्रेणीमा राखिएको छ। पञ्चापराध गर्नेउपर त्यस वेला कडा दण्ड गरिन्थ्यो। यस्ता अपराधमा अपराधीलाई मात्र होइन; तिनका जहान छोरा आदि परिवारलाई दण्ड गरिन्थ्यो। तिनका घर–खेत आदि सर्वस्व जफत गरिन्थ्यो।

यसरी दण्ड गर्दा सरकारलाई आम्दानी हुन्थ्यो। भिक्षुसङ्घलाई आर्थिक सहायता मिलाइदिने उद्देश्यले यहाँ दण्ड गर्दा उठ्ने उक्त रकम भिक्षुसङ्घलाई दिइएको छ। पञ्चापराध जस्ता मुद्दामा ज्यान सजाय, कैद आदि पनि गर्नुपर्ने खण्ड आइपर्छ। तर भिक्षुसंघले त्यसो गर्नु सम्भव नभएको हुनाले त्यस्ता अपराधी सरकारमा बुझाइन्थे। यो कुरा 'पञ्चापराधकारिणां शरीरमात्रं राजकुला-भाव्यन्तद्गृहक्षेत्रकलत्रादिसर्वद्रव्याण्यार्यसंघस्य' भनी यहाँ खुलाएर लेखिएको छ।

ललितपुर यागबहालको अभिलेखमा गुल्लतङ्ग (वर्तमान गुइतः) ग्रामको सीमा खुलाएर दिइएको हुनाले त्यस वेलाको ललितपुरको पूर्वोत्तर भागको केही झलक पाइन्छ। मध्यमविहार, राजविहार आदि लिच्छविकालका प्रसिद्ध विहार यतै भेकमा थिए। यीबाहेक अभयरुचिविहार, चतुर्भालटसनविहार, वार्तकल्याणगुप्तविहार† पनि यतै थिए। विहारको पूर्व प्राकार, दक्षिण प्राकार आदिको उल्लेख यहाँ आएको हुनाले विहारहरू पर्खालले घेरिएका हुन्थे भन्ने थाहा पाइन्छ। यहाँ बृहत्पथ महापथ आदिको उल्लेख आएको हुनाले एक ग्रामबाट अर्को ग्राममा जाने मूल सडकहरू बनेका थिए भन्ने थाहा पाइन्छ। यस भेकमा प्रणाली (ढुङ्गे धारा) हरू र कुलो बनेका थिए भन्ने पनि यताबाट बुझिन्छ।

यसै गरी पशुपति वज्रघरको अभिलेखमा (प)ञ्चगर्त ग्रामको सीमा दिइएको हुनाले त्यताभेकको बस्तीबारे केही थाहा पाइन्छ। यस भेकमा बजार बढी भएको बुझिन्छ। यहाँ 'आपणकर' र 'अधिकमासतुलादण्ड' भिक्षुसङ्घले नै उठाउन पाउने अधिकार दिइएको छ। पसलपिच्छे उठाइने कर 'आपणकर' हो। 'अधिकमासतुलादण्ड' भनेको आषाढ र पौषमा बजारमा तुला (ढक तराजू आदि) जाँच्दा फरक परे व्यापारीलाई गरिने दण्ड हो। लिच्छविकालमा आषाढ र पौषमा मात्र अधिकमास पर्दथ्यो। यस कारण अधिकमासशब्दले आषाढ र पौषलाई बुझाउँथ्यो। आषाढ र पौषमा ६ महीनाको अन्तर पर्छ। ६।६ महीनामा ढक तराजू आदिको परीक्षा गर्नू भनी दण्डविधान प्रकरणमा मनुस्मृतिकारले यसरी बोलेका छन्–

† राजा बलदेवको विजयराज्यमा (ने. सं. १७६ तिर) लेखिएको 'सद्धर्मपुण्डरीक' भन्ने ग्रन्थक उपसंहारमा पनि 'वार्त्तकल्याणगुप्तेन कारिते सुगतालये' भनी यस विहारको चर्चा गरिएको छ। श्रीपेटेकको 'मिडिइभल हिस्ट्री अफ् नेपाल' को ४३ पृष्ठ हेर्नुहोस्।

"तुलामानं प्रतीमानं सर्वं च स्यात्सुलक्षितम् ।
षट्सु षट्सु च मासेषु पुनरेव परीक्षयेत् ।।" ८।४०३

(ढक तराजू, माना पाथी आदि नाप्ने जोख्ने सबै पदार्थ राम्ररी जाँच्नू । ६।६ महीनामा बराबर यिनको जाँच गर्नू ।)

यसबाट उपर्युक्त कुराको पुष्टि हुन्छ । साथै व्यापारीहरूले ढक तराजू आदिमा फरक पारी जनतालाई ठग्ने काम गर्न नपाऊन् भन्ने कुरामा लिच्छविकालका शासकहरूले दृष्टि पुऱ्याएका थिए भन्ने यताबाट थाहा पाइन्छ † ।

यी दुवै अभिलेखमा भिक्षुसङ्घले छिन्न नसक्ने मुद्दा आइपऱ्यो भने परमासन (राजाको मिस्रो इजलास) ले विचार गर्नू भन्ने व्यवस्था परेको छ । लिच्छविकालमा धार्मिक संघले पाएको अधिकारको झलक हामी यी अभिलेखबाट पाउँछौं ‡ ।

वज्रघरको अभिलेखमा दूतक भट्टारक श्रीशिवदेव छन् । पशुपतिको जयदेवको अभिलेखबाट शिवदेव नरेन्द्रदेवका छोरा हुन् भन्ने निश्चित हुन्छ । नरेन्द्रदेव 'परमभट्टारक' कहलाएपछि गद्दीका उत्तराधिकारीलाई उनले 'भट्टारक' पद दिएका थिए ।

-★-

† 'पूर्णिमा' १६ पूर्णाङ्कको ३५५ पृष्ठमा पनि यस विषयमा विचार गरिएको छ ।

‡ 'पूर्णिमा' १४ पूर्णाङ्कका १०६–३० पृष्ठमा प्रकाशित 'लिच्छविकालका धार्मिक संघ' भन्ने निबन्धमा यस विषयमा विचार गरिएको छ ।

[१३५ संख्या]

# मुसुंबहालको अभिलेख

कान्तिपुर मुसुंबहालभित्र धारासंगै नौवटा मण्डल भएको एउटा ढुङ्गा छ । त्यसै ढुङ्गाको पश्चिमपट्टिको भागमा यो अभिलेख कुँदिएको छ । यो अभिलेख खण्डित छ । यसको अभिलेख कुँदिएको भाग ४२ अङ्गुल लम्बा, २½ अङ्गुल चौडा छ । यहाँ संवत् देखिंदैन ।

'अभिलेख–संग्रह' ६ भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ ।

## मूलपाठ

१. ... ... सर्वसत्त्वहिताय ... ... ... ... ... ... ...

२. ... तस्य संस्कारपूजार्थम् भिक्षुणीसंघमर्पितपणाः पुराणसहिता . . .प्रकल्प्य तत्

## अनुवाद

सारा प्राणीको हितको लागि.....त्यसको मरम्मत र पूजा गर्नाको लागि भिक्षुणीको संघलाई पुराण र पण दान दिइएको छ।...... ....त्यो तयार पारेर.....।

**व्याख्या–**

यस अभिलेखमा संवत् देखिंदैन; राजाको नामोल्लेख पनि भएको छैन । यहाँको लिपि नरेन्द्रदेवको ताकाको छ। यसैले यो अभिलेख यहाँ दिइएको हो ।

यस अभिलेखको केही भाग खण्डित हुँदा यहाँ परेको कुरा अलि स्पष्ट छैन । प्रसङ्ग विचार गर्दा कुनै देवता स्थापना गरी तिनको पूजा आदिको लागि भिक्षुणीसंघलाई केही पुराण र पण कसैले दान दिएको बुझिन्छ । लिच्छविकालमा भिक्षुहरूको संघ जस्तै भिक्षुणीहरूको पनि बेग्लै संघ हुन्थ्यो भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ । माथि गएको ललितपुर चपःटोलको अभिलेखमा पनि भिक्षुणीसङ्घको उल्लेख परेको छ । मध्यकालमा भने यस्तो भिक्षुणीसंघको उल्लेख पाइंदैन। कहिलेदेखि कसरी भिक्षुणीसंघको लोप भयो; यो कुरा खोजीको विषय बनेको छ ।

–★–

# साँखुको अभिलेख

यो अभिलेख कुँदिएको खण्डित शिला साँखुको एक गल्लीभित्र रहेको छ। यसमा संवत् छैन। लेभीद्वारा १७ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ७५ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. देयधर्मोयं श्रीधार्मराजिकामात्य......
२. सांघिकभिक्षुसंघस्य ............

## अनुवाद

श्रीधार्मराजिकामात्य ...... को यो दानधर्म हो। ...... (महा)सांधिक भिक्षुसंघलाई......

### व्याख्या–

यो अभिलेख खण्डित छ। यहाँ संवत् र राजाको नामको उल्लेख छैन। यहाँको लिपि नरेन्द्रदेवको ताकाको छ।

यस अभिलेखमा उल्लिखित 'श्रीधार्मराजिकामात्य' र '(महा)साङ्घिक भिक्षुसंघ' यी पद महत्त्वपूर्ण छन्। यी पदले तात्कालिक केही कुरामा प्रकाश पार्छन्। यस कारण यस विषयमा केही विचार गर्नुपरेको छ।

### मन्त्रिपरिषद्–

एक व्यक्तिबाट शासन चल्न नसक्ने हुनाले राजालाई शासनसम्बन्धी काममा सल्लाह दिन, सघाउन मन्त्रि ारिषद् बनाउनू भन्ने उल्लेख प्राचीन अर्थशास्त्र, स्मृति आदिमा पाइन्छ। राजालाई

राजकाजसम्बन्धी सल्लाह दिने 'मन्त्री' कहलाउँथे; राजालाई राजकाजमा सघाउने कामसमेत गर्ने 'अमात्य' कहलाउँथे ।

लिच्छविकालमा हाम्रो यहाँ शासनव्यवस्थामा मन्त्री, अमात्यको कुन स्थान थियो; सो स्पष्ट हुन सकेको छैन। लिच्छविकालका अभिलेखमा 'मन्त्री' को त उल्लेखै कतै आएको छैन। अमात्यको उल्लेख पनि थोरै मात्र पाइएको छ । नरेन्द्रदेवका माथि गएको भन्सारचोक र यङ्गालहिटीको अभिलेखमा कुमारामात्यको उल्लेख परेको छ । नरेन्द्रदेवको पालाको देउपाटनको अभिलेखमा पनि 'अमात्य' को उल्लेख छ । यस अभिलेखमा चाहिं 'श्रीधार्मराजिकामात्य' को उल्लेख आएको छ । यसबाट लिच्छविकालमा अमात्यहरू हुन्थे भन्ने देखिएको छ । तर शासनव्यवस्थामा 'मन्त्रि-परिषद्' को कुन स्थान हुन्थ्यो; सोचाहिं स्पष्ट हुन सकेको छैन ।

'श्रीधार्मराजिकामात्य' को काम कस्तो हुन्थ्यो; निश्चित गर्न अलि गाह्रो छ। यो पदको उल्लेख यस अभिलेखमा सिबाय अन्त आएको छैन । यहाँ भिक्षुसङ्घलाई दान दिने व्यक्तिको विशेषणको रूपमा यसको प्रयोग भएको छ। यताबाट यसको अर्थ खुल्दैन।

भारतका प्रसिद्ध राजा अशोकले धर्मसम्बन्धी व्यवस्था मिलाउन 'धर्ममहामात्र' नामक अधिकारी नियुक्त गरेको उल्लेख उनका अभिलेखमा ठाउँ ठाउँमा परेको छ । धर्ममा जनताको रुचि बढोस्; एक धर्मले अर्को धर्मको द्वेष नगरोस्; धार्मिक काम कुरा राम्ररी चलून् भन्ने कुराको रेखदेख गर्ने काम 'धर्ममहामात्र' को हुन्थ्यो। अशोकको अभिलेखबाट यो कुरा बुझिन्छ‡ ।

यसै गरी 'धार्मराजिकामात्य' को काम पनि धार्मिक काम कुराको रेखदेख गर्नु थियो कि भन्ने अनुमान हुन्छ† ।

भगवान् बुद्धको निर्वाण भएको शय वर्षपछि भएको द्वितीय संगीतिमा बौद्ध भिक्षुहरूमा आचारसम्बन्धी विवाद उठ्यो। यस विवादको फलस्वरूप बौद्ध धर्मका दुइ खण्ड भए।

‡ "त्रेडशवषभिसितेन मय ध्रममहमत्र कट, ते सव्रपषंडेषु वपुट ध्रमधिथनये च ध्रमवध्रिय हिदसुखये च......"

(मान्सेराको अभिलेखबाट । दिनेशचन्द्र सरकारको 'अभिलेख–संग्रह' २३ पृ.)

(त्रयोदशवर्षाभिषिक्तेन मया धर्ममहामात्राः कृताः। ते सर्वपाखण्डेषु व्यापृता धर्माधिष्ठानाय च धर्मवृद्धये हितसुखाय च)

(राज्याभिषेक भएको तेह्रौं वर्षमा मैले 'धर्ममहामात्र' हरू नियुक्त गरेको छु । तिनीहरूले धार्मिक विधान चलाउनाको लागि, धर्म फैलाउनाको लागि, हित र सुख हुने कामको लागि सबै धार्मिक सम्प्रदायहरूको हेरचाह गर्नेछन्।)

† 'पूर्णिमा' २२ अङ्कका १११–११६ पृष्ठमा पनि यस विषयमा विचार गरिएको छ।

परिवर्तन गर्नु हुँदैन भनी भन्नेहरू थेरवादी (स्थविरवादी) र देशकालअनुसार परिवर्तन गर्दै लैजानुपर्छ भन्नेहरू महासाङ्घिक कहलाए । पछि स्थविरवादीहरू हीनयानी र महासाङ्घिकहरू महायानी कहलाए ।

साँखुको यस अभिलेखमा 'महासाङ्घिकभिक्षुसङ्घ' को उल्लेख परेको छ । यसबाट 'महायान' कहलाउनुभन्दा पहिले नै साँखुमा 'महासाङ्घिक' भिक्षुहरू पसिसकेको बुझिन्छ । यसै हुँदा यहाँको भिक्षुसङ्घ पछिसम्म पनि महासाङ्घिक नै कहलायो । अर्को कुरा लिच्छविकालमा बौद्ध विहारहरूमा सबभन्दा विशिष्ट विहार साँखुमै थियो । सो हो गुंविहार । यसको नामकरण किरात परिवारको भाषाबाट भएको छ । यसबाट यो विहार किरातकालमै कायम भएको बुझिन्छ । जे होस्; साँखुको यस अभिलेखमा महासाङ्घिक भिक्षुसंङ्घको उल्लेख परेको हुनाले यस भेकमा बौद्ध धर्मको प्रवेश निकै पहिले भइसकेको देखिन्छ ।

-★-

## [१३७ संख्या]

# राता मछिन्द्रनाथको मन्दिरनिरको अभिलेख

ललितपुर राता मछिन्द्रनाथको मन्दिरमा जाने बाटोमा बहालभित्र नपस्दै पूर्व–ढोकाबाहिर बलरामको सानो मन्दिर छ। त्यस मन्दिरभित्र बलरामको पादपीठको ढुङ्गामनि रहेको जलहरीमा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १ हात १७ अङ्गुल लम्बा, ३½ अङ्गुल चौडा छ। यो अभिलेख खण्डित छ। यहाँ संवत् १०९ छ।

'अभिलेख–संग्रह' ५ भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ... ...सप्तम्याम्भट्टारकमहारा(जाधिराज)... देवस्य राज्यम्
संवत् १०९ वैशाखशुक्लदिव... द्वितीया...
२. ... ... ... नालवर्मणा ... ... गीताद्या-मा...
३. ... ... ... रस्य वदति ... ... प्रदेश --त्र पिण्डकं
४. ... ... ९ मानिका ... ... ... मानिकात्रयम्

## अनुवाद

......सप्तमीमा भट्टारक महारा(जाधिराज).....देवको राज्यमा। संवत् १०९ वैशाख शुक्ल द्वितीया.....नालवर्मले ..... .....प्रदेशमा .....कुत .....९ मानिका..........३ मानिका

**व्याख्या–**

यसमा संवत् १०९ देखिन्छ। राजाको नाम भने पूरा देखिंदैन। संवत् १०३ सम्मका नरेन्द्रदेवका अभिलेख पाइएका छन्। संवत् ११८ को नालाको अभिलेखमा मात्र शिवदेवको उल्लेख आएको छ। यस कारण सं. १०९ तिर गद्दीमा को राजा थिए; निर्णय गर्न गाह्रो छ।

बलरामसंग यस अभिलेखको सम्बन्ध छ कि छैन; भन्न गाह्रो छ। कुनै देवताको लागि नालवर्मा भन्नेले जग्गा गूठी राखिदिएको कुरा यसमा परेको छ।

# नालाको द्वितीय शिवदेवको पालाको अभिलेख

भक्तपुरभन्दा २ कोश जति पूर्वपट्टि नाला शहर छ। त्यहाँ लगनटोलमा भगवतीको मन्दिर-अगाडि ढुङ्गेधारा छ। सो धाराको दायाँपट्टि पर्खालमा टाँसिराखिएको सानो जलद्रोणी जस्तो ढुङ्गामा यो अभिलेख कुँदिएको छ। यसको अभिलेख कुँदिएको भाग १९ अङ्गुल लम्बा, ४ अङ्गुल चौडा छ। यहाँ संवत् ११८ छ।

'अभिलेख–संग्रह' ५ भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ॐ संवत् ११८ ज्येष्ठशुक्लदशम्याम् राजाधिराजश्रीशिवदेवस्य राज्यम्
२. उपरिमनालङ्ग्रामस्योपभो(गा)र्थम् तत्रैव ग्रामाधिवासी हूंध्रुवशीलस्य,
३. तद्भ्राता हूंअ्नङ्गशीलसहितेन पुण्याधिकारप्रणाली कृता।

## अनुवाद

ॐ संवत् ११८ ज्येष्ठ शुक्ल दशमीको दिन महाराजाधिराज श्रीशिवदेवको राज्यमा उपरिम नालङ्ग ग्रामको भोगचलनको लागि त्यही ग्राममा बस्ने हूं ध्रुवशील र तिनका भाइ हूं अनङ्ग–शीलले समेत भई यो पुण्य दिने धारा बनाइएको हो।

**व्याख्या–**

नालङ्ग (नाला) ग्राममा बस्ने ध्रुवशील र उनका भाइ अनङ्गशील मिली संवत् ११८ मा धारा बनाएको कुरा यस अभिलेखमा परेको छ। यस वेला गद्दीमा राजा शिवदेव थिए भन्ने यताबाट थाहा पाइन्छ। नाला भगवतीमन्दिर अगाडिको वर्तमान ढुङ्गे धारा नै ध्रुवशीलहरूले बनाएको धारा हो भन्ने कुरा यो अभिलेख यहाँ पाइएको हुनाले थाहा पाइन्छ।

लिच्छविकालको यो अभिलेख यहाँ पाइएको हुनाले नाला शहर पनि पुरानो बस्ती रहेछ भन्ने सिद्ध भएको छ। 'नालङ्ग' भनी किरातपरिवारको भाषाबाट यसको नामकरण भएको हुनाले यो बस्ती किरातकालमै कायम भइसकेको अनुमान हुन्छ। त्यस वेला बस्ती प्रायः बाटो घाटोको पाइक पर्ने ठाउँमा बसेको देखिन्छ। महादेवपोखरीबाट ओर्लेपछि नाला पुगिन्छ। यस कारण उहिले महादेवपोखरी, नालदूमभेकमा जाने मूलबाटो यता हुँदा 'नाला' बस्ती बसेको बुझिन्छ। जे होस्; नाला ग्रामका बासिन्दाहरूको लागि धारा बनाइदिएको उल्लेख यसमा परेको हुनाले लिच्छविकालमा 'नालङ्ग' बस्ती बसिसकेको थियो भन्ने कुरामा शङ्का छैन।

-★-

[१३९ संख्या]

# लगनटोलको शिवदेवको अभिलेख

काठमाडौं लगनटोलमा सानो विष्णुमन्दिरको भित्तामा यो शिलापत्राभिलेख रहेको थियो। तर हाल यो अभिलेख लुप्त भएको छ; त्यहाँ छैन। यसको शिरोभागमा बसिरहेको साँढे अङ्कित छ। यहाँ संवत् ११६ छ।

पं. भगवान्लालद्वारा १२ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ७७ संख्याको रूपमा यो छापिएको छ। 'पूर्णिमा' १४ अङ्कमा मैले पनि यो छपाएको छु।

## मूलपाठ

१. ॐ स्वस्ति श्रीमत्कैलासकूटभवनाल्लक्ष्मीलतालम्बनकल्पपादपो
२. भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः परमभट्टार-
३. कमहाराजाधिराजश्रीशिवदेवः कुशली वैद्यग्रामके प्रधानाग्रेसरान् सकल-
४. निवासिकुटुम्बिनो यथार्हङ्कुशलमभिधाय समाज्ञापयति विदितमस्तु भव-
५. तां यथायङ्ग्रामः शरीरकोट्टमर्यादो (पपन्न) श्चाटभटानामप्रवेश्येना-
चन्द्रर्का-
६. वनिकालिको भूमिच्छिद्रन्यायेनाग्रहारतया मातापित्रोरात्मनश्च विपुलपु-
७. ण्योपचयहेतोरस्माभिः स्वकारितश्रीशिवदेवेश्वरं भट्टारकन्निमित्तीकृत्य
८. तद्देवकुलखण्डस्फुटितसंस्कारकरणाय वशपाशुपताचार्येभ्यः प्रति-
९. पादितः तदेवमवगतार्थैर्भवद्भिः समुचितदेयभागभोगकरहिरण्यादि-
१०. सर्वप्रत्यायानेषामुपय (च्छ) द्भिरेभिरेवानुपाल्यमानैरकुतोभयैः स्वक-
११. र्मानुविधायिभिरिति कर्तव्यताव्यापारेषु च सर्वेष्वमीषामाज्ञाश्रवणविधे-

१२. यैर्भूत्वा सुखमत्र स्थातव्यं सीमा चास्य पूर्वेण बृहन्मार्गो दक्षिणपूर्वतश्च
१३. शिवीप्रणाली तामेव चानुसृत्य स्वल्पः पन्था दक्षिणतश्च तेङखुः पश्चिमे-
१४. नापि तेङखुः उत्तरस्यामपि चिशिमण्डातिलमकः उत्तरपूर्वतश्चापि सहस्र
१५. मण्डलभूमिस्ततो यावत्स एव बृहन्मार्ग इत्येवं सीमान्तभूतेस्मिन्नग्र-
१६. हारे भोट्टविष्टिहेतोः प्रतिवर्षं भारिकजनाः पञ्च ५ व्यवसायिभिर्ग्र-
१७. हीतव्या ये त्वेतामाज्ञां व्यतिक्रम्यान्यथा कुर्युः कारयेयुर्वा तेस्माभिर्भृशन्न
१८. क्षम्यन्ते ये वास्मदूर्ध्वम्भूभुजो भ(विष्यन्ति तैरपि प)रस्वाहितापेक्षया पूर्वराज
१९. कृतोयं धर्म्मसेतुरिति तद(वगत्य) ........ र वा .... संरक्षणी
२० यस्तथा चोक्तं पूर्वदत्तां द्विजातिभ्यो यत्नाद्रक्ष युधिष्ठि(र महीम्महीम-)
२१. तां श्रेष्ठ दानाच्छ्रेयोनुपालनम् । षष्टिं वर्षसहस्राणि स्वर्गे मो(दति भू)
२२. मिदः । आक्षेप्ता चानुमन्ता च तान्येव नरके वसेत् ॥ इति स्वयमा-
२३. ज्ञा दूतकश्चात्र राजपुत्रजयदेवः संवत् ११९ फाल्गुन-
२४. शुक्लदिवादशम्याम्

# अनुवाद

कल्याण होस् । श्रीकैलासकूट भवनबाट लक्ष्मीरूपी लहराको आड लिने कल्पवृक्ष जस्ता भएका, भगवान् पशुपतिनाथको पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका परमभट्टारक महाराजाधिराज श्रीशिवदेवले वैद्यग्राममा बस्ने मुखियालगायत सारा गृहस्थीहरूलाई यथोचित कुशल–मङ्गल सोधेर आज्ञा गर्नुभएको छ । तिमीहरूलाई थाहा होस् ।

शरीर र कोट्ट (किल्ला)को स्थितिबन्देजले युक्त भएको, चाटभटले पस्न नपाइने गरिएको यो गाउँ आमा बाबु र आफ्नो पुण्य बढोस् भन्नाको लागि हामीले चन्द्र सूर्य पृथ्वी रहुन्जेलको लागि (सधैंको लागि) भूमिच्छिद्रन्यायले बिर्त्ता गराई आफैंले स्थापना गरेको श्रीशिवदेवेश्वर महादेवलाई लक्ष्य गरेर सो देवमन्दिरको टुटफुट भएमा मरम्मत गर्नाको लागि वश–पाशुपत सम्प्रदायका आचार्यहरूलाई दिइएको छ ।

यो थाहा पाई तिमीहरूले साबिकबमोजिम दिनुपर्ने भाग (जग्गा हेरी अन्नको पैदावारको ६ भागको १ भाग, १० भागको १ भाग, १२ भागको १ भाग आदि रूपमा लिइने पोता), भोग (बस्तु भाउमा लागेको तिरो) कर (वाणिज्यमा लागेको कर), हिरण्य (नगदरूपमा लिइने पोता)

आदि सबै राजकीय आम्दानी उहाँहरूलाई नै बुझाउनू। तिमीहरूको हेरचाह उहाँहरूबाटै हुनेछ। आफ्नो आफ्नो काममा लागी, उहाँहरूको खटन–पटनमा रही, उहाँहरूले लाए अह्राएको काम गरी, निर्धक्क भई यहाँ सुखसंग बस्नू।

यसको चारकिल्ला यस प्रकारको छ– पूर्वतिर मूल सडक, दक्षिण पूर्वतिर शिवी धारो, त्यतैतिर लागी सानो बाटो, दक्षिणतिर तेङखु पश्चिमतिर पनि तेङखु उत्तरतिर चिशिमण्डा कुलो, उत्तर–पूर्वतिर सहस्रमण्डलभूमि, त्यताबाट त्यही मूल सडक।

यति चारकिल्लाभित्रको यो अग्रहार (बिर्ता जग्गा) मा भोटमा जानाको लागि प्रतिवर्ष कामदारहरूले पाँच जना भरिया झाराका रूपमा लिनू। जसले यो आज्ञा नाघेर अन्यथा गर्लान् वा गराउलान्; तिनलाई हामी सहनेछैनौं। हामीभन्दा पछि जुन राजाहरू हुनेछन्, तिनीहरूले पनि अरूको र आफ्नै हितको ख्याल राखी अघिका राजाले बनाएको यो धर्मको पुल हो भन्ने संझी . . . . रक्षा गर्नुपर्दछ। भनिएको पनि छ– हे श्रेष्ठ राजा युधिष्ठिर, अघिका राजाले ब्राह्मणलाई दान दिएको जग्गा जतनसाथ रक्षा गर्नू। दान दिनुभन्दा अरूले पहिले दिएको कुरा थाम्नु उत्तम छ। जग्गा दान दिने मानिस साठी हजार वर्षसम्म स्वर्गमा सुखसंग बस्छ। जग्गा हर्ने र हर्न लाउने मानिस त्यति नै वर्ष नरकमा पर्छ।

यो मेरो आफ्नै आज्ञा हो। यस बातका दूतक राजपुत्र जयदेव। संवत् ११९ फाल्गुन शुक्ल दशमी।

## व्याख्या–

अंशुवर्माको समयदेखि नेपालमा शैवधर्मको प्रतिष्ठा बढ्यो; यस बेलादेखि शैवधर्मले 'राजधर्म को स्थान लियो भन्ने कुराको चर्चा पहिले गरिसकेको छ। लिच्छवि राजाहरूमा आफूलाई 'पशुपति भट्टारकपादानुगृहीत' भनी लेखाउने पहिला उदयदेव हुन्। यसपछि नरेन्द्रदेवदेखिकाले पनि आफूलाई 'पशुपतिभट्टारकपादानुगृहीत' भनी लेख्न थाले। यसरी शैवधर्मको प्रभाव फैलिंदै गयो।

त्यस बेला शैवधर्मका विभिन्न शाखाका मठहरू यहाँ कायम थिए। तीमध्ये 'वशपाशुपत' पनि एक थियो। वशपाशुपत सम्प्रदायबारे विशेष कुरा थाहा पाउन सकिएको छैन। तर यस सम्प्रदायको संघ यहाँ थियो; तिनीहरूको प्रभाव फैलिएको थियो। यसो हुनाले द्वितीय शिवदेवले यस सम्प्रदायका आचार्यहरूलाई विशेष सुविधासहित अग्रहार दिएको देखिन्छ। शिवदेवले आफ्नो नाउँमा 'श्रीशिवदेवेश्वर' महादेवको स्थापना गरी मन्दिर बनाएका थिए। सो देवमन्दिर भत्के बिग्रिए मरम्मत गर्ने भारा ती पाशुपत आचार्यहरूलाई सुम्पिएको कुरा यसमा परेको छ।

अग्रहार दिंदा विवरण खुलाएर दिइएको हुनाले यसबाट तात्कालिक केही कुरा बुझ्न मदत पाइन्छ।

यहाँ परेका केही कुराको चर्चा प्रसङ्गवश माथि गरिसकिएको छ। यस कारण बाँकी कुराको मात्र चर्चा यहाँ गरिन्छ ।

## भूमिच्छिद्रन्याय–

सरकारलाई कुनै आम्दानी नहुने जग्गा 'भूमिच्छिद्र' कहलाउँथ्यो। 'भूमिच्छिद्र' रूपका यस्ता जग्गा ब्राह्मणहरूलाई अध्ययन अध्यापन, यज्ञ आदि गर्नाको लागि तथा तपस्या गर्नेहरूलाई तपोवनको रूपमा दिने चलन थियो । कौटल्यले 'भूमिच्छिद्रविधान' प्रकरणमा यो कुरा लेखेका छन्। पछि पछि 'भूमिच्छिद्र' रूपका जग्गा जस्तै गरी अरू असल जग्गा ब्राह्मण आदिलाई दिंदा पनि 'भूमिच्छिद्र' कै रूपमा दिइएको भनी लेख्ने चलन भयो र एउटा 'न्याय' नै कहलायो। यसै हुँदा यस अभिलेखमा एक ग्राम वश–पाशुपताचार्यहरूलाई दिंदा 'भूमिच्छिद्रन्याय' ले दिइएको भनी लेखिएको छ।

## भोट्टविष्टि–

यस अभिलेखमा 'अस्मिन्नग्रहारे भोट्टविष्टिहेतोः प्रतिवर्षं भारिकजनाः पञ्च ५ व्यवसायिभिर्ग्रहीतव्या' भन्ने वाक्य परेको छ। भोट्टविष्टिको लागि पाँच जना भरिया यस अग्रहारबाट कामदारहरूले लिनू भनी यहाँ भनिएको हुनाले केही इतिहासकारले यस ताका नेपाल भोटको वशवर्ती थियो कि भनी देखाउने चेष्टा गरेका छन्। तर विष्टिबारे राम्ररी विचार गरे उक्त कुरा सत्य होइन भन्ने देखिन्छ। लिच्छविकालमा देशबाट बाहिर जानुपर्ने काम आइपर्दा, लोकको हित हुने काम पर्दा वा अरू विशेष राजकीय काम पर्दा अनिवार्य रूपमा जनतालाई सित्तै काममा लगाइन्थ्यो। 'विष्टि' भनेर यस्तै कामलाई भनिन्छ। माथि गएका पशुपति वज्रघर र पाटन यागबहालको अभिलेखबाट विष्टिको परिचय केही पाइन्छ। विष्टिको रूपमा काम गर्नु गाह्रो हुने हुनाले भिक्षुसंघलाई दिइएको ग्राममा विष्टि माफी गरिएको कुरा परेको छ। त्यस प्रसङ्गमा त्यहाँ सबै किसिमका विष्टि माफी गरिएको भन्नालाई 'बहिर्देशगमनादिसर्वविष्टिरहित' भनिएको छ । यसबाट सरकारी कामविशेषमा विदेश जानुपर्दा 'विष्टि' लगाइंदो रहेछ भन्ने स्पष्ट छ। यसै हुँदा भोटतिर जानुपर्ने सरकारी काम पर्दा यस अग्रहारबाट विष्टिका रूपमा पाँच जना भरिया मिलाइदिनू भनी उल्लेख भएको हो। यसै गरी भारततिर जानुपर्ने सरकारी काम गर्दा पनि विष्टि लगाइन्थ्यो भनी सहजै अनुमान गर्न सकिन्छ। यस कारण यस अभिलेखमा प्रयुक्त 'भोट्टविष्टि' ले त्यसताका भोटसंग नेपाल–सरकारको सम्बन्ध बढी रहेको थियो भन्ने कुरा मात्र सिद्ध हुन्छ; त्यस वेला नेपाल भोटको वशवर्ती थियो भन्ने कुरा यसबाट सिद्ध हुँदैन। व्यवहार गर्न सजिलो होस् भनी विषय हेरी विष्टिको नामकरण गर्ने चलन थियो । यसैले भोट जाने सरकारी कामपर्दा लगाइने विष्टि 'भोट्टविष्टि' कहलाएको हो ।

पाँच भरिया 'व्यवसायी'हरूले प्रतिवर्ष लिने कुराले पनि उपर्युक्त कुराको पुष्टि गर्छ। 'व्यवसायी' शब्दले सरकारी कामदारलाई बुझाउँथ्यो। ठिमीको अभिलेखबाट यो कुरा बुझिन्छ।

त्यहाँ 'राजकुलीयव्यवसायी' को उल्लेख छ । विष्टिको रूपमा तोकिएको काममा हाजिर भएन भने दण्डको रूपमा पैसा उठाइन्थ्यो । ठिमीको अभिलेखमा विष्टिदण्डसम्बन्धी यस्तो पैसा दान दिइएको हुँदा राजकुलीयव्यवसायीहरूले बाधा नगर्नू भनिएको छ । विचारार्थ सो अभिलेखको एक अंश यहाँ उद्धृत गरिन्छ –

"विष्टिमनुष्यसम्बन्धेन प्रतिवर्षं यत्पुराण.....तेभ्य एव ग्रामीणैर्दातव्यम् । राजकुलीय-व्यवसायिभिस्तु न कदाचिद (न्यथा कर्त्त) व्यम्"

यस अभिलेखमा दूतक जयदेव छन् । उनलाई यहाँ 'राजपुत्र' भनिएको छ । पशुपतिको अभिलेखबाट जयदेव शिवदेवका छोरा हुन् भन्ने निश्चित छ । नरेन्द्रदेव परभट्टारक कहलाएपछि 'भट्टारक' पद युवराजले पाउने भएको थियो । तर यहाँ जयदेवलाई 'भट्टारकयुवराज' भनिएको छैन; 'राजपुत्र' भनिएको छ । यसको २ वर्षपछिको सुनागुठीको अभिलेखमा पनि राजपुत्र मात्र भनिएको छ । परन्तु केही वर्षपछिको संवत् १२९ को बलम्बूको अभिलेखमा भने श्रीभट्टारक भनिएको छ । यसमा कुनै कारण रहेको अनुमान हुन्छ ।

–★–

# भृङ्गारेश्वरको शिवदेवको अभिलेख

सुनागुठी भृङ्गारेश्वरस्थानमा मन्दिरसंगै यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग ३७ अङ्गुल लम्बा, २४ अङ्गुल चौड़ा छ। यसको शिरोभागमा कमल अङ्कित छ। यहाँ संवत् १२१ दिइएको छ[1]।

नोलीद्वारा ७८ संख्याको रूपमा यो छापिएको छ। यहाँ मूलबाटै पढी पाठ सच्याइएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीमत्कैलासकूटभवनादव्याहतशासनस्स् विहितवर्ण्णाश्रमस्थितिर्लिच्छविकुल [१]

२. केतुर्भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्पपादानुध्यातः परमभट्टारक-

३. महाराजाधिराजश्रीशिवदेवः कुशली नेपालान्तर्वर्त्तिनः सर्वाधिकरणानामस्मत्पाद[२]

४. प्रसादोपजीविनोन्यांश्च[३] यथार्हङ्कुशलमभिधाय समाज्ञापयति विदितम्भवतु भवतां-

---

[1] नोलीले यस अभिलेखको संवत् १२५ छपाउनुभएको छ। तर मूलमा संवत् १२१ छ प्रतिलिपि लिंदा अलि स्पष्ट नआउने हुनाले नोलीलाई भ्रम परेको बुझिन्छ। 'पूर्णिमा' २० अङ्कको १८६ पृष्ठ हेर्नुहोस्।

नोलीका पाठ–

१. (स्वस्ति कैलास)कूटभवनाद .........विहितगुण—स्थि—लिच्छविकुल

२. (कुशली)........वर्त्तिन्यः समधिकरणा........ ३. प्रसादोपजीविन्याश्च यथा हि......

५. ...... मपरिमितजलाशयोद्देशतया[१] ..... नां पाञ्चालिकानां ...
६. ...... क्षेमजीवेन [२] विज्ञापितैरस्माभिः प्रसादानुवर्तिभिर्धर्म्माधिकार-(तया)..
७. ... पयोगायास तै[३] ब्राह्मणपुरस्सराणाञ्च पाञ्चालिकानां प्रकामोपभोग-निमि[४]-
८. त्तमा ... ... य भृङ्गारेश्वरदेवकुलस्थितये सर्व ... स्य तिलमक ...
९. ...... प्रवर्त्तनीयास्स्युरिति[५] तद्देवकुलपाञ्चालिक .. काले---ग्राम-
१०. ...... पानीय ...[६] प्रणालीतिलमक ... ... तालपत्र-
११. ...... प्रसादेन भृङ्गारेश्वरपाञ्चा(लिकानां) ... दिक्षेत्र ...
१२. ..... मुगभोगत्वादस्य[७] तिलमकस्य ...
१३. .... .... भिरस्य निर्वा ... ... ...
१४. ... ... विचारयितव्यास्तेपि[८] ... ....
१५. ... ... सद्विपणपुराणं[९] ... ... ...
१६. ... ... ... कृत ... ... ... ...
१७. ... ... ... पिण्डकमानिका[१०] ... ...
१८. ... ... पणं पुराणत्रयं दण्डनीया विदित्वैवं भवद्भिरपि[११] ...
१९. ... कर्त्तव्यः कारयितव्यो वा ये त्विमामाज्ञामु(ल्लङ्घ्य)...
२०. ... भूशञ्च मर्षयितव्या ...... भाविभिरपि ...
२१. ... भिः पुरातनराज ... यं ... प्रसाद ...
२२. ... नीय... श्रूयते बहुभिर्वसुधा दत्ता राजभिः
२३. सगरादिभिः यस्य यदा भूमिस्तस्य तस्य यस्य तदा फलम् पूर्वदत्तां
२४. द्विजातिभ्यो यत्नाद्रक्ष युधिष्ठिर महीम्महीभुजां श्रेष्ठ दानाच्छ्रेयोनुपालनम्
२५. ... स्वयमाज्ञा दूतकश्चात्र राजपुत्रजयदेवः
२६. संवत् १२१ भाद्रपदशुक्लपञ्चम्याम्

---

नोलीका पाठ–

१. ...मपरिमितजलाशयो वेशतया २. ...पजीवेन ३. ......ताय, ४. प्रजाम---नि ५. .....प्र–ते.ी यस्मादिति ६. ......यू .....ही–– लीतिलमकस्स ७. .....मुपभोगत्वादस्माभि...ण्य... ८ .....ि–व्यस्तेपि...... ९. .....द्वि——राणां.... १०. .....प्र–म––नि... ११. .....प.....यदण्डेन य...श्रि–त..... मि.....

# अनुवाद

कल्याण होस् । श्रीकैलासकूट भवनबाट बेरोकटोक हुकूम चलेका, वर्णाश्रमसम्बन्धी स्थितिबन्धेज राम्ररी बाँधेका लिच्छविकुलका झण्डास्वरूप भएका, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बप्प (बुवा) को पाउको अनुग्रह पाएका, गाथमा आराम रहेका, परमभट्टारक महाराजाधिराज श्रीशिवदेवले नेपालभित्रका सबै अधिकरणका सरकारी कर्मचारीहरू र अरूलाई पनि यथोचित कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् ।

......ठूलो पोखरी रहेको ठाउँ हुँदा.........पाञ्चालिकहरूको (हितको लागि) ..........क्षेमजीवले हामीमा बिन्ति चढाएका र पुण्य दिने काम हुनाले हामीले निगाह गरी......ब्राह्मणलगायत पाञ्चालिकहरूको चाहिँदो भोग चलनको लागि ...... भृङ्गारेश्वर देवमन्दिरको स्थितिको लागि..........कुलो......... ..... चलाउनुपर्ने हुनाले त्यही देवमन्दिरको पाञ्चालिक....ग्राम.....पानी....धारा कुलो......ताडपत्र.......निगाह गरी .......भृङ्गारेश्वरका पाञ्चालिकहरूलाई .......आदि खेत......... .....भोगचलन हुने हुनाले यो कुलोको ....... .......हरूले यसबारे .......... .........विचार गर्नुपर्छ। तिनीहरू पनि .... दुइ पुराण दुइ पण .......कुत मानिका ....... ......३ पुराण दण्ड गर्नू।

यो कुरा थाहा पाएर तिमीहरूले पनि......गर्नु, गराउनुपर्छ। जसले यो आज्ञा नाघेर (अन्यथा गर्ला वा गराउला तिनलाई हामी) पक्का सहनेछैनौं। पछि हुने राजाहरूले पनि पहिलेका राजाहरूले (गरेको) निगाह (थाम्नुपर्छ)।......यस्तो सुनिन्छ। सगर आदि धेरै राजाहरूले जग्गा दान दिएका थिए। जस जसको पालामा जुन जग्गा छ, त्यस बेला त्यसको फल तिनैलाई हुन्छ । हे श्रेष्ठ राजा युधिष्ठिर, अघिका राजाले ब्राह्मणलाई दान दिएको जग्गा जतनसाथ रक्षा गर्नू। दान दिनुभन्दा अरूले पहिले दान दिएको कुरा थाम्नु उत्तम छ।

यो मेरो आफ्नै आज्ञा हो। यहाँ दूतक (मार्फत) राजपुत्र जयदेव। संवत् १२१ भाद्रशुक्ल पञ्चमी ।

## व्याख्या–

लिच्छविकालका शासकहरू विशेष गरेर अंशुवर्मादेखिका शासकहरू वर्णाश्रमव्यवस्था लागू गर्नेतिर बढी लागेका थिए भन्ने कुराको चर्चा माथि गरिसकेको छ। द्वितीय शिवदेवको सुनागुठीको यो अभिलेख र बलम्बूको उनको अर्को अभिलेखबाट उक्त कुरा अझ स्पष्ट भएको छ। यस अभिलेखमा शिवदेवले आफूलाई 'सुविहितवर्णाश्रमस्थिति,भनी लेखाएका छन्। बलम्बूको

अभिलेखमा पनि 'सम्यग्विरचितसकलवर्णाश्रमव्यवस्थ:' भन्ने विशेषण उनमा लागेको छ। यसरी शिवदेवले वर्णाश्रमव्यवस्थामा पूरा आस्था प्रकट गरेका छन्।

यस अभिलेखमा 'अव्याहतशासन' भन्ने अर्को विशेषण शिवदेवमा लागेको छ। बलम्बूको अभिलेखमा पनि सारा सामन्तहरूलाई कज्याएको वर्णन परेको छ। यसबाट शिवदेवले राम्ररी शासन गरेको बुझिन्छ।

यस अभिलेखको बीचको केही भाग खिइएको छ; साथै अलि खण्डित पनि छ। यस कारण यसमा परेको विषय राम्ररी खुल्दैन। तर पोखरी, कुलो आदिको बन्दोबस्त मिलाई यो अभिलेख राखिएको हो भन्ने कुराचाहिं बचेको भागबाट थाहा पाइन्छ। यहाँ 'अपरिमितजलाशयोद्देशतया' भन्ने पद परेको हुनाले भृङ्गारेश्वरमा ठूलो पोखरी उहिले थियो भन्ने बुझिन्छ। 'प्रणाली' (धारा)को उल्लेख पनि यहाँ आएको छ। विशेष गरेर तिलमक (कुलो) सम्बन्धी स्थितिबन्धेजको कुरा यसमा परेको देखिन्छ। भृङ्गारेश्वर—पाञ्चालीको इलाकाभित्रका ब्राह्मणलगायत सारा बासिन्दाले कुलोको उपयोग गर्न पाऊन्; कुलोको मरम्मत राम्ररी होस्; स्थितिबन्धेज नाघ्नेलाई दण्ड होस् भन्ने व्यवस्था यस अभिलेखमा गरिएको देखिन्छ। लिच्छविकालका शासकहरू खेतीको लागि कुलो, नुहाइ–धुवाइ आदिको लागि धारा, पोखरीहरू होऊन्; जनतालाई पानीको समस्या नरहोस् भन्ने कुरामा दृष्टि दिइरहन्थे भन्ने कुरा अरू अभिलेखबाट थाहा पाइएका छन्; यस अभिलेखबाट पनि उक्त कुराको पुष्टि भएको छ।

यस वेला भृङ्गारेश्वरभेकको देखरेखको लागि 'क्षेमजीव' भन्ने अधिकारी नियुक्त गरिएका रहेछन्; उनले जाहेर गरेका हुनाले राजा शिवदेवले यो स्थितिबन्धेज गरिदिएको उल्लेख यसमा परेको छ। अभिलेखको अन्त्यमा अगाडिका राजाहरूले दान दिएका जग्गा थामिदिनु उत्तम कुरा हो भनी दर्शाउने वचन उद्धृत गरिएको हुनाले कुलोको मरम्मत, भृङ्गारेश्वरको पूजा-आजाको लागि शिवदेवले केही जग्गा दान पनि दिएको देखिन्छ।

–★–

# गोरखा गोरखनाथ-गुफाको शिवदेवको अभिलेख

गोरखा–दरबार, गोरखनाथ गुफाको ढोकैनिर ठूलो घण्टापछाडि यो शिलालेख रहेको छ । यसको शिरोभागमा साँढे अङ्कित छ । ३३ अङ्गुल लम्बा, १६ अङ्गुल चौडा भागमा अभिलेख कुँदिएको छ । ज्यादै खिइसकेको हुनाले छेउ–छेउमा मात्र केही अक्षर पढ्न सकिन्छन् । यहाँ संवत् १२२ दिइएको छ ।

इतिहास–प्रकाश १ अङ्कमा योगी नरहरिनाथले यो अभिलेख छपाउनुभएको छ । तर मूलसंग भिडाइहेर्दा उहाँले छपाएको पाठमा धेरैजसो मिल्दैन । यस कारण मूलबाटै परिश्रमसाथ पढी ठम्याउन सकिए जति पाठ प्रा. तुलसीराम वैद्य र मैले 'गोरखाको ऐतिहासिक सामग्री' मा छपाएका छौं । अझ बढी परिश्रम गर्न सके यसमन्दा बढी पाठ पढ्न सकिने देखिन्छ ।

गोरखनाथ–गुफामा लिच्छविकालको यो अभिलेख छ भन्ने चर्चा श्रीजिशेप टुचीले पनि आफ्नो 'प्रिलिमिनरी रिपोर्ट' को ७ पृष्ठमा गर्नुभएको छ ।

## मूलपाठ

१. ॐ स्वस्ति कैलासकूट (भवनाद्) ... ...
२. –(पादा) नुध्यात ... ... ... परम-
३. (भ) ट्टारकमहाराजाधिराज (श्रीशि) वदेवः कु (शली).....
४. ... ... ... ... ... ... समाज्ञाप-
५. यति विदितम्भवतु भवतां ... ...
६. वज्रभैरवभट्टा (रक) ... ... ...

७. –कारणपूजा ... ... ... ...
८. ... भूमि ... ... ... ...
९. समापन्न ... ... ... .... ...
१०. ... पण ... ... ... ...
११. वं भोग–दत्तं ... ... ... ...
१२. वादित्रञ्च प्रत्ये(क) ... ... ...
१३. ... क्षेत्र ... ... ... .. ...
१४. ३४ ... ... ... ... ...
१५. ... कृत ... मतो–दान ...
१६. –प्रतिदिन ... ... ... ...
१७. –मिमूल्य पण ... ... ...
१८. पणद्वयं प्रत्येक ... ... .... ...
१९. ग्राहक ... ... ... ...
२०. ततो द्वादश ... ... ... ...
२१. मानिकाः पा ... ... ...
२२. स्फटिकव ... ... ... ....
२३. द्वादश मानिका... वादित्र ... पणपुराण ...
२४. पञ्चरङ्गचित्रकर्मण ... ... मानिकात्रयं ...
२५. प्रतिमानिका ... ... ... ...
२६. पणपुराणा- पञ्च ... ... ... मानिका
२७. करण ... ... ... ...
२८. वेद्यानि भगवतो दत्तानि ... ....
२९. पूजासु जल ... ... ... ...
३०. हेतोः ... रकल्पना ... ... ... ...
३१. रिति संवत् १२२ ... ... ...

## अनुवाद

कल्याण होस् । कैलासकूट भवनबाट....... ....पाउको अनुग्रह पाएका..... गाथमा आराम रहेका परमभट्टारक महाराजाधिराज श्रीशिवदेवबाट...आज्ञा भएको छ । तिमीहरूलाई थाहा होस् ।

......वज्रभैरव भट्टारकको ........कारणपूजा (नैमित्तिक)पूजाको लागि ..........भूमि..........पण.....भोग.......दिइयो। प्रत्येक.....दिन बाजा (बजाउनु)........खेत..................३४ (मानिका) ..... गरियो......दान........प्रतिदिन......(भू)मिमूल्य पण .......दुइ पण प्रत्येक........ग्राहक............अनि बाह्र..........मानिका..... स्फटिक जस्तो.......बाजा.......पणपुराण........बाह्र मानिका..... तीन मानिका पञ्चरङ्गले चित्रकारी गर्ने कामको लागि ...............प्रति मानिका ..........पाँच पणपुराण...... ...... मानिका......काम...... (नै)वेद्य भगवान्लाई चढाइए ।........ ........ पूजामा पानी ......लागि .......... ........ बनाउनु ...........

इति संवत् १२२........

## व्याख्या–

३१ पङ्क्ति भएको लामो यो अभिलेखको धेरैजसो भाग खिइएको छ। छेउ–छेउका केही अक्षर मात्र पढ्न सकिएका छन्। यसैले वाक्य नै पूरा छैनन्। तैपनि बचेको भागबाट तात्कालिक केही कुरा बुझ्न सकिन्छ।

यस अभिलेखमा संवत् १२२ दिइएको छ तथा 'परमभट्टारकमहाराजाधिराज–वदेवः' भन्ने देखिएको छ। यसबाट यो अभिलेख द्वितीय शिवदेवको हो भन्ने थाहा पाइन्छ। उपत्यकाका अभिलेखसरह नै यो अभिलेख पनि सोझै कैलासकूटभवनबाट जारी गरिएको छ। यहाँ सामन्त राजाको उल्लेख देखिदैन। यसबाट लिच्छविकालमा गोरखासम्म सोझै केन्द्रबाटै शासन चल्दथ्यो भन्ने देखिएको छ। मानदेवको चाँगुको अभिलेखमा गरिएको वर्णन पनि यस प्रसङ्गमा स्मरणीय छ। मानदेव पश्चिमतिरका सामन्तहरूलाई कज्याउन जाँदा गण्डकीवारि कुनै सामन्त राज्यको चर्चा त्यहाँ गरिएको छैन; गण्डकीपारि मात्र सामन्तराज्य 'मल्लपुरी' को चर्चा त्यहाँ आएको छ। यसबाट पनि लिच्छविकालमा गोरखासम्म सोझै केन्द्रबाटै शासन चल्दथ्यो भन्ने कुराको केही पुष्टि हुन्छ। अर्को कुरा–लिच्छविकालमा नेपालराज्य उपत्यकामा मात्र सीमित थिएन भन्ने कुरा पनि गोरखाको यो अभिलेखले प्रामाणिक रूपमा देखाएको छ।

यस ताका 'गोरखा'को नाम के रहेको थियो; बीचको भाग अस्पष्ट हुनाले थाहा पाउन सकिएको छैन। 'गोरखा' नामकरण यस बेला भइसकेको थिएन कि भन्ने अनुमान हुन्छ।

धार्मिक दृष्टिले 'गोरखा' को महत्त्व लिच्छविकालमै रहिसकेको थियो भन्ने कुरा यस अभिलेख-बाट थाहा पाइएको छ। यस अभिलेखमा 'वज्रभैरव' को उल्लेख आएको छ। साथै वज्रभैरवको

कारणपूजा आदिको लागि रकम छुट्याई व्यवस्था बाँधिदिएको कुरा यसमा परेको छ। कारणपूजा गर्दा बाजा बजाइंदो रहेछ; यस अभिलेखमा दुइ चोटि 'वादित्र' को उल्लेख आएको छ। '—वेद्यानि भगवतो दत्तानि' भन्ने देखिएको हुनाले पूजाको प्रसङ्गमा विशेष नैवेद्य चढाइँदा रहेछन् भन्ने बुझिन्छ। 'पञ्चरङ्गचित्रकर्मणः' भन्ने पद यहाँ परेको हुनाले उपत्यकाका देवस्थलमा जस्तै गोरखाका वज्र-भैरवस्थानमा पनि रङ्ग चढाउने विधान पूरा गरिंदो रहेछ भन्ने थाहा पाइन्छ ।

गोरखा–दरबारभन्दा प्राचीन 'उपल्लो कोट' मा वज्रभैरवस्थान अहिलेसम्म छ । त्यहाँ राजकीय कारणपूजा गोरखानाथका पुजारीद्वारा अहिले पनि हुन्छ । तर वज्रभैरवको प्राचीन मूर्ति भने अहिले बचेको छैन। केही ढुङ्गाहरू एकत्रित पारिएको स्थानलाई नै 'वज्रभैरव' को मूर्ति भनी पूजा गरिन्छ ।

बौद्ध धर्मको महायान सम्प्रदायमा 'वज्रयान' को जन्म भएपछि यसले अलि अर्कै मोड लियो; अब सिद्धयाइँको महत्त्व बढ्न थाल्यो; वज्रयानको जन्म दक्षिण भारततिर भएको देखिएको छ तापनि यसले उत्तरी भेकमा बढी लोकप्रियता पायो।नेपालमा पनि शुरूमै वज्रयान लोकप्रिय बनेको देखिन्छ; अंशुवर्माको समयमै यसको प्रवेश नेपालमा भइसकेको थियो भन्ने चर्चा माथि गरिसकेको छ । नेपाल उपत्यकामा मात्र होइन; नेपालको पहाडी भेकमा समेत वज्रयानको प्रचार भइसकेको थियो भन्ने कुरा गोरखाको यस अभिलेखले देखाएको छ । वज्रयानीहरूले 'महाकाल' लाई 'वज्रभैरव' संज्ञा दिएका छन्।

यसरी खण्डितै भए तापनि यो अभिलेख तात्कालिक केही कुरा बुझ्न उपयोगी छ ।

—★—

# ठिमीको अभिलेख

ठिमी बालकुमारीस्थाननिरबाट पश्चिमतिर ओर्लने बाटोबाट केही तल ओर्लेपछि एउटा पुरानो ढुङ्गे धारा आउँछ। त्यहीं यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको माथिल्लो भाग पढ्न नसकिने भइसकेको छ। यसमा अहिले संवत् देखिंदैन।

लेभीद्वारा १६ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ८२ संख्याको रूपमा यो छापिएको छ‡।

## मूलपाठ

(माथिल्ला केही पङ्क्ति पढ्न नसकिने)

१. ... ... हिरण्यादिप्रत्याय ... ...
२. ... ... पश्चिमे नि ... ... ...
३. ... ... ... ... ... ... ...
४. ... ... गामो ... ... ... ...
५. ... ... यमेत ... ... ... ...
६. ... ... तश्च पश्चिमेन च तदा . ...
७. ... ... दन्तरेणापि ते—माप्र ... ...
८. ... ... खातम्पल्ली ततो याव ...
९. ... ग्र—क ... विष्टिमनुष्यसम्बन्धेन प्रतिवर्ष यत्पुराणशत ...
१०. ...तेभ्य एव ग्रामीणैर्दातव्यम् राजकुलीयव्यवसायिभिस्तु न कदाचिद (न्यथा)

---

‡ 'मैले यो शिलालेख भेट्टाउन सकिनं, यो हराइसकेको देखिन्छ' भनी नोलीले लेख्नुभएको छ। तर उपर्युक्त ठाउँमा यो अभिलेख अहिले पनि छँदैछ।

११. (कर्त)व्यं ये तु केचिदस्मत्पादप्रसादोपजीविनो परे चान्यथा कुर्युः कारयेयु- (र्वा)

१२. ...तरान्न क्षम्यन्ते भविष्यद्भिरपि वसुधाधिपतिभिरात्मनः करुणातिशयम्.-

१३. पूर्वपार्थिवप्रणीतोयं दानधर्मसेतुरिति तद्गौरवात्सम्यगेवानुपालनीयस्तथा (चोक्तं)

१४. पूर्वदत्तां द्विजातिभ्यो यत्नाद् रक्ष युधिष्ठिर। महीं महीभुजां श्रेष्ठ दानाच्छ्रेयोनुपा

१५. लनम् ॥ षष्टिं वर्षसहस्राणि स्वर्गे मोदति भूमिदः। आक्षेप्ता चानुमन्ता च ता(वन्ति)

१६. नरके वसेत्। इति स्वयमाज्ञा दूतकश्चात्र राजपुत्रजयदेवः सं(वत्)...

१७. आश्वयुजि कृष्णषष्ठ्याम्

## अनुवाद

... ... ... ... ...

हिरण्य (नगदरूपमा उठाइने करविशेष) आदि आम्दानी... ...पश्चिममा ...जाने ... ....देखि पश्चिमपट्टि ... ...खातम्पल्ली ... ... त्यताबाट ...सम्म... ...विष्टि, मनुष्यको सम्बन्धबाट प्रतिवर्ष जुन...शय पुराण (उठ्छ); त्यो तिनीहरूलाई नै गाउँलेहरूले दिनू। राजदरबारका कामदारहरूले कहिले पनि अन्यथा नगर्नू। हाम्रो निगाहबाट जीविका चलाउनेहरू (सरकारी कर्मचारी) वा अरू कसैले अन्यथा गर्लान् वा गराउलान्; तिनी-हरूलाई हामी बिलकुलै सहनेछैनौं। पछि हुने राजाहरूले पनि आफ्नो ठूलो दया...अघिका राजाले बनाई गएको दान धर्मको यो पुल हो भनी अघिका राजाको कदर गरी राम्ररी थाम्नुपर्छ। भनिएको छ पनि छ– राजाहरूमा श्रेष्ठ हे युधिष्ठिर, अघिका राजाहरूले ब्राह्मणलाई दान दिएको जग्गा कोशिशसाथ रक्षा गर्नुहोस्। दान दिनुभन्दा पहिलेको दान थामिदिनु उत्तम छ। जग्गा दान दिने मानिस साठी हजार वर्षसम्म स्वर्गमा सुखसंग रहन्छ। जग्गा खोस्ने र खोस्न लाउने मानिस त्यति नै वर्ष नरकमा पर्छ।

यो मेरो आफ्नै आज्ञा हो। यस बातका दूतक (मार्फत) राजपुत्र जयदेव। संवत्...आश्विन कृष्ण षष्ठी।

**व्याख्या–**

यस अभिलेखको माथिल्लो भाग अस्पष्ट हुँदा यसमा अहिले राजाको नाउँ देखिंदैन। संवत् पनि फुटेको छ। तर यसमा दूतक जयदेव छन्। यस कारण यो अभिलेख शिवदेवको हो भन्ने थाहा

पाइन्छ । यसमा अग्रहार (बिर्ता) दिएको कुरा परेको छ। बिर्ता दिइएको जग्गाबाट उठ्ने (भाग, भोग, कर) हिरण्य आदि सरकारी आम्दानी जम्मै दान दिइएको छ । यो दान कसले पाएको हो; अभिलेख खण्डित हुँदा अहिले स्पष्ट छैन । तर 'तेभ्य एव ग्रामीणैर्दातव्यम्' भन्ने उल्लेख यसमा परेको हुनाले व्यक्तिविशेषलाई नभई वर्गविशेषलाई यो दान दिइएको बुझिन्छ। माथि गएको ठिमीको अर्को खण्डित अभिलेखबाट त्यस बेला ठिमी भेकमा वासुदेवको मन्दिर थियो भन्ने देखिन्छ। शायद तिनै वासुदेवसंग सम्बन्ध राख्ने ब्राह्मणगोष्ठीलाई यो दान दिइएको हो कि भन्ने देखिन्छ। यस्तो 'भगवद्वासुदेवब्राह्मणगोष्ठी' को उल्लेख लेलेको अंशुवर्माको अभिलेखमा पनि आएको छ ।

राजकाजी काम, जनहित हुने सार्वजनिक काम त्यस बेला 'विष्टि' लगाई अनिवार्य रूपमा सित्तै जनताद्वारा गराइन्थ्यो । 'विष्टि' रूपको त्यस्तो काममा उपस्थित नहुनेलाई नगद दण्ड गरिन्थ्यो। यस अभिलेखबाट 'विष्टि' रूपमा निकै ठूलै रकम उठ्तथ्यो भन्ने थाहा पाइन्छ। विष्टि उठाउने सरकारी कर्मचारीलाई 'राजकुलीयव्यवसायी' भनिन्थ्यो भन्ने पनि यस अभिलेखबाट थाहा पाइन्छ। का. इ. लगनको माथि गएको अभिलेखमा 'भोट्टविष्टिहेतोः प्रतिवर्षं भारिकजनाः पञ्च व्यवसायिभिर्ग्रहीतव्या' भनी उल्लिखित 'व्यवसायी' पनि यस्तै विष्टि उठाउने सरकारी कर्मचारी हुन् ।

शुरूका शिवदेवका अभिलेखमा जयदेवलाई 'राजपुत्र' मात्र भनिएको छ। पछिका अभिलेखमा भने उनलाई 'भट्टारक' भनिएको पाइन्छ ।

# बलम्बूको द्वितीय शिवदेवका अभिलेख

बलम्बू गाउँको बाहिर उत्तरपट्टि इन्द्रमती खोल्साको किनारमा यो अभिलेख कुँदिएको शिलापट्ट रहेको छ। यसको अभिलेख कुँदिएको भाग ४२ अङ्गुल लम्बा २४ अङ्गुल चौडा छ। यहाँ संवत् १२९ छ‡।

नोलीद्वारा ७६ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. स्वस्ति श्रीमत्कैलासकूटभवनात् सम्यग्विरचितसकलवर्णाश्र मिव्यवस्थः समस्त-सामन्तशिर[१]

२. सा खरीकृतचरणनखमयूखसमूहो[२] भगवत्पशुपतिभट्टारकपादानुगृहीतो बप्प-

३. पादानुध्यातो लिच्छविकुलानन्दकेतुः[३] परमभट्टारकमहाराजाधिराजश्रीशिवदेवःकु

४. शली नेपालभुक्तौ यथास्वमधिकारानधितिष्ठतः सर्वराजपुरुषांस्तद्वृत्तिभुजश्च[४] यथार्हङ्कु-

५. शलमभिधाय समाज्ञापयति विदितमस्तु भवतां यथा[५]पुत्तीनारायणदेवकुल-प्रतिबद्धदा-

---

‡ नोलीले यस अभिलेखको संवत् १०९ छपाउनुभएको छ। तर मूलमा संवत् १२९ रहेको छ। 'पूर्णिमा' २० अङ्कको १८६ पृष्ठ हेर्नुहोस्।

नोलीका पाठ–

१. (ॐ स्वस्ति) कैलास (कूटभवना) . . . . . . . . . . . . . . . . . .

२. . . . . . चरण. . . . . . . . . .   ३. लिच्छविकुल. . . . .

४. नेपालभू. . . . . . . . . . वधि . . . सराज. . . र. . . . . . . नु. .

५. . . . . . . . . . . . . . .देवकुलप्रतिबद्ध–

६. वाकोट्टाभिधानो[१] ग्रामः पूर्वं... द्राजकुलेनाविच्छेदक्रमेणोपभुज्यमान[२] इत्यव-
गम्यास्मा-

७. भिरिदानीमयङ्ग्रामः कोट्टमर्यादोपपन्नश्चाटभटानामप्राबेश्येन [३]फलन्जु विष्टया
च विनिर्मुक्तः

८. सतलशीताटीद्रङ्गनिवासिनां पालनोपभोगार्थं प्रसादीकृतोस्य च देवकुलस्य
खण्डस्फुटितसं-

९. स्कारकारणपूजादिकर्मभिरेव कर्त्तव्यं कारणपूजाव्यवशिष्टेन च द्रव्येण[४] भगवतः
श्रीपशुपतिभट्टार-

१०. कस्य प्रतिवर्षमस्मत्पुण्याधिगमनिमित्तं शोभनच्छत्रारोपणा करणीया तमुद्दिश्य
शोभना यात्त्रापि क-

११. (र)णीया तदुपयुक्तशेषमपि[५] प्रत्यायजातमेतैर्विभज्य स्वयमुपभोक्तव्यं एष च
ग्रामः फवद्रङग्राम-

१२. स्य दक्षिणपश्चिमेन गंप्रोन्दिङग्रामस्यापि पश्चिमोत्तरेण गणिदुङग्रामस्य
चोत्तरपूर्वतो नुपुनग्रा-

१३. मस्यापि दक्षिणपूर्वेणामीषाञ्चतुर्ण्णाङ्ग्रामाणां सीमा सत्वौमालम्बासञ्ज्ञके
प्रदेशे समावास-

१४. यितव्या सीमा चास्य प्राक्तनी श्रारामखरप्रदेशे शोभनाम्लाम्रवृक्षाद् दक्षिण-
पश्चिमतः पाण्डुर-

१५. मृत्तिकास्रोतसश्च दक्षिणपश्चिमेन यावद्धिमनदीस्रोत उत्तीर्य किञ्चिदारुह्य
स्वकीयां एव सीमा-

१६. नं वेष्टयित्वा गवां लवणदानस्था- - दक्षिणालिकासमीपे श्राम्रवृक्षस्तत्पश्चिमतो
लुल्जुस्रोतस-

१७. मुत्तीर्य दांयम्बीगम्प्रोन्दिन्दावाकोट्टसीमामध्ये[६] त्रिसन्धिसंज्ञकः प्रदेशस्तस्यो-
त्तरतः पुत्तीनदी[७]

१८. तस्या एवोपरिष्टाद् यावत्पुत्तीयवदुनदीसङ्गमस्तमुत्तीर्य किञ्चिदारुह्य च
प्राच्या किशि. . . . न

---

नोलीका पाठ–

१. –नोज्ञाभिधानो २. . . . . . . . . . . . . . . . . . . . भुज्यमान ३. झलन्दु

४. एभि. . . . . . . . . . .कारणपूजा–वशिष्टेन दभु–ण ५. तदुपयुक्त. ष्टमपि

६. प्रोद्भि. दा कोह सी. . . . . ७. . . . . . . .

१९. क्षेत्त्रस्योत्तरतः सीम्नो यावत्सलम्बूराजवासकस्योत्तरेण न–स्रोतो बृहत्शाल-
वृक्षस्ततपूर्वदक्षिण-

२०. तः माशवृक्षस्ततपूर्वतोपि राजवासके पानीयारोपित एवोपभिधिसिस्तो-
खोट्टक्षेत्त्रोत्तरेणाम्रपादप-

२१. स्तत्पूर्वतोपि गोल्लंस्रोतसोधस्ताद् यावद् गौतमाश्रमसरित्सङ्गमस्तस्य
चाधस्तादुत्थिमनदीसम्बद्यस्ताम-

२२. वतीर्यारुह्य च दण्डङगुंवृहत्पथस्य त्रिसन्धिसंज्ञकात्पश्चिमेनारुह्य किञ्चि-
त्पालणस्य च दक्षिणतो

२३. वृहद्वनं तद्दक्षिणतोपि वस्तुंक्षेत्त्रं तस्यैव दक्षिणेन चम्पकवृक्षस्तद्दक्षिण
पश्चिमतश्च स

२४. एव शोभनाम्लाम्रवृक्ष इत्येतत्सीमान्तःपातिन्यस्मिन्[1] ग्रामेस्मत्प्रतिबद्धजीवनो-
पभोगिभिरन्यै-

२५. र्वा न कैश्चिदल्पापि पीडा कर्तव्या कारयितव्या वा ये त्वेतामास्माकीनामाज्ञा-
मवधूयान्यथा[2] कुर्युः कार-

२६. येयुर्वा तेस्माभिरवश्यन्न क्षम्यन्ते ये वास्मदूर्ध्वम्भवितारो मेदिनीनाथाश्च
तैरपि पूर्वपार्थिव-

२७. कृतोयं विशिष्टः प्रसाद इति स्वहितोदयापेक्षिभिस्तद्गौरवान्नितरां संरक्षणी-
यस्तथा[3] चो-

२८. क्तं पुरातनानां पृथिवीश्वराणाञ्जगद्धितायाविरतोद्यमानां ये सर्वदाज्ञामनु-
पालयेयुस्ते-

२९. षां नृपश्रीर्नियताभिवृद्धि[4]: ॥ इति स्वयमाज्ञा दूतकश्चात्त्र श्रीजयदेवो
भट्टारकः संवत्

३०. १२९... ...पञ्चम्याम् ।

# अनुवाद

कल्याण होस् । सुन्दर कैलासकूटभवनबाट सम्पूर्ण वर्णाश्रमव्यवस्था राम्ररी लागू गरेका, सारा सामन्तहरूका शिरले पाउका नङ झल्झल टल्कने पारिएका (अर्थात् सामन्तहरूद्वारा ढोगिएका)

---

नोलीका पाठ

१. इत्येतत्सीमान्तःसा–ि स्मिन् २. –मवज्ञायान्यथा

३. तद्गौरववद्‌भिर्–संरक्षणीयो यथोक्त ४. नियता –ि–ि ॥

भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, बुवाबाट अनुग्रह पाएका, लिच्छवि कुललाई आनन्द दिने झण्डास्वरूप भएका, गाथमा आराम रहेका, परमभट्टारक महाराजाधिराज श्रीशिवदेव-बाट नेपालभुक्तिभित्र आफ्ना आफ्ना अधिकारमा रहेका सबै सरकारी अधिकारीहरूलाई र सरकारी वृत्ति खानेहरूलाई पनि यथोचित कुशल मङ्गल सोधेर आज्ञा भएको छ । तिमी-हरूलाई थाहा होस् ।

पुत्तीनारायण देवमन्दिरसंग सम्बन्ध रहेको दावाकोट्ट भन्ने ग्राम पहिले. . . . राजकुलद्वारा लगातार भोगचलन गरी आएको भन्ने थाहा पाएर अहिले हामीबाट यो ग्राम कोट्टको स्थितिबन्धेजले युक्त भएको, चाटभटले पस्न नपाउने, फलन्जुविष्टि नलाग्ने गरीकन तलसहितको शीताटीब्रङ्को बासिन्दाहरूलाई हेरचाह र भोगचलनको लागि निगाह गरिएको छ । यस देवमन्दिरको टुटफुट हुँदा मरम्मत र कारणपूजा (नैमित्तिकपूजा) आदि यिनीहरूले नै गर्नू । कारणपूजा गरी बचेको पैसाले हाम्रो पुण्य बढोस् भनी भगवान् पशुपतिनाथलाई प्रतिवर्ष सुन्दर छत्र चढाउनू । त्यसको उपलक्ष्यमा राम्रो यात्रा पनि गर्नू । त्यसमा लगाएर पनि बचेको आयस्ता यिनीहरूले आफैं बाँडेर खानू ।

यो ग्राम फवब्रङग्रामको दक्षिण–पश्चिममा, गंप्रोदिङग्रामको पश्चिमउत्तरमा, गणिदुङ ग्रामको उत्तरपूर्वमा, नुपुन ग्रामको दक्षिणपूर्वमा रहेको छ । यी चार ग्रामको साँध सत्वौमालम्बा भन्ने ठाउँमा टुङग्याउनू ।

यस ग्रामको पहिलेको सीमा यस प्रकारको छ–आरामखर भन्ने ठाउँमा राम्रो अमिलो आँपको रूखबाट दक्षिणपश्चिमपट्टि सेतो माटो (कमेरो) को सोतोबाट पनि दक्षिण–पश्चिमपट्टि हिमनदीको सोतो तरी केही उकालो लागी आफ्नै सीमालाई घुमेर आई गाईलाई नून खुवाउन राखिएको ठाउँ. . .को दक्षिण आली साँध नजीकै रहेको आँपको रूख, त्यताबाट पश्चिमपट्टि लुल्जुसोतो तरी बांयम्बी गम्प्रोन्दिङ दावाकोट्टको सीमाको बीचमा 'त्रिसन्धि' भन्ने ठाउँ, त्यसको उत्तरतिर पुत्तीनदी, त्यसैको माथितिर पुत्ति यवदु नदीको दोभान, त्यसलाई तरी केही उकालो लागी पूर्वतिर किशि. . . . . .न खेतको उत्तरतिरको सीमादेखि सलम्बू राजवासकको नजीकै उत्तरतिर न. . . सोतोनिरको ठूलो शालको रूख, त्यसको पूर्वदक्षिणतिर माशरूख, त्यसको पूर्वतिर राजवासमा लगिएको पानीको सोतो, उपभिधि सिस्तीखोट्ट खेतको नजीकै उत्तरतिर आँपको रूख, त्यसको पूर्वतिर गोल्लं सोतोको तलतिर गौतमाश्रम र खोलोको दोभान, त्यसको तलतिर उत्थिम नदीसम्बैद्य, त्यसलाई नाघेर उकालो लागी दण्डङगुंको मूल सडकको त्रिसन्धि भन्ने ठाउँदाट पश्चिमतिरबाट केही उकालो लागी पालणको दक्षिणतिर ठूलो जङ्गल, त्यसको दक्षिणतिर वस्तुंखेत, त्यसैको नजीकै दक्षिणतिर चाँपको रूख, त्यसको दक्षिण–पश्चिमतिर त्यही राम्रो अमिलो आँपको रूख ।

यति चारकिल्लाभित्रको यो ग्राममा हाम्रोतर्फबाट जीविका चलाउनेहरूले (सरकारी

कर्मचारीहरूले) वा अरू कसैले पनि अलिकता पनि दुःख दिनु वा दिलाउनु हुँदैन । जसले हाम्रो यो आज्ञा नटेरेर अन्यथा गर्लान् वा गराउलान्, तिनीहरूलाई हामी अवश्य सहनेछैनौं । हामीभन्दा पछि हुने राजाहरूले पनि अघिका राजाले गरिदिएको विशिष्ट निगाह हो भनी आफ्नै भलो चाहेर यसलाई कदरसाथ थाम्नुपर्छ । भनिएको पनि छ– दुनियाँको हितको लागि उद्योग गर्ने अघिका राजाहरूको आज्ञालाई जसले सधैं मान्छन्, तिनको राज्यलक्ष्मीको बढिबढाउ निश्चित हुन्छ ।

यो मेरो आफ्नै आज्ञा हो । यसका दूतक भट्टारक श्रीजयदेव । संवत् १२९. . . . . . पञ्चमी ।

**व्याख्या--**

सुनागुठीको अभिलेखमा जस्तै यस अभिलेखमा पनि द्वितीय शिवदेवले वर्णाश्रमव्यवस्था राम्ररी लागू गर्न सकेकोमा गर्व व्यक्त गरेका छन् । साथै सामन्त राजाहरूलाई राम्ररी थ्रेंठ्याराएको कुरा पनि यहाँ लेखाएका छन् । यसरी द्वितीय शिवदेवका समयमा पनि शासनमा स्थिरता रहेको देखापरेको छ । यसको असर अरू काममा पनि पर्नु स्वाभाविक थियो ।

नेपालभुक्ति–

लिच्छविकालका अभिलेखमा सर्वप्रथम 'भुक्ति' शब्दको उल्लेख यस अभिलेखमा आएको छ । गुप्तकालदेखिका भारतका अभिलेखमा पनि 'भुक्ति' शब्दको प्रयोग पाइन्छ । पुण्डवर्द्धनभुक्ति, अहिच्छत्राभुक्ति आदि उल्लेख त्यताका अभिलेखमा आएको छ । यस अभिलेखमा नेपालराष्ट्र भन्ने अर्थमा 'नेपालभुक्ति' शब्दको प्रयोग भएको छ । ज्ञानेश्वरको द्वितीय जयदेवको अभिलेखमा यही अर्थमा 'नेपालमण्डल' शब्दको प्रयोग गरिएको छ । यसरी 'मण्डल' शब्दको पर्यायवाची शब्दको रूपमा 'भुक्ति' शब्दको प्रयोग भएको हामी पाउँछौं । 'मण्डल' शब्दको प्रयोग पछिसम्म पनि प्रचलित रह्यो । 'भुक्ति' शब्दको प्रचलन भने पछि छुट्यो । गोपालवंशावलीमा एक ठाउँमा 'भुक्ति' शब्दको प्रयोग अझै हामी पाउँछौं । रुद्रमल्लले नुवाकोटसम्मको सारा नेपालमा शासन गरे भनी वर्णन गर्दा 'समस्तनेपाल. . .नवकोटभुङतीप्रजंत र.जकृतम्' भनी गोपालवंशावलीकारले लेखका छन् ।

शीताटीद्रङ्ग–

चन्द्रागिरि र दहचोक डाँडोको बीचको भाग लिच्छविकालमा निकै आबाद भएको थियो; त्यस भागमा अनेक बस्ती कायम थिए । यी बस्तीहरूको मुख्य स्थल 'शीताटी' रहेको थियो । शीताटी व्यापारको दृष्टिले पनि मुख्य केन्द्र बनेपछि यसले 'द्रङ्ग' संज्ञा पायो । गणदेवको पालासम्म शीताटी 'तल' मात्र कहलाएको थियो । अब यो 'द्रङ्ग' कहलाइसकेको थियो तथा यस अन्तर्गत अरू तल, ग्रामहरू थिए भन्ने कुरा यस अभिलेखबाट थाहा पाइन्छ ।

लिच्छविकालमा नेपालमा अनेक देवमन्दिर थिए । हेरचाह, मरम्मत आदिको बन्दोबस्त

नभए देवमन्दिरको रक्षा हुनु गाह्रो थियो। यस कारण सो काम सरकारतर्फबाट नगरी केही आयस्ताको बन्दोबस्त गरिदिई देवमन्दिरको हेरचाह गर्ने काम पाञ्चाली आदि स्थानीय संघट्टनलाई नै सुम्पिदिने नीति लिच्छविकालका शासकहरूले लिएका थिए। यस अभिलेखमा पनि यस्तै कुरा परेको छ। शीताटीद्रङ्गको इलाकाभित्र 'पुत्ती' भन्ने खोलाको तीरमा नारायणमन्दिर रहेछ। सो नारायण 'पुत्तीनारायण' भनी कहलाएका थिए। सो नारायणमन्दिरमा पूजा–आजा, मरम्मत आदिको लागि 'दावाकोट्ट' भन्ने ग्राम चढाइएको रहेछ; त्यसको भोगचलन राजदरबारबाट हुँदो रहेछ। तर अब शिवदेवले सो ग्राम शीताटीद्रङ्गलाई सुम्पिदिए। सो ग्रामलाई कोट्ट (किल्ला) सरह सुविधा दिइयो तथा मालपोत माफी गरिदिइयो; साथै फलन्जु भन्ने स्थानीय विष्टि पनि माफी गरिदिइयो।

लिच्छविकालमा धार्मिक समन्वयको एउटा राम्रो उदाहरण यस अभिलेखमा पाइन्छ। यहाँ पुत्तीनारायणको नैमित्तिक पूजा, देवमन्दिरको मरम्मत आदिबाट बचेको पैसाबाट प्रतिवर्ष पशुपतिनाथकहाँ सुन्दर छत्र चढाउनू; त्यसको उपलक्ष्यमा राम्ररी जात्रा पनि चलाउनू भन्ने उल्लेख परेको छ। यसबाट एकातिर लिच्छविकालका धार्मिक जात्राको संकेत हामी पाउँछौं भने अर्कोतिर धार्मिक समन्वयको उदाहरण पाउँछौं। धार्मिक समन्वयको भावना नभएको भए नारायणको पूजाआजा गरी बाँकी रहेको आयस्ताबाट पशुपतिको पूजा गर्ने प्रसङ्ग आउँदैनथ्यो।

पुत्तीनारायणलाई चढाइएको दावाकोट्ट ग्रामको चारकिल्ला यस अभिलेखमा राम्ररी खुलाई दिइएको छ। यसबाट 'दावाकोट्ट' ग्राम निकै ठूलो देखिन्छ। सो ग्रामको चार किल्ला खोल्दा प्रसङ्गवश परेका उल्लेखको आधारमा हामी त्यस बेलाका केही कुराहरू बुझ्न सक्छौं। अब तिनको पनि अलिकता चर्चा गर्नुपरेको छ।

यस भेकमा आँपका रूख हुँदा रहेछन्। यस अभिलेखमा तीन चार ठाउँमा आँपका रूखको उल्लेख भएको छ। आँपका रूखबाहेक चाँप, शाल आदिका रूख पनि यता हुँदा रहेछन्।

यस भेकमा राजाको मुकाम रहने एउटा दरबार पनि रहेको बुझिन्छ। त्यसलाई यहाँ 'सलम्बू-राजवासक' भनिएको छ। बलम्बू चौकिटारमा उहिले राजदरबार थियो भन्ने किंवदन्ती अहिलेसम्म चलेर आएको छ। यस अभिलेखमा उल्लिखित 'राजवासक' शायद सोही हो कि भन्ने अनुमान हुन्छ।

यस भेकमा लिच्छविकालमा गोपाल, आभीरहरूका बस्ती थिए। यसो हुनाले यस भेकमा गाईहरू बढी पालिनु स्वाभाविक थियो। गाईप्रति अरू पालतू प्राणीहरूभन्दा भिन्नै भावना जनतामा रहेको थियो। गाई पूज्य प्राणी हो भनी जनता संझन्थे। यसैले गाईलाई केही खुवाउनु पुण्यको काम हो भन्ने धारणा थियो। यस कारण गाईलाई खुवाउन बाटामा ठाउँ–ठाउँमा सिंधेनून राखिदिइन्थ्यो। यो चलन केही काल अगाडिसम्म प्रचलित थियो। किलागढ आदि ठाउँमा बाटामै

सिधेनूनका डल्ला राखिएका हुन्थे । अनि त्यो बाटोबाट जाने गाईहरू नून चाट्दै जान्थे । यस अभिलेखमा 'गवां लवणदानस्थान' को उल्लेख आएको हुनाले लिच्छविकालमा पनि गाईलाई खुवाउन नून राखिदिने चलन थियो भन्ने देखिएको छ।

गौतमश्रम–

यस अभिलेखमा दावाकोट्टको चारकिल्ला खुलाउँदा 'गौतमाश्रम'को उल्लेख आएको छ । यसबाट गौतमाश्रम भनी प्रसिद्ध ठाउँ लिच्छविकालमा यस भेकमा थियो भन्ने स्पष्ट छ । गोपाल-वंशावलीकारले नेपाल–उपत्यकाको इतिहासको शुरू शुरूतिरै गौतम आदि केही ऋषिहरू यहाँ आई रहन लागेको कुरा लेखेका छन् । गोपालवंशावलीको वाक्य यस प्रकारको छ– "हिमवन्त-शैल्यमध्यवर्तणी महारन्यभूते भूमण्डले. . . .गौतमादिभि ऋषिग्नैस्तत्र प्रचरति" । लिच्छवि-कालको यस अभिलेखमा गौतमाश्रम नामक स्थल देखिएको हुनाले गोपालवंशावलीकारको उक्ति कल्पित रहेनछ भन्ने देखिएको छ।

'गौतमाश्रम, बाहेक 'भरताश्रम' भन्ने स्थान पनि लिच्छविकालमा यहाँ थियो । काठमाडौं ह्नुगलनिरको अभिलेखमा भरताश्रमको उल्लेख आएको छ। यस कुराको चर्चा माथि यथास्थानमा गरिसकेको छ। यसबाट शुरूशुरूमा केही ऋषि मुनिहरूले नेपालउपत्यकामा आश्रम खोलेर बसेका थिए कि भन्ने देखिएको छ । अर्को कुरा– नेपाल–उपत्यकाका असी प्रतिशतभन्दा बढी ठाउँ, खोलानाला आदिका नाम संस्कृतभिन्न किरातपरिवारका भाषाबाट रहेका छन् । तर वाग्वती,मणिमती आदि केही प्रसिद्ध खोलाको नाम शुरूदेखि नै संस्कृतभाषामा रहेका छन्।'वाग्वती' यो नामको सम्बन्ध सोझै विद्यासंग रहेको छ । यस कुराको आधारमा विचार गर्दा 'वाग्वती' नदीको किनारमा उहिले विद्वान् ऋषिमुनिहरू आश्रम खोलेर बसेका थिए कि भन्ने मलाई लागेको छ । जे होस्; लिच्छविकालमा यहाँ गौतमाश्रम, भरताश्रम आदि नामले प्रसिद्ध ठाउँ थिए भन्ने कुराचाहिं निश्चित छ ।

–★–

[१४४ संख्या]

# नारायणचौरको शिवदेवको अभिलेख

नक्साल नारायणचौरमा यो अभिलेख कुँदिएको शिलापत्र रहेको थियो। हाल यो अभिलेख राष्ट्रिय संग्रहालयमा रहेको छ। यसको शिरोभागमा साँढे अङ्कित छ। यसको माथिल्लो केही भाग अस्पष्ट छ। यसमा अहिले संवत् देखिँदैन।

नोलीद्वारा ८४ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ... कैलासकूटभवनाद् ... ...
२. ... ... महाराजाधिराजश्रीशिवदेवः कुशली[१] ...

(३–८ पंक्ति पढ्न नसकिने)

९. ... ... (यस्त्वि)मामाज्ञामतिक्रम्यान्यथा कुर्युः कारयेयुर्वास्माभि-
१०. ... ... भूपतिभिः पूर्वराजकृतप्रसादानुपालनस्य व्यवहित-
११. ... ... दृढ ...ी या इति स्वयमाज्ञा। दूतकश्चात्र भट्टारकश्रीजयदे
१२. (व) ... ... पौषशुक्लपञ्चम्याम्

## अनुवाद

.....कैलासकूट भवनबाट...... ....गाथमा आराम रहेका महाराजाधिराज श्रीशिवदेवले... (आज्ञा गर्नुभएको छ।) ... ..................

---

१. राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिको आधारमा १ र २ पंक्तिका यी अक्षर पढ्न सकिन्छन्। नोलीले ९ पंक्तिदेखि मात्र पढ्नुभएको छ।

...जसले यो आज्ञा नाघेर अन्यथा गर्लान् वा गराउलान्, तिनलाई हामी (सहनेछैनौं । पछि हुने) राजाहरूले पनि अघिका राजाले गरेको निगाह थाम्नामा लाग्नुपर्छ ।

यो मेरो आफ्नै आज्ञा हो। यस बातका दूतक (मार्फत) भट्टारक श्रीजयदेव। (संवत्) ... ...पौष शुक्ल पञ्चमी ।

## व्याख्या-

यो अभिलेख निकै खिइएको हुनाले यसमा के विषय परेको थियो ; सो बुझ्न नसकिने भएको छ। अहिले बचेको भागबाट द्वितीय शिवदेवले कैलासकूट भवनबाट जारी गरेको सनदपत्ररूपको अभिलेख यो हो भन्ने थाहा पाइन्छ । नक्साल भेकको कुनै बस्तीलाई सुबिधा गरिदिएको कुरा यसमा परेको थियो भन्ने अनुमान हुन्छ। यहाँ दूतक जयदेव छन्। उनलाई 'भट्टारक' भनिएको छ। यस बेला 'भट्टारक' पदले युवराजलाई लक्ष्य गर्दथ्यो ।

-†-

# च्यासलटोलको जयदेवको अभिलेख

ललितपुर च्यासलटोलमा 'नायहिटी' भन्ने ढुङ्गेधारानिर यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको माथिल्लो भाग अस्पष्ट भइसकेको छ। यहाँ संवत् १३७ छ।

लेभीद्वारा १८ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा चाहिं ७९ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ... ... ... ... ... ... ... बप्प-
२. पादानुगृहीत ... ... महाराजाधिराजपरमेश्वरश्रीज-
३. यदेवः कुशली[१] ... ... ...

(बीचका ४–११ पंक्ति पढ्न नसकिने)

१२. ... ... दक्षिणेन ... ..तंवाटिकायाश्च दक्षिण ...
१३. ... ... ... पश्चिम ... ...
१४. ... ... (द)क्षिण ... स्थान–सहस्र .. दि ... न म
१५. –स्तन ...... नदीमुत्तीर्य यावच्च ... पश्चिमतः पानीयपात...
१६. वंमनुसृत्य । ... पिर्णपश्चिमेन ... ण्णङ्कक्षेत्रेण किञ्चिद्दक्षिणेन पश्चिमशङ्कुर
१७. ... टावं शिरसा पश्चिमत उत्तरङ्गत्वा अपोवतीर्य नदीं लङ्घयित्वा नद-गृहमण्डल-

---

१. राष्ट्रिय अभिलेखालयमा रहेको प्रतिलिपिको आधारमा १–३ पंक्तिका यी केही अक्षर पढ्न सकिन्छन्। नोलीले १२ पंक्तिदेखि मात्र पढ्नुभएको छ।

१८. .. श्चिमोत्तरङ्गत्वा महापथेन च पश्चिमं गत्वा शिलासङ्क्रमस्य पश्चिमेन रेटापाञ्चाली

१९. .. न च पूर्वोत्तरङ्गत्वा लोंप्रिपाञ्चालिवाटिकायाः पश्चिमोत्तरङ्गत्वा दोला-शिखर-

२०. ... पूर्वेणोत्तरङ्गत्वा पुनुपाञ्चालिकाक्षेत्रस्य च पश्चिमोत्तरङ्गत्वा लोंप्रि-पाञ्चालिकाक्षेत्र-

२१. स्य पश्चिमेनोत्तरं गत्वा नारायणदेवकुलदशमीगौष्ठिकक्षेत्रस्याप्युत्तरङ्गत्वा

२२. लोंप्रिग्रामेन्द्रगौष्ठिकक्षेत्रस्योत्तरं गत्वोमातीर्थक्षेत्रस्य चोत्तरं गत्वा ततो यावत्स

२३. पुष्पवाटिकाविहारक्षेत्रस्य सीमावधिरित्येतत्सीम ... ...

२४. लप्रासादमण्डलाभ्यन्तरे च कोट्टमर्यादास्माभिः प्रसादीकृता.. ...... आग

२५. द्भिरस्मत्पादप्रसादप्रतिबद्धजीवनैरन्यैर्वा न कैश्चिदयम्प्रसादो व्यतिक्रमणीयो...

२६. .. नामस्मदीयामाज्ञामवधूयान्यथा कुर्वीरन् कारयेयुर्वा तेस्माभिर्न ...

२७. ... नराधिपतिभिः पूर्वमहीपालकृतप्रसादपरिरक्षणैकतानै ...

२८. ... तितरान्न मर्षणीयाः। स्वयमाज्ञा दूतकोप्यत्र भट्टारकश्रीविजयदेवः सं-

२९. वत् १३७ ज्येष्ठशुक्लपञ्चम्याम्

# अनुवाद

(कैलासकूट भवनबाट)... ... बाबुको पाउको अनुग्रह पाएका... ... गाथमा आराम रहेका श्रीजयदेवबाट... (आज्ञा भएको छ।)

... ... ... ... ... ...

दक्षिणतिर ... बारीबाट पनि दक्षिणतिर... पश्चिम...दक्षिण... ठाउँ... नदी तरेर ... ... पश्चिमतिर पानी ... पूर्वतिर लागी ...पिर्णदेखि पश्चिमतिर...ण्णङ्ग खेतदेखि केही दक्षिणतिर पश्चिमतिर शङ्कर...शिरदेखि पश्चिमतिरबाट उत्तर गई...नदी तरेर नवगृहमण्डल...पश्चिम–उत्तरतिर लागी मूल सडकबाट पनि पश्चिमतिर गई ढुङ्गे दोभानको पश्चिमतिर रेटापाञ्चाली...पूर्व–उत्तरतिर लागी लोप्रिङ पाञ्चालीको बारीबाट पश्चिमोत्तर लागी, दोलाशिखर...पूर्वबाट उत्तरतिर लागी, पुनुपाञ्चा-लिकाको खेतको पनि पश्चिम–उत्तरतिर लागी, लोप्रिङ पाञ्चालीको खेतको पश्चिमबाट उत्तरतिर लागी नारायणदेवमन्दिरको दशमी–गौष्ठिकको खेतको पनि उत्तरतिर लागी लोप्रिङ ग्राम र इन्द्रगौष्ठिकको खेतको उत्तरतिर लागी, उमातीर्थको खेतको पनि उत्तरतिर लागी त्यताबाट त्यही पुष्पवाटिका विहारको खेतको सीमासम्म।

यति चारकिल्लाभित्रको . . . . . . प्रासादमण्डलभित्र पनि कोट्ट (किल्ला) को स्थितिबन्धेज हामीबाट निगाह गरियो । . . . यो कुरा थाहा पाएर हाम्रोतर्फबाट जीविका चलाउने (सरकारी कर्मचारी) हरूले वा अरू कसैले पनि यो निगाह ननाघ्नू । . . . जसले हाम्रो यो आज्ञा नाघेर अन्यथा गर्लान् वा गराउलान्, तिनलाई हामी (सक्नेछैनौं । पछि हुने) राजाहरूले पनि अघिका राजाले गरेको निगाहको रक्षामा मन लाएर. . . . (तिनलाई) पक्का नसहनू । यो मेरो आफ्नै आज्ञा हो । यस बातका दूतक (मार्फत) भट्टारक श्रीविजयदेव ।

संवत् १३७ ज्येष्ठ शुक्ल पञ्चमी ।

## व्याख्या–

असुरक्षित अवस्थामा रहेको हुनाले लामो यस अभिलेखको धेरै भाग पढ्न नसकिने भइसकेको छ । विशेष गरी यसको माथिल्लो भाग अस्पष्ट भइसकेको छ । तर तेस्रो पङ्क्तिमा 'जयदेवः कुशली' पद अझै देखिन्छ । यसमा संवत् १३७ पनि देखिन्छ; दूतक विजयदेव पनि स्पष्ट देखिन्छ । यसरी यो अभिलेख प्रसिद्ध द्वितीय जयदेवको हो भन्ने निश्चित छ । संवत् १२९ सम्म द्वितीय शिवदेवको अभिलेख पाइएको छ । यस कारण संवत् १२९ र १३७ को बीचमा जयदेव गद्दीमा बसेको देखिएको छ ।

यस अभिलेखमा परेको मुख्य विषय अलि अस्पष्ट छ । तर 'इत्येतत्सीम . . . लप्रासादमण्डलाभ्यन्तरे च कोट्टमर्यादास्माभिः प्रसादीकृता' भन्ने वाक्य यसमा परेको हुनाले तोकिएको केही इलाकालाई कोट्टले पाउने सुबिधा दिई यो अभिलेख गरिदिइएको हो भन्ने थाहा पाइन्छ । त्यस बेला अरू साधारण बस्तीभन्दा कोट्टरूपको बस्तीले बढी सुविधा पाएको हुन्थ्यो । कोट्टको इलाकाभित्रको जग्गामा मालपोत मिनाहा गरिएको हुन्थ्यो । कोट्टरूपका बस्तीबाहेक अरू बस्ती, ठाउँलाई पनि कोट्टलाई जस्तै सुबिधा गरिदिंदा 'कोट्टमर्यादा निगाह गरी दिइयो' भन्ने चलन त्यस बेला थियो । यस अभिलेखमा उल्लिखित 'प्रासादमण्डल' शब्दले केलाई लक्ष्य गरेको हो; त्योचाहिं निश्चित गर्न सकिएन ।

'कोट्टमर्यादा' सुम्पिएको प्रदेशको चारकिल्ला खुलाउँदा यहाँ रँटापाञ्चाली, लोप्रिङ्पाञ्चाली पुनुपाञ्चालीको उल्लेख आएको छ । यी पाञ्चालीका अधीनमा रहेका बाटिका (बारी), क्षेत्र (खेत) को चर्चा पनि यसमा परेको छ । यसबाट त्यस बेलाको पाञ्चाली (पञ्चायत) बारे बुझ्न अलिकता मदत पाइन्छ । पाञ्चालीहरूको अधीन साझा बारी खेत हुन्थे भन्ने कुराको पुष्टि यसबाट हुन्छ । चारकिल्ला खोल्दा यहाँ नारायणदेवकुलसंग सम्बन्ध राख्ने दशमीगोष्ठीको उल्लेख आएको छ तथा इन्द्रगोष्ठिको उल्लेख पनि यहाँ आएको छ । यताबाट लिच्छविकालको गोष्ठी–प्रथाको रूप चिन्न अलिकता मदत पाइन्छ । मध्यकालमा दशमी–पूजा (बिशीपूजा) ले निकै स्थान पाएको देखिन्छ । दशमीपूजाको प्रचलन लिच्छविकालमा पनि भइसकेको संकेत हामी यस अभिलेखबाट पाउँछौं ।

चारकिल्ला खोल्दा यस अभिलेखमा दुइ धार्मिक स्थलको पनि उल्लेख आएको छ। ती तीं हुन्–उमातीर्थ र पुष्पवाटिकाविहार। उमातीर्थ गौरीसंग सम्बन्ध राख्ने तीर्थ देखिन्छ। मध्य-कालमा नेपालमा तीर्थको माहात्म्य बढी रहेको पाइन्छ। लिच्छविकालमा तीर्थको माहात्य त्यति नदेखिए तापनि केही तीर्थहरूको उल्लेख हामी अभिलेखहरूमा पाउँछौं। पशुपति वज्रघरको माथि गएको अभिलेखमा ब्रह्मतीर्थ, अम्बुतीर्थको उल्लेख आएको छ।

बुद्धले शान्त स्थानमा बसी धर्मदेशना आदि गर्ने गरेका हुनाले अनेक आराम (बगैंचा) ले 'विहार' को रूप लिएका थिए। यस अभिलेखमा उल्लिखित 'पुष्पवाटिकाविहार' पनि त्यही परम्परामा बनेको देखिन्छ।

यस अभिलेखमा दूतक भट्टारक श्रीविजयदेव छन्। नरेन्द्रदेवको समयदेखि राजा 'परमभट्टारक' कहलाउन लागेका थिए; 'भट्टारक' पद चाहिं युवराजले पाउने भएको थियो; यस कुराको चर्चा माथि परिसकेको छ। यस कारण भट्टारक विजयदेव राजा जयदेवका छोरा हुन् भन्ने निश्चित छ। पाटन मीननाथको अभिलेखमा, ज्ञानेश्वरको अभिलेखमा विजयदेवलाई 'युवराज' भनेर खुलाएर पनि लेखिएको छ। लिच्छविवंशको वर्णन लेखाई राखेको पशुपतिको अभिलेखमा विजयदेवको नामोल्लेख परेको छैन। तर त्यहाँ जयदेवलाई 'पुत्रकलत्रभृत्यसहितः' भनिएको छ। त्यहाँ पुत्र भनी विजयदेवलाई लक्ष्य गरिएको देखिन्छ।

o—o

# मीननाथको अभिलेख

पाटनको प्रसिद्ध मीननाथको मन्दिरको सामुन्ने एक ढुङ्गे धारा रहेको छ । त्यही धारामा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको माथिल्लो भाग निकै खण्डित भइसकेको छ। यहाँ संवत् १४८ छ* ।

भगवान्लालद्वारा १४ संख्याको रूपमा, नोलीद्वारा ८० संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

(उठानको केही भाग पढ्न नसकिने)

१. ... णद ... ... मपूर्वो ...
२. ... ... ... ... ज्य ...
३. ... स्तस्यान्तरेप्यमुं जानद्भिरस्माकमन्यथा... निरुप्य ..
४. ... रूयमपल .. दत्तमाद्यप्रसादं वि ... ... शासन..
५. ... षा - यूपग्रामे - - लिम — । मां प्रतिपादितस्त... । कुर्पासद-
६. ... त्पुरोरशनस्तस्यान्तरे चाग्रत वने मृत्तिकां चोत्पाट...
७. ... विधमिममपराधं कृत्वा प्रपलायितः कोट्टस्थानम ...
८. ... निवेद्य यथापूर्वमनुष्ठातव्यं । तिलमकसमीपे ... क ...
९. ... रात्रौ दिवा वाविशत् कैश्चित्तत्परिपन्थिभिरन्यैर्वा न विरोधनीय-
स्तद्विरोधक...

* नोलीले यस अभिलेखको संवत् १४५ छपाउनुभएको छ। तर यहाँको संवत्को दशस्थानी अङ्क '५' होइन, '८' हो । 'पूर्णिमा' २० अङ्कको १८७ पृष्ठ हेर्नुहोस् ।

१०. ... प्राप्तिरेव गृहीत्वा राजकुलमुपनेतव्याः तिलमकसम्बद्धं कार्यञ्च यदुत्पद्यते (तदन्तरास-)

११. (ने)नैव विचार्य निर्णेतव्यं तिलमकश्च सप्तधा विभज्य परिभोक्तव्यो गीग्वलपाञ्चालिकैरे(को भा)

१२. गो ग्राह्यो जाज्जेपाञ्चालिकैरेको भागस्तेग्वलपाञ्चालिकैरेको भागो यूग्व-ल्पाञ्चालिकैस्त्रयो (भागा)

१३. -ल्लपाञ्चालिकैस्त्वेको भाग इत्येवमवगतार्थैर्भवद्भिरनुमन्तव्यमेतत् शासना.....(म)

१४. नागपि न लङ्घनीयो ये त्वेतामस्मदीयामाज्ञामतिक्रम्यान्यथा कुर्युः कारयेयु-(र्वा तेस्मा)

१५. भिर्दृढन्न क्षम्यन्ते। ये चास्मदूर्ध्वमवनिपतयो भवितारस्तैरपि पूर्वराजस्थिति-परिपाल(न)

१६. व्यवहितमनोभिर्भाव्यम्। तथा चाह। ये प्राक्तनावनिभुजां जगतीहितानां धर्म्यां स्थितिं स्थितिकृताम-

१७. नुपालयेयुः लक्ष्म्या समेत्य सुचिरन्निजभार्ययेव प्रेत्यापि वासवसमा दिवि ते वसेयुरिति स्वयमाज्ञा

१८. दूतकश्चात्र युवराजश्रीविजयदेवः। संवत् १४८ पौषशुक्लदिवातृतीयस्याम्॥

## अनुवाद

– – – – – – – – – –

त्यस बीचमा पनि त्यसलाई चिनेकाहरूले हाम्रो अन्यथा... ...ठानेर... दिइएको पहिलेको निगाह... ...सनद.... ...यूपग्राममा... ...दिइयो... ... त्यस बीचमा सामुन्नेको वनमा माटो खनेर ....त्यस किसिमको यो अपराध गरेर भाग्यो भने कोट्ट (किल्ला)... जाहेर गरी साबिकबमोजिम गर्नू। कुलोको नजीकै ... ...राति वा दिउँसो पस्यो भने कुनै त्यसका विरोधीहरूले वा अरूले विरोध नगर्नू। त्यसको विरोध गर्नेलाई ... ...समाती राजकुल (राजदरबार) मा बुझाउन ल्याउनू।

जब कुलोसम्बन्धी मुद्दामामिला उठ्छ; त्यस वेला अन्तरासन (राजाको भित्री इजलास)ले नै छानबीन गरी सो मुद्दा छिन्नुपर्छ। कुलोको सात भाग लाई भोग चलन गर्नू। गीग्वलका पाञ्चालिकहरूले एक भाग, जाज्जेका पाञ्चालिकहरूले एक भाग, तेग्वलका पाञ्चालिकहरूले एक भाग, यूग्वलका पाञ्चालिकहरूले तीन भाग,–ल्लका पाञ्चालिकहरूले एक भाग लिनू।

यो कुरा थाहा पाई तिमीहरूले यो थाम्नुपर्छ। यो सनद....अलिकता पनि नाघ्नुहुँदैन। जसले हाम्रो यो आज्ञा नटेरेर अन्यथा गर्लान् वा गराउलान्; तिनीहरूलाई हामी बिलकुल सहनेछैनौं। हामीभन्दा पछि हुने राजाहरूले पनि अघिका राजाले गरेका स्थितिबन्धेज थाम्नतिर लाग्नुपर्छ। भनिएको पनि छ–जनताको हित गर्ने स्थिति–बन्धेज बाँध्ने अघिका राजाहरूले बाँधेका उत्तम स्थितिबन्धेजहरू जसले थाम्छन्; तिनीहरूले आफ्नै पत्नीलाई जस्तै लक्ष्मीलाई धेरै कालसम्म साथ पाउनेछन् तथा मृत्युपछि पनि इन्द्रले जस्तै स्वर्गमा वास पाउनेछन्।

यो मेरो आफ्नै आज्ञा हो। यस बातका दूतक (मार्फत) युवराज श्रीविजयदेव। संवत् १४८ पौष शुक्ल तृतीया।

## व्याख्या–

यस अभिलेखको माथिल्लो भाग खण्डित भएको हुनाले यसमा परेको विषय अलि अस्पष्ट भएको छ। अहिले बचेको भागको आधारमा विचार गर्दा यूपग्रामद्रङ्गको इलाकामा पर्ने वनदुर्ग र तिलमक (कुलो) को बन्दोवस्त गरी यो अभिलेख राखिएको बुझिन्छ। साथै यस अभिलेखबाट त्यस वेलाको पाञ्चाली व्यवस्थाबारे पनि केही प्रकाश पर्छ।

'सामुन्ने वनमा माटो खनेर...त्यस किसिमको अपराध गरेर भागेको...कोट्ट...जाहेर गरेर साबिकबमोजिम गर्नू' भन्ने भावको वाक्य यस अभिलेखमा रहेको छ। यसबाट यूपग्राम-द्रङ्गको इलाकाको आसपासमा कुनै 'वनदुर्ग' थियो भन्ने संकेत पाइन्छ। यस्ता कोट्टहरू राष्ट्ररक्षाको लागि त महत्त्वपूर्ण हुन्थे नै; साथै कानूनविरुद्ध काम गर्ने अपराधी समात्ने काममा पनि केही उपयोगी हुन्थे भन्ने कुरा यस अभिलेखबाट झलकन्छ। "...अपराधं कृत्वा प्रपलायितः कोट्टस्थानम् ...निवेद्य यथापूर्वमनुष्ठातव्यम्" यसबाट उक्त कुराको संकेत पाइन्छ।

लिच्छविकालका शासकहरूले कृषकवर्गलाई खेती गर्न सुबिधा होस् भनी कुलोको बन्दोबस्ततिर ध्यान दिएको कुरा अनेक अभिलेखमा परेको छ। यस अभिलेखमा पनि कुलोसम्बन्धी झैझगडा नहोस् भनी कुलोको पानी बाँडेर लिने व्यवस्था बाँधेको कुरा परेको छ। यस वेलासम्ममा यूपग्राम 'द्रङ्ग' बनिसकेको थियो। यसैले यूपग्रामका संगसंगै रहेका अरू विभिन्न ग्रामहरू यस द्रङ्गका अन्तर्गत रहेका थिए। यूपग्रामद्रङ्ग एक किसिमको शहरको रूपमा विकसित हुँदै थियो। यसो हुँदा यस द्रङ्गको इलाकाभित्र अनेक पाञ्चालीहरू कायम थिए। प्रत्येक ती पाञ्चालीको इलाका निश्चित थियो। यसो हुनाले आफ्नो इलाकाको हितको लागि तत् तत् पाञ्चालीले दावी गर्नु स्वाभाविक थियो। यस प्रसङ्गमा कुलोको पानी लाउने कुरा आदिलाई लिई कहिलेकहीं पाञ्चालीहरूको आपस्तमा कलह पनि उठ्तथ्यो। त्यस्तो कलह उठ्न नपाओस्; उठे पनि यसको छिनफान छिटो होस् भन्ने विचारले पाञ्चालीसम्बन्धी यस्ता कलहको छानबीन सोझै राजाको भित्री इजलासले गर्ने व्यवस्था त्यस वेला थियो। यस अभिलेखबाट पनि उक्त कुरा थाहा पाइन्छ।

कुनै पाञ्चालीको इलाका ठूलो हुन्थ्यो; कुनैको सानो। यसो हुनाले इलाका हेरी पानीको भाग लाइएको कुरा यस अभिलेखमा परेको छ। यहाँ गीग्वल, जाज्जे, तेग्वल आदि पाञ्चालीले एक एक भाग र यूग्वल पाञ्चालीले चाहिं तीन भाग पाउने व्यवस्था परेको छ। यसबाट यूग्वल पाञ्चालीको इलाका अरूभन्दा ठूलो थियो भन्ने देखिन्छ। पछि यी पाञ्चालीहरू प्रायः एक एक टोलका रूपमा परिणत भएका देखिन्छन्। उदाहरणार्थ 'तेग्वल' पाञ्चालीलाई देखाउन सकिन्छ। जो अहिले 'त्यागलटोल' को रूपमा परिणत भएको छ। ने. सं. १३२ को त्यागलटोलको अभिलेखसम्ममा त्यो ठाउँलाई 'तेग्वल' नै भनिएको छ। पछि गएर 'त्यागल' कहलियो।

यस अभिलेखमा दूतक युवराज श्रीविजयदेव छन्। यस कारण यो अभिलेख द्वितीय जयदेवको हो भन्ने थाहा पाइन्छ। जनताको हितको लागि व्यवस्था बाँध्ने लिच्छविकालका शासकहरूमा जयदेव पनि एक हुन्। विशेष गरेर न्यायव्यवस्थातिर जयदेवले ध्यान दिएका थिए। तर दुर्भाग्यवश जयदेवका व्यवस्थासम्बन्धी सनदपत्रहरू प्रायः खण्डित रूपमा रहेका छन्। यसैले कुरा अलि अस्पष्ट भएका छन्।

–★–

# जैसीदेवलनिरको अभिलेख

काठमाडौं जैसीदेवलबाट केही पूर्वतिर बाटोमा यो अभिलेख कुँदिएको जलद्रोणी पल्टाएर राखिएको छ। यसमा संवत् १५१ छ।

बेण्डालद्वारा ४ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा परिशिष्टमा २ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. ॐ संवत् १५१ वैशाखशुक्लद्वितीयायाम्
२. लञ्जग्वल्पाञ्चा(लि) का(नां) नित्योपभोगार्थम्
३. अतीतलम्भस्य भार्यया भोजमत्या दत्तम्
४. जलद्रोणेन सह - - मा २

## अनुवाद

संवत् १५१ वैशाख शुक्ल द्वितीया। लञ्जग्वल् पाञ्चालीका बासिन्दाहरूले सधैं खान पाउन् भनी अतीतलम्भकी स्वास्नी भोजमतीले यो जलद्रोणी दान दिइन्। जलद्रोणीसंग. . . . २ मानिका कुत आउने (खेत गूठी राखियो।)

**व्याख्या–**

अतीतलम्भ भन्ने व्यक्तिकी पत्नी भोजमतीले लञ्जग्वल् पाञ्चालीको इलाकामा बस्ने जनतालाई पानीको सुविधा होस् भनी जलद्रोणी बनाई यो अभिलेख कुँद्न लाइएको हो। यसमा राजाको नामोल्लेख गरिएको छैन। तर यहाँ संवत् १५१ हुनाले यस बेला राजा जयदेव थिए भन्ने निश्चित छ।

पुगिसरी आउनेहरूले पाटी पौवा आदि जनोपयोगी कीर्ति राखेर जानुपर्छ भन्ने धारणा त्यस बेला थियो। त्यस्तै धारणाअनुसार भोजमतीले यो जलद्रोणी बनाउन लाएकी हुन्। त्यस बेलाको समाजबारे बुझ्न यस अभिलेखले पनि अलिकता मदत गर्छ।

# पशुपतिको द्वितीय जयदेवको अभिलेख

पशुपतिनाथको मन्दिरनजीकै दक्षिण–पश्चिम कुनामा केही शिलापत्र लहरै मिलाएर राखिएका छन्। तिनको माझमा यो अभिलेख कुँदिएको ठूलो शिलापत्र रहेको छ। यसको अभिलेख कुँदिएको भाग २ हात ६ अङ्गुल लम्बा, १ हात १६ अङ्गुल चौडा छ । यसको शिरोभागमा फक्रिएको कमलको फूल अङ्कित छ। यहाँ संवत् १५७ छ† ।

भगवान्लाल इन्द्राजीद्वारा १५ संख्याको रूपमा यो छापिएको छ। संस्कृत–सन्देश १।१ मा योगी नरहरिनाथद्वारा यसको मूल र ऐ. शि. बाबुराम आचार्यद्वारा यसको नेपाली अनुवाद छापिएको छ। नोलीद्वारा ८१ संख्याको रूपमा यो छापिएको छ ।

## मूलपाठ

१. ॐ त्र्यक्षस्त्रय्यव्ययात्मा त्रिसमयसदृशत्रिप्रतीतस्त्रिलोकीत्राता त्रेतादिहेतु-स्त्रिगुणमयतया त्र्यादिभिर्व्वर्ण्णितोलं। त्रिस्रोतोधौतमूर्धा त्रिपुरजिदजितो निर्व्विबन्धत्रिवर्ग्गो यस्योत्तुङ्ग–

२. स्त्रिशूलस्त्रिदशपतिनुतः स्तादरित्रोटनो१ नः ।। (१) राजद्रावणमूर्धपङ्क्ति-शिखरव्यासक्तचूडामणिश्रेणीसङ्गतिनिश्चलाकत्मतया लङ्काम्पुनानाः पुरीं ।..-द्बन्ध्यपराक्रमा-

३. ---- सङ्गताः श्रीबाणासुरशेखराः पशुपतेः पादाणवः पान्तु वः ।।(२)

† नोलीले यहांको संवत् '१५६' पढ्नुभएको छ। तर शुद्ध पाठ १५७' हो। पूर्णिमा' १६ अङ्कको १८८ पृष्ठ हेर्नुहोस् ।

नोलीको पाठ–

१. स्त्रय––त्रोटनो नः

सूर्याद् ब्रह्मप्रपौत्रान्मनुरथ भगवाञ्जन्म लेभे ततोभूदिक्ष्वाकुश्चक्रवर्त्ती नृपतिरपि ततः श्रीविकुक्षिर्बभूव ।

४. जातस्तस्मात्ककुत्स्थः पृथुरिति विदितो भूमिपः सार्व्वभौमो भूतोस्माद्विश्वगश्वः प्रबलनिजबलव्याप्तविश्वान्तरालः ॥ (३) राजाष्टोत्तरविंशतिक्षितिभुजस्तस्माद्व्यतीत्य क्रमात् संभूतस्सगरः पतिः–

५. ----सागरायाः क्षितेः । जातोस्मादसमञ्जसो नरपतिस्तस्मादभूदंशुमान् स श्रीमन्तमजीजनन्नरवरो भूपन्दिलीपाह्वयं ॥(४) भेजे जन्म ततो भगीरथ इति ख्यातो नृपोत्रान्तरे भूपालान्प्रविल(ङ्घ्य)[१]

६. --- रघुर्जातो रघोरप्यजः । श्रीमत्तुङ्गरथस्ततो दशरथः पुत्रैश्च पौत्रैस्समं राज्ञोष्टावपरान् विहाय परतः श्रीमानभूल्लिच्छविः ॥ (५) अस्त्येव क्षितिमण्डलैकतिलको लोकप्रतीतो महानादित्य[२]–

७. [३]प्रभवः प्रभावमहतां मान्यः सुराणामपि । स्वच्छं लिच्छविनाम बिभ्रदपरं[४] वंशः प्रवृत्तोदयः श्रीमच्चन्द्रकलाकलापधवलो गङ्गाप्रवाहोपमः ॥ (६) तस्माल्लिच्छवितः परेण नृपतीन् हित्वा प-

८. रान्द्वादश[५] श्रीमान्पुष्पशराकृतिः क्षितिपतिर्ज्जातः स पुष्पस्ततः । सार्धं भूपतिभिस्त्रिभिः क्षितिभृतां त्यक्त्वान्तरे विंशतिं ख्यातः श्रीजयदेवनामनृपतिः प्रादुर्ब्बभूवापरः ॥ (७) एकादश क्षिति-

९. पतीनपरञ्च[६] भूपं हित्वान्तरे विजयिनो जयदेवनाम्नः श्रीमान्बभूव वृषदेव इति प्रतीतो राजोत्तमः सुगतशासनपक्षपाती ॥ (८) अभूत्ततः शङ्करदेवनामा श्रीधर्म्मदेवोप्युदपादि तस्मात् ।

१०. श्रीमानदेवो नृपतिस्ततोभूत्ततो महीदेव इति प्रसिद्धः ॥ (९) वसन्त इव लोकस्य कान्तः शान्तारिविग्रहः। आसीद्वसन्तदेवोस्माद्दान्तसामन्तवन्दितः ॥ (१०) अस्यान्तरेप्युदयदेव इति क्षितीशाज्जातस्त्रयो–

११. दश इतश्च नरेन्द्रदेवः । मानोन्नतो नतसमस्तनरेन्द्रमौलिमालारजोनिकरपांशुलपादपीठः ॥ (११) दाता सद्द्रविणस्य भूरिविभवो जेता द्विषत्संहतेः कर्त्ता बान्धवतोषणस्य

१२. विधिवत्पाता प्रजानामलं हर्त्ता । संश्रितसाधुवर्ग्गविपदां सत्यस्य वक्ता ततो

---

नोलीका पाठ–

१. भूपाला – – – – २. महा – – – ३. – – – ४. बिभ्रदपरो ५. —— रं
६. क्षितिपतीञ्च परञ्च

जातः श्रीशिवदेव इत्यभिमतो लोकस्य भर्त्ता भुवः (१२)॥ देवी बाहुबला-
ढ्यमौखरिकुलश्रीवर्म्म–

१३. चूडामणिख्यातिक्षेपितवैरिभूपतिगणश्रीभोगवर्म्मोद्भवा। दौहित्री मगधाधि-
पस्य महतःश्यादित्यसेनस्य या व्यूढा श्रीरिव तेन सा क्षितिभुजा श्रीवत्सदेव्या-
दरात्॥ (१३)

१४. तस्माद् भूमिभुजोप्यजायत जितारातेरजय्यः परं राजा श्रीजयदेव इत्यवगतः
श्रीवत्सदेव्यात्मजः। त्यागी मानधनो विशालनयनः सौजन्यरत्नाकरो [1]विद्वा-
न्सत्कविराश्रयो

१५. गुणवतां पीनोरुवक्षःस्थलः॥ (१४) माद्यद्दन्तिसमूहदन्तमुसलक्षुण्णारि-
भूभृच्छिरोगौडोड्रादिकलिङ्गकोसलपतिश्रीहर्षदेवात्मजा । देवी राज्यमती
कुलोचितगुणैर्युक्ता प्रभूता

१६ कुलैर्येनोढा भगदत्तराजकुलजा लक्ष्मीरिव क्ष्माभुजा॥(१५)अङ्गश्रिया परिगतो
जितकामरूपः काञ्चीगुणाढ्यवनिताभिरुपास्यमानः। कुर्व्वन्सुराष्ट्रपरिपाल-
नकार्यचिन्तां यः सार्व्व–

१७. भौमचरितं प्रकटीकरोति॥(१६) राज्यं प्राज्यसुखोर्ज्जितद्विजजनप्रत्यर्प्पि-
ताज्याहुतिज्योतिर्ज्जातशिखाविजृम्भणजिताशेषप्रजापद्रुजं । बिभ्रत्कण्टकव-
र्ज्जितन्निजभुजावष्टम्भविस्फूर्ज्जितं

१८. शूरत्वात्परचक्रकाम इति यो नाम्ना परेणान्वितः॥ (१७) स श्रीमाञ्जय-
देवाख्यो विशुद्धबृहदन्वयः लब्धप्रतापः सम्प्राप्तबहुपुण्यसमन्वयः॥ (१८)
मूर्त्तीरष्टाभिरष्टौ महयितुमतुलैः

१९: स्वैर्द्दलैरष्टमूर्त्तः पातालादुत्थितं किं कमलमभिनवं पद्मनाभस्य नाभेः।
देवस्यास्यासनायोपगतमिह चतुर्व्वक्त्रसादृश्यमोहाद् विस्तीर्ण्णं विष्टरं किं
प्रविकसितसिताम्भोजमम्भोज–

२०. योनेः॥ (१९) कीर्ण्णा किम्भूतिरेषा सपदि पशुपतेर्न्नृत्यतोत्र प्रकामं मौलीन्दोः
किम्मयूखाः शरदमभिनवां प्राप्य शोभामुपेताः। भक्त्या कैलासशैलाद्धिमनि-
चयरुचः सानवः किं

२१. समेता दुग्धाब्धेरागतः किं गलगरसहजप्रीतिपीयूषराशिः॥ (२०) राज्ञः॥
देवं वन्दितुमुद्यतो द्युतिमतो विद्योतमानद्युतिः किं ज्योत्स्नाधवला फणावलि-
रियं शेषस्य सन्दृश्यते ।

---

नोलीको पाठ–१. विद्वान् — चिराश्रयो

२२. अन्तर्दूरसातलाश्रितगतेर्द्दैवप्रभावश्रिया किं क्षीरस्नपनं विधातुमुदिताः
क्षीरार्ण्णवस्योर्म्मयः ।। (२१) विष्णोः पातालमूले फणिपतिशयनाक्रान्ति-
लीलासुखस्थादाज्ञां प्राप्योत्प–
२३. तन्त्यास्त्रिपुरविजयिनो भक्तितोभ्यर्च्चनाय । लक्ष्म्याः संलक्ष्यते प्राक्करतल-
कलितोत्फुल्ललीलासरोजं किं वेतीत्थं वितर्कास्पदमतिरुचिरं मुग्धसिद्धाङ्ग-
नानां ।। (२२) नाली नालीकमेतन्न खलु समुदितो राजतो
२४. राजतोहं पद्मापद्मासनाब्जे कथमनुहरतो मानवा मा नवाभे । पृथ्व्यां
पृथ्व्यान्न मादृग्भवति हृतजगन्मानसे मानसे वा भास्वान् भास्वान् विशेषं
जनयति नहि मे वासरो वा सरो वा ।।(२३) इतीव
२५. चामीकरकेशरालीसिन्दूररक्तद्युतिदन्तपङ्क्त्या राजीवराजीम्प्रति जीवलोके
सौन्दर्य्यदर्प्पादिव सप्रहासं ।। (२४) एषा भाति कुलाचलैः परिवृता प्रालेय-
संसर्गिभिर्व्वेदी मेरुशिलेव काञ्चनमयी देव-
२६. स्य विश्रामभूः । शुभ्रैः प्रान्तविकासिपङ्कजदलैरित्याकलय्य स्वयं रौप्यं पद्म-
मचीकरत्पशुपतेः पूजार्थमत्युज्ज्वलम् ।। (२५) राज्ञः ।। यं स्तौति प्रकट-
प्रभावमहिमा ब्रह्मा चर्तुभिर्म्मुखैर्यञ्च श्लाघ-
२७. यति प्रणम्य चरणे षड्भिर्म्मुखैः षण्मुखः । यन्तुष्टाव दशाननोपि दशभिर्व्वक्त्रैः
स्फुरत्कन्धरः सेवां यस्य करोति वासुकिरलं जिह्वासहस्रैः स्तुवन् ।। (२६)
ख्यात्या यः परमेश्वरोपि वहते वासो
२८. दिशाम्मण्डलं व्यापी सूक्ष्मतरश्च शङ्करतया ज्ञातोपि संहारकः ।
एकोप्यष्टतनुः सुरासुरगुरुर्व्वीतत्रपो नृत्यति । स्थाणुः पूज्यतमो विराजति
गुणैरेवं विरुद्धैरपि ।। (२७) राज्ञः ।। तस्येदं प्रमथा-
२९. धिपस्य विपुलं ब्रह्माब्जतुल्यं शुभं राजद्राजतपङ्कजं प्रविततप्रान्तप्रकीर्ण्णैर्दलैः ।
पूजार्थम्प्रविधाप्य तत्पशुपतेर्य्यत्प्रापि पुण्यम्मया भक्त्या तत्प्रतिपाद्य मातरि
पुनः संप्राप्नुयां निर्वृतिं (२८)
३०. राज्ञः ।। किं शम्भोरुपरि स्थितं ससलिलं मन्दाकिनीपङ्कजं स्वर्ग्गोद्भिन्ननवाम्बु-
जेक्षणधिया सम्प्राप्तमम्भोरुहं । देवानां किमियं शुभा सुकृतिनां रम्या विमा-
नावली पद्मं किं करुणाकरस्य करतो
३१. लोकेश्वरस्यागतं ।। (२९) राज्ञः ।। स्रोतः स्वर्ग्गापगायाः किमिदमवतरल्लो-
लकल्लोलरम्यं किं ब्रह्मोत्पत्तिपद्मं तलकमलवरप्रेक्षणायोपयातं । सम्प्राप्त-
ञ्चन्द्रमौलेरमलनिजशिरश्चन्द्रविम्बं किमत्रेत्येवं

३२. यद्वीक्ष्य शङ्कां वहति भुवि जनो विस्मयोत्फुल्लनेत्रः ।। (३०) श्रीवत्स-
देव्या नृपतेर्ज्जनन्या समं समन्तात्परिवारपद्मैः । रौप्यं हरस्योपरि पुण्डरीकं
तदादरैः कारितमत्युदारं ।। (३१) पुण्यं पुत्रेण दत्तं शशिकरविमलं
३३. कारयित्वाब्जमुख्यं प्राप्तं शुभ्रं शुभञ्च स्वयमपि रजतैः पद्मपूजां विधाय ।
सर्व्वं श्रीवत्सदेवी निजकुलधवलाञ्चित्तवृत्ति दधाना प्रादात्कल्याणहेतो-
श्चिरमवनिभुजे स्वामिने स्वर्गताय ।। (३२) कः कुर्या-
३४. त्कुलजः पुमान्निजगुणश्लाघामिति ह्रीच्छया राज्ञा सत्कविनापि नो विरचितं
काव्यं स्ववङ्शाश्रयं । श्लोकान्पञ्च विहाय साधु रचितान्प्राज्ञेन राज्ञा स्वयं
स्नेहाद्भूभुजि बुद्धकीर्तिरकरोत्पूर्वामपूर्वामिमां।। (३३) योगक्षेमविधानबन्धुर-
३५. भुजस्संवर्द्धयन् बान्धवान् स्निह्यत्पुत्रकलत्रभृत्यसहितो लब्धप्रतापो नृपः दीर्घा-
युर्न्नितरान्निरामयवपुर्न्नित्यप्रमोदान्वितः पृथ्वीं पालयतु प्रकामविभवस्फीतानु-
रक्तप्रजाम् ।। (३४)
संवत् १५७ कार्त्तिकशुक्लनवम्याम्

# अनुवाद

तीन आँखा भएका, तीनै वेदले अविनाशी कहिएका, तीनै कालमा एक नाश रहने, तीनै प्रकारले (प्रत्यक्ष, अनुमान र आगमद्वारा) चिनिएका, तीनै लोकका रक्षक, त्रेता आदि युगका कारण भएका, त्रिगुणमय हुनाले त्र्यादि (त्रिदश = देवता) हरूले सदा स्तुति गरिएका, गङ्गाजीले शिर धोइएका, त्रिपुरासुरलाई जित्ने, कसैले नजितिने, समान रूपले त्रिवर्ग (धर्म अर्थ काम) मा लागेका, त्रिदशपति (इन्द्र)ले स्तुति गरिएका (पशुपतिको) अग्लो त्रिशूलले हाम्रा शत्रुहरूको नाश गरोस् ।।१।।

चम्किरहेका रावणका शिरका टुप्पामा लाएका शिरपेचको पङ्क्तिमा टाँसिएर रहेका हुनाले लङ्कापुरीलाई पवित्र पार्ने... ...बाणासुरका मुकुट हुन पुगेका पशुपतिका पाउका धूलाले तपाईंहरूको रक्षा गरून् ।।२।।

ब्रह्माका पनाति सूर्यबाट भगवान् मनुले जन्म लिनुभयो । उहाँबाट चक्रवर्ती राजा इक्ष्वाकु हुनुभयो । उहाँबाट विकुक्षि हुनुभयो । उहाँबाट पृथु भनी प्रसिद्ध चक्रवर्ती राजा ककुत्स्थ हुनुभयो । उहाँबाट आफ्नो बलियो बाहुबलले विश्वको छेउछेउसम्म ढाकेका राजा विश्वगश्व हुनुभयो ।।३।।

उहाँपछि अठ्ठाइस राजाहरूलाई छोडेर समुद्रसम्मको पृथ्वीका राजा..सगर हुनुभयो । उहाँबाट राजा असमञ्जस हुनुभयो। उहाँबाट अंशुमान् हुनुभयो । उहाँ राजाले श्रीदिलीप नाम भएका राजालाई जन्माउनुभयो ।।४।।

उहाँबाट भगीरथ भन्ने प्रसिद्ध राजा हुनुभयो। यस बीचमा....राजाहरूलाई छोडेर रघु हुनुभयो। रघुबाट अज हुनुभयो। उहाँबाट अग्लो रथ भएका दशरथ हुनुभयो। उहाँका छोरा र नातिहरूसमेत आठ राजालाई छोडेर श्रीलिच्छवि राजा हुनुभयो ।।५।।

पृथ्वीमण्डलमा टीका जस्तो भएको, लोकले पत्याएको, प्रभावशाली देवताहरूले पनि मानिएको, चन्द्रमाका कलाको समूह जस्तै उज्यालो, गङ्गाको प्रवाह जस्तो निर्मल, महान् सूर्यवंशले नै 'लिच्छवि-वंश' भन्ने अर्को नाउँ लिई सो चल्न थाल्यो। ।।६।।

उहाँ लिच्छविदेखि पछि अरू बाह्र राजालाई छोडेर कामदेव जस्तै राम्रा श्रीसुपुष्प राजा हुनुभयो। यस बीचमा तेईस राजाहरूलाई छोडेर जयदेव भन्ने प्रख्यात अर्का राजा हुनुभयो ।।७।।

जितबाजी गर्ने जयदेव राजादेखि बीचमा बाह्र जना राजालाई छोडेर बौद्ध धर्ममा झुकेका श्रीवृषदेव भनी प्रख्यात भएका असल राजा हुनुभयो ।।८।।

उहाँबाट शङ्करदेव हुनुभयो। उहाँबाट श्रीधर्मदेव पैदा हुनुभयो। उहाँबाट राजा श्रीमानदेव हुनुभयो। उहाँबाट प्रसिद्ध महीदेव हुनुभयो ।।९।।

उहाँबाट वसन्त ऋतु झैं लोकका प्यारा भएका, शत्रुसंगको कलहलाई शान्त पारेका, कज्याइएका सामन्तहरूले ढोगिएका वसन्तदेव हुनुभयो ।।१०।।

यस बीचमा राजा (वसन्तदेव)देखि तेह्रौं उदयदेव भन्ने हुनुभयो। उहाँबाट इज्जतको ख्याल गर्ने, निहुरिएका सारा राजाका शिरपेचका मालाबाट झरेका धूलाको रासले पाउदानी धुलौटा गराएका नरेन्द्रदेव हुनुभयो ।।११।।

उहाँबाट असल तरीकाले कमाएको धन दान दिने, भारी सम्पत्ति भएका, शत्रुसमूहलाई जित्ने, बन्धुवर्गलाई सन्तुष्ट पार्ने, व्यवस्थापूर्वक राम्ररी प्रजाको रक्षा गर्ने, आश्रयमा रहेका सज्जन-हरूको आपत्ति हर्ने, साँचो कुरा बोल्ने, लोकले मानिएका श्रीशिवदेव भन्ने राजा हुनुभयो ।।१२।।

उहाँ राजाले बाहुबलले युक्त भएका, मौखरिकुलका 'श्रीवर्मचूडामणि' भन्ने प्रशस्तिले प्रख्यात भई शत्रु राजाहरूलाई लज्जित पारेका श्रीभोगवर्माकी छोरी, मगधका बडा राजा श्रीआदित्यसेनकी दौहित्री (छोरीको छोरी), लक्ष्मी जस्ती श्रीवत्सदेवीसंग आदरपूर्वक विवाह गर्नुभयो ।।१३।।

शत्रुहरूलाई जितेका उहाँ राजाका वत्सदेवीतर्फबाट जन्मेका छोरा श्रीजयदेव प्रख्यात राजा हुनुहुन्छ। उहाँ शत्रुले जित्न नसकिने दानी, इज्जतको ख्याल राख्ने, ठूलठूला आँखा भएका, असल स्वभाव भएका, विद्वान्, असल कवि, गुणीहरूलाई आश्रय दिने, पुष्ट र ठूलो छाती भएका हुनुहुन्छ ।।१४।।

उहाँ राजा (जयदेव)ले मत्ता हात्तीका बथानका दाँतरूपी मुसलले शत्रु राजाका टाउको फोरेका, गौड उड्र कलिङ्ग कोसलका राजा श्रीहर्षदेवकी छोरी, भगदत्त राजाको वंशमा जन्मेकी, कुल सुहाउँदा गुणले युक्त भएकी, कुलहरूको (पितृकुल, मातृकुल र पतिकुलको) गौरव भएकी, लक्ष्मी जस्ती देवी राज्यमतीसंग विवाह गर्नुभयो ।।१५।।

अङ्गश्रीले युक्त भएका (जीउडाल मिलेका; 'अङ्ग' भन्ने देश पनि छ), कामरूप जितेका (कामदेवभन्दा राम्रा; 'कामरूप' भन्ने देश पनि छ), काञ्चीगुण (मेखलाको सिक्री) बाँधेका आइमाईहरूले टहल गरिएका ('काञ्ची' भन्ने देश पनि छ), सुराष्ट्र (असल राज्य) को पालना गर्ने कामबारे चिन्ता गरिरहने ('सुराष्ट्र' भन्ने देश पनि छ) जुन राजा (जयदेव) चक्रवर्ती राजाको चरित्रलाई प्रकट गर्नुहुन्छ ।।१६।।

प्रशस्त सुख पाएका ब्राह्मणहरूले होमिएको घिउको आहुतिका ज्योतिले पैदा भएका ज्वाला मर्कनाले सारा प्रजाको विपत्ति र रोग हटाइएको, आफ्नै बाहुबलको आडले बढाइएको राज्यलाई निष्कण्टकपूर्वक चलाउने भएका जुन (राजा जयदेव) शूरा हुनाले 'परचक्रकाम' (अरूको मुलुक जित्ने भन्ने अर्को नाम लिनुभएको छ। ।।१७।।

उहाँ श्रीजयदेव ठूलो पवित्र वंशका, प्रतापी तथा धेरै पुण्य बटुलेका हुनुहुन्छ ।।।।१८।।

अष्टमूर्ति (पशुपति) का आठै मूर्तिलाई आफ्ना अनौठा आठ पातद्वारा पूजा गर्न पातालदेखि विष्णुको नाभिबाट उठेर आएको नयाँ कमल पो यो हो कि । ब्रह्माजीको आसन भएर रहेको ठूलो सेतो कमल (बुवैका) एकनाशे चार मुख हुनाले छकिएर यी देवताको आसन हुन यहाँ आइपुगेको पो हो कि ? ।।१९।।

मनमाफिक खूप नाच्दा उत्निखेरै यहाँ छरिएको पशुपतिको विभूति पो यो हो कि । शरद् ऋतु लागेको हुँदा खूप सुहाएका, मुकुटका चन्द्रमाका किरण पो यो हो कि । हिउँका ढिक्काले टल्केका, भक्तिले गर्दा यहाँ आइपुगेका हिमालयका सानसाना टाकुरा पो यो हो कि । (पशुपतिको) गलाको विषसंगै पैदा भएका हुँदा साथीको प्रेमले दूध—समुद्रबाट आएको अमृतको रास पो यो हो कि ? ।।२०।।

।।राजाको।। भित्र पातालमा बसेका तेजिला शेषनागका जून जस्तै सेता टलटल टल्कने फणाहरू देवताको (पशुपतिको) वन्दना गर्न यहाँ आएको पो यो हो कि । देवता (पशुपति)को प्रभावले गर्दा दूधले स्नान गराउन उम्लेका क्षीरसमुद्रका छालहरू पो यो हो कि ? ।।२१।।

पातालको फेदमा शेषनागको शय्यामा आनन्दसंग सुतिरहेका विष्णुबाट आज्ञा पाएर पशुपतिलाई भक्तिसाथ पूजा गर्न माथि आएकी लक्ष्मीको हातमा लिइराखेको धपक्क फुलेको कमल पोसामुन्ने देखिएको हो कि भनेर सिद्धहरूका सोझा आइमाईहरूले रमाइलो तर्कना गर्ने ठाउँ पाएको छ ।।२२।।

मानिसहरूहो, (म) डाँठ भएको छु भन्ने कुरा साँचो हो। म राजाबाट पैदा भएको चाँदीको कमल होइन र ? । लक्ष्मी र ब्रह्माजीको आसन भएका, नयाँ चहक भएका कमलले मेरो नकल कसरी गर्लान् ? विशाल पृथ्वीमा संसारको मन हेर्ने मानस सरोवरमा पनि म जस्तो (कमल) छैन। तेजस्वी सूर्य, दिन अथवा (कुनै) सरोवरले ममा कुनै फरक पार्न सक्तैनन् ॥२३॥

यसरी (यो कमल) सुनका केशरको पङ्क्तिरूपी सिन्दूरले रातो चहक भएका दाँतको पङ्क्ति देखाएर सौन्दर्यको घमण्डले संसारभरका कमलहरूलाई ठट्टा उडाएर झैं गरी रहेको छ ॥२४॥

सुवर्णमय सुमेरु पर्वतको शिला जस्तो भएको, देवता (पशुपतिनाथ) को विश्राम गर्ने यो वेदी (पाशुपत क्षेत्र = नेपालउपत्यका) हिउँ परेका कुलपर्वत (ठूलठूला पहाड) ले चारैतिर घेरिएको हुँदा सुहाइरहेको छ। यसो हुँदा यही कुरा विचार गरी (तदनुरूप) चारैतिर फक्रेका कमलका पातहरूले घेरिएको, अत्यन्त उज्ज्वल यो चाँदीको कमल पशुपतिनाथलाई चढाउन स्वयं राजाले बनाउन लाएका हुन् ॥२५॥

॥राजाको॥ प्रभावको महिमा स्पष्ट देखिएका ब्रह्माजी चारै मुखले जसको स्तुति गर्नुहुन्छ। पाउमा परेर स्वामिकार्तिक छवटै मुखले जसको स्तुति गर्नुहुन्छ। काँध हल्लाई हल्लाई रावणले दश मुखले जसको स्तुति गरेथे। वासुकि नागले हजार जिभ्रोले जसको खूप स्तुति गरी सेवा गरिरहनुभएको छ ॥२६॥

ठूला ईश्वर भनी प्रख्यात भए तापनि जो दिगम्बर (नाङ्गो रहने) हुनुहुन्छ। व्यापक भए तापनि अत्यन्त सूक्ष्म हुनुहुन्छ; शङ्कर (कल्याण गर्ने) भनी थाहा पाइएका भए तापनि प्रलयकारी हुनुहुन्छ; एक भएर पनि अष्टमूर्ति हुनुहुन्छ; देवता र दैत्यका गुरु भएर पनि लाज नमानेर नाच्नुहुन्छ; स्थाणु (ठुटो) भए पनि अत्यन्त पूजनीय हुनुहुन्छ। यसरी परस्परमा बाझिएका गुणहरूद्वारा जो सुहाइरहनुभएको छ ॥२७॥

॥राजाको॥ प्रमथ गणका मालिक उहाँ पशुपतिनाथको पूजाको लागि ठूलो ब्रह्माको कमल जत्रो उत्तम फराकिला किनारामा छरिएका पातहरूले सुहाएको चाँदीको यो कमल बनाउन लाएर जो पुण्य मैले पाएं, त्यो पुण्य भक्तिपूर्वक मुमामा चढाएर ठूलो आनन्द पाऊँ ॥२८॥

॥राजाको॥ महादेवको शिरमा रहेको आकाशगङ्गाको पानीसहित कमल पो यो हो कि ? स्वर्गमा फुलेको नयाँ कमल हेर्ने इच्छाले आइपुगेको कमल पो यो हो कि ? । धर्मात्मा देवताहरूको रमाइलो उत्तम विमानहरूको ताँती पो यो हो कि ? करुणामय लोकेश्वरको हातबाट आएको कमल पो यो हो कि ? ॥२९॥

॥राजाको॥ चञ्चल छालले रमाइलो भएको ओर्ल्दो आकाशगङ्गाको सोतो पो यो हो कि। तलका (पृथ्वीका) असल कमल हेर्नालाई आएको ब्रह्माजी उत्पन्न भएको कमल पो यो हो कि।

महादेवको शिरमा रहेको निर्मल चन्द्रविम्ब पो यहाँ उत्रेको हो कि। यस प्रकार जुन कमललाई देखेर पृथ्वीका मानिसहरूले आश्चर्यले ठूलठूला आँखा पारीकन तर्कना गर्छन् ॥३०॥

राजमाता वत्सदेवीले वरिपरि अरू परिवार जस्ता कमलहरू राखी पशुपतिनाथको शिरमा चाँदीको सुन्दर कमल आदरपूर्वक चढाउनुभयो ॥३१॥

चन्द्रमाको किरण जस्तो सफा मुख्य कमल चढाएर भएको छोराले दिएको पुण्य र आफैंले पनि चाँदीका कमल चढाएर भएको शुद्ध र उत्तम पुण्यसमेत जम्मै यी पुण्य आफ्नो कुल सुहाउँदो शुद्ध चित्त भएकी वत्सदेवीले आफ्ना पति स्वर्गवासी राजालाई धेरै कालसम्म कल्याण होस् भनी चढाउनुभयो ॥३२॥

ठूलो कुलमा जन्मेको कुन मानिसले आफ्नो गुणको बयान आफैं गर्ला भन्ने लाजले गर्दा राजा (जयदेव)ले असल कवि भएर पनि आफ्नो कुलको कुरा लिई काव्य बनाउनुभएन। विद्वान् राजाले स्वयं बनाएका राम्रा पाँच श्लोकबाहेक (अरू) यो अपूर्व काव्य राजाउपरको स्नेहले बुद्धकीर्तिले बनाएका हुन् ॥३३॥

योग (नपाएको पाउनु) र क्षेम (पाएको जोगाउनु) गर्नामा लागेका प्रतापी स्नेह गर्ने जहान छोरा छोरी र नोकर चाकरसहित भएका राजा (जयदेव) ले दीर्घायु भएर, निरोगी भएर, सधैं आनन्दपूर्वक प्रशस्त सम्पत्तिले समृद्ध र रत्तिएका प्रजा भएको पृथ्वीको पालना गरिरहून् ॥३४॥

संवत् १५७ कार्तिक शुक्ल नवमी।

## व्याख्या–

द्वितीय जयदेवको यो अभिलेख लिच्छविकालका महत्त्वपूर्ण अभिलेखमध्ये एक हो। अनेक कुराको दृष्टिले यो अभिलेख उपयोगी रहेको छ। यस अभिलेखको सबभन्दा महत्त्वपूर्ण कुरा यस अभिलेखमा वर्णित लिच्छवि राजाहरूको वंशावली हो। केही लिच्छवि राजाहरूको परिचय पाउन यसबाट मदत भएको छ; यताबाट लिच्छविकालको इतिहासको सिलसिला केही जोडिएको छ। तर यहाँनिर एउटा कुरामा ध्यान दिनु आवश्यक छ। जयदेवले आफ्ना पुर्खाहरूको वर्णन गराउनाको उद्देश्य लिच्छवि राजवंशको हूबहू इतिहास लेखाउनु थिएन; यसको मूल उद्देश्य लिच्छवि राजवंशको गौरव दर्शाउनु थियो। लिच्छवि राजवंश प्रसिद्ध सूर्यवंशकै नामान्तर मात्र हो; यस वंशमा ठूलठूला राजा भए भनी दर्शाउने अभिप्रायले उनले आफ्नो वंशको वर्णन गराएका छन्। यसो हुँदा उनको दृष्टिमा गौरवशाली नदेखिएका बीचबीचका कति राजाको नामोल्लेख उनले गराएका छैनन्। शुरू शुरूका लिच्छवि राजाहरूको त राम्रो ज्ञान नभएर उल्लेख नगरिएको हो कि भनी हामीले सन्तोष लिन सक्छौं। तर वसन्तदेवपछिका उदयदेवअघिका राजाहरूको बारेमा जयदेवलाई निःसन्देह राम्रो ज्ञान थियो। तर ती राजाहरू नाम मात्रका

हुनाले तिनीहरूको उल्लेख गर्दा आफ्नो कुलको गौरव बढ्ने उनले ठानेनन् । यसै हुँदा तिनीहरूको नामोल्लेखसम्म पनि उनले गराएनन् । यसबाट बीचका ती राजाको परिचय पाउन गाह्रो भएको छ । तर जुन राजाको चर्चा यस अभिलेखमा परेको छ; तात्कालिक इतिहासमा ती राजाको विशेष स्थान थियो; जयदेवका दृष्टिमा ती राजा लिच्छविकुलको गौरव बढउने खालका थिए थिए भन्ने थाहा पाइन्छ । यसरी जयदेवको वर्णनशैलीबाट पनि तात्कालिक कुरा बुझ्न हामी केही लाभ उठाउन सक्छौं ।

यहाँ सूर्यदेखि वंशवर्णन शुरू गरिएको छ । उठानको सो वर्णन पुराणको आधारमा गरिएको हुनाले विशेष उपयोगी छैन । दशरथसम्मको नामोल्लेख गरिसकेपछि सोही वंशमा 'लिच्छवि' भन्ने राजा भए र यो वंश 'लिच्छविवंश' भनी प्रख्यात भएको हो भनी यहाँ जोड दिई लेखिएको छ । लिच्छविहरूको अभिजन (मूल थलो) वैशालीसंगको सम्बन्धको कुनै संकेतसम्म पनि यहाँ गरिएको छैन ।

लिच्छवि भन्ने राजाको बाह्र पुस्तापछि सुपुष्प भन्ने राजा भए भनी यहाँ वर्णन गरिएको छ । सुपुष्पदेवको ऐतिहासिक महत्त्व के थियो, जान्न सकिएको छैन । गोपालवंशावलीकारले 'सुपुष्पदेवले नेपालमा वर्णव्यवस्था लागू गरे; पशुपतिको मन्दिर बनाए' भनी लेखेका छन्† । सुपुष्पदेव प्रथम जयदेवभन्दा २३ पुस्ता अघिका हुन् भनी यस अभिलेखमा वर्णन गरिएको छ । यसबाट सुपुष्पदेवको नेपालसंग सम्बन्ध रहनु अलि सम्भव छैन कि भन्ने देखिन्छ ।

प्रथम जयदेव—सुपुष्पदेवपछिका २३ राजाहरूको उल्लेख यस अभिलेखमा गरिएको छैन । अनि प्रख्यात राजा जयदेवको प्रादुर्भाव भयो भनी सन्मानसाथ उनको उल्लेख गरिएको छ । यसपछि फेरि बाह्र राजाको उल्लेख गरिएको छैन । यसरी अगाडि र पछाडिका निकै राजाहरूको चर्चा नगरी जयदेवको चाहिं सन्मानसाथ चर्चा गरिएको हुनाले जयदेवको विशेष स्थान रहेको थियो भन्ने स्पष्ट संकेत पाइन्छ । तर उनको विशषता के हो; उनको प्रख्यातिको कारण के हो; यहाँ खुलाएर लेखिएको छैन । परन्तु यहाँ जयदेवलाई 'विजयी' भन्ने विशेषण दिइएको छ । यो विशेषणले चाहिं केही विशेष कुराको संकेत गरेको छ कि भन्ने देखिन्छ । नेपालमा लिच्छवि-राज्यको जग जयदेव (प्रथम) ले मजबूत पारेका हुन् कि भन्ने अनुमान हुन्छ । जयदेव मानदेवभन्दा १६ पुस्ता अगाडिका हुन् । यसो हुनाले उनी मानदेवभन्दा चार शय वर्ष जति अगाडिका हुन आउँ-छन् । उक्त विषयमा निश्चित रूपमा भने केही भन्न सकिंदैन ।

बीचका बाह्र राजा— जयदेवपछि वृषदेवभन्दा अघि बाह्र जना राजा भए भनी यस अभिलेखमा

† "राजा श्रीसुपुष्पदेव वर्ष ७६।। तेन हि नेपालभूमिश्चातुर्वर्ण्ण कृता । श्रीपशुपतिभट्टारकस्य देवालय कृतम् सङ्खलासंछादनम् ।।तत सुन्दरर्णिम्मितनगरम् सकलराज्यमर्ज्जादा कृत्यः न्यायेन प्रजाः समस्त प्रतिपालितानिः स्वस्वकीयेन भुमि. . संस्थ. . . व्यवहार प्रवर्तते ।।"

(गो. वं. १९–२० पत्रबाट)

लेखिएको छ। तर ती बाह्र राजाको नामोल्लेख भने यहाँ गरिएको छैन। यसो हुँदा ती बाह्र राजा को को हुन् भन्ने कुरा अस्पष्ट भएको छ। तर गोपालवंशावली आदि प्रचलित वंशावलीमा जयदेवपछिका वृषदेवअगाडिका राजाहरूको नामावली पाइन्छ। विभिन्न वंशावलीमा तिनीहरूको क्रम र संख्यामा अलि अन्तर देखिएको छ तापनि प्रायः तिनको संख्या बाह्र छ । ती राजामध्ये 'हरिदत्त' राजाको महत्त्व धार्मिक इतिहासको दृष्टिले रहेको छ। नेपाल–उपत्यकाका प्रसिद्ध चार नारायणको स्थापना उनले गरेका हुन् भनी गोपालवंशावली आदिमा लेखिएको पाइन्छ। लिच्छविकालका अभिलेखहरू केलाएर हेर्दा सो कुरा सत्य हो भन्ने देखिएको छ।

हरिदत्तका छोरा वसुदत्त हुन् भनी गोपालवंशावली आदिमा लेखिएको छ। केवलपुरको अभिलेखमा उल्लिखित वसुराज यिनै हरिदत्तका छोरा हुन् भन्ने देखिएको छ।

यसरी हामी जयदेवपछिका वृषदेवभन्दा अघिका बाह्र राजाको अस्तित्वबारे अलिकता कुरा थाहा पाउन सक्ने भएका छौं। तर विशेष ढङ्गले खोजी नभई सकेको हुनाले यो समयको नेपालको इतिहास अज्ञात अवस्थामा नै रहेको छ।

यसपछि यस अभिलेखमा वृषदेवको वर्णन आदरसाथ गरिएको छ। यसमा विशेष कारण रहेको थियो। यस कुराको चर्चा माथि चाँगुको स्तम्भलेखको व्याख्याको प्रसङ्गमा गरिसकेको छ। यस कारण यहाँ दोहऱ्याउनु आवश्यक छैन ।

यसपछि क्रमशः शङ्करदेव, धर्मदेव, मानदेव, महीदेव, वसन्तदेवको चर्चा यस अभिलेखमा गरिएको छ। मानदेवदेखिका त निकै अभिलेख पनि पाइएका हुनाले त्यस बेलाको इतिहास केही स्पष्ट भएको छ। यस विषयको चर्चा माथि यथाप्रसङ्गमा गरिएको छ।

यसपछि फेरि उदयदेवभन्दा अगाडिका राजाहरूको नामोल्लेख यस अभिलेखमा गरिएको छैन। वसन्तदेवको समयदेखि नै गुप्त आभीरहरूको हातमा शासनको बागडोर रहन थालेको थियो। त्यस बेलाका लिच्छवि राजाहरू नाममात्रका थिए। यसो हुनाले जयदेवले तिनको नामोल्लेख गराएनन्। वंशावलीकारहरूले पनि यस ताकाका लिच्छवि राजालाई उपेक्षा गरेका छन्। अहिले प्राप्त अभिलेखबाट यस बीच भएका राजामध्ये मनुदेव, वामनदेव, रामदेव, गणदेव, गङ्गादेव, शिवदेव, ध्रुवदेव, भीमार्जुनदेव यी राजाहरूको पत्ता लागेको छ। गुणकामदेव, मानदेव (द्वितीय) आदि अरू केही राजाको अस्तित्व पत्ता लाग्ने सम्भावना नभएको होइन। 'गुणाङ्क' मुद्रा 'मानदेव–संवत्' आदि कुराले उपर्युक्त सम्भावनालाई दर्शाएका छन् ।

शक्तिशाली शासक भौमगुप्तलाई पन्छाई शिवदेवले 'लिच्छविकुलकेतु' कहलाई केही काल एक्लै शासन गरेका थिए। यसो हुनाले लिच्छविकुलको गौरवको दृष्टिले शिवदेव (प्रथम)को चर्चा यस अभिलेखमा हुनुपर्ने जस्तो देखिन्छ । तर आफ्नो बुद्धिबर्कतले शिवदेवले सो काम गरेका थिएनन्। अंशुवर्माको योजनाअनुसार सो काम भएको थियो । आभीर गुप्तहरूलाई

पन्छाउने योजना सफल भएपछि यसबाट अंशुवर्मालाई मात्र बढी लाभ भएको थियो; अंशुवर्माको व्यक्तित्वले शिवदेवलाई सर्वात्मना ढाकिदियो। यसो हुँदा लिच्छविकुलको दृष्टिले शिवदेव गौरवशाली व्यक्ति ठहरिएनन्।

यहाँनिर अंशुवर्मा जस्ता महत्त्वपूर्ण व्यक्तिको उल्लेख यस अभिलेखमा किन गरिएन भन्ने प्रश्न पनि उठ्छ। अंशुवर्मले आफ्नो शासनकालमा नेपालको गौरव बढाएका थिए। विदेशमा समेत उनको प्रसिद्धि फैलिएथ्यो। लिच्छवि कुमार उदयदेवलाई नै नै युवराज घोषित गरी लिच्छवि प्रति पनि उनले आस्था नै देखाएका थिए। यसरी साधारण रूपमा विचार गर्दा अंशुवर्माको उल्लेख यस अभिलेखमा हुनुपर्ने जस्तो देखिन्छ। तर यहाँ अंशुवर्माको उल्लेख नगराइएको हुनाले जयदेव अंशुवर्मालाई सन्मानको दृष्टिले हेर्दैनथे भन्ने थाहा पाइन्छ। हुन पनि अंशुवर्मा लिच्छविवंशका थिएनन्; उनको उदयले लिच्छविहरू झन् निस्तेज बनेका थिए। भौमगुप्तहरूको पालामा लिच्छवि राजाको जुन अवस्था थियो; त्यो हेरी अंशुवर्मा र जिष्णुगुप्तको पालामा लिच्छवि राजाको अवस्था झन् गिरेको थियो। नरेन्द्रदेवको उद्योग सफल नभएको भए लिच्छविहरू गिरेका गिन्यै हुने थिए। यसो हुनाले यहाँ जयदेवले अंशुवर्माको चर्चा गराएनन्।

अंशुवर्मा पछि उदयदेवले केही काल राज्य गरेथे। तर उदयदेव कमजोर रहे। उनले आत्मरक्षाको लागि भोटमा शरण लिनुपरेथ्यो। यसो हुनाले उदयदेव पनि गौरवशाली व्यक्ति थिएनन्। तैपनि यहाँ उदयदेवको उल्लेख किन गरियो भन्ने प्रश्न उठ्न सक्छ। लिच्छवि राजाहरूमा 'महाराजाधिराज' कहलाउने उनी प्रथम थिए; नरेन्द्रदेव शक्तिमा आउनामा पनि उनी कारण थिए। यसो हुनाले पनाति जयदेवले बराज्यूको चर्चा गर्नु आवश्यक संझेको देखिन्छ। लिच्छविवंशको गौरव फेरि कायम गर्ने व्यक्ति नरेन्द्रदेव हुँदा यहाँ उनको त विशेष वर्णन गरिनु स्वाभाविक छ।

विष्णुगुप्तहरूलाई पन्छाई राम्ररी राज्य गर्न सफल भएपछि नरेन्द्रदेवको ख्याति भारततिर पनि फैलिन थाल्यो। यसो हुनाले भारतका प्रसिद्ध राजवंशसंग हाम्रा लिच्छविहरूको विवाहसम्बन्ध जोडियो। नरेन्द्रदेवले आफ्ना छोरा शिवदेव (द्वितीय)को विवाह मगधका राजा आदित्यसेनकी दौहित्री, मौखरि राजा भोगवर्माकी छोरी वत्सदेवीसंग गरिदिएका थिए। भारतको प्रसिद्ध राजवंशसंग यसरी विवाहसम्बन्ध कायम भएको हुनाले जयदेवले यस कुराको वर्णन यस अभिलेखमा गौरवसाथ गराएका छन्। जयदेवको विवाहसम्बन्ध पनि भारतको प्रसिद्ध राजवंशसंगै जोडिएको थियो। भगदत्त राजाका वंशज श्रीहर्षदेवकी छोरी राज्यमतीसंग उनको विवाह भएको थियो। श्रीहर्षदेव कोसल, गौड, कलिङ्गभेकका राजा थिए। यसरी जयदेवको पितृकुल मातृकुल दुवै उच्च हुनुको साथै विवाहसम्बन्ध पनि उच्च कुलसंगै भएको हुनाले जयदेवलाई यस कुरामा गर्व थियो। यो कुरा यस अभिलेखको वर्णनबाट स्पष्ट थाहा पाइन्छ।

## 'परचक्रकाम' उपनाम–

जयदेव विजिगीषु प्रकृतिका देखिएका छन् । पाए अरूका मुलुक जिती राज्य बढाउँछु भन्ने उनको मनसुबा थियो । यसैले उनले आफ्नो आदर्शअनुसार 'परचक्रकाम' भन्ने उपनाम लिएका थिए । यो कुरा यस अभिलेखमा "शूरत्वात्परचक्रकाम इति यो नाम्नापरेणान्वितः' भनी स्पष्टसंग लेखाइएको छ । प्रायः उपनाम आफ्नो आदर्शअनुसार लिइन्छ । 'परचक्रकाम' भन्ने उपनाम लिएका हुनाले देशविजय गर्ने भावना उनको मनमा उठेको थियो भन्ने स्पष्ट छ । फेरि–

"अङ्गश्रिया परिगतो जितकामरूपः
काञ्चीगुणाढ्यवनिताभिरुपास्यमानः ।
कुर्व्वन्सुराष्ट्रपरिपालनकार्यचिन्तां
यःसार्व्वभौमचरितं प्रकटीकरोति ॥"

भनी दोहरो अर्थ लाग्ने गरी लेखिएको यस वर्णनले पनि देशविजय गरी ठूला राजा बन्ने इच्छा जयदेवको थियो भन्ने संकेत गर्छ ।

उनको शरीरको वर्णन गर्दाखेरि पनि पुष्ट र ठूलो छाती भएका, जीउढाल मिलेका उनी थिए भनी वीरोचित शारीरिक लक्षणको वर्णन गरिएको छ ।

जे होस्, यति कुराबाट राज्यविस्तार गर्ने आदर्श जयदेवको थियो भन्ने स्पष्ट थाहा पाइन्छ । तर उनले मुलुक बढाएको कुराको संकेतसम्म पनि कतै पाइंदैन । यसको उल्टो जयदेवपछिको लिच्छविकालको इतिहास नै केही अन्धकारमय रहेको छ । यसमा के रहस्य रह्यो; सो खुल्न सकेको छैन ।

पशुपतिनाथमा कमल–अर्पण– राजा जयदेवले पशुपतिनाथमा चाँदीको भव्य कमल चढाई यो अभिलेख कुँदाउन लाएका हुन् । उक्त कमलमा चाँदीका आठ पात थिए; बीचको केशर रहने भागचाहिं सुनले बनेको थियो । जयदेवकी आमा वत्सदेवीले पनि अरू चाँदीका साना कमल चढाएकी थिइन् । राजा जयदेवले यो कमल चढाएर भएको पुण्य आफ्नी आमालाई अर्पित गरेका छन् । छोराले आफूलाई अर्पित गरेको पुण्य र खुद आफैंले कमल चढाएर भएको पुण्यसमेत आमाचाहिंले स्वर्गवासी पति (शिवदेव) लाई अर्पित गरेकी छन् ।

## कविका रूपमा जयदेव–

पशुपतिनाथलाई चढाएको अष्टदल कमललाई लक्ष्य गरी यस अभिलेखमा अनेक उत्प्रेक्षामय पद्य लेखिएका छन् । तिनमा पाँचवटा पद्य खुद राजा जयदेवका छन् । बीच बीचमा 'राज्ञः' भनी परिचय दिई ती पाँच पद्य छुट्याइएका छन् । जयदेवका ती नमूनापद्य प्रौढ र प्राञ्जल छन् । यसबाट कविता रचना गर्नामा उनको हात बसेको थियो; उनी कवि थिए भन्ने थाहा पाइन्छ ।

यस अभिलेखमा उनलाई 'असल कवि' भनी वर्णन पनि गरिएको छ। काव्यरचना गर्न स्वयं जयदेव नै समर्थ थिए; तर आफ्नो कुलको वर्णन आफैं गर्नु राम्रो नभएको हुनाले स्वयं जयदेवले आफ्नो वंशवर्णन नगरेका हुन् भनेर पनि यहाँ लेखिएको छ। यसबाट राजा जयदेव कवि थिए भन्ने थाहा पाइन्छ।

राजा मानदेव विद्वान् थिए भन्ने वर्णन उनका पालाका अभिलेखमा पाइन्छ। अंशुवर्मालि विद्या पढ्दा अपार आनन्द लाग्छ भनी लेखाइगएका छन्। तर उनीहरू कवि थिए भन्ने वर्णन पाइएको छैन। राजा जयदेवचाहिं 'कवि'का रूपमा देखापरेका छन् तथा आफ्ना कविताको नमूना उनले छोडेर पनि गएका छन्। यसरी लिच्छवि राजाहरूमा 'कवि' का रूपमा देखापरेका जयदेव मात्रै हुन् भने पनि हुन्छ।

## बुद्धकीर्ति-

यो अभिलेख ३४ पद्य भएको एक सानो खण्ड काव्यकै रूपको छ। यसका पाँच पद्यबाहेक अरू पद्यको रचना बुद्धकीर्तिले गरेका हुन्। यो कुरा यस अभिलेखमा खुलाएर लेखिएको छ। यी बुद्धकीर्ति को हुन्; यिनको परिचय पाउन सकिएको छैन। संस्कृतभाषामा राम्रो दखल भएका, माथिल्लो तहको कविताशक्ति भएका यी थिए भन्ने कुराचाहिं यस कृतिबाट छर्लङ्गिन्छ। बुद्धकीर्ति पण्डित मात्र थिएनन्; उनी राजदरबारमा प्रतिष्ठा पाएका, राजाका पनि मान्य गुरुजन थिए। यसै हुँदा राजामाथिको स्नेहले यो काव्यरचना मैले गरेको हुँ भनी उनले फूर्तिसाथ बोलेका छन्।

*यिनको नाम 'बुद्धकीर्ति' रहेको हुनाले यिनी बौद्ध धर्मसंग सम्बन्ध राख्ने व्यक्ति (बौद्ध भिक्षु)* थिए कि भन्ने मलाई लाग्छ। यस अभिलेखमा जयदेवले आफूले गरेको पुण्य आमालाई अर्पेको र आमाचाहिंले स्वर्गवासी पतिलाई आफ्ना पुण्य चढाएको उल्लेख परेको छ। मैले गरेको पुण्यले अरूको उद्धार होस् भनी कामना गर्ने प्रथाको प्रचारक महायानी बौद्ध सम्प्रदाय हो; यो कुरा पनि यस प्रसङ्गमा विचारणीय छ।

यसरी यस अभिलेखबाट तात्कालिक अनेक कुरामा प्रकाश पारेको छ। महादेवको वर्णन, कमलको वर्णनको प्रसङ्गमा प्रकट गरिएका कुराबाट त्यस वेलाका धारणाहरू निकै अंशमा बुझ्न सकिन्छन्। विशेष गरेर त्यस वेलाको विद्वत्समाजमा परेको पौराणिक विचारधाराको प्रभावबारे यसबाट केही जान्न सकिन्छ।

अन्त्यमा एक कुराको चर्चा गर्नु आवश्यक संझेको छु। यहाँ कमलको वर्णनको प्रसङ्गमा 'पशुपतिको विश्रामभूमि = पाशुपत क्षेत्र = नेपाल उपत्यका'को वर्णन गरिएको छ जस्तै–

"एषा भाति कुलाचलैः परिवृता प्रालेयसंसर्गिभि–
र्व्वेदी मेरुशिलेव काञ्चनमयी देवस्य विश्रामभूः।"

यसबाट लिच्छविकालमा नेपाल–उपत्यकाका चारैतिरका पहाडहरूमा हिउँदतिर हिउँ पर्दथ्यो भन्ने बुझिन्छ‡ । मूलसर्वास्तिवादविनयको वर्णनबाट पनि त्यस वेला बढी हिउँ पर्दथ्यो भन्ने देखिन्छ । मध्यकालको पूर्वार्द्धसम्म पनि उपत्यकामा बढी हिउँ पर्दथ्यो भन्ने संकेत गोपाल-वंशावलीबाट थाहा पाइन्छ ।

–★–

‡ नेपाल उपत्यकालाई किराती भाषामा 'सेञ्जेलुम्मा' भनिन्छ। यसको अर्थ 'हिउँ पर्ने पर्वतोपत्यका' हो भन्ने किरातभाषाविशेषज्ञ ईमानसिंह चेमजोङको भनाइ छ । यसबाट पनि उपर्युक्त कुराको केही पुष्टि हुन्छ ।

# नक्साल नारायणचौरको अभिलेख

यो अभिलेख कुँदिएको शिलापट्ट पहिले नक्साल नारायणचौरमा रहेको थियो । हाल राष्ट्रियसंग्रहालयमा लगी यो राखिएको छ । यसको माथिल्लो भाग ज्यादै खिइएको छ । तल्लो भाग खण्डित छ। यसमा अहिले संवत् देखिदैन ।

लेभीद्वारा २१ संख्याको रूपमा यो छापिएको छ। नोलीद्वारा ८३ संख्याको रूपमा यो छापिएको छ । पूर्णिमा १६ अङ्कमा मैले पनि यो छपाएको छ ।

## मूलपाठ

(१ देखि ९ पंक्तिसम्म पढ्न नसकिने)

१०. ... ... ... ... ... ण्डच - -
११. ... ... श्रवद ... ... .........
१२. ... ... ... ... ... मदुवे - -
१३. ... ... ... ... ... धिकरण. ि र–
१४. ... ... दान ... प्रयग ... ... ...
१५. ... ... दा .. ि... नि... ि...
१६. क्ष–र्य ... स्य ... ... ... ... सं ...
१७. – प्र ... :प–ह् ... ... शि ... शि ..........ते
१८. त्र यथायुक्तविचारणीय[१] –रणग ... ... दि ....ि तत ... दौ-
१९. वारिकैर्यथायुक्तविचारणीय [२]... दश पण(पु)राणा... मध्यकह्–नि श्री-
पूर्व्वाधिकरणस्य देया[३]

नोलीका पाठ–

१. त्रयं वायुक्त विवारण २. ... ... ३. ... ....

२०. य ... वप ... पुत्रककार्येण श्री (पश्चि) माधिकरणस्य[१] श्रीपूर्व्वाधिकरणस्य दक्षिणगत...

२१. करणस्य.......चरण...पुरो दौवारिकेणापि यथाशास्त्रानुगतं विचारणीयं[२]....

२२. क..णोन ... ... भट्टाधिकारप्रभृतीनां सर्व्वाधिकाराणामप्रवेश[३]..

२३. सीमनि समुपस्थितकार्याणां स्थान..कार्याणां च स्वयं पाञ्चालिकानामेव न्यायावलोकनप–[४]

२४. न–र्यकात्परि–ि र्या कुस ... ... ... रि ... ... हारे–पणे प ...

२५. को-दोलने पणपुराणाः पञ्च ।[५]निबन्धलंघने पणपुराणचतुष्टयम् । साक्षिनिर्देशे[६] पणपुराण-

२६. द्वयं सार्द्धं । मुद्रयाप्युद्गारे विंशतिपणाश्चात्रोपस्थितसाक्षिणां दण्डः पणशतचतुष्टयं लिखित[७]

२७. भावने[८] पणशतम् । संप्रतिपत्तौ पणपुराणाः सद्विपणाः[९] । प्री–वणे पणपुराणाः पञ्चवि[१०]

२८. शतिः । अयक्षिकाङ्का दशपणपुराणाः सार्द्धं च उत्तमकार्ये । मध्यमावरकार्येषु च षट्[११]पणपुराणाः

२९. सद्विपणाः[१२] सपणं पणपुराणत्रयमिति निर्ण्णिक्तव्यवहारभगनस्य[१३] सपणं पुराणशतं पञ्चा...

३०. ञ्चविंशतिश्च पणपुराणाः कल्पितो[१४] दण्डः । व्यवहारपरिनिष्ठितजातं द्रव्यस्य षड्भागं[१५] पाञ्चालिकानां दातव्यं

३१. यस्तु द्रव्यं न प्रयच्छेत्स्वस्थानवास्तव्यस्यान्यस्थानीयस्य च धारणकस्यात्रैव रोधोपरोधो भवेत् । यस्तु कुदृ-

---

नोलीका पाठ–

१. ...कार्येण श्री... २. सुरोदौवारिकेणापि यथाशास्त्रानुगत ...

३. भट्टा–अधिकारप्रभृतीना...धिकरण...

४. सी–रि...प्रज्ञान ... ... ...कार्याणां ......न्त...

५. ...।नि–क्षले–ङ्ग ६. सो.ि ि नि...

७. देयं सार्द्धं । मूद्रयांधद्ग–विंशतिपणा वेत्रोपस्थितसाक्षिणां दत्ताः पणशतचतुष्टयम्लिखि.... ८. ना–श ९. ...दि–पाः

१०. प... ११. कार्ये.....प्र.ी १२. सति पणाः स..

१३. निर्ण्णिक्षव्यवहारभागस्थ ग–ण–ण–भवेच्च १४. –ि. ी द. ा:

१५. जपग्रपाञ्चालिकेन दातव्यं

३२. ष्टमिति[1] कार्यमस्य ततो रोगमाचौदौवारिकस्यावेदनीयं तेनापि श्रीमत्पादी-
यान्तरासनकरणे[2] यथा–

३३. मासं रोपणीयः । सगर्भनारीमरणे पणशतमेकम् । आत्मघातकानां–च्छिष्ट-
दत्ताषकलहमरणे[3]

३४. दौवारिकस्यावेद्यं मृतशोधनम् । तदर्थमागतस्य तस्य सद्विपणाः षट् पणपुराणा
देयाः । सक्षतगोरूपवि–

३५. नाशे[4] सपणपुराणत्रयं यथाधिकारिणां देयं । प्रासादरथचित्रणे सिन्द्रिरदौ-
वारिकस्याशीतिः पण–

३६. पुराणा देयाः । रथोत्तोलने प्रासादसंस्कारे च सर्व्वपरिच्छदने [5]प्रतिवर्षं
वेत्रदौवारिकस्याशीतिः पण–

३७. पुराणाः । एवञ्चैलकरस्य च षट् पणपुराणाः सद्विपणाः । २२ घटिकाक्रये
दौवारिकेण पञ्चभिः

३८. पणपुराणै देया । मण्डिपीयात्रायां[6] शाञ्चलपट्टयुगमुत्तमञ्च पञ्चाभरणकम् ।
प्रतिवर्षं [7]स्थानदौवा–

३९. रिकस्य पणपुराणसहस्रमेकं [8]पाञ्चालिकैर्देयम् । ताम्रकुट्टशाला । मानेश्वर ।
शाम्भपुर । ह्मप्रिंग ।

४०. पुठम्प्रिङ्ग । जमयम्बी । पुंड्ट्ग्रामाणां द्रङ्गत्वमात्रमेव प्रसादीकृतमत्र शिला-
पट्टकोत्कीर्ण्णाः[9] श्रीस–

४१. ङ्घादिप्रसादविशेषाः समादिष्टा इति । परिगतार्थैर्यथोपरिलिखितनियो-
गाधिकृतैस्तदाध–

४२. कारिभिः स्वव्यापारव्यपदेशेन मनसापि प्रसादातिक्रमसाहसाध्यवसायो न
कर्तव्य इत्यादि ज्ञात्वा

४३. येन्यथाकारिणस्तेषामतिदारुण दण्डं पातयिष्यामो भाविभिरपि नराधिनाथैः
पूर्व्वनृपकृ–

४४. तप्रसादपालनपरैः प्रजाप्रमोददानज्ञैस्सुतरां न मर्षणीयास्तथा च पालना-
नुशंसा श्रू–

---

नोलीका पाठ–

१. कु. . . .मिति  २. श्रीमत्पाद्वियकरासनकरणे

३. आत्माघातकानाठच्छिषहुत्ताषकण मरणे–  ४. सक्तगोरूपनिवासे

५. सर्व्वपरिस्नपने  ६. मण्डपा या वा याशाञ्चेल –

७. मानदौवारिकस्य  ८. पाञ्चालिके  ९. शिलापट्टको–र्

४५. यते। ये शीतांशुकरावदातचरिताः सम्यक्प्रजापालने नो जिह्माः प्रथमावनीश्वरकृतां रक्षन्ति धर्म्या स्थितिम्
४६. तेवज्ञाविजितारिचक्ररुचिरं संभुज्य राज्यश्रियं नाके शक्रसमानमानविभवास्तिष्ठन्ति धन्याश्चिरम्[1] । सीमा
४७. चास्य स्थानस्योत्तरपूर्व्वस्यां दिशि अजिकाविहारपूर्व्वद्वाराद्र–ङ्कुण्ठको ततो दक्षिणाभिमुखेन महापथानु–
४८. सृत्य मणिनागाट्टिकस्योत्तरतो बृहद्ग्रामं यावत् ततोत्तरपश्चिमाभिमुखेन वलसोक्षिदेवकुलस्य दक्षि-
४९. णा तिरश्ची अनुसृत्य वोद्दविषय अरघट्टस्योत्तरेण माशानुसृत्य पश्चिमाभिमुखेन लंखुलंउट्टणे ततस्ता-
५० –ट्टणकमनुसृत्य नडपटावाटिकामनुसृत्य पश्चिमाभिमुखेन महाप्रतिहारस्य गृहमण्डलस्य द-
५१. क्षिणस्य कण्ठानुसारेण महारथ्यायां स्तम्भितशिला ततस्तेन रथ्यामूलस्य यद्दुर्द्वारं प्रविश्य पूर्व्वगृहोत्तरा-
५२. र्धभागमाक्रम्य दक्षिणगृहाग्रतः पश्चिममनुसृत्य द्वारगृहमण्डलं प्रविश्य दक्षिणगृहमादाय पश्चिमक-
५३. च्छं लङ्घयित्वा यावीग्रामे मध्येन तवेचेखानुसारेण पश्चिमाभिमुखेन मार्गस्ततस्तन्मार्गेण उत्तरामुखा-
५४. नुसारेण २छूमकुटीमार्गस्ततः पश्चिमाभिमुखेन परिक्रम्योत्तरामुखमनुसृत्य पोन्दिमण्डपिकासमी-
५५. पेन उडणेहुशस्ततस्तनपश्चिममवतीर्य ताम्रकुट्टशालागमनमार्गानुसारेण जप्तिखुसंक्रमाभिमुखेन •
५६. ताम्रकुट्टशालालखमकस्ततोत्तराभिमुखेन मानेश्वरराजाङ्गणालीदक्षिणेन प्रेक्षणमण्डपीपृष्ठतः पूर्व्वो-
५७. त्तरं गत्वा पूर्व्वद्वारेण प्रविश्य राजाङ्गणमध्येन पश्चिमद्वारेण f ....त्तरं गत्वा प्रवर्द्धमानेश्वरस्याग्रतः
५८. पश्चिममार्गमनुसृत्य यावत्वोत्तरिनोकारितप्रणाल्यग्रतः–ति–य मस्ता तद्दक्षिणेन साम्बपुर-
५९. वाटिका(या)श्चार्धं ततः... मार्गस्योत्तल्याः पश्चिम(म)नुसृत्य...दक्षि-

---

नोलीका पाठ– १. स्थिरम् २. कुमुद्वती

णमनुसृत्य दक्षिण-
६०. गामी पश्चिमद्वारेण...जीववर्म्मविहारस्य[१] दक्षिण...हृद्वाटिकाया दक्षिणाली-
६१. पश्चिमा...(तिला)मकादुत्तरपश्चिमेन ... ... मनुसृत्य कम्प्रोयम्बी
६२. मार्गेणोत्तर ...[२] भट्टारकप्रतिबद्धक्षेत्रखण्ड ... ... विहारभूमेः प-
६३. श्चिमाल्यावतीर्य[३]-- बृहन्नदीमध्यानुसारेण ... ... मान. .नतिभिर्हुडिखू मध्या-
६४. दुत्तरमनुसृत्य[४]-- दीपेका- ततो दक्षिणमार्ग... ग्रामगामी मार्ग...
६५. स्ततो...थ मार्गानुसारेण विङ्वोचामण्डपिपश्चिमे[५] यकुस्ततो- -स्वामिकार्त्ति[६]-
६६. क...करगोष्ठिभूमेः पूर्व्वः तत्रैव सप्तमीगोष्ठिभूमेः पू(र्व)...विहारभूमेः
६७. पश्चिमालीमा..[७]रपाञ्चालिभूमेश्च पूर्व्वाली ततोनुसारेण श्रीतुकाण... पूर्वाली ततो[८]
६८. नुसारेण तैत्तिरीशाखागोष्ठिभूमेः[९] पश्चिमाली ततोनुसारेण पा-कुशि...मार्ग-दक्षिणा-
६९. नुसारेण श्रष्ट..गर्त्तमेगस्ततः पूर्व्वानुसारेण कङ्कावत्तिखा[१०]–ततोनुसा...
७०. ...मार्गस्ततो नदीं प्रोल्लंध्य[११] वातकुटीपूर्व्वपङ्कुटी प्रविश्य सर...परि...
७१. सारेण सामन्त...गोष्ठिभूमेः पूर्व्वालीतिलमक[१२] ... ...
७२. पूर्व्वाली ततो[१३]... ... ...
७३. –नुसारेण प[१४]... ... ...

# अनुवाद

... ... ... ... ...

अधिकरण ... ... उचितअनुसार विचार गर्नुपर्ने... अनि...
दौवारिक (राजदरबारको द्वारे)ले उचितअनुसार विचार गर्नुपर्ने ... दश पणपुराण...

---

१. जातववत्मविहारस्य २. ...रकप्रतिवर्धस्तत्र कुञ्चो
३. ........नदी ध्य ४. ... ...
५. ...नुसारेपि ६. ... ७. ...माली...र प्रमालीभूमेश्च
८. ... ... ९. ...तुरीस...गोष्ठीभूमेर्या.ि.माली तदनुसारेण
१०. त्तमा...अप्र...र्त्त–ग..पूर्व्वानुसारेण च–आवती ...
११. नदी पल्ल–वार्त्त–दिपूर्व्वप ि. ी ... ...
१२. ... ... ... प्ति ... पूर्व ... विल ...
१३. ... ... ... १४. ... ... ...

श्रीपूर्वाधिकरणलाई दिनू ... ...कार्बाइद्वारा श्रीपश्चिमाधिकरण र श्रीपूर्वाधिकरणको दक्षिणतिरको ...कार्बाइको ...पहिले दौवारिकले पनि शास्त्रअनुसार विचार गर्नुपर्छ। ... ...भट्ट अधिकार आदि सबै अधिकार यहाँ नजाग्ने गरिएका छन्। ... ...यस इलाकाभित्र आइपरेका मुद्दामामिला र स्थानीय मुद्दामामिलाहरूको स्वयं पाञ्चालिकहरूले छिनफान गर्नू.. ...मा पाँच पणपुराण(दण्ड गर्नू)। निबन्ध (लेखिएका सनद सवाल, कार्यविवरण आदि) नाघेमा चार पणपुराण (दण्ड गर्नू) साक्षीलाई सिकाएमा अढाई पणपुराण(दण्ड गर्नू)। कुनै इशाराद्वारा पनि मुद्दाको कुरा प्रकट गरेमा यहाँ उपस्थित साक्षीहरूलाई बीस पण दण्ड गर्नू। लिखत हिनामिना गरेमा (?) शय पण (दण्ड गर्नू)। बिराम स्वीकार गरेमा दुइ पणपुराण र दुइ पण (दण्ड गर्नू)। ... ...पच्चीस पणपुराण (दण्ड गर्नू)। उत्तमकायमा अयक्षिकाङ्क (?) साढे दश पणपुराण, मध्यमकायमा ६ पणपुराण र दुइ पण अवरकायमा तीन पुराण र पण (दण्ड गर्नू)। मुद्दा मामिला छिनिएपछि भाग्यो भने त्यसलाई शय पुराण र पण ... ... पच्चीस पणपुराण दण्ड तोकिएको छ। मुद्दा छिन्दा उठेको रकमको ६ भागको १ भाग पाञ्चालिक-लाई दिनू। जसले दिनुपर्ने रकम दिंदैन, यस इलाकामा बस्ने वा अर्को इलाकामा बस्ने भए पनि नतिर्नेलाई छेकथुन यहीं गर्नू।

राम्ररी मुद्दा हेरिएन भनी जसले (उजूर गर्ला), त्यसको मुद्दामामिला अनि रोगमाचौ दौवारिककहाँ दर्ता गराउनू। उनले पनि महीना दिनभित्रमा राजाको भित्री इजलासमा जाहेर गर्नू। गर्भिणी आइमाईको मृत्यु भएमा शय पण (लिनू)। आत्महत्या गरी... ...झगडा गरी (कसैको) मृत्यु भएमा दौवारिकलाई जाहेर गरी मुर्दा उठाउनू। त्यसको लागि आएका तिनलाई (दौवारिकलाई) ६ पणपुराण र २ पण दिनू। घाइते गाई वस्तुको (हेरचाह नगरी) नासेमा ३ पुराण र ३ पण सम्बद्ध अधिकारीलाई दिनू।

दरबारको रथ सिंगार्न सिन्द्रिर दौवारिकलाई असी पणपुराण दिनू। रथ ठड्याउन, दरबार मरम्मत गर्न र अरू सिंगार पटारको लागि प्रतिवर्ष वेत्र दौवारिकलाई असी पणपुराण दिनू। यसै गरी कपडाको करको ६ पणपुराण र दुइ पण दिनू। २२ घटिका किन्नाको लागि दौवारिकले पाँच पणपुराण दिनू। मण्डपी यात्रामा एक जोर असल लुगा र पाँच गहना दिनू। प्रतिवर्ष स्थानदौवारिक-लाई पाञ्चालिकहरूले एक हजार पणपुराण बुझाउनू।

ताम्रकुट्टशाला, मानेश्वर, शाम्भपुर, ह्मप्रिंग, पुठम्प्रिङ्ग, जमयम्बी, पुंदट्ट यी ग्रामहरूलाई द्रङ्गको रूपमा मात्रै (मान्यता दिई) निगाह गरिएको छ। यहाँ शिलालेखमा कुँदिएका श्रीसङ्घ आदिलाई गरिदिइएका विशेष निगाहहरू थामिएका छन्।

यो कुरा थाहा पाई माथि लेखिएका काममा खटिएका अधिकारीहरूले आफ्नो कामको निहुँ थापी मनले पनि निगाह नाघ्ने आँट नगर्नू। यो थाहा पाईकन जसले अन्यथा गर्लान्, तिनलाई अत्यन्त कडा सजाय गर्नेछौं। पछि हुने राजाहरूले पनि अघिका राजाहरूले गरेका निगाह थाम्नतिर

लागी दुनियाँलाई सुख दिन जान्ने भई तिनलाई अवश्य माफी नगर्नू (दण्ड गर्नू)। अघिका स्थितिबन्धेज थाम्नाको प्रशंसा यसरी गरिएको पाइन्छ –'जून जस्तै सफा चरित्र भएका, छल कपट नगरीकन राम्ररी प्रजा पालन गर्नामा लागेका जुन राजाहरूले अघिका राजाहरूले गरेका असल स्थितिबन्धेजहरू थाम्नेछन्। तिनीहरूले संजिलैसंग शत्रुका राज्य जिती राज्य भोग गर्न पाउनेछन् तथा स्वर्गमा इन्द्रसमान इज्जत ऐश्वर्य पाई धेरै काल सुखसंग रहन पाउनेछन्।

यो ठाउँको सीमा यस प्रकारको छ–उत्तरपूर्वपट्टि वलसोक्षि देवमन्दिरको दक्षिणतिर तेर्सो लागी वोद्दविषयमा अरघट्टको उत्तरपट्टि माशातिर लागी पश्चिमपट्टि लंखुलंउट्टण, त्यताबाट ता–ट्टणतिर लागी नडपटाबाटिका (बारी) तिर लागी पश्चिमपट्टि महाप्रतिहारको गृहमण्डलको दक्षिणतिर लागी मूल सडकमा उभ्याइएको ढुङ्गासम्म, त्यताबाट त्यो सडकको टुप्पोको यद्दुद्वारमा पसी पूर्व लङ्को उत्तरको आधा भागसम्म लिई, दक्षिण लङ्को अगाडिबाट पश्चिमतिर लागी द्वारेको गृहमण्डलभित्र पसी दक्षिण लङ लिई पश्चिमतिरको धाप नाघी यावीग्रामको बीचबाट पूर्वचेखातिर लागी पश्चिमपट्टि बाटोसम्म, अनि त्यो बाटोबाट उत्तरतिर लागी छूमकुटी बाटोसम्म, त्यताबाट पश्चिमपट्टि लागी अनि उत्तरतिर लागी पोन्डि मण्डपिकाको नगीचै उडणेहुश, त्यताबाट पश्चिमतिर लागी ताम्रकुट्टशाला जाने बाटोतिर लागी मानेश्वर राजपटाङ्गिनीको दक्षिणतिर प्रेक्षण मण्डपीको पछिल्तिरबाट पूर्वोत्तरतिर लागी पूर्वको ढोकाबाट पसी राजपटाङ्गिनीको बीचबाट गई पश्चिम ढोकाबाट....उत्तर लागी, प्रवर्द्धमानेश्वरको सामुन्नेबाट पश्चिमको बाटोतिर लागी वोत्तरिनोले बनाउन लाएको धाराको अगाडिबाट...मस्ता, त्यसको दक्षिणतिरबाट साम्बपुरको बारीको आधासम्म, त्यताबाट...बाटोको...पश्चिमतिर लागी...दक्षिणतिर लागी दक्षिण जाने...पश्चिम ढोकाबाट...जीववर्म्मविहारको दक्षिण–हद्‌बारीको दक्षिण आली साँध, पश्चिम....कुलोबाट उत्तर पश्चिमतिर....लागी कम्प्रोयम्बीको बाटोबाट उत्तरतिर... भट्टारकसंग सम्बन्ध राख्ने खेत... ...विहारको जग्गाको पश्चिम आली साँधबाट श्रोह्लेर ...ठूलो खोलाको बीचतिरबाट लागी ... ...हुडिखुको बीचबाट उत्तरतिर लागी– दीपेका...त्यताबाट दक्षिण बाटो...ग्राममा जाने बाटो, त्यताबाट ...बाटोबाट लागी विङ्वोचा मण्डपीको पश्चिममा यकु, त्यताबाट...स्वामिकार्तिक...करगोष्ठीको जग्गाबाट पूर्वतिर त्यहीं सप्तमी गोष्ठीको जग्गाबाट पूर्वतिर....विहारको जग्गाको पश्चिम आली साँध ... ...पाञ्चालीको जग्गाको पनि पूर्व आली साँध, त्यतैतिरबाट लागी श्रीतुकाण...को पूर्व आली साँध, त्यतातिरबाटै गई तैत्तिरी शाखागोष्ठीको जग्गाको पश्चिम आली साँध, त्यतातिरबाटै गई पाकुशि....बाटोको दक्षिणतिर लागी अप्टा...गर्त्तमेग, त्यताबाट पूर्वतिर लागी कङ्कावत्तिखा, त्यतैतिर ..बाटो, त्यसबाट नदी तरेर वातकुटीको पूर्वतिरको पङ्कुटी पसी ... ...सामन्त...गोष्ठीको जग्गाको पूर्व आली साँधको कुलो ... ...पूर्व आली साँध, त्यताबाट...लागी ... ... ... ... ... ...

## व्याख्या–

यस अभिलेखको शुरूको भाग अस्पष्ट छ; अन्त्यको भागचाहिं खण्डित छ। यस कारण यो अभिलेख कसको हो भन्ने प्रश्न उठेको छ। यसको लिपि भने द्वितीय जयदेवको ताकाको छ। जयदेवले न्यायव्यवस्थातिर विशेष दृष्टि दिएका थिए भन्ने कुरा उनको ज्ञानेश्वरको अभिलेखबाट थाहा पाइन्छ। यस अभिलेखमा पनि विशेष गरेर न्यायव्यवस्थासम्बन्धी कुरा नै परेको हुनाले यो अभिलेख पनि द्वितीय जयदेवले नै राख्न लाएका हुन् भन्ने मलाई लागेको छ ।

लिच्छविकालमा न्यायव्यवस्था विभिन्न तहमा छरिएर रहेको थियो । त्यस वेला कुथेर, शोल्ल, माप्चोक, लिङ्ग्वल, भट्टाधिकरण, पूर्वाधिकरण, पश्चिमाधिकरण आदि अधिकरणहरू आफूसंग सम्बन्ध राख्ने मुद्दामामिलाको छिनफान पनि गर्दथे । सर्वोच्च न्यायालयको रूपमा राजदरबारमा 'अन्तरासन' (परमासन) रहेको थियो । लिच्छविकालका शासकहरूले स्वायत्त-शासनलाई प्रोत्साहन दिने नीति लिएका हुँदा स्थानीय ग्रामपाञ्चालीहरूले पनि पञ्चापराध जस्ता ठूलठूला मुद्दा छिन्ने अधिकारसमेत पाएका थिए । यसरी न्यायव्यवस्था छरिएर रहेको हुनाले न्यायव्यवस्थामा एकरूपता रहोस्; मुद्दा छिन्ने तरीका एक पाञ्चालीमा एक किसिमको, अर्को पाञ्चालीमा अर्कै किसिमको नहोस् भन्ने कुरामा जयदेवले ध्यान दिएको देखिन्छ । यस अभिलेखको माथिल्लो भाग खण्डित हुँदा कुरा अलि अस्पष्ट भएको छ । तर बचेको भागबाट पाञ्चालीले मुद्दा छिन्दा कुन तरीका अपनाउने भन्ने कुराको संक्षिप्त निर्देशन यस अभिलेखमा दिइएको छ। यस कारण लिच्छविकालको न्यायव्यवस्था बुझ्न यो अभिलेख उपयोगी रहेको छ।

'सर्वाधिकाराणामप्रवेशः सीमनि समुपस्थितकार्याणां स्थान. . .कार्याणां च स्वयं पाञ्चालिकानामेव न्यायावलोकन' भन्ने उल्लेख यस अभिलेखको शुरूमा परेको छ। यसबाट पाञ्चालीलाई दिइएको न्यायव्यवस्थासम्बन्धी अधिकारबारे थाहा पाइन्छ। यस प्रसङ्गमा न्यायनिसाफ दिने नियमको चर्चा गर्दा, 'निबन्धलङ्घने पणपुराणचतुष्टयम्' अर्थात् लिखित सनदसवाल, कार्यविवरण आदिको बर्खिलाप कार्बाइ गरे ४ पणपुराण दण्ड गर्ने कुरा लेखिएको छ। यसबाट सनद सवालहरू, कार्यविवरण लिखित रूपमा रहेका हुन्थे भन्ने थाहा पाइन्छ। हाँडिगाउँको अंशुवर्माको अभिलेखमा परेको 'पूर्वराजानुवृत्त्या यथोचितदानाय शासनोपनिबन्ध. . .लिखितः' यस वाक्यले पनि उक्त कुराको संकेत दिन्छ ।

यसपछि साक्षी बकाउने कुरामा गडबडी हुन नपाओस् भन्ने कुराको चर्चा यहाँ गरिएको छ। 'साक्षिनिर्देशे पणपुराणद्वयं सार्द्धं' भनी साक्षीलाई सत्य कुराभन्दा अरू भन्न लाउन सिकाएमा न्याय बिटुलिने हुनाले त्यसको नियन्त्रणको लागि प्रयास गरिएको छ। यस प्रसङ्गमा 'मुद्रयाप्युद्गारे' अर्थात् कुनै इशाराद्वारा मात्र पनि एक थोकको अर्को थोक गरेमा दण्ड गर्ने नियम बाँधिएको छ ।

पाञ्चालीद्वारा विधिपूर्वक मुद्दा छिनेपछि अपराधी भाग्न सक्छ, अथवा त्यसले फैसला माथि हेलचक्र्याइँ गर्न सक्छ। यस्तो भयो भने कडा दण्ड गर्ने कुराको उल्लेख यहाँ 'निर्णितव्यवहारभग्नस्य

सपणं पुराणशतं . . .ञ्चविंशतिश्च पणपुराणाः कल्पितो दण्डः' भनी गरिएको छ । मुद्दामामिला छिनेपछि दण्डकुण्डको रूपमा उठेको रकमको छ भागको एक भाग पाञ्चालीले पाउँथ्यो; अरू रकम राजकोशमा जान्थ्यो । पाञ्चालीले गरेको दण्डको पैसा कसैले नबुझाए त्यसलाई छेकथुन गर्ने अधिकार पनि पाञ्चालीलाई दिइएको थियो । यस कुराको स्पष्ट उल्लेख यस अभिलेखमा परेको छ ।

कहिलेकहीं पाञ्चालीका सदस्यहरू मिली रिस ईबीले कसैउपर अन्याय गर्ने सम्भावना पनि थियो । अथवा पाञ्चालीका सदस्यहरूले लापरबाइ गरी मुद्दाको ठीक ठीक छिनफान नगरी दिनपनि सक्थ्यो । यसो भएमा जनतामाथि अन्याय हुने स्पष्ट थियो । यस कारण जनताउपर अन्याय हुन नपाओस् भनी यस महत्त्वपूर्ण अर्को पक्षको पनि यहाँ व्यवस्था गरिएको छ । पाञ्चालीले गरेको फैसलामा अपराधीको चित्त नबुझे उसले दौवारिकमार्फत राजाको भित्री इजलास (अन्तरासन)-मा उजूर गर्न पाइन्थ्यो । यस्ता उजूरको एक महीनाभित्रै छिनफान गरिदिइन्थ्यो । यो कुरा 'यस्तु कुदृष्टमिति कार्यमस्य ततो रोगमाचौदौवारिकस्यावेदनीयं तेनापि श्रीमत्पादीयान्त-रासनकरणे यथामासं रोपणीयम्' भनी यहाँ स्पष्टसंग लेखिएको छ ।

यसरी न्यायव्यवस्था छिटो छरितो र निष्पक्ष होस् भन्ने कुरामा बढी ध्यान दिइएको हामी यताबाट स्पष्ट बुझ्न सक्छौं ।

लिच्छविकालको प्रशासनव्यवस्थामा दौवारिक (राजदरबारका द्वारे) को महत्त्वपूर्ण स्थान रहेको थियो । राजा र जनताको बीचको सम्पर्क दौवारिकद्वारा रहन्थ्यो । राजदरबारमा रहने दौवारिकबाहेक 'स्थानदौवारिक' पनि हुन्थे । जो सरकारी प्रतिनिधि रूपमा स्थानीय बस्तीमा (ग्राममा) रहन्थे । 'दुवारे=द्वारे' का रूपमा जो मल्लकालमा र शाहकालसम्म पनि कायम थिए । ती दुवै थरी दौवारिकहरूले गर्नुपर्ने काम कर्तव्य र उनीहरूले पाउने रकमको पनि केही उल्लेख यस अभिलेखमा परेको छ ।

गर्भवती आइमाईको मृत्यु भयो भने सरकारमा सूचना गरी गर्भ झिकेर मात्र ती आइमाईको दाहसंस्कार गरिन्थ्यो । यसका लागि ती गर्भवती आइमाईका पति वा अभिभावकले शय पण दौवारिकलाई बुझाउनुपर्थ्यो । यो कुरा यहाँ 'सगर्भनारीमरणे पणशतमेकम्' भनी लेखिएको छ । माथि गएको नरेन्द्रदेवको वज्रघर र यागबहालको अभिलेखमा पनि 'गुर्विणीमरणे गर्भोद्धरणाय पणशतमात्रदेयेन' भनी यो कुरा खुलाएर लेखिएको छ । लिच्छविकालमा जनसंख्यावृद्धिको समस्या थिएन; बरु त्यस वेलाको आवश्यकताअनुसार जनसंख्या बढोस् भनी शासकहरू चाहन्थे । यस कुराको केही चर्चा माथि भातेलगाउँको अभिलेखको प्रसङ्गमा पनि गरिसकेको छ । गर्भवती आइमाईको मृत्यु भयो भने शय पण दण्ड गर्ने यस कुराले पनि उक्त कुराको पुष्टि गर्छ । यस्तो कानून हुँदा गर्भवतीका पति वा अभिभावकले गर्भवती आइमाईको हेरचाहतिर बढी ध्यान दिने भए । अर्को कुरा गर्भ झिकेर मात्र दाहक्रिया गर्ने प्रथामा पनि उही भावना रहेको बुझिन्छ । महीना

पुगेको गर्भवतीको मृत्यु भए पनि त्यस गर्भभित्रको बालक जिउँदै छ कि भनी हेर्ने अभिप्राय यस प्रथाभित्र रहेको बुझिन्छ। बुद्धको समयमा एक प्रसिद्ध चिकित्सकले मृत गर्भवती आइमाईको पेट चिरी जिउँदो बालक झिकेको कथा अवदानकथामा पाइन्छ। जो होस्, गर्भवती आइमाईको मृत्यु हुन नपाओस्; सन्तानवृद्धिमा बाधा नपरोस् भन्ने कुरामा त्यस वेलाको समाज सावधान रहेको थियो भन्ने यताबाट संकेत पाइन्छ।

योबाहेक आत्महत्या गरी मरेका, झगडा गरी मरेका आदि अपर्झटमा मरेकाहरूको सूचना दौवारिकलाई दिई तिनीद्वारा छानबीन गराइसकेपछि मात्र लास उठाउन पाइन्थ्यो। यस कामका लागि आएका दौवारिकलाई ६ पणपुराण र दुइ पण बुझाउनुपर्थ्यो। यस कुराको चर्चा पनि यहाँ गरिएको छ।

राजदरबार सिंगार्ने, राजकीय रथ सिंगार्ने आदि कामको लागि विभिन्न दौवारिकले केही रकम पाउँथे। मण्डपीयात्रामा दौवारिकले असल पाँच गहना र असल कपडा पाउँथे। इत्यादि कुराको चर्चा पनि यस अभिलेखमा गरिएको छ।

यस अभिलेखमा ताम्रकुट्टशाला, मानेश्वर, साम्बपुर, ह्यंप्रिग, पुठम्प्रिङ्ग, जमयम्बी, पुंदट्ट यी सात ग्रामलाई द्रङ्गको दर्जा दिइएको कुरा पनि परेको छ। यसबाट त्यस वेलाको बस्तीबारे विचार गर्न केही मदत पाइन्छ। बन्दव्यापार चलेको, गुलजार रही एक किसिमको शहरको रूप लिएको बस्ती 'द्रङ्ग' कहलाउँथे। नेपाल उपत्यकाभित्र र बाहिरसमेत यस्ता अनेक द्रङ्ग यहाँ लिच्छविकालमा थिए। प्रत्येक द्रङ्गमा सरकारी भन्सार अड्डा आदि रहन्थे। ताम्रकुट्टशाला, मानेश्वर आदि बस्ती विकसित भएका हुनाले ती बस्तीलाई द्रङ्गको दर्जा दिइएको बुझिन्छ। द्रङ्गमा हुनुपर्ने भन्सार अड्डा आदिचाहिँ त्यहाँ नरहेको बुझिन्छ। 'द्रङ्गत्वमात्रमेव प्रसादीकृतम्' भन्ने यस वचनले उक्त कुराको संकेत गर्छ।

'ताम्रकुट्टशाला' ग्रामको यो नामकरण यस बस्तीमा तामाका भाँडाकुँडा बनाउने ज्यासलहरू बढी हुनाले भएको बुझिन्छ। पशुपतिनाथको मन्दिर भएको ठाउँ 'पशुपति' कहलाए जस्तै मानेश्वरको मन्दिर भएको बस्ती 'मानेश्वर' कहलाएको देखिन्छ। 'मानेश्वरराजाङ्गण' को उल्लेख यहाँ आएको हुनाले मानेश्वरमा कुनै राजदरबार पनि थियो भन्ने बुझिन्छ।

यस अभिलेखमा निर्दिष्ट स्थानको चारकिल्ला खुलाई दिइएको छ। यसबाट यस भेकमा बाटो–घाटोको राम्रो प्रबन्ध थियो; ठाउँ ठाउँमा प्रणाली (ढुङ्गे धारा)हरू थिए; अनेक गोष्ठीहरूका जग्गाहरू यता थिए; जीववर्मविहार आदि विहार यता थिए भन्ने कुरा थाहा पाइन्छ।

यसरी यस अभिलेखबाट तात्कालिक निकै कुरा बुझ्न मदत पाइन्छ।

–★–

# ज्ञानेश्वरको अभिलेख

ज्ञानेश्वरको चौबाटोदेखि दक्षिणपट्टि चौरमा एउटा सानो नारायणमन्दिर छ। सो मन्दिर-अगाडि यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यो अभिलेख खण्डित छ। अहिले देखिने अभिलेख कुँदिएको भाग ३५ अङ्गुल लम्बा, ३० अङ्गुल जति चौडा छ। यसको शिरोभागमा शङ्ख र चक्र अङ्कित छन्। यहाँ अहिले संवत् देखिंदैन।

'अभिलेख–संग्रह' पाचौं भागमा संशोधन–मण्डलद्वारा यो छापिएको छ।

## मूलपाठ

१. ... कैलासकूटभवनादप्रतिहतधर्मशासनो लिच्छवि(कुलकेतु)...
२. ... ... परमभट्टारक(महाराजाधिराजश्रीजयदेवः) ... ...
३. ... ... नेपालमण्डलान्तर्निवासिनो यथास्वमधिकरण ...
४. ... ... यथार्हङ्कुशलमभिधाय समाज्ञापयति ... ... ...
५. ... भवतां वर्णोत्तमा भूमिदेवास्स्मार्तशास्त्राणाम् ... ... ...
६. ... ... लं तैरनुपाल्यमानमा प्रजाका ... ... ...
७. ... ... पूर्वस्थित्या परिपालननिमित्त ... ... ...
८. ... ... ... स्माभिस्तत्र वसतां ... ...
९. ... सीमापरिच्छिन्नस्यास्य स्थानस्य पूर्वत ... ...
१०. ... ... विधारणादिपीडाहेतोर्न कैश्चिद् ... ...
११. ... ... बहिर्गतानाञ्च देहिनां धनिकमनुष्यैरपि ... ...
१२. ... ... विषादसापराधकारण स्वराज ... ...

१३. ... ... त पाञ्चालिकैरेव गृहीतो राजकुलस्यार्पणीय... ...
१४. ... ... पणपुराण एको मध्यकं हंसे–श्रीपूर्वाधि ... ...
१५. ... पूर्वकं कार्येषु ब्राह्मणानां मा ४० प्रसादानां वृद्धि ... ...
१६. ... दक्षिणराजकुलस्य (पू)र्वाधिकरण ... र्थे ... ...
१७. ... करणीयं ... ... मात्रं ... यकरणत्रयस्य ...
१८. ... ... न्यपूर्वाधिकरणानाम् यच्च करणत्रयं ...
१९. ... ... पण ... दि ... कार्येण ...
२०. ... ... ... ... ... ... ...
२१. ... ... स्थानोत्पन्नानि ... ... कार्याणि
२२. ... र्हस्य च दण्डार्हस्य उत्तमसाहस ... पणाः पणप्रा-
२३. ... ... धिकार ... पञ्च पणा ... ...
२४. ... ... ... रिके पित्रोर्दण्डः शरीरापराधश्च ... ...
२५. ... तेषां पणपुराण देया ... पूजा तस्य च दात ...
२६. ... पाञ्चालिकानां प्रदातव्या यस्तु द्रव्यं न प्रयच्छेत् ...
२७. ... ... पणद्वयम् षट्पणपुराणा ... ...
२८. ..,... स्वद्वारावगतं दक्षिणराजकुल ... ...
२९. ... पणशतमात्रं सक्षेत्रं ... ... ... ...
३०. ... देयं – स्थानचेटिना ... ... ... ...
३१. ... करणिकावाहैरपि पण ... ... ... ...
३२. ... तण्डुलमानिकाद्वयं दातव्यं ... ... ...
३३. ... ... मात्रस्य स्वाधिकारसम्बन्धेन च पीडा कार्या
३४. ... कुर्युस्तेस्माभिर्भाविभिश्च भूनाथैः पूर्वराज ... ...
३५. ... पूर्वेषां पृथिवीन्द्राणां प्रजार्थैकरतात्मनां ... ...
३६. ... दूतकोत्र युवराजश्रीविजयदेवः ... ...
३७.

## अनुवाद

कैलासकूट भवन (दरबार) बाट बेरोकटोक न्यायपूर्वक शासन चलाएका, लिच्छविकुलका झण्डा जस्ता भएका..परमभट्टारक महा(राजाधिराज श्रीजयदेवले) ... ...नेपालमण्डल-

भित्रका अधिकरणका सम्बद्ध (अधिकृतहरूलाई) यथोचित कुशल मङ्गल सोधेर आज्ञा गर्नुभएको छ। तिमीहरूलाई (थाहा होस्)–

जातमा उत्तम भएका ब्राह्मणहरू धर्मशास्त्रहरूको... ...तीद्वारा पालना गरिएका... पहिलेका स्थितिबन्धेजअनुसार पालन गर्नानिमित्त...हामीबाट त्यहाँका बासिन्दाहरूको ..... चारकिल्ला छुट्टयाइएको यो ठाउँको पूर्वतिर... ....छेकथुन आदि दुःख दिन कसैले पनि... बाहिर गएका मानिसहरूको धनी मानिसहरूले पनि...दैन्य, अपराधको कारणसहित आफ्ना राजा... ...पाञ्चालिकहरूले नै समातेर राजदरबारमा बुझाउनू ... ...एक पणपुराण...श्रीपूर्वाधिकरणमा...पूर्वक मुद्दामामिलाका काममा ब्राह्मणहरूलाई ४० मानिका बढी निगाह गरी दिइएको ... ...दक्षिण राजकुल (राजदरबार)को पूर्वाधिकरण... .. गर्नू। तीन कामको ...पूर्वाधिकरणहरूको जुन तीन काम ... ...पण...मुद्दाले ... स्थानीय ...मुद्दामामिलाहरू...दण्ड गर्नुपर्ने ठहरिएकोलाई उत्तमसाहस...दण्ड गर्नू। ...पणहरू ...बाबु आमालाई दण्ड गर्नू, सास्ती गर्नू। ..... ....तिनीहरूलाई पणपुराण दिनू। ... ...त्यसको पूजा ... ...पाञ्चालिकहरूलाई दिनू। जसले दिनुपर्ने रकम दिंदैन ... ...दुइ पण, ६ पणपुराण (दण्ड गर्नू)। आफ्नो ढोकामा आइपुगेको दक्षिण राजकुलले ... ...खेतसहित शय पण मात्र ... ... ... दिनू। स्थानचेटिले ... ...करणिकावाहरूले पनि पण.... ... ...दुइ मानिका चामल दिनू। ... ...लाई मात्र आफ्नो अधिकारको सम्बन्धद्वारा सास्ती गर्न पाइन्छ।

(जसले यो आज्ञा नटेरेर अन्यथा) गर्लान्, तिनलाई हामी (सहनेछैनौं)। पछि हुने राजाहरूले पनि पहिलेका राजाले गरेको (निगाहको ख्याल राख्नुपर्छ)। दुनियाँको हितमा लागेका अघिका राजाहरूको... ...

यस बातका दूतक (मार्फत) युवराज श्रीविजयदेव।... ...

## व्याख्या–

यस अभिलेखको छेउछाउको भाग खण्डित र अस्पष्ट हुँदा अहिले यसमा राजाको नाम देखिंदैन। तर यसमा दूतक युवराज श्रीविजयदेव रहेका हुनाले यो अभिलेख राजा जयदेवको हो भन्ने निश्चित छ। जनताले न्यायनिसाफ ठीकसंग पाऊन् भन्ने कुरामा जयदेवले बढी दृष्टि दिएका थिए। यस अभिलेखमा 'अप्रतिहतधर्मशासनः' भन्ने विशेषण उनले लिएका हुनाले न्यायव्यवस्था राम्रो पार्ने उनको आदर्श थियो भन्ने कुरा यसबाट पनि झल्किन्छ।

लिच्छविकालमा कुन आधारमा मुद्दामामिला छिनिन्थे भन्ने न्यायव्यवस्थासम्बन्धी यस

पक्षबारे यस अभिलेखबाट केही कुरा खुलेको छ। त्यस वेला न्यायनिसाफको आधार स्मृतिशास्त्र (धर्मशास्त्र)हरू रहेछन्; त्यसवेलाका शासकहरू धर्मशास्त्रकै आधारमा ऐन कानून बनाउँदा रहेछन्; यस काममा धर्मशास्त्र जान्ने विद्वान् ब्राह्मणहरूको मदत लिइंदो रहेछ भन्ने कुरा यस अभिलेखमा उल्लिखित 'वर्णोत्तमा भूमिदेवास्स्मार्तशास्त्राणाम्' यस वाक्यले दर्शाएको छ। यही परम्पराअनुसार मल्लकालमा र शाहकालमा पनि न्यायनिसाफको आधार धर्मशास्त्रहरू नै रहेका थिए। शासकहरूलाई धर्मशास्त्र उपस्थित नहुने हुनाले यस काममा शासकहरूलाई मदत गर्न 'धर्माधिकार' दर्जा दिई पण्डित विद्वान्हरूलाई नियुक्त गर्ने चलन शाहकालमा थियो ।[१]

अनेक शास्त्रको अध्ययन गरी ऐनकानूनको तर्जुमा गर्दा मलाई ठूलो आनन्द लाग्छ भनी अंशुवर्मले हाँडिगाउँको अभिलेखमा बोलेका छन्। अनुपरमको हाँडिगाउँको स्तम्भलेखमा प्रसङ्गवश केही धर्मशास्त्रको उल्लेख आएको छ। त्यताबाट मनु, यम, बृहस्पति, शुक्र आदिका स्मृतिशास्त्रहरू लिच्छविकालमा पढिन्थे भन्ने थाहा पाइन्छ ।

यस अभिलेखमा 'दण्डार्हस्य उत्तमसाहस' भन्ने उल्लेख परेको छ। यो सानो उदाहरण मात्रले पनि प्राचीन पद्धतिअनुसार नै लिच्छविकालमा न्यायनिसाफ गरिन्थ्यो भन्ने कुराको पुष्टि गर्छ। 'उत्तमसाहस' यो पद प्राचीन कालदेखि दण्डविधानमा चलेर आएको पारिभाषिक शब्द हो। धर्मशास्त्रहरूमा दण्डविधानको प्रकरणमा प्रथमसाहस, मध्यमसाहस, उत्तमसाहस गरी तीन तह छुट्याइएका छन। प्रथमसाहस दण्ड गर्ने भनी तोकिएको अपराधमा अढाई शय पण जति दण्ड गरिन्थ्यो। मध्यमसाहस पाँच शय पण जतिको हुन्थ्यो। उत्तमसाहस एक हजार पण जतिको हुन्थ्यो। धर्मशास्त्रकारहरूको शब्दमा प्रथम, मध्यम, उत्तम साहसको परिभाषा यस प्रकारको छ–

"पणानां द्वे शते सार्धे प्रथमः साहसः स्मृतः ।
मध्यमः पञ्च विज्ञेयः सहस्रं त्वेव चोत्तमः ॥' मनुस्मृति ८।१३८

(प्रथमसाहस अढाई शय पणको हुन्छ। मध्यमसाहस पाँच शय पणको हुन्छ। उत्तमसाहस हजार पणको हुन्छ।)

"साशीतिपणसाहस्र दण्ड उत्तमसाहसः ।
तदर्धं मध्यमः प्रोक्तस्तदर्धमधमः स्मृतः ॥" ३६६॥ याज्ञवल्क्यस्मृति, आचाराध्याय

(एक हजार असी पणको दण्ड उत्तमसाहस कहिन्छ। त्यसको आधा (पाँचशय चालीस') पणको दण्ड मध्यमसाहस कहिन्छ। त्यसको आधा (दुइ शय सत्तरी)पणको दण्ड अधम (प्रथम) साहस कहिन्छ।)

---

१. 'पूर्णिमा' १६ अङ्कका ३४९–५१ पृष्ठ हेर्नुहोस्

कौटल्यले पनि आफ्नो अर्थशास्त्रमा यस कुराको उल्लेख गरेका छन् । तर त्यहाँ पणको संख्या भने अलि फरक छ। जस्तै –

....अष्टचत्वारिंशत्पणावरं षण्णवतिपरं पूर्वसाहसदण्डः ॥ ॥ ...द्विशतावरः पञ्चशतपरो मध्यमः साहसदण्डः ॥ ॥ ...पञ्चशतावरः सहस्रपर उत्तमः साहसदण्ड इत्याचार्याः ॥ ॥ (कौ. अ. ३ अधि . १७ अध्याय)

(घटीमा अठचालीस पण बढीमा छयानब्बे पणको पूर्व (प्रथम) साहस दण्ड हुन्छ । ... घटीमा दुइ सय बढीमा पाँचशय पणको मध्यमसाहस दण्ड हुन्छ।...घटीमा पाँच शय बढीमा हजार पणको उत्तमसाहस दण्ड हुन्छ भन्ने आचार्यहरूको भनाइ छ।)

प्राचीन पद्धतिअनुसार पहिले वाग्दण्ड (हप्काउनु), अनि धिग्दण्ड (बेईज्जत गर्नु), अनि धनदण्ड (पैसा जरिवाना गर्नु), अनि वधदण्ड (जीउमा सास्ति गर्नु, अङ्गच्छेद आदि) गरिन्थ्यो । यसको उल्लेख मनुस्मृतिहरूमा यसरी गरिएको छ–

"वाग्दण्डं प्रथमं कुर्याद्धिग्दण्डं तदनन्तरम् ।
तृतीयं धनदण्डं तु वधदण्डमतः परम् ॥" मनुस्मृति ८।१२९
"धिग्दण्डस्त्वथ वाग्दण्डो धनदण्डो वधस्तथा ।
योज्या व्यस्ताः समस्ता वा ह्यपराधवशादिमे" ॥३६७ याज्ञवल्क्यस्मृति, आचा.

लिच्छविकालमा पनि दण्ड गर्ने तरीका यस्तै थियो जस्तो देखिन्छ। यस अभिलेखमा उल्लिखित ...दण्डः शरीरापराधश्च' आदि वाक्यबाट यस कुराको संकेत पाइन्छ। ।

यसै गरी यस अभिलेखमा न्यायव्यवस्थासम्बन्धी अरू स्थितिबन्धेजको चर्चा परेको छ । अभिलेख खण्डित नभएको भए धेरै उपयोगी हुने थियो। तर खण्डित हुँदा कुरा अस्पष्ट भएको छ। तैपनि लिच्छविकालको न्यायव्यवस्थाबारे बुझ्न यो उपयोगी नै छ ।

–★–

# गोरखाको जयदेवको अभिलेख

गोरखा–दरबारबाट पूर्वतिर अलि तल ओर्लेपछि हनूमान्भञ्ज्याङमा पुगिन्छ । त्यहाँ चौतारानिर 'गोरख–पादुका' भएको पहराको मनितिर यो शिलालेख पश्चिमतिर फर्काएर राखिएको छ। यसको शिरोभागको चिह्न अस्पष्ट भइसकेको छ। यसको अभिलेख कुँदिएको भाग २७ अङ्गुल लम्बा, १६ अङ्गुल चौडा छ। यसमा अहिले संवत् देखिंदैन।

'गोरखाको ऐतिहासिक सामग्री' मा प्रा. तुलसीराम वैद्य र मैले यो अभिलेख छपाएका छौं ।

## मूलपाठ

१. स्वस्ति श्रीमत्कैलासकूटभवना ... ... लिच्छविकुलाम्बरचन्द्र
२. भगवत्पशुपतिभट्टारकपादानु(गृहीत)... ... (महा)राजाधिराजपरमेश्वर
३. श्रीजयदेवः कुशलो ... ... ... जनपदलोकान् राज-
४. ... ... ... ... ... समाज्ञापयति
५. विदितम्भवतु भवतां ... ... ... सर्वदेव
६. ... ... ... ... ... सर्वदा
७. ... ... ... ... ... कर्ण
८. ... ... ... ... ... ...
९. ... ... ... ... ... ...
१०. भूमि ३० ... ... ... ... ...
११. भूमि ३० ... ... ... ... ...
१२. मानिका ... ... ... ... ...
१३. ... ... ... ... ... ...
१४. ... ... ... ... ... मा २०

## अनुवाद

कल्याण होस् । श्रीकैलासकूट भवनबाट लिच्छविकुलरूपी आकाशका चन्द्रमा जस्ता, भगवान् पशुपतिनाथका पाउको अनुग्रह पाएका, ... ... गाथमा आराम रहेका, परमेश्वर महाराजाधिराज श्रीजयदेवले ... जनपदवासीहरूलाई (कुशल मङ्गल सोधेर) आज्ञा गर्नुभएको छ। तिमीहरूलाई थाहा होस् ।....

...सारा देवता ......सधैं ...... ......३० भूमि..........४० भूमि ......मानिका ...... ......२० मानिका ...... ......

### व्याख्या–

यस अभिलेखको तल्लो भाग ज्यादै नै खिइएको छ । माथिल्लो भागमा पनि बीचमा निकै अंश खिइएको छ। यस कारण यस अभिलेखमा मुख्य विषय के परेको थियो; बुझ्न नसकिने भएको छ। यसमा राजाको नाम र प्रशस्तिको केही भाग भने स्पष्ट देखिन्छ। यस कारण यसमा संवत् नदेखिए तापनि द्वितीय जयदेवले यो अभिलेख राख्न लाएका हुन् भन्ने निश्चित छ ।

लिच्छविकालमा गोरखा भेकको नाउँ के थियो; खिइएको हुँदा यस अभिलेखबाट पनि थाहा पाउन सकिएन। नेपाल–उपत्यकामा पाइएका यस ताकाका अरू अभिलेख जस्तै यो अभिलेख पनि सोझै कैलासकूट भवनबाट जारी गरिएको छ। तर एउटा विशिष्टता यस अभिलेखमा रहेको छ। यहाँका बासिन्दाहरूलाई सम्बोधन गर्दा 'जनपदलोक' शब्द यहाँ प्रयोग गरिएको छ। उपत्यकाका बासिन्दालाई सम्बोधन गर्दा यो शब्द प्रयोग गरेको देखिएको छैन। उहिले राष्ट्रका बासिन्दाहरूलाई दुइ तहमा विभाजन गर्ने चलन थियो। राजधानी आदि प्रमुख शहरका बासिन्दाहरू 'पौर' कहलाउँथे; अरू राष्ट्रबासीहरू 'जानपद' कहलाउँथे । रामायण, महाभारत, कौटलीय अर्थशास्त्र आदि ग्रन्थमा यस कुराको उल्लेख प्रशस्त पाइन्छ। यस अभिलेखमा गोरखाभेकका बासिन्दालाई 'जानपद' भनिएको छ। उपत्यकाका प्रमुख बस्तीका बासिन्दाहरू 'पौर' कहलाएको देखिन्छ। यस कुराको संकेत जैसीदेवलनिरको जिष्णुगुप्तको अभिलेखबाट पाइन्छ । त्यसमा उपत्यकाका जनताले आफूलाई मन पराएको भनी प्रख्यापन गर्न जिष्णुगुप्तले 'समस्तपौरार्चितशासन' भनी लेखाएका छन्। यताबाट त्यस वेलाको शासनव्यवस्थाको अलिकता झलक पाउन सकिन्छ ।

सर्वदेव, भूमि, मानिका आदि पद यस अभिलेखमा देखिएका हुनाले यता भेकका देवताको पूजा आजासम्बन्धी व्यवस्था बाँधी यो अभिलेख राख्न लाएको अनुमान हुन्छ। माथि गएको गोरखनाथ–गुफाको अभिलेखबाट यस भेकका प्रसिद्ध देवता "वज्रभैरव" हुन् भन्ने थाहा पाइएको थियो। यस अभिलेखमा 'सर्वदेव' पद देखिएको हुनाले यस भेकमा अरू पनि देवताहरू त्यस वेला थिए भन्ने संकेत पाइन्छ ।

–★–

[१५२ संख्या]

# मीननाथनिरको जयदेवको अभिलेख

पाटनको प्रसिद्ध मीननाथको मन्दिरको सामुन्ने एक ढुङ्गे धारा रहेको छ। त्यही धारामा यो अभिलेख कुँदिएको शिलापत्र रहेको छ। यसको शिरोभागमा शङ्ख र चक्र अङ्कित छन्। यस अभिलेखको धेरै भाग पढ्न नसकिने भइसकेको छ। यसमा अहिले संवत् देखिंदैन।

नोलीद्वारा ८५ संख्याको रूपमा यो छापिएको छ।

## मूलपाठ

१. --ल--द-- रा-- ... ... ... ...
२. -- श्रीविजय ... ... ... ...
३. हरशा ... ... ... परम(भ)
४. ट्टारक ... महाराजाधिराजपरमेश्वरश्रीजयदेवः
५. कुशली ... ... ... (य)
६. थार्हङ्कुशलमाभाष्य ... ... ... ...
७. - दू --- यि ... ... ... ...
८. परिर्जिह ... ... ... ...
९. श्रीम ... ... ... ...
१०. ण - - यदि स्य ... ... ... ...
११. ञ्च द ... ... ... ...
१२. ... ... ... ... ...
१३. नारोण ... ... ... ...
... ... ... ... ...

## अनुवाद

... ...गाथमा आराम रहेका परमभट्टारक महाराजाधिराज श्रीजयदेवबाट ... ...लाई यथोचित कुशल मङ्गल सोधेर (आज्ञा भएको छ ।) ... ...

**व्याख्या–**

**यस अभिलेखमा राजाको नाउँ र प्रशस्तिको अलिकता भागसिबाय अरू केही बुझिंदैन । यस कारण यस अभिलेखमा के विषय परेको थियो; बुझ्न नसकिने भइसकेको छ ।**

–✶–

(जयदेवपछिका लिच्छवि राजाको सनदशिलापत्र अहिलेसम्म एउटा पनि पाइएको छैन । जलद्रोणी आदि बनाई, देवता स्थापना गरी जनताद्वारा राखिएका केही अभिलेख मात्र पाइएका छन् । तर तिनबाट पनि जयदेवपछिका केही लिच्छवि राजाहरूको अस्तित्वको पुष्टि भएको छ । साथै त्यस बेलाको इतिहासको सिलसिला जोड्न पनि त्यताबाट केही सहायता पाइन्छ । यस कारण जयदेवपछिका अभिलेखहरू पनि सकभर खोजी गरी यहाँ समावेश गरिएका छन् ।

जयदेवपछिका अभिलेख दिनुभन्दा पहिले माथि नै पार्नुपर्ने तर छुटेका र पछि पाइएका केही खण्डित अभिलेख यहाँ दिनुपरेको छ । यी अभिलेखको व्याख्या दिनु आवश्यक नदेखिएको हुनाले अनुवाद, संक्षिप्त परिचय मात्र यहाँ दिइएका छन् ।

[१५३ संख्या]

# पशुपतिको उमामहेश्वरमूर्तिको अभिलेख

**पशुपति आर्यघाटपारिको प्रसिद्ध रामचन्द्रको मन्दिरको पछाडि पूर्वपट्टि उमामहेश्वरको सानो सुन्दर मूर्ति रहेको छ । त्यसको पादपीठमा यो अभिलेख कुँदिएको छ । यहाँको लिपि मानदेवको ताकाको छ ।**

**गौतमवज्र वज्राचार्यद्वारा "कैलास' पत्रिकामा यो अभिलेख छापिएको छ ।**

१. ... ... म– रा ...

**खिइएको हुनाले यी दुइ अक्षरबाहेक अरू नबुझिने भएको छ । तर यी दुइ अक्षरको आधारमा यो मूर्ति मानदेवको ताकाको हो भनी ठम्याउन सकिन्छ । यस कारण लिच्छविकालको मूर्तिकलाको दृष्टिले यसको महत्त्व रहेको छ । साथै शैवधर्मबारे विचार गर्न पनि यो उपयोगी छ ।**

[१५४ संख्या]

# महाबौद्धको वाराही मूर्तिको अभिलेख

का. इ. महाबौद्ध गणेशस्थानभित्र वाराहीको मूर्ति रहेको छ। त्यसको पादपीठमा यो अभिलेख कुँदिएको छ। यहाँको लिपि वसन्तदेवको ताकाको छ ।

गौतमवज्र वज्राचार्यद्वारा "कैलास' पत्रिकामा यो छापिएको छ ।

१. ब्राह्मणशकभट्टस्य
२. पुत्रस्य र–स्य कृतिः

(ब्राह्मण शकभट्टका छोरा. . . .को यो कृति हो।)

लिच्छविकालको धार्मिक अवस्थाबारे विचार गर्न यो अभिलेख केही उपयोगी रहेको छ ।

[१५५ संख्या]

# बलम्बूको अभिलेख

बलम्बू महालक्ष्मीको मन्दिरनिर बाटोमा एउटा ठूलो शिलापत्र रहेको छ। त्यसको धेरै भाग पढ्नै नसकिने भइसकेको छ। तर त्यसको अन्त्यमा–

'संवत् ४५४ ज्येष्ठकृष्णदिवा ६'

यति भागचाहिं देखिन्छ। बीच बीचमा पनि फाटफुट एक दुइ अक्षर देखिन्छन्। यो अभिलेख वसन्तदेवको हो भन्ने निश्चित छ। वसन्तदेवका सहायक शासक बन्न पुगेका रविगुप्तले पश्चिमभेकका जनतालाई स्वायत्तशासनसम्बन्धी केही अधिकार दिलाएका थिए। यसमा पनि त्यस्तै कुरा परेको बुझिन्छ ।

[१५६ संख्या]

# जयवागीश्वरीको अभिलेख

देउपाटनमा जयवागीश्वरीको प्रसिद्ध मन्दिर रहेको छ। उक्त जयवागीश्वरीको मूर्तिको पादपीठमा यो अभिलेख कुँदिएको छ। यहाँको लिपि अंशुवर्माको ताकाको छ।

गौतमवज्र वज्राचार्यद्वारा 'कैलास' पत्रिका यो प्रकाशित भएको छ।

१. गुहसोम -- ट्टहवृद्धिष्य कृतिः

(गुहसोम, ......वृद्धिको यो कृति हो।)

तात्कालिक धार्मिक अवस्थाविषयमा विचार गर्न यो अभिलेख केही उपयोगी छ।

[१५७ संख्या]

# कुम्भेश्वरको अभिलेख

पाटन कुम्भेश्वरको प्रसिद्ध मन्दिरको पेटीमा यो अभिलेख कुँदिएको ढुङ्गा छापेर राखिएको छ। यसको लिपि अंशुवर्माको ताकाको छ।

नोलीद्वारा ८६ संख्याको रूपमा यो छापिएको छ‡।

१. ॐ स्वस्ति पर–कारण ---------- भगवतः (प्र)तिष्ठानादस्ति परम्पुण्यमिति मत्वा भगवन्तन्त्रैलोक्यगुरुम्

(कल्याण होस्। .... ....कारण भएका भगवान्को प्रतिष्ठाले ठूलो पुण्य हुन्छ भनी संझेर तीनै लोकका गुरु भएका भगवान्को प्रतिष्ठा गरियो।)

‡ यो अभिलेख कहाँको हो; थाहा भएन भन्ने भावको कुरा नोलीले लेख्नुभएको छ। तर यो कुम्भेश्वरको हो।

[१५८ संख्या]

# फुटुङ गाउँको अभिलेख

बालाज्यूबाट एक कोश जत्ति उत्तरपट्टि फुटुङ गाउँ रहेको छ। त्यहाँ एउटा सनद शिलापत्र भारी बिसाउन अनुकूल हुने गरी पल्टाएर राखिएको छ। यसरी असुरक्षित अवस्थामा रहेको हुनाले यस अभिलेखको प्रायः सम्पूर्ण भाग खिइसकेको छ। तैपनि तल्लो भागमा–

'धर्मगुरुभि'

पद देखिन्छ। माथिल्लो भागमा पनि फाटफुट एक दुइ अक्षर देखिन्छन्। यो अभिलेख अंशुवर्माको हो भन्ने देखिन्छ। अभिलेख अस्पष्ट भइसकेको छ तापनि लिच्छविकालका बस्तीबारे विचार गर्ने यसबाट पनि केही मद्दत पाइन्छ।

[१६९ संख्या]

# टुसाल गाउँको अभिलेख

बूढानीलकण्ठ नारायणस्थानबाट केही पूर्व–दक्षिणपट्टि टुसाल भन्ने गाउँ छ। त्यहाँ बाटोमा एउटा शिलापत्र त्यसै पल्टाएर राखिएको छ। यसको पनि प्रायः सम्पूर्ण भाग खिइसकेको छ। तर बीच बीचमा '*प (शुप)ति*' आदि फाटफुट एक दुइ अक्षर अझ बाँकी छन्। अक्षर–कुदाइँको आधारमा यो अभिलेख अंशुवर्माको हो भन्ने देखिएको छ। ऊखु पेल्ने आदि कामबाट यो गाउँको नाउँ टुसाल रहेको हो। पछिसम्म पनि यस भेकमा ऊखुको खेती प्रशस्त हुन्थ्यो; यो कुरा यस प्रसङ्गमा स्मरणीय छ।

## [१६० संख्या]

# पुलचोकको अभिलेख

पाटन पुलचोक पुचोबहीमा मन्दिरको ढोकाअगाडिको मण्डलमा यो अभिलेख कुँदिएको छ। यसको केही भाग भुइँमा गाडिएको छ।

हेमराज शाक्यद्वारा अभिलेख–प्रकाशमा यो छापिएको छ ।

१. ॐ स्वज्ञानकिरणापास्तसकलक्लेशसंहृतिम्
बुद्धः स्यामिति वन्देहमिमम्भक्त्या - - - -

(आफ्नो ज्ञानको किरणले सारा दुःखहरू हटाएका यी (भगवान्) . . . .लाई बुद्धत्व प्राप्त गर्न सकुं भनी भक्तिपूर्वक वन्दना गर्छु ।)

## [१६१ संख्या]

# चाबहिलको मण्डलको अभिलेख

चाबहिलको प्रसिद्ध चैत्यको उत्तर–पूर्व कुनाको पेटीमा रहेको कमलाकार मण्डलमा यो अभिलेख कुँदिएको छ।

गौतमवज्र वज्राचार्यद्वारा 'कैलास' पत्रिकामा यो छापिएको छ ।

१. ... त्याश्च शून्यहृदयसुखकर ... मण्डल

( . . .शून्य हृदय भएकालाई सुख दिने. . . .मण्डल)

[१६२ संख्या]

# गणबहालनिरको अभिलेख

काठमाडौं गणबहालनिरको धाराको पूर्व भित्तामा यो अभिलेख कुँदिएको छ। गौतमवज्र बज्राचार्यद्वारा 'कैलास' पत्रिकामा यो छापिएको छ।

१. ... द्वितीयाषाढक्र -- दिवा -- पञ्च ...
२. ... का ... या ...

[१६३ संख्या]

# गणबहालको अभिलेख

काठमाडौं गणबहालमा रहेको कुनै देवताको पादपीठमा यो अभिलेख कुँदिएको छ। हेमराज शाक्यद्वारा 'अभिलेख–प्रकाश' मा यो छापिएको छ।

१. ... ... पूर्वङ्गमङ्कृत्वा सर्व्वसत्वा(ना)ञ्च अनुत्तरज्ञानावाप्तये सं...

(....आदि सारा प्राणीहरूको अनुत्तरज्ञान लाभ होस् भनी .....)

[१६४ संख्या ]

# बुङ्मतीको अभिलेख

बुङमतीको प्रसिद्ध विहारभित्र यो अभिलेख कुँदिएको खण्डित शिला रहेको छ। हेमराज शाक्यले यो अभिलेख पत्ता लाउनुभएको हो। उहाँले दिनुभएको प्रतिलिपिको आधारमा यो पाठ पढिएको हो।

१. ... क– कारुण्य ... प्राणिहि(त)
२. ... यश्चावाप्य समस्तभूमिपति(तं)
३. ... कुलवतां जात्यादिदुःखक्षयम्
४. ... नं नादमुखराद्धरकामिनी ...
५. ... ... ... ...

(...दया...प्राणीको हित ... ...जसले सबै भूमिबाट पतित भएको......लाई पाएर ... ...जन्म लिएकाहरूको जाति आदि दुःखको नाश... ... खूप आबाज गर्ने ... आइमाई ... ...)

खण्डित भए पनि यो अभिलेख महायानी बौद्ध दर्शन बुझ्न अलिकता सहायक छ ।

[१६५ संख्या]

# हेनाकरविहारको अभिलेख

काठमाडौं हेनाकरविहारभित्र रहेको सानो चैत्यमा यो अभिलेख कुँदिएको छ । यहांको लिपि नरेन्द्रदेवको ताकाको छ। नोलीद्वारा परिशिष्टमा १ संख्याको रूपमा यो छापिएको छ'।

१. (ये धर्मा) हेतुप्रभवा हेतुं (तेषां) तथागतो ह्यवदत् ।
२. तेषां (च यो नि) रोध एवंवादी महाश्रमणः ॥

(१६६ संख्या)

# चाबहिलको माटाका चैत्यको अभिलेख

चाबहिलको प्रसिद्ध चैत्यको नजीकै रहेको सानो चैत्यभित्र अनेक माटाका छाप जस्ता साना चैत्यहरू भेट्टिएका थिए। तीमध्ये केही यस्ता माटाका चैत्यहरू चाबहिलनिवासी बेखालाल मानन्धर-को संग्रहमा छन् । तिनमा अभिलेख पनि कुँदिएको छ। तिनको लिपि नरेन्द्रदेवको ताकाको छ।

तिनमध्ये एकको पाठ यहाँ दिइन्छ‡–

१. (ये) धर्मा हेतुप्रभवा
२. हेतुं तेषान्तथागतो ह्यव-
३. दत्तेषाञ्च यो निरोधः एवं-
४. वादी महाश्रमणः

(१६७ संख्या)

# त्यागलटोलको चैत्यको अभिलेख

पाटन त्यागलटोलमा बाटैमा रहेको चैत्यमा यो अभिलेख कुँदिएको छ। हेमराज शाक्यले यो अभिलेख देखाइदिनुभएको हो।

(पश्चिमपट्टि)

१. प्रभवा (हे)तु तेषां तथागतो ह्यव--

(पूर्वपट्टि)

२. ... एवंवादी महाश्रमणः

... ... ...

[संख्या १६८]

# लाजिमपाट सरस्वतीस्थानको अभिलेख

लाजिमपाटमा 'साकुना ससमाजु' भनी प्रसिद्ध सरस्वतीको स्थान छ। त्यहाँ मन्दिरसंगै उत्तरपट्टि सानो खोल्सो छ। त्यहीं अभिलेख कुँदिएको सानो ढुङ्गो रहेको थियो। हाल यो त्यहाँ

‡ श्रीबाबुकृष्ण रिजालले पनि 'प्राचीन नेपाल' १४ अङ्कमा चाबहिलमा पाइएका यस्ता दुइ माटाका छापको अभिलेख छपाउनुभएको छ।

कहाँनिर रहेको छ; पत्ता लाउन सकिएन । अभिलेख ज्यादै खिइएको छ । तर त्यसको पाँचौं पंक्तिमा–

'महाराजाधिराजश्रीशिवदेवस्य'

भन्ने पाठ देखिन्छ । परिश्रमसाथ पढे अरू पनि पढ्न सकिने सम्भावना छ । तर मूल ढुङ्गा हाल नभेट्टिएकोले पहिलेको टिपौटको आधारमा यति मात्र यहाँ दिन सकियो ‡ ।

## [१६९ संख्या]

# गाबहालको जलद्रोणीको अभिलेख

पाटन गाबहालमा एउटा सानो कृष्णमन्दिरको भित्तामा रहेको जलद्रोणीमा यो अभिलेख कुँदिएको छ । म र डा. जगदीशचन्द्र रेग्मीले यो अभिलेख ने. अ. संस्थानद्वारा प्रकाशित 'एपिग्राफिक सर्भे रिपोर्ट' मा छपाएका छौं । यहाँको लिपि द्वितीय जयदेवपछिको छ ।

१. श्रीगणदे(वे) ... ... ... विष्णुवर्म्मा श्र–
२. द्धया जलद्रोणि ... ... मातापितृपूर्वङ्गमं कृत्वा
३. सकलसत्त्वपुण्याभिवृद्धये ... ... ... ...
४. कल्पयति ॥

(श्रीगणदेवले (राज्य गरिरहनुभएको वेलामा) ... ...विष्णुवर्माले ...आमा बाबु लगायत सारा प्राणीको पुण्य बढोस् भनी श्रद्धापूर्वक .....जलद्रोणी बनाएको हो ।)

## [१७० संख्या]

# मङ्गलबजारको धाराको अभिलेख

पाटन मङ्गलबजारमा अदालतको सामुन्नेको डबलीमा एउटा ढुङ्गे धारो तेर्स्याई जडिएको

‡ श्रीमनवज्र वज्राचार्यले यो अभिलेख पत्ता लाउनुभएको हो ।

थियो। सो धाराको मुख भागमा दुवैपट्टि गरी यो अभिलेख कुँदिएको छ। 'अभिलेख–संग्रह' पाचौं भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

(पहिलो पाटामा)

१. संवत् १७० कार्तिक
२. ... दिवा दशम्याम्
३. ... ... णा
४. ... ... णां

(दोस्रो पाटामा)

१. हिवाकरन दत्तम्
२. ... हितम् धोलवास
३. प्रदेशे महापथे
४. दक्षिणे चुल्लंखूप–
५. छिम कलोपिग्राम(स्य)
६. पाञ्चालिकाणाम्

(संवत् १७० कार्तिक .......दशमीमा....हिवाकरले यो धारा दान गरिएको हो। (यसको लागि जग्गा गुठी) राखियो। धोलवास भन्ने ठाउँमा मूलसडकको दक्षिणपट्टिको चुल्लंखू पश्चिमपट्टिको कलोपि ग्रामका पाञ्चालिकहरूलाई यो सुम्पिदिइयो।)

## [१७१ संख्या]

# विष्णुमूर्तिको पादपीठको अभिलेख

यो अभिलेख ढलौटे विष्णुमूर्तिको पादपीठमा कुँदिएको छ। यो मूर्ति कहाँ रहेको छ; थाहा पाउन सकिएको छैन। 'अर्काइभ्ज् अफ् एशियन आर्ट' २५ (१९७१–७२) को ६१ पृष्ठमा श्रीप्रतापादित्य पालद्वारा यसको चित्रप्रतिलिपि छापिएको छ। चित्रप्रतिलिपिबाट गौमतवज्र वज्राचार्यद्वारा पढिएको पाठको आधारमा यो यहाँ दिइएको छ।

१. ॐ–संवत् १७२ आषाढशुक्लदिवाद्वादश्याङ्कादलकग्रामे श्रीहेतुजीव––पति श्रीवस्त्रमित्र––

२. श्रीदेवस्वामि. . .श्रीधरमित्र श्रीधुवमित्र श्रीसोममित्र श्री–मित्र श्रीजयदेव
३. श्रीनारायण–प्रभृतिभिःस्वपुण्याभिवृद्धये श्रीभगवद्नारायणदेवः (प्र) ति (ष्ठा)
पि (तः)

(संवत् १७२ आषाढ शुक्ल द्वादशीको दिन कादलक ग्राममा श्रीहेतुजीव . . . पति श्रीवस्त्रमित्र, श्रीदेवस्वामि . . . . . . श्रीधरमित्र श्रीध्रुवमित्र श्रीसोममित्र श्री . . . मित्र श्रीजयदेव श्री–नारायण . . . . आदिले आफ्नो पुण्य बढोस् भनी भगवान् श्रीनारायण देवताको प्रतिष्ठा गरियो।)

[१७२ संख्या]

# यङ्गबहालको अभिलेख

पाटन यङ्गबहालमा रहेको अवलोकितेश्वरको पादपीठमा यो अभिलेख कुँदिएको छ। हेमराज शाक्यद्वारा अभिलेख–प्रकाशमा यो छापिएको छ‡ ।

१. एतङ्ग्रामलहुग्वले प्रतिवसं हूँधर्मजीवः स्वयम्
प्राकार्षीदवलोकितेशममलम्पाषाणमत्यद्भुतम् ।
२. सत्वानामविकल्पमुत्पथषताम्प्रा––न्धचित्तात्मनाम्
संसारार्त्तिमला–कारगहनान्निर्मुक्तये सर्वदा ॥
३. राज्ये श्रीमानदेवस्य वर्षेशीत्युत्तरे शते ।
माघकृष्णद्वितीयायाम्प्रतिष्ठास्य गुणोदधेः ॥

(एतङ ग्राम लहुग्वलमा बस्ने हूँ धर्मजीवले कुबाटोमा हिंडेका, . . . . चित्त भएका प्राणी–हरूलाई . . . गम्भीर संसारको दुःखबाट सधैं छुट्कारा दिलाउन सफा अतिअद्भुत ढुङ्गाको अवलो-कितेश्वर आफैं बनाए।।

संवत् १८० माघ कृष्ण द्वितीयाको दिन श्रीमानदेवको राज्यमा यी गुणका खानि भएका (अवलोकितेश्वर) को प्रतिष्ठा गरियो।

‡ श्रीडिल्लीरमण रेग्मीले पनि 'मिडिइभल नेपाल' तेस्रो भागको २ पृष्ठमा यो अभिलेख छपाउनु-भएको छ।

[१७३ संख्या]

# तानाबहालको अभिलेख

काठमाडौं मखन तानाबहालभित्र रहेको देवताको पादपीठमा यो अभिलेख कुँदिएको छ। खिइएको हुनाले अभिलेख सम्पूर्ण पढ्न सकिएको छैन ।

१. ... ... आषाढकृष्णसप्तम्याम् ....
२. राजपरमेश्वरश्रीमानदेवराज्ये।... ....
३. ... ... ...
४. ... ... ...

(...आषाढ कृष्ण सप्तमीको दिन......(राजाधि)राज परमेश्वर श्रीमानदेवको राज्यमा ।

[१७४ संख्या]

# सुबहालको चैत्यको अभिलेख

पाटन सुबहालनजीकै धारानिरको चैत्यमा यो अभिलेख कुँदिएको छ। गौतमवज्र वज्राचार्य-द्वारा 'कैलास' पत्रिकामा यो अभिलेख छापिएको छ।

१. ... ... ...
२. संवत् १८२ आषाढशुक्लत्रयोदश्याम्

(...संवत् १८२ आषाढ शुक्ल त्रयोदशीको दिनमा)

[१७५ संख्या]

# सुबहालको जलद्रोणीको अभिलेख

पाटन सुबहालबाट पूर्वपट्टि इनारको अगाडि भित्तामा एउटा जलद्रोणी टाँसिराखिएको छ। त्यसैमा यो अभिलेख कुँदिएको छ। 'अभिलेख–संग्रह' ६ भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

१. ॐ संवत् १८७ माघशुक्लदिवा ५ पुण्याधारे जरें श्रीपंकेश

(संवत् १८७ माघ शुक्ल पञ्चमीको दिन पुण्य दिने जलद्रोणी बनाइयो . . . .)

[१७६ संख्या]

# इचंगुनिरको डाँडोको अभिलेख

सीतापाइलादेखि केही परको डांडोमा यो अभिलेख कुँदिएको छ। नोलीद्वारा परिशिष्टमा ३ संख्याको रूपमा यो छापिएको छ।

१. परमस्वामिनः. . .

२. ॐ संवत् १९४ पशुपति भट्टारकः

३. चन्द्रेश्वरकारितः णापकः

(परमस्वामीको . . .      . . . संवत् १९४ मा चन्द्रेश्वरले पशुपतिनाथको स्थापना गरियो।)

[१७७ संख्या]

# हनूमान्ढोकाको अभिलेख

हनूमान्ढोका नासलचोकको दक्षिण पश्चिम कुनामा एउटा जलद्रोणी छ। त्यसमा यो अभिलेख कुँदिएको छ। 'अभिलेख–संग्रह' पाँचौं भागमा संशोधनमण्डलद्वारा यो छापिएको छ।

१. ॐ भक्तया विष्णोः समुद्दिश्य... ...
२. आषाढकृष्णसप्तम्याम् दत्तं अमृतवर्मणा
३. संवत् २०७

(विष्णुउपर भक्ति राखी.....लाई लख गरी अमृतवर्माले संवत् २०७ आषाढ कृष्ण सप्तमीको दिन (यो जलद्रोणी) दान गरियो।)

[१७८ संख्या]

# हाँडिगाउँ भीमननीको अभिलेख

हाँडिगाउँ भीमननीमा रहेको एउटा देवताको पादपीठमा यो अभिलेख कुँदिएको छ। गौतमवज्र वज्राचार्यद्वारा 'कैलास' पत्रिकामा यो छापिएको छ।

१. संवत् २४२ चैत्रशुक्लदिवासप्तम्याम् भाग्यचन्द्रेण स्थापितम्

(संवत् २४२ चैत्र शुक्ल सप्तमीको दिन भाग्यचन्द्रले यो स्थापना गरिएको हो।)

[१८९ संख्या]

# मोतीटारको अभिलेख

पाटनबाट लुभुतिर जाँदा बाटोमा मोतीटार भन्ने ठाउँ पर्छ। त्यहाँ दट्टेडोल भन्ने ठाउँमा बाटामै एउटा जलद्रोणी रहेको छ। त्यसमा यो अभिलेख कुँदिएको छ।

१. ॐ पञ्चाशता समधिके सम्वत्सरशतद्वये
२. प्रथमाषाढमासस्य द्वितीयादिवसे --
३. जलद्रोणिरियं शैली पातिता दक्षिणामुखा
४. श्रीमताथ बलीराज्ञा राज्ञा पुण्याभिवृद्धये

(संवत् २५० प्रथमाषाढ महीना द्वितीयाको दिन राजा श्रीबलिराजले (?) पुण्य बढोस् भनी यो ढुङ्गे जलद्रोणी बनाउन लाउनुभयो ।)

# चाँगुको अभिलेख

चाँगुनारायणस्थानको मूलढोका नजीकै रहेको कुनै देवताको जलहरीमा यो अभिलेख कुँदिएको छ। नोलीद्वारा ८९ संख्याको रूपमा यो छापिएको छ ।

१. ॐ संवत् २७१ वैशाखशुक्लदिवपञ्चम्यां .....राजश्रीबलदेवराज्ये लङ्खाग्राम-निवासि....म्प्रभृति.....प्रतिष्ठापित भगवतो प्रति--लस्वामि ।
२. ......देवस्थापक--कुमारस्वामि...प्रद--भुक्ति. .....म हुं--हारलम्भेण कारितकर्मति-- मानिका.. ...

(संवत् २७१ वैशाख शुक्ल पञ्चमीको दिन.....राजा श्रीबलदेवको राज्यमा । लङ्खा ग्राममा बस्ने......हरूले स्थापना गरेका भगवान् प्रति--लस्वामी..........देवता स्थापना गर्ने....कुमारस्वामी.....हुं-- हारलम्भले बनाउन लाएको ......मानिका..)

[१८१ संख्या]

# बहिलीटोलको अभिलेख

पाटन बहिलीटोलमा रहेको एउटा जलद्रोणीमा यो अभिलेख कुँदिएको छ । नोलीद्वारा ८६ संख्याको रूपमा यो छापिएको छ।

१: पौन. -. म्भिक्षुणी सु--क्चा. सदया स्वयम्

२. दत्ता एषा शिलाद्रोणी सत्त्वानां हितहेतवे ।।

(....दयालु....भिक्षुणी आफैंले प्राणीहरूको हित होस् भनी यो जलद्रोणी दान दिइयो)।

[१८२ संख्या]

# भुवनेश्वरको अभिलेख

पशुपति भुवनेश्वर मन्दिरको अगाडि लडाएर राखेको शिलास्तम्भमा यो अभिलेख कुँदिएको छ। हेमराज शाक्यद्वारा 'अभिलेख प्रकाश' मा यो छापिएको छ ।

१. प्रद्युम्नप्राणस्य कीर्ति

(प्रद्युम्नप्राणले राखेको यो कीर्त्ति हो।)

[१८३ संख्या]

# मङ्गलबजारको अभिलेख

पाटन मङ्गलबजारमा भीमसेनस्थान अगाडि रहेको एक शिलाखण्डमा यो अभिलेख कुँदिएको छ। इतिहास–प्रकाश १ अङ्कको ५६ पृष्ठमा योगी नरहरिनाथद्वारा यो छापिएको छ।

१. य ... र ... ...

२. सर्वदा ... ...

३. दूतकश्चात्र रा ...

४. संवत् १४४... ...

[१८४ संख्या]

# मङ्गलबजारको धाराको अभिलेख

पाटन मङ्गलबजारको ढुङ्गे धाराभित्र रहेको टुटेधारामा यो अभिलेख कुँदिएको छ। हेमराज शाक्यद्वारा 'अभिलेख प्रकाश' मा यो छापिएको छ ।

१. ॐ संवत् ...
२. माता ...

[१८५ संख्या]

# पशुपतिको अभिलेख

पशुपति क्याम्पभित्र दायाँपट्टि डबलीको दायाँतिर रहेको शिलामा यो अभिलेख कुँदिएको छ भनी राष्ट्रिय अभिलेखालयमा रहेको यसको प्रतिलिपिमा लेखिएको छ। मूल ढुङ्गा अहिले भेट्टाउन सकिएन। 'कान्तिपुरशिलालेखसूची'मा शङ्करमान राजवंशीद्वारा यो छापिएको छ।

१. ... लोकोत्तर ... हृ षिगद्धराग ... कविकं ... महाभैरव-

[१८६ संख्या]

# सीतापाइलानिरको अभिलेख

सीतापाइला ग्रोढारढुङ्गामा यो अभिलेख कुँदिएको छ। हेमराज शाक्यबाट यो प्राप्त भएको हो।

१. का य र न य

[१८७ संख्या]

# वनकालीको अभिलेख

पशुपति वनकालीको पादपीठमा यो अभिलेख कुँदिएको छ। गौतमवज्र वज्राचार्यद्वारा 'कैलास' पत्रिकामा यो छापिएको छ।

१. ... सान्यः ऋकशारिः सोमोम्वचः दतनिति
२. ... ... ... ...

[१८८ संख्या]

# पंचदेवलको अभिलेख

पशुपति पञ्चदेवलसंगै पश्चिमपट्टि रहेको शिवलिङ्गको जलहरीमा यो अभिलेख कुँदिएको छ। यसको धेरैं भाग खण्डित छ।

१. ... वदेव--पल य

[१८९ संख्या]

# जुम्लाको माटाको चैत्यको अभिलेख

जुम्ला लामथाडा गुफामा प्रशस्त मात्रामा माटाका चैत्यहरू रहेका छन्। तिनमध्ये केहीमा पछिल्लो लिच्छविलिपिमा अभिलेख कुँदिएको पाइएको छ। हेमराज शाक्यद्वारा 'अभिलेख–प्रकाश' मा प्रकाशित एक अभिलेख यहाँ दिइन्छ–

१. ॐ अभय श्री
२. ये धर्मा श्रीअ हेतुप्र
३. भवा हेशोक तु तेषां
४. तथागतो ह्यव(दत्)
५. तेषां च यो नि(रो)
६. ध एवंवादी महा-
७. श्रमणः

[१९० संख्या]

# 'सहोत्तरतन्त्र'को उपसंहारभाग

केशरपुस्तकालयमा सहोत्तरतन्त्र (उत्तरतन्त्रसहितको सुश्रुत) नामक एक ग्रन्थ रहेको छ। पछिल्लो लिच्छवि लिपिमा ताडपत्रमा सो लेखिएको छ। त्यसको उपसंहारमा संवत् ३०१ मा राजा मानदेवको समयमा सो ग्रन्थ सारिएको हो भन्ने विवरण दिइएको छ। नेपालसंवत् शुरू हुनुभन्दा ३ वर्ष पहिले सो लेखिएको हुनाले तात्कालिक कुरा बुझ्न उपयोगी संझी त्यसलाई पनि यहाँ परिशिष्टको रूपमा समावेश गरिएको छ‡–

" समाप्तञ्चेदं सहोत्तरतन्त्रमिति ...
राज्ञि श्रीमानदेवे पृथुसितयशसि प्रोद्यदिन्दुप्रकाशे
काले पुण्यार्ज्जनस्य सकलजनमनोह्लादिरम्ये वसन्ते ।
वर्षे चैकोत्तरस्मिंस्त्रितयशतगते माधवे मासि शुक्ले
सप्तम्यां पुष्यऋक्षे दश(श)तकिरणे वासरे सिद्धयोगे ॥
उत्पत्त्याद्यम्बुवेलाकुलविविधरुजाग्राह- -तिरौद्रे
संसारे सागरेस्मिञ्जगदिदमखिलं ग्लानिनं सम्प्रवीक्ष्य
तस्माच्छ्रीहर्षचन्द्रान्निरतिशयघृणाभावितो मोक्तुकामः
प्रीत्या चे... .....प्रालिखत्सुश्रुताख्यम् ॥
श्रीगणदेवदेवकुलदूरी ग्वलकनिवासिनो वैद्यवसुवर्मणः पुस्तकमिदं पठित्वा-र्थमवगम्य सर्वसत्त्वानामुपदेशं विधातुं ... ...

-✶-

‡ यसको केही भाग पं. बुद्धिसागर पराजुलीद्वारा प्रकाशित भएको छ। श्रीडिल्लीरमण रेग्मीद्वारा पनि 'एशेन्ट नेपाल' को २०८ पृष्ठमा यसको केही अंश छापिएको छ।

# अनुक्रमणिका (इन्डेक्स)

–★–

# शुद्धिपत्र

| पृ. | पं | अशुद्ध– | शुद्ध– |
|---|---|---|---|
| २ | ६ | पुरुषमत्व | पुरुषत्व |
| ५१ | ४ | अशीत्युत्तरस्य | अशीत्युत्तरस्य शतस्य |
| २११ | १७ | शैल्याः | शैल्यः |
| २२५ | १७ | शुक्ल– | शुल्क– |
| ३६१ | ८ | एता | एतां |
| ४०५ | १३ | श्रीजिष्णुगुप्त | श्रीजिष्णुगुप्तः |
| ४३७ | १ | गोयुद्धीकर | गोयुद्धकर |
| ४६६ | २० | श्रेष्ठदुल् | श्रेष्ठिदुल् |
| ५३० | ८ | वर्णाश्रमि– | वर्णाश्रम– |

# नक्शासम्बन्धी विवरण

श्री ५ को सरकार, आवास तथा भौतिक परियोजनाविभागको सौजन्यबाट प्राप्त नक्शाको आधारमा श्रीमदनमानसिंह ताम्राकारले यी नक्शा तयार पारिदिनुभएको हो ।

(१)

पहिलो नक्शामा गोरखादेखि दुम्जासम्मको इलाकामा अभिलेख पाइएका ठाउँहरू विशेष चिह्न लगाई देखाइएका छन् ।

(२)

दोस्रो नक्शामा काठमाडौं—उपत्यका र आसपासका इलाकामा अभिलेख पाइएका ठाउँहरू चिह्न लगाई दर्शाइएका छन् ।

(३)

तेस्रो नक्शामा कान्तिपुर शहरभित्र अभिलेख पाइएका ठाउंहरू अङ्कद्वारा चिह्न लाई दर्शाइएका छन्। तिनको परिचय यस प्रकारको छ—

१. मीननारायण, भैरवढोका, २. मुसुंबहाल ३. ब्रह्मटोल ४. धरोहराबाट लगन जाने बाटोनिर ५. गणबहाल ६. लगनटोल ७. ज्याबहालनिर ८. जैसीदेवल ९. यङ्गालहिटी १०. टेबहाल ११. हनूमान्ढोका १२. तानाबहाल (मखन) १३. ढोकाढल, बण्डाहिटी १४. वटुटोल १५. महाबौद्ध, गणेशस्थान १६. केलटोल १७. हेनाकरविहार (ढोकाबहाल) १८. नघल, श्रीघः विहार १९. टुण्डिखेल

(४)

चौथो नक्शामा ललितपुर शहरभित्र अभिलेख पाइएका ठाउँहरू अङ्कद्वारा चिह्न लाई दर्शाइएका छन्। तिनको परिचय यस प्रकारको छ—

१. यङ्बहाल २. नःबहिलटोल ३. छिन्नमस्ता ४. बाहालुखा ५. तःबहाल ६. मीननाथको मन्दिर ७. गैह्लीधारा (सौगलटोल) ८. सुनधारा ९. बहिलीटोल १०. त्यागलटोल ११. च्यासलटोल १२. खपिछे, भैरवमन्दिर १३. सुबहाल १४. ज्याबहाल १५. भन्सारचोक (दरबार) १६. मङ्गलबजार, भीमसेनस्थान १७. चपःटोल, इलाननी १८. शंखमूल, सिकुबही १८. (क) कुम्भेश्वर १९. करुणचोक

(५)

पांचौं नक्शामा भक्तपुर शहरभित्र अभिलेख पाइएका ठाउँहरू अङ्कद्वारा चिह्न लाई दर्शाइएका छन्। तिनको परिचय यस प्रकारको छ–

१. कुह्मालेटोल २. तुलाछेंटोल ३. गोलमाढीटोल ४. इनाय्टोल

(६)

छैंटौं नक्शामा देउपाटनभेकमा अभिलेख पाइएका ठाउँहरू अङ्कद्वारा चिह्न लाई दर्शाइएका छन्। तिनको परिचय यस प्रकारको छः–

१. पशुपतिनाथको मन्दिर (यहां आसपासमा ६ वटा अभिलेख पाइएका छन्।) २. आर्यघाटनिरको ठाउँ ३. भस्मेश्वर ४. पञ्चदेवल ५. वज्रघर ६. भुवनेश्वर ७. आर्यघाट ८. तिलगङ्गापारि ९. सूर्यघाट १०. मृगस्थली जाने बाटोनिरको ठाउँ ११. कसाईंटोल १२. देउपाटनको दोबाटो १३. वनकाली १४. देउपाटननिरको खेत १५. जयवागीश्वरी १६. चाबहिल

(७)

सातौं नक्शामा नक्सालभेकमा अभिलेख पाइएका ठाउँ अङ्कद्वारा चिह्न लाई दर्शाइएका छन्। तिनको परिचय यस प्रकारको छ–

१. भगवतीबहाल, २. नारायणचौर ३. गैह्रीधारा ४. लाजिमपाट, टुकुचापारिको बगैंचा ५. लाजिमपाट, सरस्वतीस्थान ६. लाजिमपाट, धोबीचौर ७. हांडिगाउँ (यहां आसपासमा ४ वटा अभिलेख पाइएका छन्)। ८. मालिगाउँ ९. ज्ञानेश्वर

१


माईल
रसुवा
रसुवागढी
गोरखा दरबार
धादिङ
धादिङ
नुवाकोट
नुवाकोट
सिंधुपलान्चोक
चौतारा
सुनकोशी
कोशी
त्रिशुली नदी
कान्तिपुर
भक्तपुर
ललितपुर
चितलाङ
टिस्टुङ
तौरवेल
पलान्चोक
काभ्रेपलान्चोक
मकवानपुर
चितवन
हेटौडा
बागमती नदी
दुम्जा
सिंधुली
अमलेखगंज
पर्सा
सिमरा
बारा
सर्लाही
कलैया
वीरगंज
रौतहट
महोत्तरी
अन्तर्राष्ट्रिय सीमाना
जिल्ला सीमाना
बाटो
नदी
जिल्ला सदर मुकाम
अभिलेख पाइएका गाउँ

२



विष्णुपादुकाको फेदी
बूढानीलकण्ठ, गैह्रीगाउँ
बूढानीलकण्ठ
टोखा
धर्मस्थली
फुटुङगाउँ
चपलिगाउँ
धरमपुर
टुसाल
गोकर्णेश्वर महादेव
साँखु, दुगाहिटी
इचङ्गु
डाँडाखोला
आदेश्वर
स्वयम्भू
हाँडिगाउँ, नारायणथान
मालिगाउँ
चाबहिल
चाँगुनारायण
कान्तिपुर
नीलबाराही
चौकिटार
मालटार
पासिकस्थ
धानकोट, नारायणटोल
भेन्तु
बलम्बु
किसिपिडी
सतुङ्गल
ललितपुर
ठिमी
भक्तपुर
मोतीटार
अनन्तलिङ्गेश्वर
नाला
बनेपा
बुङ्गमती
फर्पिङ
लेले
काठमाडौं उपत्यका
माइल



५
१
२
३
४
५
भक्तपुर
मिटर
० ५० १०० २००

६



दैउपाटन भेगको
मिटर
0
५0
१00
२00
चाबहिल
जयवागीश्वरी
देउपाटन
गौशाला
बागमती
मृगस्थली
गौरीघाट

**त्रि. वि. नेपाल र एशियाली अध्ययन संस्थानका प्रकाशन–**

१. 'पृथ्वीनारायण शाह रणजित्‌मल्लकालिक कागतपत्र'

२. 'गोरखाको ऐतिहासिक सामग्री'

३. 'टिस्टुङ्ग–चितलाङभेकको ऐतिहासिक सामग्री'

४. बाबुराम आचार्य र उहाँका कृति

५. 'रातो मत्स्येन्द्रनाथ अफ् पाटन यॉन्ड् बुङ्गमती'

प्राप्तिस्थान–

**साझा, पुस्तक बिक्री केन्द्रहरू**

**मुद्रकः** जोरगणेश प्रेस (प्रा.) लि. बालाजु, काठमाडौं नेपाल ।